# अथ चतुर्थोऽध्यायः

## योगमायाको प्रकटन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**बहिरन्तःपुरद्वारः सर्वाः पूर्ववदावृताः ।**
**ततो बालध्वनिं श्रुत्वा गृहपालाः समुत्थिताः ॥ १ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (वसुदेवले योगमायालाई देवकीको ओछ्यानमा राखेर आफू पहिले जस्तै हातगोडामा फलामे साङ्ला लागेको अवस्थामा बन्दी बनेर बस्नुभएपछि)
**बहिःअन्तः** = बाहिर र भित्रका
**सर्वाः** = सबै
**पुरद्वारः** = नगरका ढोकाहरू
**पूर्ववत्** = पहिले जसरी नै
**आवृताः** = बन्द भए
**बालध्वनिं** = बच्चाको आवाज
**श्रुत्वा** = सुनेर
**गृहपालाः** = कारागारका पालेहरू
**समुत्थिताः** = उठे

**वाक्यार्थ–** वसुदेवले योगमायालाई देवकीको ओछ्यानमा राखेर आफू पहिले जस्तै हातगोडामा फलामे साङ्ला लागेको अवस्थामा बन्दी बनेर बस्नुभएपछि नगरका ढोकाहरू पहिले जसरी नै बन्द भए। अनि बच्चा रोएको आवाज सुनेर कारागारका पालेहरू उठे।

**विवरण–** भगवान्‌को प्रादुर्भावको लीलामा हेतु, उद्यम, रूपान्तर स्वीकार र कापट्य गरी चार तह हुन्छन् भन्ने कुरा प्रभुचरणविरचित भागवतटीका श्रीटिप्पणीमा उल्लेख गरिएको छ। पृथिवी दुष्टहरूको भारले पीडित हुनु भगवत्प्रादुर्भावको हेतु हो भने ब्रह्माजी आदि देवताहरूले भगवान्‌को स्तुति गरी उहाँलाई खुसी पार्नु उद्यम हो, जसको वर्णन प्रथम र द्वितीय अध्यायमा गरिएको छ। तेस्रो अध्यायमा भगवान्‌ले रूपान्तर स्वीकार अर्थात् अवतार धारण गर्नुभएको छ। चौथो अध्यायमा कपट अर्थात् मायाको वर्णन छ। मायाको प्रभाव बढेपछि नै भगवान्‌ले यसलाई नष्ट गर्न अवतार लिनुहुन्छ। त्यसकारण भगवान्‌को जन्म बताइसकेपछि उपोद्घात सङ्गतिद्वारा मायाको प्रभाव बताइएको हो। यहाँ ढोकाहरू बन्द हुनु र वसुदेव-देवकी फेरि साङ्लाले बाँधिनु मायाको प्रभावको सुरुवात हो, जसको वर्णन पहिलो श्लोकमा गरिएको छ। यो अध्यायभरि वसुदेव र देवकीले कंससँग दीनतापूर्वक आफ्नो दुःख निवेदन गर्नु, कंसले मन्त्रीहरूसँग सल्लाह गरी जन्मेको दश दिन बितेका-नबितेका सबै बच्चाहरूलाई मार्ने निश्चय गर्नु अनि सबै धर्म नष्ट गर्ने प्रयास थाल्नु मायाका प्रभाव हुन्। बन्धन र दुःख भएपछि नै त्यसबाट मुक्ति दिलाउन भगवान्‌को प्राकट्य हुन्छ। दुःखको बीचमा नै सुखको आवश्यकता हुन्छ र सार्थकता पनि। आनन्दस्वरूप परमात्मा दुःखनिवृत्तिकै लागि अवतीर्ण हुनुहुन्छ। बन्धन या दुःख नै मुक्ति या सुखको उपोद्घात भएकाले उपोद्घात सङ्गतिद्वारा भगवान्‌को जन्म भइसकेपछि त्यसको आवश्यकतालाई पुष्टि गर्न भक्तले दुःख पाएको यो प्रसङ्ग बताइएको हो।

**ते तु तूर्णमुपव्रज्य देवक्या गर्भजन्म तत्।**
**आचख्युर्भोजराजाय यदुद्विग्नः प्रतीक्षते ॥ २ ॥**

पदार्थ–
**ते तु** = ती पालेहरूले चाहिँ
**तूर्णम्** = छिटो
**उपव्रज्य** = गएर
**देवक्याः** = देवकीको
**तत्** = त्यो (आठौँ)
**गर्भजन्म** = गर्भ उत्पन्न भएको कुरा
**भोजराजाय** = भोजराज कंसलाई
**आचख्युः** = बताए
**यत्** = जुन आठौँ गर्भलाई
**उद्विग्नः** = उद्विग्न भएको कंसले
**प्रतीक्षते** = प्रतीक्षा गरिरहेको थियो

**वाक्यार्थ–** पालेहरूले चाहिँ छिटो-छिटो गई भोजराज कंसलाई देवकीको आठौँ गर्भ उत्पन्न भएको छ भनी सुनाए। कंसले अत्यन्त उद्विग्न भई यसै आठौँ गर्भलाई पर्खिरहेको थियो।

**स तल्पात् तूर्णमुत्थाय कालोऽयमिति विह्वलः।**
**सूतीगृहमगात् तूर्णं प्रस्खलन् मुक्तमूर्धजः ॥ ३ ॥**

पदार्थ–
**अयम्** = यो
**कालः इति** = मृत्यु हो भनेर
**विह्वलः** = आत्तिएको
**मुक्तमूर्धजः** = कपाल फुस्किएको
**सः** = त्यो कंस
**तल्पात्** = बिछ्यौनाबाट
**तूर्णम्** = झटपट
**उत्थाय** = उठेर
**तूर्णं** = छिटो
**प्रस्खलन्** = लर्खराउँदै
**सूतीगृहम्** = प्रसूतिगृहमा
**अगात्** = गयो

**वाक्यार्थ–** यो मेरो मृत्यु हो भनेर आत्तिएको अनि कपाल फुस्कनाले झ्यामल्याङ्ग भएको त्यो कंस बिछ्यौनाबाट झटपट उठ्यो र छिटो-छिटो गर्दै लर्खराउँदै प्रसूतिगृहतिर गयो।

**तमाह भ्रातरं देवी कृपणा करुणं सती।**
**स्नुषेयं तव कल्याण स्त्रियं मा हन्तुमर्हसि ॥ ४ ॥**

पदार्थ–
**कृपणा** = दुःखी भएकी
**सती** = सती
**देवी** = देवकीले
**तम् भ्रातरं** = ती आफ्ना दाजुलाई
**करुणं** = करुण स्वरले
**आह** = भन्नुभयो
**कल्याण** = हे मङ्गलमय
**इयं** = यी
**तव** = तपाईंकी
**स्नुषा** = बुहारी (जस्ती)
**स्त्रियं** = स्त्रीलाई
**हन्तुम्** = मार्न
**मा अर्हसि** = योग्य हुनुहुन्न (सुहाउँदैन)

**वाक्यार्थ–** दुःखी भएकी सती देवकीले आफ्नो दाजुलाई हे मङ्गलमय! यी तपाईंकी बुहारी जस्ती बालिकालाई मार्न सुहाउँदैन भनी करुण स्वरले पुकार गर्नुभयो।

**बहवो हिंसिता भ्रातः शिशवः पावकोपमाः।**
**त्वया दैवनिसृष्टेन पुत्रिकैका प्रदीयताम्॥ ५॥**

**पदार्थ–**
**भ्रातः** = हे दाजु
**दैवनिसृष्टेन** = दैवद्वारा प्रेरित
**त्वया** = तपाईंद्वारा
**पावकोपमाः** = आगो जस्ता तेजस्वी
**बहवः** = धेरै
**शिशवः** = बालकहरू
**हिंसिताः** = मारिइसके (त्यसैले)
**एका** = एउटी
**पुत्रिका** = सानी छोरी
**प्रदीयताम्** = दिनुहोस्

**वाक्यार्थ–** हे दाजु ! तपाईंले दैवद्वारा प्रेरित भई मेरा आगो जस्ता तेजस्वी धेरै छोराहरूलाई मारिसक्नुभयो। अब एउटी सानी छोरीलाई त छाडिदिनुहोस्।

**नन्वहं ते ह्यवरजा दीना हतसुता प्रभो।**
**दातुमर्हसि मन्दाया अङ्गेमां चरमां प्रजाम्॥ ६॥**

**पदार्थ–**
**प्रभो** = हे शक्तिशाली कंस
**ननु** = निश्चय नै
**हतसुता** = छोराहरू मारिएकी
**दीना** = दुःखी
**अहं** = म
**ते** = तपाईंकै
**अवरजा** = बहिनी हुँ
**अङ्ग** = हे प्रिय दाजु
**हि** = निश्चय नै
**मन्दायाः** = म अभागिनीका लागि
**इमां** = यो
**चरमां** = अन्तिम
**प्रजाम्** = सन्तान
**दातुम्** = दिन
**अर्हसि** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे शक्तिशाली दाजु कंस ! छोराहरू मारिएकाले असाध्यै दुःखी बनेकी म तपाईंकै बहिनी हुँ। यसैले म अभागिनीका लागि यो अन्तिम सन्तानलाई छाडिदिनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**उपगुह्यात्मजामेवं रुदत्या दीनदीनवत्।**
**याचितस्तां विनिर्भर्त्स्य हस्तादाचिच्छिदे खलः॥ ७॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**आत्मजाम्** = छोरीलाई
**उपगुह्य** = लुकाएर
**दीनदीनवत्** = असाध्यै दुःखी भए झैं
**रुदत्या** = रोइरहेकी देवकीद्वारा
**याचितः** = याचना गरिएको
**खलः** = दुष्टले
**तां** = ती देवकीलाई
**विनिर्भर्त्स्य** = हपारेर
**हस्तात्** = उहाँको हातबाट
**आचिच्छिदे** = (बालिकालाई) खोस्यो

**वाक्यार्थ–** यसप्रकार देवकी छोरीलाई लुकाएर असाध्यै दुःखी भए झैं रोइरहनुभएको थियो र छोरीको जीवन मागिरहनुभएको थियो। तर त्यस दुष्ट कंसले देवकीलाई हपारेर उहाँको हातबाट ती बालिकालाई खोस्यो।

**तां गृहीत्वा चरणयोर्जातमात्रां स्वसुः सुताम् ।**
**अपोथयच्छिलापृष्ठे स्वार्थोन्मूलितसौहृदः ॥ ८ ॥**

**पदार्थ–**
**स्वार्थोन्मूलितसौहृदः** = स्वार्थका कारणले आत्मीयता हराएको कंसले
**जातमात्रां** = भर्खर जन्मिएकी
**स्वसुः** = आफ्नी बहिनीकी
**सुताम्** = छोरी
**तां** = ती बालिकालाई
**चरणयोः** = दुबै खुट्टामा
**गृहीत्वा** = समाई
**शिलापृष्ठे** = ढुङ्गामाथि
**अपोथयत्** = पछाऱ्यो (पछार्न लाग्यो)

**वाक्यार्थ–** स्वार्थका कारण सम्पूर्ण आत्मीयता हराइसकेको कंसले भर्खर जन्मिएकी आफ्नी बहिनीकी छोरी (भान्जी)लाई दुबै खुट्टामा समाती ढुङ्गामाथि पछार्न लाग्यो।

**विवरण–** माथिका श्लोकहरूमा देवकीको दीनता र कंसको दुष्टताको वर्णन गरिएको छ। कंसलाई खुसी पार्न देवकीले मिठा पदहरूद्वारा प्रार्थना गर्नुभएको छ। **दैवनिसृष्ट** अर्थात् विधिबाट प्रेरित भएर नै तपाईंले मेरा छ जना छोराहरूलाई मार्नुभएको हो, अब यी कान्छी छोरीलाई नमार्नुहोस् भनी देवकीले भन्नुभएको छ। माता देवकी र श्रीशुकदेव दुबैलाई यी कन्या यशोदाकी पुत्री हुन् भन्ने थाहा थियो, तापनि उहाँहरूले **आत्मजा, पुत्रिका** जस्ता शब्दहरूको प्रयोग गर्नुभएको छ। भगवान् श्रीकृष्णको साटो यी कन्यालाई नै सन्तानको रूपमा स्वीकार गरिएकाले यी कन्याका लागि पनि उहाँहरूद्वारा पुत्री, आत्मजा आदि शब्दको प्रयोग गरिएको हो। यसरी कंसले स्वार्थका कारण आफ्नी बहिनीकी भर्खरै जन्मिएकी छोरीलाई पनि मार्न खोज्यो। दुष्ट व्यक्तिहरू आफ्नो स्वार्थको लागि अर्कालाई मार्नसमेत तयार हुन्छन्। उनीहरूमा करुणा, स्नेह, सद्भाव जस्ता मानवीय गुणहरू नष्ट भइसकेका हुन्छन् भनी यहाँ देखाइएको छ।

**सा तद्धस्तात् समुत्पत्य सद्यो देव्यम्बरं गता ।**
**अदृश्यतानुजा विष्णोः सायुधाष्टमहाभुजा ॥ ९ ॥**

**पदार्थ–**
**तद्धस्तात्** = त्यस कंसको हातबाट
**समुत्पत्य** = फुत्केर
**सद्यः** = तत्काल नै
**देवी** = देवीरूपा बनेकी
**सा** = ती बालिका
**अम्बरं** = आकाशमा
**गता** = पुगिन् र
**विष्णोः** = भगवान् विष्णु (श्रीकृष्ण)की
**अनुजा** = बहिनी ती
**सायुधाष्टमहाभुजा** = अस्त्र-शस्त्रयुक्त आठ ओटा विशाल हातहरूले युक्त भई
**अदृश्यत** = देखिइन्

**वाक्यार्थ–** भगवान् विष्णु (श्रीकृष्ण)की बहिनी ती बालिका कंसको हातबाट फुत्कने बित्तिकै आकाशमा पुगिन् र आठ ओटा विशाल हातहरूमा अस्त्र-शस्त्र लिएकी देवीको रूपमा प्रकट भइन्।

**दिव्यस्रगम्बरालेपरत्नाभरणभूषिता ।**

**धनुःशूलेषुचर्मासिशङ्खचक्रगदाधरा ॥ १० ॥**

**सिद्धचारणगन्धर्वैरप्सरःकिन्नरोरगैः ।**

**उपाहृतोरुबलिभिः स्तूयमानेदमब्रवीत् ॥ ११ ॥**

**पदार्थ–**
**दिव्यस्रगम्बरालेपरत्नाभरण-भूषिता** = दिव्य माला, वस्त्र, चन्दन एवं रत्नमय आभूषणहरूद्वारा शोभित भएकी
**धनुःशूलेषुचर्मासिशङ्खचक्र-गदाधरा** = धनु, त्रिशूल, बाण, ढाल, खड्ग, शङ्ख, चक्र र गदा लिएकी
**उपाहृतोरुबलिभिः** = विभिन्न उपहारहरू चढाउने
**सिद्धचारणगन्धर्वैः** = सिद्ध, चारण र गन्धर्वहरूद्वारा अनि
**अप्सरःकिन्नरोरगैः** = अप्सरा, किन्नर एवं नागहरूद्वारा पनि
**स्तूयमाना** = स्तुति गरिइरहेकी देवीले
**इदम्** = यसो
**अब्रवीत्** = भनिन्

**वाक्यार्थ–** दिव्य माला, वस्त्र, चन्दन एवं रत्नमय आभूषणहरूद्वारा शोभित भएकी ती देवीले आफ्ना आठ ओटा हातहरूमा धनु, त्रिशूल, बाण, ढाल, खड्ग, शङ्ख, चक्र र गदा लिएकी थिइन्। सिद्ध, चारण, गन्धर्व, अप्सरा, किन्नर र नाग आदिद्वारा अनेक उपहारहरू चढाउँदै स्तुति गरिएकी ती देवीले यसो भनिन्।

**किं मया हतया मन्द जातः खलु तवान्तकृत् ।**

**यत्र क्व वा पूर्वशत्रुर्मा हिंसीः कृपणान् वृथा ॥ १२ ॥**

**पदार्थ–**
**मन्द** = हे मूर्ख
**मया हतया** = मलाई मारेर
**किं** = के हुन्छ र ?
**तव** = तेरो
**अन्तकृत्** = अन्त गराउने
**पूर्वशत्रुः** = पहिलादेखिको शत्रु
**खलु** = निश्चय नै
**यत्र** = जहाँ
**क्व वा** = कहीँ भए पनि
**जातः** = जन्मिसकेको छ
**वृथा** = व्यर्थमा
**कृपणान्** = दुःखीहरूलाई
**मा हिंसीः** = नमार्

**वाक्यार्थ–** हे मूर्ख कंस ! मलाई मारेर के गर्छस् ? तँलाई मार्नेवाला तेरो अघिदेखिको शत्रु कुनै ठाउँमा जन्मिसकेको छ। विचरा दुःखीहरूलाई व्यर्थमा नमार्।

**इति प्रभाष्य तं देवी माया भगवती भुवि ।**

**बहुनामनिकेतेषु बहुनामा बभूव ह ॥ १३ ॥**

**पदार्थ–**
**तं** = त्यो कंसलाई
**इति** = यसो
**प्रभाष्य** = भनेर
**भगवती** = ऐश्वर्यले सम्पन्न
**माया** = महामाया

**देवी** = देवी
**भुवि** = संसारमा
**बहुनामनिकेतेषु** = प्रसिद्ध तीर्थस्थलहरूमा
**बहुनामा** = अनेक नामवाली बनी
**बभूव ह** = पूजित भइन्

**वाक्यार्थ–** कंसलाई यसो भनेपछि ऐश्वर्यले सम्पन्न ती महामाया देवी प्रसिद्ध तीर्थस्थलहरूमा अनेक रूपमा प्रकट भइन् र अनेक नामले पूजित भइन्।

**तयाभिहितमाकर्ण्य कंसः परमविस्मितः।**
**देवकीं वसुदेवं च विमुच्य प्रश्रितोऽब्रवीत्॥ १४॥**

**पदार्थ–**
**तया** = ती देवीद्वारा
**अभिहितम्** = भनिएको कुरा
**आकर्ण्य** = सुनेर
**परमविस्मितः** = असाध्यै छक्क परेको
**कंसः** = कंसले
**देवकीं** = देवकी र
**वसुदेवं च** = वसुदेवलाई पनि
**विमुच्य** = छुटाएर
**प्रश्रितः** = नम्र भई
**अब्रवीत्** = भन्यो

**वाक्यार्थ–** ती देवीले भनेको कुरा सुनेर असाध्यै छक्क परेको कंसले देवकी र वसुदेवलाई कारागारबाट छुटाएर नम्र भई यसो भन्यो।

**अहो भगिन्यहो भाम मया वां बत पाप्मना।**
**पुरुषाद इवापत्यं बहवो हिंसिताः सुताः॥ १५॥**

**पदार्थ–**
**अहो** = हे
**भगिनी** = बहिनी
**अहो** = हे
**भाम** = ज्वाइँ
**बत** = निश्चय नै
**पाप्मना** = पापी
**मया** = मद्वारा
**पुरुषादः** = नरभक्षी राक्षसले
**अपत्यं इव** = आफ्नै सन्ततिलाई झैँ
**वां** = तिमी दुईका
**बहवः** = धेरै
**सुताः** = सन्तानहरू
**हिंसिताः** = मारिए

**वाक्यार्थ–** हे बहिनी ! हे ज्वाइँ ! म निश्चय नै पापी हुँ। मैले नरभक्षी राक्षसले आफ्नै सन्तानलाई मारे झैँ तिमीहरूका धेरै सन्तानहरूलाई मारेँ।

**स त्वहं त्यक्तकारुण्यस्त्यक्तज्ञातिसुहृत् खलः।**
**कान् लोकान् वै गमिष्यामि ब्रह्महेव मृतः श्वसन्॥ १६॥**

**पदार्थ–**
**त्यक्तकारुण्यः** = करुणाविहीन
**त्यक्तज्ञातिसुहृत्** = आफ्ना बन्धु र मित्रहरूलाई छाडिदिने
**सः खलः** = त्यो दुष्ट
**श्वसन् मृतः** = ज्युँदो मुर्दा हो
**अहं तु** = म चाहिँ
**ब्रह्महा इव** = ब्रह्महत्या गर्ने व्यक्ति झैँ
**वै** = निश्चय नै
**कान्** = कुन-कुन
**लोकान्** = लोकहरूमा
**गमिष्यामि** = पुगुँला

**वाक्यार्थ–** करुणाविहीन एवं आफ्ना सम्पूर्ण बन्धु र मित्रहरूलाई छाडिदिने दुष्ट र ज्युँदो मुर्दासमानको म मरेपछि ब्रह्महत्या गर्ने व्यक्ति झैँ कुन–कुन लोकहरूमा पुगुँला ?

**दैवमप्यनृतं वक्ति न मर्त्या एव केवलम् ।**
**यद्विश्रम्भादहं पापः स्वसुर्निहतवाञ्छिशून् ॥ १७ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **केवलम्** = केवल | **अनृतं** = झुटो | **अहं** = मैले |
| **मर्त्याः एव** = मानिसहरूले मात्र | **वक्ति** = बोल्दोरहेछ | **स्वसुः** = बहिनीका |
| **न** = होइन | **यद्विश्रम्भात्** = जसमा विश्वास गर्नाले | **शिशून्** = बच्चाहरूलाई |
| **दैवम् अपि** = दैवले पनि | **पापः** = पापी | **निहतवान्** = मारेँ |

**वाक्यार्थ–** मानिसहरूले मात्र होइन, दैवले पनि झुटो बोल्दोरहेछ। जसको वचनमा विश्वास गर्नाले म पापीले आफ्नै बहिनीका बच्चाहरूलाई मारेँ।

**मा शोचतं महाभागावात्मजान् स्वकृतं भुजः ।**
**जन्तवो न सदैकत्र दैवाधीनास्तदासते ॥ १८ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **महाभागौ** = हे महाभाग्यशाली देवकी र वसुदेव ! | **आत्मजान्** = आफ्ना सन्तानहरूको विषयमा | **जन्तवः** = प्राणीहरू |
| **स्वकृतं** = आफ्नै कर्मफललाई | **मा शोचतं** = शोक नगर | **सदा** = सधैँ |
| **भुजः** = भोग्ने | **दैवाधीनाः** = भाग्यका अधीन भएका | **न आसते** = रहिरहन्नन् |
| | | **तदा** = रहँदा पनि |
| | | **एकत्र** = एकै ठाउँमा रहन्नन् |

**वाक्यार्थ–** हे देवकी र वसुदेव ! आफ्नै कर्मफललाई भोग्ने मरेका सन्तानहरूको विषयमा शोक नगर। किनभने भाग्यका अधीन भएका प्राणीहरू सधैँ बाँचिरहन्नन्। बाँच्दा पनि सधैँ एकै ठाउँमा रहन्नन्।

**भुवि भौमानि भूतानि यथा यान्त्यपयान्ति च ।**
**नायमात्मा तथैतेषु विपर्यैति यथैव भूः ॥ १९ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **यथा** = जसरी | **यान्ति** = जन्मन्छन् र | **तथा एव** = त्यसरी नै |
| **भुवि** = पृथिवीमा | **अपयान्ति च** = मर्दछन् | **अयम्** = यो |
| **भौमानि** = पृथिवीबाट उत्पन्न भएका | **यथा** = जसरी | **आत्मा** = आत्मा |
| **भूतानि** = भौतिक शरीरहरू | **एतेषु** = यी अवस्थाहरूमा | (परिवर्तित हुँदैन) |
| | **भूः** = पृथिवी | |
| | **न विपर्यैति** = परिवर्तित हुँदैन | |

**वाक्यार्थ–** जसरी पृथिवीमा पृथिवीबाट उत्पन्न भएका पदार्थहरू उत्पन्न र नष्ट भइरहन्छन्, तर पृथिवी पृथिवीकै रूपमा रहिरहन्छ त्यसै गरी संसारमा पनि प्राणीका शरीरहरू मात्र जन्मने र मर्ने गर्दछन्, आत्मा यी परिवर्तनहरूबाट परिवर्तित हुँदैन।

**यथानेवंविदो भेदो यत आत्मविपर्ययः ।**
**देहयोगवियोगौ च संसृतिर्न निवर्तते ॥ २० ॥**

**पदार्थ–**
**अनेवंविदः** = यस्तो तत्त्वलाई नबुझ्नेहरूको
**आत्मविपर्ययः** = शरीरमा आत्मबुद्धि
**यथा** = यथावत् रहिरहन्छ
**यतः** = जसबाट
**भेदः** = भेद (सुरु हुन्छ)
**देहयोगवियोगौ** = शरीरसँग हुने संयोग र वियोग एवं
**संसृतिः च** = सुख–दुःखरूप बन्धन पनि
**न निवर्तते** = हट्‌दैन

**वाक्यार्थ–** यस्तो तत्त्वलाई नबुझ्ने व्यक्तिहरू शरीरमा नै आत्मबुद्धि गर्दछन् र यसबाट विभिन्न किसिमको भेद सुरु हुन्छ। अनि शरीरसँग हुने संयोग र वियोगको क्रम एवं सुखदुःखरूप बन्धन पनि हट्‌दैन।

**तस्माद् भद्रे स्वतनयान् मया व्यापादितानपि ।**
**मानुशोच यतः सर्वः स्वकृतं विन्दतेऽवशः ॥ २१ ॥**

**पदार्थ–**
**भद्रे** = हे कल्याणी देवकी
**तस्मात्** = त्यसैले
**मया** = मद्द्वारा
**व्यापादितान् अपि** = मारिएका भए पनि
**स्वतनयान्** = आफ्ना सन्ततिहरूको विषयमा
**मा अनुशोच** = शोक नगर
**यतः** = किनभने
**सर्वः** = सबै प्राणीले
**अवशः** = विवश भएर
**स्वकृतं** = आफ्नै कर्मको फल
**विन्दते** = भोग्नुपर्दछ

**वाक्यार्थ–** हे देवकी ! त्यसैले मैले मारेको भए पनि आफ्ना सन्तानहरूको विषयमा शोक नगर, किनभने सबै प्राणीहरूले विवश भएर आफ्नै कर्मको फल भोग्नुपर्दछ।

**यावद्धतोऽस्मि हन्तास्मीत्यात्मानं मन्यतेऽस्वदृक् ।**
**तावत् तदभिमान्यज्ञो बाध्यबाधकतामियात् ॥ २२ ॥**

**पदार्थ–**
**अस्वदृक्** = आफ्नो स्वरूपलाई नजान्ने
**अज्ञः** = अज्ञानी व्यक्ति
**यावत्** = जबसम्म
**आत्मानं** = आफूलाई
**हतः अस्मि** = मारिएको हुँ या
**हन्ता अस्मि इति** = मार्नेवाला हुँ भनेर
**मन्यते** = मान्दछ
**तदभिमानी** = त्यस शरीरमा आत्मबुद्धि गर्ने त्यो व्यक्ति
**तावत्** = तबसम्म नै
**बाध्यबाधकताम्** = दुःख प्राप्त गर्ने र दुःख दिनेको रूपमा

**इयात्** = पुग्दछ

**वाक्यार्थ–** आफ्नो स्वरूपलाई नजान्ने अज्ञानी व्यक्ति आफैँलाई मर्ने र मार्नेवाला हुँ भनी मान्दछ। जबसम्म त्यसले शरीरमा आत्मबुद्धि गरिरहन्छ, तबसम्म नै त्यो व्यक्ति स्वयं दुःख भोग्ने र अरूलाई दुःख दिने व्यक्तिको रूपमा रहिरहन्छ।

**विवरण–** माथिका आठ श्लोकमा कंसले आफ्ना बहिनी-ज्वाइँलाई आफूले गरेको अपराध क्षमा गरी शोक छाडिदिन आग्रह गरेको छ। यहाँ पनि पहिलो श्लोकमा कंसले आफ्नो गल्ती स्वीकार गरेको छ। दोस्रो श्लोकमा करुणारहित राक्षसजस्तो म कुन नारकीय दुःख भोगुँला ? भनी आफ्नो दुष्कर्मको परिणामको विचार गरेको छ। कुनै अपराधीले आफ्नो अपराध र त्यसको भयानक परिणामलाई पनि स्वीकार गर्‍यो भने अर्को व्यक्तिको हृदयमा केही न केही सन्तोष हुन्छ। सामान्य व्यवहारमा सबै काम अभिमानपूर्वक नै हुने गर्दछन्। जब एउटाले आफ्नो अपराध स्वीकार गर्दछ तब अर्कोको अभिमान खुसी हुन्छ। सन्तुष्ट र सम्मानित भएको व्यक्ति क्षमा दिन समर्थ हुन्छ, त्यसैले तेस्रो श्लोकमा भ्रमको कारणले नै आफूबाट अपराध हुन गएको हो भनी कंसले क्षमा मागेको छ। देवकीको आठौँ छोराबाट कंस मर्छ भन्ने देवताहरूको झुठो आकाशवाणीलाई पत्याएर नै मैले यो अपराध गरेको हुँ भन्ने कंसको भनाइ छ। चौथो श्लोकमा भने प्राणीहरूले आ-आफ्नो कर्मानुसार सुखदुःख भोग्ने हुनाले त्यसमा दुःखी हुनु पर्दैन भनी सम्झाइएको छ। यसपछिका चार श्लोकमा भने आत्माको नित्यता र असङ्गतालाई बताई शोक गर्नु उचित छैन भनिएको छ।

**क्षमध्वं मम दौरात्म्यं साधवो दीनवत्सलाः।**
**इत्युक्त्वाश्रुमुखः पादौ श्यालः स्वस्रोरथाग्रहीत्॥ २३॥**

पदार्थ–
**साधवः** = साधुहरू
**दीनवत्सलाः** = दुःखीमाथि दया गर्नेवाला हुन्छन् (त्यसैले)
**मम** = मेरो
**दौरात्म्यं** = दुष्टतालाई
**क्षमध्वं** = क्षमा गर्नुहोस्
**इति** = यसो
**उक्त्वा** = भनेर
**अथ** = त्यसपछि
**अश्रुमुखः** = आँसुयुक्त अनुहार भएको
**श्यालः** = (वसुदेवको) जेठान कंसले
**स्वस्रोः** = बहिनी-ज्वाइँ देवकी र वसुदेवको
**पादौ** = पाउ
**अग्रहीत्** = समात्यो

**वाक्यार्थ–** साधुहरू आफ्नो शरणमा आएका दुःखीहरूप्रति दया गर्दछन्, त्यसैले मेरो दुष्टतालाई पनि क्षमा गर्नुहोस् भनी आँसुले भिजेको अनुहार भएको कंसले देवकी र वसुदेवको पाउ समात्यो।

**मोचयामास निगडाद् विश्रब्धः कन्यकागिरा।**
**देवकीं वसुदेवं च दर्शयन्नात्मसौहृदम्॥ २४॥**

पदार्थ–
**कन्यकागिरा** = बालिकाको वचनद्वारा

**विश्रब्धः** = शान्त भएको (कंसले)
**आत्मसौहृदम्** = आफ्नो मैत्रीभावलाई
**दर्शयन्** = देखाउँदै
**देवकीं** = देवकी र
**वसुदेवं च** = वसुदेवलाई पनि
**निगडात्** = फलामका साङ्लाको बन्धनबाट
**मोचयामास** = छुटाइदियो

**वाक्यार्थ–** बालिकाको वचनले शान्त भएको कंसले आफ्नो मैत्रीभावलाई देखाउँदै देवकी र वसुदेवलाई फलामका साङ्लाको बन्धनबाट छुटाइदियो।

**भ्रातुः समनुतप्तस्य क्षान्त्वा रोषं च देवकी।**
**व्यसृजद् वसुदेवश्च प्रहस्य तमुवाच ह ॥ २५ ॥**

**पदार्थ–**
**देवकी** = देवकीले
**क्षान्त्वा** = क्षमा दिएर
**समनुतप्तस्य** = पश्चात्ताप गरिरहेको
**भ्रातुः** = दाजु कंसप्रतिको
**रोषं च** = रिसलाई
**व्यसृजत्** = त्यागिदिनुभयो
**वसुदेवः च** = वसुदेवले पनि
**ह** = निश्चय नै
**प्रहस्य** = हाँस्दै
**तम्** = त्यो कंसलाई
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** आफ्ना दाजुले पश्चात्ताप गरिरहेको देखेर देवकीले कंसप्रतिको रिस त्यागिदिनुभयो। वसुदेवले पनि हाँस्दै कंसलाई भन्नुभयो।

**एवमेतन्महाभाग यथा वदसि देहिनाम्।**
**अज्ञानप्रभवाहंधीः स्वपरेति भिदा यतः ॥ २६ ॥**

**पदार्थ–**
**महाभाग** = आदरणीय हे कंस
**यथा** = जे
**वदसि** = भन्दै हुनुहुन्छ
**एतत्** = यो कुरा
**एवम्** = यस्तै हो
**देहिनाम्** = प्राणीहरूको
**अहंधीः** = अहङ्कार
**अज्ञानप्रभवा** = अज्ञानको कारणले हुन्छ
**यतः** = जसको कारणले
**स्वपर इति** = आफ्नो र पराइ भन्ने
**भिदा** = भेद हुन्छ

**वाक्यार्थ–** आदरणीय हे कंस ! तपाईंले जे बताउनुभयो त्यो त्यस्तै हो। प्राणीहरूलाई अज्ञानका कारणले अहङ्कार हुन्छ र अहङ्कारबाट नै आफ्नो र पराइको भेद हुन्छ।

**शोकहर्षभयद्वेषलोभमोहमदान्विताः।**
**मिथो घ्नन्तं न पश्यन्ति भावैर्भावं पृथग्दृशः ॥ २७ ॥**

**पदार्थ–**
**शोकहर्षभयद्वेषलोभमोह-मदान्विताः** = शोक, हर्ष, डर, द्वेष, लोभ, मोह र अहङ्कारले युक्त
**पृथग्दृशः** = भेददर्शीहरू

**मिथः** = एक-आपसमा
**भावैः** = एक किसिमका अस्तित्वहरूद्वारा
**भावं** = अर्का किसिमका अस्तित्वहरूलाई
**घ्नन्तं** = समाप्त पार्ने (कालरूप परमात्मा)लाई
**न पश्यन्ति** = देख्दैनन्

**वाक्यार्थ–** शोक, हर्ष, डर, द्वेष, लोभ, मोह र अहङ्कारले युक्त भेददर्शीहरू एक किसिमका अस्तित्वहरूद्वारा अर्का किसिमका अस्तित्वहरूलाई समाप्त पार्ने कालरूप परमात्मालाई देख्दैनन्।

**विवरण–** यस श्लोकमा वसुदेवले परमात्मा नै मर्ने-मार्ने आदि भेदहरूमा देखिनुभएको हो भनी बताउनुभएको छ। यसमा वसुदेवको सरल स्वभाव पनि अभिव्यक्त भएको छ। आफ्ना छ भाइ छोराहरूलाई मार्ने कंसले शास्त्रका वचनहरूलाई आफू अनुकूल व्याख्या गर्दै आत्मा बाध्यबाधकको भेददेखि पर रहेको बताउँछ। मर्ने-मार्ने भन्ने व्यवहार काल्पनिक भएकाले मैले मारेका छोराहरूको विषयमा शोक नगर भन्दै कंसले सम्झाउँदा उसको कपटपूर्ण शास्त्रव्याख्यामा पनि वसुदेवले यथार्थ आत्मस्वरूपकै वर्णन देख्नुभएको छ। अज्ञानकै कारणले शरीर, मन, इन्द्रिय आदिमा अहङ्कार हुन्छ र यसैद्वारा व्यक्तिहरू आफू-आफूलाई छुट्टाछुट्टै मान्दछन्। उनीहरू तेरो-मेरो भन्ने भेद देख्छन् र अनेकथरी व्यवहारहरूबाट सुखी, दुःखी, मोहित र मत्त भइरहन्छन्। हुन त सबै जीवहरूको रूपमा रहेर उनीहरूलाई अन्तर्यामीरूपले प्रेरित गरी परमात्माले नै सबै व्यवहार चलाइरहनुभएको छ, तर सामान्य मानिसहरू सबै व्यवहार आफैँले चलाएको ठान्दछन्। परमात्मा नै प्राणीहरूलाई निमित्त बनाएर उनीहरूलाई जन्माउने, मार्ने आदि गर्नुहुन्छ। तर अल्पज्ञ मानिसहरू त्यस्ता सर्वरूप परमात्मालाई बुझ्दैनन्। संसारका जन्म-मृत्यु, सुख-दुःख, शोक-मोह आदि सबै राम्रा-नराम्रा कुराहरू परमात्माद्वारा नै सञ्चालित भएकाले र त्यसको फल भोग्ने पनि परमात्मा नै भएकाले संसारका पदार्थहरूमा मानिसहरूले विशेष चिन्ता लिने आवश्यकता छैन भनी यो प्रसङ्गमा बताइएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कंस एवं प्रसन्नाभ्यां विशुद्धं प्रतिभाषितः।**
**देवकीवसुदेवाभ्यामनुज्ञातोऽविशद् गृहम्॥ २८॥**

**पदार्थ–**
**प्रसन्नाभ्यां** = प्रसन्न भएका
**देवकीवसुदेवाभ्याम्** = देवकी र वसुदेवद्वारा
**एवं** = यसप्रकार
**विशुद्धं** = सफासँग (मन फुकाएर)
**प्रतिभाषितः** = कुरा गरिएको
**अनुज्ञातः** = उहाँहरूद्वारा अनुमति दिइएको
**कंसः** = कंस
**गृहम्** = आफ्नो घरमा
**अविशत्** = प्रवेश गऱ्यो

**वाक्यार्थ–** प्रसन्न भएका देवकी र वसुदेवले यसप्रकार कंससँग मन फुकाएर कुरा गर्नुभयो र उहाँहरूबाट अनुमति पाएपछि कंस आफ्नो घरमा प्रवेश गऱ्यो।

**तस्यां रात्र्यां व्यतीतायां कंस आहूय मन्त्रिणः।**
**तेभ्य आचष्ट तत् सर्वं यदुक्तं योगनिद्रया॥ २९॥**

पदार्थ–
**कंसः** = कंसले
**तस्यां** = त्यो
**रात्र्यां** = रात
**व्यतीतायां** = बितेपछि
**मन्त्रिणः** = मन्त्रीहरूलाई
**आहूय** = बोलाएर
**तेभ्यः** = तिनीहरूलाई
**योगनिद्रया** = योगनिद्राद्वारा
**यत्** = जे
**उक्तं** = बताइएको थियो
**तत् सर्वं** = त्यो सबै कुरा
**आचष्ट** = बतायो

**वाक्यार्थ–** त्यो रात बितेपछि कंसले मन्त्रीहरूलाई बोलाई योगनिद्राले जे बताएकी थिइन् त्यो सबै कुरा तिनीहरूलाई बतायो।

**आकर्ण्य भर्तुर्गदितं तमूचुर्देवशत्रवः।**
**देवान् प्रति कृतामर्षा दैतेया नातिकोविदाः॥ ३०॥**

पदार्थ–
**देवान् प्रति** = देवताहरू प्रति
**कृतामर्षाः** = रिस गर्ने
**नातिकोविदाः** = धेरै कुरा नबुझ्ने
**देवशत्रवः** = देवताका शत्रु
**दैतेयाः** = ती दैत्यहरूले
**भर्तुः** = आफ्ना स्वामी कंसको
**गदितं** = भनाइ
**आकर्ण्य** = सुनेर
**तम्** = उसलाई
**ऊचुः** = भने

**वाक्यार्थ–** देवताहरूप्रति रिस गर्ने र धेरै कुरा नबुझ्ने देवशत्रु दैत्यहरूले आफ्ना स्वामी कंसको भनाइ सुनेर उसलाई यसो भने।

**एवं चेत् तर्हि भोजेन्द्र पुरग्रामव्रजादिषु।**
**अनिर्दशान् निर्दशांश्च हनिष्यामोऽद्य वै शिशून्॥ ३१॥**

पदार्थ–
**भोजेन्द्र** = हे भोजराज कंस
**एवं चेत्** = यदि यसो हो भने
**तर्हि** = त्यसो भए
**अद्य वै** = आज नै
**पुरग्रामव्रजादिषु** = सहर, गाउँ र गोठालाका वस्तीहरूमा
**अनिर्दशान्** = दश दिन नपुगेका र
**निर्दशान् च** = दश दिन कटेका
**शिशून्** = बच्चाहरूलाई
**हनिष्यामः** = मार्नेछौँ

**वाक्यार्थ–** हे भोजराज कंस! यदि यसो हो भने हामी आजै सहर, गाउँ र गोठालाका वस्तीहरूमा दश दिनभित्र जन्मेका र दशदिन कटिसकेका सबै बच्चाहरूलाई मार्नेछौँ।

**किमुद्यमैः करिष्यन्ति देवाः समरभीरवः।**
**नित्यमुद्विग्नमनसो ज्याघोषैर्धनुषस्तव॥ ३२॥**

पदार्थ–
**तव** = तपाईंको
**धनुषः** = धनुको
**ज्याघोषैः** = ताँदोको
आवाजद्वारा
**नित्यम्** = सधैं
**उद्विग्नमनसः** = आत्तिइरहने
**समरभीरवः** = युद्धदेखि डराउने
**देवाः** = देवताहरूले
**उद्यमैः** = प्रयासहरूले पनि
**किम् करिष्यन्ति** = के गर्न सक्नेछन्

**वाक्यार्थ–** तपाईंको धनुको ताँदोको आवाजबाट सधैं आत्तिइरहने र युद्धदेखि डराउने देवताहरूले सक्दो प्रयास गरे पनि के पो गर्न सक्नेछन् र ?

**अस्यतस्ते शरव्रातैर्हन्यमानाः समन्ततः।**
**जिजीविषव उत्सृज्य पलायनपरा ययुः॥ ३३॥**

पदार्थ–
**अस्यतः** = प्रहार गर्दै गरेका
**ते** = तपाईंको
**शरव्रातैः** = बाणहरूद्वारा
**हन्यमानाः** = पीडित भएका देवताहरू
**जिजीविषवः** = बाँच्ने इच्छा गर्दै
**उत्सृज्य** = युद्ध छाडी
**पलायनपराः** = भाग्न खोजी
**समन्ततः** = जताततै
**ययुः** = दौडिए

**वाक्यार्थ–** जब तपाईं प्रहार गर्न लाग्नुहुन्छ तब तपाईंका बाणहरूद्वारा पीडित भएका देवताहरू बाँच्ने इच्छाले युद्ध छाडी भाग्नका लागि जताततै दौडिन थाल्दछन्।

**केचित् प्राञ्जलयो दीना न्यस्तशस्त्रा दिवौकसः।**
**मुक्तकच्छशिखाः केचिद् भीताः स्म इति वादिनः॥ ३४॥**

पदार्थ–
**केचित्** = कोही
**दिवौकसः** = देवताहरू
**न्यस्तशस्त्राः** = शस्त्रहरू फाली
**प्राञ्जलयः** = हात जोडी
**दीनाः** = दुःखी बन्दै आउँछन्
**केचित्** = कोही चाहिँ
**मुक्तकच्छशिखाः** = कपडाको गाँठो र शिरको शिखा खोली
**भीताः स्मः** = हामी डराएका छौं
**इति** = यसो
**वादिनः** = भन्न थाल्दछन्

**वाक्यार्थ–** कोही देवताहरू शस्त्रहरू फाली हात जोड्दै दुःखी बन्दै आउँछन् भने कोही चाहिँ कपडाको गाँठो र शिरको शिखा खोली हामी डराएका छौं भन्न थाल्दछन्।

**न त्वं विस्मृतशस्त्रास्त्रान् विरथान् भयसंवृतान्।**
**हंस्यन्यासक्तविमुखान् भग्नचापानयुध्यतः॥ ३५॥**

पदार्थ–
**त्वं** = तपाईं चाहिँ
**विस्मृतशस्त्रास्त्रान्** = शस्त्र-अस्त्र बिर्सेका
**विरथान्** = रथ भाँचिएका
**भयसंवृतान्** = डराएका
**अन्यासक्तविमुखान्** = अरूसँग युद्ध गरिरहेका र युद्धबाट भागेका
**भग्नचापान्** = धनु भाँचिएका अनि
**अयुध्यतः** = आफूसँग युद्ध

नगर्नेहरूलाई | **न हंसि** = मार्नुहुन्न

**वाक्यार्थ–** तपाईं चाहिँ अस्त्र-शस्त्र बिर्सेका, रथ भाँचिएका, डराएका, अरूसँग युद्ध गरिरहेका, युद्धबाट भागेका, धनु भाँचिएका अनि आफूसँग युद्ध नगर्ने कसैलाई पनि मार्नुहुन्न।

**किं क्षेमशूरैर्विबुधैरसंयुगविकत्थनैः।**
**रहोजुषा किं हरिणा शम्भुना वा वनौकसा।**
**किमिन्द्रेणाल्पवीर्येण ब्रह्मणा वा तपस्यता॥ ३६ ॥**

**पदार्थ–**
**असंयुगविकत्थनैः** = लडाइँभन्दा बाहिर ठुला कुरा गर्ने
**क्षेमशूरैः** = निर्भय स्थानमा मात्र शूर-वीर पल्टिने
**विबुधैः** = देवताहरूबाट
**किं** = केको डर
**रहोजुषा** = एकान्तमा लुक्ने
**हरिणा** = हरिबाट र
**वनौकसा** = वनवासी
**शम्भुना वा** = शिवबाट पनि
**किं** = के डर
**अल्पवीर्येण** = थोरै शक्ति भएका
**इन्द्रेण** = इन्द्रबाट र
**तपस्यता** = तपस्या गर्ने
**ब्रह्मणा वा** = ब्रह्माबाट पनि
**किम्** = के हुन्छ र

**वाक्यार्थ–** लडाइँभन्दा बाहिर मात्र ठुला कुरा गर्ने र निर्भय स्थानमा मात्र शूर-वीर पल्टिने देवताहरूबाट हामीलाई के डर छ र? एकान्तमा लुक्ने हरि र वनवासी शङ्करबाट पनि के डर छ र? त्यसै गरी थोरै शक्ति भएका इन्द्र र तपस्या गर्ने ब्रह्माबाट पनि हामीलाई के डर छ र?

**विवरण–** यस प्रसङ्गमा दैत्यहरूले देवताहरूले आफ्नो केही बिगार्न नसक्ने कुरा कंसलाई जनाएका छन्। देवताहरू निर्भय ठाउँमा मात्र शूरवीर बन्दछन्, युद्ध आदि सङ्कटको अवस्थामा उनीहरूको वीरताले काम गर्दैन। जब तपाईं बाण प्रहार गर्नुहुन्छ, तब टाढा रहेका देवताहरू भाग्न, दौडिन थाल्छन् भने नजिकै रहेका भाग्न पनि नसक्नेहरू चाहिँ हात जोडी शस्त्र फाली दीनतापूर्वक रहन्छन्। देवताहरू युद्धभन्दा बाहिर मात्र ठुला कुरा गर्दछन्, युद्ध सुरु भएपछि उनीहरूका वीरताका गफ हराउँछन्, यस्ता देवतासँग के डराउनु? भनी दैत्यहरूले कंसलाई सुऱ्याएका छन्। देवताहरूमध्ये चार मुख्य छन्– इन्द्र, ब्रह्मा, विष्णु र शिव। यी चारै ओटासँग डराउनु नपर्ने दैत्यहरूको भनाइ छ। इन्द्र थोरै मात्र पराक्रम भएका छन्। हरि वीर छन्, तर लुकेर समुद्रको बीचमा गई बसेका छन्। शम्भु पनि वीर छन्, तर उनी पनि वनवासी भएका छन्, ब्रह्माजी पनि कमलमाथि बसी तपस्या गर्नमैं लीन छन्। यसरी चार ओटैसँग डराउनु नपर्ने दैत्यहरूको तर्क छ। यहाँ हरि र शिवलाई निन्दा गरिएको पदबाट स्तुतिपरक अर्थ पनि निस्कन्छ। **रहः** भनेको एकान्त हो, त्यहाँ बस्ने भन्नुको तात्पर्य सबैका हृदयभित्र बस्ने अन्तर्यामी भन्ने हुन्छ। अथवा **रहः** रहस्यात्मक उपनिषद्वचनद्वारा प्रतिपाद्य भएकाले पनि हरि **रहोजुष** हुनुहुन्छ। शिवलाई **वनौकः** अर्थात् वनवासी भन्नुको अर्थ पनि इलावृत खण्डको एकान्त वनप्रदेशमा उमालाई साथ लिई बस्ने भन्ने हुन्छ। कंस शिवभक्त थियो, किनभने उसले धनुषयज्ञ गर्दा पशुपतिको पूजा गरेको छ, त्यसैले उसका सामु उसैका अनुयायीले शिवनिन्दा कसरी गर्न सक्छन् र? भन्ने शङ्का उठाई

भागवतको विरोधोद्धार नामक टीकाका रचयिता पांधरीनारायणाचार्यले **वनौकः** यस शब्दको अर्कै अर्थ गर्नुभएको छ। संस्कृत भाषामा वन शब्दको अर्थ पानी पनि हुन्छ। ओक शब्दको अर्थ रहने भन्ने हुन्छ। वनौक शब्दको अर्थ पानीमा रहने डुङ्गा भन्ने अर्थ गर्न सकिन्छ। विष्णु समुद्रको बीचमा एकान्तमा गई बसेका छन्, उनलाई बाहिर आउन र हामीलाई मार्न शिवरूपी डुङ्गा सहयोगीको रूपमा आवश्यक हुन्छ। **शम्भुना वनौकसा विना रहोजुषा हरिणा किम्** ? अर्थात् शिव हाम्रा अनुकूल नै भएकाले उनीविना समुद्रशायी विष्णुले एक्लैले के बिगार्न सक्छन् र ? भन्ने अर्थ पनि यस श्लोकको गर्न संभव छ।

**तथापि देवाः सापत्न्यान्नोपेक्ष्या इति मन्महे ।**

**ततस्तन्मूलखनने नियुङ्क्ष्वास्माननुव्रतान् ॥ ३७ ॥**

**पदार्थ–**
**तथा अपि** = तर पनि
**सापत्न्यात्** = शत्रु भएका हुनाले
**देवाः** = देवताहरू
**न उपेक्ष्याः इति** = उपेक्षा गर्न योग्य छैनन् भन्ने
**मन्महे** = मान्दछौँ
**ततः** = त्यसैले
**तन्मूलखनने** = तिनीहरूको जरै उखेल्ने काममा
**अनुव्रतान्** = तपाईंका अनुचर
**अस्मान्** = हामीलाई
**नियुङ्क्ष्व** = नियुक्त गर्नुहोस्

**वाक्यार्थ–** तर पनि देवताहरू शत्रु भएकाले उनीहरूको उपेक्षा गर्नुहुन्न भन्ने हामीलाई लाग्छ। त्यसैले तिनीहरूको जरै उखेल्न तपाईंका अनुचर हामीलाई खटाउनुहोस्।

**यथामयोऽङ्गे समुपेक्षितो नृभिर्न शक्यते रूढपदश्चिकित्सितुम् ।**

**यथेन्द्रियग्राम उपेक्षितस्तथा रिपुर्महान् बद्धबलो न चाल्यते ॥ ३८ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**नृभिः** = मानिसहरूद्वारा
**समुपेक्षितः** = उपेक्षा गरिएको र
**अङ्गे** = शरीरको अङ्गमा
**रूढपदः** = पाइला जमाइसकेको
**आमयः** = रोग
**चिकित्सितुम्** = उपचार गर्न
**न शक्यते** = सकिँदैन
**यथा** = जसरी
**उपेक्षितः** = उपेक्षा गरिएको
**इन्द्रियग्रामः** = इन्द्रियहरूको समूह (नियन्त्रित गर्न सकिँदैन)
**तथा** = त्यसै गरी
**बद्धबलः** = बलियो भएको
**महान्** = ठुलो
**रिपुः** = शत्रु पनि
**न चाल्यते** = हराउन सकिँदैन

**वाक्यार्थ–** जसरी पहिले मानिसहरूले उपेक्षा गर्नाले शरीरमा स्थान जमाइसकेको रोगलाई पछि उपचार गर्न सकिँदैन, अनि जसरी पहिले उपेक्षा गरिएका इन्द्रियहरूलाई पछि नियन्त्रित गर्न सकिँदैन, त्यसै गरी उपेक्षा गर्नाले भित्रभित्रै सशक्त भएको बलशाली शत्रुलाई पनि हराउन सकिँदैन।

**मूलं हि विष्णुर्देवानां यत्र धर्मः सनातनः ।**

**तस्य च ब्रह्म गोविप्रास्तपो यज्ञाः सदक्षिणाः ॥ ३९ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**देवानां** = देवताहरूका
**मूलं** = मूल
**विष्णुः** = विष्णु
**यत्र** = जहाँ
**सनातनः धर्मः** = सनातन धर्म छ (त्यहाँ रहन्छन्)
**तस्य च** = त्यस सनातन धर्मका पनि मूल
**ब्रह्म** = वेद
**गोविप्राः** = गाई र ब्राह्मणहरू
**तपः** = तपस्या
**सदक्षिणाः** = दक्षिणासहितका
**यज्ञाः** = यज्ञहरू हुन्

**वाक्यार्थ–** देवताहरूका मूल भगवान् विष्णु हुन्। उनी त्यहीँ रहन्छन् जहाँ सनातन धर्म रहन्छ। त्यस सनातन धर्मका पनि मूल भनेका वेद, गाई, ब्राह्मण, तपस्या र दक्षिणासहितका यज्ञहरू हुन्।

**तस्मात् सर्वात्मना राजन् ब्राह्मणान् ब्रह्मवादिनः।**
**तपस्विनो यज्ञशीलान् गाश्च हन्मो हविर्दुघाः॥ ४०॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**राजन्** = हे राजा
**ब्रह्मवादिनः** = वेदवादी
**ब्राह्मणान्** = ब्राह्मणहरूलाई
**तपस्विनः** = तपस्वीहरूलाई
**यज्ञशीलान्** = याज्ञिकहरूलाई र
**हविर्दुघाः** = यज्ञीय पदार्थ उत्पन्न गर्ने
**गाः च** = गाईहरूलाई पनि
**सर्वात्मना** = सम्पूर्ण रूपले
**हन्मः** = मार्छौं

**वाक्यार्थ–** त्यसैले हे राजा ! वेदवादी ब्राह्मण, तपस्वी, याज्ञिक र यज्ञीय पदार्थ उत्पन्न गर्ने गाईहरूलाई पनि हामी सखाप पार्छौं।

**विप्रा गावश्च वेदाश्च तपः सत्यं दमः शमः।**
**श्रद्धा दया तितिक्षा च क्रतवश्च हरेस्तनूः॥ ४१॥**

**पदार्थ–**
**विप्राः** = ब्राह्मणहरू
**गावः च** = गाईहरू र
**वेदाः च** = वेदहरू पनि
**तपः** = तपस्या
**सत्यं** = सत्य
**दमः** = इन्द्रियसंयम
**शमः** = मनोनिग्रह
**श्रद्धा** = श्रद्धा
**दया** = दया
**तितिक्षा च** = सहनशीलता र
**क्रतवः च** = यज्ञहरू पनि
**हरेः** = हरिका
**तनूः** = शरीर हुन्

**वाक्यार्थ–** ब्राह्मण, गाई, वेद, तपस्या, सत्य, इन्द्रियसंयम, मनोनिग्रह, श्रद्धा, दया, सहनशीलता र यज्ञहरू नै हरिका शरीर हुन्।

**स हि सर्वसुराध्यक्षो ह्यसुरद्विड्गुहाशयः।**
**तन्मूला देवताः सर्वाः सेश्वराः सचतुर्मुखाः।**
**अयं वै तद्वधोपायो यदृषीणां विहिंसनम्॥ ४२॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**गुहाशयः** = गुप्त ठाउँमा रहने
**सः हि** = ती हरि नै
**सर्वसुराध्यक्षः** = सबै देवताहरूका अधिपति र

**असुरद्विट्** = असुहरूको प्रमुख शत्रु हुन्
**सेश्वराः** = शिवसहित
**सचतुर्मुखाः** = ब्रह्माजीसहित
**सर्वाः** = सम्पूर्ण
**देवताः** = देवताहरू
**तन्मूलाः** = ती हरि नै मूल भएका हुन्
**यत्** = जुन
**ऋषीणां** = ऋषिहरूको
**विहिंसनम्** = नाश गर्ने काम हो
**अयं वै** = यही नै
**तद्वधोपायः** = तिनलाई मार्ने उपाय हो

**वाक्यार्थ–** गुप्त ठाउँमा लुक्ने हरि नै सबै देवताहरूका अधिपति र असुरहरूको प्रमुख शत्रु हुन्। ब्रह्मा र शङ्करसहितका सबै देवताहरूका मूल पनि तिनै हुन्। ऋषिहरूलाई मार्नु नै ती हरिलाई मार्ने उपाय हो।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं दुर्मन्त्रिभिः कंसः सह सम्मन्त्र्य दुर्मतिः।**

**ब्रह्महिंसां हितं मेने कालपाशावृतोऽसुरः॥ ४३॥**

**पदार्थ–**
**कालपाशावृतः** = कालको पाशमा बेरिएको
**दुर्मतिः** = दुर्बुद्धि
**असुरः** = असुर
**कंसः** = कंसले
**दुर्मन्त्रिभिः सह** = दुष्ट बुद्धि भएका मन्त्री (सल्लाहकार) हरूसँग
**एवं** = यसप्रकार
**सम्मन्त्र्य** = सल्लाह गरेर
**ब्रह्महिंसां** = ब्राह्मणहरूको हिंसालाई
**हितं** = उचित
**मेने** = मान्यो

**वाक्यार्थ–** कालको पाशमा फसेको कंसले दुष्ट बुद्धि भएका मन्त्री (सल्लाहकार)हरूसँग यसप्रकार सल्लाह गरेर ब्राह्मणहरूको हत्यालाई उचित मान्यो।

**सन्दिश्य साधुलोकस्य कदने कदनप्रियान्।**

**कामरूपधरान् दिक्षु दानवान् गृहमाविशत्॥ ४४॥**

**पदार्थ–**
**कामरूपधरान्** = चिताएको रूप लिन सक्ने
**कदनप्रियान्** = हिंसाप्रेमी
**दानवान्** = दानवहरूलाई
**साधुलोकस्य** = सज्जनहरूको
**कदने** = दमन गर्ने काममा
**दिक्षु** = दिशाहरूमा
**सन्दिश्य** = खटाएर
**गृहम्** = भवनमा
**आविशत्** = पस्यो

**वाक्यार्थ–** चिताएको रूप लिन सक्ने हिंसाप्रेमी दानवहरूलाई सज्जनहरूको दमन गर्न अनेक दिशाहरूमा खटाएर कंस आफ्नो भवनभित्र पस्यो।

**ते वै रजःप्रकृतयस्तमसा मूढचेतसः।**

**सतां विद्वेषमाचेरुरारादागतमृत्यवः॥ ४५॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**रजःप्रकृतयः** = रजोगुणी

| | | |
|---|---|---|
| स्वभावका | **आरात्** = नजिकै | **सतां** = सज्जनहरूसँग |
| **तमसा** = तमोगुणको कारण | **आगतमृत्यवः** = मृत्यु आएका | **विद्वेषम्** = द्वेष |
| **मूढचेतसः** = बुद्धि भ्रष्ट भएका | **ते** = ती दैत्यहरूले | **आचेरुः** = गर्न थाले |

**वाक्यार्थ–** रजोगुणी स्वभाव भएका र तमोगुणका कारणले बुद्धिविवेक नष्ट भएका ती दैत्यहरू आफ्नो मृत्यु नजिकै आइपुग्नाले सज्जनहरूसँग द्वेष गर्न थाले।

**आयुः श्रियं यशो धर्मं लोकानाशिष एव च।**
**हन्ति श्रेयांसि सर्वाणि पुंसो महदतिक्रमः॥ ४६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **श्रियं** = ऐश्वर्यलाई | **सर्वाणि** = सम्पूर्ण |
| **महदतिक्रमः** = महापुरुषहरूको अनादरले | **यशः** = कीर्तिलाई | **श्रेयांसि च** = कल्याणहरूलाई पनि |
| **पुंसः** = मानिसको | **धर्मं** = धर्मलाई | **हन्ति एव** = निश्चय नै नष्ट गर्दछ |
| **आयुः** = आयुलाई | **लोकान्** = पुण्य लोकहरूलाई | |
| | **आशिषः** = विषयभोग र | |

**वाक्यार्थ–** महापुरुषको अनादरले मानिसको आयु, ऐश्वर्य, कीर्ति, धर्म, पुण्यलोकहरू, विषयभोग र कल्याणलाई समेत निश्चय नै नष्ट गरिदिन्छ।

**विवरण–** यस श्लोकमा महापुरुषहरूको अपमानले मानिसको आयु, कीर्ति, धर्म एवं ऐश्वर्य आदि सबै सद्गुणहरू नष्ट हुने कुरा बताइएको छ। शास्त्रमा माता, पिता, गुरु आदि मान्यजनहरूको सम्मान एवं अभिवादन गर्ने व्यक्तिका आयु, विद्या, कीर्ति र बल बढ्दछन् भनिएको छ– **चत्वारि तस्य वर्धन्ते आयुर्विद्या यशो बलम्** (मनुस्मृति, २/१२१)। जो आत्मज्ञानी एवं परमात्माका अनन्य भक्तहरू छन्, उनीहरूको सेवा र अपमान साक्षात् भगवान्कै सेवा र अपमानसरह हुन्छ। महापुरुषहरू धर्मरूप हुन्, जहाँ धर्मशास्त्रका अनेक व्याख्या र मतान्तरहरूका कारण धर्मको विषयमा शङ्काहरू उठ्दछन्, त्यहाँ महापुरुषहरूका वचन एवं आचरण अनुसार नै धर्मको निर्णय गर्नुपर्ने शास्त्रीय विधान छ। त्यही भएर मनुस्मृतिमा धर्मको लक्षण गर्दा **आचारश्चैव साधूनां** (मनुस्मृति, २/६) अर्थात् सत्पुरुषहरूको आचरण धर्म हो भनिएको छ। यसरी महापुरुषहरू धर्मस्वरूप हुन्छन् र वस्तुतः परमात्मरूप नै हुन्छन्। आत्मज्ञानी सन्तहरूको आचरणमा लोकप्रसिद्ध धर्मभन्दा विरोधी जस्तै लाग्ने कुरा देखिए पनि त्यसलाई धर्मकै अन्तरङ्ग रहस्यको रूपमा चिन्नुपर्दछ। यसैले कुनै पनि अवस्थामा महापुरुषहरूको अपमान गर्नुहुँदैन। यदि व्यक्ति आफैं धर्मज्ञ एवं शास्त्रज्ञ बनेर परमात्माको साक्षात्कार गरेका महापुरुषहरूको अपमान गर्न थाल्दछ भने उसको अवस्था शिवद्वेषी दक्षको जस्तो हुन्छ भनी श्रीमद्भागवतको चतुर्थस्कन्धमा देखाइएको छ। कुनै दुराचारी व्यक्तिले आफूखुसी महापुरुषहरूको निन्दा गर्छ भने त उसको अपराध झन् अक्षम्य हुन्छ। यही कुरा यस श्लोकमा बताइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे चतुर्थोऽध्यायः॥ ४॥**

# अथ पञ्चमोऽध्यायः

## गोकुलमा भगवान्‌को जन्ममहोत्सव

**श्रीशुक उवाच** (श्रीशुकेदवले भन्नुभयो)

**नन्दस्त्वात्मज उत्पन्ने जाताह्लादो महामनाः।**

**आहूय विप्रान् वेदज्ञान् स्नातः शुचिरलङ्कृतः॥ १॥**

**वाचयित्वा स्वस्त्ययनं जातकर्मात्मजस्य वै।**

**कारयामास विधिवत् पितृदेवार्चनं तथा॥ २॥**

**पदार्थ**–
**आत्मजे** = छोरो
**उत्पन्ने** = जन्मिएपछि
**जाताह्लादः** = असाध्यै खुसी भएका
**महामनाः** = उदार हृदय भएका
**नन्दः तु** = नन्द चाहिँ
**स्नातः** = स्नान गरी
**शुचिः** = पवित्र भई
**अलङ्कृतः** = आभूषण धारण गरी
**वेदज्ञान्** = वेद जान्ने
**विप्रान्** = ब्राह्मणहरूलाई
**आहूय** = निमन्त्रणा गरी
**स्वस्त्ययनं** = स्वस्ति अध्याय
**वाचयित्वा** = पाठ गराएर
**आत्मजस्य** = आफ्नो छोराको
**जातकर्म** = जातकर्म संस्कार र
**वै** = निश्चय नै
**तथा** = त्यसै गरी
**विधिवत्** = विधिपूर्वक
**पितृदेवार्चनं** = पितृ र देवताहरूको पूजा पनि
**कारयामास** = गराए

**वाक्यार्थ**– छोरो जन्मिएपछि उदार हृदय भएका नन्द असाध्यै खुसी भए र स्नान गरेर पवित्र भई आभूषणहरू लगाए। त्यसपछि उनले वेद जान्ने ब्राह्मणहरूलाई निमन्त्रणा गरी स्वस्तिवाचनपूर्वक आफ्नो छोराको जातकर्म संस्कार गराए र पितृ तथा देवताहरूको पूजा पनि गराए।

**विवरण**– यहाँ छोरो जन्मिएपछि नन्दले अत्यन्त प्रसन्नताका साथ छोरोको जातकर्म संस्कार गराए भनिएको छ। भगवान् नन्दपुत्र कसरी हुनुभयो ? भन्ने विषयमा विभिन्न टीकाकारहरूले अनेक विचार व्यक्त गरेका छन्। यहीँबाट भगवान्‌का लीलाको सुरुवात पनि हुने भएकाले ती चरित्रहरूको अवान्तर भेद-उपभेदहरूको चर्चा समेत गरिएको छ।

भावार्थदीपिकाप्रकाशमा **आत्मज** शब्दको व्युत्पत्ति **आत्मनः हृदयात् जातः** गरिएको छ। नन्दले श्रीकृष्णलाई हृदयदेखि नै पुत्रभावले स्वीकार गरेका थिए। भगवान् उनको हृदयभित्र पुत्ररूपले जन्मिनुभएको थियो, त्यसैले उहाँ नन्दको पुत्र हुनुभयो। भगवान्‌ले व्रजमा नन्दलाई पिता र यशोदालाई माताको रूपमा स्वीकार गर्नुभयो। भगवान्‌को यही भाव हुनु नै नन्दपुत्रको रूपमा भगवान्‌को जन्म हुनु हो। भगवान् वस्तुतः न देवकीको गर्भबाट न त यशोदाको गर्भबाट जन्मिनुभएको हो, उहाँ त केवल प्रकट हुनुभएको मात्र हो– **आविरासीद् यथा प्राच्यां दिशीन्दुरिव पुष्कलः** (भागवत, १०/३/८)। भगवान् बाहिर प्रकट हुनु देवकी र यशोदा दुबैका लागि समान छ।

यसरी नन्द र यशोदाका हृदयभित्र आराध्यरूपले निवास गर्ने भगवान्ले उनीहरूको सामने प्रकट भई छोरो बन्न स्वीकार गर्नु नै भगवान् नन्दपुत्र हुनुको कारण हो भन्ने बृहत्क्रमसन्दर्भकारको मत देखिन्छ। यसै गरी विश्वनाथ चक्रवर्ती लेख्नुहुन्छ— केवल गर्भभित्र पुग्दैमा र पेटभित्रबाट बाहिर निस्कँदैमा भगवान्लाई त्यहाँबाट जन्मिएको या पुत्र बनेको मानिएको छैन। यदि यसो भए त ब्रह्माजीको श्वासमार्गबाट निस्कने वराह अवतारलाई ब्रह्माजीका पुत्र र परीक्षित्लाई बचाउन उत्तराको गर्भभित्र प्रवेश गर्नुहुने श्रीकृष्णलाई उत्तराको पुत्र मान्नुपर्ने थियो। यसैले प्रेमको सम्बन्धलाई नै भगवान्सँगको मुख्य सम्बन्ध मानिन्छ। त्यही भावसम्बन्धकै कारणले भगवान् नन्द र यशोदाको पुत्र हुनुभएको हो। यही आन्तरिक प्रेमलाई जनाउन नै मूलमा **जाताह्लादः** पद आएको छ।

यहाँ **महामनाः** शब्दका अनेक व्युत्पत्तिहरू गरिएका छन्। **महान् श्रीकृष्णः मनसि यस्य** अर्थात् व्यापक भगवान् श्रीकृष्ण मनमा हुनुभएकाले नन्द महामना हुन्। सर्वव्यापक परमात्मालाई धारण गर्ने सामर्थ्य भएको विशाल एवं शुद्ध मन भएकाले पनि उनलाई महामना भनिएको हो। **महान् श्रीकृष्ण एव मनो यस्य** भन्ने व्युत्पत्ति अनुसार चाहिँ श्रीकृष्ण नै नन्दको मन हुनुहुन्छ भन्ने अर्थ निस्कन्छ। अन्तःकरणले जुन वस्तुलाई विषय गर्दछ, त्यो अन्तःकरण त्यही आकारमा आकारित हुन्छ। घैँटोको ज्ञानमा घटाकार अन्तःकरण र कपडाको ज्ञानमा पटाकार अन्तःकरण हुन्छ। श्रीकृष्णलाई सम्झिरहँदा पनि मन श्रीकृष्णकै आकारमा आकारित भइरहन्छ। निरन्तर चिन्तनद्वारा मनको श्रीकृष्णमा नै तादात्म्य भएकाले नन्दको मन श्रीकृष्ण नै हुनुहुन्छ भनिएको हो। संसारका पदार्थ अध्यास या कल्पनाको भरमा देखिएका हुन्। यिनीहरू नाशवान् छन् र ज्ञानपछि त पूरै बाधित हुन्छन्। यसैले मन संसारका पदार्थहरूमा सधैँ तदाकार भइरहन सक्दैन, तर परमात्मा त अधिष्ठान सद्वस्तु हुनुहुन्छ। त्यसैले चित्त सधैँ परमात्माकार भइरहन सक्दछ। चित्तले कुनै पनि आकार लिनुभन्दा पूर्व त्यससम्बन्धी वासना हुनुपर्दछ। वासना अनुसार नै राम्रा-नराम्रा विषयमा चित्तको प्रवृत्ति हुन्छ। चित्त जब आत्माकार हुन्छ, तब त्यसका सबै वासनाहरू नष्ट हुन्छन्। यसपछि अन्तःकरणको फेरि नयाँ वृत्ति बन्दैन। विषयाध्यास नष्ट भएर चित्त चित् परमात्मरूप हुनु नै त्यो निरन्तर परमात्मामा लागिरहनु हो। सगुण परमात्माको भक्तिद्वारा मन परमात्माकार भई सबै विषय बाधित हुनु या ज्ञानद्वारा विषयाध्यास हटी मन अखण्ड आत्माकार भइरहनु एउटै स्थिति हो। **महामनाः** पदको श्रीकृष्ण नै मन भएको भन्ने अर्थ गर्दा यही तात्पर्य निस्कन्छ।

**धेनूनां नियुते प्रादाद् विप्रेभ्यः समलङ्कृते।**
**तिलाद्रीन् सप्त रत्नौघशातकौम्भाम्बरावृतान्॥ ३॥**

पदार्थ–
**विप्रेभ्यः** = ब्राह्मणहरूलाई
**धेनूनां** = गाईहरूका
**समलङ्कृते** = वस्त्र र आभूषणले सहित
**नियुते** = दुई लाख र
**रत्नौघशातकौम्भाम्बरावृतान्** = रत्नसमूह र सुनौलो वस्त्रले वेष्टित

**सप्त** = सात ओटा
**तिलाद्रीन्** = तिलका पहाड
(ठुला राशि)हरू पनि
**प्रादात्** = दान गरे

**वाक्यार्थ–** उनले ब्राह्मणहरूलाई वस्त्र र आभूषणले सहित दुई लाख गाई दान गरे भने रत्नहरू र सुनौला वस्त्रले ढाकिएका तिलका सात ओटा ठुला-ठुला राशि पनि दान गरे।

**कालेन स्नानशौचाभ्यां संस्कारैस्तपसेज्यया।**
**शुध्यन्ति दानैः सन्तुष्ट्या द्रव्याण्यात्मात्मविद्यया॥ ४॥**

पदार्थ–
**द्रव्याणि** = पदार्थहरू
**कालेन** = समयद्वारा
**स्नानशौचाभ्यां** = स्नान र शौचद्वारा
**संस्कारैः** = संस्कारहरूद्वारा
**तपसा** = तपस्याद्वारा
**इज्यया** = यज्ञद्वारा
**दानैः** = दानहरूद्वारा र
**सन्तुष्ट्या** = सन्तोषद्वारा
**शुध्यन्ति** = शुद्ध हुन्छन्
**आत्मा** = आत्मा चाहिँ
**आत्मविद्यया** = आत्मज्ञानद्वारा
(मात्र शुद्ध हुन्छ)

**वाक्यार्थ–** अनेक प्रकारका पदार्थहरूमध्ये कुनै समयले, कुनै स्नान र शौचले, कुनै संस्कारद्वारा, कुनै तपस्याले, कुनै यज्ञले, कुनै दानले र कुनै सन्तोषले शुद्ध हुन्छन्। आत्मा चाहिँ आत्मज्ञानबाट मात्र शुद्ध हुन्छ।

**विवरण–** यस श्लोकमा संसारका अनेक पदार्थहरू विभिन्न रूपले शुद्ध हुन्छन् भनी बताइएको छ। अशुद्ध भूमि आदि केही समयपछि शुद्ध हुन्छन्। शरीरको अशुद्धि स्नानद्वारा हट्छ। शौच अर्थात् प्रक्षालनबाट अपवित्र वस्तुहरू टाँसिएको वस्तु शुद्ध हुन्छ। गर्भाधान, व्रतबन्ध, विवाह आदि संस्कारहरूद्वारा गर्भस्थ व्यक्ति शुद्ध हुन्छ। विषयहरूको भोगद्वारा अपवित्र भएका इन्द्रियहरू उपवास आदिद्वारा शुद्ध हुन्छन्। यज्ञ आदि सत्कर्महरूद्वारा ब्राह्मणहरू सधैँ शुद्ध भइरहन्छन्। अरूलाई नदिईकन धनधान्य आदिको उपयोग गर्दा ती पदार्थ अपवित्र हुन्छन्, त्यसैले दानद्वारा धनधान्य आदि उपभोग्य वस्तुहरूको अपवित्रता नष्ट हुन्छ। असन्तुष्ट मन अशुद्ध हुन्छ, त्यसैले त्यसको शुद्धि सन्तोषद्वारा हुन्छ। आत्माको शुद्धि चाहिँ आत्मज्ञानबाट मात्र हुन्छ। यहाँ आत्माको शुद्धि भन्नाले पहिले अपवित्र रहेको आत्मालाई पछि शुद्ध पार्ने भन्ने अर्थ बुझ्नु हुँदैन किनभने स्वरूपतः पवित्रतम आत्मा अशुद्ध हुन सक्दैन। ईशावास्योपनिषद् (८)मा भनिएको छ– **अस्नाविरं शुद्धमपापविद्धम्** अर्थात् आत्मा धर्म, अधर्म दुबैको संसर्गले शून्य, त्यसैले परमशुद्ध छ। यदि आत्मा स्वरूपतः नै अशुद्ध रहने हो भने त्यसलाई ज्ञानद्वारा हटाउन पनि सकिन्न। यहाँ अशुद्धि भन्नुको मतलब अज्ञान एवं अहङ्कार हो भन्ने बुझ्नुपर्दछ। यथार्थ स्वरूपलाई नजानी विनाशशील शरीरलाई आफू मान्नाले आत्मामा अशुद्धि आएको हो। यसलाई हटाउन शरीरको साक्षीरूपमा आत्मालाई बुझ्नुपर्दछ। जसरी दूषित वस्तुलाई प्रकाशित गर्ने सूर्य त्यसको दोषद्वारा छोइँदैन, त्यसै गरी शरीर, इन्द्रिय आदिको प्रकाशक आत्मा पनि ती-ती अशुद्धिहरूबाट छोइँदैन। यही बुझ्नु नै आत्मालाई शुद्ध गर्नु हो। यही कुरा यस श्लोकमा बताइएको छ।

**सौमङ्गल्यगिरो विप्राः सूतमागधवन्दिनः।**
**गायकाश्च जगुर्नेदुर्भेर्यो दुन्दुभयो मुहुः॥ ५॥**

**पदार्थ–**
**विप्राः** = ब्राह्मणहरू
**सूतमागधवन्दिनः** = पौराणिक, वंशवर्णन गर्ने र स्तुतिपाठ गर्नेहरूले पनि
**सौमङ्गल्यगिरः** = मङ्गलमय आशीर्वचन (दिए)
**गायकाः** = गायकहरूले
**जगुः** = गीत गाए
**भेर्यः** = कर्नाल र
**दुन्दुभयः च** = दमाहाहरू पनि
**मुहुः** = बारम्बार
**नेदुः** = बज्न लागे

**वाक्यार्थ–** त्यस समयमा पौराणिक, वंशवर्णन गर्नेहरू र स्तुतिपाठ गर्नेहरूले पनि मङ्गलमय आशीर्वचन दिए। गायकहरू गीत गाउन थाले भने कर्नाल र दमाहाहरू बारम्बार बज्न थाले।

**व्रजः सम्मृष्टसंसिक्तद्वाराजिरगृहान्तरः।**
**चित्रध्वजपताकास्रक्चैलपल्लवतोरणैः॥ ६॥**

**पदार्थ–**
**सम्मृष्टसंसिक्तद्वाराजिर-गृहान्तरः** = बढार-कुँढार र सुगन्धित वस्तुको सेचन गरिएका ढोका, आँगन र घरभित्रका ठाउँहरू भएको
**व्रजः** = व्रजभूमि
**चित्रध्वजपताकास्रक्चैलपल्लव-तोरणैः** = विचित्र ध्वजा-पताका, माला, अनेक वस्त्र र पालुवाहरूले युक्त तोरणद्वारा (झन् सुन्दर बनेको थियो)

**वाक्यार्थ–** घर, ढोका एवं आँगनहरू बढारिनुका साथै सुगन्धित वस्तुको सेचन पनि गरिएका हुनाले अनि रङ्गी-बिरङ्गी ध्वजा-पताका, माला, वस्त्र र फूलपालुवाले युक्त तोरण टाँगिनाले त्यो व्रजभूमि झन् शोभित भएको थियो।

**गावो वृषा वत्सतरा हरिद्रातैलरूषिताः।**
**विचित्रधातुबर्हस्रग्वस्त्रकाञ्चनमालिनः॥ ७॥**

**पदार्थ–**
**हरिद्रातैलरूषिताः** = बेसार र तेल घसिएका
**गावः** = गाईहरू
**वृषाः** = गोरुहरू र
**वत्सतराः** = बाच्छा-बाच्छीहरू
**विचित्रधातुबर्हस्रग्वस्त्रकाञ्चन-मालिनः** = अनेक रङ्गका धातु, मयूरको प्वाँख, माला, वस्त्र र सुनका सिक्रीहरू लगाएका थिए

**वाक्यार्थ–** व्रजका गाई, गोरु र बाच्छा-बाच्छीहरू तेल-बेसार घसिएका अनि अनेक रङ्गका धातुको लेप, मयूरको प्वाँख, माला, वस्त्र र सुनका सिक्री आदि लगाएका हुनाले झन् सिँगारिएका थिए।

**महार्हवस्त्राभरणकञ्चुकोष्णीषभूषिताः।**
**गोपाः समाययू राजन्नानोपायनपाणयः॥ ८॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**महार्हवस्त्राभरणकञ्चुकोष्णीष-भूषिताः** = बहुमूल्य वस्त्र, गहना, जिउमा लगाउने वस्त्र र पगरी आदिद्वारा सिँगारिएका
**गोपाः** = गोपहरू
**नानोपायनपाणयः** = हातमा अनेक उपहारहरू लिई
**समाययुः** = चारैतिरबाट आए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! बहुमूल्य वस्त्र, गहना, जिउमा लगाउने वस्त्र र पगरी आदि उत्तम वस्तुहरूद्वारा सिँगारिएका गोपहरू पनि चारैतिरबाट आफ्ना हातमा अनेक थरी उपहारहरू लिएर आए।

**विवरण–** माथिका चार श्लोकमा भगवान्‌को जन्मद्वारा व्रजमा भएका अनेक थरी उत्सव एवं आनन्दको वर्णन गरिएको छ। वेदपाठी विद्वान् र सङ्गीतशास्त्रकुशल सङ्गीतज्ञहरूद्वारा स्वस्तिवाचन र मङ्गलगानद्वारा गरिएको ज्ञानप्रधान उत्सव पहिलो श्लोकमा बताइएको छ। व्रजभूमिमा भएको संस्कार र उत्सवलाई दोस्रो श्लोकमा बताइएको छ। गाई, गोरु र बाच्छाहरूलाई सिँगारेर तिनीहरूमा भएको शोभालाई तेस्रो श्लोकमा बताइएको छ भने यस श्लोकमा चाहिँ व्रजका गोपबालकहरूमा भएको आनन्द-उत्सवलाई बताएको छ। यसरी ज्ञानप्रधान उत्सव, भूमिमा भएको उत्सव, पशुहरूमा भएको उत्सव र गोपहरूमा भएको उत्सवद्वारा सम्पूर्ण व्रजमण्डल उत्सवमय भएको बताइएको छ।

**गोप्यश्चाकर्ण्य मुदिता यशोदायाः सुतोद्भवम्।**
**आत्मानं भूषयाञ्चक्रुर्वस्त्राकल्पाञ्जनादिभिः॥ ९॥**

**पदार्थ–**
**यशोदायाः** = यशोदाको
**सुतोद्भवम्** = छोरा जन्मेको कुरा
**आकर्ण्य** = सुनेर
**मुदिताः** = अत्यन्त प्रसन्न भएका
**गोप्यः च** = गोपीहरूले पनि
**आत्मानं** = आफूलाई
**वस्त्राकल्पाञ्जनादिभिः** = वस्त्र, गहना र गाजल आदिद्वारा
**भूषयाञ्चक्रुः** = सिँगारे

**वाक्यार्थ–** यशोदाको छोरो जन्मेको कुरा सुनेर गोपीहरू असाध्यै प्रसन्न भए र उनीहरूले आफूलाई सुन्दर वस्त्र, गहना र गाजल आदिले सिँगारे।

**नवकुङ्कुमकिञ्जल्कमुखपङ्कजभूतयः।**
**बलिभिस्त्वरितं जग्मुः पृथुश्रोण्यश्चलत्कुचाः॥ १०॥**

**पदार्थ–**
**नवकुङ्कुमकिञ्जल्कमुखपङ्कज-भूतयः** = अनुहारमा नयाँ कुङ्कुमको तिलक लगाउँदा कमलमा केशर रहे झैँ सुहाएका
**पृथुश्रोण्यः** = ठुला नितम्ब

भएका गोपीहरू
**चलत्कुचाः** = स्तन हल्लाउँदै
**बलिभिः** = विभिन्न उपहारहरू
लिई
**त्वरितं** = छिटो-छिटो
(यशोदाकहाँ)
**जग्मुः** = गए

**वाक्यार्थ–** आफ्नो अनुहारमा नयाँ कुङ्कुमको तिलक लगाउनाले कमलमा केशर रहे झैँ सुशोभित अनुहार देखिएका र ठुला नितम्ब भएका गोपीहरू विभिन्न उपहारहरू लिई स्तन हल्लाउँदै छिटो-छिटो यशोदाकहाँ गए।

**गोप्यः सुमृष्टमणिकुण्डलनिष्ककण्ठ्य-**
**श्चित्राम्बराः पथि शिखाच्युतमाल्यवर्षाः।**
**नन्दालयं सवलया व्रजतीर्विरेजु-**
**र्व्यालोलकुण्डलपयोधरहारशोभाः॥ ११॥**

**पदार्थ–**
**सुमृष्टमणिकुण्डलनिष्ककण्ठ्यः** = उज्ज्वल मणिमय कुण्डल र घाँटीमा सुनको गहनाले युक्त
**चित्राम्बराः** = रङ्गी-चङ्गी कपडा लगाएका
**शिखाच्युतमाल्यवर्षाः** = चुल्ठोबाट फूल खसिरहेका
**सवलयाः** = बाला लगाएका
**व्यालोलकुण्डलपयोधरहार-शोभाः** = (हिँड्नाले) हल्लिएका कानका कुण्डल र स्तनप्रदेशका हारको शोभाले युक्त भएका
**नन्दालयं** = नन्दको घरतिर
**व्रजतीः** = गइरहेका
**गोप्यः** = गोपीहरू
**पथि** = बाटामा
**विरेजुः** = सुशोभित देखिए

**वाक्यार्थ–** कानमा उज्ज्वल मणिमय कुण्डल, घाँटीमा सुनको गहना र रङ्गी-चङ्गी कपडा लगाएका, चुल्ठोबाट फूल खसिरहेका, हातमा बाला लगाएका, हिँड्दा हल्लिएका कानका कुण्डल र स्तनप्रदेशका हारको शोभाले युक्त भएर नन्दको घरतिर गइरहेका गोपीहरू बाटामा सुशोभित देखिए।

**ता आशिषः प्रयुञ्जानाश्चिरं पाहीति बालके।**
**हरिद्राचूर्णतैलाद्भिः सिञ्चन्त्यो जनमुज्जगुः॥ १२॥**

**पदार्थ–**
**चिरं** = लामो समयदेखि
**बालके** = बालकलाई
**पाहि इति** = (हे भगवान् यिनको) रक्षा गर्नुहोस् भन्ने
**आशिषः** = आशिष
**प्रयुञ्जानाः** = दिइरहेका
**ताः** = ती गोपीहरूले
**जनम्** = एक-अर्को मान्छेलाई
**हरिद्राचूर्णतैलाद्भिः** = बेसार, तेल र पानी आदिले
**सिञ्चन्त्यः** = छ्याप्दै
**उज्जगुः** = ठुलो स्वरले गान गरे

**वाक्यार्थ–** (बाटामा हिँड्दाको अवधिभरि) लामो समयसम्म हे भगवान् यिनको रक्षा गर्नुहोस् भन्दै (ती नवजात) बालकलाई आशीर्वाद दिइरहेका गोपीहरूले एक-आपसमा बेसार, तेल, पानी

आदिले छ्यापाछ्याप गर्दै ठुलो स्वरले गीत गाए।

**विवरण–** माथिका चार श्लोकमा भगवान्को जन्मद्वारा गोपिनीहरूमा व्याप्त भएको खुसी र उत्सवको वर्णन गरिएको छ। यसबाट गोपिनीहरूमा भगवान्प्रति अरूको भन्दा विशेष प्रेम भएको देखिन्छ। प्रेममा सधैँ प्रेमीको हितचिन्तन र अहित होला कि भन्ने आशङ्का पनि भइरहन्छ। त्यसैले गोपिनीहरूले श्रीकृष्णलाई आशीर्वाद दिए भनी यहाँ बताइएको छ।

यहाँ **चिरं पाहि** (सधैँ रक्षा गर्नुहोस्) यो पदावलीको विद्वान्हरूले विभिन्न अर्थ गर्नुभएको छ। यहाँ प्रसूति देवतालाई सम्बोधित गरी हे प्रसूति देवता ! यो बच्चालाई सधैँ रक्षा गर्नुहोस् भनी प्रार्थना गएिको हो भन्ने कसैको मत छ। तर कतिपय टीकाकारहरूको मतमा भने भगवान्लाई रक्षा गर्न अरू देवतासँग प्रार्थना गर्दा गोपिनीहरूले भगवान्को स्वरूप नै नजानेको आपत्ति आउँछ। यसैले श्रीकृष्णलाई नै सम्बोधन गरी **चिरं पाहि** भनिएको हो। यसको अर्थ हे श्रीकृष्ण ! तपाईं राजकुलका हुनुभएकाले राजा भई सधैँ प्रजाको रक्षा गरिरहनुहोस् भनी गोपिनीहरूले भनेका हुन् भन्ने कतिपय टीकाकारहरूको मत छ। बल्लभाचार्य लेख्नुहुन्छ– गोपिनीहरूले हाम्रो रक्षा गर्नुहोस् भनी श्रीकृष्णसँग प्रार्थना गरेका हुन्। गोपिनीहरू श्रुतिमन्त्रका अवतार हुन् यसैले श्रीकृष्ण मथुरा जानुहुनेछ भन्ने कुरा उनीहरूलाई थाहा छ। त्यसैले आफूहरूसँग श्रीकृष्णको लामो सम्बन्ध नहुने बुझेका उनीहरूले चिरकालसम्म हाम्रो रक्षा गर्नुहोस् भनी श्रीकृष्णसँग प्रार्थना गरेका हुन्। कतिपय टीकाकारहरूको मतमा भने **पाहि** शब्दको अर्थ रक्षा गर्नुहोस् भन्ने नभई बाँचिरहू भन्ने हो। यसरी श्रीकृष्णको मङ्गलकामना गरी गोपिनीहरूले आपसमा तेल–बेसार, दही आदि छ्याप्दै श्रीकृष्णकै कीर्तन गरेका छन्।

**अवाद्यन्त विचित्राणि वादित्राणि महोत्सवे।**
**कृष्णे विश्वेश्वरेऽनन्ते नन्दस्य व्रजमागते ॥ १३ ॥**

**पदार्थ–**
**विश्वेश्वरे** = संसारका मालिक
**अनन्ते** = अनन्त
**कृष्णे** = भगवान् श्रीकृष्ण
**नन्दस्य** = नन्दको
**व्रजम्** = व्रजमा
**आगते** = आउनुभएपछि
**महोत्सवे** = यो महोत्सवमा
**विचित्राणि** = विभिन्न किसिमका
**वादित्राणि** = बाजाहरू
**अवाद्यन्त** = बजाइए

**वाक्यार्थ–** संसारकै मालिक एवं अनन्त भगवान् श्रीकृष्ण नन्दको घर व्रजमा आउनुभएपछि मनाइएको यस महोत्सवमा विभिन्न किसिमका बाजाहरू बजाइए।

**गोपाः परस्परं हृष्टा दधिक्षीरघृताम्बुभिः।**
**आसिञ्चन्तो विलिम्पन्तो नवनीतैश्च चिक्षिपुः ॥ १४ ॥**

**पदार्थ–**
**हृष्टाः** = असाध्यै रमाएका
**गोपाः** = गोपहरू पनि
**परस्परं** = एकआपसमा
**दधिक्षीरघृताम्बुभिः** = दही, दुध, घिउ र पानीले

**आसिञ्चन्तः** = सेचन गर्दै
**नवनीतैः** = नौनीले
**विलिम्पन्तः** = लेपन गर्दै
**चिक्षिपुः च** = छ्यापे पनि

**वाक्यार्थ–** गोपहरू असाध्यै रमाए र उनीहरू परस्परमा दही, दुध, घिउ र पानीले सेचन गर्दै, नौनी लगाइदिँदै छ्यापाछ्याप पनि गर्न थाले।

**नन्दो महामनास्तेभ्यो वासोऽलङ्कारगोधनम्।**
**सूतमागधवन्दिभ्यो येऽन्ये विद्योपजीविनः॥ १५॥**
**तैस्तैः कामैरदीनात्मा यथोचितमपूजयत्।**
**विष्णोराराधनार्थाय स्वपुत्रस्योदयाय च॥ १६॥**

**पदार्थ–**
**महामनाः** = उदार हृदय भएका
**अदीनात्मा** = मन खिन्न नभएका (प्रसन्न भएका)
**नन्दः** = नन्दले
**विष्णोः** = भगवान् विष्णुको
**आराधनार्थाय** = आराधना एवं
**स्वपुत्रस्य** = आफ्नो छोराको
**उदयाय च** = अभ्युदयका लागि पनि
**सूतमागधवन्दिभ्यः** = पौराणिक, वंशवर्णन गर्ने र स्तुतिपाठ गर्नेहरूलाई
**ये** = जो-जो
**अन्ये** = अरू
**विद्योपजीविनः** = विद्याजीवी थिए
**तेभ्यः** = ती सबैलाई
**वासोऽलङ्कारगोधनम्** = वस्त्र, गहना, गाई, सम्पत्ति
**तैः तैः** = ती-ती
**कामैः** = चाहे अनुसारका वस्तुहरूद्वारा
**यथोचितम्** = यथायोग्य रूपमा
**अपूजयत्** = सम्मान गरे

**वाक्यार्थ–** उदार हृदय भएका नन्दले प्रसन्न भएर भगवान् विष्णुको आराधना र आफ्नो छोराको अभ्युदयका लागि पौराणिकहरू, वंशवर्णन गर्नेहरू र स्तुतिपाठ गर्नेहरूलाई अनि जो-जो अरू विद्याबाट जीविका निर्वाह गर्ने व्यक्तिहरू थिए, उनीहरू सबैलाई चाहे अनुसारका कपडा, गहना, गाई र सम्पत्ति आदि वस्तुहरू दिई सबैको यथायोग्य सम्मान गरे।

**रोहिणी च महाभागा नन्दगोपाभिनन्दिता।**
**व्यचरद् दिव्यवासस्रक्कण्ठाभरणभूषिता॥ १७॥**

**पदार्थ–**
**नन्दगोपाभिनन्दिता** = नन्द र गोपद्वारा सम्मानित
**महाभागा** = सौभाग्यवती
**रोहिणी च** = रोहिणी पनि
**दिव्यवासस्रक्कण्ठाभरणभूषिता** = दिव्य वस्त्र, माला र हार आदिले विभूषित भई
**व्यचरत्** = हिँड्न थालिन्

**वाक्यार्थ–** नन्द र गोपद्वारा सम्मानित भएकी सौभाग्यवती रोहिणी पनि दिव्य वस्त्र, माला र हार आदिले विभूषित भई उत्सवमा सहभागी हुन लागिन्।

**तत आरभ्य नन्दस्य व्रजः सर्वसमृद्धिमान्।**
**हरेर्निवासात्मगुणै रमाक्रीडमभून्नृप ॥ १८ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**ततः आरभ्य** = त्यो वेलादेखि सुरु गरेर
**नन्दस्य** = नन्दको
**व्रजः** = व्रजभूमि
**हरेः निवासात्मगुणैः** = श्रीहरि भगवान्को निवासका कारण श्रेष्ठत्व आदि गुणहरू रहनाले
**सर्वसमृद्धिमान्** = सबै समृद्धिहरूले युक्त र
**रमाक्रीडम्** = लक्ष्मीको क्रीडाभूमि
**अभूत्** = भयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! श्रीहरि भगवान् बस्न थाल्नुभएपछि नन्दको व्रजभूमिमा श्रेष्ठत्व आदि अनेक गुणहरू थपिए। यसैले व्रजभूमि सबै समृद्धिहरूले युक्त र लक्ष्मीको क्रीडाभूमि भयो।

**विवरण–** यस श्लोकमा व्रजभूमि लक्ष्मीजीको विहारस्थान भयो भन्ने बताइएको छ। श्रीकृष्णको निवास भएपछि व्रजमा अनेक सद्गुणहरू आए। जहाँ सद्गुण रहन्छन्, त्यहीँ लक्ष्मीजीको वास हुन्छ। त्यसैले व्रज पनि लक्ष्मीजीले खेल्ने ठाउँ भयो भनिएको छ। सद्गुणहरूको नित्य आश्रयस्थल परमात्मा मात्र हुनुहुन्छ। त्यसैले कसैले आफूमा सद्गुण रहून् भन्ने चाहन्छ भने उसले पहिला आफूमा भगवान्लाई राख्नुपर्दछ। जहाँ श्रीहरि हुनुहुन्छ, त्यहाँ गुणहरू र लक्ष्मीजी पनि स्वतः रहनुहुन्छ– **यतो हरिर्विजयः श्रीर्गुणास्ततः** (श्रीमद्भागवत, ६/११/२०)।

सुबोधिनीकारले यसको अर्थ अर्को प्रकारले गर्नुभएको छ– **हरेः निवासः आत्मा, गुणाश्च तैः**। यहाँ आत्माको अर्थ भगवान्को शरीर भन्ने गरिएको छ। श्रीहरिको निवास भएकाले, उहाँको परमानन्दमय शरीर भएकाले र उहाँका ऐश्वर्य, भक्तवत्सलता आदि अनन्त गुणहरूका कारणले व्रजमण्डल लक्ष्मीजीले खेल्ने ठाउँ भयो। व्रजलीलामा चिन्तामणि, कल्पवृक्ष आदि सबै दिव्य लीलासाधनहरू सूक्ष्मरूपमा रहेका हुन्छन्, त्यसैले व्रज सर्वसमृद्धिले युक्त भएको हो भन्ने विद्वान्हरूको मत छ।

**रमाक्रीडम् अभूत्** यो पदको व्याख्या गर्दा जीवगोस्वामीले परम रमा भनी राधालाई बताउँदै भगवान्सँगै नित्यशक्तिरूपा उहाँको पनि आविर्भाव भएको बताउनुभएको छ। श्रीकृष्ण र श्रीराधाको अभिन्न सम्बन्ध मान्ने श्रीचैतन्यका अनुयायीहरूको मतमा श्रीकृष्ण परब्रह्म हुनुहुन्छ। उहाँमा अनन्त कल्याण गुणहरू अभिन्न रूपले नै रहेका छन्। स्वाभिन्नशक्तिले युक्त परमात्मा जगत्का अभिन्ननिमित्तोपादान कारण हुनुहुन्छ। भगवान् र उहाँको शक्तिको बीच अचिन्त्यभेदाभेद सम्बन्ध छ।

भगवान्मा मुख्य तीन ओटा शक्ति छन्– स्वरूपशक्ति, तटस्थशक्ति र मायाशक्ति। मायाशक्ति बहिरङ्ग शक्ति हो, जसद्वारा भगवान् जड जगत्को रूपमा देखिनुहुन्छ। तटस्थ शक्तिद्वारा परमात्मा अनेक जीवहरूको रूपमा देखिनुहुन्छ। आगोबाट झिल्का निस्के झैँ परमात्माबाट अणुरूप अनन्त जीवहरू निस्कन्छन्। स्वरूपशक्ति चाहिँ एउटै भए पनि सत्, चित् र आनन्दको रूपमा तीन

प्रकारले अभिव्यक्त हुन्छ। सत् रूपमा अभिव्यक्त शक्तिलाई **सन्धिनी**, चित् रूपमा अभिव्यक्त शक्तिलाई **संवित्** र आनन्दरूपमा अभिव्यक्त शक्तिलाई **ह्लादिनी** भनिन्छ। यस सिद्धान्त अनुसार श्रीकृष्णमा निरन्तर मन रमाई ह्लादिनीवृत्तिको सारभूत रति अवस्थामा पुग्नु नै भक्ति हो– **स्वरूपशक्तेः सारभूता ह्लादिनी वृत्तिस्तस्याः एव सारभूतो वृत्तिविशेषो भक्तिः सा च रत्यपरपर्याया** (जीव गोस्वामी, षट्सन्दर्भ)। ह्लादिनीशक्तिको सारभूत रति वृत्तिको मूर्त रूप नै राधा हुन् भन्ने भक्तिरसामृतसिन्धुमा उल्लेख गरिएको छ–

**ह्लादिनी या महाशक्तिः सर्वशक्तिवरीयसी।**
**तत्सारभूतरूपेयं राधा वृन्दावनेश्वरी।।**

यसरी राधालाई अन्तरङ्ग ह्लादिनी शक्तिको पनि सारभूता मानिएको छ। गोपिनीलाई लक्ष्मीजी, भगवान् शङ्कर आदिमा भन्दा पनि बढी भगवत्प्रसाद प्राप्त छ भनी भागवतकै दशम स्कन्ध, नवौँ अध्यायको बीसौँ श्लोकमा बताइएको छ। गोपिनीमध्ये पनि राधा सर्वोत्कृष्ट हुन्। यसैले रमा भनेर लक्ष्मीजीलाई होइन, अपि तु लक्ष्मीजीभन्दा पनि अन्तरङ्ग परम रमारूपी श्रीराधालाई लिनुपर्छ। राधा भगवान्की अन्तरङ्ग एवं सूक्ष्मतम स्वरूपशक्ति भएकीले भगवान्सँगै उनको पनि प्रादुर्भाव हुन्छ। यसरी लक्ष्मीजी र राधा दुबैको अर्थमा व्रजमण्डललाई रमाको खेल्ने ठाउँ भयो भनिएको हो।

## गोपान् गोकुलरक्षायां निरूप्य मथुरां गतः।
## नन्दः कंसस्य वार्षिक्यं करं दातुं कुरूद्वह ॥ १९ ॥

**पदार्थ**–
**कुरूद्वह** = हे कुरुश्रेष्ठ परीक्षित्
**नन्दः** = नन्द
**गोपान्** = गोपहरूलाई
**गोकुलरक्षायां** = गोकुलको रक्षा गर्न
**निरूप्य** = खटाएर
**कंसस्य** = कंसका लागि
**वार्षिक्यं** = वार्षिक
**करं** = कर
**दातुं** = दिन
**मथुरां** = मथुरा
**गतः** = गए

**वाक्यार्थ**– हे परीक्षित् ! यसपछि गोपहरूलाई गोकुलको रक्षा गर्न खटाएर नन्द कंसलाई वार्षिक कर बुझाउन मथुरातिर गए।

## वसुदेव उपश्रुत्य भ्रातरं नन्दमागतम्।
## ज्ञात्वा दत्तकरं राज्ञे ययौ तदवमोचनम्॥ २० ॥

**पदार्थ**–
**वसुदेवः** = वसुदेवले
**भ्रातरं** = भाइ
**नन्दम्** = नन्द
**आगतम्** = आएको
**उपश्रुत्य** = सुनेर
**राज्ञे** = राजालाई
**दत्तकरं** = कर पनि बुझाइसकेको
**ज्ञात्वा** = थाहा पाएर
**तदवमोचनम्** = ती नन्द प्रस्थान गर्ने ठाउँ (नन्द बसेको ठाउँ)
**ययौ** = जानुभयो

**वाक्यार्थ–** भाइ नन्द मथुरा आएको एवं उनले राजालाई कर पनि बुझाइसकेको थाहा पाइसकेपछि वसुदेव पनि नन्द बसेको ठाउँमा जानुभयो।

**टिप्पणी–** नन्द वैश्य र वसुदेव क्षत्रिय भए पनि यी दुई दाजुभाइ हुन्। देवमीढका दुई पत्नी थिए। एउटी पत्नीबाट शूर जन्मिए भने अर्की पत्नीबाट शूरका सौतेला भाइ पनि जन्मिएका थिए। शूरबाट मारिषा नामकी पत्नीमा वसुदेव आदि दश पुत्र जन्मिए भने उनका सौतेला भाइ र वैश्यकन्याबाट नन्द जन्मिए। यसरी शूर र उनका सौतेला भाइबाट जन्मिएकाले नन्द र वसुदेव भाइ-भाइ हुन्। वैश्यकन्याबाट जन्मेकाले नन्द वैश्य भए पनि उनी खास यदुकुलकै थिए, त्यसैले यहाँ उनलाई वसुदेवका भाइ भनिएको हो।

**तं दृष्ट्वा सहसोत्थाय देहः प्राणमिवागतम्।**
**प्रीतः प्रियतमं दोर्भ्यां सस्वजे प्रेमविह्वलः ॥ २१ ॥**

पदार्थ–
**तं** = ती वसुदेवलाई
**दृष्ट्वा** = देखेर
**प्राणम्** = प्राण (चेतना)
**आगतम्** = आउँदा
**देहः इव** = शरीर उठे झैं
**सहसा** = झटपट
**उत्थाय** = उठेर
**प्रीतः** = असाध्यै खुसी भएका
**प्रेमविह्वलः** = प्रेमविह्वल नन्दले
**प्रियतमं** = ज्यादै प्रिय वसुदेवलाई
**दोर्भ्यां** = दुबै हातले
**सस्वजे** = अङ्कमाल गर्नुभयो

**वाक्यार्थ–** जसरी चेतना आउँदा शरीर उठ्छ त्यसै गरी वसुदेवलाई देखेर नन्द झटपट उठे। उनले असाध्यै खुसी र प्रेमविह्वल भई आफ्ना प्रियजन वसुदेवलाई दुबै हातले अङ्कमाल गरे।

**पूजितः सुखमासीनः पृष्ट्वानामयमादृतः।**
**प्रसक्तधीः स्वात्मजयोरिदमाह विशाम्पते ॥ २२ ॥**

पदार्थ–
**विशाम्पते** = हे नरपति परीक्षित्
**पूजितः** = पूजा गरिएका
**सुखम्** = सुखपूर्वक
**आसीनः** = बसेका
**अनामयम्** = कुशलताको विषयमा
**पृष्ट्वा** = सोधेर
**आदृतः** = सत्कार गरिएका र
**स्वात्मजयोः** = आफ्ना दुई छोरामा
**प्रसक्तधीः** = मन लगाएका वसुदेवले
**इदम्** = यसो
**आह** = भन्नुभयो

**वाक्यार्थ–** हे नरपति परीक्षित्! नन्दद्वारा पूजित भई सुखपूर्वक आसनमा बसेका वसुदेवलाई नन्दले कुशलतासम्बन्धी प्रश्न गरेर उहाँको सत्कार गरेपछि आफ्ना दुई छोरा बलराम र श्रीकृष्णको विषयमा चिन्तन गरिरहेका वसुदेवले यसो भन्नुभयो।

**दिष्ट्या भ्रातः प्रवयस इदानीमप्रजस्य ते।**
**प्रजाशाया निवृत्तस्य प्रजा यत् समपद्यत ॥ २३ ॥**

पदार्थ–
**भ्रातः** = हे भाइ नन्द
**प्रवयसः** = उमेर ढल्किसकेका
**अप्रजस्य** = सन्तान नभएका र
**प्रजाशायाः** = सन्ततिको
आशाबाट पनि
**निवृत्तस्य** = हटिसकेका
**ते** = तिम्रो
**इदानीम्** = अहिले
**दिष्ट्या** = सौभाग्यले
**यत्** = जब कि
**प्रजा** = सन्तान
**समपद्यत** = उत्पन्न भयो

**वाक्यार्थ–** हे भाइ नन्द ! उमेर ढल्किसक्दा पनि कुनै सन्तान नजन्मेकाले तिम्रो सन्तान पाउने आशा पनि हराइसकेको थियो, तर अहिले सौभाग्यले तिम्रो सन्तान भयो।

**दिष्ट्या संसारचक्रेऽस्मिन् वर्तमानः पुनर्भवः।**
**उपलब्धो भवानद्य दुर्लभं प्रियदर्शनम्॥ २४॥**

पदार्थ–
**दिष्ट्या** = सौभाग्यवश नै
**अद्य** = आज
**अस्मिन्** = यो
**संसारचक्रे** = संसारको चक्रमा
**वर्तमानः** = रहेका
**भवान्** = तिमी
**पुनर्भवः** = पुनर्जन्म झैँ गरी
**उपलब्धः** = भेटियौ (निश्चय नै)
**प्रियदर्शनम्** = प्रियजनहरूको दर्शन
**दुर्लभं** = दुर्लभ हुन्छ

**वाक्यार्थ–** सौभाग्यवश नै आज यस संसारको चक्रमा रहेका तिमीसँग पुनर्जन्म भए झैँ गरी भेट भयो। किनभने प्रियजनहरूसँगको भेट अत्यन्त दुर्लभ हुन्छ।

**नैकत्र प्रियसंवासः सुहृदां चित्रकर्मणाम्।**
**ओघेन व्यूह्यमानानां प्लवानां स्रोतसो यथा॥ २५॥**

पदार्थ–
**चित्रकर्मणाम्** = अनेकथरी कर्म (प्रारब्ध) भएका
**सुहृदां** = प्रिय जन (आफन्त) हरूको
**एकत्र** = एकै ठाउँमा
**प्रियसंवासः** = प्रिय मिलन
**न** = हुँदैन
**यथा** = जसरी
**स्रोतसः** = नदीको
**ओघेन** = प्रवाहद्वारा
**व्यूह्यमानानां** = बगाइएका
**प्लवानाम्** = डुङ्गा आदिको हुँदैन

**वाक्यार्थ–** जसरी नदीको प्रवाहद्वारा बगाइएका डुङ्गाहरू एकै ठाउँमा रहन सक्दैनन्, त्यसै गरी अनेकथरी प्रारब्ध भएका आफन्तहरूको एकै ठाउँमा मिलन पनि भइरहँदैन।

**कच्चित् पशव्यं निरुजं भूर्यम्बुतृणवीरुधम्।**
**बृहद्वनं तदधुना यत्रास्से त्वं सुहृद्वृतः॥ २६॥**

पदार्थ–
**यत्र** = जहाँ
**त्वं** = तिमी
**सुहृद्वृतः** = प्रियजनहरूले सहित भई
**आस्से** = बस्छौ

**तत्** = त्यो
**बृहद्वनं** = बृहद्वन (महावन)
**अधुना** = अहिले
**कच्चित्** = के
**निरुजं** = रोगले रहित
**भूर्यम्बुतृणवीरुधम्** = प्रशस्त पानी, घाँस र लहरा आदिले युक्त र
**पशव्यम्** = पशुहरूका लागि उपयुक्त छ त

**वाक्यार्थ–** जहाँ तिमी प्रियजनहरूको साथमा बस्छौ, त्यो बृहद्वन अहिले रोगरहित छ त ? त्यहाँ पानी, घाँस र लहराहरू त प्रशस्त छन् ? के त्यो ठाउँ पशुहरूका लागि उपयुक्त छ त ?

**भ्रातर्मम सुतः कच्चिन्मात्रा सह भवद्व्रजे।**

**तातं भवन्तं मन्वानो भवद्भ्यामुपलालितः॥ २७॥**

पदार्थ–
**भ्रातः** = हे भाइ
**मात्रा सह** = आफ्नी आमा रोहिणीसँग
**भवद्व्रजे** = तिम्रो व्रजभूमिमा
**भवद्भ्याम्** = तिमी दुईद्वारा नै
**उपलालितः** = पालन गरिएको र
**भवन्तं** = तिमीलाई नै
**तातं** = बुबा
**मन्वानः** = मानिरहेको
**मम** = मेरो
**सुतः** = छोरो बलराम
**कच्चित्** = के सन्चै छ

**वाक्यार्थ–** हे भाइ ! आफ्नी आमा रोहिणीसँग तिम्रो व्रजभूमिमा रहेको र तिमीहरू नन्द-यशोदाद्वारा नै पालिएकाले तिमीलाई नै आफ्नो बुबा मानिरहेको मेरो छोरो बलराम सन्चै छ त ?

**पुंसस्त्रिवर्गो विहितः सुहृदो ह्यनुभावितः।**

**न तेषु क्लिश्यमानेषु त्रिवर्गोऽर्थाय कल्पते॥ २८॥**

पदार्थ–
**सुहृदः** = आफन्तहरूसँग
**अनुभावितः** = सँगै उपभोग गरिएको
**त्रिवर्गः हि** = धर्म, अर्थ र काम नै
**पुंसः** = मानिसको लागि
**विहितः** = शास्त्रमा विधान गरिएको हो
**तेषु** = ती आफन्तहरू
**क्लिश्यमानेषु** = दुःखी हुँदा
**त्रिवर्गः** = धर्म, अर्थ र कामको समूह
**अर्थाय** = प्रयोजन सफल पार्न
**न कल्पते** = सफल हुँदैन

**वाक्यार्थ–** आफन्तहरूसँग सँगै उपभोग गरिने धर्म, अर्थ र काम नै मानिसहरूको लागि शास्त्रमा विधान गरिएको हो। आफन्तहरू दुःखी रहन्छन् भने ती धर्म, अर्थ र काम केही पनि काम लाग्ने हुँदैनन्।

**नन्द उवाच** (नन्दले भने)

**अहो ते देवकीपुत्राः कंसेन बहवो हताः।**

**एकावशिष्टावरजा कन्या सापि दिवं गता॥ २९॥**

पदार्थ–
**अहो** = अहो ! दुःखको कुरो
**कंसेन** = कंसद्वारा

**ते** = तपाईंका
**देवकीपुत्राः** = देवकीका छोराहरू
**बहवः** = धैरै नै
**हताः** = मारिए
**एका** = एउटी
**अवरजा** = कान्छी
**कन्या** = छोरी
**अवशिष्टा** = बाँकी रहेकी थिइन्
**सा अपि** = ती पनि
**दिवं गता** = स्वर्ग गइन्

**वाक्यार्थ–** अहो ! दुःखको कुरो, कंसले तपाईं र देवकीका धैरै छोराहरूलाई मार्‍यो। एउटी कान्छी छोरी बाँकी रहेकी थिइन्, ती पनि स्वर्ग गइन्।

**नूनं ह्यदृष्टनिष्ठोऽयमदृष्टपरमो जनः।**
**अदृष्टमात्मनस्तत्त्वं यो वेद न स मुह्यति॥ ३०॥**

पदार्थ–
**नूनं** = निश्चय नै
**अयम्** = यो
**जनः हि** = मान्छे त
**अदृष्टनिष्ठः** = भाग्यमा नै आश्रित र
**अदृष्टपरमः** = भाग्यद्वारा नै नियन्त्रित हुन्छ
**आत्मनः** = आफ्नो सुखदुःखमा
**अदृष्टम्** = भाग्यलाई नै
**तत्त्वं** = मुख्य कारणको रूपमा
**यः** = जसले
**वेद** = बुझ्दछ
**सः** = त्यो व्यक्ति
**न मुह्यति** = मोहमा पर्दैन

**वाक्यार्थ–** साँच्चै मान्छे त भाग्यमा नै आश्रित छ र त्यसैद्वारा नियन्त्रित हुन्छ। आफ्नो सुखदुःखमा जसले भाग्यलाई नै मुख्य कारणको रूपमा बुझ्दछ, त्यो व्यक्ति सुखदुःख आदिबाट मोहित हुँदैन।

**वसुदेव उवाच** (वसुदेवले भन्नुभयो)

**करो वै वार्षिको दत्तो राज्ञे दृष्टा वयं च वः।**
**नेह स्थेयं बहुतिथं सन्त्युत्पाताश्च गोकुले॥ ३१॥**

पदार्थ–
**वः** = तिमीहरूद्वारा
**राज्ञे** = राजालाई
**वार्षिकः** = वार्षिक
**करः** = कर
**दत्तः** = बुझाइयो
**वयं च** = हामीहरू पनि
**दृष्टाः** = देखियौं (भेटियौं)
**गोकुले च** = गोकुलमा चाहिँ
**उत्पाताः** = उत्पातहरू
**सन्ति** = भइरहेका छन्
**वै** = त्यसैले
**इह** = यहाँ
**बहुतिथं** = धैरै दिनसम्म
**न स्थेयं** = बस्नु उपयुक्त छैन

**वाक्यार्थ–** तिमीहरूले राजालाई वार्षिक कर बुझाइसक्यौ। हामीसँग पनि देखभेट भयो। गोकुलमा ठुला उत्पातहरू भइरहेका छन् त्यसैले अब धैरै दिन यहाँ बसिरहनु उपयुक्त छैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति नन्दादयो गोपाः प्रोक्तास्ते शौरिणा ययुः।**
**अनोभिरनडुद्युक्तैस्तमनुज्ञाप्य गोकुलम्॥ ३२॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**शौरिणा** = वसुदेवद्वारा
**प्रोक्ताः** = बताइएका
**ते** = ती
**नन्दादयः** = नन्द आदि
**गोपाः** = गोपहरू
**तम्** = ती वसुदेवसँग
**अनुज्ञाप्य** = अनुमति लिएर
**अनडुद्युक्तैः** = गोरुहरू युक्त (गोरुले तान्ने)
**अनोभिः** = गाडाहरूका माध्यमले
**गोकुलम्** = गोकुल
**ययुः** = गए

**वाक्यार्थ–** यसप्रकार वसुदेवद्वारा बताइएका ती नन्द आदि गोपहरू वसुदेवसँग अनुमति लिई गोरुगाडाहरूमाथि चढी गोकुलतिर गए।

**विशिष विवरण–** श्रीमद्भागवतको दशम स्कन्ध निरोधस्कन्ध हो। पाणिनीय व्याकरण अनुसार आवरण गरिदिनु या ढाकिदिनु भन्ने अर्थ भएको **रुधिर्** धातुबाट नि उपसर्ग लाग्दा निरोध शब्द बन्दछ। जीवात्मा परमात्माद्वारा ढाकिई त्यहीँ बन्द हुनु नै निरोध शब्दको अर्थ हुन्छ। यसको पाँचौं अध्यायदेखि भगवान् श्रीकृष्णका विशेष लीलाहरूको वर्णन सुरु हुन्छ। दशम स्कन्धमा यी लीलाहरूमा भगवान्ले सबैथरी भक्तहरूको मनलाई आफूमा निरुद्ध गर्नुभएको देखाइएको छ। जीवात्मा आफ्ना शक्ति वा उपाधिहरूको साथमा परमात्मामा लीन हुनु नै निरोध हो, **निरोधोऽस्यानुशयनं आत्मनः सह शक्तिभिः** (भागवत, २/२०/६)। वेदान्तको प्रक्रिया अनुसार निरोध भनेको मन अखण्डाकार वृत्तिको रूपमा आत्मामा लागेको अवस्था हो। अखण्डाकार वृत्तिको उदय हुनुभन्दा अघि मनमा अनेक कर्मसंस्कारहरू रहेका हुन्छन्, त्यही मनको आत्मामा निरोध भएपछि भने जीव तत्क्षण उपाधिगत जीवभावलाई छाडी ब्रह्म भइहाल्दछ। यसै कारणले निरोधस्कन्ध पछि मुक्तिस्कन्ध आउँछ। मुक्ति भनेको अन्यथा रूपलाई छाडी आफ्नो स्वरूपमा रहनु हो– **मुक्तिर्हित्वान्यथारूपं स्वरूपेण व्यवस्थितिः** (भागवत, २/१०/६)। जब चित्तको निरोध हुन्छ तब त्यो चित् ब्रह्मरूपमा प्रकाशित भइहाल्दछ। वेदान्तको प्रक्रिया अनुसार पहिले अन्तःकरणरूप उपाधिको आत्मामा निरोध हुन्छ र उपाधिरूप बन्धनको निवृत्तिपछि नित्यमुक्त स्वरूपमा आत्माको प्रकाश हुन्छ। यसरी अन्तःकरणका धर्म (कर्तृत्व आदि)को निरोध अनि अकर्ता र अभोक्ता स्वरूपमा आत्माको प्रकाश गरी निरोध र मुक्तिको तारतम्य देखिन्छ।

भक्तिको प्रक्रियामा भने निरोधको अर्थ अलि फरक किसिमको हुन्छ। यहाँ शक्ति वा उपाधि भन्नाले जीवभाव या कर्तृत्व, भोक्तृत्व आदिलाई नलिई इन्द्रिय, मन आदिलाई लिनुपर्दछ। आफ्ना सबै इन्द्रिय, मन आदिको साथमा भक्त भगवान्मा हराउँछ। उसका सबै इन्द्रियले भगवान्कै रसास्वादन गरेको या उसको मन भगवान्मैं एकतान भई हराएको अवस्था नै निरुद्धावस्था हो। सुबोधिनीकार वल्लभाचार्यले यो निरोधलीलालाई पुष्टिमार्ग भन्नुभएको छ। उहाँका अनुसार मर्यादाभक्तिमा शास्त्रीय नियम, साधना आदिको अपेक्षा हुन्छ र यसमा भक्तको प्रयास मुख्य रहन्छ भने पुष्टिभक्तिमा भगवान्को अहैतुक अनुग्रह नै मुख्य रहन्छ। भनिएको पनि छ– **पोषणं तदनुग्रहः** (भागवत, २/१०/४)। यसमा मर्यादा, नियम, प्रयास आदि सबैलाई छाडी केवल भगवान्मा शरणागत हुनु नै मुख्य छ। त्यसैले वल्लभाचार्य लेख्नुहुन्छ– **पुष्टिमार्गोऽनुग्रहैक-**

**साध्यः प्रमाणमार्गाद् विलक्षणः** (ब्रह्मसूत्र, अणुभाष्य, ४/४/४९)। पुष्टिमार्गमा भगवान् आफ्नै कृपाद्वारा भक्तहरूलाई आफूमा निरुद्ध गर्नुहुन्छ। दशम स्कन्धका यी लीला प्रसङ्गहरूमा पनि भगवान्‌ले अनेक उपायले अनेक संस्कार एवं मन भएका अनेक अधिकारीहरूलाई आफूमा निरोध गर्नुभएको छ।

वल्लभाचार्यले पाँचौं अध्यायदेखि सूर्यग्रहणमा नन्द-वसुदेव र गोपिनी-श्रीकृष्णको सम्मिलन भएसम्मका जम्मा सतहत्तर अध्यायलाई भगवान्‌को निरोधलीला भनी विभाग गर्नुभएको छ। उहाँले अघासुरवधदेखि ब्रह्मस्तुतिसम्मका तीन अध्यायलाई पद्मपुराणमा प्रसिद्ध कथा अनुसार सापटी लिइएको बताई यिनलाई छुट्टै व्याख्या गर्नुभएको छ। तर बाह्रदेखि पन्ध्रसम्मका तीन अध्यायलाई कुमार र पौगण्ड अवस्थाबीचको सन्धिलीलाको रूपमा व्याख्या गर्नु उचित देखिन्छ। सतहत्तर अध्यायमा भगवान्‌ले निरोध लीला गर्नुको तात्पर्य यसप्रकार छ— भगवान्‌का छ नित्य ऐश्वर्य छन् र एउटा स्वयं परमात्मा हुनुहुन्छ। एघार इन्द्रियद्वारा भगवान् र उहाँका नित्यविभूति ऐश्वर्य, धर्म, यश, श्री, ज्ञान र वैराग्य यी सबैको छुट्टाछुट्टै आस्वाद हुँदा यिनको सङ्ख्या सतहत्तर पुग्छ। यी लीला पनि सात्त्विक, राजस र तामस गरी तीन प्रकारका छन्। पहिले अठ्ठाईस अध्यायमा तामसनिरोध, त्यसपछि फेरि अठ्ठाईस अध्यायमा राजसनिरोध र एक्काईस अध्यायमा सात्त्विकनिरोध बताइएको छ। यसरी हेर्दा पाँचौं अध्यायदेखि पैंतीसौं अध्यायसम्म तामसनिरोध, त्यसपछि त्रिसट्ठी अध्यायसम्म राजस र चौरासी अध्यायसम्म सात्त्विकनिरोधको लीला पाइन्छ। सत्त्वगुणमा ज्ञान आदि शास्त्रीय मार्गान्तरको स्फूर्ति रहन्छ र रजोगुणमा अन्य लौकिक कर्महरूको विक्षेप रहन्छ। तमोगुणमा त मन मूढतापूर्वक जुन वस्तुमा लाग्छ, त्योभन्दा भिन्न वस्तुको स्फूर्ति कसै गरी पनि हुँदैन। भगवान् श्रीकृष्णले आफ्नो ऐश्वर्य, भगवत्ता आदिको बोध गराउन खोज्दा पनि गोपिनीहरूमा त्यसको स्फूर्ति नभई केवल प्रेमको मात्र स्फुरण हुन्थ्यो। यसैले अन्तरङ्ग प्रेमको प्रसङ्गलाई यहाँ तामसनिरोध भनिएको हो। श्रीकृष्णको प्रेममा यति मुग्ध हुनु कि उहाँको भगवत्तालाई नै बिर्सनु भन्ने अर्थमा यहाँ तामस शब्दको प्रयोग भएको हो। यसपछि उषाविवाह भएको बैसट्ठी अध्यायसम्मका लीलामा भगवान् श्रीकृष्णमा प्रेम र भगवत्ता दुबैको स्फुरण भएको पाइन्छ। तापनि यी लीलाहरूमा श्रीकृष्णसँग लौकिक पति-पत्नी आदि सम्बन्धद्वारा भएको प्रेमको स्फुरण नै मुख्य रूपमा पाइन्छ। त्यसपछि चौरासी अध्यायसम्मका लीलामा भने सबैको हृदयमा श्रीकृष्णको भगवत्ताकै स्फुरण रहेको पाइन्छ। उहाँलाई भगवान् मानेर नै भक्ति गरिएको लीलाप्रसङ्गलाई सात्त्विक निरोध भनिएको छ। आन्तरिक प्रेमसम्बन्धद्वारा, पतिपत्नी आदि दैहिक सम्बन्धद्वारा र कालजयी पराक्रम एवं ऐश्वर्य प्रदर्शनद्वारा आफ्ना प्रेमी, आफन्त र साथका राजाहरू सबैको हृदयलाई भगवान्‌ले आफूमा निरोध गर्नुभएको छ।

तामसनिरोध पनि बाललीला, मध्यलीला, प्रौढलीला र कामलीला भनी चार भागमा विभक्त छ। बाललीलामा वृन्दावन पुग्नुसम्मका सात अध्याय छन्। मध्यलीलामा शरद्वर्णनसम्मका सात अध्याय, प्रौढलीलामा नन्दमोचनसम्मका सात अध्याय र कामलीलामा महारास र युगलगीतसम्मका सात अध्याय गरी जम्मा अठ्ठाईस अध्याय पुग्छन्। बाललीलामा पनि सात थरी स्वभाव भएकाहरूलाई सात प्रकारले निरोध गरिएको छ। पहिलो पाँचौं अध्यायमा

नन्दोत्सव मनाउँदा उत्सवद्वारा सबै गोपिनीको मन श्रीकृष्णमा निरुद्ध भएको छ। अर्को अध्यायमा आश्चर्यभावद्वारा निरोध देखाइएको छ। त्यहाँ मरेकी पूतना देख्दा नन्द आदि विस्मयान्वित भए (भागवत, १०/६/३१) र पूतनाको शरीरबाट दिव्य सुगन्ध आउँदा र बालकहरूबाट पूतनामृत्युको कुरा सुन्दा सबै विस्मित भए (भागवत, १०/६/४२) भनी आश्चर्यद्वारा सबैको मन श्रीकृष्णमा निरुद्ध भएको देखाइएको छ। अर्को अध्यायमा चाहिँ कोमल पाउद्वारा गाडा ध्वस्त गर्नु, भार बढेर तृणावर्तले पनि उचाल्न नसक्ने बन्नु, अनि तृणावर्तलाई मार्नु र माता यशोदालाई विश्वरूप देखाउनु आदि अलौकिक प्रभावद्वारा अन्तःकरणको निरोध भएको पाइन्छ। आठौँ अध्यायमा पुग्दा श्रीकृष्णले दही–नौनी चोर्ने, ठेकी फुटाउने र माटो खाने आदि चकचक गरी सबैको मन आफूमा निरोध गर्नुभएको छ। नवौँ अध्यायमा ठेकी फोरी भाग्ने, रुने, ओखलमा बाँधिने आदि लीलाद्वारा यशोदा र गोपिनीहरूको मन निरोध गरेको देखिन्छ। दशौँ अध्यायमा भगवत्तत्त्वलाई जानी नलकूबर र मणिग्रीवले उहाँको स्तुति गरेका छन् र आफ्ना सबै इन्द्रिय भगवान्मैं लागिरहून् भन्ने प्रार्थना गरेका छन्। भगवत्स्वरूपको ज्ञानद्वारा भगवान्मा अन्तःकरणको निरोध हुने प्रसङ्ग यहाँ देखाइएको छ। अन्तिम एघारौँ अध्यायमा भने श्रीकृष्णमाथि आपत्ति आइपर्ने शङ्काले सम्पूर्ण गाउँवासीले आफ्ना घर–जमिन छाडी वृन्दावनमा बसाइँ सर्ने उद्यम गरेको देखाई सबैको मन निरुद्ध भएको जनाइएको छ। यसरी उत्सव, आश्चर्य, अलौकिक भाव, उपद्रव, स्त्रीस्वभाव, स्वरूपज्ञान र महान् उद्यमद्वारा मन भगवान्मा निरुद्ध भएको लीला बाललीलाका सात अध्यायमा बताइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**नन्दवसुदेवसङ्गमो नाम पञ्चमोऽध्यायः ॥ ५ ॥**

# अथ षष्ठोऽध्यायः

## भगवान् श्रीकृष्णद्वारा पूतनाको स्तनपान

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**नन्दः पथि वचः शौरेर्न मृषेति विचिन्तयन्।**

**हरिं जगाम शरणमुत्पातागमशङ्कितः॥ १॥**

**पदार्थ–**
**पथि** = बाटोमा
**शौरेः** = शूरपुत्र वसुदेवको
**वचः** = वचन
**न मृषा इति** = झुटो हुँदैन भन्ने
**विचिन्तयन्** = विचार गर्दै
**उत्पातागमशङ्कितः** = उत्पात हुने आशङ्कामा परेका
**नन्दः** = नन्द
**हरिं** = भगवान् श्रीहरिकै
**शरणम्** = शरणमा
**जगाम** = गए

**वाक्यार्थ–** मथुरा जाँदा-जाँदै बाटामा वसुदेवको वचन व्यर्थ हुँदैन भन्ने विचार गरिरहेका नन्दलाई गोकुलमा केही न केही उत्पात हुने शङ्का भयो। त्यसैले उनी मनमनै भगवान् श्रीहरिकै शरणमा गए।

**कंसेन प्रहिता घोरा पूतना बालघातिनी।**

**शिशूंश्चचार निघ्नन्ती पुरग्रामव्रजादिषु॥ २॥**

**पदार्थ–**
**कंसेन** = कंसद्वारा
**प्रहिता** = पठाइएकी
**घोरा** = क्रूर र
**बालघातिनी** = बच्चाहरूलाई मार्ने
**पूतना** = पूतना राक्षसी
**पुरग्रामव्रजादिषु** = सहर, गाउँ र गोठालाहरूका बस्तीमा
**शिशून्** = बच्चाहरूलाई
**निघ्नन्ती** = मार्दै
**चचार** = घुमी

**वाक्यार्थ–** कंसद्वारा पठाइएकी बालकहरूलाई मार्ने क्रूर राक्षसी पूतना सहर, गाउँ र गोठालाहरूका बस्तीमा रहेका बच्चाहरूलाई मार्दै घुम्न लागी।

**न यत्र श्रवणादीनि रक्षोघ्नानि स्वकर्मसु।**

**कुर्वन्ति सात्वतां भर्तुर्यातुधान्यश्च तत्र हि॥ ३॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**यत्र** = जहाँ
**स्वकर्मसु** = आ-आफ्नो काम गरिरहँदा (मानिसहरू)
**रक्षोघ्नानि** = राक्षसलाई नष्ट गर्ने
**सात्वतां** = साधुहरूका
**भर्तुः** = स्वामी भगवान्का
**श्रवणादीनि** = नामश्रवण आदि
**न कुर्वन्ति** = गर्दैनन्
**तत्र च** = त्यहाँ नै
**यातुधान्यः** = राक्षसीहरू हुन्छन्

**वाक्यार्थ–** जहाँ आ-आफ्नो काम गरिरहँदा मानिसहरू राक्षसहरूलाई नष्ट गर्ने भगवान्‌का नामहरूको श्रवण आदि गरिरहँदैनन्, त्यहीँ नै यस्ता राक्षसीहरू रहन सक्छन्।

**विवरण–** यस श्लोकमा जहाँ आसुरी प्रभावलाई नष्ट गर्ने भगवान्‌का दिव्य चरित्रहरू गाइँदैनन्, त्यहीँ राक्षस-राक्षसीहरूको प्रभाव रहन्छ भनी बताइएको छ। यसको व्याख्यामा वंशीधर लेख्नुहुन्छ– दृष्ट-अदृष्ट अनेक कर्महरूमा लागेका मानिसहरू यदि भगवान्‌का चरित्रहरूको कीर्तन गर्दछन् भने गौणरूपमा गरिएको कीर्तनबाट पनि दुष्टहरू नष्ट हुन्छन्। झन् भगवच्चरित्रलाई प्रधानरूपमा नै जहाँ कीर्तन गरिन्छ, त्यहाँ त ती असुरहरूको प्रवेशै हुन सक्दैन। अझ केवल भगवच्चरित्रको मात्र जहाँ वर्णन हुन्छ, त्यहाँ त झन् तिनीहरूको प्रभाव होला कि भन्ने शङ्का गर्नु पनि आवश्यक छैन। किनभने भगवान्‌का चरित्रहरूले राक्षस-राक्षसीहरूलाई नष्ट गरिदिन्छन्।

बल्लभाचार्य लेख्नुहुन्छ– वेदमन्त्रहरूले पनि राक्षस-राक्षसीहरूलाई नष्ट गरिदिन्छन् तर स्वाध्याय, व्रताचरण आदिबाट शक्तियुक्त भइरहेका मन्त्रहरू मात्र त्यसमा समर्थ हुन्छन्। फेरि आगन्तुक मन्त्र आदिले आगन्तुक दोषहरूलाई मात्र हटाउन सक्छन्, सहज दोषलाई हटाउन सक्दैनन्। सहज दोषलाई हटाउन त भगवान्‌का रक्षोनाशक लीलाचरित्र र नामश्रवण मात्रै समर्थ हुन्छन्।

**सा खेचर्येकदोपेत्य पूतना नन्दगोकुलम्।**
**योषित्वा माययात्मानं प्राविशत् कामचारिणी ॥ ४ ॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**कामचारिणी** = इच्छा अनुसार चल्ने
**खेचरी** = आकाशमा हिँड्ने
**सा** = त्यस्ती
**पूतना** = पूतना
**नन्दगोकुलम्** = नन्दको गोकुलमा
**उपेत्य** = पुगेर
**मायया** = मायाद्वारा
**आत्मानं** = आफूलाई
**योषित्वा** = सुन्दरी स्त्री बनाएर
**प्राविशत्** = पसी

**वाक्यार्थ–** इच्छा अनुसार आकाशमा उड्ने त्यस्ती पूतना एक दिन नन्दको गोकुलमा पुगेर मायाद्वारा आफूलाई सुन्दरी स्त्री बनाई त्यहाँ भित्र पसी।

**विवरण–** यस श्लोकमा पूतना गोकुलमा कसरी पसी भनी बताइएको छ। पद्मपुराणको उत्तरखण्डमा **भाद्रासितचतुर्दश्यां नन्दजः पूतनामहन्** भनिएको छ, यसअनुसार भाद्र कृष्णचतुर्दशीको दिन अश्लेषा नक्षत्रमा ६ दिनको हुँदा भगवान्‌ले पूतना मार्नुभएको देखिन्छ। बल्लभाचार्य लेख्नुहुन्छ– नन्द विशुद्ध सत्त्वरूप र गाई धर्मरूप भएकाले ती दुबै नभएको वेलामा पूतना नन्दगोकुलमा आएकी थिई। नन्द मथुरातर्फ र गाई वनमा गएको वेलामा पनि राक्षसी रूपले भने ऊ व्रजमा छिर्न सकिन। सत्त्व र धर्मको सामु आसुरी प्रवृत्तिको प्रवेश हुन सक्दैन। त्यसैले उसले आफ्नो राक्षसी रूपलाई छोप्न गोपिनीहरूकै रूपको आश्रय लिई र ऊ गोकुलमा पसी।

**तां केशबन्धव्यतिषक्तमल्लिकां बृहन्नितम्बस्तनकृच्छ्रमध्यमाम् ।**
**सुवाससं कम्पितकर्णभूषणत्विषोल्लसत्कुन्तलमण्डिताननाम् ॥ ५ ॥**
**वल्गुस्मितापाङ्गविसर्गवीक्षितैर्मनो हरन्तीं वनितां व्रजौकसाम् ।**
**अमंसताम्भोजकरेण रूपिणीं गोप्यः श्रियं द्रष्टुमिवागतां पतिम् ॥ ६ ॥**

**पदार्थ–**
**केशबन्धव्यतिषक्तमल्लिकां** = चुल्ठोमा बेलीको फूल सिउरेकी
**बृहन्नितम्बस्तनकृच्छ्रमध्यमाम्** = ठुला–ठुला नितम्ब र स्तन अनि पातलो कम्मर भएकी
**सुवाससं** = राम्रो वस्त्र लगाएकी
**कम्पितकर्णभूषणत्विषा** = कानको हल्लिइरहेको कुण्डलको चमकले
**उल्लसत्कुन्तलमण्डिताननाम्** = कपाल चम्केकाले सुन्दर अनुहार भएकी अनि
**अम्भोजकरेण** = हातमा कमलपुष्प लिई
**वल्गुस्मितापाङ्गविसर्गवीक्षितैः** = मधुर मुस्कानले युक्त कर्के हेराइद्वारा
**व्रजौकसाम्** = व्रजवासीहरूको
**मनः** = मनलाई
**हरन्तीं** = चोरिरहेकी
**रूपिणीं** = असाध्यै सुन्दरी
**तां वनितां** = ती स्त्रीलाई
**गोप्यः** = गोपीहरूले
**पतिम्** = आफ्ना पति श्रीहरिलाई
**द्रष्टुम्** = हेर्न
**आगतां** = आएकी
**श्रियं इव** = लक्ष्मी झैं
**अमंसत** = ठाने

**वाक्यार्थ–** चुल्ठोमा बेलीको फूल सिउरेकी, ठुला नितम्ब र स्तन अनि पातलो कम्मर भएकी एवं राम्रो वस्त्र लगाएकी त्यस सुन्दरीका कानका कुण्डल हल्लिँदा त्यसको चमकले अनुहारतिर लत्रिएका कपाल चम्किनाले अनुहारको शोभा झन् बढेको थियो। उसले हातमा कमलको फूल लिएकी थिई र मधुर हाँसोले युक्त कर्के हेराइले सम्पूर्ण व्रजवासीहरूको मनै हरण गरेकी थिई। त्यस्ती सुन्दरी स्त्रीलाई देखेर गोपीहरूले आफ्ना पति श्रीहरिलाई भेट्न साक्षात् लक्ष्मी नै आएको झैं ठाने।

**बालग्रहस्तत्र विचिन्वती शिशून् यदृच्छया नन्दगृहेऽसदन्तकम् ।**
**बालं प्रतिच्छन्ननिजोरुतेजसं ददर्श तल्पेऽग्निमिवाहितं भसि ॥ ७ ॥**

**पदार्थ–**
**तत्र** = त्यस गोकुलमा
**शिशून्** = बच्चाहरूलाई
**विचिन्वती** = खोज्दै
**यदृच्छया** = स्वेच्छाले
**नन्दगृहे** = नन्दको घरमा (पुगेकी)
**बालग्रहः** = बालकहरूका लागि दुष्ट ग्रह भएकी पूतनाले
**तल्पे** = ओछ्यानमा
**भसि** = खरानीमा
**आहितं** = छोपेर राखिएको
**अग्निम् इव** = आगो झैं
**प्रतिच्छन्ननिजोरुतेजसं** = आफ्नो प्रचण्ड तेजलाई लुकाउनुहुने
**असदन्तकम्** = दुष्टहरूको नाश गर्ने
**बालं** = बालक श्रीकृष्णलाई
**ददर्श** = देखी

**वाक्यार्थ–** बालकहरूका लागि दुष्ट ग्रह भएकी पूतना गोकुलमा बच्चाहरूलाई खोज्दै स्वेच्छाले नन्दको घरमा पुगी। त्यहाँ खरानीले ढाकिएको आगो झैँ आफ्नो प्रचण्ड तेजलाई लुकाउनुहुने दुष्टनाशक बालक श्रीकृष्णलाई उसले ओछ्यानमाथि देखी।

**विबुध्य तां बालकमारिकाग्रहं चराचरात्माऽऽस निमीलितेक्षणः।**
**अनन्तमारोपयदङ्कमन्तकं यथोरगं सुप्तमबुद्धिरज्जुधीः॥ ८॥**

**पदार्थ–**
**तां** = त्यस स्त्रीलाई
**बालकमारिकाग्रहं** = बालघाती दुष्ट ग्रह भन्ने
**विबुध्य** = बुझेर
**चराचरात्मा** = चराचर जगत्का आत्मा भगवान्ले
**निमीलितेक्षणः** = आँखा चिम्लिएर
**आस** = बस्नुभयो
**अबुद्धिरज्जुधीः** = अज्ञानको कारणले सर्पलाई डोरी ठानेको व्यक्तिले
**सुप्तम्** = सुतेको
**उरगं यथा** = सर्पलाई (समाए) झैँ
**अन्तकं** = सबैका कालस्वरूप
**अनन्तम्** = अनन्त परमात्मालाई
**अङ्कम्** = काखमा
**आरोपयत्** = लिई

**वाक्यार्थ–** त्यसलाई बालघाती दुष्ट ग्रह भन्ने जानेर चराचर सबै जगत्का आत्मा भगवान्ले आँखा चिम्लिनुभयो। उसले पनि अज्ञानी व्यक्तिले सुतेको सर्पलाई डोरी ठानी समाए झैँ सबैका कालस्वरूप अनन्त परमात्मालाई आफ्नो काखमा लिई।

**विवरण–** यस श्लोकमा सबै जगत्का आत्मा भगवान्ले सुन्दर भेष धारण गरी आएकी राक्षसी पूतनालाई देखेर आँखा चिम्लिनुभएको बताइएको छ। यसको रहस्य एवं उद्देश्य के होला ? यस विषयमा अनेक टीकाकार तथा भक्तहरूले आ–आफ्नो विचार प्रकट गर्नुभएको छ। तीमध्ये केही प्रमुख विचारहरू यसप्रकार छन्–

दार्शनिक रूपले विचार गर्दा पूतना भनेको अविद्या हो। भगवान् स्वयंप्रकाश ब्रह्मतत्त्व हुनुहुन्छ। उहाँको दृष्टिको सामने पूतनारूप अविद्या टिक्न सक्दिन। यसैले लीला गरिरहनका लागि उहाँले आफ्नो आँखा बन्द गर्नुभयो। स्वरूपभूत ज्ञानद्वारा अज्ञानको नाश हुँदैन, यसद्वारा त अज्ञान पनि सिद्ध नै हुन्छ। यही ब्रह्मरूप ज्ञानकै प्रकाशका कारणले मानिसहरूले म यो विषय जान्दिनँ भन्ने कुरालाई जानिरहेका हुन्छन्। यही स्वरूपभूत ज्ञान जब अन्तःकरणवृत्तिमा पर्छ, तब मात्र त्यसद्वारा अज्ञान हट्छ। इन्द्रियवृत्तिको माध्यमबाट हुने यही ज्ञानलाई नै प्रमाणको कोटिमा राखिन्छ। श्रीकृष्ण ब्रह्मरूप हुनुहुन्छ, उहाँको दृष्टि प्रमाणज्ञानरूप हो। त्यसैले पूतनारूपी अविद्या तत्काल नष्ट हुँदा लीला नहुने हुँदा उहाँले आँखा चिम्लनुभएको हो।

टीकाकार वंशीधरले यसका अनेक उपपत्तिहरू देखाउनुभएको छ– भगवान् श्रीकृष्णले आँखा चिम्लेर भगवान् शङ्करलाई बोलाउनुभएको हो। विष तपाईं पिइदिनुहोस्, म दुध पिउँछु भनी शिवलाई बोलाउन उहाँले आँखा चिम्लनुभएको हो। अर्को कारण बताउँदै उहाँ लेख्नुहुन्छ– **प्रीतिर्नयनयोगतः** अर्थात् कसैसँग चार आँखा भयो भने प्रीति र मित्रता हुन्छ। मित्रलाई मार्दा मित्रद्रोहको कलङ्क लाग्छ। यसैले पछि मार्नुपर्छ भन्ने सम्झेर श्रीकृष्णले पहिल्यै आँखा

चिम्लनुभएको हो। सारार्थदर्शिनी टीका अनुसार दुध चुसाउने आमा झैं भएर आउनेलाई मार्न सङ्कोच भएकाले उहाँले आँखा चिम्लनुभएको हो। पूतना आफ्नो राक्षसी रूपलाई लुकाएर मायाद्वारा सुन्दर बनेर आएकी थिई। भगवान्‌लाई लाग्यो— मेरो आँखा अगाडि माया टिक्दैन र यसको राक्षसीरूप अहिल्यै प्रकट भइहाल्यो भने लीलामा विघ्न पर्छ। त्यसैले नित्यज्ञानशक्तिलाई तिरोहित गरी लीला गर्नका लागि नै भगवान् श्रीकृष्णले आँखा चिम्लनुभएको हो भन्ने सुबोधिनी टीकाकारको मत छ। कोही भन्छन्— यसले मसँग मिल्न पूर्वजन्ममा के-के शुभ कर्महरू गरेकी रहिछ ? भन्ने विचार गर्न भगवान्‌ले आँखा चिम्लनुभएको हो। बाहिर धाई आमाको स्वरूप बनाएर भित्र विष ख्वाउने क्रूर भावना राख्ने स्त्रीको अनुहार हेर्नु हुँदैन भन्ने आशयले श्रीकृष्णले आँखा बन्द गर्नुभएको हो भन्ने कसैको मत छ। कोही भन्छन्— विष पियाउन आउने पूतनालाई त म धाई आमाको गति दिँदैछु भने मलाई प्रेमपूर्वक दुध पियाउने गोप-गोपिनी र यशोदा मातालाई कुन गति दिऊँ ? भनी विचार गर्न उहाँले आँखा बन्द गर्नुभएको हो। भक्तिरसायनकार हरिसूरि लेख्नुहुन्छ— भगवान्‌का दुई आँखा भनेका चन्द्र र सूर्य हुन्। पुण्यात्मा व्यक्तिहरू जाने गति पनि दुई थरी हुन्छन्— एउटा सूर्यसँग सम्बन्धित उत्तरायण गति र अर्को चन्द्रसँग सम्बन्धित दक्षिणायन गति। अनन्त दुष्कर्म गर्ने व्यक्तिहरू अज्ञानमय पशु आदि योनिमा जन्मिँदै मर्दै गर्दछन्। उनीहरू न उत्तरायण गतिमा जान्छन्, न त दक्षिणायन गतिमा नै जान्छन्। यस बाहेक आत्मज्ञानी सन्तहरू पनि कुनै लोक-लोकान्तरमा जाँदैनन्, यहीँ ब्रह्म भइहाल्छन्। पूतनामा आत्मज्ञानीको स्थिति सम्भवै छैन। उत्तरायण र दक्षिणायनको बाटोबाट जान यो पूतना योग्य छैन भन्ने आशयले अर्चिमार्ग र धूममार्गका देवता सूर्य र चन्द्रले आ-आफ्नो बाटो बन्द गरेका हुन्। अर्को कारण देखाउँदै उहाँ लेख्नुहुन्छ— **योगभाक् अभूत्** अर्थात् योगद्वारा ठुला अनिष्टहरूको निवृत्ति हुन्छ। त्यसैले पूतनाको अनिष्ट दृष्टिबाट बच्नका लागि योगयुक्त हुन भगवान्‌ले आँखा चिम्लनुभएको हो। कोही भने आमाबुबा बाहेक अन्य अपरिचित व्यक्तिहरूलाई देख्दा डराई आँखा चिम्लिने बालकहरूको स्वभावै हुने भएकाले भगवान्‌ले पनि बालस्वभावका कारण आँखा चिम्लनुभएको हो, यसमा अरू कुनै कारण छैन भनी बताउँछन्। वास्तवमा भगवान्‌का यस्ता अपरिमित लीलाहरू छन् जसको चिन्तन गरेर भक्तहरू निरन्तर रमाउने गर्दछन्।

**तां तीक्ष्णचित्तामतिवामचेष्टितां वीक्ष्यान्तरा कोशपरिच्छदासिवत्।**
**वरस्त्रियं तत्प्रभया च धर्षिते निरीक्ष्यमाणे जननी ह्यतिष्ठताम्॥ ९॥**

**पदार्थ**–
**हि** = निश्चय नै
**कोशपरिच्छदासिवत्** = म्यानभित्र राखिएको तरबार झैं
**तीक्ष्णचित्ताम्** = हृदय क्रूर भएकी
**अतिवामचेष्टितां** = अत्यन्त राम्रो व्यवहार गर्ने
**वरस्त्रियं** = भद्र महिला देखिने
**तां** = त्यसलाई
**अन्तरा** = घरभित्र पसेको
**वीक्ष्य च** = देखेर पनि
**तत्प्रभया** = उसको सौन्दर्य प्रभाद्वारा
**धर्षिते** = हतप्रभ झैं भएका
**जननी** = दुबै आमा (यशोदा र रोहिणी)
**निरीक्ष्यमाणे** = हेरेर मात्र
**अतिष्ठताम्** = बसिरहे

**वाक्यार्थ–** म्यानभित्र राखिएको तरबार जस्तै भित्री हृदय क्रूर भएकी र बाहिर चाहिँ अत्यन्त राम्रो व्यवहार गरिरहेकी भद्र महिला जस्ती देखिने त्यस पूतनालाई आफ्नै घरभित्र पसेको देखेर पनि उसको सौन्दर्यप्रभावद्वारा अभिभूत भएका यशोदा र रोहिणी हेरेको हेर्‍यै भए।

**तस्मिन् स्तनं दुर्जरवीर्यमुल्बणं घोराङ्कमादाय शिशोर्ददावथ।**
**गाढं कराभ्यां भगवान् प्रपीड्य तत् प्राणैः समं रोषसमन्वितोऽपिबत् ॥१० ॥**

| पदार्थ– | **दुर्जरवीर्यम्** = पचाउन नसकिने विष मिश्रित | **कराभ्यां** = दुबै हातले |
|---|---|---|
| **अथ** = त्यसपछि | **उल्बणं** = भयङ्कर | **तत्** = त्यसलाई |
| **तस्मिन्** = त्यहाँ | **स्तनं** = स्तन | **गाढं** = बेस्सरी |
| **घोरा** = क्रूर राक्षसीले | **ददौ** = दिई | **प्रपीड्य** = थिचेर |
| **अङ्कम्** = काखमा | **रोषसमन्वितः** = क्रोधले युक्त | **प्राणैः समं** = प्राणै सहित |
| **आदाय** = लिएर | **भगवान्** = भगवान् श्रीकृष्णले | **अपिबत्** = पिइदिनुभयो |
| **शिशोः** = बच्चाको (मुखमा) | | |

**वाक्यार्थ–** त्यसपछि क्रूर राक्षसीले भगवान् श्रीकृष्णलाई काखमा लिएर उहाँका मुखमा पचाउनै नसकिने भयङ्कर विष लगाएको स्तन लगाइदिई। भगवान्‌ले पनि क्रोधले युक्त भई आफ्ना दुबै हातले स्तनलाई बेस्सरी थिचेर प्राणै सहित पिइदिनुभयो।

**सा मुञ्च मुञ्चालमिति प्रभाषिणी निष्पीड्यमानाखिलजीवमर्मणि।**
**विवृत्य नेत्रे चरणौ भुजौ मुहुः प्रस्विन्नगात्रा क्षिपती रुरोद ह ॥ ११ ॥**

| पदार्थ– | **इति** = यस्तो | **विवृत्य** = पल्टाई |
|---|---|---|
| **निष्पीड्यमानाखिलजीवमर्मणि** = प्राणका सबै आश्रय स्थानहरू टुट्न थालेपछि | **प्रभाषिणी** = भनिरहेकी | **चरणौ** = दुबै खुट्टा |
| **अलम्** = भयो | **प्रस्विन्नगात्रा** = पसिनाले शरीर भिजेकी | **भुजौ** = दुबै हात |
| **मुञ्च मुञ्च** = छोड् छोड् | **सा** = त्यो पूतना | **क्षिपती** = बजार्दै |
| | **नेत्रे** = दुबै आँखा | **मुहुः** = बारम्बार |
| | | **रुरोद ह** = रुन थाली |

**वाक्यार्थ–** प्राणका सबै आश्रय स्थानहरू टुट्न थालेपछि पूतना श्रीकृष्णलाई 'भयो, छाड्, छाड्' भन्न थाली। उसको शरीर पसिनाले भिजेको थियो भने आँखा पल्टिएका थिए। ऊ दुबै खुट्टा र दुबै हातलाई बजार्दै बारम्बार रुन लागी।

**तस्याः स्वनेनातिगभीररंहसा साद्रिर्मही द्यौश्च चचाल सग्रहा।**
**रसा दिशश्च प्रतिनेदिरे जनाः पेतुः क्षितौ वज्रनिपातशङ्कया ॥ १२ ॥**

**पदार्थ–**
**अतिगभीररंहसा** = ज्यादै तीव्र वेग भएको
**तस्याः** = त्यो पूतनाको
**स्वनेन** = चिच्याहटले
**साद्रिः** = पर्वतले सहित
**मही** = पृथिवी र
**सग्रहा** = ग्रहगणले सहित
**द्यौः च** = अन्तरिक्ष पनि
**चचाल** = डग्मगायो
**रसाः** = (सात) अधोलोकहरू र
**दिशः च** = (दश) दिशाहरू
**प्रतिनेदिरे** = गुन्जिए
**जनाः** = मानिसहरू
**वज्रनिपातशङ्कया** = वज्रपात भएको शङ्काले
**क्षितौ** = भुइँमा
**पेतुः** = ढले

**वाक्यार्थ–** ज्यादै तीव्र वेग भएको पूतनाको चिच्याहटले पर्वत सहित पृथिवी र ग्रहगणले सहित अन्तरिक्ष नै डग्मगायो। सातै अधोलोकहरू र दशै दिशा पनि गुन्जिए। मानिसहरू वज्रपात भएको शङ्काले भुइँमा ढले।

**निशाचरीत्थं व्यथितस्तना व्यसुर्व्यादाय केशांश्चरणौ भुजावपि।**
**प्रसार्य गोष्ठे निजरूपमास्थिता वज्राहतो वृत्र इवापतन्नृप ॥ १३ ॥**

**पदार्थ–**
**नृप** = हे राजा
**इत्थं** = यसप्रकार
**व्यथितस्तना** = स्तनमा पीडा भएकी
**निजरूपम्** = आफ्नो रूपमा
**आस्थिता** = रहेकी (देखिएकी)
**निशाचरी** = राक्षसी पूतना
**व्यादाय** = मुख बाएर
**केशान्** = कपाल
**चरणौ** = दुबै खुट्टा र
**भुजौ अपि** = दुबै हातलाई पनि
**प्रसार्य** = फैलाई
**वज्राहतः** = वज्रप्रहार गरिएको
**वृत्रः इव** = वृत्रासुर झैं
**गोष्ठे** = गोठमा
**व्यसुः** = प्राणहीन भई
**अपतत्** = ढली

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसप्रकार स्तनमा असाध्यै पीडा भएपछि राक्षसी पूतना आफ्नो असली रूपमा देखिई। ऊ मुख बाएर, कपाल, खुट्टा र हातहरूलाई फैलाई गोठमा पुगेर त्यसै गरी ढली जसरी वज्रप्रहार गरिएको वृत्रासुर ढलेको थियो।

**पतमानोऽपि तद्देहस्त्रिगव्यूत्यन्तरद्रुमान्।**
**चूर्णयामास राजेन्द्र महदासीत् तदद्भुतम् ॥ १४ ॥**

**पदार्थ–**
**राजेन्द्र** = हे श्रेष्ठ राजा परीक्षित्
**पतमानः अपि** = खस्दा खस्दै पनि
**तद्देहः** = त्यसको शरीरले
**त्रिगव्यूत्यन्तरद्रुमान्** = तीन गव्यूति (छ कोश)भित्रका रुखहरूलाई
**चूर्णयामास** = मऱ्याक-मुरुक पारिदियो
**तत्** = त्यो
**महत्** = ज्यादै
**अद्भुतम्** = आश्चर्य
**आसीत्** = थियो

**वाक्यार्थ–** हे परीक्षित्! लड्दा-लड्दै पनि त्यस राक्षसीको शरीरले छ कोशभित्रका रुखहरूलाई मऱ्याक-मुरुक पारिदियो, यो ज्यादै आश्चर्य भयो।

**ईषामात्रोग्रदंष्ट्रास्यं गिरिकन्दरनासिकम् ।**
**गण्डशैलस्तनं रौद्रं प्रकीर्णारुणमूर्धजम् ॥ १५ ॥**
**अन्धकूपगभीराक्षं पुलिनारोहभीषणम् ।**
**बद्धसेतुभुजोर्वङ्घ्रि शून्यतोयह्रदोदरम् ॥ १६ ॥**
**सन्तत्रसुः स्म तद्वीक्ष्य गोपा गोप्यः कलेवरम् ।**
**पूर्वं तु तन्निःस्वनितभिन्नहृत्कर्णमस्तकाः ॥ १७ ॥**

पदार्थ–
**पूर्वं तु** = पहिले नै
**तन्निःस्वनितभिन्नहृत्कर्ण-मस्तकाः** = त्यसको चिच्याहटले हृदय, कान र शिरै फुट्न लागेका
**गोपाः** = गोपहरू र
**गोप्यः** = गोपीहरू
**ईषामात्रोग्रदंष्ट्रास्यं** = हरिस (हलो र जुवालाई जोड्ने काठ) जति लामा भयङ्कर दाह्राले युक्त मुख
**गिरिकन्दरनासिकम्** = पहाडको गुफासमान नाक
**गण्डशैलस्तनं** = पहाडका ठुला ढुङ्गा जत्रा स्तन भएको
**प्रकीर्णारुणमूर्धजम्** = चारैतिर छरिएका रातो-रातो (तामाको रङ्ग जस्तो) कपाल भएको
**अन्धकूपगभीराक्षं** = अँध्यारो कुवासमान गहिरा आँखा भएको
**पुलिनारोहभीषणम्** = नदीका तिर जस्ता नितम्बले गर्दा डर लाग्दो भएको
**बद्धसेतुभुजोर्वङ्घ्रि** = पुल जस्ता कसिएका हात, तिघ्रा र खुट्टा भएको
**शून्यतोयह्रदोदरम्** = सुख्खा ताल समान पेट भएको
**तत्** = त्यो
**रौद्रं** = भयङ्कर
**कलेवरम्** = शरीरलाई
**वीक्ष्य** = देखेर
**सन्तत्रसुः स्म** = झन् डराए

**वाक्यार्थ–** पूतनाको चिच्याहटले हृदय, कान र शिर फुट्न लागे झैं भएका गोप र गोपीहरू त्यसको हरिस जति लामा भयङ्कर दाह्रा भएको मुख, पहाडका गुफासमान नाक, पहाडका ठुला ढुङ्गा जत्रा स्तन, चारैतिर छरिएका राता-राता कपाल, अँध्यारो कुवासमान गहिरा आँखा, नदीका तिर जस्ता डर लाग्दा नितम्ब, पुल जस्ता कसिएका हात, तिघ्रा र खुट्टा एवं सुख्खा ताल जस्तो पेट भएको भयङ्कर शरीरलाई देखेपछि झन् डराए।

**बालं च तस्या उरसि क्रीडन्तमकुतोभयम् ।**
**गोप्यस्तूर्णं समभ्येत्य जगृहुर्जातसम्भ्रमाः ॥ १८ ॥**

पदार्थ–
**तस्याः** = त्यो पूतनाको
**उरसि** = छातीमा
**अकुतोभयम्** = निर्भय भई
**क्रीडन्तम्** = खेलिरहेका
**बालं च** = बालक श्रीकृष्णलाई (देखेपछि)
**जातसम्भ्रमाः** = हडबडाएका
**गोप्यः** = गोपीहरूले

**तूर्णं** = झटपट
**समभ्येत्य** = नजिक आएर
**जगृहुः** = समाते (उठाए)

**वाक्यार्थ–** त्यसको छातीमा निर्भय भई बालक कृष्णलाई खेलिरहेको देखेपछि गोपीहरू असाध्यै हडबडाए र झटपट त्यहाँ पुगी उनीहरूले कृष्णलाई उठाए।

**यशोदारोहिणीभ्यां ताः समं बालस्य सर्वतः।**

**रक्षां विदधिरे सम्यग्गोपुच्छभ्रमणादिभिः॥ १९॥**

पदार्थ–
**यशोदारोहिणीभ्यां समं** = यशोदा र रोहिणीले सहित
**ताः** = ती गोपीहरूले
**बालस्य** = बालक कृष्णको
**सर्वतः** = सबै अङ्गतिर
**गोपुच्छभ्रमणादिभिः** = गाईको पुच्छर घुमाउने आदि गरेर
**सम्यक्** = राम्रोसँग
**रक्षां** = रक्षा
**विदधिरे** = गरे

**वाक्यार्थ–** यशोदा र रोहिणीले सहित ती गोपीहरूले बालकको सबै अङ्गतिर गाईको पुच्छर घुमाउने आदि उपाय गरी बालकको राम्रोसँग रक्षा गरे।

**गोमूत्रेण स्नापयित्वा पुनर्गोरजसार्भकम्।**

**रक्षां चक्रुश्च शकृता द्वादशाङ्गेषु नामभिः॥ २०॥**

पदार्थ–
**गोमूत्रेण** = गउँतद्वारा
**गोरजसा च** = गाईको खुरको धुलोद्वारा र
**पुनः** = फेरि
**शकृता** = गोबरद्वारा
**अर्भकम्** = बालकलाई
**स्नापयित्वा** = नुहाइदिएर
**द्वादशाङ्गेषु** = (निधार आदि) बाह्र अङ्गमा
**नामभिः** = (केशव आदि) नामहरूद्वारा
**रक्षां** = रक्षा
**चक्रुः** = गरे

**वाक्यार्थ–** उनीहरूले पहिला गउँतले अनि गाईको खुरको धुलोले र गोबरले बालकलाई स्नान गराए। अनि बालकका बाह्र अङ्गहरूमा बाह्र नामले रक्षा गरे।

**गोप्यः संस्पृष्टसलिला अङ्गेषु करयोः पृथक्।**

**न्यस्यात्मन्यथ बालस्य बीजन्यासमकुर्वत॥ २१॥**

पदार्थ–
**अथ** = यसपछि
**संस्पृष्टसलिलाः** = जल लिएका
**गोप्यः** = गोपीहरूले
**आत्मनि** = आफूमा
**अङ्गेषु** = अङ्गहरूमा र
**करयोः** = हातहरूमा पनि
**पृथक्** = छुट्टाछुट्टै
**न्यस्य** = न्यास गरेर
**बालस्य** = बालकका अङ्गमा
**बीजन्यासम्** = (अज आदि नामका) बीजहरूको न्यास
**अकुर्वत** = गरे

**वाक्यार्थ–** गोपीहरूले जल लिएर आफ्ना अङ्गहरूमा र हातमा छुट्टाछुट्टै करन्यास र अङ्गन्यास

गरी बालकका अङ्गहरूमा पनि अज आदि नामका बीजहरूको न्यास गरे।

**विवरण–** यस श्लोकमा पहिले हतार-हतारमा बालकको रक्षा गरेका गोपिनीहरूले पूतनालाई छोएको अशुद्धि नाश गर्न आचमन आदि गरे र फेरि श्रीकृष्णको रक्षा गरे भनिएको छ। उनीहरूले **अज** आदि एघार नामका बीजमन्त्रहरूद्वारा आफ्ना दुबै हातमा र एघारै ओटा अङ्गहरूमा पृथक्-पृथक् न्यास गरे र बालक श्रीकृष्णका अङ्गहरूमा पनि त्यसै गरी बीजन्यास गरे। यहाँ बीजन्यास भनेर हरेक नामको पहिलो अक्षरलाई अनुस्वार र नमः शब्दसहित उच्चारण गरेर ती-ती अङ्गमा छुने भन्ने बुझ्नुपर्दछ। मन्त्रशास्त्रको नियम अनुसार हरेक मन्त्रप्रयोगको अघि त्यससँग सम्बन्धित बीजमन्त्रहरूद्वारा करन्यास र अङ्गन्यास गरिन्छ। न्यासद्वारा साधकभित्र पूर्णरूपले स्थापित भएको मन्त्र नै सफलता दिने हुन्छ। यहाँ न्यासको क्रम यसप्रकार छ– **ॐ अं नमः, ॐ मं नमः** र **ॐयं नमः** यी तीन बीजले क्रमशः दाहिने हातको पृष्ठभाग, देब्रे हातको पृष्ठभाग र दुबै पृष्ठ भागलाई एक-एक पटक छुने। अब बाँकी रहेका आठ बीजमध्ये चार ओटाले दाहिने हात र चार ओटाले देब्रे हातका चार-चार जोर्नीहरूलाई छुने। चार जोर्नी भनेर बुढी औँला जोडिएको ठाउँ, मणिबन्ध, कुहिनो र काँधलाई बुझ्नुपर्दछ। **ॐ अं नमः, ॐ हं नमः, ॐ कें नमः, ॐ ईं नमः** यी चार बीजले दाहिने हातका जोर्नी र **ॐ इं नमः, ॐ विं नमः ॐ उं नमः, ॐ ईं नमः** यी चार बीजले देब्रे हातका जोर्नीलाई छुने। यसपछि अङ्गन्यास गर्दा यिनै एघार बीजमन्त्रहरूले क्रमशः पाउ, घुँडा, तिघ्रा, कम्मर, पेट, हृदय, काँध, घाँटी, हात, मुख र शिरलाई छुनुपर्दछ। यही विधिले गोपिनीहरूले शुद्धिका लागि पहिले आफैँले करन्यास र अङ्गन्यास गरे अनि बालकका एघार अङ्गहरूमा छुँदै बालकको रक्षाका लागि अङ्गन्यास गरेका थिए। गोपिनीहरूले करन्यासका लागि प्रयोग गरेका बीजमन्त्रहरू र अन्य अङ्गन्यासका लागि प्रयोग गरेका बीजमन्त्रहरू निम्नानुसार छन्। करन्यासका लागि– **ॐ अं नमो दक्षिणकरतलशुद्धौ, ॐ मं नमो वामतले, ॐ यं नम उभयोः करपृष्ठयोः, ॐ अं नमो दक्षिणाङ्गुलिसन्धौ, ॐ हं नमो दक्षिणमणिबन्धे, ॐ कं नमः कर्पूरे, ॐ ईं नमो वामबाहौ**। अन्य अङ्गन्यासका लागि– **ॐ अं नमः पादयोः, ॐ मं नमो जानुनोः, ॐ यं नम ऊर्वोः, ॐ अं नमः कट्योः, ॐ हं नम उदरे, ॐ कें नमः हृदये, ॐ ईं नमः अंशे, ॐ इं नमः कण्ठे, ॐ विं नमो भुजयोः, ॐ ऊं नमो मुखे, ॐ ईं नमो मूर्ध्नि**।

**अव्यादजोऽङ्घ्रि मणिमांस्तव जान्वथोरू**
**यज्ञोऽच्युतः कटितटं जठरं हयास्यः।**
**हृत्केशवस्त्वदुर ईश इनस्तु कण्ठं**
**विष्णुर्भुजं मुखमुरुक्रम ईश्वरः कम्॥ २२॥**

पदार्थ–

**अजः** = अज भगवान्ले
**तव** = तिम्रा
**अङ्घ्रि** = पाउलाई
**मणिमान्** = मणिमान्ले
**जानु** = घुँडालाई
**अथ** = त्यसै गरी
**यज्ञः** = यज्ञले
**ऊरू** = दुबै तिघ्रालाई

**अच्युतः** = अच्युतले
**कटितटं** = कम्मर भागलाई
**हयास्यः** = हयग्रीवले
**जठरं** = पेटलाई
**केशवः** = केशव (ब्रह्मा र शिव वा बुद्धि र अहङ्कारका नियामक अन्तर्यामी)ले
**हृत्** = हृदयलाई
**ईशः** = ईश (शिव)ले
**त्वदुरः** = तिम्रो छातीलाई
**इनः तु** = इन (सूर्य)ले चाहिँ
**कण्ठं** = घाँटीलाई
**विष्णुः** = विष्णुले
**भुजं** = हातलाई
**उरुक्रमः** = उरुक्रम (वामन)ले
**मुखम्** = मुखलाई र
**ईश्वरः** = ईश्वरले
**कम्** = शिरलाई
**अव्यात्** = रक्षा गरून्

**वाक्यार्थ–** अज भगवान्ले तिम्रा पाउलाई र मणिमान्ले तिम्रो घुँडालाई रक्षा गरून्। यसै गरी यज्ञले तिम्रा तिघ्रालाई, अच्युतले कम्मरभागलाई, हयग्रीवले पेटलाई, केशवले हृदयलाई, शिवले छातीलाई, सूर्यले घाँटीलाई, विष्णुले हातलाई, उरुक्रमले मुखलाई र ईश्वरले तिम्रो शिरलाई रक्षा गरून्।

**चक्र्यग्रतः सहगदो हरिरस्तु पश्चात्**
**त्वत्पार्श्वयोर्धनुरसी मधुहाजनश्च।**
**कोणेषु शङ्ख उरुगाय उपर्युपेन्द्र-**
**स्तार्क्ष्यः क्षितौ हलधरः पुरुषः समन्तात्॥२३॥**

पदार्थ–
**चक्री** = चक्रधारी भगवान्
**अग्रतः** = अगाडिपट्टि
**सहगदः** = गदाधारी
**हरिः** = हरि भगवान्
**पश्चात्** = पछाडिपट्टि
**अस्तु** = रहून्
**धनुरसी** = धनुष र तरवार लिने
**मधुहा** = मधुसूदन र
**अजनः च** = अजन भगवान् पनि
**त्वत्पार्श्वयोः** = तिम्रा दायाँ र बायाँ रहून्
**शङ्खः** = शङ्खधारी
**उरुगाय** = उरुगाय (जसको कीर्ति धैरैद्वारा गाइन्छ ती श्रीहरि)
**कोणेषु** = चारै कुनामा
**तार्क्ष्यः** = गरुड वाहन भएका
**उपेन्द्रः** = उपेन्द्र
**उपरि** = माथि
**हलधरः** = हलधर (सङ्कर्षण)
**क्षितौ** = भुइँमा र
**पुरुषः** = परमपुरुष (नारायण)
**समन्तात्** = तिम्रो सबैतिर रहून्

**वाक्यार्थ–** चक्रधारी भगवान् तिम्रो रक्षाका लागि अगाडिपट्टि र गदाधारी हरि भगवान् पछाडिपट्टि रहून्। धनु धारण गर्ने मधुसूदन र तरबार धारण गर्ने अजन भगवान् तिम्रा दायाँ र बायाँ रहून्। तिम्रो चारै कुनामा शङ्खधारी उरुगाय रहून्। गरुडवाहन उपेन्द्र तिम्रो माथि, हलधर टेकेको ठाउँमा र परमपुरुष तिम्रो सबैतिर रहून्।

**इन्द्रियाणि हृषीकेशः प्राणान्नारायणोऽवतु।**
**श्वेतद्वीपपतिश्चित्तं मनो योगेश्वरोऽवतु॥ २४॥**

पदार्थ–
**हृषीकेशः** = हृषीकेशले
**इन्द्रियाणि** = इन्द्रियहरूलाई
**नारायणः** = नारायणले
**प्राणान्** = प्राणहरूलाई
**अवतु** = रक्षा गरून्
**श्वेतद्वीपपतिः** = श्वेतद्वीप (शुद्ध सत्त्वरूप चित्त)का मालिक भगवान् वासुदेवले
**चित्तं** = चित्तलाई र
**योगेश्वरः** = योगेश्वर अनिरुद्धले
**मनः** = मनलाई
**अवतु** = रक्षा गरून्

**वाक्यार्थ–** हृषीकेशले तिम्रा इन्द्रियहरूलाई र नारायणले तिम्रा प्राणलाई रक्षा गरून्। त्यसै गरी चित्तका अधिपति भगवान् वासुदेवले तिम्रो चित्तलाई र योगेश्वर अनिरुद्धले मनलाई रक्षा गरून्।

**पृश्निगर्भस्तु ते बुद्धिमात्मानं भगवान् परः।**
**क्रीडन्तं पातु गोविन्दः शयानं पातु माधवः॥ २५॥**

पदार्थ–
**पृश्निगर्भः तु** = पृश्निगर्भ (प्रद्युम्न)ले चाहिँ
**ते** = तिम्रो
**बुद्धिम्** = बुद्धिलाई
**परः** = परमात्मा
**भगवान्** = भगवान्ले
**आत्मानं** = अहङ्कारलाई
**गोविन्दः** = गोविन्दले
**क्रीडन्तं** = खेलिरहेका तिमीलाई
**पातु** = रक्षा गरून्
**माधवः** = माधवले
**शयानं** = सुतिरहेका तिमीलाई
**पातु** = रक्षा गरून्

**वाक्यार्थ–** पृश्निगर्भ भगवान्ले तिम्रो बुद्धिलाई र परमात्मा भगवान्ले तिम्रो अहङ्कारलाई रक्षा गरून्। खेलिरहेको वेलामा गोविन्दले र सुतेको वेलामा माधवले तिम्रो रक्षा गरून्।

**व्रजन्तमव्याद् वैकुण्ठ आसीनं त्वां श्रियः पतिः।**
**भुञ्जानं यज्ञभुक् पातु सर्वग्रहभयङ्करः॥ २६॥**

पदार्थ–
**वैकुण्ठः** = वैकुण्ठ भगवान्ले
**व्रजन्तम्** = हिँडिरहेका
**त्वां** = तिमीलाई
**अव्यात्** = रक्षा गरून्
**श्रियः पतिः** = लक्ष्मीपतिले
**आसीनं** = बसेका तिमीलाई (रक्षा गरून्)
**सर्वग्रहभयङ्करः** = सबै ग्रहलाई भयभीत पार्ने
**यज्ञभुक्** = यज्ञभोक्ता भगवान् विष्णुले
**भुञ्जानं** = खाइरहेका तिमीलाई
**पातु** = रक्षा गरून्

**वाक्यार्थ–** हिँडिरहेको वेलामा तिमीलाई वैकुण्ठ भगवान्ले रक्षा गरून् अनि बसेको वेलामा लक्ष्मीपतिले रक्षा गरून्। सबै ग्रहलाई भयभीत पार्ने यज्ञभोक्ता भगवान् विष्णुले खाइरहेको वेलामा तिमीलाई रक्षा गरून्।

**डाकिन्यो यातुधान्यश्च कुष्माण्डा येऽर्भकग्रहाः।**
**भूतप्रेतपिशाचाश्च यक्षरक्षोविनायकाः॥ २७॥**

**कोटरा रेवती ज्येष्ठा पूतना मातृकादयः।**
**उन्मादा ये ह्यपस्मारा देहप्राणेन्द्रियद्रुहः॥ २८॥**
**स्वप्नदृष्टा महोत्पाता वृद्धबालग्रहाश्च ये।**
**सर्वे नश्यन्तु ते विष्णोर्नामग्रहणभीरवः॥ २९॥**

**पदार्थ–**
**ये** = जो
**डाकिन्यः** = डाकिनीहरू
**यातुधान्यः** = राक्षसीहरू
**कुष्माण्डाः च** = कुष्माण्डाहरू अनि
**अर्भकग्रहाः** = बालग्रहहरू छन्
**भूतप्रेतपिशाचाः** = भूत, प्रेत र पिशाच
**यक्षरक्षोविनायकाः** = यक्ष, राक्षस र विनायक
**कोटरा** = कोटरा
**रेवती** = रेवती
**ज्येष्ठा** = ज्येष्ठा
**पूतना** = पूतना
**मातृकादयः च** = मातृका आदि अनि
**ये** = जो
**देहप्राणेन्द्रियद्रुहः हि** = शरीर, इन्द्रिय र प्राणको नाश गर्ने
**उन्मादाः** = उन्माद (बौलाउनु) र
**अपस्माराः** = अपस्मार (छारे) आदि रोग छन्
**ये** = जो
**स्वप्नदृष्टाः** = सपनामा देखिएका
**महोत्पाताः** = ठुला उत्पातहरू छन्
**वृद्धबालग्रहाः च** = वृद्धग्रह र बालग्रहहरू
**विष्णोः** = भगवान् विष्णुको
**नामग्रहणभीरवः** = नामोच्चारणबाट डराउने
**ते सर्वे** = ती सबै
**नश्यन्तु** = नष्ट होऊन्

**वाक्यार्थ–** डाकिनी, राक्षसी र कुष्माण्डा आदि बालग्रह, भूत, प्रेत, पिशाच, यक्ष, राक्षस र विनायक, कोटरा, रेवती, ज्येष्ठा, पूतना, मातृका आदि र शरीर, इन्द्रिय एवं प्राणलाई नाश गर्ने उन्माद र अपस्मार आदि रोगहरू तथा सपनामा देखिएका जति पनि ठुला उत्पातहरू छन् अनि बालग्रह र वृद्धग्रहहरू छन्, भगवान् विष्णुको नामोच्चारणबाट डराउनेवाला ती सबै नष्ट होऊन्।

**विवरण–** माथिका श्लोकमा भगवान्लाई पनि भगवान्का नामले रक्षा गरिएको छ। भगवान् अभयस्वरूप हुनुहुन्छ र उहाँलाई तत्त्वतः जान्ने व्यक्तिहरू पनि अभयपद प्राप्त गर्दछन्। यही कुरालाई **अभयं वै जनक प्राप्तोऽसि** (बृहदारण्यकोपनिषद्, ४/२/४), **प्रविष्टो ब्रह्म निर्वाणमभयं दर्शितं त्वया** (भागवत, १२/६/५) आदि उपनिषद्वचनले पुष्टि गरेका छन्। **मृत्युर्यस्योपसेचनम्** (कठोपनिषद्, १/२/२५) अर्थात् जुन तत्त्वले मृत्युलाई चटनी बनाउँछ र **मृत्युर्धावति पञ्चमः** (तैत्तिरीयोपनिषद्, २/८/१) जसको डरले मृत्युले आफ्नो काम गरिरहन्छ, त्यस्तो **विजरः विमृत्युः** (छान्दोग्योपनिषद्, ८/७/१) अर्थात् जरा र मृत्युले रहित भएको तत्त्वलाई केबाट रक्षा गर्नुपर्ला र ? तर पनि प्रेमभावको विचित्रता यही हो कि, यसमा सर्वरूप परमात्मालाई पनि सामान्य व्यवहारमा झैं दुःख, कष्ट आदिबाट जोगाउने कल्पना गरिन्छ। लीलाराज्यमा हुने भक्त र भगवान्बीचको यही अभिनयको माध्यमले रसस्वरूप परमात्माबाट अनेक रसहरूको आस्वादन गरिन्छ। यद्यपि अद्वितीय एवं निर्धर्मक परमात्मामा भय, राग, द्वेष, सुख, दुःख आदि कुनै वस्तुको पनि प्रवेश छैन, तर

मायाद्वारा सम्पूर्ण पदार्थको रूपमा देखिने पनि त्यही तत्त्व भएकाले काल्पनिक रूपमा सबैथरी व्यवहारले परमात्मालाई छुनु पनि शास्त्रसम्मत छ। शङ्कराचार्य भन्नुहुन्छ— **सर्वाविद्याकृत-संव्यवहाराणां पर एवात्मास्पदं नान्योऽस्ति** (छान्दोग्योपनिषद्, शाङ्करभाष्य, ८/१२/१) अर्थात् अविद्याद्वारा हुने सबैथरी काल्पनिक व्यवहारको आश्रय परमात्मा नै हुनुहुन्छ, अरू कोही हुन सक्दैन। त्यसैले भक्तहरू काल्पनिक रूपमैं परमात्मामा दुःख, आपत्ति आदि आएको सम्झी त्यसलाई सम्पूर्ण परिश्रमले हटाउन खोज्दछन्। सगुणलीलाको विशेष मधुरता भनेको यही हो। यो प्रसङ्गमा पनि यही लीलाको वर्णन गरिएको छ।

यो उदाहरणद्वारा भगवान्भन्दा भगवान्को नाम श्रेष्ठ भएको सिद्ध हुन्छ भन्ने भक्तहरूको भावना पाइन्छ। सबै आपत्तिहरूलाई नष्ट गर्नुहुने भगवान्मा पनि जब आपत्ति आइपर्छ, तब त्यसको निराकरण अरू कुन उपायले होला र? यस वेला पनि भक्तहरू आफ्नो पुरानो बानी अनुसार भगवान्को नामकै सम्झना गर्दछन्। भगवान् जस्तै उहाँको नाम पनि चिन्मय छ। नाम भगवान्को कृपामय अवतार हो। राम, श्रीकृष्ण आदि अवतारहरू त जहिलेसुकै हुँदैनन्, तर भगवान्को नामलाई जहाँसुकै र जहिलेसुकै प्रकट गर्न सकिन्छ। लौकिक पदार्थहरू र तिनका नाम छुट्टाछुट्टै भए जस्तो भगवान् र उहाँका नाम भिन्न-भिन्न होइनन्, दुबै एउटै हुन्। सांसारिक पदार्थहरूको नाम जपेर त्यो वस्तुको प्राप्ति हुँदैन, तर भगवान्लाई प्राप्त गर्ने उपाय उहाँको नामस्मरण नै हो। भगवान्का अवतारहरूले निश्चित समयमा मात्र आफ्ना भक्तहरू एवं दुष्टहरूको उद्धार गर्दछन्, तर भगवान्का राम, श्रीकृष्ण आदि नामहरू त अनन्त कालसम्म संसारको बन्धन चुँडाल्ने शक्तिले युक्त हुन्छन्। भगवन्नामको यही विशेषता यस प्रसङ्गमा दृष्टान्त रूपले स्पष्ट भएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति प्रणयबद्धाभिर्गोपीभिः कृतरक्षणम्।**

**पाययित्वा स्तनं माता सन्न्यवेशयदात्मजम्॥ ३०॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**प्रणयबद्धाभिः** = प्रेमद्वारा बाँधिएका
**गोपीभिः** = गोपीहरूद्वारा
**कृतरक्षणम्** = रक्षा गरिएका
**आत्मजम्** = आफ्नो छोरालाई
**माता** = आमा यशोदाले
**स्तनं** = दुध
**पाययित्वा** = पियाएर
**सन्न्यवेशयत्** = सुताइदिइन्

**वाक्यार्थ–** प्रेमले बाँधिएका गोपीहरूद्वारा यसप्रकार रक्षा गरिएका आफ्ना छोरालाई यशोदा माताले दुध पियाई सुताइदिइन्।

**तावन्नन्दादयो गोपा मथुराया व्रजं गताः।**

**विलोक्य पूतनादेहं बभूवुरतिविस्मिताः॥ ३१॥**

**पदार्थ–**
**तावत्** = त्यही समयमा
**मथुरायाः** = मथुराबाट

**व्रजं** = व्रजमा
**गताः** = पुगेका
**नन्दादयः** = नन्द आदि
**गोपाः** = गोपहरू
**पूतनादेहं** = पूतनाको शरीरलाई
**विलोक्य** = देखेर
**अतिविस्मिताः** = असाध्यै चकित
**बभूवुः** = भए

**वाक्यार्थ—** त्यही समयमा मथुराबाट व्रज आइपुगेका नन्द आदि गोपहरू पूतनाको शरीरलाई देखेर ज्यादै छक्क परे।

**नूनं बतर्षिः सञ्जातो योगेशो वा समास सः।**

**स एव दृष्टो ह्युत्पातो यदाहानकदुन्दुभिः॥ ३२॥**

**पदार्थ–**
**नूनं बत** = निश्चय नै
**सः** = उहाँ वसुदेव
**ऋषिः** = तपस्वी ऋषि
**सञ्जातः** = हुनुभएको छ
**योगेशः वा** = योगेश्वर
**समास** = बन्नुभएको छ
**हि** = निश्चित रूपमा
**आनकदुन्दुभिः** = वसुदेवले
**यत्** = जे
**आह** = भन्नुभयो
**सः एव** = त्यही नै
**उत्पातः** = उत्पात
**दृष्टः** = देखियो

**वाक्यार्थ—** वसुदेव तपस्वी ऋषि झैं हुनुभएको छ अथवा उहाँ कुनै योगेश्वर बन्नुभएको रहेछ। किनभने उहाँले निश्चयपूर्वक जे बताउनुभएको थियो, त्यही उत्पात यहाँ देखियो।

**कलेवरं परशुभिश्छित्त्वा तत् ते व्रजौकसः।**

**दूरे क्षिप्त्वावयवशो न्यदहन् काष्ठधिष्ठितम्॥ ३३॥**

**पदार्थ–**
**ते** = ती
**व्रजौकसः** = व्रजवासीहरूले
**तत्** = त्यो (पूतनाको)
**कलेवरं** = शरीरलाई
**परशुभिः** = बन्चरोहरूद्वारा
**अवयवशः** = अङ्ग-अङ्ग
**छित्त्वा** = टुक्र्याई
**दूरे** = टाढा
**क्षिप्त्वा** = फ्याँकेर
**काष्ठधिष्ठितम्** = काठमा राखेर
**न्यदहन्** = जलाइदिए

**वाक्यार्थ—** ती व्रजवासीहरूले पूतनाको शरीरलाई बन्चरोहरूद्वारा अङ्ग-अङ्ग छुट्याई टुक्र्याए र गोकुलभन्दा पर लगी काठमा राखेर जलाइदिए।

**दह्यमानस्य देहस्य धूमश्चागुरुसौरभः।**

**उत्थितः कृष्णनिर्भुक्तसपद्याहतपाप्मनः॥ ३४॥**

**पदार्थ–**
**कृष्णनिर्भुक्तसपद्याहतपाप्मनः** = कृष्णले दुध पिउने बित्तिकै सबै पाप नष्ट भएकाले
**दह्यमानस्य** = डढिरहेको
**देहस्य च** = शरीरको त
**अगुरुसौरभः** = अगुरु जस्तो सुगन्धित
**धूमः** = धुवाँ
**उत्थितः** = निस्कियो

**वाक्यार्थ—** भगवान् श्रीकृष्णले दुध पिउने बित्तिकै सबै पाप नष्ट भएकाले त्यस पूतनाको शरीर

डढ्दा त अगुरु जलेको जस्तो सुगन्धित धुवाँ निस्कियो।

**विवरण—** यस श्लोकमा पूतनालाई डढाउँदा उसको शरीरबाट दिव्य सुगन्ध निस्कियो भनी बताइएको छ। बल्लभाचार्य लेख्नुहुन्छ— **अविद्या पूतना नष्टा गन्धमात्रावशेषिता** अर्थात् अविद्यारूपी पूतना नष्ट भई र उसको गन्ध मात्र बाँकी रह्यो। वेदान्तशास्त्रमा यसलाई अविद्यालेश भन्दछन्। ब्रह्मज्ञानद्वारा जब अज्ञान निवृत्त हुन्छ, तब अज्ञानका कारणले देखिएका अन्तःकरण, कर्तृत्व, भोक्तृत्व र प्रमातृत्वभाव अनि शरीर, इन्द्रिय आदि सबै बाधित हुन्छन्। यस प्रसङ्गमा प्रायः के शङ्का हुन्छ भने शरीर, मन आदि सबै नभएपछि ज्ञानीले बाँच्न र व्यवहार गर्न कसरी सम्भव छ ? तर यो शङ्का निराधार छ। अधिष्ठानरूप आत्माको ज्ञानपछि भ्रमज्ञान या अविद्या नष्ट हुन्छ तर त्यसको केही संस्कार भने बाँकी रहन्छ। संसार मिथ्या हो भन्नुको तात्पर्य यो छँदै छैन भन्ने होइन, अपि तु यसको पारमार्थिक सत्ता छैन भन्ने मात्र हो। अज्ञानी मानिसहरू संसारलाई सत् वस्तु मानेर त्यसको व्यवहारमा प्रवृत्त हुन्छन्, ज्ञानद्वारा संसारको त्यही पारमार्थिक झैँ मानिएको सत्ताको बाध हुन्छ। प्रतीति कालमा सिपीमा देखिएको चाँदीलाई पनि असत् नभई प्रातिभासिक सत् भनी स्वीकार गरिएको छ। **नेदं रजतम्** अर्थात् यो चाँदी होइन रहेछ, सिपी पो रहेछ भन्ने बाधक ज्ञानले पनि मिथ्या पदार्थको पारमार्थिक सत्ता छैन तर प्रातिभासिक सत्ता छ भन्ने सिद्ध गर्दछ। यदि रजत्को प्रातिभासिक सत्ता नभए मेरो ज्ञान भ्रमात्मक रहेछ भनी पछिसम्म सम्झिरहनु सम्भव हुँदैन। यही नियमले ज्ञानद्वारा जब अज्ञानको निवृत्ति हुन्छ, तब पनि त्यसको मिथ्यात्वरूपले अनुवृत्ति हुन्छ। यसैलाई अविद्यालेश भनिन्छ। यदि अविद्यालेश नमान्ने हो भने जीवन्मुक्ति रहन सक्दैन। ज्ञानद्वारा मुक्त भएका जीवन्मुक्तहरूमा पनि यही अविद्यालेशद्वारा शरीर र लौकिक व्यवहार आदिको अनुवृत्ति हुन्छ। अविद्या निवृत्तिपछि शरीर आदि सबै नष्ट हुने हो भने ज्ञानको उपदेश परम्परा र शास्त्रप्रामाण्यमा नै आघात पर्न जान्छ, किनभने यसो मान्दा संसारमा मुक्त व्यक्ति नरहने भए, अनि अज्ञानीले ज्ञानको उपदेश गर्न सक्दैन। अविद्यालेश रहँदा आत्माको असङ्गतामा हानि पर्न जान्छ कि भन्ने शङ्का पनि उचित छैन, किनभने अध्यस्त वस्तुको धर्मले अधिष्ठान आत्माको केही बिगार्न सक्दैन। मरुभूमिमा देखिएको पानीले मरुभूमिको बालुवाको एउटा कणलाई पनि भिजाएको हुँदैन। यसरी जीवन्मुक्त महापुरुष अविद्यालेशद्वारा प्रारब्ध धारण गरिरहँदा पनि वस्तुतः शरीरसम्बन्धले रहित नै हुन्छ। यही अशरीरत्वलाई मोक्ष भनिन्छ— **तस्मात् मिथ्याप्रत्ययनिमित्तत्वात् सशरीरत्वस्य सिद्धं जीवतोऽपि विदुषः अशरीरत्वम्** (ब्रह्मसूत्र शाङ्कर भाष्य, १/१/४)। अविद्यालेश र जीवन्मुक्तिको विषयमा शङ्का गरी मरेपछि मात्र मुक्ति मिल्छ भन्ने विचार राख्नु मुक्तिदायी ज्ञानपरम्पराद्वारा यही लोकमा फैलिन सक्ने परमानन्दको प्रकाशलाई रोक्न खोज्नु हो। वेदान्तमा जीवन्मुक्तिकै सिद्धिका लागि अविद्यालेश स्वीकार गरिएको छ। यसकै सूचना यहाँ गरिएको हो।

**पूतना लोकबालघ्नी राक्षसी रुधिराशना।**
**जिघांसयापि हरये स्तनं दत्त्वाप सद्गतिम्॥ ३५॥**

**पदार्थ–**
**लोकबालघ्नी** = मानिसहरूका बच्चाहरूलाई मार्ने
**रुधिराशना** = रगत पिउने
**राक्षसी** = राक्षसी
**पूतना** = पूतनाले
**जिघांसया** = मार्ने इच्छाले
**हरये** = हरि भगवान्‌लाई
**स्तनं** = दुध
**दत्त्वा अपि** = (पिउन) दिएर पनि
**सद्गतिं** = उत्तम गति
**आप** = पाई

**वाक्यार्थ–** मानिसहरूका बच्चाहरूलाई मार्ने र रगत पिउने राक्षसी पूतनाले भगवान् श्रीकृष्णलाई मार्ने इच्छाले दुध पियाउँदा पनि उसले उत्तम गति पाई।

**किं पुनः श्रद्धया भक्त्या कृष्णाय परमात्मने।**
**यच्छन् प्रियतमं किं नु रक्तास्तन्मातरो यथा॥ ३६॥**

**पदार्थ–**
**किं** = साँच्चै नै
**तन्मातरः यथा** = कृष्णका माताहरू झैँ
**रक्ताः** = अनुरक्त भई
**परमात्मने** = परमात्मा
**कृष्णाय** = कृष्णका लागि
**श्रद्धया** = श्रद्धा र
**भक्त्या** = भक्तिद्वारा
**प्रियतमं** = सबैभन्दा मन पर्ने वस्तु
**यच्छन्** = चढाउँछ भने त
**पुनः** = फेरि
**किं नु** = के कुरा

**वाक्यार्थ–** उहाँका माताहरूजस्तै अनुरक्त भई कोही व्यक्ति परमात्मा कृष्णका लागि श्रद्धा र भक्तिपूर्वक सबैभन्दा मन पर्ने वस्तु चढाउँछ भने त त्यसको उत्तम गतिको विषयमा फेरि के भन्नु ?

**पद्भ्यां भक्तहृदिस्थाभ्यां वन्द्याभ्यां लोकवन्दितैः।**
**अङ्गं यस्याः समाक्रम्य भगवानपिबत् स्तनम्॥ ३७॥**
**यातुधान्यपि सा स्वर्गमवाप जननीगतिम्।**
**कृष्णभुक्तस्तनक्षीराः किमु गावो नु मातरः॥ ३८॥**

**पदार्थ–**
**लोकवन्दितैः** = लोकद्वारा वन्दना गरिएकाहरूद्वारा पनि
**वन्द्याभ्यां** = पूजनीय भएका
**भक्तहृदिस्थाभ्यां** = भक्तहरूको हृदयभित्र रहने
**पद्भ्यां** = दुई चरणद्वारा
**यस्याः** = जसको
**अङ्गं** = स्तनलाई
**समाक्रम्य** = थिचेर
**भगवान्** = भगवान्‌ले
**स्तनं** = दुध
**अपिबत्** = पिउनुभयो
**सा** = त्यस्ती
**यातुधानी अपि** = राक्षसीले पनि
**जननीगतिम्** = आमाको गति
**स्वर्गम्** = स्वर्ग लोक
**अवाप** = पाई (भने)
**कृष्णभुक्तस्तनक्षीराः** = कृष्णद्वारा स्तनको दुध पिइएका
**गावः** = गाईहरू र
**मातरः** = आमाहरूको
**किमु नु** = के कुरा र

**वाक्यार्थ–** लोकद्वारा वन्दना गरिएका (ब्रह्मा आदि देवता)हरूद्वारा पनि पूजनीय र भक्तहरूको हृदयभित्र सधैँ रहिरहने चरणले जसको स्तनमा टेकेर भगवान्ले दुध पिइदिनाले पूतना राक्षसीले त आमाले पाउने स्वर्ग लोक पाई भने भगवान् श्रीकृष्णले जुन गाई र आमाहरूको दुध पिउनुभएको थियो उनीहरूका उत्तम गतिको विषयमा के कुरा गर्नु ?

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्णले स्तनपान गर्नुभएकाले राक्षसी पूतना पनि धाई आमाको गतिमा पुगी भने उहाँका वात्सल्यमयी आमाहरूको के कुरा गर्नु र ? भनी बताइएको छ। यहाँ **मातरः** शब्दले आमाहरू भनी बहुवचनको प्रयोग गरिएको छ। यो बहुवचनको प्रयोग गोपिनीहरूको उद्देश्यले गरिएको हो। ब्रह्माजीद्वारा गाईबाच्छाहरूको हरण गरिएपछि भगवान् श्रीकृष्ण नै गाई, तिनको दाम्लो, घण्टी, लट्ठी, गोपबालक, तिनको शील, स्वभाव र रूप आदि सबैको रूपमा विवर्तित हुनुभएको थियो (भागवत, १०/१३/१९)। त्यस वेला उहाँलाई पुत्ररूपले स्तनपान गराउने गोपिनी, गाई आदि सबै उहाँका माता भए। ती सबैको उद्देश्यले यहाँ **मातरः** यो बहुवचनको प्रयोग गरिएको हो।

**पयांसि यासामपिबत् पुत्रस्नेहस्नुतान्यलम्।**
**भगवान् देवकीपुत्रः कैवल्याद्यखिलप्रदः॥ ३९॥**
**तासामविरतं कृष्णे कुर्वतीनां सुतेक्षणम्।**
**न पुनः कल्पते राजन् संसारोऽज्ञानसम्भवः॥ ४०॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**कैवल्याद्यखिलप्रदः** = मोक्ष आदि सबै थोक प्रदान गर्नुहुने
**देवकीपुत्रः** = देवकीका पुत्र
**भगवान्** = भगवान् श्रीकृष्णले
**यासां** = जसका
**पुत्रस्नेहस्नुतानि** = भगवान्लाई छोरा सम्झी वात्सल्यले चुहिएका
**पयांसि** = दुध
**अलम्** = पर्याप्त मात्रामा
**अपिबत्** = पिउनुभयो
**कृष्णे** = कृष्णमा
**अविरतं** = सधैँ
**सुतेक्षणं** = छोराको दृष्टि
**कुर्वतीनां** = गरिरहेका
**तासाम्** = तिनीहरूको लागि
**अज्ञानसम्भवः** = अज्ञानबाट उत्पन्न
**संसारः** = संसार
**पुनः** = फेरि
**न कल्पते** = उत्पन्न हुँदैन

**वाक्यार्थ–** हे राजा परीक्षित् ! मोक्ष आदि सबै थोक प्रदान गर्नुहुने देवकीपुत्र भगवान् श्रीकृष्णले जसको वात्सल्यले भरिएको दुध पर्याप्त मात्रामा पिउनुभयो, त्यस्ता भगवान् श्रीकृष्णमा निरन्तर छोराको भावना गरिरहेका तिनीहरूका लागि अज्ञानबाट उत्पन्न यो संसार फेरि उत्पन्न हुँदैन (उनीहरूका लागि संसाररूपी बन्धन उत्पन्न हुँदैन)।

**कटधूमस्य सौरभ्यमवघ्राय व्रजौकसः।**
**किमिदं कुत एवेति वदन्तो व्रजमाययुः॥ ४१॥**

**पदार्थ–**

**व्रजौकसः** = व्रजवासीहरू
**कटधूमस्य** = चिताको धुवाँको
**सौरभ्यम्** = सुगन्धलाई
**अवघ्राय** = सुँघेर
**इदं** = यो
**किम्** = के हो
**कुतः एव** = कहाँबाट भयो
**इति** = यस्तो
**वदन्तः** = भन्दै
**व्रजम्** = व्रजमा
**आययुः** = आए

**वाक्यार्थ–** नन्दको साथमा आएका व्रजवासीहरू चिताबाट निस्केको धुवाँको सुगन्धलाई सुँघेर यो के हो ? कहाँबाट आयो ? भन्दै गोकुलमा आए।

**ते तत्र वर्णितं गोपैः पूतनागमनादिकम्।**
**श्रुत्वा तन्निधनं स्वस्ति शिशोश्चासन् सुविस्मिताः॥ ४२॥**

**पदार्थ–**

**तत्र** = त्यहाँ
**गोपैः** = अरू गोपहरूद्वारा
**वर्णितं** = बताइएको
**पूतनागमनादिकम्** = पूतनाको आगमनदेखिको
**तन्निधनं** = त्यसको मृत्यु र
**शिशोः च** = बालक कृष्णको चाहिँ
**स्वस्ति** = कुशलतालाई
**श्रुत्वा** = सुनेर
**ते** = नन्द आदि ती गोपहरू
**सुविस्मिताः** = असाध्यै चकित
**आसन्** = भए

**वाक्यार्थ–** त्यहाँ अरू गोपहरूले पूतना आएको, त्यसको मृत्यु भएको र बालक कृष्ण चाहिँ कुशल रहेको समेत सबै घटना बताए। त्यो सुनी नन्द आदि ती गोपहरू असाध्यै चकित भए।

**नन्दः स्वपुत्रमादाय प्रेत्यागतमुदारधीः।**
**मूर्ध्न्युपाघ्राय परमां मुदं लेभे कुरूद्वह॥ ४३॥**

**पदार्थ–**

**कुरूद्वह** = हे कुरुश्रेष्ठ
**उदारधीः** = उदारबुद्धि भएका
**नन्दः** = नन्दले
**प्रेत्य** = मृत्युकहाँ नै पुगी
**आगतम्** = फर्किएका
**स्वपुत्रम्** = आफ्ना छोरालाई
**आदाय** = काखमा लिएर
**मूर्ध्नि** = शिरमा
**उपाघ्राय** = सुँघी
**परमां** = ज्यादै
**मुदं** = खुसी
**लेभे** = पाए (भए)

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित् ! उदारबुद्धि भएका नन्द मृत्युकहाँ नै पुगी फर्किएका आफ्ना छोरालाई काखमा राखी शिरमा सुँघेर ज्यादै खुसी भए।

**य एतत् पूतनामोक्षं कृष्णस्यार्भकमद्भुतम्।**
**शृणुयाच्छ्रद्धया मर्त्यो गोविन्दे लभते रतिम्॥ ४४॥**

**पदार्थ–**

**यः** = जो
**मर्त्यः** = मनुष्यले
**एतत्** = यो
**पूतनामोक्षं** = पूतनाको मोक्ष सम्बन्धी

| | | |
|---|---|---|
| **कृष्णस्य** = कृष्णको | **श्रद्धया** = श्रद्धापूर्वक | **रतिम्** = प्रेम |
| **अद्भुतम्** = अद्‌भुत | **शृणुयात्** = सुन्ला (त्यसले) | **लभते** = पाउँछ |
| **अर्भकम्** = बाललीलालाई | **गोविन्दे** = भगवान्‌मा | |

**वाक्यार्थ–** जुन मानिसले पूतनाको मोक्ष भएको भगवान् श्रीकृष्णको यो अद्‌भुत बाललीलालाई श्रद्धापूर्वक सुन्दछ त्यसले भगवान् श्रीकृष्णमा प्रेम प्राप्त गर्दछ।

**अध्याय विवरण–** यस अध्यायमा भगवान्‌ले पूतनाको प्राण नै पिइदिनुभएको र त्यसलाई मारेर बालकहरूको रक्षा गर्नुभएको प्रसङ्ग आएको छ। वसुदेवको भविष्यवाणी सुनेर नन्द व्रजमा आपत्ति हुने आशङ्काले भयभीत हुनुभएको छ र त्यसबाट बच्न भगवान्‌को शरणमा जानुभएको छ। भगवान्‌को शरणमा जाँदा आन्तरिक र बाह्य दुबैथरी भय नष्ट हुन्छ। विपत्ति आइलाग्ने आशङ्काले मनमा हुने विचलन आन्तरिक भय हो भने विपत्ति आइपर्दा हुने भय बाह्य भय हो। भगवान्‌को शरणमा गएपछि भित्री चिन्ता र बाहिरी आपत्ति दुबै नष्ट हुन्छन्। यस अध्यायमा नन्दहरूको भित्री आशङ्का भगवत्स्मरणले अनि बाहिरी आपत्ति भगवद्दर्शनले हटेको देखाइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे षष्ठोऽध्यायः ॥ ६ ॥**

# अथ सप्तमोऽध्यायः

## तृणावर्तको सद्गति एवं बालक कृष्णको मुखमा सम्पूर्ण विश्व देखेर यशोदा आश्चर्यचकित

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**येन येनावतारेण भगवान् हरिरीश्वरः।**
**करोति कर्णरम्याणि मनोज्ञानि च नः प्रभो॥ १॥**
**यच्छ्रृण्वतोऽपैत्यरतिर्वितृष्णा सत्त्वं च शुद्धयत्यचिरेण पुंसः।**
**भक्तिर्हरौ तत्पुरुषे च सख्यं तदेव हारं वद मन्यसे चेत्॥ २॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु शुकदेव
**येन येन** = जुन-जुन
**अवतारेण** = अवतारद्वारा
**ईश्वरः** = सबैका शासक
**भगवान् हरिः** = भगवान् श्रीहरि
**नः** = हाम्रो लागि
**कर्णरम्याणि** = कानलाई आनन्द दिने र
**मनोज्ञानि च** = मनपर्ने लीलाहरू
**करोति** = गर्नुहुन्छ
**यच्छ्रृण्वतः** = जसलाई सुनिरहँदा
**अरतिः** = मनको ग्लानि र
**वितृष्णा** = तीव्र इच्छा
**अपैति** = नष्ट हुन्छ
**पुंसः** = मानिसको
**सत्त्वं च** = अन्तःकरण पनि
**अचिरेण** = चाँडै नै
**शुद्धयति** = शुद्ध हुन्छ
**हरौ** = भगवान् श्रीहरिमा
**भक्तिः** = भक्ति र
**तत्पुरुषे** = भगवद्भक्तमा
**सख्यं च** = मित्रता पनि हुन्छ
**मन्यसे चेत्** = मलाई योग्य मान्नुहुन्छ भने
**तत्** = त्यही
**हारं एव** = मनोहारी चरित्र नै
**वद** = सुनाउनुहोस्

**वाक्यार्थ–** हे शुकदेव ! सबैका शासक श्रीहरि भगवान्ले हाम्रा कानलाई आनन्द दिने र मनलाई पनि रमाइला लाग्ने लीलाहरू गर्नुहुन्छ। ती लीलाहरू सुनिरहँदा मानिसका मनको ग्लानि र तीव्र इच्छा नष्ट हुन्छन्, अन्तःकरण चाँडै नै शुद्ध हुन्छ, भगवान्मा भक्ति लाग्दछ र भगवद्भक्तसँग मित्रता हुन्छ। यदि योग्य ठान्नुहुन्छ भने त्यही मनोहारी चरित्र मलाई सुनाउनुहोस्।

**विवरण–** यस श्लोकमा परीक्षित्ले भगवच्चरित्र श्रवणको महिमागान गर्नुभएको छ। भगवान्को चरित्र सुनिसकेपछि **अरतिः** अर्थात् मनको ग्लानि निवृत्त हुन्छ। वेदान्तमा **अरति** शब्दको मुख्य अर्थ वैराग्य हुनु या राग नहुनु भन्ने हुन्छ, तर त्यसको निवृत्ति हुनु आवश्यक छैन। त्यसैले यहाँ **अरति** भनेर मनको ग्लानि या बोझिलोपनलाई लिनुपर्दछ। भगवान्का आनन्ददायी चरित्र सुनिसकेपछि मनमा स्वतः प्रसन्नता भरिने हुनाले ग्लानि हुन सम्भव छैन। वितृष्णा शब्दको अर्थ हुन्छ– तीव्र तृष्णा। यी अनेक प्रकारका तृष्णाहरू नै ग्लानिका मुख्य कारण हुन्। व्यक्ति जति-जति वस्तुहरूको तृष्णा गर्छ, त्यसलाई नपाउँदा त्यति-त्यति खिन्न हुन्छ। भगवच्चरित्रको श्रवणद्वारा

तृष्णा र ग्लानि यी दुबै हट्दछन्। यसबाट अरू तीन ओटा कार्य पनि हुन्छन्— चित्तशुद्धि, श्रीहरिमा भक्ति र हरिभक्तहरूसँग सम्बन्ध।

यहाँ दोस्रो श्लोकमा आएको हार शब्दका अनेक अर्थ हुन सक्छन्— **हरेः चरितं हारम्** अर्थात्, श्रीहरिको चरित्र नै हार हो। **हारं मनोहरं** अर्थात् मनोहर। हार शब्दको अर्को प्रसिद्ध अर्थ माला भन्ने अर्थमा लिने हो भने पनि श्रीहरिचरित्र हारहरूजस्तै हृदयमा सजाउन योग्य छ भन्ने तात्पर्य आउँछ। बाहिर हृदयमा हार लगाइन्छ भने भित्री हृदयमा पनि भगवच्चरित्ररूपी दिव्य हार लगाउनुपर्छ भन्ने यसको तात्पर्य हुन्छ। यसरी यहाँ आएको हार शब्दका तीन थरी अर्थ गर्न सकिन्छ।

**अथान्यदपि कृष्णस्य तोकाचरितमद्भुतम्।**
**मानुषं लोकमासाद्य तज्जातिमनुरुन्धतः॥ ३॥**

**पदार्थ–**
**अथ** = त्यसै गरी
**मानुषं** = मनुष्यको
**लोकम्** = लोकमा
**आसाद्य** = उत्पन्न भएर
**तज्जातिम्** = मनुष्य जातिकै स्वभावलाई
**अनुरुन्धतः** = अनुसरण गर्ने
**कृष्णस्य** = कृष्णका
**अद्भुतम्** = आश्चर्यमय
**अन्यत् अपि** = अरू पनि
**तोकाचरितम्** = बाललीला (सुनाउनुहोस्)

**वाक्यार्थ–** यसै गरी मनुष्यहरूको लोकमा आएर मनुष्य जातिकै स्वभावलाई अनुसरण गर्ने श्रीकृष्णका आश्चर्यमय अरू पनि बाललीलाहरू मलाई सुनाउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कदाचिदौत्थानिककौतुकाप्लवे जन्मर्क्षयोगे समवेतयोषिताम्।**
**वादित्रगीतद्विजमन्त्रवाचकैश्चकार सूनोरभिषेचनं सती॥ ४॥**

**पदार्थ–**
**कदाचित्** = कुनै दिन
**औत्थानिककौतुकाप्लवे** = कोल्टो फेरेको दिन गरिने अभिषेक उत्सवमा
**जन्मर्क्षयोगे** = (श्रीकृष्णको) जन्मनक्षत्र पनि मिलेको वेलामा
**समवेतयोषिताम्** = जम्मा भएका स्त्री (गोपी)हरूको साथमा
**सती** = साध्वी यशोदाले
**वादित्रगीतद्विजमन्त्रवाचकैः** = बाजा-गाना र ब्राह्मणहरूका आशीर्वाद मन्त्रले सहित
**सूनोः** = आफ्नो छोराको
**अभिषेचनम्** = अभिषेक
**चकार** = गरिन्

**वाक्यार्थ–** श्रीकृष्णले कोल्टो फेरेको अवसरमा अभिषेक उत्सव मनाउन उहाँको जन्मनक्षत्र रोहिणी पनि परेको दिन गोपीहरू जम्मा भएका थिए। तिनीहरूको साथमा साध्वी यशोदाले बाजा-गाना र ब्राह्मणहरूका आशीर्वाद मन्त्रले सहित आफ्नो छोराको मङ्गल अभिषेक गराइन्।

**विवरण–** श्रीकृष्णले कोल्टो फेरेको दिन उहाँको जन्मनक्षत्र रोहिणी पनि परेको थियो। यसको

खुसियालीमा व्रजमा विभिन्न मङ्गल कर्महरू गरिएका थिए। यहाँ आएको **उत्थान** शब्दको अर्थ श्रीधर स्वामीले **शिशोः अङ्गपरिवर्तनं** अर्थात् बच्चाले आफ्नो अङ्गलाई ओल्टो-कोल्टो पार्नु भन्ने गर्नुभएको छ। वल्लभाचार्यले यो औत्थानिक कर्म भनेको निष्क्रमणकर्म हो भन्नुभएको छ। बच्चा जन्मेको चौथो महिनामा निष्क्रमण कर्म गरिन्छ। जसमा विधिपूर्वक बच्चालाई पहिलोपटक देवदर्शन गराइन्छ। **त्रैमासिकस्य च पदा शकटोपवृत्तः** (भागवत, २/७/२७) भन्ने वचन अनुसार शकटभङ्ग गर्दा भगवान् तीन महिनाको भइसक्नुभएको थियो। त्यही दिन जन्म नक्षत्र रोहिणी पनि परेको भन्ने प्रमाण मिलाउँदा यो समय भगवान् जन्मेको तीन महिना पूरा भई चौथो महिनाको १८ औँ दिन हुनजान्छ। किनभने नक्षत्रहरू २७ ओटा छन्, त्यसैले तीनचोटि सबै नक्षत्र बिती चौथो पटक त्यही नक्षत्र दोहोरिन १०८ दिन हुनुपर्दछ। त्यसकारण मङ्सिर महिनाको शुक्लपक्षको एकादशीको दिन भगवान् १०८ दिनको हुनुहुँदा निष्क्रमण संस्कार, मङ्गल-अभिषेक र शकटासुर उद्धार आदि लीला भएका थिए भनी आचार्यहरूले किटान गर्नुभएको छ।

शकटभङ्गको विषयमा वल्लभाचार्य भन्नुहुन्छ— **सुप्तं चित्तमथोल्लास्य** अर्थात् पूतनाको मृत्यु आदि भइसकेपछि यशोदा आदिको चित्त निरन्तर श्रीकृष्णमा लागी प्रपञ्चविस्मृतिको अवस्थामा पुगेको थियो। विस्मृतिमा पुगेकाले श्रीकृष्णप्रति विशेष आसक्तिको स्फुरण पनि भएको थिएन। आफ्ना भक्तहरूले आफूसँग नियमित रूपमा गरिने सामान्य प्रेम मात्र गर्ने तर विशेषतः सामूहिक रूपमा नै उत्सव मनाई त्यसलाई नबढाउने हो भने भगवान् आउनुको के अर्थ ? त्यसैले भगवान्‌ले अनेक निहुँ पारी भक्तहरूको निरुद्ध चित्तलाई पनि फेरि-फेरि जगाउनुहुन्छ। यहाँ जन्मनक्षत्रको दिन नै आफूले कोल्टो फेरेर भगवान्‌ले विशेष अवसर सृजना गर्नुभएको छ। यसबाट सबै व्रजवासीको चित्त जागी उत्सवमय भएको छ। चित्त जाग्नेबित्तिकै त्यसमा लौकिक व्यवहारहरूले त्यसलाई छोपिहाल्छन्, फेरि जीव परमात्मासँग विमुख भई व्यवहारमा प्रवृत्त हुन सक्छ। यहाँ पनि सबैका परम प्रयोजन भगवान् श्रीकृष्णलाई गाडाको तल सुताइएको छ। यशोदा उत्सवमा आएका अतिथिहरूलाई स्वागत-सत्कार गर्नमा व्यस्त हुनुहुन्छ। अतः उहाँको प्रवृत्ति लौकिक धर्मतिर भएको देखिन्छ। लौकिक धर्ममा लाग्दा परमात्मालाई बिर्सिन सक्ने हुनाले नै भगवान्‌ले भगवद्गीतामा सबै धर्म छाडी केवल मेरो शरणमा आऊ भन्नुभएको हो। यशोदाको यही लोकमर्यादाप्रतिको अभिरुचि या लोकैषणालाई हटाई उहाँलाई आफूमा मात्र आसक्त गर्न भगवान्‌ले गाडा पल्टाइदिने लीला रच्नुभएको छ। यसरी भगवान्‌ले आफ्नो लीलाबाट भक्तहरूको विषयतर्फ निरुद्ध-निष्पन्द चित्तलाई बारम्बार जगाउनुहुन्छ अनि बाह्य संसारका विधि-व्यवस्थाबाट निवृत्त गराई आफैँमा निरुद्ध गरिरहनुहुन्छ भन्ने यहाँ देखाइएको छ।

**नन्दस्य पत्नी कृतमज्जनादिकं विप्रैः कृतस्वस्त्ययनं सुपूजितैः।**
**अन्नाद्यवासःस्रगभीष्टधेनुभिः सञ्जातनिद्राक्षमशीशयच्छनैः॥ ५॥**

पदार्थ–

**नन्दस्य** = नन्दकी

**पत्नी** = पत्नी यशोदाले

**अन्नाद्यवासःस्रगभीष्टधेनुभिः** = अन्न, उत्कृष्ट वस्त्र, माला अनि चाहे जति गाईहरू दिई

**सुपूजितैः** = पूजा गरिएका
**विप्रैः** = ब्राह्मणहरूद्वारा
**कृतस्वस्त्ययनं** = स्वस्तिवाचन गरिएका
**कृतमज्जनादिकं** = स्नान आदि गराइएका र
**सञ्जातनिद्राक्षम्** = निद्राले लोलाएका आँखा भएका श्रीकृष्णलाई
**शनैः** = बिस्तारै
**अशीशयत्** = सुताइदिइन्

**वाक्यार्थ–** अन्न, उत्कृष्ट वस्त्र, माला अनि चाहे जति गाई दिई पूजा गरिएका ब्राह्मणहरूबाट स्वस्तिवाचन गराई नन्दपत्नी यशोदाले श्रीकृष्णलाई नुहाइ-धुवाई गरिदिइन्, त्यसपछि निद्राले लोलाएका आँखा भएका श्रीकृष्णलाई उनले बिस्तारै सुताइदिइन्।

**औत्थानिकौत्सुक्यमना मनस्विनी समागतान् पूजयती व्रजौकसः।**
**नैवाशृणोद् वै रुदितं सुतस्य सा रुदन् स्तनार्थी चरणावुदक्षिपत्॥ ६॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**समागतान्** = आएका
**व्रजौकसः** = व्रजवासीहरूलाई
**पूजयती** = पूजा (स्वागत-सत्कार) गर्दै
**औत्थानिकौत्सुक्यमना** = कृष्णले कोल्टो फेरेको अवसरमा उत्साहित भएकी
**मनस्विनी सा** = ज्यादै खुसी भएकी ती यशोदाले
**सुतस्य** = छोरा कृष्णको
**रुदितं** = रुवाइ
**न एव अशृणोत्** = सुनिनन्
**स्तनार्थी** = दुध खान चाहने बाल कृष्णले चाहिँ
**रुदन्** = रुँदै
**चरणौ** = दुबै पाउलाई
**उदक्षिपत्** = माथितिर फाल्न (फड्कार्न) थाल्नुभयो

**वाक्यार्थ–** श्रीकृष्णले कोल्टो फेरेको त्यो उत्सवमा उत्साहित एवं ज्यादै खुसी भएकी यशोदाले त्यहाँ आएका व्रजवासीहरूको स्वागत-सत्कार आदि गर्दागर्दै छोरा रोएको पनि सुनिनन्। उता दुध खान चाहने कृष्ण चाहिँ रुँदै-रुँदै आफ्ना दुबै पाउलाई माथितिर फड्कार्न थाल्नुभयो।

**विवरण–** यहाँ श्रीकृष्ण रोएको यशोदाले नसुनेपछि उहाँले रुँदै आफ्ना पाउले गाडामा हिर्काएको लीला वर्णन गरिएको छ। बल्लभाचार्य भन्नुहुन्छ– स्नान, अलङ्कार, रक्षाबन्धन आदि अनेक कर्म गरेपछि भगवान्ले थाके झैँ अभिनय गर्नुभएको थियो। यशोदालाई श्रीकृष्णका आँखा लोलाए झैँ लाग्यो। ब्राह्मणहरूबाट आफ्नो ईश्वरीयताको ज्ञान हटाइदिन उहाँले प्रतीकका रूपमा आँखा चिम्लनुभएको थियो। नत्र परमात्मालाई रक्षा गर्नु र आशीर्वाद दिनु आदि सम्भव नै थिएन। भगवान्को ईश्वरीय ज्ञानदृष्टि जब निदाए झैँ भयो, तब सबै गोप-गोपिनी बहिर्मुख भए। यशोदा आएका अतिथिहरूको सेवा-सत्कारमा लागिन्। उनको मन पहिल्यै भगवान्मा निरुद्ध भइसकेकाले भगवान्को सम्बन्धभन्दा बाहिरका विषयमा प्रवृत्त थिएन। यही जनाउन **औत्थानिकौत्सुक्यमना** भन्ने पद आएको छ। परमात्माका लागि उत्सव मनाइएको थियो, तर साक्षात् परमात्मालाई छाडी बाहिरी उत्सवसम्बन्धी कर्मतिर यशोदाको मन उत्सुक भयो। यता भगवान् आफ्ना भक्तहरूको चित्त फेरि संसारको रसरङ्गतिर उत्सुक भएको देखी दिक्क भए झैँ रुन थाल्नुभयो। यशोदाले भगवान्लाई यसरी बिर्सिन् कि उनले भगवान् रोएको पनि सुनिनन्। यशोदाको चित्तलाई आफूमा फर्काउन श्रीकृष्णले आफैँ केही गर्नुपर्ने भयो र उहाँले आफूमाथिको

गाडालाई लात्ताले हिर्काइदिनुभयो।

अन्यत्र भगवान्‌को लागि भक्तहरू रोएको अनि भगवान्‌ले त्यो प्रार्थना सुन्न ढिलो गरेको प्रसङ्ग देखिन्छ, तर भगवान्‌को बाललीलामा यसको उल्टो भएको देखिन्छ। भगवान् व्रजमा कसैले बोलाएर वा निमन्त्रणा गरेर आउनुभएको पनि होइन। व्रजको प्रेमरस पिउन उहाँ आफैँ छट्पटाई आउनुभएको हो। अरु कसैले वसुदेवको छोरो भन्ने थाहा पाए पस्नै दिन्नन् कि भनेर डराए झैँ कसैले थाहा नपाउने गरी रातारात नन्दघरमा पस्नुभएको थियो। यो व्रजलीला भगवान्‌का लागि भक्त नभई भक्तका लागि भगवान् छट्पटाएको लीला हो। मानौँ अनेकौँ जन्मसम्म भक्तले प्रार्थना गर्दा पनि उनको करुण पुकार नसुन्ने भगवान्‌लाई व्रजवासीले त्यो सबैको मजा चखाइदिएका हुन् कि। यहाँ पनि भगवान्‌ले यशोदाको स्तनपान गर्न खोज्नुभएको छ। उहाँ **स्तनार्थी** भएर नै यहाँ आउनुभएको हो। भगवान् त कर्ता-भोक्ता हुनुहुन्न, अनि किन स्तनपान गर्न खोज्नुभयो भन्ने शङ्काको समाधानमा बल्लभाचार्यले पूतनालाई मार्दा त्यसले स्तन पियाई मारेका सबै बालकहरू पूतनासँगसँगै भगवान्‌मा आई मिलेका थिए, तिनले पेटभरि कसैको स्तनपान गर्न पाएका थिएनन्। तिनकै लागि भगवान्‌ले स्तनपान गर्न चाहँदै हुनुहुन्थ्यो भनी उल्लेख गर्नुभएको छ। जे होस्, उहाँ स्तनार्थी बन्दै रुँदै हुनुहुन्थ्यो। तर थोरै परिश्रमले मात्र यशोदाको स्तन पिउन किन पाइन्थ्यो ? यसका लागि त उहाँले गाडा नै पल्टाउनुपऱ्यो। भक्तपरवशताको यो पक्ष पनि भगवान्‌को यस लीलामा प्रकट भएको छ।

**अधःशयानस्य शिशोरनोऽल्पकप्रवालमृद्वङ्घ्रिहतं व्यवर्तत।**
**विध्वस्तनानारसकुप्यभाजनं व्यत्यस्तचक्राक्षविभिन्नकूबरम्॥ ७॥**

**पदार्थ–**
**अधः** = गाडामुनि
**शयानस्य** = सुतिरहेका
**शिशोः** = बाल कृष्णको
**अल्पकप्रवालमृद्वङ्घ्रिहतं** = सानो र रातो-रातो कोपिला जस्तो नरम पाउद्वारा हानिएको
**विध्वस्तनानारसकुप्यभाजनं** = दही-दुध भरिएका ठेकी र अरू भाँडाहरू समेत फुटेको
**व्यत्यस्तचक्राक्षविभिन्नकूबरम्** = पाङ्ग्रा, धुरा र जुवा आदि टुक्रिई ध्वस्त भएको
**अनः** = गाडा
**व्यवर्तत** = पल्टियो

**वाक्यार्थ–** गाडामुनि सुतिरहेका बालकृष्णका साना र राता कोपिला जस्ता नरम पाउहरूद्वारा हानिँदा पनि त्यो गाडा त्यसमा रहेका दुध-दही भरिएका ठेकी र अरू भाँडाहरूसमेत फुटेर पाङ्ग्रा, धुरा र जुवा आदि टुक्रिई ध्वस्त भएर पल्टियो।

**विवरण–** यस श्लोकमा भगवान्‌को कोमल चरणले हान्नेबित्तिकै गाडा ध्वस्त भएको बताइएको छ। भगवान् **अधःशयान** अर्थात् गाडाको तल सुताइनुभएको थियो। दुध, दही, घ्यू, मह आदि रसहरू त्यो गाडामाथि राखिएका थिए। जड पदार्थमा पनि कहीँ रस हुन सक्छ र ? त्यो पनि भगवान्‌भन्दा माथि ! भगवान् स्वयं रसरूप हुनुहुन्छ भनी उपनिषद्‌ले बताउँछ– **रसो वै सः** (तैत्तिरीयोपनिषद्, २/७/१)। बल्लभाचार्य लेख्नुहुन्छ– **न हि भगवदुपरि रसान्तरं स्थातुं शक्नोति** अर्थात् भगवान्‌भन्दा माथि अर्को रस रहन सक्दैन। भगवद्‌गीतामा भनिएको छ– परमात्मालाई

देखेपछि त संसारको बँचे-खुचेको रस पनि सबै नष्ट हुन्छ— **रसवर्जं रसोऽप्यस्य परं दृष्ट्वा निवर्तते** (भगवद्गीता, २/५९)। घैँटोका घैँटो रस जड पदार्थ गाडामाथि रहेको भगवान्लाई सह्य भएन र उहाँले ती सबै रस घोप्ट्याइदिनुभयो। परमात्माभन्दा माथि बसी उहाँलाई छायामा पारेर आफूमाथि नै रस राख्ने त्यो जड संसाररूपी गाडा पनि भगवान्को प्रहारबाट बचेन।

**दृष्ट्वा यशोदाप्रमुखा व्रजस्त्रिय औत्थानिके कर्मणि याः समागताः।**
**नन्दादयश्चाद्भुतदर्शनाकुलाः कथं स्वयं वै शकटं विपर्यगात्॥ ८॥**

**पदार्थ–**
**यशोदाप्रमुखाः** = यशोदा आदि गोपीहरू
**नन्दादयः च** = नन्द आदि गोपहहरू र
**औत्थानिके** = कोल्टो फेरेको
**कर्मणि** = उत्सवमा
**समागताः** = आएका
**अद्भुतदर्शनाकुलाः** = विचित्र घटना देखेर अचम्म मानेका
**याः** = जति पनि
**व्रजस्त्रियः** = व्रजवासी स्त्रीहरू थिए (तिनीहरूले)
**दृष्ट्वा** = त्यो देखी
**शकटं** = गाडा
**स्वयं वै** = आफैँ नै
**कथं** = कसरी
**विपर्यगात्** = पल्टियो (भनी सोधे)

**वाक्यार्थ–** यशोदा आदि गोपीहरू, नन्द आदि गोपहरू र कृष्णले कोल्टो फेरेको उत्सवमा आएका व्रजवासी सबै स्त्रीहरूले पनि यो विचित्र घटनालाई देखे। यसबाट अचम्म मानेका उनीहरूले आपसमा 'गाडा आफैँ कसरी पल्टियो ?' भनी सोध्न थाले।

**ऊचुरव्यवसितमतीन् गोपान् गोपीश्च बालकाः।**
**रुदतानेन पादेन क्षिप्तमेतन्न संशयः॥ ९॥**

**पदार्थ–**
**अव्यवसितमतीन्** = कुनै निश्चय गर्न नसकेका
**गोपान्** = गोपहरू र
**गोपीः च** = गोपीहरूलाई पनि
**बालकाः** = बालकहरूले
**रुदता** = रोइरहेका
**अनेन** = यी कृष्णद्वारा
**पादेन** = पाउले
**एतत्** = यो गाडा
**क्षिप्तम्** = पल्टाइएको हो
**न संशयः** = यसमा संशय छैन
**ऊचुः** = भने

**वाक्यार्थ–** गोप र गोपीहरूले जब यसको कुनै कारण ठम्याउन सकेनन्, तब (कृष्णका नजिकै खेलिरहेका) बालकहरूले ती गोप-गोपीहरूलाई भने— रुँदारुँदै यिनले आफ्नै खुट्टाले हानेर यो गाडालाई पल्टाइदिएका हुन्, यसमा शङ्का छैन।

**न ते श्रद्दधिरे गोपा बालभाषितमित्युत।**
**अप्रमेयं बलं तस्य बालकस्य न ते विदुः॥ १०॥**

**पदार्थ–**
**ते** = ती
**गोपाः** = गोपहरूले
**बालभाषितम् इति** = बच्चाको भनाइ हो भन्ने ठानी
**उत** = कत्ति पनि

**न श्रद्दधिरे** = विश्वास गरेनन् (किनभने) **ते** = तिनीहरूले **तस्य** = ती **बालकस्य** = बालक श्रीकृष्णको **अप्रमेयं** = नाप्न नसकिने **बलं** = बललाई **न विदुः** = जान्दैनथे

**वाक्यार्थ–** ती गोपहरूले यो कुरालाई बच्चाको भनाइ हो भन्ने ठानी कत्ति पनि पत्याएनन्। किनभने उनीहरूले बालक श्रीकृष्णको अप्रमेय बललाई जानेका थिएनन्।

**विवरण–** यहाँ श्रीकृष्णले चरणले हानेकाले नै गाडा पल्टेको हो भनी बालकहरूले बताउँदा पनि नन्द आदि गोपहरूले त्यो कुरा पत्याएनन् भनी वर्णन गरिएको छ। बालकहरू भगवान्को नजिकै खेलिरहेका थिए, भगवान्मा दृष्टि भएकाले उनीहरूले यथार्थ कुरा देखे, तर अरू गोपहरूले उत्सव आदिको रमझममा बहिर्मुख भएकाले यथार्थ कुरालाई देख्न सकेनन्। बहिर्मुखता र ईश्वरत्वको अज्ञानका कारण बालकहरूले बताएको कुरामा पनि उनीहरूलाई विश्वास भएन। विपरीत भावना भएकाहरूलाई कुनै कुरा बताइयो भने पनि त्यसको केही अर्थ हुँदैन। गोपगोपिनी सबै यस विषयमा अनिश्चित थिए। उनीहरूलाई श्रीकृष्ण आफ्नो बच्चा हुन् भन्ने लाग्थ्यो। त्यसैले बच्चाहरूले सुनाएको कुरा ठानी उनीहरूले श्रीकृष्णको पराक्रममा विश्वास गरेनन्। यहाँ श्रीकृष्णको पराक्रमलाई नपत्याउने गोपहरू मात्र हुन्। यसको तात्पर्यमा वल्लभाचार्य लेख्नुहुन्छ, गोपिनीहरू यो विषयमा मध्यस्थ थिए। उनीहरूले न त बालकहरूको कुरा हो भनी पत्याए, न त गोपहरूको जस्तो होइन भनी निषेध नै गरे। गोपिनीहरू कोही पूर्वजन्मका ऋषि र कोही श्रुतिरूपा छन्। उनीहरूलाई परमात्मतत्त्वको विषयमा थाहा छ। उनीहरूले विरहको गीत गाउँदा पनि **अखिलदेहिनां अन्तरात्मदृक्** (भागवत, १०/३१/४) भनी श्रीकृष्णलाई नै सबै प्राणीहरूका अन्तर्यामी साक्षी भनेका छन्। फेरि प्रबल प्रेमका कारण उनीहरूको श्रीकृष्णप्रति मानवीय स्नेहको मात्र स्फुरण भइरहन्छ। त्यसैले बच्चाहरूले सम्झाउँदा गोपिनीहरू श्रीकृष्णको अप्रकट ईश्वरतत्त्वलाई सम्झी चुप लागेको र गोपहरूले चाहिँ नपत्याएको देखाइएको हो। यसो हुनुमा गोपहरूको पनि दोष छैन। किनभने परमात्माको सामर्थ्य **अप्रमेय** छ अर्थात् सामान्य बुद्धिको घेराभित्र त्यो पर्न सक्दैन। वल्लभाचार्य लेख्नुहुन्छ– बल प्रत्यक्ष देखिने वस्तु होइन, अनुमानद्वारा सिद्ध गर्न पनि कार्य हेरेर मात्र सामर्थ्यको निर्णय हुन सक्दछ। यदि श्रीकृष्ण बलशाली हुन्थे भने उठेर फटाफट हिँड्नुपर्थ्यो, रोएर झोलुङ्गोमा किन सुत्थे ? यस्तो तर्क गरेर गोपहरूले श्रीकृष्णमा सामर्थ्य नभएको नै निश्चित गरेका थिए। त्यसैले बच्चाहरूले भन्दाभन्दै पनि अनि पूतनालाई मारेको देखेर पनि उनीहरूले श्रीकृष्णको पराक्रमलाई पत्याएनन्।

**रुदन्तं सुतमादाय यशोदा ग्रहशङ्किता।**
**कृतस्वस्त्ययनं विप्रैः सूक्तैः स्तनमपाययत्॥ ११॥**

**पदार्थ–**
**ग्रहशङ्किता** = ग्रहको अनिष्ट प्रभाव भन्ने शङ्का गरेकी **यशोदा** = यशोदाले **रुदन्तं** = रोइरहेका **सुतम्** = छोरालाई **आदाय** = काखमा लिएर **विप्रैः** = ब्राह्मणहरूद्वारा **सूक्तैः** = वेदमन्त्रहरूद्वारा

**कृतस्वस्त्ययनं** = स्वस्तिवाचन गराइनुभएका उहाँलाई
**स्तनम्** = दुध
**अपाययत्** = पियाइन्

**वाक्यार्थ–** ग्रह आदिको अनिष्ट हो भन्ने शङ्का गरेकी यशोदाले रोइरहेका छोरा कृष्णलाई काखमा लिई ब्राह्मणहरूद्वारा वेदमन्त्रहरूले स्वस्तिवाचन गराइन् र दुध पियाउन थालिन्।

**पूर्ववत् स्थापितं गोपैर्बलिभिः सपरिच्छदम्।**
**विप्रा हुत्वार्चयाञ्चक्रुर्दध्यक्षतकुशाम्बुभिः ॥ १२ ॥**

पदार्थ–
**बलिभिः** = बलिया
**गोपैः** = गोपहरूद्वारा (गाडालाई)
**सपरिच्छदम्** = सारा सामग्रीले भरी
**पूर्ववत्** = पहिलेजस्तै
**स्थापितं** = सुल्टो बनाइयो
**विप्राः** = ब्राह्मणहरूले
**हुत्वा** = हवन गरेर
**दध्यक्षतकुशाम्बुभिः** = दही, अक्षता, कुश र जलद्वारा
**अर्चयाञ्चक्रुः** = (बालक श्रीकृष्ण र गाडालाई पनि) पूजा गरे

**वाक्यार्थ–** बलिया गोपहरूले त्यो पल्टिएको गाडालाई फेरि सुल्टो बनाए र त्यसमा सामग्री पहिलेजस्तै राखिदिए। ब्राह्मणहरूले चाहिँ हवन गरेर दही, अक्षता, कुश र जलद्वारा बालक श्रीकृष्ण एवं गाडालाई पनि पूजा गरे।

**येऽसूयानृतदम्भेर्ष्याहिंसामानविवर्जिताः।**
**न तेषां सत्यशीलानामाशिषो विफलाः कृताः ॥ १३ ॥**

पदार्थ–
**ये** = जो ब्राह्मणहरू
**असूयानृतदम्भेर्ष्याहिंसामानविवर्जिताः** = दोषदृष्टि, असत्यवचन, देखावटी व्यवहार, ईर्ष्या, हिंसा र अभिमानले रहित छन्
**तेषां** = त्यस्ता
**सत्यशीलानां** = सत्यनिष्ठ ब्राह्मणहरूको
**आशिषः** = आशीर्वादहरू
**विफलाः** = निष्फल
**न कृताः** = हुँदैनन्

**वाक्यार्थ–** जो कसैका गुणमा दोषदृष्टि गर्दैनन् र असत्य पनि बोल्दैनन्, देखावटी व्यवहार, ईर्ष्या, हिंसा र अभिमानबाट रहित भएका छन् त्यस्ता सत्यनिष्ठ ब्राह्मणहरूका आशीर्वादहरू कहिल्यै निष्फल हुँदैनन्।

**इति बालकमादाय सामर्ग्यजुरुपाकृतैः।**
**जलैः पवित्रौषधिभिरभिषिच्य द्विजोत्तमैः ॥ १४ ॥**
**वाचयित्वा स्वस्त्ययनं नन्दगोपः समाहितः।**
**हुत्वा चाग्निं द्विजातिभ्यः प्रादादन्नं महागुणम् ॥ १५ ॥**

**पदार्थ–**
**इति** = यस्तो सोची
**नन्दगोपः** = नन्दगोपले
**बालकम्** = बालक श्रीकृष्णलाई
**आदाय** = लिई
**द्विजोत्तमैः** = श्रेष्ठ ब्राह्मणहरूद्वारा
**सामग्र्यजुरुपाकृतैः** = साम, ऋक् र यजुर्वेदका मन्त्रहरूद्वारा संस्कृत भएका
**पवित्रौषधिभिः** = पवित्र औषधिले युक्त
**जलैः** = जलले
**अभिषिच्य** = अभिषेक गरी
**समाहितः** = एकाग्रतापूर्वक
**स्वस्त्ययनं** = स्वस्तिमन्त्र
**वाचयित्वा** = वाचन गराई
**अग्निं** = अग्निलाई
**हुत्वा** = हवन गरेर
**द्विजातिभ्यः च** = ब्राह्मणहरूलाई पनि
**महागुणम्** = अति उत्तम
**अन्नं** = अन्न
**प्रादात्** = दिए

**वाक्यार्थ–** यस्तो विचार गरी नन्दगोपले बालक श्रीकृष्णलाई काखमा लिई श्रेष्ठ ब्राह्मणहरूद्वारा सामवेद, ऋग्वेद र यजुर्वेदका मन्त्रहरूबाट संस्कृत भएको र पवित्र औषधिले युक्त भएको जलले कृष्णलाई अभिषेक गराए र एकाग्र भई स्वस्तिवाचन पनि गराए। यसपछि उनले अग्निमा हवन गरी ब्राह्मणहरूलाई अति उत्तम अन्न दिए।

**गावः सर्वगुणोपेता वासःस्रग्रुक्ममालिनीः।**
**आत्मजाभ्युदयार्थाय प्रादात् ते चान्वयुञ्जत॥ १६॥**

**पदार्थ–**
**आत्मजाभ्युदयार्थाय** = आफ्नो छोराको अभ्युदयका लागि
**वासःस्रग्रुक्ममालिनीः** = वस्त्र, माला र सुनका हारहरू लगाइएका
**सर्वगुणोपेताः** = सबै गुणहरूले युक्त भएका
**गावः** = गाईहरू पनि
**प्रादात्** = दिए
**ते च** = तिनीहरूले पनि
**अन्वयुञ्जत** = आशीर्वाद दिए

**वाक्यार्थ–** यसपछि नन्दले आफ्नो छोराको अभ्युदयका लागि वस्त्र, माला र सुनका हारहरूले सहित सबै गुणहरूले युक्त अनेक गाईहरू दान गरे। ब्राह्मणहरूले पनि आशीर्वाद दिए।

**विप्रा मन्त्रविदो युक्तास्तैर्याः प्रोक्तास्तथाशिषः।**
**ता निष्फला भविष्यन्ति न कदाचिदपि स्फुटम्॥ १७॥**

**पदार्थ–**
**मन्त्रविदः** = (जो) वेदज्ञ र
**युक्ताः** = कर्मपरायण
**विप्राः** = ब्राह्मणहरू छन्
**तैः** = तिनीहरूद्वारा
**प्रोक्ताः** = (बताइएका) दिइएका
**याः** = जति
**आशिषः** = आशीर्वाद हुन्छन्
**ताः** = ती
**तथा** = त्यस्तै हुन्छन्
**कदाचित् अपि** = कहिल्यै पनि
**निष्फलाः** = निष्फल
**न भविष्यन्ति** = हुँदैनन्
**स्फुटम्** = यो स्पष्ट छ

**वाक्यार्थ–** जो ब्राह्मण वेदवेत्ता र कर्मपरायण हुन्छन्, उनीरूले दिएका आशीर्वाद भनेअनुसार सफल नै हुन्छन्, कहिल्यै निष्फल हुँदैनन् भन्ने कुरा स्पष्ट छ।

**विवरण–** यस श्लोकमा सदाचारी ब्राह्मणहरूद्वारा दिइएको आशीर्वाद व्यर्थ हुँदैन भनी बताइएको

छ। सामान्य मानिस र मन्त्रद्रष्टा ऋषिहरूमा के फरक छ भने सामान्य मानिसहरू पदार्थहरूलाई देखेर त्यसअनुसार नै तिनका नामहरूको उच्चारण गर्छन्, तर ऋषिहरूले उच्चारण गरेको शब्दको पछि-पछि अर्थ दौडिन्छ। उनीहरू जे बोल्छन्, त्यहाँ त्यो पदार्थ स्वयं उपस्थित हुन्छ। शब्द र अर्थको नित्य सम्बन्ध हुन्छ। संसारको सृष्टि गर्दा पनि परमात्माले **भूः, भुवः** आदि शब्दहरूको उच्चारण गरेर नै यसको सृष्टि गर्नुभएको हो। विकल्परहित चित्तले दृढतापूर्वक कुनै शब्दको उच्चारण गरिन्छ भने त्यो सङ्कल्प सत्यसङ्कल्प हुन्छ र सफल हुन्छ। ब्रह्मर्षिहरूको आशीर्वाद व्यर्थ नहुनुको कारण यही हो।

**एकदारोहमारूढं लालयन्ती सुतं सती।**
**गरिमाणं शिशोर्वोढुं न सेहे गिरिकूटवत्॥ १८॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**आरोहम्** = काखमा
**आरूढं** = लिइएका
**सुतं** = बालकलाई
**लालयन्ती** = सुम्सुम्याइरहेकी
**सती** = सती यशोदाले
**शिशोः** = बच्चाको
**गिरिकूटवत्** = पहाडको चट्टान झैँ
**गरिमाणं** = भारलाई
**वोढुं** = बोक्न
**न सेहे** = सकिनन्

**वाक्यार्थ–** एक दिन बालक श्रीकृष्णलाई काखमा लिई सुम्सुम्याइरहेकी यशोदाले अकस्मात् पहाडको ठुलो चट्टान झैँ गह्रौं भएका बालकको भारलाई बोक्न सकिनन्।

**भूमौ निधाय तं गोपी विस्मिता भारपीडिता।**
**महापुरुषमादध्यौ जगतामास कर्मसु॥ १९॥**

**पदार्थ–**
**भारपीडिता** = भार बोक्नै नसकेकी र
**विस्मिता** = चकित भएकी
**गोपी** = गोपी यशोदाले
**तं** = ती बालक श्रीकृष्णलाई
**भूमौ** = भुइँमा
**निधाय** = राखेर
**महापुरुषं** = परमपुरुष परमात्मालाई
**आदध्यौ** = सम्झिन् र
**जगताम्** = घरसंसारकै
**कर्मसु** = काममा
**आस** = लागिन्

**वाक्यार्थ–** बच्चाको भार बोक्नै नसक्नाले असाध्यै छक्क परेकी ती यशोदाले श्रीकृष्णलाई भुइँमैं राखिदिइन् र परमपुरुष परमात्मालाई सम्झिन्। यसपछि उनी घरसंसारकै काममा लागिन्।

**दैत्यो नाम्ना तृणावर्तः कंसभृत्यः प्रणोदितः।**
**चक्रवातस्वरूपेण जहारासीनमर्भकम्॥ २०॥**
**गोकुलं सर्वमावृण्वन् मुष्णंश्चक्षूंषि रेणुभिः।**
**ईरयन् सुमहाघोरशब्देन प्रदिशो दिशः॥ २१॥**

पदार्थ–
**कंसभृत्यः** = कंसको सेवक
**प्रणोदितः** = (कंसद्वारा) पठाइएको
**नाम्ना तृणावर्तः** = तृणावर्त नाम गरेको
**दैत्यः** = दैत्यले
**रेणुभिः** = धुलोले
**सर्वम्** = सम्पूर्ण
**गोकुलं** = गोकुललाई
**आवृण्वन्** = ढाक्दै र
**चक्षूंषि** = आँखाहरूलाई पनि
**मुष्णन्** = अन्धो पार्दै
**सुमहाघोरशब्देन** = भयङ्कर गर्जनाले
**दिशः** = चार दिशा र
**प्रदिशः** = चार विदिशालाई पनि
**ईरयन्** = कम्पित गर्दै
**चक्रवातस्वरूपेण** = भुमरीको रूपले
**आसीनम्** = भुइँमा रहेका
**अर्भकम्** = बालक श्रीकृष्णलाई
**जहार** = (हरण गऱ्यो) उडायो

**वाक्यार्थ–** कंसद्वारा पठाइएको उसको सेवक तृणावर्त नाम गरेको दैत्यले भुमरीको रूप लिई धुलोले सम्पूर्ण गोकुललाई ढाक्दै, सबैका आँखालाई अन्धो पार्दै र भयङ्कर गर्जनाले दिशा र विदिशाहरूलाई पनि कम्पित गर्दै भुइँमा रहेका ती बालक श्रीकृष्णलाई उडाएर लग्यो।

**मुहूर्तमभवद् गोष्ठं रजसा तमसावृतम्।**
**सुतं यशोदा नापश्यत् तस्मिन् न्यस्तवती यतः॥ २२॥**

पदार्थ–
**मुहूर्तम्** = एक मुहूर्त (४८ मिनेट)सम्म
**गोष्ठं** = गाईहरू रहने व्रज
**रजसा** = धुलो र
**तमसा** = अँध्यारोले
**आवृतम्** = ढाकिएको
**अभवत्** = भयो
**यशोदा** = यशोदाले
**सुतं** = आफ्नो छोरालाई
**यतः** = जहाँ
**न्यस्तवती** = राखेकी थिइन्
**तस्मिन्** = त्यो ठाउँमा
**न अपश्यत्** = देखिनन्

**वाक्यार्थ–** एक मुहूर्तसम्म गाईहरू रहने त्यो पूरा व्रजक्षेत्र धुलो र अँध्यारोले ढाकियो। पछि हेर्दा यशोदाले जहाँ आफ्नो छोरालाई राखेकी थिइन् त्यहाँ उनलाई देखिनन्।

**नापश्यत् कश्चनात्मानं परं चापि विमोहितः।**
**तृणावर्तनिसृष्टाभिः शर्कराभिरुपद्रुतः॥ २३॥**

पदार्थ–
**तृणावर्तनिसृष्टाभिः** = भुमरीरूपी तृणावर्तद्वारा उडाइएका
**शर्कराभिः** = बालुवाका कणहरूद्वारा
**उपद्रुतः** = भागेको र
**विमोहितः च** = बेसुर भएको
**कश्चन** = कसैले पनि
**आत्मानं** = आफूलाई र
**परं अपि** = अरूलाई पनि
**न अपश्यत्** = देख्न सकेन

**वाक्यार्थ–** त्यस वेलामा भुमरीको रूप धारण गरेको दैत्य तृणावर्तले उडाएको बालुवाका कणहरूबाट सबै मानिस बेसुर भई भागेका थिए। यसैले कसैले पनि आफूलाई र अरूलाई समेत देख्न सकेनन्।

**विवरण–** माथिका श्लोकमा तृणावर्तले चक्रवात (भुमरी)को रूप लिई पूरै गोकुललाई धुलाम्मे

पार्दै श्रीकृष्णलाई हरण गरेको प्रसङ्ग वर्णन गरिएको छ। एकदिन यशोदाले दुध पियाउँदा भगवान् असाध्यै गह्रुङ्गो बन्नुभयो। वल्लभाचार्य लेख्नुहुन्छ— पूतनाको मृत्यु भइसकेपछि कंसलाई मेरो कालरूप श्रीहरि व्रजमा नै छ भन्ने थाहा भएको थियो। त्यसैले उसले आफ्ना मुख्य बलशाली तीन सेवकमध्ये तृणावर्तलाई पठायो। भगवान् पराक्रमी तृणावर्तको त्यही आगमनलाई सूचित गर्न गह्रुङ्गो बन्नुभयो। श्रीधर स्वामी लेख्नुहुन्छ— भगवान् श्रीकृष्णको पेटभित्र नै सम्पूर्ण संसार छ, त्यसकै भारले पीडित भई यशोदाले श्रीकृष्णलाई भुइँमा राखिन् र उनको रक्षा गर्न परमात्मासँग प्रार्थना गर्दै घरायसी काममा लागिन्। वल्लभाचार्य लेख्नुहुन्छ— जबसम्म लौकिक-अलौकिक कुनै पनि भावनाद्वारा यशोदा आदिको मन श्रीकृष्णमा एकतान भइरहन्छ, तबसम्म गोकुलमा केही हुँदैन। जब यशोदाले श्रीकृष्णलाई छाडी घरायसी काम गर्न लागिन्, तब गोकुलमा तृणावर्तको उत्पात सुरु भयो। तृणावर्तको अर्थ हो— **तृणवत् सकलं विश्वमावर्तयति**, अर्थात् सम्पूर्ण विश्वलाई सुकेको स्यार झैँ घुमाइदिने हुनाले यसलाई तृणावर्त भनिएको हो। तृणावर्त अविद्याको कार्य मोहरूप हो भनी वल्लभाचार्यले उल्लेख गर्नुभएको छ। अविद्याका पाँच पर्वहरू छन्— तामिस्र, अन्धतामिस्र, तम, मोह र महामोह। यसकै प्रतीकस्वरूप तृणावर्तका पाँचथरी उत्पात गोकुलमा भएको देखाइएको छ। अविद्या ज्ञानको विरोधी हो। ज्ञानमा तीन वस्तुको आवश्यकता हुन्छ— प्रमाता, प्रमाण र प्रमेय। आँखा आदि इन्द्रिय प्रमाता हुन्, अन्तःकरण प्रमाण हो, घैँटो आदि विषय प्रमेय हो। मोहरूप तृणावर्तद्वारा यी तीन ओटै कुरा ढाकिएको प्रसङ्ग २१ औँ श्लोकमा देखाइएको छ। त्यहाँ **गोकुलं आवृण्वन्** भन्ने पदले ज्ञानका विषयलाई ढाकेको देखाइएको छ भने **चक्षूंषि मुष्णन्** भन्ने पदले इन्द्रियहरूलाई प्रतिबद्ध गरिदिएको बताइएको छ। अनि **महाघोर** शब्दद्वारा अन्तःकरणलाई व्याकुल बनाएको कुरा सूचित गरिएको छ। अज्ञानरूप मोहका तीन अंशले ज्ञानका यी तीनै अंशलाई ढाकिदिएपछि बाँकी रहेका दुई अंशको कार्य अर्को श्लोकमा देखाइएको छ। **रजसा** अर्थात् धुलोद्वारा अनि **तमसा** अर्थात् त्यसकै अन्धकारद्वारा भगवान् रहेको गोठ पनि ढाकिन्छ। यसरी अविद्याका पाँचै अंश जब सक्रिय हुन्छन् तब मोहित यशोदाले आफूले राखेको ठाउँमा श्रीकृष्णलाई देख्दिनन्। यसरी अविद्याको कारण ज्ञानस्वरूप नै हराएपछि त्यसको परिणाम सबै गोकुलवासीमा देखिन्छ। उनीहरूले आफूलाई र अरूलाई पनि कसैलाई देख्दैनन्। यसप्रकार यहाँ कार्यसहित अविद्याको निरूपण गरिएको छ।

यहाँ के शङ्का हुन सक्छ भने, अविद्याको नाश त पूतनाको मृत्युबाटै भइसकेको छ, फेरि भगवान्‌का भक्तहरूलाई नै दुःख दिने त्यसको कार्य मोह कसरी आउन सक्यो ? यसको उत्तरमा वल्लभाचार्य भन्नुहुन्छ— भगवान्‌को लीला चल्नका लागि अविद्याको केही अंश आवश्यक पर्दछ। त्यसकारण पूतना मर्दा पनि अविद्या पूरै नष्ट भएन, अपि तु भगवान्‌ले चाहेको वेला उज्जीवित हुन सक्ने गरी भगवान्मैँ लीन भयो। अहिले तृणावर्तको माध्यमले त्यही अविद्याको मोहात्मक प्रभाव भगवान्‌ले आफैँ देखाउनुभएको हो। यहाँ तृणावर्तको दुष्प्रभाव गोकुलभरि बढ्नुको पछाडि भगवान्‌कै इच्छा प्रमुख कारण हो। आफूमा दृढ आसक्ति जगाउनकै लागि उहाँको इच्छाले गोकुलभरि दुष्टद्वारा उत्पात मच्चाइएको थियो। गोप-गोपिनीहरूको श्रीकृष्णमा आसक्ति त त्यत्तिकै थियो, किन उनीहरूलाई दुःख दिनुपरेको भन्ने शङ्कामा भनिन्छ, तत्कालका गोप-

गोपिनीहरू त भगवान्मा आसक्त थिए नै, तर पछि आउने भक्तहरूले पनि भगवान्ले भयङ्कर दुष्टहरूलाई मार्नुभएको यस्ता आश्चर्यमय घटनाहरू सुने भने त्यसबाट उनीहरूको मन भगवान्मा निरुद्ध हुन सक्छ। आफ्नो सामर्थ्य र यशलाई प्रसिद्ध बनाई सबैको मन तान्न नै उहाँले यो लीला गर्नुभएको हो भन्ने टीकाकारहरूको भनाइ छ।

**इति खरपवनचक्रपांशुवर्षे सुतपदवीमबलाविलक्ष्य माता।**
**अतिकरुणमनुस्मरन्त्यशोचद् भुवि पतिता मृतवत्सका यथा गौः॥ २४॥**

| पदार्थ– | **अबला** = दीन भएकी | **अशोचत्** = शोक गरिन् र |
|---|---|---|
| **इति** = यसप्रकार | **माता** = आमा यशोदाले | **मृतवत्सका** = बाच्छो मरेको |
| **खरपवनचक्रपांशुवर्षे** = भयङ्कर भुमरी र धुलोको वर्षामा | **अनुस्मरन्ती** = श्रीकृष्णको सम्झना गर्दै | **गौः यथा** = गाई झैं |
| **सुतपदवीम्** = छोरो गएको बाटो | **अतिकरुणं** = अत्यन्त कारुणिक रूपले | **भुवि** = भुइँमा |
| **अविलक्ष्य** = नदेखेर | | **पतिता** = लडिन् |

**वाक्यार्थ–** यसप्रकार भयङ्कर भुमरी र धुलोको वर्षाको बीचमा आफ्नो छोराको पत्तो नपाउनाले यशोदा माता ज्यादै दुःखी भइन्। उनले श्रीकृष्णको सम्झना गर्दै अत्यन्त शोक गरिन् र बाच्छो मरेको गाई झैं भुइँमा लडिन्।

**रुदितमनुनिशम्य तत्र गोप्यो भृशमनुतप्तधियोऽश्रुपूर्णमुख्यः।**
**रुरुदुरनुपलभ्य नन्दसूनुं पवन उपारतपांशुवर्षवेगे॥ २५॥**

| पदार्थ– | **तत्र** = त्यहाँ (आएका) | हुँदै |
|---|---|---|
| **उपारतपांशुवर्षवेगे** = धुलो बर्सिन छाडेपछि | **गोप्यः** = गोपीहरूले | **अश्रुपूर्णमुख्यः** = अनुहारभरि आँसु झार्दै |
| **पवने** = हावा मात्र रहेपछि | **नन्दसूनुं** = नन्दपुत्र श्रीकृष्णलाई | **रुरुदुः** = रोए |
| **रुदितम्** = यशोदा रोएको | **अनुपलभ्य** = नदेखेर | |
| **अनुनिशम्य** = सुनेर | **भृशम्** = असाध्यै | |
| | **अनुतप्तधियः** = दुःखित चित्त | |

**वाक्यार्थ–** हावाको वेग अलि कम भई धुलो बर्सिन छाडेपछि यशोदा रोएको सुनेर गोपीहरू हतार हतार त्यहाँ आए। नन्दपुत्र श्रीकृष्णलाई नदेखेर असाध्यै दुःखी भएका उनीहरू अनुहारभरि आँसु झार्दै रुन थाले।

**तृणावर्तः शान्तरयो वात्यारूपधरो हरन्।**
**कृष्णं नभोगतो गन्तुं नाशक्नोद् भूरिभारभृत्॥ २६॥**

| पदार्थ– | **वात्यारूपधरः** = भुमरीको रूप | लिएको |
|---|---|---|

**कृष्णं** = श्रीकृष्णलाई
**हरन्** = उडाउँदै
**नभोगतः** = आकाशमा गएको
**भूरिभारभृत्** = ज्यादै गह्रुङ्गा श्रीकृष्णलाई बोक्दा
**शान्तरयः** = वेग रोकिएको
**तृणावर्तः** = तृणावर्त
**गन्तुं** = धेरै हिँड्न (उड्न)
**नाशक्नोत्** = सकेन

**वाक्यार्थ–** भुमरीको रूप लिएको तृणावर्तले जब श्रीकृष्णलाई आकाशमा उडाएर लैजान थाल्यो, तब श्रीकृष्णको गह्रुङ्गो भारको कारणले उसको वेग रोकियो। ऊ धेरै उड्न सकेन।

**तमश्मानं मन्यमान आत्मनो गुरुमत्तया।**
**गले गृहीत उत्स्रष्टुं नाशक्नोदद्भुतार्भकम्॥ २७॥**

**पदार्थ–**
**आत्मनः** = आफूभन्दा पनि
**गुरुमत्तया** = धेरै गह्रुङ्गो भएकाले
**तम्** = उहाँ श्रीकृष्णलाई
**अश्मानं** = ठुलो चट्टान
**मन्यमानः** = ठानिरहेको र
**गले** = (श्रीकृष्णद्वारा) घाँटीमैं
**गृहीतः** = समातिएको त्यसले
**अद्भुतार्भकम्** = अद्भुत बालकलाई
**उत्स्रष्टुं** = छुटाउन
**न अशक्नोत्** = सकेन

**वाक्यार्थ–** तृणावर्तले आफूभन्दा पनि धेरै गह्रुङ्गो भएकाले श्रीकृष्णलाई ठुलो चट्टान ठान्यो। श्रीकृष्णले घाँटीमैं अँठ्याएकाले त्यसले आफूबाट ती अद्भुत बालकलाई छुटाउन सकेन।

**गलग्रहणनिश्चेष्टो दैत्यो निर्गतलोचनः।**
**अव्यक्तरावो न्यपतत् सहबालो व्यसुर्व्रजे॥ २८॥**

**पदार्थ–**
**गलग्रहणनिश्चेष्टः** = घाँटी अठ्याइएकाले अचेत भएको
**अव्यक्तरावः** = बोली बन्द भएको
**निर्गतलोचनः** = आँखा बाहिर निस्किएको
**व्यसुः** = प्राणरहित
**दैत्यः** = दैत्य तृणावर्त
**सहबालः** = बालक श्रीकृष्णसहित
**व्रजे** = व्रजभूमिमा
**न्यपतत्** = खस्यो

**वाक्यार्थ–** श्रीकृष्णद्वारा घाँटी अँठ्याइएकाले अचेत नै भएको तृणावर्तको बोली बन्द भयो र आँखा बाहिर निस्कियो। यसरी प्राणरहित भएको तृणावर्त बालक सहित व्रजभूमिमा खस्यो।

**तमन्तरिक्षात् पतितं शिलायां विशीर्णसर्वावयवं करालम्।**
**पुरं यथा रुद्रशरेण विद्धं स्त्रियो रुदत्यो ददृशुः समेताः॥ २९॥**

**पदार्थ–**
**समेताः** = एकै ठाउँमा जम्मा भएर
**रुदत्यः** = रोइरहेका
**स्त्रियः** = गोपीहरूले
**रुद्रशरेण** = भगवान् रुद्र (शिव)को बाणद्वारा
**विद्धं** = प्रहार गरिएको
**पुरं यथा** = त्रिपुरासुर जस्तै
**अन्तरिक्षात्** = आकाशबाट
**शिलायां** = चट्टानमा
**पतितं** = खसेको र

**विशीर्णसर्वावयवं** = सम्पूर्ण अङ्गहरू चकनाचुर भएको
**करालम्** = भयङ्कर
**तम्** = त्यो दैत्यलाई
**ददृशुः** = देखे

**वाक्यार्थ–** एकै ठाउँमा जम्मा भई रोइरहेका गोपीहरूले भगवान् शिवको बाणद्वारा छिन्न-भिन्न भएको त्रिपुरासुर झैं अन्तरिक्षबाट चट्टानमा खसेर सबै अङ्ग-प्रत्यङ्ग चकनाचुर भएको त्यो भयङ्कर दैत्यलाई देखे।

**प्रादाय मात्रे प्रतिहृत्य विस्मिताः कृष्णं च तस्योरसि लम्बमानम्।**
**तं स्वस्तिमन्तं पुरुषादनीतं विहायसा मृत्युमुखात् प्रमुक्तम्।**
**गोप्यश्च गोपाः किल नन्दमुख्या लब्ध्वा पुनः प्रापुरतीव मोदम्॥ ३०॥**

**पदार्थ–**
**तस्य** = त्यो तृणावर्तको
**उरसि** = छातीमा
**लम्बमानम्** = झुलिरहनुभएका
**कृष्णं** = श्रीकृष्णलाई
**प्रादाय** = उठाएर
**मात्रे** = यशोदा मातालाई
**प्रतिहृत्य च** = बुझाएपछि
**विस्मिताः** = चकित भएका स्त्रीहरू
**किल** = निश्चय नै
**नन्दमुख्याः** = नन्द आदि
**गोपाः** = गोपहरू र
**गोप्यः च** = गोपीहरूले पनि
**विहायसा** = आकाशमार्गले
**पुरुषादनीतं** = नरभक्षी राक्षसद्वारा लगिएका
**मृत्युमुखात्** = मृत्युको मुखबाट
**प्रमुक्तम्** = छुटेका र
**स्वस्तिमन्तं** = सकुशल रहेका
**तं** = उहाँ श्रीकृष्णलाई
**पुनः** = फेरि
**लब्ध्वा** = पाएर
**अतीव** = असाध्यै
**मोदम्** = खुसी
**प्रापुः** = प्राप्त गरे (भए)

**वाक्यार्थ–** ती स्त्रीहरूले तृणावर्तको छातीमाथि झुलिरहनुभएका श्रीकृष्णलाई उठाई यशोदा मातालाई बुझाए। नरभक्षी राक्षसद्वारा आकाशमार्ग हुँदै उडाई लगिएका र मृत्युको मुखबाट छुटेका उहाँ श्रीकृष्णलाई फेरि सकुशल पाएर नन्द आदि गोप र सबै गोपीहरू असाध्यै खुसी भए।

**अहो बतात्यद्भुतमेष रक्षसा बालो निवृत्तिं गमितोऽभ्यगात् पुनः।**
**हिंस्रः स्वपापेन विहिंसितः खलः साधुः समत्वेन भयाद् विमुच्यते॥ ३१॥**

**पदार्थ–**
**अहो बत** = ओहो
**अत्यद्भुतम्** = ज्यादै आश्चर्य छ
**रक्षसा** = राक्षसद्वारा
**निवृत्तिं** = मृत्युमा
**गमितः** = पुऱ्याइएका
**एषः** = यी
**बालः** = बालक
**पुनः** = फेरि
**अभ्यगात्** = फर्किए
**खलः** = दुष्ट
**हिंस्रः** = हिंस्रक राक्षस
**स्वपापेन** = आफ्नै पापद्वारा
**विहिंसितः** = मारियो
**साधुः** = सज्जन मानिस
**समत्वेन** = समभावको कारणले
**भयात्** = डरबाट
**विमुच्यते** = छुट्दछ

**वाक्यार्थ–** अहो ! ज्यादै आश्चर्यको कुरा के हो भने राक्षसद्वारा मृत्युको मुखमा पुऱ्याइएका भए

पनि यी बालक फेरि फर्किए। दुष्ट एवं हिंस्रक राक्षस आफ्नै पापद्वारा मारिन्छ र सज्जन मानिस भने समभावको कारणले सबै डरबाट छुट्छ।

**किं नस्तपश्चीर्णमधोक्षजार्चनं पूर्तेष्टदत्तमुत भूतसौहृदम्।**
**यत्सम्परेतः पुनरेव बालको दिष्ट्या स्वबन्धून् प्रणयन्नुपस्थितः॥ ३२॥**

**पदार्थ–**
**नः** = हामीहरूद्वारा
**तपः** = तपस्या
**अधोक्षजार्चनं** = भगवान् विष्णुको पूजा
**पूर्तेष्टदत्तम्** = पूर्त (लोकहित हुने कार्य), इष्ट (यज्ञयागादि) र दत्त (दान दिने) कर्म
**भूतसौहृदम् उत** = अथवा प्राणीहरूको हित
**किं** = के काम
**चीर्णम्** = गरिएको थियो
**यत्** = जसका कारण
**सम्परेतः** = मरिसकेको
**बालकः एव** = बच्चा पनि
**पुनः** = फेरि
**दिष्ट्या** = भाग्यवश
**स्वबन्धून्** = आफन्तहरूलाई
**प्रणयन्** = खुसी बनाउँदै
**उपस्थितः** = फर्किएको छ

**वाक्यार्थ–** हामीहरूले पहिले त्यस्तो कुन तपस्या, भगवान्को पूजा, इष्ट (लोकहित हुने कार्य), पूर्त (यज्ञयागादि) र दत्त (दान दिने) कर्म गरेका रहेछौँ ? जसका कारण मरिसकेको बालक पनि भाग्यवश आफ्ना आफन्तहरूलाई खुसी बनाउँदै फर्किएको छ।

**दृष्ट्वाद्भुतानि बहुशो नन्दगोपो बृहद्वने।**
**वसुदेववचो भूयो मानयामास विस्मितः॥ ३३॥**

**पदार्थ–**
**बृहद्वने** = महावन गोकुलमा
**बहुशः** = धेरै नै
**अद्भुतानि** = आश्चर्यहरू
**दृष्ट्वा** = देखेर
**विस्मितः** = चकित भएका
**नन्दगोपः** = नन्दगोपले
**वसुदेववचः** = वसुदेवको वचनलाई
**भूयः** = बारम्बार
**मानयामास** = समर्थन गरे

**वाक्यार्थ–** महावन गोकुलमा अनेकथरी आश्चर्यहरू देखी चकित भएका नन्दगोपले वसुदेवको वचनलाई बारम्बार सम्झिँदै समर्थन गरे।

**एकदार्भकमादाय स्वाङ्कमारोप्य भामिनी।**
**प्रस्नुतं पाययामास स्तनं स्नेहपरिप्लुता॥ ३४॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**स्नेहपरिप्लुता** = वात्सल्यले पग्लिएकी
**भामिनी** = रूपवती यशोदाले
**अर्भकम्** = बच्चालाई
**आदाय** = लिएर
**स्वाङ्कम्** = आफ्नो काखमा
**आरोप्य** = राखेर
**प्रस्नुतं** = पग्निनाले भरिएको
**स्तनं** = दुध
**पाययामास** = चुसाइन्

**वाक्यार्थ–** एक दिन वात्सल्य प्रेमका कारण पग्लिएकी रूपवती यशोदाले बच्चालाई आफ्नो काखमा राखेर पग्निनाले भरिएको दुध चुसाइन्।

**पीतप्रायस्य जननी सा तस्य रुचिरस्मितम्।**
**मुखं लालयती राजञ्जृम्भतो ददृशे इदम्॥ ३५॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**पीतप्रायस्य** = धेरै दुध पिइसकेका
**तस्य** = उहाँ श्रीकृष्णको
**रुचिरस्मितम्** = मिठो मुस्कानले युक्त
**मुखं** = मुखलाई
**लालयती** = सुम्सुम्यारहेकी
**सा** = ती
**जननी** = माता यशोदाले
**जृम्भतः** = श्रीकृष्णले हाइ गर्दा
**इदम्** = यस्तो
**ददृशे** = देखिन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! श्रीकृष्णले धेरै दुध पिइसकेपछि उहाँको मिठो मुस्कानले युक्त अनुहारलाई सुम्सुम्याइरहेकी यशोदाले श्रीकृष्णले हाई गर्दा त्यहाँभित्र यस्तो देखिन्।

**खं रोदसी ज्योतिरनीकमाशाः सूर्येन्दुवह्निश्वसनाम्बुधींश्च।**
**द्वीपान्नगांस्तद्दुहितृर्वनानि भूतानि यानि स्थिरजङ्गमानि॥ ३६॥**

**पदार्थ–**
**खं** = आकाश
**रोदसी** = अन्तरिक्ष
**ज्योतिरनीकम्** = ज्योतिर्मण्डल
**आशाः** = दिशाहरू
**सूर्येन्दुवह्निश्वसनाम्बुधीन्** = सूर्य, चन्द्र, अग्नि, वायु र समुद्र
**द्वीपान्** = द्वीपहरू
**नगान्** = पर्वतहरू
**तद्दुहितृः** = पहाडबाट निस्कने नदीहरू
**वनानि** = वनहरू
**यानि च** = जति पनि
**स्थिरजङ्गमानि** = स्थावर र जङ्गम
**भूतानि** = प्राणीहरू छन् (ती सबैलाई देखिन्)

**वाक्यार्थ–** उनले आकाश, अन्तरिक्ष, ज्योतिर्मण्डल, दिशाहरू, सूर्य, चन्द्र, अग्नि, वायु, समुद्र, द्वीप, पर्वत, नदी, वन र जति पनि स्थावर अनि जङ्गम प्राणीहरू छन् ती सबैलाई देखिन्।

**सा वीक्ष्य विश्वं सहसा राजन् सञ्जातवेपथुः।**
**सम्मील्य मृगशावाक्षी नेत्रे आसीत् सुविस्मिता॥ ३७॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**सहसा** = अकस्मात्
**विश्वं** = सम्पूर्ण विश्वलाई
**वीक्ष्य** = देखेर
**सञ्जातवेपथुः** = जिउ कामेकी
**मृगशावाक्षी** = मृगका पाठाका जस्ता आँखा भएकी
**सा** = ती यशोदा
**नेत्रे** = दुबै आँखा
**सम्मील्य** = चिम्लेर
**सुविस्मिता** = आश्चर्यचकित
**आसीत्** = भइन्

**वाक्यार्थ—** हे परीक्षित् ! अकस्मात् सम्पूर्ण विश्वलाई बच्चाको मुखभित्र देखेर मृगका पाठाका जस्ता सुन्दर आँखा भएकी ती यशोदा थरथर काम्न थालिन्। आश्चर्यचकित भई उनले दुबै आँखा बन्द गरिन्।

**विवरण—** यहाँ भगवान्ले आफ्नो मुखभित्र विश्वरूप देखाउनुभएको प्रसङ्गको वर्णन गरिएको छ। एक दिन यशोदाले दुध पियाउँदा-पियाउँदै उनलाई श्रीकृष्णले धेरै दुध पिएको जस्तो लाग्यो। अनि अब दुध नपिए हुन्थ्यो भन्ने ठान्दै उनी श्रीकृष्णको अनुहार सुम्सुम्याउन थालिन्। भक्तले जबसम्म प्रेमपूर्वक सेवा दिन्छ, तबसम्म भगवान् त्यसलाई प्रेमपूर्वक स्वीकार गर्नुहुन्छ। यहाँ यशोदाले प्रेमपूर्वक दुध पियाउन्जेल भगवान् मिठोसँग मुस्कुराइरहनुभएको थियो। जब यशोदाको मनमा अलिकति परिवर्तन आयो, तब भगवान्लाई पनि अल्छी लागेर हाई आयो। यही हाई गरिरहेकै वेलामा उहाँले आफ्नी आमा यशोदालाई मभित्र सारा संसार छ, यतिको संसारलाई मैले नै पाल्नुपर्छ, त्यसैले दुध धेरै पियो भन्ने नसोच्नुस् भनी सम्झाउन खोजे झैँ गरी सारा विश्व देखाइदिनुभयो। आफ्नो सानो बच्चाको मुखभित्र सारा संसार देखेर यशोदालाई आश्चर्य लाग्यो। उनको पुत्रवात्सल्यको अगाडि श्रीकृष्ण सर्वसमर्थ ईश्वर हुनुको केही अर्थ थिएन। उनका लागि त श्रीकृष्ण आफूमाथि निर्भर रहने सानो बच्चा मात्र हुनुहुन्थ्यो। यसैले उनले रुटपट आँखा चिम्लिइन् र यसलाई नपत्याई केवल आश्चर्य मात्र मानिन्।

यसप्रकार यस अध्यायमा श्रीकृष्णले अलौकिक चरित्र देखाई यशोदा आदिको मनलाई आफूमा निरुद्ध गर्नुभएको प्रसङ्ग छ। यहाँ वर्णन गरिएका भगवान्का कर्मलाई अनेक भागमा बाँड्न सकिन्छ। कर्म पाँच प्रकारका हुन्छन्— उत्क्षेपण (माथि फाल्नु), अपक्षेपण (तल फाल्नु), आकुञ्चन (खुम्च्याउनु), प्रसारण (फैलाउनु) र गमन (हिँड्नु)। गमन अर्थात् हिँड्ने समय भगवान्को भएकै छैन, किनभने यो वेला उहाँ भर्खर एक वर्षको हुनुभएको छ। भगवान्ले अनेक कर्महरू गरी व्रजवासीको मनलाई आकुञ्चन अर्थात् संसारबाट तानी आफैँमा सीमित गर्नुभएको छ। सबैको मनलाई आकृष्ट गर्नु नै भगवान्का चरित्रको मुख्य कार्य हो। सम्पूर्ण भक्तहरूको मनलाई आफूमा आकर्षित गर्ने हुनाले नै उहाँलाई कृष्ण भनिएको हो। यो एउटै अध्यायमा उहाँले गाडालाई पल्टाइदिएर उत्क्षेपण, तृणावर्तलाई भुइँमा फालिदिएर अपक्षेपण अनि मुखभित्र विश्वलाई नै फैलाइदिएर प्रसारण यी तीनथरी कर्म गर्नुभएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**तृणावर्तमोक्षो नाम सप्तमोऽध्यायः ॥ ७ ॥**

# अथ अष्टमोऽध्यायः

## भगवान् श्रीकृष्णको न्वारन र बाललीला

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गर्गः पुरोहितो राजन् यदूनां सुमहातपाः ।**

**व्रजं जगाम नन्दस्य वसुदेवप्रचोदितः ॥ १ ॥**

**पदार्थ–**

**राजन्** = हे राजा परीक्षित्
**यदूनां** = यदुहरूका
**पुरोहितः** = पुरोहित
**वसुदेवप्रचोदितः** = वसुदेवद्वारा प्रेरित
**सुमहातपाः** = महान् तपस्वी
**गर्गः** = गर्ग ऋषि
**नन्दस्य** = नन्दको
**व्रजं** = व्रजमा
**जगाम** = गए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यदुहरूका पुरोहित महान् तपस्वी गर्ग ऋषि वसुदेवको प्रेरणाले नन्दको व्रजमा गए।

**विवरण–** यस श्लोकमा वसुदेवको प्रेरणाबाट यदुकुलका पुरोहित गर्ग ऋषि व्रजमा आइपुगेको प्रसङ्ग बताइएको छ। श्रीशुकदेवले **जगाम** भन्ने पदको प्रयोग गर्नुभएको छ। जसको अर्थ हुन्छ, गए। योभन्दा अघिल्लो अध्यायमा श्रीशुकदेवले व्रजको नै वर्णन गरिरहनुभएको थियो। सामान्य अवस्थामा उहाँले गर्ग व्रजमा आए भन्नुपर्थ्यो, गए होइन। वसुदेवको साथमा रहेको व्यक्तिले मात्र वसुदेवले पठाएपछि गर्ग व्रजमा गए भनी वर्णन गर्न सक्छ। यसको अर्थ श्रीशुकदेवजी जब कुनै प्रसङ्गको वर्णन गर्न थाल्नुहुन्छ, तब समाधिस्थ भई त्यहीँ पुग्नुहुन्छ भन्ने थाहा हुन्छ। वसुदेवले गर्गलाई व्रजमा पठाउनुभयो भन्नका लागि पनि श्रीशुकदेवजी पहिले वसुदेवकहाँ नै पुग्नुभयो र व्रजमा पठाइएका गर्गसँगै त्यहीँ पुगी नयाँ प्रसङ्गको वर्णन गर्न थाल्नुभयो भन्ने प्रतीत हुन्छ।

एक वर्षसम्म पनि श्रीकृष्णको नामकरण नभएको प्रसङ्गलाई उठाउँदै वल्लभाचार्य भन्नुहुन्छ– **चिरकालोत्पन्नः** अर्थात् धेरै पछि जन्मिएका हुनाले यिनको नामकरण गर्न किन हतारिनु ? बरु ढिलो नै होस् भनेर नन्दले अहिलेसम्म भगवान्‌को नामकरण संस्कार गर्नुभएको थिएन। भगवान्‌कै प्रेरणाले गर्दा उहाँले यो सबै गर्न बिर्सिनुभएको थियो। ठिक समयमा नाम नराखिनु भगवान् कालको बन्धनभन्दा माथि हुनुहुन्छ भनी देखाउनका लागि पनि हो। उता आफ्नो छोराको नाम नै नराखिँदा वसुदेवजीलाई चिन्ता पर्‍यो र उहाँले आफ्ना कुलपुरोहितलाई त्यहाँ पठाउनुभयो। पिताद्वारा गरिनुपर्ने संस्कार कसरी नन्दबाट भयो भन्ने शङ्काको उत्तरमा वल्लभाचार्य भन्नुहुन्छ, वसुदेवले आफ्नो आधिदैविक वसुदेव अंशलाई गर्गप्रेषणद्वारा नन्दमा स्थापित गर्नुभयो। त्यसैले वसुदेवका अंश भएकाले नै नन्दजीले सबै ठाउँमा श्रीकृष्ण र बलराम दुबैलाई पुत्ररूपमा प्रेम गरेको देखाइएको छ।

**तं दृष्ट्वा परमप्रीतः प्रत्युत्थाय कृताञ्जलिः।**

**आनर्चाधोक्षजधिया प्रणिपातपुरःसरम्॥ २॥**

**पदार्थ–**
**तं** = ती गर्गलाई
**दृष्ट्वा** = देखेर
**परमप्रीतः** = असाध्यै प्रसन्न भएका
**कृताञ्जलिः** = हात जोडेका (नन्दले)
**प्रत्युत्थाय** = उठेर
**प्रणिपातपुरःसरम्** = दण्डवत् प्रणामपूर्वक
**अधोक्षजधिया** = भगवद्बुद्धिले
**आनर्च** = पूजा गरे

**वाक्यार्थ–** गर्गलाई देखेर असाध्यै प्रसन्न भएका नन्द हात जोडी उठे अनि उनले दण्डवत् प्रणाम गरी गर्गलाई साक्षात् भगवान् सम्झी पूजा गरे।

**सूपविष्टं कृतातिथ्यं गिरा सूनृतया मुनिम्।**

**नन्दयित्वाब्रवीद् ब्रह्मन् पूर्णस्य करवाम किम्॥ ३॥**

**पदार्थ–**
**कृतातिथ्यं** = अतिथिसत्कार गरिएका
**सूपविष्टं** = राम्रोसँग बसेका
**मुनिम्** = गर्ग मुनिलाई
**सूनृतया** = असाध्यै मधुर
**गिरा** = वचनले
**नन्दयित्वा** = खुसी पारेर
**ब्रह्मन्** = हे ब्रह्मर्षि
**पूर्णस्य** = पूर्ण हुनुभएका हजुरको
**किम्** = के सेवा
**करवाम** = गरूँ
**अब्रवीत्** = भने

**वाक्यार्थ–** अतिथिसत्कार गरिएका र राम्रोसँग बसेका गर्ग मुनिलाई असाध्यै मधुर वचन बोलेर खुसी पार्दै नन्दले भने– 'हे ब्रह्मर्षि ! पूर्णस्वरूप हुनुभएका हजुरको के सेवा गरूँ'।

**महद्विचलनं नृणां गृहिणां दीनचेतसाम्।**

**निःश्रेयसाय भगवन् कल्पते नान्यथा क्वचित्॥ ४॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**महद्विचलनं** = महापुरुषहरूको घुमाइ
**गृहिणां** = घरगृहस्थमा रहेका
**दीनचेतसाम्** = दीनहीन चित्त भएका
**नृणां** = मानिसहरूको
**निःश्रेयसाय** = कल्याणकै लागि हुन्छ
**क्वचित्** = कुनै पनि
**अन्यथा** = अरू कारणले
**न कल्पते** = हुन सक्दैन

**वाक्यार्थ–** हे भगवान् ! हजुर जस्ता महापुरुषहरू हामी जस्ता घरगृहस्थमा रहेका दीनहीन चित्त भएका व्यक्तिहरूको कल्याणकै लागि आउने गर्नुहुन्छ। हजुरहरूको आगमनमा अरू कुनै कारण हुन सक्दैन।

**विवरण–** यस श्लोकमा महापुरुषहरूको यात्रा संसारी व्यक्तिहरूको कल्याणका लागि हुन्छ भनी बताइएको छ। ब्रह्मज्ञानीहरूको विषयमा **भिक्षाशनाः दिक्षु परिभ्रमन्तः** अर्थात् आफैं प्राप्त भएको

भिक्षान्नले प्राणधारण गरी स्वेच्छाले दिशा–विदिशा घुमिरहने भन्ने उक्ति प्रचलित छ। ईश्वरदर्शी एवं ब्रह्मज्ञानी महापुरुषहरू परमात्माकै हिँड्दा–डुल्दा स्वरूप हुन्, उनीहरू घर–घरमा घुमे भने संसारी व्यक्तिहरूले पनि सहजै पुण्यलाभ गर्न सक्छन् भन्ने ईश्वरकै व्यवस्था अनुसार यो सबै भए झैँ लाग्छ। यसबाट संसारी व्यक्तिहरूले केही समयको लागि भए पनि परमात्माको प्रकाशको भरमा बाँचेका महापुरुषहरूको दिव्य आनन्दलाई देख्ने मौका पाउँछन् भने ठाउँ–ठाउँका अनेक जिज्ञासुहरूले उचित मार्गदर्शन पाउँछन्। योभन्दा बाहेक आत्मज्ञानीहरूले सबैको घर–घर चाहार्नुको अरू कुनै कारण देखिदैँन। नत्र हुँदा–खाँदाको घरव्यवहार, जीविका र तीन ओटै एषणालाई छाडेर पछि फेरि भिक्षा माग्दै घर–घरमैँ डुल्नु निष्प्रयोजन हुन जान्छ। ज्ञानीहरूको संसारभ्रमण या भिक्षाटन पेट पाल्नका लागि पक्कै होइन, अपि तु संसारीहरूलाई पुण्य र ज्ञानप्रदान गर्न हो। यही कुरा यस श्लोकमा बताइएको हो।

**ज्योतिषामयनं साक्षाद् यत्तज्ज्ञानमतीन्द्रियम्।**
**प्रणीतं भवता येन पुमान् वेद परावरम्॥ ५॥**

| **पदार्थ–** | ज्योतिर्मण्डलको अध्ययन गर्ने | **साक्षात्** = प्रत्यक्ष नै |
| --- | --- | --- |
| **यत्** = जुन | ज्योतिषशास्त्र छ | **वेद** = जान्दछ |
| **अतीन्द्रियम् ज्ञानम्** = इन्द्रियातीत | **येन** = जसद्वारा | **तत्** = त्यसलाई |
| वस्तुको ज्ञान गराउने | **पुमान्** = मानिस | **भवता** = तपाईंले |
| **ज्योतिषाम् अयनं** = | **परावरम्** = भूत र भविष्यत्लाई | **प्रणीतं** = रच्नुभएको हो |

**वाक्यार्थ–** इन्द्रियातीत वस्तुको ज्ञान गराउने ज्योतिषशास्त्र हजुरले रच्नुभएको हो। जुन ज्योतिषशास्त्रद्वारा मानिस भूत र भविष्यत्लाई पनि स्पष्ट रूपमा जान्न सक्दछ।

**त्वं हि ब्रह्मविदां श्रेष्ठः संस्कारान् कर्तुमर्हसि।**
**बालयोरनयोर्नृणां जन्मना ब्राह्मणो गुरुः॥ ६॥**

| **पदार्थ–** | **बालयोः** = बालकहरूको | **ब्राह्मणः** = ब्राह्मण |
| --- | --- | --- |
| **ब्रह्मविदां** = ब्रह्मज्ञानीहरूमध्ये | **संस्कारान्** = नामकरण आदि | **जन्मना** = जन्मले नै |
| **श्रेष्ठः** = श्रेष्ठ | संस्कारहरू | **नृणां** = सबै मानिसको |
| **त्वं हि** = हजुर नै | **कर्तुम्** = गर्न | **गुरुः** = गुरु हुन्छ |
| **अनयोः** = यी दुई | **अर्हसि** = योग्य हुनुहुन्छ | |

**वाक्यार्थ–** ब्रह्मज्ञानीहरूमध्ये श्रेष्ठ हजुर नै यी दुई बालकको नामकरण आदि संस्कार गर्न योग्य हुनुहुन्छ। किनभने ब्राह्मण जन्मले नै सबै मानिसहरूको गुरु हुन्छ।

**गर्ग उवाच** (गर्गले भने)

**यदूनामहमाचार्यः ख्यातश्च भुवि सर्वतः।**

**सुतं मया संस्कृतं ते मन्यते देवकीसुतम्॥ ७॥**

**पदार्थ–**
**अहम्** = म
**यदूनाम्** = यदुकुलको
**आचार्यः** = आचार्य हुँ
**भुवि** = संसारमा
**सर्वतः** = सबैतिर
**ख्यातः च** = प्रसिद्ध पनि छु
**मया** = मद्वारा
**संस्कृतं** = संस्कार गरिँदा (कंसले)
**ते** = तिम्रो
**सुतं** = छोरालाई
**देवकीसुतम्** = देवकीका छोरा
**मन्यते** = मान्नेछ

**वाक्यार्थ–** म यदुकुलको आचार्य हुँ र संसारभर सबैतिर प्रसिद्ध पनि छु। मैले तिम्रो छोराको संस्कार गरेँ भने कंसले यिनलाई देवकीको छोरो भनी ठान्नेछ।

**कंसः पापमतिः सख्यं तव चानकदुन्दुभेः।**

**देवक्या अष्टमो गर्भो न स्त्री भवितुमर्हति॥ ८॥**

**इति सञ्चिन्तयञ्छ्रुत्वा देवक्या दारिकावचः।**

**अपि हन्ता गताशङ्कस्तर्हि तन्नोऽनयो भवेत्॥ ९॥**

**पदार्थ–**
**तव** = तिम्रो र
**आनकदुन्दुभेः च** = वसुदेवको पनि
**सख्यं** = मित्रता (जान्ने)
**पापमतिः** = दुर्बुद्धि
**कंसः** = कंसले
**देवक्याः** = देवकीकी
**दारिकावचः** = छोरीको भनाइ
**श्रुत्वा** = सुनेर
**देवक्याः** = देवकीको
**अष्टमः** = आठौँ
**गर्भः** = गर्भ
**स्त्री** = स्त्री
**भवितुम्** = हुन
**न अर्हति** = सक्दैन
**इति** = यस्तो
**सञ्चिन्तयन्** = विचार गर्दै
**आगताशङ्कः** = झन् शङ्का बढेको त्यसले
**अपि हन्ता** = यदि माऱ्यो
**तर्हि** = भने त
**तत्** = त्यो कुरा
**नः** = हामीबाट
**अनयः** = अन्याय
**भवेत्** = हुनेछ

**वाक्यार्थ–** दुष्टबुद्धि भएको कंसले तिम्रो र वसुदेवको मित्रतालाई जान्दछ। देवकीकी छोरी योगमायाको कुरा सुनेपछि उसले देवकीको आठौँ गर्भ स्त्री हुन सक्दैन भनी सोचिरहेको छ। यही वेलामा मबाट संस्कार गरिँदा झन् शङ्काले उसले यहाँ आई यो बच्चालाई माऱ्यो भने त हामीबाट अन्याय हुन्छ।

**नन्द उवाच** (नन्दले भने)

**अलक्षितोऽस्मिन् रहसि मामकैरपि गोव्रजे।**

**कुरु द्विजातिसंस्कारं स्वस्तिवाचनपूर्वकम्॥ १०॥**

पदार्थ–
**मामकैः अपि** = मेरा आफन्तहरूद्वारा पनि
**अलक्षितः** = थाहा नपाइएको
**अस्मिन्** = यो
**रहसि** = एकान्त
**गोव्रजे** = गोशालामा
**द्विजातिसंस्कारं** = द्विजातिले गर्नैपर्ने संस्कार
**स्वस्तिवाचनपूर्वकम्** = स्वस्तिवाचनका साथ
**कुरु** = गरिदिनुहोस्

**वाक्यार्थ–** मेरा आफन्तहरूद्वारा पनि थाहा नपाइने गरी यस एकान्त स्थानमा रहेको गोशालामा रही द्विजातिले गर्नै पर्ने नामकरण आदि संस्कारहरू स्वस्तिवाचनका साथ सम्पन्न गरिदिनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं सम्प्रार्थितो विप्रः स्वचिकीर्षितमेव तत्।**

**चकार नामकरणं गूढो रहसि बालयोः॥ ११॥**

पदार्थ–
**एवं** = यसप्रकार
**स्वचिकीर्षितं** = आफूले चाहेको
**तत् एव** = त्यही कुरालाई नै
**सम्प्रार्थितः** = अनुरोध गरिएका
**विप्रः** = ब्राह्मण गर्गले
**रहसि** = एकान्तमा
**गूढः** = लुकेर
**बालयोः** = बालक बलराम र कृष्णको
**नामकरणं** = नामकरण संस्कार
**चकार** = गरे

**वाक्यार्थ–** यसप्रकार आफूले चाहेकै काम गर्नका लागि अनुरोध गरिएका ब्राह्मण गर्गले एकान्तमा रहेर बलराम र कृष्णको नामकरण संस्कार गरिदिए।

**गर्ग उवाच** (गर्गले भने)

**अयं हि रोहिणीपुत्रो रमयन् सुहृदो गुणैः।**

**आख्यास्यते राम इति बलाधिक्याद् बलं विदुः॥**

**यदूनामपृथग्भावात् सङ्कर्षणमुशन्त्युत॥ १२॥**

पदार्थ–
**रोहिणीपुत्रः** = रोहिणीका छोरा
**अयं** = यी बालक
**हि** = निश्चय नै
**गुणैः** = आफ्ना गुणहरूद्वारा
**सुहृदः** = आफन्तहरूलाई
**रमयन्** = रमाइलो गराउने हुँदा
**रामः इति** = राम भन्ने नामले
**आख्यास्यते** = प्रख्यात हुनेछन्
**बलाधिक्यात्** = धेरै बल भएकाले
**बलं** = बल पनि
**विदुः** = भन्नेछन् (जान्नेछन्)
**यदूनाम्** = (तपाईं नन्दहरूको) यदुवंशीहरूसँग

| | | |
|---|---|---|
| **अपृथग्भावात्** = मेलमिलाप गराइरहने हुनाले | **सङ्कर्षणम् उत** = सङ्कर्षण (समन्वयकर्ता) पनि | **उशन्ति** = भन्नेछन् (मान्नेछन्) |

**वाक्यार्थ–** यी बालक रोहिणीका छोरा हुन् र आफ्ना गुणहरूले आफन्तहरूलाई रमाइलो गराइरहने हुँदा यिनी राम नामले प्रख्यात हुनेछन्। धेरै बल भएकाले यिनलाई बल पनि भनिनेछ अनि यिनले नन्दहरूको यदुवंशीहरूसँग मेलमिलाप गराइरहने हुँदा यिनी सङ्कर्षण पनि भनिनेछन्।

**विवरण–** यहाँ गर्गाचार्यले बलरामभित्र पनि भगवत्तत्त्वको बोध गराएका छन्। यी रोहिणीका छोरा भनी बलरामको नामकरण सुरु गरिएको छ। बलराममा दुई पक्ष छन्, एउटा मातृगर्भबाट जन्मेको सामान्य शरीर, अनि अर्को उनमा आविष्ट भगवत्स्वरूप। गर्भबाट त केवल शरीरको मात्र जन्म भएको हो। भगवान्को स्वरूप त नित्य हो। त्यसैले **रोहिणीपुत्रः** भन्ने आमाको नामद्वारा सम्बोधन गरेर शरीरको मात्र जन्म भएको बताउन खोजिएको छ। आफ्ना गुणहरूले सुहृद् बन्धु–बान्धवहरूलाई रमाइलो प्रदान गर्ने भएकाले यिनलाई राम भन्छन् भन्ने व्युत्पत्ति, सामान्य अर्थले बलराममा र विशेष अर्थले भगवान्मा घट्ने देखिन्छ। बालकमा स्वभावतः हुने गुणहरूद्वारा नन्द–यशोदा र रोहिणीलाई आनन्दित गर्नु सामान्य अर्थ हो। विशेष अर्थमा भने बलराममा आविष्ट भगवान्कै अंशले प्रलम्बासुर आदिलाई मार्ने विशेष गुणहरूद्वारा गोप–गोपिनीहरूको मनलाई आफूमा निरुद्ध गरिदिन्छ भन्ने तात्पर्य निस्कन्छ। निरोधका प्रसङ्गमा वल्लभाचार्यले बलरामले देखाएको पराक्रम पनि भगवान्बाट नै भएको मानी त्यसद्वारा पनि सबैको चित्त भगवान् श्रीकृष्णमा नै निरुद्ध भएको बताउनुभएको छ। नत्र गोप–गोपिनीको चित्त श्रीकृष्णको पराक्रमद्वारा श्रीकृष्णमा र बलरामको पराक्रमद्वारा बलराममा निरुद्ध भई विभाजन हुने या दुई ओटा ईश्वर हुने प्रसङ्ग आउन सक्छ। सर्वात्मा श्रीकृष्ण नै परमप्रिय भएकाले उहाँले सबैलाई रमाइलो दिन सक्नुहुन्छ। अतः राम शब्दको व्युत्पत्तिले पनि बलराममा आविर्भूत भगवान्कै स्वरूपको महत्त्व गाइएको बुझ्नुपर्दछ। सबैभन्दा बलशाली भगवान् मात्र भएकाले बल शब्दको मुख्य अर्थ पनि श्रीकृष्ण नै हो। सबैलाई एकीकृत गर्ने या आकर्षित गर्ने भन्ने सङ्कर्षण शब्दको अर्थ पनि परमात्मामा नै घट्ने देखिन्छ। यसरी यहाँ बलरामको नभई उनमा आविष्ट भगवान्कै गुण गाइएको हो, तर नन्द आदिले भने बलरामकै अर्थमा मात्र लिएको बुझिन्छ।

**आसन् वर्णास्त्रयो ह्यस्य गृह्णतोऽनुयुगं तनूः।**
**शुक्लो रक्तस्तथा पीत इदानीं कृष्णतां गतः॥ १३॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **शुक्लः** = सेतो | **वर्णाः** = वर्णहरू |
| **अनुयुगं** = युगैपिच्छे | **रक्तः** = रातो | **आसन्** = थिए |
| **तनूः** = शरीर | **तथा** = त्यसै गरी | **इदानीं** = अहिले |
| **गृह्णतः** = ग्रहण गरिरहने | **पीतः** = पहेँलो गरी | **कृष्णतां** = कालो रङ्गवाला |
| **अस्य हि** = यी बालकका चाहिँ | **त्रयः** = तीन | **गतः** = भएका छन् |

**वाक्यार्थ–** यी अर्का बालकले चाहिँ युगैपिच्छे अनेक शरीर धारण गरिरहन्छन्। पहिले यिनका

सेतो, रातो र पहेँलो गरी तीन थरी वर्णहरू थिए। अहिले यिनी कालो वर्णका भएका छन्।

**प्रागयं वसुदेवस्य क्वचिज्जातस्तवात्मजः।**
**वासुदेव इति श्रीमानभिज्ञाः सम्प्रचक्षते॥ १४॥**

| पदार्थ– | प्राक् = पहिले | अभिज्ञाः = यो कुरा जान्नेहरू |
|---|---|---|
| अयं = यी | क्वचित् = कुनै वेलामा | श्रीमान् = ऐश्वर्ययुक्त |
| तव = तिम्रा | वसुदेवस्य = वसुदेवको (घरमा) | वासुदेवः इति = वासुदेव भनी |
| आत्मजः = छोरा | जातः = जन्मेका थिए | सम्प्रचक्षते = बताउँछन् |

**वाक्यार्थ–** यी तिम्रा छोरा पहिले कुनै समयमा वसुदेवको पुत्ररूपमा जन्मिएका थिए। त्यसैले यो कुरालाई बुझ्ने व्यक्तिहरूले यिनलाई श्रीमान् वासुदेव पनि भन्दछन्।

**बहूनि सन्ति नामानि रूपाणि च सुतस्य ते।**
**गुणकर्मानुरूपाणि तान्यहं वेद नो जनाः॥ १५॥**

| पदार्थ– | बहूनि = धेरै | अहं = म |
|---|---|---|
| ते = तिम्रा | नामानि = नामहरू र | वेद = जान्दछु |
| सुतस्य = छोराका | रूपाणि च = रूपहरू पनि | जनाः नो = मानिसहरू जान्दैनन् |
| गुणकर्मानुरूपाणि = गुण र कर्म अनुसार | सन्ति = छन् | |
| | तानि = तिनलाई | |

**वाक्यार्थ–** तिम्रा छोराका गुण र कर्म अनुसार अनेक नाम र रूपहरू छन्। तिनीहरूलाई म जान्दछु तर अरू मानिसहरू जान्दैनन्।

**विवरण–** माथिका श्लोकहरूमा भगवान् श्रीकृष्णको भगवत्तालाई अव्यक्त रूपमा प्रस्तुत गरिएको छ। श्रीकृष्ण शब्दको अर्थ परमात्मा हुन्छ। वल्लभाचार्य यसको अर्थ गर्दै भन्नुहुन्छ–

**कृषिर्भूवाचकः शब्दो णश्च निर्वृतिवाचकः।**
**तयोरैक्यं परं ब्रह्म कृष्ण इत्यभिधीयते।**

कृषि शब्दमा इकार धातु बुझाउने अर्थमा मात्र लिइएको हो। कृष् शब्दको अर्थ सत्ता हुन्छ भने णकारको अर्थ आनन्द हुन्छ। सत्ता र आनन्द एक रूप भएको जुन चेतन ब्रह्म छ, त्यही कृष्णको अर्थ हो। कृष्ण शब्दको अर्को अर्थ अनुसार **कृष्** शब्दले निश्चेष्ट स्थिति या संसारप्रति कुनै चेष्टा या रुचि नभएको भन्ने जनाउँछ। **ण**कारले भक्तिलाई जनाउँछ भने णपछि रहेको **अ**कारको अर्थ दाता भन्ने हुन्छ। यसरी संसारलाई बिर्साइदिने भक्तिका दाता परमात्मा भन्ने अर्थ हुन्छ। कृष्ण शब्दमा रहेका हरेक वर्णको अर्थ गर्दै कृष्ण शब्दको अर्को व्युत्पत्ति पनि गरिएको छ। **क्**ले ब्रह्मालाई, **ऋ**ले अनन्तलाई, **ष्**ले शिवलाई, **ण्**ले धर्मलाई, **अ**ले विष्णुलाई र अन्त्यमा रहेको विसर्गले नरनारायणलाई सङ्केत गर्दछ। यी सबैको समाहार रूप पुरुषोत्तम परमात्मा श्रीकृष्ण नै हुनुहुन्छ भन्ने अर्को अर्थ हो। यसरी श्रीकृष्ण शब्दले सबै देवताहरूको रूपमा प्रकट हुने र

संसारबन्धनलाई बिर्साइदिने परमात्माको सच्चिदानन्दरूप मूल स्वरूपलाई बताउँछ। यो सबै कुरा नन्दलाई बताउन पनि नहुने, अनि अरू सामान्य नाम राखिदिँदा पनि आफूले असत्य बोलेको हुने हुनाले गर्गले श्रीकृष्ण नाम राखनका लागि पनि अरू-अरू प्रसङ्ग उठाउनुभएको छ। अनेकपल्ट जन्म लिने क्रममा तिम्रा छोरा कहिले सेता, कहिले राता र कहिले पहँला बनेका छन्, अहिले काला बनेकाले यिनलाई श्रीकृष्ण भनिनेछ भन्ने भनाइको भङ्गीले पनि अप्रकट रूपमा श्रीकृष्णलाई ईश्वर नै सिद्ध गरेको छ। भागवतको एकादश स्कन्धको पाँचौं अध्यायमा बताइए अनुसार सत्ययुगमा सेतो स्वरूपमा र त्रेतायुगमा रातो स्वरूपमा परमात्माको आराधना हुन्छ। पहँलो अवतार भगवान्को कहीँ छैन, तर **सुवर्णवर्णो हेमाङ्गः** आदि पुराणवचन र **हिरण्मयेन पात्रेण** (शुक्लयजुर्वेद, ४०/१७) आदि वेदवचन अनुसार सूर्यमण्डलभित्र बस्ने अन्तर्यामी हिरण्मय पुरुषलाई नै पहँलो अवतारको रूपमा गर्गले बताएका हुन् भन्ने बुझ्नुपर्दछ। नन्द आदिले भने आफ्ना बच्चाका पूर्वजन्मका अनेक वर्णहरू मात्र बताएको भन्ने बुझे।

अर्को श्लोकमा भगवान्को **वासुदेव** भन्ने नामलाई नन्दले नबुझ्ने गरी नै गर्गले बताएका छन्। आधिदैविक वसुदेव अंश तिमीमा आइसकेपछि र प्रेमको कारणले भगवान्ले पुत्रत्व स्वीकार गरिसकेपछि त यी तिम्रै **आत्मजः** अर्थात् छोरा हुन्, तर त्यो हुनुभन्दा अघि यी वसुदेवको पुत्रको रूपमा जन्मिएका थिए भन्नु गर्गको मनभित्रको अर्थ हो। नन्दले भने यो मेरो छोरो पूर्वजन्ममा कहिल्यै वसुदेवपुत्र पनि बनेको रहेछ भन्ने मात्र बुझे। कालियको दमन, गोवर्धनको धारण, ओखलमा बाँधिनु आदि गुण र कर्महरूद्वारा यिनका कालियमर्दन, गोवर्धनधर, दामोदर आदि अनेक नामहरू हुनेछन् भन्ने अभिप्राय अर्को श्लोकमा रहेको छ। नन्दले यसलाई पनि सामान्य अर्थमा मात्र लिएको बुझिन्छ। भगवान्ले त प्रेमद्वारा सबैको चित्तलाई निरोध गर्नुछ, त्यसैले गर्गले श्रीकृष्णको ईश्वरत्वलाई अप्रकट रूपमा प्रस्तुत गर्नुभयो। अप्रकटरूपमा श्रीकृष्णको भगवत्तालाई नै बताएकाले गर्गले असत्य बोलेको पनि देखिँदैन।

**एष वः श्रेय आधास्यद् गोपगोकुलनन्दनः।**
**अनेन सर्वदुर्गाणि यूयमञ्जस्तरिष्यथ॥ १६॥**

**पदार्थ–**
**गोपगोकुलनन्दनः** = सबै गोप र गोकुललाई आनन्दित पार्ने
**एषः** = यिनले
**वः** = तिमीहरूको
**श्रेयः** = कल्याण
**आधास्यत्** = गर्नेछन्
**यूयं** = तिमीहरू
**अनेन** = यीद्वारा
**सर्वदुर्गाणि** = सबै सङ्कटहरूलाई
**अञ्जः** = सजिलै
**तरिष्यथ** = पार गर्नेछौ

**वाक्यार्थ–** सबै गोपहरू र गोकुललाई आनन्दित गर्ने यी श्रीकृष्णले तिमीहरूको कल्याण गर्नेछन्। यीद्वारा तिमीहरू सबै सङ्कटबाट सजिलै पार हुनेछौ।

**पुरानेन व्रजपते साधवो दस्युपीडिताः।**
**अराजके रक्ष्यमाणा जिग्युर्दस्यून् समेधिताः॥ १७॥**

**पद्वार्थ–**
**व्रजपते** = हे व्रजपति नन्द
**पुरा** = पहिले
**अराजके** = राजाविहीन राज्य भएको वेलामा
**दस्युपीडिताः** = डाँकुहरूद्वारा पीडित भएका र
**अनेन** = यिनैद्वारा
**रक्ष्यमाणाः** = जोगाइएका
**समेधिताः** = बल बढेका
**साधवः** = सज्जनहरूले
**दस्यून्** = डाँकुहरूलाई
**जिग्युः** = जिते

**वाक्यार्थ–** हे व्रजपति ! पहिले कुनै समय राजाविहीन राज्य भएको वेलामा डाँकुहरूले सज्जनहरूलाई दुःख दिएका थिए। त्यो वेलामा यिनैद्वारा रक्षा गरिएकाले बल बढेका सत्पुरुषहरूले ती डाँकुहरूलाई फेरि जिते।

**य एतस्मिन् महाभागाः प्रीतिं कुर्वन्ति मानवाः ।**

**नारयोऽभिभवन्त्येतान् विष्णुपक्षानिवासुराः ॥ १८ ॥**

**पद्वार्थ–**
**ये** = जो
**महाभागाः** = महाभाग्यशाली
**मानवाः** = मानिसहरू
**एतस्मिन्** = यिनमा
**प्रीतिं** = प्रेम
**कुर्वन्ति** = गर्दछन्
**एतान्** = तिनीहरूलाई
**विष्णुपक्षान्** = विष्णुको पक्षमा रहने देवताहरूलाई
**असुराः इव** = असुरहरूले झैँ
**अरयः** = शत्रुहरूले
**न अभिभवन्ति** = जित्न सक्दैनन्

**वाक्यार्थ–** जो भाग्यशाली मानिसहरू यिनमा प्रेम गर्दछन् तिनीहरूलाई विष्णुको पक्षमा रहने देवताहरूलाई असुरहरूले जित्न नसके झैँ शत्रुहरूले जित्न सक्दैनन्।

**तस्मान्नन्दात्मजोऽयं ते नारायणसमो गुणैः ।**

**श्रिया कीर्त्यानुभावेन गोपायस्व समाहितः ॥ १९ ॥**

**पद्वार्थ–**
**नन्द** = हे नन्द !
**तस्मात्** = त्यसैले
**अयं** = यी
**ते** = तिम्रा
**आत्मजः** = छोरा
**गुणैः** = गुणहरूले
**श्रिया** = ऐश्वर्यले
**कीर्त्या** = कीर्तिले र
**अनुभावेन** = प्रभावले पनि
**नारायणसमः** = भगवान् नारायणजत्तिकै छन्
**समाहितः** = सावधान भई
**गोपायस्व** = रक्षा गर

**वाक्यार्थ–** हे नन्द ! तिम्रा यी छोरा अनेक गुणहरूले, ऐश्वर्यले, कीर्ति र प्रभावले पनि भगवान् नारायणजत्तिकै छन्। त्यसैले सावधान भई यिनको रक्षा गर।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यात्मानं समादिश्य गर्गे च स्वगृहं गते ।**

**नन्दः प्रमुदितो मेने आत्मानं पूर्णमाशिषाम् ॥ २० ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**आत्मानं** = आफूलाई
**समादिश्य** = आदेश दिएर
**गर्गे च** = गर्ग पनि
**स्वगृहं** = आफ्नो घरमा
**गते** = गएपछि
**प्रमुदितः** = असाध्यै खुसी भएका
**नन्दः** = नन्दले
**आत्मानं** = आफूलाई
**आशिषाम्** = आशाहरूबाट
**पूर्णम्** = पूरा भएको
**मेने** = ठाने

**वाक्यार्थ–** यसप्रकार नन्दलाई आदेश दिएर गर्ग आफ्नो घरतिर फर्किएपछि उनको वचन सुनी असाध्यै प्रसन्न भएका नन्दले आफ्ना सबै आशा पूरा भएको ठाने।

**कालेन व्रजताल्पेन गोकुले रामकेशवौ।**
**जानुभ्यां सह पाणिभ्यां रिङ्गमाणौ विजह्रतुः॥ २१॥**

**पदार्थ–**
**व्रजता** = बितिरहेका
**अल्पेन** = थोरै
**कालेन** = समयमा नै
**रामकेशवौ** = बलराम र श्रीकृष्ण
**पाणिभ्यां सह** = दुई हातसहित
**जानुभ्यां** = घुँडाले
**गोकुले** = गोकुलमा
**रिङ्गमाणौ** = घुम्दै
**विजह्रतुः** = विहार गर्न थाल्नुभयो

**वाक्यार्थ–** केही समयपछि नै बलराम र श्रीकृष्ण दुई हात र घुँडाले टेकेर गोकुलमा घुम्दै विहार गर्न थाल्नुभयो।

**विवरण–** यहाँ एक्काईसौँ श्लोकदेखि तीसौँ श्लोकसम्मका दश श्लोकहरूमा भगवान्का दश थरी स्वरूपहरू बताइएका छन्। यी स्वरूपहरू भगवान्का गति या चेष्टाका कारणले भएका हुन्। वल्लभाचार्य लेख्नुहुन्छ **दशधा हरिः** अर्थात् एउटै भगवान् दश थरी रूपमा बन्नुभयो। भगवान् स्वरूपतः एक मात्र हुनुहुन्छ। तर पनि उहाँमा अनेकौँ चेष्टाले अनेक स्वरूपको कल्पना हुन्छ। भगवान्को चेष्टा भनेको काल हो। **योऽयं कालस्तस्य तेऽव्यक्तबन्धोश्चेष्टामाहुः** (भागवत, १०।३।२६)। त्यही सूचना गर्न यहाँ पनि **कालेन** भन्ने पद आएको छ। भगवान्का भुइँमा घिस्रिएका दुई थरी रूप, एउटा आमाको काखमा रहेको रूप, तीन थरी हिँडेको र दौडेको रूप, एउटा व्रजबालकहरूसँग घुमेको रूप, दुई ओटा धृष्टता र धुर्त्याइँ गरेको रूप अनि अर्को चुपचाप आमाको काखमा लुकी बसेको रूप गरी मुख्य दश रूपहरू रहेका छन्। एक्काईसौँ श्लोकमा घुँडा टेकेर हिँड्न थालेको सामान्य गतिलाई देखाइएको छ। बाईसौँ श्लोकमा भने आफ्ना पाउजु आदिको शब्द सुन्दै दौडिँदै र डराउँदै आमानजिक फर्किँदै गरेको रूपको वर्णन छ। तेईसौँ श्लोकमा आमाले काखमा लिई दुध पियाउँदै गरेको रूपको वर्णन गरिएको छ। यसरी भुइँमा र काखमा गरी भगवान्का तीन रूप छन्। चौबीसौँ श्लोकमा बाच्छाको पुच्छर समाई हिँड्न सिकिरहेको र तिनीहरूले यताउति तानिरहेको रूपको वर्णन छ। पच्चीसौँ श्लोकमा ताते-ताते गर्दै सिङ् भएका पशु र आगोसँग खेल्न जान लाग्दा आमाहरूले बीच-बीचमा रोकिरहेको रूपको वर्णन छ भने छब्बीसौँ श्लोकमा स्वतन्त्ररूपमा हिँड्न थालेको रूप बताइएको छ। त्यसपछि दुई

श्लोकमा व्रजबालकहरूसँग घुमेको रूप बताइएको छ। यसपछि तीन श्लोकमा भने दही चोर्ने, बाच्छा फुकाउने आदि धृष्टता गरेको या भनेको वस्तु नपाउँदा बच्चाहरूलाई रुवाइदिने आदि धूर्त्याईं गरेको स्वरूप अनि आमाले गाली गर्नुहोला कि भनी डराई चुपचाप बसेको रूप बताइएको छ। यसरी भगवान्का दश मुख्य रूपहरू छन्।

यस श्लोकमा **जानुभ्यां** अर्थात् घुँडाहरू घिसारी भगवान् हिँड्नुको उत्प्रेक्षा गर्दै वल्लभाचार्यले भन्नुभएको छ— भगवान्का घुँडाहरू सुतल लोकरूप हुन्, **द्वे जानुनी सुतलं विश्वमूर्तेः** (भागवत, २।१।२७)। सुतललोकको पति भएर पनि बलिले दैत्यहरूलाई राम्रोसँग नियन्त्रण गरेनन्, पृथ्वीभरि जतातत‌ै दुष्टहरू फैलिए। अब म नै पृथ्वीमा दुष्टहरूको दमन गर्छु भन्ने जनाउन उहाँले भुइँमा घुँडा घिसार्नुभएको हो। **रामकेशवौ** यो द्वन्द्व समास भएको शब्दले एउटै भगवान् राम र केशवरूप बनी लीला गरिरहनुभएको बताइएको छ। योगीहरूलाई पनि आनन्दमय आत्मामा रमाइदिने भन्ने अर्थमा रामशब्दले परमात्मालाई बुझाउँछ। केशव शब्दले पनि **क** अर्थात् ब्रह्मा र **ईश** अर्थात् शिवका पनि **व** अर्थात् बन्ध परमात्मा भन्ने अर्थ बुझाउँछ। **तस्मादेकाकी न रमते** (बृहदारण्यकोपनिषद्, १/४/३) भन्ने श्रुति उल्लेख गर्दै उहाँले रमाउनका लागि भगवान्ले दुई रूप स्विकार्नुभएको बताउनुभएको छ। **केशवं सुखं यस्य** भन्ने व्युत्पत्ति गर्दा चाहिँ यताउति हिँडिरहेको वेलामा अनुहारतिर छरिएका घुम्रिएका केशले सबैलाई असाध्यै आनन्द दिने भन्ने अर्थ पनि केशव शब्दबाट निस्कन्छ।

**तावङ्घ्रियुग्ममनुकृष्य सरीसृपन्तौ**
**घोषप्रघोषरुचिरं व्रजकर्दमेषु।**
**तन्नादहृष्टमनसावनुसृत्य लोकं**
**मुग्धप्रभीतवदुपेयतुरन्ति मात्रोः॥ २२॥**

**पदार्थ–**

**व्रजकर्दमेषु** = व्रजको हिलोमा
**अङ्घ्रियुग्मम्** = दुबै पाउलाई
**अनुकृष्य** = तान्दै
**घोषप्रघोषरुचिरं** = (पाउका पाउजुको) साना-ठुला मधुर आवाज निकाल्दै
**सरीसृपन्तौ** = घिस्रिरहेका (बामे सरिरहेका) र
**तन्नादहृष्टमनसौ** = त्यसको आवाजले प्रसन्न हुनुभएका
**तौ** = ती दुई (बलराम र कृष्ण)
**लोकं** = बाटो हिँड्ने मानिसलाई
**अनुसृत्य** = पछ्याएर
**मुग्धप्रभीतवत्** = चकित र भयभीत भए झैँ
**मात्रोः** = आमा रोहिणी र यशोदाको
**अन्ति** = नजिक
**उपेयतुः** = फर्किनुहुन्थ्यो

**वाक्यार्थ–** बलराम र कृष्ण गोकुलको हिलोमा आफ्ना दुबै पाउलाई घिसार्दै बामे सर्नुहुन्थ्यो। बामे सर्दा पाउका पाउजुबाट सानो-ठुलो मधुर आवाज निस्कन्थ्यो र त्यो आवाज सुनी उहाँहरू प्रसन्न हुनुहुन्थ्यो। उहाँहरू कहिलेकाहीँ बाटो हिँड्ने मान्छेहरूको पछि लाग्नुहुन्थ्यो र पछि नचिनेको मान्छे रहेछ भन्ने बुझी चकित र भयभीत भई आफ्नै आमा रोहिणी र यशोदाको नजिक

फर्कनुहुन्थ्यो।

**विवरण–** यहाँ भगवान् श्रीकृष्ण र बलराम व्रजभूमिको हिलोमा यताउति डुलिरहेको वर्णन गरिएको छ। भगवान् दुबै गोडालाई लतार्दै घिस्रिरहनुभएको थियो। भगवान्का अङ्गभरि पाउजु, बाला आदि अनेक आभूषण बाँधिएका थिए। हिँडिरहँदा ती सबैबाट मधुर ध्वनि निस्किन्थ्यो। त्यो मिठो झंकार सुनी त्यो शब्द कहाँबाट आयो भन्ने जिज्ञासाले त्यो ठाउँ खोज्न खोजे झैं छिटो–छिटो कृष्ण र बलराम घिस्रिनुहुन्थ्यो। छिटो हिँड्दा त्यो ध्वनि झन् ठुलो र सुमधुर सुनिन्थ्यो। यसबाट आफूबाट नै सङ्गीत निस्किएको बुझी उहाँहरू असाध्यै खुसी हुनुहुन्थ्यो। हुँदाहुँदै बाटोमा हिँडिरहेका मान्छेलाई देखी तिनको पछि लाग्दै केही पर पुग्नुहुन्थ्यो अनि नचिनेको मान्छे ठानी मुग्ध भई फर्किन खोज्नुहुन्थ्यो। अघिपछि हेर्दा कोही साथी नभएको र घर टाढा भएको देखी उहाँहरू डराई हत्तपत्त आमाहरूकहाँ दौडिँदै आइपुग्नुहुन्थ्यो। यसरी एउटै घिस्रिएको लीलामा पनि भगवान्का ध्यानयोग्य अनेक स्वरूपहरू बन्छन्। पाउजु बजाउँदै बिस्तारै घिस्रिएको रूप, छिटो छिटो घिस्रिरहेको रूप, शब्द सुनी खुसी भएको रूप, बटुवालाई पछ्याएको रूप, डराई फर्केको रूप आदि।

वल्लभाचार्य भन्नुहुन्छ– **मात्रोः अन्ति उपेयतुः** यो वाक्यांशमा **अन्ति** शब्दले नै नजिक भन्ने अर्थ दिइसकेपछि **उप** शब्दको सार्थकताका लागि त्यसको अरू तात्पर्य निकाल्नुपर्दछ। अन्तिको अर्थ नजिकै भन्ने हुन्छ। **उपेयतुः** को अर्थ बलराम र श्रीकृष्णले आमालाई झ्याम्मै अङ्गालो हाल्नुभयो भन्ने हुन्छ। यसरी श्रीकृष्णका अनेक थरी विचित्र एवं माधुर्ययुक्त रूपहरू छन् र यी सबैले भावुक भक्तहरूको मनलाई हरण गरिरहेका छन्।

**तन्मातरौ निजसुतौ घृणया स्नुवन्त्यौ**
**पङ्काङ्गरागरुचिरावुपगृह्य दोर्भ्याम्।**
**दत्त्वा स्तनं प्रपिबतोः स्म मुखं निरीक्ष्य**
**मुग्धस्मिताल्पदशनं ययतुः प्रमोदम्॥ २३॥**

**पदार्थ–**
**पङ्काङ्गरागरुचिरौ** = जिउभरि हिलो लाग्नाले झन् सिँगारिएका
**निजसुतौ** = आफ्ना छोरालाई
**घृणया** = वात्सल्यले
**स्नुवन्त्यौ** = स्तनमा दुध भरिएका
**तन्मातरौ** = ती दुबैका आमाले
**दोर्भ्याम्** = दुबै हातले
**उपगृह्य** = अँगालोमा लिई
**स्तनं** = दुध
**दत्त्वा** = पियाएर
**प्रपिबतोः** = दुध पिउँदै गरेका छोराहरूको
**मुग्धस्मिताल्पदशनं** = मन्द मुस्कान भएको दुधे दाँत र
**मुखं** = मुखलाई
**निरीक्ष्य** = हेरेर
**प्रमोदम्** = असाध्यै खुसी (अवस्थामा)
**ययतुः स्म** = हुन्थे (पुग्थे)

**वाक्यार्थ–** वात्सल्यका कारणले स्तनमा दुध भरिएका ती दुबै आमाहरूले जिउभरि हिलो लाग्नाले झन् सुन्दर देखिएका आफ्ना छोराहरूलाई दुबै हातले अँगालोमा लिन्थे र दुध पियाउँथे।

दुध पिउँदै गर्दा बीच-बीचमा छोराहरूले आफूतिर हेर्दा उहाँहरूको मन्द-मुस्कान र दुधे दाँतलाई देखेर उनीहरू असाध्यै खुसी हुन्थे।

**यर्ह्यङ्गनादर्शनीयकुमारलीला-**
**वन्तर्व्रजे तदबलाः प्रगृहीतपुच्छैः।**
**वत्सैरितस्तत उभावनुकृष्यमाणौ**
**प्रेक्षन्त्य उज्झितगृहा जहृषुर्हसन्त्यः॥२४॥**

**पदार्थ–**
**अन्तर्व्रजे** = गोकुलभित्र
**यर्हि** = जब
**अङ्गनादर्शनीयकुमारलीलौ** = गोपीहरूलाई हेरिरहन मन लाग्ने बाललीला गर्ने
**उभौ** = ती दुई
**प्रगृहीतपुच्छैः** = पुच्छर समातिएका
**वत्सैः** = बाच्छाहरूद्वारा
**इतस्ततः** = यताउति
**अनुकृष्यमाणौ** = घिसारिनुहुन्थ्यो
**तत्** = त्यसलाई
**प्रेक्षन्त्यः** = हेर्दै
**उज्झितगृहाः** = घरका कामधन्दा छाडेका
**अबलाः** = आइमाईहरू (गोपीहरू)
**हसन्त्यः** = हाँस्दै
**जहृषुः** = प्रसन्न हुन्थे

**वाक्यार्थ–** हेरिरहुँ जस्तो लाग्ने बाललीला गर्ने बलराम र कृष्ण जब गोकुलमा बाच्छाहरूको पुच्छर समात्नुहुन्थ्यो र बाच्छाहरू दौडिँदा पुच्छर समाएरै घिस्रिरहनुहुन्थ्यो तब गोपीहरू घरका कामधन्दा छाडेर बाहिर निस्किन्थे अनि त्यो दृश्य हेरेर हाँस्दै असाध्यै प्रसन्न हुन्थे।

**विवरण–** भगवान् अब अलि ठुलो हुनुभयो। घिस्रिएर मात्र होइन, केही आड पाए खुट्टाले नै हिँड्न सक्ने हुनुभयो। गोपको चरित्र देखाउनुपर्ने भएर उहाँले बाच्छाहरूकै पुच्छर समातेर हिँड्न सिक्नुभयो। पुच्छर समातिएका ती बाच्छाहरू बुर्कुसी मारेर दौडिन खोज्थे। भगवान् पूरा बलले पुच्छर आफूतिर तान्नुहुन्थ्यो। वल्लभाचार्य भन्नुहुन्छ– बाच्छाहरू पनि बुर्कुसी मारेर दौडन सकेनन्। बाच्छाहरूद्वारा यताउति तानिएका बलराम र श्रीकृष्ण व्रजमण्डलभित्र घुमिरहनुहुन्थ्यो। यी सबै लीला व्रजका गोपिनीहरूद्वारा देख्न योग्य थिए। वल्लभाचार्य भन्नुहुन्छ– यो भगवान्को कुमारलीला हो। यस समयमा भगवान् दुई वर्षको हुनुभएको छ। व्रजाङ्गनाहरू तीन प्रकारको भावले श्रीकृष्णको लीलालाई हेर्दछन्– एउटा आश्चर्यले, अर्को रसबुद्धिले अनि अर्को कामनाले आकर्षित भएर। सर्वात्मा भगवान्को गति स्वतन्त्र छ, त्यो कहीं प्रतिहत हुँदैन, तर त्यही परमात्माको गति अहिले बाच्छाहरूको पछि मात्र सीमित भएको देख्दा कसको मन नतानिएला ? यसमाथि पनि भगवान् असाध्यै सुन्दर कुमार हुनुहुन्थ्यो। **कुत्सितो मारो यस्मात्** अर्थात् कैयौँ कामदेव पनि भगवान्का अगाडि नराम्रा लाग्थे, फिक्का पर्थे। यस्ता **कोटिकन्दर्पसुन्दर** अर्थात् करोडौँ कामदेवभन्दा पनि सुन्दर श्रीकृष्णलाई हेर्न चाहनु स्वाभाविकै हो। त्यसमा पनि यो त सर्वाधार परमात्माको पराधीनताको लीला थियो। वल्लभाचार्य भन्नुहुन्छ– भगवान्ले बाच्छाहरूको पुच्छर समात्नु भनेको यज्ञ आदि कर्मका अद्भुत देवताहरूको भावमा पुग्नु हो।

बाच्छाहरू कर्मजस्ता हुन्। कर्ममा अग्नि, इन्द्र आदि देवताहरूको यजन हुन्छ, कर्मको फल दिन परमात्मा ती-ती देवताको भावमा पुग्नुहुन्छ र यजमानलाई फल दिनुहुन्छ। यसरी सकाम व्यक्तिलाई कर्मफल दिन परमात्मा कर्मको परतन्त्र हुनु नै बाच्छाको पुच्छर समातेर पछि-पछि दौडिनुको तात्पर्य हो। यसरी कर्ममा परमात्मा उपाधिका धर्महरूद्वारा छोपिनुहुन्छ, उहाँलाई छुट्टै जान्न संसाररूपी उपाधिलाई नै त्यागिदिन सक्नुपर्दछ। त्यसकारणले **उज्झितगृहाः** अर्थात् घरलाई बिर्सिएका या छाडिदिएका गोपिनीहरूले यो परमानन्दमय लीलालाई हेरे, खुसी भए र हाँसे भनिएको छ। **प्रेक्षन्त्यः** यो पदले हेर्दै भन्ने अर्थ दिन्छ। हेरेको हेर्‍यै हुनु आश्चर्यभावको द्योतक हो। केही गोपिनीहरू यसलाई देखी प्रसन्न भए भने कोही चाहिँ हाँसिरहे। मन्द-मन्द मुस्कुराउनुले उनीहरूभित्र श्रीकृष्णमिलनको कामना उद्दीप्त भइरहेको सूचना दिन्थ्यो। यसरी सामान्य गोपिनीहरू भगवान्को लीलालाई हेरी आश्चर्यचकित भए, अलि-अलि प्रेम गर्नेहरू हर्षित भए र श्रीकृष्णलाई चाहने अन्तरङ्ग गोपिनीहरू भने लीला हेर्दा मनमा श्रीकृष्ण सम्बन्धी कामना उठेको अनुभव गर्दै त्यसकै कल्पनामा हाँसे।

**शृङ्ग्यग्निदंष्ट्र्यसिजलद्विजकण्टकेभ्यः**
**क्रीडापरावतिचलौ स्वसुतौ निषेद्धुम्।**
**गृह्याणि कर्तुमपि यत्र न तज्जनन्यौ**
**शेकात आपतुरलं मनसोऽनवस्थाम्॥ २५॥**

**पदार्थ**–
**यत्र** = जहाँ (गोकुलमा)
**शृङ्ग्यग्निदंष्ट्र्यसिजलद्विज-कण्टकेभ्यः** = सिङ भएका जनावर, आगो, दाह्रा भएका जनावर, तरवार, पानी भएको ठाउँमा, चराहरू र काँडाहरूसँग
**क्रीडापरौ** = खेलिरहने
**अतिचलौ** = असाध्यै चञ्चल
**स्वसुतौ** = आफ्ना छोराहरूलाई
**निषेद्धुम्** = रोक्न लागिरहँदा
**तज्जनन्यौ** = ती दुई आमाहरू
**गृह्याणि** = घरायसी काम
**कर्तुम् अपि** = गर्न पनि
**न शेकाते** = सक्दैनथे र
**मनसः** = मनको
**अलं** = धेरै
**अनवस्थाम्** = चिन्ता
**आपतुः** = पाइरहन्थे

**वाक्यार्थ**– गोकुलमा बलराम र कृष्ण कहिले सिङ भएका जनावरहरूसँग, कहिले आगोसँग, कहिले दाह्रा भएका जनावरसँग, कहिले तरवारसँग, कहिले चराहरूसँग, कहिले जलाशयहरूको नजिक खेलिरहनुहुन्थ्यो अनि कहिले काँडा समाएर जिस्किरहनुहुन्थ्यो। यस्ता असाध्यै चञ्चल छोराहरूलाई त्यस्ता काम गर्नबाट रोक्न लागिरहँदा ती दुई आमाहरू रोहिणी र यशोदाले घरधन्दा गर्ने फुर्सद पनि पाउँदैनथे र उनीहरूको मनमा छोरालाई केही होला कि भन्ने पिरले सधैँ चिन्ता भइरहन्थ्यो।

**विवरण**– शास्त्रमा मन निरोध गर्ने दुई विधि छन्, एउटा अभ्यास र वैराग्य अनि अर्को चाहिँ प्रेम। पहिलो विधि योगी वा ध्यानी साधकहरूका लागि हो। यो विधिमा मन जुन विषयतर्फ

दौडिन्छ, त्यताबाट त्यसलाई फर्काई बारम्बार आत्मामा नै लगाइरहनुपर्दछ। विषयबाट मन हटाउनु वैराग्य हो भने त्यसलाई बारम्बार आत्मामा लगाइरहनु अभ्यास हो। लक्ष्य आत्मतत्त्व अत्यन्त सूक्ष्म, सर्वव्यापक र निश्चल भएकाले त्यसलाई प्राप्त गर्न मनले पनि सूक्ष्म र निश्चल हुनु आवश्यक छ। मन बिल्कुल नचल्नु स्थितप्रज्ञता हो। जुन योगीको मन शान्त भइसक्यो, त्यो ब्रह्मभूत योगीले अत्यन्त सुख पाउँछ भनी भगवान्‌ले बताउनुभएको छ– **प्रशान्तमनसं ह्येनं योगिनं सुखमुत्तमम्** (भगवद्‌गीता, ६/२७)। अव्यक्त आत्मामा मन शान्त गर्ने यो विधि अलि अप्ठ्यारो छ। यसमा मनको चञ्चल रहने स्वभावलाई पूर्णतः वशमा ल्याउनुपर्दछ।

प्रेम वा भक्तिको विधिमा चाहिँ मनलाई सधैँ भगवान्‌मा लगाइरहने गरिन्छ। परमात्मा चलमलाउँदो रूपमा साकार भई प्रकट हुनुभएपछि प्रेमद्वारा उहाँमा मन लगाउन सजिलो पर्छ। मन चञ्चल भएकाले परमात्माका अनेक लीलाहरूमा घुमिरहन उसलाई सजिलो पनि पर्छ। भक्तहरूको यही भाव बुझेझैँ गरी परमात्मा चञ्चलताको मूर्ति बनी श्रीकृष्णरूपमा प्रकट हुनुभएको हो। श्रीकृष्ण यति धेरै चञ्चल हुनुहुन्छ कि, आफ्नो चञ्चलताले उहाँ संसारलाई पनि माथ गरिदिनुहुन्छ। बढी चञ्चल वस्तुतर्फ नै मन तानिन्छ। श्रीकृष्ण संसारभन्दा पनि बढी चञ्चल भएपछि त त्यो मन संसारमा लाग्न छाडी परमात्मामा नै लागिरहने भयो।

श्रीकृष्ण सबैका आत्मा भएकाले परमप्रिय हुनुहुन्छ। उहाँ परमानन्दरूप पनि हुनुहुन्छ। जुन वस्तुमा जति बढी प्रेम हुन्छ, त्यसमा त्यति गाढासँग मन लाग्दछ। प्रेम यस्तो वस्तु हो, जसले मनको चञ्चलताको गतिलाई पनि रोकिदिन सक्छ। प्रेमको रसले छोपेपछि सामान्य व्यक्तिहरू पनि एक–अर्काका लागि पूरै जीवन अर्पण गरिदिन तयार हुन्छन्। संसारमा जुन मानवीय सम्बन्ध र सौहार्दभावको आनन्द देखिन्छ, त्यसको मूल प्रेम नै हो। संसारमा प्रेम गर्दा त यति आनन्द हुन्छ भने आफ्नै आत्मस्वरूप आनन्दमय परमात्मासँग प्रेम गर्दा कति आनन्द होला ? त्यसैले श्रीकृष्णसँग प्रेम गर्ने प्रेमीहरूको चित्तले उहाँलाई छोड्नै मान्दैन। मन निरोध गर्ने सबै गुणहरू श्रीकृष्णमा विद्यमान छन्। मन चञ्चल छ त उहाँ झन् बढी चञ्चल हुनुहुन्छ। मनले आनन्द खोज्छ त उहाँ झन् आनन्दरूप हुनुहुन्छ। अनि मन प्रेम गरिने विषयमा गइरहन चाहन्छ भने श्रीकृष्ण आत्मा भएकाले परमप्रिय पनि हुनुहुन्छ। यसै कारण श्लोकमा श्रीकृष्णबलरामलाई प्रेम गर्ने उहाँका आमाहरूले उहाँहरूका चञ्चल लीलाहरूलाई हेर्दाहेर्दै घरायसी काममा मन लगाउन पनि सकेनन् भनिएको छ। वल्लभाचार्य लेख्नुहुन्छ– **लौकिकनिष्ठता भगवन्निष्ठता च विरुद्धा** अर्थात् संसारमा निष्ठा हुनु र भगवान्‌प्रति निष्ठा हुनु यी दुबै विरोधी कुराहरू हुन्। जब कसैले चञ्चलमूर्ति श्रीकृष्णसँग प्रेम गर्छ भने उसको चित्त संसारमा लाग्न कसरी सक्छ ? प्रेमद्वारा मनको निरोध गर्ने यो दोस्रो विधिमा भगवान् भक्तको मन निरोध गर्न आफैँ सक्रिय हुनुभएको छ। अब पहिलेजस्तो मनलाई संसारबाट हटाई परमात्मामा लगाउने अभ्यास गर्नुपर्दैन। जब–जब यशोदा र रोहिणीको मन संसारको विषयमा जान खोज्थ्यो, तब तब भगवान् आगोनजिकै जाने, काँडा वरिपरि खेल्ने र सिङ भएका पशुहरूतिर दौडिने गरेर तिनीहरूको मन आफूतिर तानिरहनुहुन्थ्यो। त्यसैले उनीहरूले खाने–सुत्ने आदि अत्यावश्यक काममा समेत मन लगाउन सकेनन्। वेदान्तले मन स्थितप्रज्ञ भावमा अवस्थित हुनुलाई मुख्य पुरुषार्थ मानेको छ, तर ती यशोदाको जीवन धन्य

छ, जसको मन श्रीकृष्णका चञ्चल लीलाहरूप्रति सावधान रहँदा-रहँदै बेचैन भइरहन्छ, अन्यत्र टिक्नै पाउँदैन। परमात्माको प्रेमलीलाको यही विशेषता हो।

**कालेनाल्पेन राजर्षे रामः कृष्णश्च गोकुले।**
**अघृष्टजानुभिः पद्‌भिर्विचक्रमतुरञ्जसा॥ २६॥**

**पदार्थ–**
**राजर्षे** = हे राजर्षि परीक्षित्
**अल्पेन** = थोरै
**कालेन** = समयमा नै
**रामः** = बलराम
**कृष्णः च** = कृष्ण पनि
**गोकुले** = गोकुलमा
**अघृष्टजानुभिः** = घुँडा नघिसारीकन
**पद्‌भिः** = दुबै खुट्टाले टेकेर
**अञ्जसा** = सजिलै
**विचक्रमतुः** = घुमफिर गर्न थाल्नुभयो

**वाक्यार्थ–** हे राजर्षि परीक्षित् ! केही समयपछि नै बलराम र कृष्ण दुबै जना घुँडा नघिसारीकन दुबै खुट्टाले टेकेर सजिलै हिँड्न सक्ने हुनुभयो र गोकुलमा घुमफिर गर्न थाल्नुभयो।

**ततस्तु भगवान् कृष्णो वयस्यैर्व्रजबालकैः।**
**सहरामो व्रजस्त्रीणां चिक्रीडे जनयन् मुदम्॥ २७॥**

**पदार्थ–**
**ततः तु** = त्यसपछि त
**सहरामः** = बलरामले सहित
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**वयस्यैः** = बराबर उमेरका
**व्रजबालकैः** = व्रजका बालकहरूको साथमा
**व्रजस्त्रीणां** = व्रजका गोपीहरूको
**मुदम्** = आनन्दलाई
**जनयन्** = उत्पन्न गर्दै
**चिक्रीडे** = खेल्न थाल्नुभयो

**वाक्यार्थ–** त्यसपछि बलराम र आफूसमान उमेरका व्रजबालकहरूलाई साथ लिएर भगवान् श्रीकृष्णले व्रजका गोपीहरूको आनन्दलाई बढाउँदै अनेक प्रकारले लीला गर्न थाल्नुभयो।

**कृष्णस्य गोप्यो रुचिरं वीक्ष्य कौमारचापलम्।**
**शृण्वत्याः किल तन्मातुरिति होचुः समागताः॥ २८॥**

**पदार्थ–**
**कृष्णस्य** = कृष्णको
**रुचिरं** = असाध्यै रमाइलो
**कौमारचापलम्** = बालसुलभ चञ्चलतालाई
**वीक्ष्य** = देखेर
**शृण्वत्याः** = सुनिरहेकी
**तन्मातुः** = कृष्णकी आमाकै (नजिक)
**समागताः** = आई
**गोप्यः किल** = गोपीहरूले चाहिँ
**इति** = यस्तो
**ह ऊचुः** = भन्न थाले

**वाक्यार्थ–** गोपीहरू पनि कृष्णका बालसुलभ चञ्चलताहरूलाई देखेर असाध्यै प्रसन्न हुन्थे र

यशोदाको नजिक आई उनलाई सुनाउँदै यसो भन्थे।

**विवरण–** यस श्लोकमा भगवान्ले दही र नौनी चोर्ने, भाँडा फुटाउने आदि उपद्रवहरू गरी गोपिनीहरूलाई हैरान गर्नुभएको र त्यो कुरा उनीहरूले यशोदाकहाँ आई सुनाएको वर्णन गरिएको छ। यो चोरीलीला अति सामान्य स्त्रीहरूको मनलाई समेत आफूतिर तान्न गरिएको लीला हो। उनीहरूको मनलाई यस्तै उपद्रव गरेर मात्र तह लगाउन सकिन्थ्यो। यस्तो चकचके बच्चा त अहिलेसम्म देखिएको थिएन भन्ने सम्झी गोपिनीहरूले सधैँ आफूलाई याद गरिरहून् भन्नका लागि भगवान्ले यी लीलाहरू रच्नुभएको हो। त्यसकारण अनौठा जस्तै लागे पनि यी लीला भक्तका हितमा नै छन् भन्ने बुझ्नुपर्दछ।

भगवान्ले अनेक उपद्रव गर्नुभयो भन्ने कुरालाई आफ्नै मुखले बताउन नहुने हो कि भन्ने ठानी श्रीशुकदेवले गोपिनीहरूकै मुखबाट यी घटनाहरूलाई बताउनुभएको छ। **इति ऊचुः** अर्थात् यस्तो भने भनी श्रीशुकदेवले आफू तटस्थ रहेको जनाउनुभएको छ। गोपिनीहरूले चाहिँ श्रीकृष्णले चोरी गरेकै ठानी उहाँमा दोषदर्शन गरेका थिए भन्ने कुरा पनि होइन। यदि गोपिनीहरूलाई यो लीला मन नपर्ने भए तिनीहरूले गाउँ-गाउँमा हल्ला गर्दै श्रीकृष्णको बदनाम गर्दै हिँड्नुपर्दथ्यो। तर त्यसो नगरी **तन्मातुः शृण्वन्त्याः** अर्थात् यशोदा मातालाई सुनाउन मात्र उनीहरूले यो कुरा भन्थे। यशोदालाई सुनाउनुको अभीष्ट चाहिँ के थियो ? यसको स्पष्टीकरण एकतीसौँ श्लोकमा गरिएको छ। **सभयनयनश्रीमुख** अर्थात् आफ्ना उपद्रव सुनेपछि आमाले गाली गर्नुहोला कि भन्ने डरले श्रीकृष्ण आँखा यताउति डुलाउँदै निन्याउरो अनुहार बनाई चुपचाप बस्नुहुन्थ्यो। यही अनुहारको शोभा हेर्न गोपिनीहरू त्यहाँ आउँथे, यो त केबल श्रीकृष्णको दर्शन गर्ने बहाना थियो।

**वत्सान् मुञ्चन् क्वचिदसमये क्रोशसञ्जातहासः**
**स्तेयं स्वाद्वत्त्यथ दधिपयः कल्पितैः स्तेययोगैः।**
**मर्कान् भोक्ष्यन् विभजति स चेन्नात्ति भाण्डं भिन्नत्ति**
**द्रव्यालाभे स गृहकुपितो यात्युपक्रोश्य तोकान्॥ २९॥**

**पदार्थ–**
**क्वचित्** = कहिलेकाहीँ
**असमये** = (दुहुने) समय नै नभई
**वत्सान्** = बाच्छाहरूलाई
**मुञ्चन्** = फुकाइदिने गर्छ
**क्रोशसञ्जातहासः** = हप्काउँदा हाँस्छ
**अथ** = अझै
**कल्पितैः** = रचिएका
**स्तेययोगैः** = अनेक चोरीका उपायहरूद्वारा
**स्वादु** = मिठो
**दधि** = दही
**पयः** = दुध
**अत्ति** = खान्छ
**भोक्ष्यन्** = खाँदै गर्दा
**सः** = उसले
**मर्कान्** = बाँदरहरूलाई
**विभजति** = भाग लगाउँछ
**न अत्ति चेत्** = खाँदैन भने
**स्तेयं** = चोरिएको
**भाण्डं** = भाँडो नै
**भिन्नत्ति** = फुटाइदिन्छ
**द्रव्यालाभे** = केही पाएन भने
**गृहकुपितः** = घरका मानिसहरूसँग रिसाएको
**सः** = ऊ

**तोकान्** = साना बच्चाहरूलाई | **उपक्रोश्य** = रुवाइदिएर | **याति** = भाग्छ

**वाक्यार्थ–** यो तिम्रो छोरो दुध दुहुने वेला नहुँदै बाच्छाहरूलाई फुकाइदिने गर्छ र हामीले हप्कायौँ भने रुन् हाँस्छ। कहिलेकाहीँ अनेक उपायहरू बनाएर चोरेर मिठो दुध, दही आदि सबै खाइदिन्छ। आफूले मात्र खाने हो र ! बाँदरहरूलाई पनि भाग लगाउँछ, बाँदरहरूले खाएनन् भने भाँडो नै फुटाइदिन्छ। यदि कुनै दिन उसले हाम्रो घरमा केही पाएन भने घरका सबै मानिसहरूसँग रिसाउँदै हाम्रा बच्चाहरूलाई रुवाइदिएर भाग्छ।

**विवरण–** यो श्लोकमा गोपिनीहरूले श्रीकृष्णका छ ओटा उपद्रवहरू बताउने निहुँले परमात्माका छ ओटा गुणहरू गाएका छन्। ती गुणहरू हुन्– ऐश्वर्य, यश, धर्म, वैराग्य, श्री र ज्ञान। यहाँ श्रीकृष्णले छ ओटा उपद्रव गर्नुभएको छ। सबभन्दा पहिलो उपद्रव हो, गाई चराएर ल्याएपछि दुहुने वेला नै नभई तिनका स-साना बाच्छाहरू फुकाइदिने। दोस्रो उपद्रव हो, दही-दुध चोरेर खाने। तेस्रो उपद्रव हो, आफूले चोरेर खाने अनि सँगसँगै बाँदरहरूलाई पनि बाँडी सबै भाँडो रित्याइदिने। चौथो उपद्रव हो, ठेकी-घैँटो आदि भाँडो नै फुटाइदिने। यो सबै देखी घरका गोपिनीहरूले गाली गरे भने त्यसलाई वास्तै नगरी रुन् ढीठ बनी हाँसेर उडाइदिनु पाँचौ उपद्रव हो अनि गाली गर्दा उल्टै रिसाई घरका स-साना बच्चाहरूलाई उठाएर रुवाइदिने गर्नु छैटौँ उपद्रव हो।

भगवान्ले असमयमा नै किन बाच्छो फुकाइदिनुभयो होला ? यसको कारण खोज्दै जाँदा यो त भगवान्ले जीवहरूलाई अनुग्रह गरी मुक्ति दिएको लीला पो रहेछ भन्ने थाहा हुन्छ। चर्न जान पनि नसक्ने गाईका स-साना बाच्छाहरू दिनभरि गोठमैँ बाँधिएका हुन्छन्। ठुला गाईहरू दिनभर चरिसकेर वनबाट गोठमा फर्किएपछि पनि गोपहरूले ती बाच्छालाई गाईको नजिक जान दिँदैनन् र दुहुने वेला भए-नभएको विचार गर्दछन्। ती भोकाएका बाच्छालाई भगवान्ले फुकाइदिनुहुन्छ। यसको तात्पर्य हो– संसारमा आजीवन बाँधिएर परमानन्दको रस पिउन पाइन्छ कि भनेर हतारिएका या कराइरहेका जीवहरूलाई मोक्ष दिन उनीहरूको कर्मबन्धन फुस्किनुपर्दछ। चित्तशुद्धि आदि भइसकेपछि ज्ञानद्वारा मोक्ष हुन्छ भनी यसमा समयको प्रतीक्षा गर्ने हो भने ती जीव व्याकुल भइसक्छन्। त्यसैले अनुग्रहको मार्गमा भगवान् आफ्नै कृपाले जीवको कर्मबन्धन फुकाइदिएर तिनलाई मुक्त गराउनुहुन्छ। यसबाट जसलाई जहिले भन्यो, त्यही वेलामा मुक्त गर्न सक्ने भगवान्को ऐश्वर्य गुण प्रकट भएको छ।

यहाँ भगवान्ले चोरी पनि गर्नुभएको छ। श्रीशुकदेवजी भन्नुहुन्छ– **स्तेययोग** अर्थात् चोरी पनि एउटा **योग** हो। ज्ञानयोग, सांख्ययोग, कर्मयोग, भक्तियोग त योग हुन्, तर यो चोरी पनि कसरी योग भयो भन्ने शङ्का हुन सक्छ। जीवात्मा र परमात्मालाई एक बनाइदिने जति साधन छन्, तिनलाई योग भनिन्छ। स्तेयद्वारा पनि परमात्माले गोपिनीहरूको चित्तलाई आफूमा मिलाउनुभयो। त्यसैले स्तेय पनि एउटा योग भयो। त्यति मात्र होइन, यो चोरीको लीलालाई ध्यान गर्ने भक्तहरूको मन पनि हठात् चोरिए झैँ रुटपट श्रीकृष्णमा गई मिल्यो। त्यसैले यो केवल चोरी मात्र नभई योग पनि हो। भगवान्ले चोरी गर्नु शास्त्रविरुद्ध भयो कि भन्ने शङ्का गर्नु पनि उचित छैन, किनभने वेदमा त परमात्मालाई चोर-तस्करहरूका मालिक भनिएको छ- **तस्कराणां पतये नमो**

**नमः** (शुक्लयजुर्वेद, १६/२१)। सामान्य चोरहरूले त सशरीर आई केही वस्तुहरू मात्र चोर्न सक्छन्, तर परमात्मा त यस्ता सिपालु चोर हुनुहुन्छ कि स्मरण मात्रले पनि सारा संसारलाई, संसारको सम्पूर्ण बन्धनलाई, प्राणीले अहिलेसम्म गरेका पाप-पुण्य आदि सम्पूर्ण सञ्चित कर्महरूलाई पनि उहाँले एकैपटक चोरिदिनुहुन्छ। मनमा एकपटक मात्र पनि परमात्मा आउनुको अर्थ त्यो व्यक्तिको संसार चोरियो भन्ने हुन्छ। यति मात्र होइन, परमात्मा आफूलाई सम्झिने व्यक्तिलाई नै त्यसको शुद्धि-बुद्धि सबैलाई चोरी त्यो व्यक्तिलाई पागल-बहिरो या मातेको झैँ बनाइदिनुहुन्छ। परमात्माको निरन्तर स्मरणले कर्तृत्व-भोक्तृत्व आदि धर्म र स्वयं आफू जीवभाव पनि चोरिएका कोही ज्ञानीहरू संसारैलाई र शरीरलाई समेत बिर्सिन्छन् भनी उपनिषद्मा बताइएको छ— **नोपजनं स्मरन्निदं शरीरम्** (छान्दोग्योपनिषद्, ८/१२/३)। **स्मरणमात्रेण सर्वं हरति इति हरिः** अर्थात् सम्झना मात्रले पनि सबै हरिदिनुहुने हुनाले उहाँलाई हरि भनिएको हो। दही-दुध चोर्नु त सामान्य चोरी हो। केही गरी पनि मनलाई तह लगाउन नसकेपछि भक्तहरू यसलाई परमात्माले कहिले चोरिदिनुहोला भनी कुरेर बस्दछन् र परमात्माले त्यो चोरिसकेपछि हरि नाम सार्थक भएको कीर्ति गाउँदै हिँड्दछन्। यसरी यो दही-दुध चोर्ने लीलाले भगवान् बल्ल यथार्थमा श्रीहरि हुनुभएको कीर्तिलाई फिँजाउँछ। यो यश प्रकट गर्ने लीला हो।

भगवान्ले आफूले चोरेको दही-नौनी एक्लै नखाई बाँदरहरूलाई समेत बाँड्नुहुन्थ्यो। मानौँ प्राणीहरूलाई यो सिकाउँदै हुनुहुन्थ्यो कि, मैले चोरेको चिज त बाँडेर खाएँ, तिमी पनि आफ्नो वस्तु अरूलाई बाँडेर खाऊ। अरू श्लोकमा त **भोक्ष्यन्** अर्थात् खान खोज्दाखोज्दै भन्ने पद आएको छ। यसको तात्पर्य आफूले खानुभन्दा अगाडि नै परमात्माले बाँदरहरूलाई दही-नौनी खुवाउनुभयो। टीकाकारहरूले बाँदरहरूलाई दही-नौनी खुवाई भगवान्ले रामावतारमा यिनले लगाएको गुन तिर्न खोज्नुभएको हो भनेर पनि उल्लेख गरेका छन्। यो दानलीलाबाट उहाँमा धर्मगुण प्रकट भएको छ।

भगवान्ले दही आदिको भाँडोलाई पनि फुटाइदिनुहुन्थ्यो। मनबाट संसारको रस जति सबै रित्याइदिइसकेपछि त्यो मन सुकेको माटो जस्तो मात्र रहन्छ। संसारको रस-राग रित्तिएको मन चाँडै नै फुट्छ, यसलाई वेदान्तमा वासनाक्षय र मनोनाश भनिन्छ। यसरी घैँटो-ठेकी फुटाउने लीलाद्वारा भगवान्ले भक्तको वासनाक्षय र मनोनाश गरिदिनुहुन्छ भन्ने कुरा स्पष्ट पारिएको हो।

सबै उपद्रवलाई देखी गोपिनीहरूले जब उहाँलाई गाली गर्थे, तब तिनीहरूको चाला देखी उहाँ मुस्कुराउनुहुन्थ्यो। आखिर यो सबै प्रपञ्च भगवान्ले उनीहरूकै लागि रच्नुभएको थियो। गोपिनीहरूले पनि गाली गर्दा झन् उल्टै आफैँलाई गिज्याइरहेको रूपको सौन्दर्य हेर्नकै लागि उहाँलाई गाली गर्थे। यसरी मुस्कुराउने-गिज्याउने लीलाबाट उहाँमा श्री-सौन्दर्य गुण प्रकट भएको छ।

कुनै घरमा आफूले उपभोग गर्न योग्य केही वस्तु पाइएन भने भगवान्ले त्यो घरका सुतिरहेका बच्चाहरूलाई उठाई रुवाइदिनुहुन्थ्यो। **गृहकुपितः** अर्थात् त्यो पूरा घरपरिवारसँग नै उहाँ रिसाउनुहुन्थ्यो। जुन घरमा परमात्मालाई दिने कुनै वस्तु छैन, त्यो घर घर होइन, श्मसान हो भन्ने जनाउन उहाँ घरमा रुवावासी मच्चाइदिनुहुन्थ्यो। वल्लभाचार्यका अनुसार, हेर मलाई रित्तै फर्कायौ

भने तिम्रा घरमा प्रलयङ्कर रुद्र आउनुहुन्छ भन्ने जनाउन उहाँले त्यो लीला गर्नुहुन्थ्यो। यसरी गोपिनीहरूलाई चेतावनी दिने र बच्चाहरूलाई रुवाइदिने दुबै अर्थमा यो लीलाबाट भगवान्मा ज्ञानगुण प्रकट भएको छ। भगवान्का यी लीलाहरूका अनेक उत्प्रेक्षाहरू गरिएका छन्।

**हस्ताग्राह्ये रचयति विधिं पीठकोलूखलाद्यै-**
**श्छिद्रं ह्यन्तर्निहितवयुनः शिक्यभाण्डेषु तद्वित्।**
**ध्वान्तागारे धृतमणिगणं स्वाङ्गमर्थप्रदीपं**
**काले गोप्यो यर्हि गृहकृत्येषु सुव्यग्रचित्ताः॥ ३०॥**

**पदार्थ–**
**यर्हि** = जुन
**काले** = समयमा
**गोप्यः** = गोपीहरू
**गृहकृत्येषु** = घरधन्दामा
**सुव्यग्रचित्ताः** = हतारिइरहेका हुन्छन् (त्यही वेला)
**शिक्यभाण्डेषु** = डोरीले बाँधी दलिनमा झुण्ड्याइएका भाँडाहरूमा
**अन्तर्निहितवयुनः** = भित्र लुकाइएको (दही आदि) कहाँ छ भन्ने जान्ने
**तद्वित्** = त्यसलाई प्वाल पार्ने उपाय पनि जान्ने यसले
**हस्ताग्राह्ये** = हातले नभेट्दा
**पीठकोलूखलाद्यैः** = पिर्का, ओखलमाथि चढ्ने आदि र
**छिद्रं** = भाँडोलाई प्वाल पार्ने
**विधिं** = उपाय
**रचयति** = रच्दछ
**ध्वान्तागारे** = अँध्यारो कोठाभित्र पनि
**धृतमणिगणं** = मणि नै मणि लगाएको
**स्वाङ्गम्** = आफ्नो चम्किलो शरीरले नै
**अर्थप्रदीपं हि** = सबै वस्तुलाई प्रकाशित गर्दछ

**वाक्यार्थ–** जुन वेलामा गोपीहरू घरधन्दामा व्यस्त भई त्यसमैं मन लगाइरहेका हुन्छन्, त्यही वेला यो आउँछ। कहाँ झुण्ड्याइएको भाँडामा दही आदि लुकाइएको छ भन्ने यसलाई सबै थाहा हुन्छ। हातले नभेट्ने ठाउँमा भए पिर्कामाथि पिर्का राखेर वा ओखलमाथि चढेर यसले चोर्छ। अरु भाँडोलाई त्यहींको त्यहीं प्वाल पार्ने आदि सबै उपाय यसलाई थाहा छ। अँध्यारो कोठामा भाँडो लुकाउँदा पनि मणि नै मणि लगाएको आफ्नो चम्किलो शरीरद्वारा नै यसले सबै उज्यालो बनाउँछ।

**एवं धाष्टर्यान्युशति कुरुते मेहनादीनि वास्तौ**
**स्तेयोपायैर्विरचितकृतिः सुप्रतीको यथास्ते।**
**इत्थं स्त्रीभिः सभयनयनश्रीमुखालोकिनीभि-**
**र्व्याख्यातार्था प्रहसितमुखी न ह्युपालब्धुमैच्छत्॥ ३१॥**

**पदार्थ–**
**एवं** = यसै गरी
**धाष्टर्यानि** = कठोरतापूर्ण वचन

**उशति** = बोल्दछ
**वास्तौ** = घर वरिपरि
**मेहनादीनि** = पिसाब आदि
**कुरुते** = गरिदिन्छ
**स्तेयोपायैः** = चोरीका अनेक उपायले
**विरचितकृतिः** = आफ्नो काम बनाउने यो, यहाँ चाहिँ
**सुप्रतीकः यथा** = दिग्गज झैँ स्थिर भई
**आस्ते** = रहेको छ
**इत्थं हि** = यसप्रकार
**सभयनयनश्रीमुखालोकिनीभिः** = डराएको आँखाले गर्दा झन् राम्रो देखिने अनुहारलाई हेरिरहेका
**स्त्रीभिः** = गोपीहरूद्वारा
**व्याख्यातार्था** = छोराको चञ्चलता बताइएकी
**प्रहसितमुखी** = हँसिलो अनुहारकी यशोदाले
**उपालब्धुम्** = गाली गर्न
**न ऐच्छत्** = चाहिनन्

**वाक्यार्थ–** (हामीले गाली गर्दा उल्टै) तँ नै चोर होस् भन्ने जस्ता कठोरतापूर्ण वचन बोल्दछ। घर वरिपरि पिसाब समेत गरिदिन्छ। उहाँ चाहिँ अनेक उपायले चोरी गर्ने यो यहाँ तिम्रो अघि चाहिँ दिग्गज झैँ स्थिर साधु भइरहेको छ। यसप्रकार गोपीहरूले कुरा लगाउँदा भगवान् डराउनुहुन्थ्यो। डराएको आँखाको कारण झन् सुन्दर देखिने उहाँको अनुहारलाई हेरिरहेका गोपीहरूले जति कुरा लगाए पनि यशोदा हाँसिरहिन्, उनले कृष्णलाई गाली गर्न चाहिनन्।

**विवरण–** यहाँ श्रीकृष्णका अनेक उपद्रवहरू सुनेर पनि यशोदाले श्रीकृष्णलाई गाली गर्न खोजिनन् भनी वर्णन गरिएको छ। गोपिनीहरू भन्छन्– हामीले गाली गर्दा धृष्टतापूर्वक उल्टै हामीलाई नै गाली गर्दछ। श्रीधरस्वामी लेख्नुहुन्छ– **त्वमेव चोरः अहं गृहस्वामी** अर्थात् भगवान्ले तैँ चोर होस्, म त घरमालिक हुँ भन्नुहुन्थ्यो। हुन पनि यो सम्पूर्ण संसार परमात्माकै हो। अरू प्राणीले त यसलाई भ्रमवश आफ्नो ठानेका मात्र हुन्। परमात्माको वस्तुलाई आफ्नो भन्ने ती प्राणीहरू नै चोर हुन्, भगवान् त त्यसको वास्तविक मालिक नै हुनुहुन्छ। गिज्याएकै माध्यमले पनि भगवान्ले गोपिनीहरूको सामु यही रहस्य प्रकट गर्नुहुन्थ्यो। राम्रोसँग लिपपोत गरिएको घर–आँगनमा दिसा–पिसाब पनि गरिदिनुहुन्थ्यो। गोपिनीहरू भन्छन्– हे यशोदा ! तिम्रो छोरो अहिले त सुप्रतीक दिग्गज जस्तो अटल निश्चल भई बडो भलादमी पाराले बसेको छ, तर चोरी गर्न पऱ्यो भने अनेक उपाय–आकृति निकाल्छ। गोपिनीहरू यी सबै कुरा भगवान्को निन्दाका लागि नभई उहाँको डराएको अनुहारको शोभा हेर्नका लागि गर्थे। **श्रीमुख** शब्दको अर्थ लगाउँदै वल्लभाचार्य लेख्नुहुन्छ– भगवान्मा स्वरूपतः नित्य गुणहरू रहन्छन्। गोपिनीहरूको रिसाएको तीक्ष्ण दृष्टिले भगवान्को अनुहारलाई सिधै भेदन नगरोस् भन्नका लागि उहाँमा रहने **श्री** गुणले उहाँको अनुहारलाई ढपक्क ढाकिदिन्थ्यो। यसपछि त गाली गरिरहेका गोपिनीहरू पनि भगवान्को अनुहारको शोभालाई हेर्न थाल्थे। यशोदाले गोपिनीहरूले गाली गरिरहँदा पनि श्रीकृष्णको अनुहारतिरै बढ्ता ध्यान दिएको रहस्य पनि यही नै हो। उनीहरूको मन श्रीकृष्णलाई हेर्दा झन् प्रसन्न हुन्थ्यो। उता श्रीकृष्ण आमाले गाली गर्ने डरले भयभीत हुनुहुन्थ्यो। यो देखिसकेपछि यशोदाले गाली गर्न नपर्ने थाहा पाइहालिथिन्। गल्ती गर्नेलाई बिराएको महसुस गराउन अनि पीडित पक्षलाई आनन्द दिन कसैलाई गाली गरिन्छ। ती दुबै यहाँ भइसकेकाले यशोदाले श्रीकृष्णलाई केही भनिरहन आवश्यक देखिनन्।

**एकदा क्रीडमानास्ते रामाद्या गोपदारकाः।**
**कृष्णो मृदं भक्षितवानिति मात्रे न्यवेदयन्॥ ३२॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**क्रीडमानाः** = खेलिरहेका
**ते** = ती
**रामाद्याः** = बलराम आदि
**गोपदारकाः** = गोपबालकहरूले
**मात्रे** = आमालाई
**कृष्णः** = कृष्णले
**मृदं** = माटो
**भक्षितवान्** = खाए
**इति** = यस्तो कुरा
**न्यवेदयन्** = सुनाए

**वाक्यार्थ–** एक दिन श्रीकृष्णकै साथ खेलिरहेका बलराम आदि गोपबालकहरूले कृष्णले माटो खाए भनी यशोदालाई सुनाए।

**सा गृहीत्वा करे कृष्णमुपालभ्य हितैषिणी।**
**यशोदा भयसम्भ्रान्तप्रेक्षणाक्षमभाषत॥ ३३॥**

**पदार्थ–**
**हितैषिणी** = श्रीकृष्णको हित चाहने
**सा** = ती
**यशोदा** = यशोदाले
**भयसम्भ्रान्तप्रेक्षणाक्षम्** = डरको कारण आँखा चञ्चल भएका
**कृष्णम्** = श्रीकृष्णलाई
**करे** = हातमा
**गृहीत्वा** = समाएर
**उपालभ्य** = हप्काउँदै
**अभाषत** = भनिन्

**वाक्यार्थ–** श्रीकृष्णको हित चाहने यशोदाले डरको कारणले आँखा चञ्चल भएका श्रीकृष्णलाई हातमा समाती हप्काउँदै यसो भनिन्।

**कस्मान्मृदमदान्तात्मन् भवान् भक्षितवान् रहः।**
**वदन्ति तावका ह्येते कुमारास्तेऽग्रजोऽप्ययम्॥ ३४॥**

**पदार्थ–**
**अदान्तात्मन्** = हे चकचके
**भवान्** = तिमीले
**रहः** = एकान्तमा
**मृदम्** = माटो
**कस्मात्** = किन
**भक्षितवान्** = खायौ
**हि** = निश्चय नै
**तावकाः** = तिम्रा साथी
**एते** = यी
**कुमाराः** = बालकहरू
**वदन्ति** = (यसै) भन्दैछन्
**अयम्** = यी
**ते** = तिम्रा
**अग्रजः अपि** = दाजुले पनि (यसै भन्छन्)

**वाक्यार्थ–** हे चकचके ! तिमीले एकान्तमा लुकेर किन माटो खायौ ? तिम्रा साथी यी सबै बालकले र तिम्रा दाजु बलरामले पनि यसै भन्दैछन्।

**श्रीकृष्ण उवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**नाहं भक्षितवानम्ब सर्वे मिथ्याभिशंसिनः ।**
**यदि सत्यगिरस्तर्हि समक्षं पश्य मे मुखम् ॥ ३५ ॥**

| पदार्थ– | **मिथ्याभिशंसिनः** = झुटो बोल्दैछन् | **समक्षं** = आफ्नै अगाडि |
|---|---|---|
| **अम्ब** = हे आमा | **यदि** = यदि | **मे** = मेरो |
| **अहं** = मैले | **सत्यगिरः** = सत्यवक्ता हुन् (भने) | **मुखम्** = मुखलाई |
| **न भक्षितवान्** = (माटो) खाएको छैन | **तर्हि** = त्यसो भए | **पश्य** = हेर्नुहोस् |
| **सर्वे** = यी सबै | | |

**वाक्यार्थ–** हे आमा ! मैले माटो खाएको छैन। यी सबै झुटो बोल्दैछन्। यदि यिनीहरूले साँचो भनेका हुन् भन्ने लाग्छ भने आफ्नै अगाडि रहेको मेरो मुख हेर्नुहोस्।

**विवरण–** माथिका श्लोकहरूमा यशोदा माता र श्रीकृष्णबीच माटो खाएको-नखाएको विषयमा प्रश्नोत्तर भएको देखाइएको छ। यशोदाले श्रीकृष्णलाई **अदान्तात्मन् !** अर्थात् हे चञ्चलचित्त भएका श्रीकृष्ण ! भनी सम्बोधन गर्नुभएको छ। आत्मज्ञानका लागि जिज्ञासु साधकले शम, दम आदि अनेक साधनहरू गर्नुपर्दछ भन्ने उपनिषद्को सिद्धान्त रहेको छ। **शान्तो दान्त उपरतस्तितिक्षुः** (बृहदारण्यकोपनिषद्, ४/४/२३) अर्थात् मन शान्त भएको, इन्द्रियहरू निगृहीत भएको, विषयभोगबाट छुटेको र सहनशील व्यक्तिले मात्र आत्मदर्शन गर्न सक्छ। तर जो सबैथरी साधकहरूका परम लक्ष्य परमात्मा हुनुहुन्छ, उहाँलाई मनको निग्रह गर्न केको आवश्यकता पर्नु ? फेरि अन्तःकरण त जीवको उपाधि हो, यो परिच्छिन्न र अशुद्ध छ, तर परमात्मामा त अन्तःकरण नै छैन भने त्यसलाई शुद्ध गर्ने प्रश्नै आउँदैन। त्यसकारणले मन नियन्त्रणमा नभएका भनी सम्बोधन गर्नुले श्रीकृष्णको दोष बताएको नभई उहाँको ईश्वरत्वलाई नै बताएको छ। यशोदाले श्रीकृष्णलाई च्याप्पै हातमा समातेकी थिइन्, श्रीकृष्ण कालका पनि काल भएर पनि असाध्यै डराई आफ्ना आँखाहरूलाई चारैतर्फ डुलाइरहनुभएको थियो।

भगवान्ले माटो खानुभयो या खानुभएन भन्ने विषयमा विवादहरू रहेका छन्। यसलाई दार्शनिक तत्त्वविचारको रूपमा समेत प्रस्तुत गर्न सकिन्छ। स्वयं श्रीशुकदेवले चाहिँ भगवान्ले माटो खाएको-नखाएको विषयमा धेरै रहस्यात्मक आन्तरिक वादविवाद हुने थाहा पाए झैँ आफैँले केही भन्नुभएको छैन। सर्वदर्शी भएर पनि उहाँले **इति न्यवेदयन्** अर्थात् बच्चाहरूले यसो भने यति मात्र भन्नुभएको छ। सायद भगवान्ले माटो खाएर पनि पछि खाइनँ भन्नुभएकाले यस विषयमा आफूले बोल्नु धृष्टता हुन सक्ने ठानी उहाँ मौन रहनुभएको होला। सबभन्दा पहिले भगवान्ले साँच्चै माटो खानुभएकै हो भन्ने पक्षलाई लिऊँ। भगवान्को चरणरजको प्रशंसा सबै शास्त्रहरूमा पाइन्छ। यसको संसर्ग पाएर देवताहरू समेत आफूलाई भाग्यशाली ठान्छन्। स्वयं ब्रह्माजीले कुनै पनि व्रजवासीको चरणको धुलो उडेर आफूमाथि पर्ने गरी लहरा, वृक्ष आदि भई वृन्दावनमा

जन्मिन चाहनुभएको छ। सबैथरी पापलाई नष्ट गर्ने यसको महत्त्व थाहा पाई भक्तहरू प्रेमपूर्वक यसलाई शिरमा धारण गर्दछन् र अलिकति खान्छन् पनि। उता भक्तहरूको चरणको धुलोको प्रशंसा पनि उस्तै छ। स्वयं श्रीकृष्णले उद्धवलाई उपदेश गर्दा म आफ्ना अन्तरङ्ग भक्तहरूको पछि-पछि सधैँ लागिरहन्छु, जसबाट तिनीहरूको पाउबाट उडेको धुलो आफ्नो अङ्गमा पर्दा म पवित्र हुन सकूँ, **अनुव्रजाम्यहं नित्यं पूयेयेत्यङ्घ्रिरेणुभिः** (श्रीमद्भागवत, ११/१४/१६) भन्नुभएको छ। वृन्दावनको धुलोले भक्त र भगवान् दुबैको चरणको स्पर्श पाएको थियो। यसको लोकविख्यात महत्त्व सुनेर स्वयं भगवान्लाई पनि यसको मिठास र प्रभावको अनुभव गर्ने इच्छा भएछ। त्यसैले उहाँले माटो खानुभएको हो। कसैको मतमा भगवान्ले माटो खानुभएको त हो, तर आफ्ना लागि नभई आफ्ना पेटभित्र रहेका सबै प्राणीहरूलाई पवित्र पार्ने उद्देश्यले त्यसो गर्नुभएको हो। वल्लभाचार्यले चाहिँ पूतना आदिको संसर्गबाट सूक्ष्मरूपमा श्रीकृष्णभित्र पुगेका बालकहरूलाई एकान्तमा निकाली भगवान् तिनैलाई व्रजरज निकाल्दै ख्वाउँदै गरिरहनुभएको थियो भन्नुभएको छ। यसबाट भगवान् तिनीहरूमा भक्तिको सञ्चार गर्दै हुनुहुन्थ्यो। ती बालक सूक्ष्म थिए, त्यसैले बाहिरका व्रजबालकहरूले श्रीकृष्णले माटो कोट्याइरहेको मात्र देखे र माटो खाएकै हो भने। यदि श्रीकृष्णले कुनै पनि रूपमा माटो खाएको मान्ने हो भने पछि आमालाई माटो खाएको छैन भनी बताउँदा उहाँले असत्य बोल्नुभएको आपत्ति आउँछ भन्ने वल्लभाचार्यको भनाइ छ।

यसमा दार्शनिक वादविवादको पनि प्रसङ्ग देखिन्छ। **उपमृद्यते इति मृद्** अर्थात् नष्ट हुन्छ या माडिन्छ भन्ने अर्थमा कर्मफललाई पनि **मृद्** भन्न सकिन्छ। भगवान् माटो खानुहुन्छ या खानुहुन्न भन्नु आत्मा कर्मफलहरूको भोक्ता हुन्छ या हुँदैन भन्ने दार्शनिक विवाद हो। यशोदा भन्छिन्– **तावकाः** अर्थात् तिमीले साथी भनी स्वीकार गरेकाले त खाएकै बताएका छन्। आत्माले साथी बनाएका शरीर, इन्द्रिय, मन आदि सबैले प्रत्यक्ष व्यवहारमा आत्मालाई कर्ता-भोक्ता नै भनी बताइरहेकै छन्। प्रत्यक्ष प्रमाणद्वारा आत्मामा भोक्तृत्व सिद्ध हुन्छ भन्नु यसको आशय हो। साथी-भाइ त भ्रान्त पनि हुन सक्छन्, प्रत्यक्ष प्रमाण पनि भरपर्दो हुँदैन। डोरीमा सर्प देख्दा, आकाशलाई निलो र घोप्टिएको कराइजस्तो देख्दा मन भ्रान्त हुन्छ। त्यसैले यिनले भनेको प्रमाण मानिँदैन भन्ने भाव श्रीकृष्णको थियो। यशोदाले **अग्रजः** अर्थात् श्रीकृष्णका दाजु बलरामलाई पनि माटो खाएको भन्ने पक्षबाट प्रमाणको रूपमा पेस गरेकी छिन्। आत्माको ज्ञान हुनुभन्दा अघि चित्तशुद्धिका लागि कर्महरू गर्नुपर्छ। वेदको कर्मकाण्डभाग ज्ञानभागभन्दा पहिला रहेको हुनाले कर्म वा बलराम आत्मा या भगवान्का दाजु हुन्। त्यस वेदले त अनेक कर्मका अनेक फल बताई आत्मालाई नै भोक्ता मानेको छ। वेदलाई पनि प्रमाणका रूपमा देखाएपछि श्रीकृष्ण उत्तर दिनुहुन्छ– **सर्वे मिथ्याभिशंसिनः** अर्थात् साथीभाइ र दाजु सबै झुट बोल्दैछन्। प्रत्यक्ष प्रमाण यस मानेमा झुट छ कि, यसले शरीर, इन्द्रिय र मनले मात्र भोग गरेको थाहा पाएको छ। आत्मा स्वयं प्रत्यक्ष प्रमाणको विषय नभएकाले र शरीर आदिको साक्षी भएकाले प्रत्यक्षले शरीरको माध्यमले आत्मामा भोक्तृत्व कसरी सिद्ध गर्न सक्छ र? **अग्निहोत्रं जुहुयात् स्वर्गकामः** अर्थात् स्वर्ग फल चाहनेले अग्निहोत्र गरोस्, **यस्य ब्रह्म च क्षत्रं च उभे भवतः ओदनः** (कठोपनिषद्, १/२/२५) अर्थात्

ब्राह्मण र क्षत्रियद्वारा उपलक्षित सम्पूर्ण जगत् जसको भोजन हो, आदि वेदवचनले पनि शरीर, इन्द्रिय अथवा माया आदि उपाधिलाई लिएको आत्मालाई नै भोक्ताको रूपमा बताउँछन्। निरपेक्ष आत्मालाई होइन। त्यसैले आत्माको विषयमा यी वचन प्रमाण हुन सक्दैनन्। बरु वेदले त **अनश्नन् अन्यो अभिचाकशीति** (मुण्डकोपनिषद्, ३/१/१) अर्थात् साक्षी आत्मा नखाई बस्छ भनी आत्मा भोक्ता होइन भन्ने नै निश्चय गर्दछ।

यदि यिनलाई सत्य मान्ने हो भने खाँदाखेरि त केही न केही अंशको सम्बन्ध भएको हुनुपर्दछ, नपत्याए मेरो मुख हेर्नुहोस् भनी भगवान्ले मुख नै देखाइदिनुभयो। तत्त्वप्रतिपादक उपनिषद्वचन नै भगवान्का मुख हुन्। त्यसलाई प्रत्यक्ष देखाउनु भनेको अपरोक्ष साक्षात्कारमा उतारी त्यो अनुभवलाई बताउनु हो। उपनिषद् प्रमाण र आत्मज्ञानीको अनुभवले आत्मा असङ्ग छ र यो कर्मफल आदि कोहीसँग पनि सम्बन्धित हुँदैन भनी बताइएको छ। आत्मज्ञानी याज्ञवल्क्य ऋषि भन्नुहुन्छ **असङ्गो न हि सज्जते** (बृहदारण्यकोपनिषद्, ३/९/२६) अर्थात् असङ्ग आत्माको कहीँ संसर्ग हुँदैन। यसरी आत्मा स्वरूपतः कर्मफलसँग सम्बन्धित छैन भन्ने निष्कर्ष श्रीकृष्णको उत्तरबाट आउँछ। यसरी विचार गर्दा श्रीकृष्णले अलि-अलि माटो खाएकै भए पनि सबै जगत्को अधिष्ठानभूत आफ्नो निष्प्रपञ्च आत्मस्वरूपलाई मैले माटो खाएकै छैन भन्दा समेत झुटो बोलेको हुँदैन।

**यद्येवं तर्हि व्यादेहीत्युक्तः स भगवान् हरिः।**
**व्यादत्ताव्याहतैश्वर्यः क्रीडामनुजबालकः॥ ३६॥**

**पदार्थ–**
**यदि** = यदि
**एवं** = यसो (हो भने)
**तर्हि** = त्यसो भए
**व्यादेहि** = मुख खोल
**इति** = यसो
**उक्तः** = भनिनुभएका
**सः** = उहाँ
**अव्याहतैश्वर्यः** = अनन्त ऐश्वर्य भएका
**क्रीडामनुजबालकः** = लीलाका लागि मान्छेको बच्चा बन्नुभएका
**भगवान्** = भगवान्
**हरिः** = श्रीहरिले
**व्यादत्त** = मुख खोल्नुभयो

**वाक्यार्थ–** यदि यस्तो हो भने मुख खोल भनी यशोदाले भनेपछि अनन्त ऐश्वर्य हुनुभएका र लीलाका लागि मात्र मान्छेको बच्चा बन्नुभएका भगवान् श्रीहरिले मुख खोल्नुभयो।

**सा तत्र ददृशे विश्वं जगत् स्थास्नु च खं दिशः।**
**साद्रिद्वीपाब्धिभूगोलं सवाय्वग्नीन्दुतारकम्॥ ३७॥**
**ज्योतिश्चक्रं जलं तेजो नभस्वान् वियदेव च।**
**वैकारिकाणीन्द्रियाणि मनो मात्रा गुणास्त्रयः॥ ३८॥**

**पदार्थ–**
**सा** = उनले
**तत्र** = त्यहाँ
**खं** = शून्य आकाश
**दिशः** = दिशाहरू
**साद्रिद्वीपाब्धिभूगोलं** = पहाड, द्वीप, समुद्रसहित सम्पूर्ण पृथिवी
**सवाय्वग्नीन्दुतारकम्** = वायु, विद्युत्‌रूप अग्नि, चन्द्रमा, र ताराहरूले सहित
**ज्योतिश्चक्रं** = ज्योतिर्मण्डल
**जलं** = पानी
**तेजः** = तेज
**नभस्वान्** = वायु
**वियत् एव** = आकाश (प्राणीहरू हिँडडुल गर्ने खाली ठाउँ)
**वैकारिकाणि** = वैकारिक (सात्त्विक अहङ्कारबाट उत्पन्न)
**इन्द्रियाणि** = इन्द्रियहरू
**मनः** = मन
**मात्राः** = पञ्चतन्मात्रा
**त्रयः गुणाः** = तीन गुणहरू
**जगत् च** = चर र
**स्थास्नु च** = अचर समेत
**विश्वं** = सम्पूर्ण विश्वलाई नै
**ददृशे** = देखिन्

**वाक्यार्थ–** यशोदाले भगवान् श्रीकृष्णको मुखमा शून्य आकाश, दिशाहरू, पहाड, द्वीप, समुद्र सहित सम्पूर्ण पृथिवी, वायु, विद्युत्‌रूप अग्नि, चन्द्रमा, र ताराहरूले सहित सम्पूर्ण ज्योतिर्मण्डल, पानी, तेज, वायु, प्राणीहरू हिँडडुल गर्ने खाली ठाउँ, सात्त्विक अहङ्कारबाट उत्पन्न इन्द्रियहरू, मन, पञ्चतन्मात्रा, सत्त्व आदि तीन गुण एवं चर र अचर समेत सम्पूर्ण विश्वलाई नै देखिन्।

**एतद् विचित्रं सहजीवकालस्वभावकर्माशयलिङ्गभेदम्।**
**सूनोस्तनौ वीक्ष्य विदारितास्ये व्रजं सहात्मानमवाप शङ्काम्॥ ३९॥**

**पदार्थ–**
**सूनोः** = छोराको
**तनौ** = शरीरमा
**विदारितास्ये** = खुलेको मुखभित्र
**जीवकालस्वभावकर्माशय-लिङ्गभेदम्** = अनेक प्राणी, काल, स्वभाव, कर्म, अन्तःकरण र स्थूल-सूक्ष्म शरीरहरूले युक्त
**एतत्** = यो सम्पूर्ण
**विचित्रं** = विचित्र संसार
**सहात्मानम्** = आफूसहितको
**व्रजं** = व्रजमण्डललाई पनि
**सह** = एकैचोटि
**वीक्ष्य** = देखेर
**शङ्काम्** = सन्देह
**अवाप** = पाइन्

**वाक्यार्थ–** यशोदाले आफ्नो छोराको शरीरमा खुलेको मुखभित्र नै अनेक प्राणी, स्वभाव, काल, कर्म, अन्तःकरण र अनेक स्थूल-सूक्ष्म शरीरहरूले युक्त यो विचित्र संसारलाई देखिन्। सँगसँगै एकैपटक व्रजमण्डलसमेत आफैँलाई पनि त्यहीँ देखी उनी सशङ्कित भइन्।

**किं स्वप्न एतदुत देवमाया किं वा मदीयो बत बुद्धिमोहः।**
**अथो अमुष्यैव ममार्भकस्य यः कश्चनौत्पत्तिक आत्मयोगः॥ ४०॥**

**पदार्थ–**
**एतत्** = यो
**किं** = के
**स्वप्नः** = स्वप्न हो
**उत** = अथवा
**देवमाया** = भगवान्‌को माया हो
**किं वा** = अथवा
**बत** = निश्चय नै
**मदीयः** = मेरो
**बुद्धिमोहः** = बुद्धिको मोह हो
**अथो** = अथवा
**अमुष्य** = यही

**मम** = मेरो
**अर्भकस्य एव** = छोराको नै
**यः कश्चन** = कुनै प्रकारको
**औत्पत्तिकः** = जन्मजात
**आत्मयोगः** = आफ्नै योगसिद्धि हो

**वाक्यार्थ–** यो के स्वप्न हो ? अथवा भगवान्‌को माया हो ? यो मेरो बुद्धिको मोह हो अथवा मेरै छोराको कुनै जन्मजात योगसिद्धि हो ?

**अथो यथावन्न वितर्कगोचरं चेतोमनःकर्मवचोभिरञ्जसा ।**
**यदाश्रयं येन यतः प्रतीयते सुदुर्विभाव्यं प्रणतास्मि तत्पदम् ॥ ४१ ॥**

पदार्थ–
**अथो** = यसैले
**यदाश्रयं** = जसमा आश्रित भएको यो जगत्
**येन** = जुन परमात्माद्वारा
**यतः** = जुन चैतन्यको कारणले
**प्रतीयते** = प्रतीत हुन्छ अनि
**चेतोमनःकर्मवचोभिः** = चित्त, मन, वचन र कर्महरूद्वारा
**अञ्जसा** = सजिलैसँग
**यथावत्** = जस्ताको तस्तै
**न वितर्कगोचरं** = विचार गर्न नसकिने
**सुदुर्विभाव्यं** = अत्यन्त अचिन्त्य
**तत्पदं** = परमात्माको त्यो स्वरूपलाई
**प्रणता अस्मि** = प्रणाम गर्दछु

**वाक्यार्थ–** यो सम्पूर्ण जगत् जसमा आश्रित छ र इन्द्रियका प्रेरक परमात्माद्वारा त्यही आत्मचैतन्यकै कारणले यो जगत् प्रतीत हुन्छ। चित्त, मन, वचन र कर्महरूद्वारा सजिलैसँग जस्ताको तस्तै गरी जान्न नसकिने परमात्माको त्यो स्वरूपलाई म प्रणाम गर्दछु।

**अहं ममासौ पतिरेष मे सुतो व्रजेश्वरस्याखिलवित्तपा सती ।**
**गोप्यश्च गोपाः सहगोधनाश्च मे यन्माययेत्थं कुमतिः स मे गतिः ॥ ४२ ॥**

पदार्थ–
**यन्मायया** = जसको मायाको कारणले
**अहं** = म
**व्रजेश्वरस्य** = व्रजका मालिककी
**अखिलवित्तपा** = सम्पूर्ण सम्पत्तिकी रक्षक
**सती** = पतिव्रता पत्नी हुँ
**असौ** = यी
**मम** = मेरा
**पतिः** = पति हुन्
**एषः** = यो
**मे** = मेरो
**सुतः** = छोरो हो
**सहगोधनाः** = गाईरूपी धनले सहित
**गोपाः च** = गोपहरू र
**गोप्यः च** = गोपिनीहरू पनि
**मे** = मेरै हुन्
**इत्थं** = यस्तो
**कुमतिः** = दुर्बुद्धि हुन्छ
**सः** = तिनै परमात्मा
**मे** = मेरो
**गतिः** = शरण हुनुहोस्

**वाक्यार्थ–** जसको मायाको कारणले म व्रजका मालिक नन्दकी सम्पूर्ण सम्पत्तिकी स्वामिनी र उनकी पतिव्रता पत्नी हुँ, यी मेरा पति हुन् र यो मेरो छोरो हो अनि सम्पूर्ण गोधनले सहित भएका सबै गोप-गोपिनी मेरा हुन् भन्ने यस्तो दुर्बुद्धि हुन्छ, उनै परमात्मा मेरो शरण हुनुहोस्।

**इत्थं विदिततत्त्वायां गोपिकायां स ईश्वरः।**
**वैष्णवीं व्यतनोन्मायां पुत्रस्नेहमयीं विभुः॥ ४३॥**

पदार्थ–
**इत्थं** = यसप्रकार
**विदिततत्त्वायां** = आत्मतत्त्वलाई जान्ने
**गोपिकायां** = गोपिनी (यशोदा) माथि
**सः** = उहाँ
**विभुः** = सर्वव्यापक
**ईश्वरः** = भगवान् श्रीकृष्णले
**पुत्रस्नेहमयीं** = पुत्रस्नेहरूपी
**वैष्णवीं** = वैष्णवी
**मायां** = मायालाई
**व्यतनोत्** = विस्तार गरिदिनुभयो

**वाक्यार्थ–** यसरी यशोदाले आत्मतत्त्वलाई बुझिसकेपछि सर्वव्यापक भगवान् श्रीकृष्णले उनीमाथि पुत्रस्नेहरूपी वैष्णवी मायाको विस्तार गरिदिनुभयो।

**सद्योनष्टस्मृतिर्गोपी सारोप्यारोहमात्मजम्।**
**प्रवृद्धस्नेहकलिलहृदयासीद् यथा पुरा॥ ४४॥**

पदार्थ–
**सद्योनष्टस्मृतिः** = तत्काल स्मृति हराएकी
**सा** = ती
**गोपी** = यशोदा
**आत्मजम्** = आफ्नो छोरालाई
**आरोहम्** = काखमा
**आरोप्य** = लिएर
**यथा पुरा** = पहिले जस्तै
**प्रवृद्धस्नेहकलिलहृदया** = बढिरहेको पुत्रस्नेहले हृदय भरिएकी
**आसीत्** = भइन्

**वाक्यार्थ–** भगवान्को मायाद्वारा यशोदाको त्यो स्मृति तत्काल हरायो। उनले आफ्नो छोरालाई काखमा लिइन् र फेरि पहिले जस्तै पुत्रस्नेहले उनको हृदय भरिएर आयो।

**त्रय्या चोपनिषद्भिश्च साङ्ख्ययोगैश्च सात्वतैः।**
**उपगीयमानमाहात्म्यं हरिं सामन्यतात्मजम्॥ ४५॥**

पदार्थ–
**सा** = ती यशोदाले
**त्रय्या च** = वेदद्वारा र
**उपनिषद्भिः च** = उपनिषद्हरूद्वारा पनि
**साङ्ख्ययोगैः** = साङ्ख्य र योगद्वारा अनि
**सात्वतैः च** = भक्तहरूद्वारा पनि
**उपगीयमानमाहात्म्यं** = सधैं माहात्म्य गाइने
**हरिं** = हरि भगवान्लाई
**आत्मजम्** = आफ्नो छोरो
**अमन्यत** = मानिन्

**वाक्यार्थ–** ती यशोदाले वेद, उपनिषद्, साङ्ख्य, योग र अनेक भक्तहरूद्वारा समेत जसको माहात्म्य सधैं गाइन्छ त्यस्ता श्रीहरिलाई आफ्नो छोरा ठानिन्।

**विवरण–** यस श्लोकमा श्रीशुकदेवले सम्पूर्ण शास्त्रहरूले परम फलको रूपमा प्रस्तुत गरेका परमात्मालाई छोरो ठानेकोमा यशोदाको सौभाग्यको प्रशंसा गर्नुभएको छ। भगवान्ले आफ्नो

मायाद्वारा यशोदाको पूर्वस्मृतिलाई नष्ट गरिदिनुभएको थियो। यदि यशोदाले छोरालाई भगवान् भन्ने जान्नुभयो भने त स्नेहको बदला आदर गर्न थाल्नुहुनेछ, अनि मलाई अहिलेको जस्तो बच्चा मानेर सधैँ याद गरिरहन छाडी पूजापाठ र ध्यान मात्र गर्नुहुनेछ। यसरी त न मेरो स्नेहभावको लीला गर्ने इच्छा पूरा हुन्छ, न यहाँको मनको निरोध हुन्छ भन्ने ठानी भगवान्ले आफू भगवान् भएको स्मृति हटाइदिनुभएको थियो। यशोदाले श्रीकृष्णलाई आफूमाथि निर्भर रहने सामान्य बच्चा ठाने पनि वास्तवमा त श्रीकृष्ण परमात्मा नै हुनुहुन्थ्यो। पारसमणिलाई कसैले ढुङ्गो भन्ने सम्झेर फलाममा छुवाए पनि त्यसले फलामलाई सुन बनाइहाल्छ। त्यसै गरी नजानीकन भगवान्मा मन लगाए पनि त्यसले सबै पुरुषार्थका मूल परमात्मालाई प्राप्त गराइहाल्छ। त्यसैले साक्षात् परमात्मालाई छोरो बनाउन पाउने यशोदा ज्यादै भाग्यशाली छिन्।

वेदले पनि परमात्माको महिमा गाएको छ। यहाँ त्रयी भनी कर्मकाण्ड भागलाई लिनुपर्दछ। त्यसमा इन्द्र, वरुण आदिको रूपमा परमात्माकै महत्त्व गाइएको छ। उपनिषद्ले पनि **दहरब्रह्म** (छान्दोग्योपनिषद्, ८ अध्याय), **भूमा** (छान्दोग्योपनिषद्, ७ अध्याय), **अन्तर्यामी** (बृहदारण्यकोपनिषद्, ३ अध्याय, छैटौँ ब्राह्मण) आदिको रूपमा अनेक उपायले परमात्मतत्त्वको वर्णन गरेको छ। सांख्यशास्त्रले परमतत्त्वलाई पुरुषरूपमा बताउँछ भने योगले पञ्चक्लेशद्वारा नछोइने ईश्वरको रूपमा बताउँछ। अरू दर्शन एवं मतान्तरहरूले आ–आफ्नो मान्यता अनुसार परमतत्त्वको वर्णन गर्छन्। त्यसै गरी **सात्वतैः** अर्थात् पाञ्चरात्रागम आदिमा उहाँलाई भगवान् भनी बताइन्छ। यसरी अनेक रूपमा शास्त्रहरूले जुन परमात्मतत्त्वको विषयमा बताउँछन्, उनै परमात्मालाई यशोदाले छोरो सम्झी काखमा लिइन्।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**नन्दः किमकरोद् ब्रह्मन् श्रेय एवं महोदयम्।**
**यशोदा च महाभागा पपौ यस्याः स्तनं हरिः॥ ४६॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेव
**यस्याः** = जसको
**स्तनं** = स्तनलाई
**हरिः** = श्रीहरिले
**पपौ** = पिउनुभयो (त्यस्ती)
**महाभागा** = महाभाग्यवती
**यशोदा** = यशोदाले र
**नन्दः च** = नन्दले पनि
**एवं** = यस्तो
**महोदयं** = महान् फल पाइने
**किम्** = कुन चाहिँ
**श्रेयः** = पुण्य कर्म
**अकरोत्** = गरेका थिए

**वाक्यार्थ–** हे शुकदेव ! भगवान् श्रीहरिले जसको स्तनलाई पिउनुभयो त्यस्ती यशोदा र नन्दले पनि यस्तो महान् फल प्राप्त हुने कुन त्यस्तो विशेष पुण्य कर्म गरेका थिए ?

**पितरौ नान्वविन्देतां कृष्णोदारार्भकेहितम्।**
**गायन्त्यद्यापि कवयो यल्लोकशमलापहम्॥ ४७॥**

**पदार्थ–**
**यत्** = जुन
**लोकशमलापहम्** = संसारैको पापलाई नष्ट गरिदिने
**कृष्णोदारार्भकेहितम्** = श्रीकृष्णका उदार बाललीलालाई
**अद्य अपि** = आज पनि
**कवयः** = ज्ञानीहरूले
**गायन्ति** = गाउँछन् (त्यसलाई)
**पितरौ** = उहाँका आफ्नै आमा-बुबाले चाहिँ
**न अन्वविन्देतां** = थाहा पनि पाउनुभएन

**वाक्यार्थ–** संसारैको पापलाई नष्ट गरिदिने श्रीकृष्णका उदार बाललीलालाई आजसम्म पनि सबै ज्ञानीहरूले गाइरहेका छन्। उहाँका बाललीलालाई उहाँका आफ्नै आमा-बुबा देवकी र वसुदेवले चाहिँ देख्न पनि पाउनुभएन। (त्यही बाललीलालाई नन्द-यशोदाले चाहिँ किन अनुभव गर्न पाए ?)

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**द्रोणो वसूनां प्रवरो धरया सह भार्यया।**
**करिष्यमाण आदेशान् ब्रह्मणस्तमुवाच ह ॥ ४८ ॥**

**पदार्थ–**
**धरया** = धरा नामकी
**भार्यया सह** = पत्नी सहित
**वसूनां** = वसुहरूमध्ये
**प्रवरः** = श्रेष्ठ
**द्रोणः** = द्रोणले
**ब्रह्मणः** = ब्रह्माजीको
**आदेशान्** = आदेशहरूलाई
**करिष्यमाणः** = पालन गर्दै
**ह** = निश्चयपूर्वक
**तम्** = उहाँलाई
**उवाच** = भने

**वाक्यार्थ–** आफ्नी पत्नी धराले सहित भएका वसुहरूमध्ये श्रेष्ठ द्रोणले ब्रह्माजीको (सृष्टिविस्तार सम्बन्धी) आदेशलाई पालन गर्दै उहाँलाई भने।

**जातयोर्नौ महादेवे भुवि विश्वेश्वरे हरौ।**
**भक्तिः स्यात् परमा लोके ययाञ्जो दुर्गतिं तरेत् ॥ ४९ ॥**

**पदार्थ–**
**भुवि** = संसारमा
**जातयोः** = उत्पन्न भएका
**नौ** = हामी दुईको
**विश्वेश्वरे** = संसारका मालिक
**महादेवे** = परमदेव
**हरौ** = श्रीहरिमा
**परमा** = अत्यन्त श्रेष्ठ
**भक्तिः** = भक्ति
**स्यात्** = होस्
**यया** = जसद्वारा
**लोके** = संसारमा (प्राणीले)
**अञ्जः** = सजिलैसँग
**दुर्गतिं** = दुर्गतिलाई
**तरेत्** = तरून्

**वाक्यार्थ–** हामी संसारमा जन्मिए पनि संसारैका मालिक परमदेव श्रीहरिमा हाम्रो अत्यन्त श्रेष्ठ भक्ति लागोस्, जसद्वारा जुनसुकै प्राणीले सजिलैसँग दुर्गतिलाई तर्न सकून्।

**अस्त्वित्युक्तः स भगवान् व्रजे द्रोणो महायशाः।**
**जज्ञे नन्द इति ख्यातो यशोदा सा धराभवत् ॥ ५० ॥**

**पदार्थ**–
**अस्तु इति** = यस्तै होस् भनी
**उक्तः** = भनिएका (आशीर्वाद दिइएका)
**सः** = ती
**महायशाः** = परम यशस्वी
**भगवान्** = ऐश्वर्यसम्पन्न
**द्रोणः** = द्रोण
**व्रजे** = व्रजमा
**नन्दः इति** = नन्द नामले
**ख्यातः** = प्रसिद्ध भई
**जज्ञे** = जन्मिए
**सा** = ती
**धरा** = धरा चाहिँ
**यशोदा** = यशोदा
**अभवत्** = भइन्

**वाक्यार्थ**– ब्रह्माजीले यस्तै होस् भनी आशीर्वाद दिएपछि ती परम यशस्वी ऐश्वर्यसम्पन्न द्रोण व्रजमण्डलमा जन्मेर नन्द नामले प्रख्यात भए अनि ती धरा चाहिँ यशोदा भइन्।

**ततो भक्तिर्भगवति पुत्रीभूते जनार्दने।**
**दम्पत्योर्नितरामासीद् गोपगोपीषु भारत ॥ ५१ ॥**

**पदार्थ**–
**ततः** = त्यसैले
**भारत** = हे भरतवंशी परीक्षित्
**गोपगोपीषु** = सबै गोप-गोपिनीहरूमध्ये
**दम्पत्योः** = यी दुई दम्पतीको नै
**पुत्रीभूते** = आफ्नै छोरा भएका
**जनार्दने** = जनार्दन
**भगवति** = भगवान्मा
**नितराम्** = अत्यन्त
**भक्तिः** = भक्ति
**आसीत्** = थियो

**वाक्यार्थ**– त्यसैले हे परीक्षित्! सबै गोप-गोपिनीहरूमध्ये यी दुई दम्पतीको नै आफ्ना छोरा भएका जनार्दन भगवान्मा अत्यन्त भक्ति थियो।

**कृष्णो ब्रह्मण आदेशं सत्यं कर्तुं व्रजे विभुः।**
**सहरामो वसंश्चक्रे तेषां प्रीतिं स्वलीलया ॥ ५२ ॥**

**पदार्थ**–
**विभुः** = सर्वव्यापक
**कृष्णः** = श्रीकृष्णले
**ब्रह्मणः** = ब्रह्माजीको
**आदेशं** = (द्रोणलाई दिइएको) आदेशलाई
**सत्यं** = सत्य
**कर्तुं** = बनाउन
**व्रजे** = व्रजमण्डलमा
**सहरामः** = बलरामले सहित भई
**वसन्** = बस्दै
**स्वलीलया** = आफ्नो लीलाद्वारा
**तेषां** = ती व्रजवासीहरूलाई
**प्रीतिं** = आनन्दित
**चक्रे** = गरिदिनुभयो

**वाक्यार्थ**– सर्वव्यापक श्रीकृष्ण ब्रह्माजीले द्रोणलाई दिनुभएको आदेशलाई सत्य बनाउन नै व्रजमण्डलमा बलरामले सहित भई बस्नुभयो र आफ्नो लीलाद्वारा व्रजवासीहरूलाई आनन्दित गरिदिनुभयो।

**अध्यायसार**- यो अध्यायमा चित्तशुद्धिका साधनहरू एवं त्यसद्वारा भगवान्मा हुने दृढ अनुरागलाई देखाइएको छ। परमात्मप्राप्तिका लागि चित्तशुद्धि आवश्यक छ। यहाँ चित्तलाई शुद्ध गर्ने मुख्य साधनहरूको वर्णन गरिएको छ। यसको विवेचन गर्दै वल्लभाचार्य भन्नुहुन्छ– सबभन्दा पहिले भगवान्का नाम नै चित्तशुद्धिका कारण हुन्। नामपछि मात्र भगवान्का अनेक लीलासम्बन्धी रूपहरू हृदयमा स्थिर हुन सक्छन्। ती रूपहरूको चिन्तन दृढ हुँदै गयो भने

भगवान्को ईश्वरीय सामर्थ्य र स्वरूपको बोध हुन्छ। प्रभु नै मेरो सर्वस्व हुनुहुन्छ भन्ने भावले भक्तको हृदयमा भक्तिको आवेग उत्पन्न गरिदिन्छ। यस्तो भावको उदय हुन पूर्वजन्ममैं सत्पुरुषहरूको आशीर्वाद पाएको हुनुपर्दछ। यसप्रकार चित्त शुद्ध हुनु र भगवान्मा दृढ आसक्ति हुनुमा यी सबै कारण हुन्छन्।

यो अध्याय सुरु हुनुभन्दा पहिले भगवान् श्रीकृष्ण यशोदा आदिको काखमा बसेर र उनीहरूको नियन्त्रणमा नै रहेर हिँडडुल गर्नुहुन्थ्यो भनी वर्णन गरियो। यो चित्तशुद्धिको अध्यायमा चाहिँ भगवान्ले पराधीन नभई आफ्नै बलले हिँड्न थाल्नुभएको बताइएको छ। त्यसैले चित्तशुद्धिका लागि भगवान्ले घुँडा टेक्दै हिँडेको या टुकुटुकु आफ्नै बलले हिँडिरहेका रूपहरूको चिन्तन गर्नुपर्दछ।

एक वर्षको भइसक्दा पनि भगवान्को न्वारन भएको थिएन। पूतनालाई मार्ने, गाडा पल्टाइदिने, तृणावर्तको उद्धार गर्ने आदि कामहरू भने उहाँले पहिले नै गरिसक्नुभएको थियो। संसारमा पराक्रमीको नै नाम रहन्छ। सामान्य मानिसहरू त केही गर्नुभन्दा अघि नै आफ्नो नाम भएको हेर्न चाहन्छन्। भगवान्को ढिलो नामकरण हुनुले यो सम्भावनालाई पनि सूचित गरेको छ। वल्लभाचार्य लेख्नुहुन्छ **नामान्यग्रे शोधकानि** अर्थात् चित्तशुद्धिको पहिलो साधन भनेको भगवान्को नाम नै हो। नामद्वारा नै नामी तत्त्वको बोध या स्फुरण हुन्छ। संसारको उत्पत्ति पनि नामोच्चारणपूर्वक नै भएको मानिन्छ। **भूरिति व्याहरत भूमिमसृजत** अर्थात् **भूः भुवः** आदि व्याहृतिको उच्चारण गरेर नै विधाताले भूमि, अन्तरिक्ष आदिको सृष्टि गरेका हुन्। परमात्माको नाम पनि जब हृदयमा प्रतिष्ठित हुन्छ, यही स्वरूपचिन्तनको अभ्यास दृढ हुँदै गएपछि त्यससँगै सम्बद्ध लीलाहरूको पनि प्रकाशन हुन्छ। यही रहस्य जनाउन यो अध्यायमा पहिले भगवान्को नामकरण गरिएको छ अनि भगवान्का चञ्चल स्वरूप र अनेक विचित्र लीलाहरू बताइएको छ। यसै क्रममा उहाँ सर्वेश्वर हुनुभएकाले त्यस्ता सर्वरूपधारी दिव्य लीलाहरू पनि प्रकट हुन्छन्, जसद्वारा उहाँको ईश्वरीयता र सामर्थ्यको बोध हुन्छ। यहाँ लीलाकै क्रममा भगवान्ले माटो खाने लीला पनि गर्नुभएको छ। यस प्रसङ्गमा यशोदाले श्रीकृष्णको मुखभित्र सारा संसार फैलिएको देखी उहाँको तत्त्वलाई बुझेको देखाइएको छ। यो लीला भगवत्ताको ज्ञान र भक्तिको वेगलाई झन् बढाउनका लागि गराइएको हो। जब भगवान्को इच्छाले त्यो ज्ञानलाई पनि तिरोहित गर्ने गरी वात्सल्यभक्ति बढ्छ, तब त्यो झन् दृढ र शक्तिशाली बन्दछ। ईश्वरको ईश्वरीयतालाई पनि छोपी सामान्य पुत्र ठानी प्रेम गर्ने भाव ईश्वरीयताको बोधभन्दा पनि शक्तिशाली हुन्छ भन्ने कुरा यशोदाको चरित्रबाट सिद्ध भएको छ। यी सबै भगवान्प्रति आसक्ति बढ्ने क्रम हुन्। यो सबै हुन पूर्व-पूर्व जन्ममा महापुरुषहरूको आशीर्वाद र प्रबल पुण्यको उदय आवश्यक पर्छ। त्यत्तिकै भगवान्मा यस्तो प्रीति हुँदैन भन्ने जनाउन यशोदा र नन्दको पूर्वजन्मको कथाप्रसङ्ग सुनाइएको छ। यसरी यो अध्यायमा भक्तिद्वारा चित्तशुद्धिपूर्वक भगवान्मा दृढ भक्ति बढ्ने क्रम देखाइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूवार्धे**

**विश्वरूपदर्शनेऽष्टमोऽध्यायः ॥ ८ ॥**

# अथ नवमोऽध्यायः

## भगवान् श्रीकृष्ण दाम्लोद्वारा बाँधिनु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा गृहदासीषु यशोदा नन्दगेहिनी ।**
**कर्मान्तरनियुक्तासु निर्ममन्थ स्वयं दधि ॥ १ ॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**गृहदासीषु** = घरका दासीहरू
**कर्मान्तरनियुक्तासु** = अन्य काममा लागेको वेला
**नन्दगेहिनी** = नन्दकी पत्नी
**यशोदा** = यशोदाले
**स्वयं** = आफैँ
**दधि** = दही
**निर्ममन्थ** = मथिन्

**वाक्यार्थ–** एक दिन घरका दासीहरू अन्य काममा लागेको वेला नन्दकी पत्नी यशोदाले आफैँ दही मथिन्।

**यानि यानीह गीतानि तद्बालचरितानि च ।**
**दधिनिर्मन्थने काले स्मरन्ती तान्यगायत ॥ २ ॥**

**पदार्थ–**
**इह** = यहाँ अहिलेसम्म
**गीतानि** = बताइएका
**यानि यानि च** = जुन–जुन
**तद्बालचरितानि** = उहाँका बाललीलाहरू छन्
**तानि** = ती सबैलाई
**दधिनिर्मन्थने** = दही मथ्ने
**काले** = समयमा
**स्मरन्ती** = सम्झँदै
**अगायत** = गाइन्

**वाक्यार्थ–** यहाँ अहिलेसम्म बताइएका श्रीकृष्णका जति पनि बाललीलाहरू छन्, दही मथ्ने वेलामा ती सबैलाई सम्झँदै उनले गाइन्।

**क्षौमं वासः पृथुकटितटे बिभ्रती सूत्रनद्धं**
**पुत्रस्नेहस्नुतकुचयुगं जातकम्पं च सुभ्रूः ।**
**रज्ज्वाकर्षश्रमभुजचलत्कङ्कणौ कुण्डले च**
**स्विन्नं वक्त्रं कबरविगलन्मालती निर्ममन्थ ॥ ३ ॥**

**पदार्थ–**
**पृथुकटितटे** = पुष्ट कम्मरमा
**सूत्रनद्धं** = मेखलाले बाँधिएको
**क्षौमं** = रेसमी
**वासः** = वस्त्र (साडी अनि)
**जातकम्पं** = हल्लिरहेका अनि
**पुत्रस्नेहस्नुतकुचयुगं** = पुत्रवात्सल्यका कारण रसाइरहेका दुई स्तनलाई

**रज्ज्वाकर्षश्रमभुजचलत्कङ्कणौ च** = नेति तान्दा थाकेका हातमा हल्लिरहेका बाला
**कुण्डले** = कानमा रहेका दुई कुण्डल (त्यसै गरी)
**स्विन्नं** = पसिनाले भिजेको
**वक्त्रं च** = अनुहार
**बिभ्रती** = बनाएकी
**कबरविगलन्मालती** = चुल्ठो फुस्किनाले खस्न लागेको मालती फूल लगाएकी
**सुभ्रूः** = सुन्दर आँखीभौँ भएकी यशोदाले
**निर्ममन्थ** = (दही) मथिन्

**वाक्यार्थ–** पुष्ट कम्मरमा मेखलाले बाँधिएको रेसमको साडी पहिरेकी, नेतिलाई दुबै हातले यताउति तान्दा थाकेका दुबै हातमा रहेका हल्लिरहेका बालाहरूले सुशोभित भएकी, हल्लिरहेका एवं पुत्रवात्सल्यका कारण रसाइरहेका स्तनहरू भएकी, कानमा कुण्डल लगाएकी, पसिनाले अनुहार भिजेकी र चुल्ठो फुस्किनाले खस्न लागेको मालती फूल धारण गरेकी ती सुन्दर आँखीभौँवाली यशोदाले दही मथिन्।

**विवरण–** माथिका श्लोकहरूमा यशोदाले दही मथेको वर्णन गरिएको छ। उनी नन्दगेहिनी थिइन्। नन्दव्रजकी मालिक्नी भएर पनि एक दिन उनले दासीहरूलाई नअह्राई आफैँ दही मथ्न थालिन्। सायद श्रीकृष्णलाई आफ्नै हातले प्रेमपूर्वक मथेको नौनी आदि खुवाई तृप्त गरिदिन्छु, नत्र यो चञ्चलेले अर्काको घरको नौनी चोर्ने र माटो खानेसमेत गर्ने भयो भन्ने चिन्ताले उनले स्वयं दधिमन्थन गरिरहेकी थिइन्। दही मथ्नुको उद्देश्य भगवान् हुनुहुन्थ्यो, मनमा श्रीकृष्णकै सम्झना थियो भने बिस्तारै-बिस्तारै श्रीकृष्णका अनेक चरित्रहरूलाई समेत उनी गुनगुनाइरहेकी थिइन्। दही मथ्दा उनको पुष्ट एवं आभूषण-अलङ्कारहरूले सजिएको शरीर पसिनाले लथपथ भइरहेको थियो। शरीर, मन र वचन यी तिनैलाई भगवान्मा लगाई जब भक्तले भगवान्को सेवा गर्छ, तब सुतिरहेका भगवान्लाई पनि उठ्न कर लाग्छ।

**तां स्तन्यकाम आसाद्य मथ्नन्तीं जननीं हरिः।**
**गृहीत्वा दधिमन्थानं न्यषेधत् प्रीतिमावहन्॥ ४॥**

**पदार्थ–**
**स्तन्यकामः** = दुध चुस्न चाहने
**हरिः** = श्रीकृष्णले
**मथ्नन्तीं** = दही मथिरहेकी
**तां** = ती
**जननीं** = आमाकहाँ
**आसाद्य** = पुगेर
**प्रीतिं** = उनको प्रेमलाई
**आवहन्** = बढाउँदै
**दधिमन्थानं** = दही मथ्ने मदानीलाई नै
**गृहीत्वा** = समातेर
**न्यषेधत्** = रोकिदिनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण दुध चुस्न चाहँदै ती दही मथिरहेकी आफ्नी आमा यशोदाकहाँ पुग्नुभयो र उनको प्रेमलाई बढाउँदै दही मथ्ने मदानीलाई समातिदिनुभयो र उनलाई दही मथ्नबाट रोकिदिनुभयो।

**तमङ्कमारूढमपाययत् स्तनं स्नेहस्नुतं सस्मितमीक्षती मुखम्।**
**अतृप्तमुत्सृज्य जवेन सा ययावुत्सिच्यमाने पयसि त्वधिश्रिते॥ ५॥**

**पदार्थ–**
**सस्मितम्** = मिठो मुस्कानले युक्त
**मुखम्** = अनुहारलाई
**ईक्षती** = हेरिरहेकी यशोदाले
**अङ्कम्** = आफ्नो काखमा
**आरूढम्** = चढिसकेका
**तम्** = ती श्रीकृष्णलाई
**स्नेहस्नुतं** = वात्सल्यका कारण रसाएका
**स्तनं** = स्तन
**अपाययत्** = पियाइन्
**अधिश्रिते** = चुल्होमा राखिएको
**पयसि** = दुध
**उत्सिच्यमाने तु** = उम्लिएर पोखिएपछि त
**अतृप्तम्** = (श्रीकृष्णलाई) अतृप्त नै
**उत्सृज्य** = छाडी
**सा** = ती
**जवेन** = वेगले
**ययौ** = (त्यतातिर) गइन्

**वाक्यार्थ–** (श्रीकृष्ण यशोदाको काखैमा चढिसक्नुभएको थियो) उनले पनि श्रीकृष्णको मिठो मुस्कानले युक्त अनुहारलाई हेर्दै वात्सल्यका कारण रसाइरहेका स्तन पियाइन्। चुलोमा उमाल्न राखिएको दुध उम्लिई पोखिएपछि त श्रीकृष्णलाई अतृप्त नै छाडी उनी वेगले त्यतातिर गइन्।

**सञ्जातकोपः स्फुरितारुणाधरं सन्दश्य दद्भिर्दधिमन्थभाजनम्।**
**भित्त्वा मृषाश्रुर्दृषदश्मना रहो जघास हैयङ्गवमन्तरं गतः॥ ६॥**

**पदार्थ–**
**सञ्जातकोपः** = रिसाएका
**मृषाश्रुः** = देखाओटी आँसु निकाल्ने श्रीकृष्णले
**दद्भिः** = दाँतहरूद्वारा
**स्फुरितारुणाधरं** = फर्फराइरहेका ओठलाई
**सन्दश्य** = टोकी
**दृषदश्मना** = ढुङ्गाको टुक्राले
**दधिमन्थभाजनम्** = दही मथ्ने भाँडोलाई
**भित्त्वा** = फुटाई
**अन्तरं** = घरभित्र
**गतः** = गई
**रहः** = एकान्तमा
**हैयङ्गवम्** = नौनी
**जघास** = खानुभयो

**वाक्यार्थ–** श्रीकृष्ण देखाओटी आँसु निकाल्दै असाध्यै रिसाउनुभयो, रिसले फर्फराइरहेका ओठलाई आफ्ना दाँतले टोक्दै उहाँले ढुङ्गाको टुक्राले दही मथ्ने भाँडोलाई फुटाउनुभयो अनि घरभित्र एकान्तमा गई नौनी खानुभयो।

**विवरण–** यस प्रसङ्गमा भगवान्ले ठेकी फोर्नुभएको लीला बताइएको छ। श्रीशुकदेव स्वामी भन्नुहुन्छ, भगवान् दुध चुस्ने इच्छा गर्दै माता यशादाको नजिक जानुभएको थियो। तत्त्वविचारको क्रममा उपनिषद्हरूले आत्मालाई अविद्या, कामना र कर्म तीनैको बन्धनले शून्य भनी बताएका छन्। **तदेतत् आप्तकामं आत्मकामं अकामं रूपं शोकान्तरम्** (बृहदारण्यकोपनिषद्, ४/३/२१) यो आत्माको शोकमोहभन्दा माथि रहेको स्वरूप हो। यो आत्मा आप्तकाम र अकाम छ। जहाँ ज्ञानद्वारा सम्पूर्ण संसार आफू मात्र भइसक्यो, त्यसले आफूभन्दा भिन्न रूपमा न कसैलाई देख्दछ, न कसैलाई जान्दछ। उपनिषद्मा भनिएको छ– **यत्र त्वस्य सर्वमात्मैवाभूत् तत्र केन कं पश्येत् केन कं विजानीयात्** (बृहदारण्यकोपनिषद्, २/४/१४)। सम्पूर्ण संसार आत्मा मात्र भइसकेपछि आत्माकै मात्र चाहना हुन्छ, आत्मकाम भनेको यही हो। फेरि आत्मा कुनै कामना गरिनुपर्ने विषय

होइन। किनभने यो त आफू हो र नित्य प्राप्त छ, त्यसैले ज्ञानीका सबै कामना आत्मामा आई बिलाउँछन् या पूरा हुन्छन्, आप्तकाम हुनु भनेको यही हो। यसरी सबै इच्छा आत्मामा बिलाएपछिको स्थिति नै **अकाम** हो। परमात्मालाई कामनाको कुनै बन्धन छैन, तर यो सबै भएर पनि भक्तको दृढ प्रेमले भने उहाँलाई समेत कामनायुक्त बनाइदिन्छ भन्ने रहस्य **स्तन्यकाम** पदले बताएको छ। यशोदाले मथिरहेको मदानीलाई च्याप्पै रोकेर उहाँले दुध पिइहाल्न चाहनुभयो, त्यति मात्र होइन, आफैँ काखमाथि पनि चढिसक्नुभयो। यशोदाको स्तनमा रसाएको दुध, सामान्य दुध थिएन, त्यहाँ त उनको स्नेह नै पग्लिरहेको थियो। त्यो प्रेमरसलाई जति पिए पनि भगवान् अतृप्त नै रहनुहुन्थ्यो। परमात्मा पूर्ण एवं नित्यतृप्त हुनुहुन्छ, उहाँ आनन्दस्वरूप भएकाले अरू कसैबाट आनन्दको अपेक्षा गर्नुहुन्न भन्ने कुरा त केही पनि गुण नभएको निष्क्रिय ब्रह्मतत्त्वका लागि हो, अहिले त परमात्मा सर्वगुणसम्पन्न र भक्तवत्सल बनी आउनुभएको छ। यो उहाँको जति प्रेमरस पिए पनि अतृप्त नै रहिरहने विशेष लीला हो।

उता यशोदाले दुध उम्लेर पोखिन लागेको देखिन्। भगवान्लाई अतृप्त नै छाडी उनी त्यतातिर दौडिन्। दुध किन उम्ल्यो र यशोदा किन त्यता दौडिन् भन्ने विषयमा धेरै विचार भएका छन्। वृन्दावनका अणु-अणुलाई चेतन मान्दै भावुक भक्तहरूले अर्थ गरेका छन्– दुध उम्लिनु भनेको उसले आफ्नो जीवन व्यर्थ हुनेभयो भन्ने बुझी आगोमा हामफाल्न लागेको हो। घाँसलाई गाईले खाएर त्यसलाई पचाई बल्ल म दुध बनैं र त्यहाँ पनि बच्चाको मुखबाट बची श्रीकृष्णले खाने आशमा आगोमा तातिरहेको छु। अब श्रीकृष्णले पेटभरि आमाकै दुध पिएपछि त मलाई पिउनुहुनेछैन भनी दुध उम्लिएर जान खोजेको हो भन्ने भक्तहरूको भनाइ छ। यस दृष्टिले यशोदा भगवान्लाई पनि छाडी दौडिनु भनेको वात्सल्यभावका कारण त्यसको रक्षा गर्न दौडिनु हो। दुध उम्ली सबै खेर जाला भन्ने लोभले यशोदा भगवान्लाई पनि अतृप्त नै छाडी त्यता दौडिन्। वल्लभाचार्य भन्नुहुन्छ– **लोभाद् भगवत्परित्यागे लोभस्यैव अपराधः** अर्थात् थोरै लोभको कारणले भगवान्लाई नै छाडिदिनु, यो त लोभमाथि नै अपराध हो। यसैले आधिदैविक लोभ रिसाई भगवान्को ओठको माध्यमले फर्फराउन थाल्यो। विश्वरूप भगवान्को तल्लो ओठ भनेको लोभ नै त हो **अधर एव लोभः** (भागवत, २/१/३२)। यसबाट यशोदाको केही अनिष्ट होला भन्ने शङ्काले भगवान्ले **सन्दंश्य** त्यो ओठलाई दाँतले दबाइदिनुभयो। यो दाँत यशोदाको स्नेहको प्रतीक हो। यसरी रिसले फर्फराइरहेको तल्लो ओठलाई च्याप्दै भगवान्ले दही मथिरहेको त्यो भाँडोलाई नै ढुङ्गाले हानी फुटाइदिनुभयो। अनि देखाओटी आँसु निकाल्दै एकान्तमा गई त्यो नौनी खान थाल्नुभयो। यही नै यस श्लोकमा वर्णन गरिएको प्रसङ्गको तात्पर्य हो।

**उत्तार्य गोपी सुशृतं पयः पुनः प्रविश्य संदृश्य च दध्यमत्रकम्।**
**भग्नं विलोक्य स्वसुतस्य कर्म तज्जहास तं चापि न तत्र पश्यती॥ ७॥**

**पदार्थ–**
**गोपी** = यशोदाले
**सुशृतं** = राम्रोसँग उम्लिएको
**पयः** = दुधलाई
**उत्तार्य** = उतारी
**पुनः** = फेरि

**प्रविश्य** = घरभित्र पस्दा
**दध्यमत्रकम् च** = दही मथ्ने भाँडोलाई
**भग्नं** = फुटेको
**संदृश्य** = देखेर
**तत् कर्म** = यस्तो काम
**स्वसुतस्य** = आफ्नै छोराको हो भन्ने
**विलोक्य** = ठानी
**तं च** = ती श्रीकृष्णलाई पनि
**तत्र अपि** = त्यहाँ पनि
**न पश्यती** = नदेख्नाले
**जहास** = हाँसिन्

**वाक्यार्थ–** यशोदाले राम्ररी दुध उम्लिएपछि त्यसलाई उतारी फेरि घरभित्र पस्दा त दही मथ्ने भाँडो फुटिरहेको देखिन्। उनले यो काम आफ्नै छोराको हो भन्ने ठानिन् र छोरालाई त्यहाँ पनि नदेख्दा बिस्तारै हाँसिन्।

**उलूखलाङ्घ्रेरुपरि व्यवस्थितं मर्काय कामं ददतं शिचि स्थितम्।**
**हैयङ्गवं चौर्यविशङ्कितेक्षणं निरीक्ष्य पश्चात् सुतमागमच्छनैः॥ ८॥**

**पदार्थ–**
**उलूखलाङ्घ्रेः उपरि** = उल्टिएको ओखलको माथि
**व्यवस्थितं** = बसेका
**मर्काय** = बाँदरलाई
**शिचि** = सिङमाङ (एक किसिमको भाँडो)मा
**स्थितम्** = रहेको
**हैयङ्गवं** = नौनी
**कामं** = यथेच्छ
**ददतं** = दिइरहेका
**चौर्यविशङ्कितेक्षणं** = चोरी गरेकाले शङ्कालु आँखा यताउति घुमाइरहेका
**सुतम्** = आफ्ना छोरालाई
**निरीक्ष्य** = देखेर
**पश्चात्** = पछिल्तिरबाट नै
**शनैः** = बिस्तारै बिस्तारै
**आगमत्** = (श्रीकृष्णको नजिक) आइन्

**वाक्यार्थ–** उल्टिएको ओखलमाथि बसी बाँदरलाई सिङमाङमा रहेको नौनी यथेच्छ बाँडिरहेका, चोरी गरेकाले आफ्ना शङ्कालु आँखालाई यताउति डुलाइरहेका आफ्ना छोरालाई देखी यशोदा पनि पछिल्तिरबाट बिस्तारै बिस्तारै श्रीकृष्णको नजिक आइन्।

**तामात्तयष्टिं प्रसमीक्ष्य सत्वरस्ततोऽवरुह्यापससार भीतवत्।**
**गोप्यन्वधावन्न यमाप योगिनां क्षमं प्रवेष्टुं तपसेरितं मनः॥ ९॥**

**पदार्थ–**
**आत्तयष्टिं** = लट्ठी लिएकी
**ताम्** = ती यशोदालाई
**प्रसमीक्ष्य** = देखेर
**सत्वरः** = हतारिएका श्रीकृष्ण
**ततः** = त्यहाँबाट
**अवरुह्य** = ओर्ली
**भीतवत्** = डराए झैं
**अपससार** = भाग्नुभयो
**योगिनां** = योगीहरूको
**तपसा** = तपस्याबाट
**ईरितं** = शक्तियुक्त भएको
**प्रवेष्टुं** = सूक्ष्म तत्त्वभित्रै पस्न
**क्षमं** = समर्थ
**मनः** = मनले पनि
**यम्** = जसलाई
**न आप** = भेट्टाउन सकेन
**गोपी** = गोपिनी यशोदाले
**अन्वधावत्** = (तिनैलाई) पछ्याइन्

**वाक्यार्थ–** लट्ठी लिएकी यशोदालाई एक्कासी आफ्नो नजिक देखी हतारिँदै श्रीकृष्ण त्यहाँबाट

ओर्लिनुभयो र डराए झैँ गरी भाग्न थाल्नुभयो। योगीहरूको अनेक तपस्याबाट शक्तियुक्त भएको र सूक्ष्म तत्त्वमा पुग्न समर्थ भएको मनले पनि जुन परमात्मालाई भेट्टाउन सक्दैन, तिनैलाई गोपिनी यशोदाले पछ्याइरहेकी थिइन्।

**अन्वञ्चमाना जननी बृहच्चलच्छ्रोणीभराक्रान्तगतिः सुमध्यमा।**
**जवेन विस्रंसितकेशबन्धनच्युतप्रसूनानुगतिः परामृशत्॥ १०॥**

**पदार्थ–**
**जवेन** = वेगपूर्वक
**अन्वञ्चमाना** = पछि दौडिएकी
**बृहच्चलच्छ्रोणीभराक्रान्तगतिः** = हल्लिरहेका ठुला नितम्बका भारले गर्दा वेग कम भएकी
**विस्रंसितकेशबन्धनच्युतप्रसूनानुगतिः** = फुस्किएको चुल्ठोबाट फूलहरू खसिरहँदा पनि छोरालाई पछ्याइरहेकी
**सुमध्यमा** = सुन्दरी
**जननी** = आमा यशोदाले
**परामृशत्** = (श्रीकृष्णलाई) समातिन्

**वाक्यार्थ–** वेगपूर्वक श्रीकृष्णको पछि दौडिरहेकी यशोदाको वेग उनका हल्लिरहेका ठुला नितम्बको भारले गर्दा कम भएको थियो। फुस्किएका चुल्ठोबाट फूलहरू खसिरहँदा पनि छोरालाई पछ्याउँदै दौडिरहेकी सुन्दरी यशोदाले आखिर श्रीकृष्णलाई समातिन्।

**विवरण–** माथिका श्लोकहरूमा उपद्रव गरी भागेका श्रीकृष्णलाई यशोदाले बल्लतल्ल समातेको वर्णन गरिएको छ। भगवान् बाहिर निस्किई ओखल पल्टाएर त्यसमाथि बस्नुभयो। अनि यशोदाले मथेको नौनी सबै बाँदरहरूलाई बाँड्न लाग्नुभयो। श्रीशुकदेव भन्नुहुन्छ– **चौर्यविशङ्कितेक्षण** अर्थात् चोरी–उपद्रव गरेकाले उहाँको आँखा शङ्कालु बनी चारैतर्फ दौडिरहेका थिए। यशोदा पनि यो चाला थाहा पाई पछिल्तिरबाट बिस्तार–बिस्तार श्रीकृष्णनजिक आइन्। शङ्कालु श्रीकृष्णले पुलुक्क पछिल्तिर हेर्दा त नजिकै हातमा लट्ठी लिएर आइरहेकी यशोदालाई देख्नुभयो। असाध्यै छिटो उहाँ त्यहाँबाट ओर्लिनुभयो र डराए झैँ भाग्न थाल्नुभयो। जसको भयबाट सम्पूर्ण जड–चेतन जगत् नियमित रूपले चल्दछ, त्यो परमात्माले किन डराउनपर्‍यो ? त्यसैले **भीतवत्** अर्थात् डराए झैँ अनुहार लगाई उहाँ भाग्नुभयो। वास्तवमा यशोदाले लट्ठी लिई त्यस्ता परमात्मालाई लखेटिरहेकी थिइन् जसलाई पाउन तपस्वी योगीहरूको दृढनिश्चययुक्त मन पनि समर्थ हुँदैन।

जबसम्म यशोदाले रिसाई श्रीकृष्णलाई लखेटिन् तबसम्म उनले श्रीकृष्णलाई भेट्टाउन सकिनन्। दौडिँदा स्तनको भारले गर्दा उनको गति कम भयो। स्तनको भारले दौडाइलाई कम गर्नुको मतलब मातृस्नेहले रिसलाई जित्नु हो। यसद्वारा यशोदामा रहेको दोषदृष्टिरूपी दोष हटेको देखाइएको छ। **सुमध्यमा** भन्ने पदले यशोदामा रहेको गुणलाई बताएको छ। दौडिँदाखेरि यशोदाका शिरबाट फूलहरू खसिरहेका थिए र उनी त्यसकै पछि पछि दौडिरहेकी थिइन्। केशबन्धनबाट खसिरहेका फूलहरू मुक्त व्यक्तिका प्रतीक हुन्। चुल्ठोबाट फुस्की तिनीहरू अघि–अघि किन खसिरहेका छन् भने उनीहरू छिटो श्रीकृष्णको चरणमा पुग्न चाहन्छन्। यसबाट यशोदाले मुक्त व्यक्तिहरूको अनुकरण गरेको तात्पर्य निस्कन्छ। यसरी दोषाभाव, गुण र मुक्त भक्तहरूको अनुकरण गर्नु, यी तीन साधनहरूले गर्दा यशोदाले श्रीकृष्णलाई समातिन्।

**कृतागसं तं प्ररुदन्तमक्षिणी कषन्तमञ्जन्मषिणी स्वपाणिना।**
**उद्वीक्षमाणं भयविह्वलेक्षणं हस्ते गृहीत्वा भिषयन्त्यवागुरत्॥ ११॥**

**पदार्थ–**
**कृतागसं** = गल्ती गरेका
**स्वपाणिना** = आफ्नो हातले
**अञ्जन्मषिणी** = गाजल लत्पतिएका
**अक्षिणी** = आँखालाई
**कषन्तम्** = मिची-मिची
**प्ररुदन्तम्** = रोइरहेका
**भयविह्वलेक्षणं** = डरको कारण व्याकुल आँखा भएका
**उद्वीक्षमाणं** = माथितिर हेरिरहेका
**तं** = ती श्रीकृष्णलाई
**हस्ते** = हातमा
**गृहीत्वा** = समातेर
**भिषयन्ती** = डर देखाउँदै
**अवागुरत्** = हप्काइन्

**वाक्यार्थ–** आफूले गल्ती गरेका कारण आँखा मिची-मिची रोइरहेका श्रीकृष्णको आँखाको गाजल लत्पतिएको थियो। डरका कारणले विह्वल आँखा भएका र माथितिर हेरिरहेका श्रीकृष्णलाई हातमा समाएर झन् डर देखाउँदै यशोदाले हप्काइन्।

**त्यक्त्वा यष्टिं सुतं भीतं विज्ञायार्भकवत्सला।**
**इयेष किल तं बद्धुं दाम्नातद्वीर्यकोविदा॥ १२॥**

**पदार्थ–**
**सुतं** = आफ्नो छोरोलाई
**भीतं** = डराएको
**विज्ञाय** = जानेर
**अर्भकवत्सला** = पुत्रवात्सल्यले युक्त
**अतद्वीर्यकोविदा** = उहाँको पराक्रमलाई नजानेकी यशोदाले
**यष्टिं** = लट्ठी
**त्यक्त्वा** = छाडी
**किल** = निश्चय नै
**तं** = उहाँलाई
**दाम्ना** = दाम्लोले
**बद्धुं** = बाँध्न
**इयेष** = चाहिन्

**वाक्यार्थ–** पुत्रवात्सल्यले युक्त यशोदाले आफ्नो छोरोलाई डराएको ठानिन् र हातको लट्ठी फालिदिइन्। त्यसपछि श्रीकृष्णको पराक्रमलाई नजानेकी यशोदाले उहाँलाई दाम्लोले बाँध्न चाहिन्।

**न चान्तर्न बहिर्यस्य न पूर्वं नापि चापरम्।**
**पूर्वापरं बहिश्चान्तर्जगतो यो जगच्च यः॥ १३॥**
**तं मत्वात्मजमव्यक्तं मर्त्यलिङ्गमधोक्षजम्।**
**गोपिकोलूखले दाम्ना बबन्ध प्राकृतं यथा॥ १४॥**

**पदार्थ–**
**यस्य** = जुन परमात्माको
**न अन्तः** = न भित्र छ
**न च बहिः** = न त बाहिर नै छ
**न पूर्वं** = न आदि छ
**न च अपरम्** = न त अन्त नै छ
**यः** = जो
**जगतः अपि** = संसारको पनि
**पूर्वापरं** = आदि र अन्त

**अन्तः** = भित्र र
**बहिः च** = बाहिरसमेत हुनुहुन्छ
**यः** = जो
**जगत् च** = जगत्‌को रूपसमेत हुनुहुन्छ
**तं** = त्यस्ता
**अव्यक्तं** = अव्यक्त
**मर्त्यलिङ्गम्** = मनुष्यको रूपमा देखिनुहुने
**अधोक्षजम्** = इन्द्रियातीत परमात्मालाई
**आत्मजम्** = आफ्नो छोरो
**मत्वा** = मानी
**गोपिका** = गोपिनी यशोदाले
**उलूखले** = ओखलमा
**प्राकृतं यथा** = कुनै सामान्य बालकलाई झैं
**दाम्ना** = दाम्लोले
**बबन्ध** = बाँधन थालिन्

**वाक्यार्थ–** परमात्मामा भित्र-बाहिर र आदि-अन्तको भेद छैन, अनि उहाँ नै सम्पूर्ण संसारका आदि, अन्त र भित्र-बाहिर समेत हुनुहुन्छ। त्यसै गरी परमात्मा नै जगत्‌को रूपमा देखिनुभएको हो। त्यस्ता अव्यक्त र इन्द्रियातीत परमात्मा, जो मानिसको रूपमा देखिनुभएको छ, उहाँलाई यशोदाले आफ्नो सानो छोरा भन्ने ठानिन् अनि कुनै सामान्य बालकलाई बाँधे झैं ओखलमा दाम्लोले बाँधन थालिन्।

**तद् दाम बध्यमानस्य स्वार्भकस्य कृतागसः।**
**द्व्यङ्गुलोनमभूत् तेन सन्दधेऽन्यच्च गोपिका॥ १५॥**

**पदार्थ–**
**कृतागसः** = अपराध गरेका
**बध्यमानस्य** = बाँधिइरहेका
**स्वार्भकस्य** = आफ्ना पुत्र श्रीकृष्णका लागि
**तत्** = त्यो
**दाम** = दाम्लो
**द्व्यङ्गुलोनम्** = दुई औंला कम
**अभूत्** = भयो
**तेन** = त्यसैले
**गोपिका** = गोपिनी यशोदाले
**अन्यत् च** = अरू डोरी पनि
**सन्दधे** = गाँसिन्

**वाक्यार्थ–** अपराध गरेका कारण यशोदाको पुत्र श्रीकृष्ण बाँधिदै हुनुहुन्थ्यो, तर बाँध्ने दाम्लो दुई औंला छोटो भयो, त्यसैले यशोदाले अरू डोरी पनि गाँसिन्।

**यदासीत् तदपि न्यूनं तेनान्यदपि सन्दधे।**
**तदपि द्व्यङ्गुलं न्यूनं यद्यदादत्त बन्धनम्॥ १६॥**

**पदार्थ–**
**यदा** = जब
**तत् अपि** = त्यो डोरी पनि
**न्यूनं** = नपुग्ने
**आसीत्** = भयो
**तेन** = त्यसैले
**अन्यत् अपि** = अरू पनि
**सन्दधे** = गाँसिन्
**यत् यत्** = जुन-जुन
**बन्धनम्** = डोरीलाई
**आदत्त** = लिन्छिन्
**तत् अपि** = त्यो डोरी पनि
**द्व्यङ्गुलं** = दुई औंला नै
**न्यूनं** = कम भइरह्यो

**वाक्यार्थ–** जब त्यो डोरी पनि नपुग्ने भयो, तब यशोदाले त्यसमा अरू डोरीलाई पनि गाँसिन्। उनले जति पनि डोरीलाई लिँदै गाँस्दै गइन्, ती सबै मिलाउँदा पनि दुई औंला छोटो नै भयो।

**एवं स्वगेहदामानि यशोदा सन्दधत्यपि।**
**गोपीनां सुस्मयन्तीनां स्मयन्ती विस्मिताभवत्॥ १७॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**स्वगेहदामानि** = आफ्नो घरका दाम्लोहरूलाई
**सन्दधती** = गाँसिरहेकी
**यशोदा अपि** = यशोदा पनि
**सुस्मयन्तीनां** = अत्यन्त चकित भइरहेका
**गोपीनां** = गोपिनीहरूले सहित
**स्मयन्ती** = हाँस्दै-हाँस्दै
**विस्मिता** = आश्चर्यचकित
**अभवत्** = भइन्

**वाक्यार्थ–** यसप्रकार यशोदाले आफ्ना घरका सबै दाम्लोहरूलाई गाँस्दै बाँध्न खोजिरहँदा सम्पूर्ण गोपिनीहरू अत्यन्त चकित भई हेरिरहेका थिए। यशोदा पनि तीसँगै मुस्कुराउँदै आश्चर्यचकित भइन्।

**स्वमातुः स्विन्नगात्राया विस्रस्तकबरस्रजः।**
**दृष्ट्वा परिश्रमं कृष्णः कृपयासीत् स्वबन्धने॥ १८॥**

**पदार्थ–**
**स्विन्नगात्रायाः** = पसिनाले शरीर लथपथ भएकी
**विस्रस्तकबरस्रजः** = चुल्ठोमा लगाइएका फूलका रङ्गीबिरङ्गी मालाहरू खसिरहेका
**स्वमातुः** = आफ्नी आमाको
**परिश्रमं** = परिश्रमलाई
**दृष्ट्वा** = देखेर
**कृष्णः** = भगवान् श्रीकृष्ण
**कृपया** = कृपा गरी
**स्वबन्धने** = आफ्नो बन्धनमा
**आसीत्** = रहनुभयो

**वाक्यार्थ–** आफ्नी आमाको शरीर पसिनाले लथपथ भएको, उहाँको चुल्ठोमा लगाइएका फूलका रङ्गीबिरङ्गी मालाहरू पनि फुस्केर खसिरहेको यस्तो अवस्थामा रहेकी आफ्नी आमाको परिश्रमलाई देखी श्रीकृष्ण कृपापूर्वक आफ्नो बन्धनमा आफैँ पर्नुभयो।

**एवं सन्दर्शिता ह्यङ्ग हरिणा भृत्यवश्यता।**
**स्ववशेनापि कृष्णेन यस्येदं सेश्वरं वशे॥ १९॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय राजा
**सेश्वरं** = लोकपालहरूले सहित
**इदं** = यो जगत्
**यस्य** = जसको
**वशे** = वशमा छ
**स्ववशेन** = आफ्नै वशमा रहनुहुने
**हरिणा** = श्रीहरि
**कृष्णेन** = श्रीकृष्णद्वारा
**एवं** = यसप्रकार
**हि** = निश्चय नै
**भृत्यवश्यता अपि** = आफ्ना सेवकहरूको अधीनमा आफू रहेको पनि
**सन्दर्शिता** = देखाइयो

**वाक्यार्थ–** हे प्रिय परीक्षित्! सम्पूर्ण लोकपालहरूले सहित यो जगत् जसको वशमा छ उहाँ आफ्नै वशमा रहनुहुने श्रीहरि श्रीकृष्ण भगवान्ले यसप्रकार आफू आफ्ना भक्तहरूको अधीनमा

रहेको देखाउनुभयो।

**विवरण–** यशोदाले परमात्मालाई दाम्लाले बाँध्न त खोजिन्, तर सर्वव्यापक उहाँ दाम्लोद्वारा कसरी बाँधिनुहुन्थ्यो ? दाम्लो बन्धनको प्रतीक हो। जसको चिन्तन मात्रले पनि प्राणीहरूको संसारबन्धनलाई चुँडाइदिन्छ भने त्यही परमात्मालाई दाम्लोले बाँध्न कसरी सकिन्छ ? यो सबै भए तापनि भक्तले यदि प्रेमको बन्धनमा बाँध्न खोज्छ भने उहाँ त्यसबाट बाँधिन स्वीकार गर्नुहुन्छ। यही परमात्माको करुणापूर्ण स्वभाव हो। भगवान्ले यशोदाको हातबाट बाँधिन दुई कारणले स्वीकार गर्नुभएको थियो। एउटा **स्वार्भकः** अर्थात् यशोदाको पुत्र भएकाले अनि अर्को **कृतागः** अर्थात् आफूले अपराध गरेकाले। तर भगवान्मा रहेको भक्ति त किन यत्तिकै बस्दथ्यो र ? यशोदाले श्रीकृष्णलाई बाँध्न खोजिन्, तर प्रेममा विशेष व्यग्रता र भगवत्कृपा नभई भगवान् प्रेमबन्धनमा बाँधिनुहुन्न, दुई अङ्गुल नपुग्नुको यही रहस्य थियो। यशोदामा सामान्य प्रेम त थियो, तर विशेष व्यग्रता भइसकेको थिएन। जब परिश्रम गर्दा थाकी उनी विशेष व्यग्र बनिन्, तब आफ्नो कृपाद्वारा नै भगवान् बन्धनमा पर्नुभयो।

भगवान् ओखलमा बाँधिनुभएको विषयलाई लिएर आचार्यहरूद्वारा धेरै विचार गरिएको छ। यस लीलाबाट उहाँको एउटा नाम नै थपिएको छ– दामोदर। **दाम उदरे यस्य** अर्थात् जसको पेटमा भक्तले बाँधेको दाम्लो छ। भक्तको बन्धनमा परेको यो स्वरूपले अरू भक्तहरूलाई झन् चाँडै बन्धनबाट मुक्त गरिदिन सक्छ। भावुक भक्तहरूले उपनिषद् आदि शास्त्रमा परमात्माको खोजी गर्दा-गर्दा थाकेका योगी-ध्यानी साधकहरूलाई उपदेश दिँदै भनेका छन्–

**विचिनुत भवनेषु वल्लभीनाम्**
**उपनिषदर्थमुलूखले निबद्धम्।**

अर्थात् हे साधकहरू ! वेदमा परमात्मा खोज्दा-खोज्दा थाकेका छौ भने अब हाम्रो उपदेश सुन, उपनिषत्प्रतिपाद्य तिम्रो ब्रह्म त गोठाल्नीहरूको गाउँमा पुगी तिनकै आँगनमा ओखलमा बाँधिएर बसेको छ, उसलाई त्यतै खोज। भगवान् भक्तको वशमा परेको यो विशेष लीला हो र यसले प्रेमको महत्त्वलाई स्पष्ट पारेको छ।

**नेमं विरिञ्चो न भवो न श्रीरप्यङ्गसंश्रया।**
**प्रसादं लेभिरे गोपी यत्तत् प्राप विमुक्तिदात्॥ २०॥**

**पदार्थ–**
**गोपी** = गोपिनी यशोदाले
**विमुक्तिदात्** = मुक्तिदाता (श्रीहरि)बाट
**यत्** = जुन
**प्रसादं** = प्रसादलाई
**प्राप** = पाइन्
**तत्** = त्यो
**इमं** = यो प्रसाद त
**न विरिञ्चः** = न ब्रह्माजी
**न भवः** = न भगवान् शङ्कर अनि
**अङ्गसंश्रया** = वक्षःस्थलमैं बस्ने
**श्रीः अपि** = लक्ष्मीले समेत
**न लेभिरे** = पाइनन्

**वाक्यार्थ–** मुक्तिदाता श्रीहरिबाट जुन प्रसाद यशोदाले पाइन् त्यो प्रसाद त ब्रह्माजी, भगवान् शङ्कर र स्वयं श्रीहरिको वक्षःस्थलमा बस्ने लक्ष्मीले समेत पाइनन्।

**नायं सुखापो भगवान् देहिनां गोपिकासुतः ।**
**ज्ञानिनां चात्मभूतानां यथा भक्तिमतामिह ॥ २१ ॥**

**पदार्थ–**
**इह** = यो संसारमा
**अयं** = यी
**गोपिकासुतः** = गोपिनी यशोदाका छोरा
**भगवान्** = भगवान् श्रीकृष्ण
**यथा** = जसरी
**भक्तिमताम्** = भक्ति गर्नेहरूका लागि (प्राप्य हुनुहुन्छ त्यसरी)
**देहिनां** = देहाभिमानी कर्ममा आसक्तहरूका लागि
**आत्मभूतानां** = आत्मस्वरूप भएका तपस्वीहरूका लागि र
**ज्ञानिनां च** = ज्ञानीहरूका लागि पनि
**न सुखापः** = सुखैसँग पाइनुहुन्न

**वाक्यार्थ–** यशोदाका छोरा भगवान् श्रीकृष्ण भक्ति गर्नेहरूका लागि जसरी सजिलैसँग प्राप्य हुनुहुन्छ, त्यसरी सुखैसँग उहाँ न देहाभिमानी कर्ममा आसक्तहरूका लागि, न आत्मस्वरूप भएका तपस्वीहरूका लागि र न त ज्ञानीहरूलाई नै प्राप्य हुनुहुन्छ।

**कृष्णस्तु गृहकृत्येषु व्यग्रायां मातरि प्रभुः ।**
**अद्राक्षीदर्जुनौ पूर्वं गुह्यकौ धनदात्मजौ ॥ २२ ॥**
**पुरा नारदशापेन वृक्षतां प्रापितौ मदात् ।**
**नलकूबरमणिग्रीवाविति ख्यातौ श्रियान्वितौ ॥ २३ ॥**

**पदार्थ–**
**मातरि** = आमा
**गृहकृत्येषु** = घरायसी काममा
**व्यग्रायां** = व्यग्र भई लागेपछि
**प्रभुः** = सर्वसमर्थ
**कृष्णः तु** = भगवान् श्रीकृष्णले चाहिँ
**पूर्वं** = पहिले
**धनदात्मजौ** = कुबेरका छोरा
**नलकूबरमणिग्रीवौ इति** = नलकूबर र मणिग्रीव नामले
**ख्यातौ** = प्रख्यात भएका
**गुह्यकौ** = यक्ष
**श्रिया** = दिव्य ऐश्वर्यले
**अन्वितौ** = युक्त
**पुरा** = पहिल्यै
**मदात्** = अभिमान गर्नाको कारणले
**नारदशापेन** = नारदको श्रापद्वारा
**वृक्षतां** = वृक्षरूपमा
**प्रापितौ** = पुऱ्याइएका
**अर्जुनौ** = एक जोडी खरीको वृक्षलाई
**अद्राक्षीत्** = देख्नुभयो

**वाक्यार्थ–** आफ्नी आमा घरायसी काममा लागेपछि सर्वसमर्थ भगवान् श्रीकृष्णले एक जोडी खरीको वृक्ष बनेका नलकूबर र मणिग्रीव नामले प्रख्यात कुबेरका दुई छोरालाई देख्नुभयो। दिव्य ऐश्वर्यले युक्त भए पनि अभिमान गर्नाको कारणले नारदको श्रापद्वारा ती दुई यक्ष वृक्ष भएका थिए।

**विवरण–** माथिका दुई श्लोकमा भगवान्ले ओखलमा बाँधिएकै अवस्थामा पनि दुई ओटा खरीको वृक्ष बनेका नलकूबर र मणिग्रीवलाई त्यो वृक्षयोनिबाट मुक्त गरिदिने विचार गर्नुभएको बताइएको छ। श्रीधर स्वामी लेख्नुहुन्छ **भक्तैः बद्धस्यापि अन्यमोचकत्वं** अर्थात् भक्तद्वारा आफैँ

बाँधिएको अवस्थामा पनि परमात्माले अरूलाई मुक्त गर्नुहुन्छ। उहाँको यही सामर्थ्यलाई **प्रभुः** भन्ने पदले प्रकट गरेको छ। श्रीकृष्णलाई ओखलमा बाँधिसकेपछि यशोदा फेरि घरायसी काममा व्यस्त बन्नुभयो। उहाँको मनमा प्रपञ्चको स्मृति भएकाले त्यसलाई फेरि आफूतिर फर्काउन उहाँले यो रुख भाँच्ने लीला रच्नुभएको बुझिन्छ।

**अध्याय टिप्पणी–** यस अध्यायको श्लोकविभाग गर्दै सुबोधिनीकार भन्नुहुन्छ– १ देखि १० श्लोकसम्म यशोदाले पुरुषार्थद्वारा भगवान्लाई समातेको वर्णन छ। नवधा भक्तिको अभ्यासद्वारा प्रेमरूप या गुणातीत भक्तिको प्रादुर्भाव हुन्छ, तब त्यही दसौँ भक्तिद्वारा भगवान् पाइनुहुन्छ भन्ने जनाउन सुरुका १० श्लोकको प्रयोग गरिएको हो। परमात्माको गुणश्रवण गर्नेबित्तिकै मन एकतान भई अविच्छिन्नरूपले परमात्मामा नै लागिरहनु निर्गुण या गुणातीत भक्ति हो (भागवत, ३/२९/१२) भनी कपिलदेवले देवहूतिलाई उपदेश गर्नुभएको छ। भगवान्तिर नै अविच्छिन्न प्रवाहित भइरहने स्नेहलाई प्रेम भनिन्छ। नवधा भक्ति यसैलाई पाउने साधन हुन्। यहाँ यशोदाले दौडिँदा-दौडिँदा बल्लतल्ल भगवान्लाई भेट्टाएको देखाई नवधा भक्तिरूपी साधनको अभ्यास गर्दागर्दा प्रेमरूपा भक्ति उदाएपछि मात्र भगवान् पाइनुहुन्छ भनी बताइएको छ। त्यसपछि दुई श्लोकमा यशादाले भगवान्लाई समात्न प्रयास गरेको र पछिल्ला छ वटा श्लोकमा बाँधेको देखाइएको छ। त्यसपछिका पाँच श्लोकमा भगवान्ले यमलार्जुनलाई उद्धार गर्ने विचार गर्नुभएको देखाइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे गोपीप्रसादो नाम नवमोऽध्यायः॥ ९॥**

# अथ दशमोऽध्यायः

## नलकूबर र मणिग्रीवलाई नारद ऋषिको श्राप

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**कथ्यतां भगवन्नेतत् तयोः शापस्य कारणम् ।**

**यत्तद् विगर्हितं कर्म येन वा देवर्षेस्तमः ॥ १ ॥**

**पदार्थ–**
**भगवन्** = हे प्रभु
**येन वा** = जुन कामद्वारा
**देवर्षेः** = देवर्षि नारदलाई
**तमः** = क्रोध (आयो)
**तयोः** = ती दुई नलकूबर र मणिग्रीवको
**यत्** = जुन
**विगर्हितं** = निन्दित
**शापस्य** = श्रापको
**कारणं** = कारण भएको
**कर्म** = कर्म (के थियो)
**एतत्** = त्यो
**कथ्यतां** = बताउनुहोस्

**वाक्यार्थ–** हे प्रभु ! नलकूबर र मणिग्रीवले कुन त्यस्तो निन्दित कर्म गरे, जसका कारण देवर्षि नारदजीलाई क्रोध आयो र उनीहरूलाई श्राप दिनुभयो ? मलाई यसका बारेमा बताउनुहोस् ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**रुद्रस्यानुचरौ भूत्वा सुदृप्तौ धनदात्मजौ ।**

**कैलासोपवने रम्ये मन्दाकिन्यां मदोत्कटौ ॥ २ ॥**

**वारुणीं मदिरां पीत्वा मदाघूर्णितलोचनौ ।**

**स्त्रीजनैरनुगायद्भिश्चेरतुः पुष्पिते वने ॥ ३ ॥**

**पदार्थ–**
**रुद्रस्य** = भगवान् रुद्रका
**अनुचरौ** = सेवक
**भूत्वा** = भएर
**सुदृप्तौ** = अहङ्कारी
**मदोत्कटौ** = ज्यादै उद्दण्ड (भई)
**वारुणीं** = वारुणी
**मदिरां** = मदिरा
**पीत्वा** = पिएर
**मदाघूर्णितलोचनौ** = मदिराको नशाले आँखा घुमाइरहेका
**धनदात्मजौ** = कुबेरका छोरा नलकूबर र मणिग्रीव
**रम्ये** = अत्यन्त रमणीय
**कैलासोपवने** = कैलास पर्वतको बगैँचामा
**मन्दाकिन्यां** = मन्दाकिनीको तटमा
**पुष्पिते** = फुलेको
**वने** = वनमा
**अनुगायद्भिः** = सँगसँगै गीत गाइरहेका
**स्त्रीजनैः** = स्त्रीहरूसँग
**चेरतुः** = घुम्न लागे

**वाक्यार्थ–** हे परीक्षित् ! धनका मालिक कुबेरका छोरा नलकूबर र मणिग्रीव यी दुई दाजुभाइ

भगवान् रुद्रका सेवक थिए। यिनीहरू अत्यन्त अहङ्कारी र उद्दण्ड भएका थिए। एकदिन वारुणी मदिरा पिएर त्यसको नशाले आँखा घुमाइरहेका उनीहरू मन्दाकिनीको तटमा प्रशस्त फूलहरू भएको कैलास पर्वतको सुन्दर बगैँचामा स्त्रीहरूसँगै गीत गाउँदै घुम्न लागे।

**अन्तः प्रविश्य गङ्गायामम्भोजवनराजिनि।**
**चिक्रीडतुर्युवतिभिर्गजाविव करेणुभिः॥ ४॥**

**पदार्थ–**
**अम्भोजवनराजिनि** = कमलवनको पङ्क्ति भएको
**गङ्गायाम्** = मन्दाकिनी गङ्गामा
**अन्तः** = भित्र
**प्रविश्य** = प्रवेश गरेर
**करेणुभिः** = हत्तिनीहरूसँग
**गजौ इव** = दुई हात्तीले झैँ
**युवतिभिः** = युवतीहरूसँग
**चिक्रीडतुः** = क्रीडा गर्न थाले

**वाक्यार्थ–** मन्दाकिनी गङ्गामा फुलेका कमलपुष्पहरूको पङ्क्ति देखिन्थ्यो। नलकूबर र मणिग्रीव त्यही गङ्गाभित्र पसेर युवतीहरूका साथ हत्तिनीहरूसँग हात्तीले विहार गरे झैँ विहार गर्न लागे।

**यदृच्छया च देवर्षिर्भगवांस्तत्र कौरव।**
**अपश्यन्नारदो देवौ क्षीबाणौ समबुध्यत॥ ५॥**

**पदार्थ–**
**कौरव** = हे कुरुवंशी परीक्षित्
**यदृच्छया** = संयोगवश
**तत्र** = त्यही ठाउँमा
**भगवान्** = भगवान्
**देवर्षिः** = देवर्षि
**नारदः** = नारदले
**देवौ** = देवयोनि भएका कुबेरका पुत्रहरूलाई
**अपश्यत्** = देख्नुभयो र
**क्षीबाणौ च** = उन्मत्त भएको
**समबुध्यत** = थाहा पाउनुभयो

**वाक्यार्थ–** हे परीक्षित्! त्यही वेला संयोगवश नारदजी त्यहाँ आइपुग्नुभयो। उहाँले युवतीहरूका साथ विहार गरिरहेका कुबेरपुत्र नलकूबर र मणिग्रीवलाई देख्नुभयो र उहाँले ती दुई मदोन्मत्त भएको थाहा पाउनुभयो।

**तं दृष्ट्वा व्रीडिता देव्यो विवस्त्राः शापशङ्किताः।**
**वासांसि पर्यधुः शीघ्रं विवस्त्रौ नैव गुह्यकौ॥ ६॥**

**पदार्थ–**
**विवस्त्राः** = वस्त्र नलगाएका
**देव्यः** = अप्सराहरूले
**तं** = ती नारदजीलाई
**दृष्ट्वा** = देखेर
**व्रीडिताः** = लज्जित भई
**शापशङ्किताः** = श्रापको भयले आशङ्कित भएर
**वासांसि** = वस्त्रहरू
**शीघ्रं** = हतार गरी
**पर्यधुः** = लगाए
**विवस्त्रौ** = वस्त्रहीन
**गुह्यकौ न एव** = यक्षहरूले वस्त्र लगाएनन्

**वाक्यार्थ–** जलक्रीडारत निर्वस्त्र अप्सराहरूले देवर्षि नारदलाई देखेर लज्जित भई नारदले श्राप दिनुहोला भन्ने डरले हतार-हतार वस्त्रहरू लगाए, तर वस्त्रहीन नलकूबर र मणिग्रीवले वस्त्र

लगाएनन्।

**तौ दृष्ट्वा मदिरामत्तौ श्रीमदान्धौ सुरात्मजौ।**
**तयोरनुग्रहार्थाय शापं दास्यन्निदं जगौ॥ ७॥**

पदार्थ–
**सुरात्मजौ** = देवतांश कुबेरका छोरा (भए पनि)
**श्रीमदान्धौ** = धनको मदले अन्धो भएका
**मदिरामत्तौ** = मदिरापान गरेर उन्मत्त भएका
**तौ** = ती दुई नलकूबर र मणिग्रीवलाई
**दृष्ट्वा** = देखेर
**तयोः** = ती दुईलाई
**अनुग्रहार्थाय** = अनुग्रह गर्नका लागि
**शापं** = श्राप
**दास्यन्** = दिँदै नारदले
**इदं** = यसो
**जगौ** = भन्नुभयो

**वाक्यार्थ–** देवतांश भएका कुबेरको पुत्र भएर पनि धनको मदले अन्धो भएका र मदिरा पिएर उन्मत्त भएका नलकूबर र मणिग्रीवलाई देखेर तिनीहरूलाई अनुग्रह गर्नका लागि श्राप दिँदै नारदले भन्नुभयो।

**नारद उवाच** (नारदले भन्नुभयो)

**न ह्यन्यो जुषतो जोष्यान् बुद्धिभ्रंशो रजोगुणः।**
**श्रीमदादाभिजात्यादिर्यत्र स्त्री द्यूतमासवः॥ ८॥**

पदार्थ–
**जोष्यान्** = तृप्तिकारक प्रिय विषयहरू (धनसम्पत्ति)लाई
**जुषतः** = सेवन गर्ने पुरुषको (जसरी)
**बुद्धिभ्रंशः** = विवेक नाश हुन्छ (त्यसरी)
**श्रीमदात्** = धनसम्पत्तिको मदभन्दा
**अन्यः** = अरू
**आभिजात्यादिः** = कुलीनता आदि
**रजोगुणः** = रजोगुणको कार्यभूत (हास्य, हर्ष आदि पनि)
**हि** = निश्चय
**न** = हुँदैन
**यत्र** = जुन धनसम्पत्तिको मदमा
**स्त्री** = स्त्री
**द्यूतम्** = जुवा
**आसवः** = मदिरा (सबै हुन्छन्)

**वाक्यार्थ–** जुन पुरुष आफ्ना इन्द्रियहरूलाई तृप्ति प्रदान गर्ने विषयहरूको सेवन गर्दछ, त्यो पुरुषको सबैभन्दा ठुलो विवेकनाशक वस्तु धनसम्पत्तिजन्य मद नै हो। धनसम्पत्तिको मदले जसरी बुद्धिभ्रष्ट गराउँछ, त्यसरी कुलीनता आदिले गर्दैनन्, न त हास्य, हर्ष आदि रजोगुणका कार्यहरूले नै गराउँछन्। किनभने सम्पत्तिजन्य मदमा स्त्री, जुवा, मदिरा आदि सबै बुद्धिनाशक विषयहरू रहेका हुन्छन्।

**हन्यन्ते पशवो यत्र निर्दयैरजितात्मभिः।**
**मन्यमानैरिमं देहमजरामृत्यु नश्वरम्॥ ९॥**

**पदार्थ**–
**यत्र** = जुन सम्पत्तिजन्य मदमा (रहेका)
**इमं** = यो
**नश्वरम्** = विनाशशील
**देहम्** = शरीरलाई
**अजरामृत्यु** = अजर र अमर
**मन्यमानैः** = ठान्ने
**निर्दयैः** = निर्दयी
**अजितात्मभिः** = इन्द्रियका वशीभूत भएका व्यक्तिहरूद्वारा
**पशवः** = प्राणीहरू
**हन्यन्ते** = मारिन्छन्

**वाक्यार्थ**– सम्पत्ति र तज्जन्य मद भएका व्यक्तिहरू आफ्नो नश्वर शरीरलाई अजर र अमर ठान्दछन्। उनीहरूमा दया पटक्कै रहँदैन र इन्द्रियको दास भएका हुन्छन्। त्यस्ता व्यक्तिहरू अरू प्राणीहरूलाई मार्दछन्।

**देवसंज्ञितमप्यन्ते कृमिविड्भस्मसंज्ञितम्।**
**भूतध्रुक् तत्कृते स्वार्थं किं वेद निरयो यतः॥ १०॥**

**पदार्थ**–
**देवसंज्ञितम् अपि** = देवको संज्ञा पाएको भए पनि (यो देहलाई देव, नरदेव, भूदेव भनिए पनि)
**अन्ते** = मृत्युपछि
**कृमिविड्भस्मसंज्ञितम्** = किरा, विष्ठा र भस्म भनिन्छ
**तत्कृते** = त्यस्तो शरीरका लागि
**भूतध्रुक्** = प्राणीहरूसँग द्रोह गर्ने व्यक्तिले
**स्वार्थं** = आफ्नो कल्याण
**किं वेद** = के जान्दछ
**यतः** = जुन प्राणीद्रोहबाट
**निरयः** = नरकको यातना मात्र हुन्छ

**वाक्यार्थ**– यो शरीरलाई मृत्युभन्दा पहिले देव, नरदेव, भूदेव आदि नामले चिनिन्छ, तर मृत्युपश्चात् त्यही शरीरलाई किरा, विष्ठा वा खरानी भनिन्छ। यस्तो नश्वर शरीरको सुखका लागि प्राणीहरूसँग द्रोह गर्ने व्यक्तिले आफ्नो कल्याण के जान्दछ र ? प्राणीद्रोहबाट त नरकको यातना मात्र प्राप्त हुन्छ।

**देहः किमन्नदातुः स्वं निषेक्तुर्मातुरेव च।**
**मातुः पितुर्वा बलिनः क्रेतुरग्नेः शुनोऽपि वा॥ ११॥**

**पदार्थ**–
**देहः** = यो शरीर
**किं** = के
**अन्नदातुः** = अन्नदाताको (वा)
**निषेक्तुः वा** = गर्भाधान गराउने पिताको (वा)
**मातुः एव च** = अथवा गर्भधारण गर्ने आमाको
**मातुः पितुः** = आमाका पिता (हजुरबा)को
**बलिनः** = बलशाली राजा आदिको
**क्रेतुः** = पैसा दिएर किन्ने क्रेताको
**अग्नेः** = (मृत्युपछि खरानी बनाउने) अग्निको
**अपि वा** = अथवा
**शुनः** = (मरेपछि खाने) कुकुरको
**स्वं** = धन हो

**वाक्यार्थ**– (जुन शरीरमा अज्ञानी जीवहरू ममता गर्दछन्,) त्यो शरीर वास्तवमा कसको हो ? अन्न दिएर पोषण गर्ने अन्नदाताको हो ? अथवा गर्भाधान गराउने पिताको ? अथवा गर्भमा धारण

गर्ने माताको ? अथवा ती मातालाई पनि जन्म दिने हजुरबुबाको ? अथवा बलशाली राजाको हो ? कि पैसा दिएर किन्ने कुनै क्रेताको हो ? अथवा मृत्युपश्चात् खरानी बनाउने आगोको हो ? अथवा मृत्युपछि शरीरलाई खाने कुकुरको हो ? शरीर कसको सम्पत्ति हो ?

**एवं साधारणं देहमव्यक्तप्रभवाप्ययम् ।**
**को विद्वानात्मसात् कृत्वा हन्ति जन्तूनृतेऽसतः ॥ १२ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**अव्यक्तप्रभवाप्ययम्** = प्रकृतिबाट उत्पन्न हुने र त्यहीँ लीन हुने
**साधारणं** = साधारण
**देहम्** = शरीरलाई
**आत्मसात्** = आत्मा ठैँ
**कृत्वा** = गरेर (त्यसको सुखका लागि)
**असतः ऋते** = मूर्खलाई छाडेर
**कः** = कुन
**विद्वान्** = विद्वान्ले
**जन्तून्** = पशुहरूलाई
**हन्ति** = मार्दछ

**वाक्यार्थ–** यसरी प्रकृतिबाट उत्पन्न हुने र प्रकृतिमैं विलीन हुने यस्तो साधारण शरीरलाई आत्मा ठानेर त्यसको सुखका लागि मूर्ख व्यक्ति बाहेक कुन चाहिँ विद्वान्ले पशुहरूलाई मार्दछ र ?

**असतः श्रीमदान्धस्य दारिद्र्यं परमञ्जनम् ।**
**आत्मौपम्येन भूतानि दरिद्रः परमीक्षते ॥ १३ ॥**

**पदार्थ–**
**असतः** = दुष्ट
**श्रीमदान्धस्य** = धनको मदले अन्धो व्यक्तिको
**दारिद्र्यं** = दरिद्रता नै
**परम्** = एक मात्र
**अञ्जनम्** = (दृष्टिप्रसाधक) गाजल हो (किनभने)
**परम्** = केवल
**दरिद्रः** = दरिद्रले नै
**भूतानि** = प्राणीहरूलाई
**आत्मौपम्येन** = आफूसमान
**ईक्षते** = देख्दछ

**वाक्यार्थ–** सम्पत्तिको मदले अन्धो भएको व्यक्तिको लागि दरिद्रता नै दृष्टिप्रसाधक गाजल हो। किनभने केवल दरिद्रले मात्र सम्पूर्ण प्राणीहरूलाई आफूसमान देख्दछ (र कसैको हिंसा गर्दैन)।

**यथा कण्टकविद्धाङ्गो जन्तोर्नेच्छति तां व्यथाम् ।**
**जीवसाम्यं गतो लिङ्गैर्न तथाविद्धकण्टकः ॥ १४ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**कण्टकविद्धाङ्गः** = आफ्ना अङ्गमा काँडा बिझेको व्यक्तिले (अथवा)
**जीवसाम्यं गतः** = सबै जीव उस्तै हुन् भन्ने बुझेको व्यक्तिले (आफूलाई झैँ अरूलाई पनि काँडा बिझ्दा दुख्छ भन्ने जानेको व्यक्तिले)
**लिङ्गैः** = मलिन मुख आदि लक्षणहरूद्वारा (थाहा पाइने)
**जन्तोः** = अरू जीवहरूको
**तां** = त्यो (काँडो बिझेर भएको)
**व्यथाम्** = दुःखलाई
**न इच्छति** = चाहँदैन
**तथा** = त्यसरी
**अविद्धकण्टकः** = काँडा

नबिझेका व्यक्तिले | **न** = जान्दैन

**वाक्यार्थ–** जुन व्यक्तिलाई काँडा बिझेको छ र जसले सबै जीवको दुःख उस्तै हो भन्ने बुझेको छ उसले अरू जीवहरूको मलिन मुख देखेर यसलाई पीडा भएको रहेछ भन्ने अनुभव गर्न सक्दछ र अरूलाई यस्तो पीडा होस् भन्ने चाहँदैन, तर जसलाई काँडा बिझेकै छैन त्यो व्यक्तिले काँडा बिझ्दा हुने पीडालाई बुझ्नै सक्दैन।

**दरिद्रो निरहंस्तम्भो मुक्तः सर्वमदैरिह ।**

**कृच्छ्रं यदृच्छयाप्नोति तद्धि तस्य परं तपः ॥ १५ ॥**

**पदार्थ–**
**इह** = यस संसारमा
**सर्वमदैः** = (विद्या, धन, यश रूप आदिबाट हुने) सारा मदबाट
**मुक्तः** = रहित
**निरहंस्तम्भः** = अहङ्काररूपी खम्बा ढलिसकेको
**दरिद्रः** = दरिद्र नै
**यदृच्छया** = प्रारब्धवश
**कृच्छ्रं** = दुःखलाई
**आप्नोति** = प्राप्त गर्दछ
**तत् हि** = त्यही दुःख नै
**तस्य** = त्यो दरिद्रको
**परं** = परम
**तपः** = तपस्या हो

**वाक्यार्थ–** यो संसारमा दरिद्र नै त्यस्तो व्यक्ति हो जो विद्या, धन, यश, रूप आदिबाट हुने सबै प्रकारका मदले रहित हुन्छ र उसमा अहङ्कार पनि हुँदैन। ऊ प्रारब्धवश अनेक दुःख प्राप्त गर्दछ, दुःख नै उसको महान् तपस्या हो।

**नित्यं क्षुत्क्षामदेहस्य दरिद्रस्यान्नकाङ्क्षिणः ।**

**इन्द्रियाण्यनुशुष्यन्ति हिंसापि विनिवर्तते ॥ १६ ॥**

**पदार्थ–**
**नित्यं** = सधैं
**क्षुत्क्षामदेहस्य** = भोकले दुब्लो शरीर भएको
**अन्नकाङ्क्षिणः** = अन्नको चाहना गर्ने
**दरिद्रस्य** = दरिद्रका
**इन्द्रियाणि** = इन्द्रियहरू
**अनुशुष्यन्ति** = सुक्दै जान्छन् (त्यसपछि)
**हिंसा अपि** = हिंसाभाव पनि
**विनिवर्तते** = हराउँछ

**वाक्यार्थ–** सधैं भोको रहेको कारण दुब्लो भएको, खानका लागि अन्न चाहने यस्ता दरिद्रहरूका इन्द्रियहरू सुक्दै जान्छन्। त्यसपछि उनीहरूमा हिंसाभाव पनि हराउँछ।

**दरिद्रस्यैव युज्यन्ते साधवः समदर्शिनः ।**

**सद्भिः क्षिणोति तं तर्षं तत आराद् विशुद्ध्यति ॥ १७ ॥**

**पदार्थ–**
**समदर्शिनः** = समदर्शी
**साधवः** = सज्जनहरू
**दरिद्रस्य एव** = दरिद्रसँग नै
**युज्यन्ते** = भेटघाट गर्दछन्
**सद्भिः** = सज्जनहरूसँगको

सत्सङ्गका कारण (दरिद्रले)
**तं** = त्यो मनमा रहेको
**तर्षं** = तृष्णालाई
**क्षिणोति** = त्याग्दछ
**ततः** = त्यसपछि (तृष्णारहित भएपछि)
**आरात्** = छिट्टै
**विशुद्ध्यति** = शुद्ध हुन्छ

**वाक्यार्थ–** समदर्शी साधुहरू दरिद्रहरूसँग नै भेटघाट गर्दछन्। साधुहरूको सङ्गत पाएर दरिद्रहरूले तृष्णालाई पूर्णतः त्याग्दछन्। त्यसपछि सम्पूर्ण तृष्णाले रहित भएका दरिद्रहरू चाँडै नै शुद्ध बन्दछन्।

**साधूनां समचित्तानां मुकुन्दचरणैषिणाम्।**
**उपेक्ष्यैः किं धनस्तम्भैरसद्भिरसदाश्रयैः॥ १८॥**

**पदार्थ–**
**समचित्तानां** = सबैमा समभाव भएका
**मुकुन्दचरणैषिणाम्** = भगवान् श्रीकृष्णको चरणकमलको भक्ति गर्ने
**साधूनां** = सज्जनहरूको
**उपेक्ष्यैः** = उपेक्षा गर्न योग्य
**धनस्तम्भैः** = धन आदि विषयक अभिमान भएका
**असदाश्रयैः** = असत् विषयहरूमा आसक्त
**असद्भिः** = दुष्टहरूसँग
**किं** = के प्रयोजन छ

**वाक्यार्थ–** सबै प्राणीहरूमा समभाव राख्ने र केवल भगवान् श्रीकृष्णको चरणकमलको भक्ति गर्ने सज्जनहरूलाई धन आदिमा अभिमान भएका विषयासक्त दुष्टहरूको आवश्यकता नै किन पर्दछ र?

**विवरण–** माथिका श्लोकहरूमा धनी हुनु अभिमान, दयाहीनता र प्राणीहरूको अपकारको कारण हो, अतः सम्पन्न हुनुभन्दा दरिद्र रहनु नै ठिक हो भन्ने कुरा नारदजीले बताउनुभएको छ। ऐश्वर्य हुनु र यसको भोग गर्नु रजोगुणको कार्य हो। सम्पत्ति भएपछि त्यसको मद पनि स्वभावतः हुन्छ नै। मदमत्त हुनु भनेको विवेकशक्तिको नाश हुनु हो। यसैले यहाँ सम्पत्तिलाई बुद्धिभ्रंशको कारण मानिएको छ। भगवद्गीता (२/६२-६३)मा पनि भगवान्ले विषयहरूको चिन्तन र संसर्ग गर्नाले तिनीहरूको कामना हुन्छ, कामना गरिएको वस्तुमा कमी भयो भने क्रोध पैदा हुन्छ। यसरी काम र क्रोधद्वारा मानिस सम्मोह अर्थात् उचित-अनुचित छुट्याउन नसक्ने अवस्थामा पुग्छ। उसको विवेकशक्ति नाश हुन्छ र बुद्धिनाश भएपछि व्यक्तिको सर्वनाश हुन्छ भनी बताउनुभएको छ।

यस प्रसङ्गमा नारदजीले दृष्टान्त दिँदै भन्नुभएको छ– जसरी काँडा बिझिसकेको मानिसले अर्को मान्छे छटपटाएको, रोएको आदि देख्यो भने उसले त्यो मान्छेलाई पनि काँडा बिझेछ भन्ने थाहा पाउँछ र उसको काँडा झिकिदिन तत्पर हुन्छ। जसलाई दुःखको वेदना कस्तो हुन्छ भन्ने थाहा नै छैन, त्यसले अर्काको दुःख देखेर कसरी सहानुभूति जनाउन सक्छ र? फेरि दुःख परेको वेलामा नै मानिसको हृदयले सबैभित्र आत्मा छ भनी विचार गर्न सक्छ। ऐश्वर्यशाली व्यक्ति त सबै ऐश्वर्यलाई म मात्रै एक्लै भोगूँ भन्ने चाहन्छ। उसले अरू सबैलाई आफूभन्दा नीच देख्दछ। दरिद्र व्यक्तिमा स्वभावतः हुने गुणहरू देखाउँदै नारदजी भन्नुहुन्छ– दरिद्रहरूमा अहङ्कार र देखाओटी आडम्बर हुँदैन, दुःखसँग जे वस्तु प्राप्त हुन्छ, त्यसैको भोग गरेर बस्दा उसबाट स्वतः

तपस्या हुन्छ। निरन्तर पदार्थहरूको भोगमा लागिरहने मानिसहरूले पदार्थको रसास्वादनबाट इन्द्रियहरूलाई हटाउन सक्दैनन्, तर दरिद्रहरूलाई धेरै भोगसामग्री प्राप्त नै नहुने भएकाले उनीहरूका इन्द्रियहरू **अनुशुष्यन्ति** अर्थात् रसास्वादले युक्त हुँदैनन्, त्यसबाट निवृत्त हुन्छन्। अरूलाई दुःख दिई भोग गरूँ भन्ने परपीडाको भाव पनि उनीहरूमा हुँदैन। मुख्य कुरा त दुःखी दरिद्रहरूमाथि नै समदर्शी साधुहरूले कृपा गर्दछन्। दरिद्रहरू धनीहरूभन्दा बढी महापुरुषहरूप्रति समर्पित हुन र विनयपूर्वक उनीहरूको कृपालाई धारण गर्न पनि समर्थ हुन्छन्। **तं तर्षं सद्भिः क्षिणोति** अर्थात् दरिद्र व्यक्तिले आफूभित्र रहेको तृष्णालाई पनि सत्पुरुषहरूको सङ्गतद्वारा क्षीण गराउँछ र ऊ शुद्धचित्त रहन्छ। ऐश्वर्यले मत्त व्यक्तिहरू असत् पदार्थको भरमा आफूलाई ठुलो ठान्दछन्। उनीहरू असत्मा आश्रित हुन्छन्, त्यस्ता व्यक्तिभन्दा दीनतापूर्वक सत्पुरुषहरूको आश्रय लिने दरिद्रहरू धेरै श्रेष्ठ हुन्। यहाँ के कुरा बुझ्नु आवश्यक छ भने दरिद्रको प्रशंसा गरेर सधैँ दरिद्र रहिरहनु पर्छ भनी बताउनु यस प्रसङ्गको उद्देश्य होइन। सम्पत्ति भएर त्यसको अभिमान र आडम्बरले युक्त भई महापुरुषहरूको अपमान गर्ने अवस्थामा पुग्नुभन्दा त बरु केही नभएको दरिद्र बन्नु नै कल्याणकारक हो भनी यहाँ ऐश्वर्यबाट हुने मद र यसको परिणाम देखाउन खोजिएको हो।

**तदहं मत्तयोर्माध्व्या वारुण्या श्रीमदान्धयोः।**
**तमोमदं हरिष्यामि स्त्रैणयोरजितात्मनोः॥ १९॥**

**पदार्थ–**
**तत्** = त्यसकारण
**श्रीमदान्धयोः** = सम्पत्तिको मदले विवेकशून्य भएका
**माध्व्या** = मधुमयी
**वारुण्या** = वारुणी मदिराद्वारा
**मत्तयोः** = मातेका
**स्त्रैणयोः** = स्त्रीलम्पट
**अजितात्मनोः** = इन्द्रिय नजितेका यी दुई यक्षपुत्रहरूको
**अहं** = म
**तमोमदं** = अज्ञानजन्य घमन्डलाई
**हरिष्यामि** = नष्ट गर्नेछु

**वाक्यार्थ–** त्यसकारण धनसम्पत्तिको मदले अन्धो भई विवेकशून्य भएका, मधुमयी वारुणी मदिरा पिएर मातेका, इन्द्रियका वशीभूत भएर स्त्रीसँग खेलिरहेका स्त्रीलम्पट यी दुई यक्षपुत्रको अज्ञानजन्य घमन्डलाई म नष्ट गर्नेछु।

**यदिमौ लोकपालस्य पुत्रौ भूत्वा तमःप्लुतौ।**
**न विवाससमात्मानं विजानीतः सुदुर्मदौ॥ २०॥**

**पदार्थ–**
**यत्** = किनभने
**इमौ** = यी दुई
**लोकपालस्य** = लोकपाल कुबेरका
**पुत्रौ** = छोरा
**भूत्वा** = भएर
**तमःप्लुतौ** = अज्ञानले ढाकिएका
**सुदुर्मदौ** = अत्यन्त तुच्छ मद भएका
**आत्मानं** = आफूलाई
**विवाससम्** = नाङ्गै भएको पनि
**न विजानीतः** = थाहा पाएका छैनन्

**वाक्यार्थ–** लोकपाल कुबेरका छोरा भएर पनि यी दुईजना अज्ञानले ढाकिएका, अत्यन्तै दुष्ट र मदोन्मत्त भएका छन्, यिनीहरूलाई आफू नाङ्गै भएको पनि थाहा छैन।

**अतोऽर्हतः स्थावरतां स्यातां नैवं यथा पुनः।**

**स्मृतिः स्यान्मत्प्रसादेन तत्रापि मदनुग्रहात्॥ २१॥**

**पदार्थ–**
**अतः** = त्यस कारण (तिमीहरू)
**स्थावरतां** = वृक्षभाव
**अर्हतः** = (पाउन) योग्य छौ
**पुनः** = फेरि वृक्ष भएपछि
**मत्प्रसादेन** = मेरो कृपाले
**एवं यथा** = अहिलेको झैं (मदान्ध)
**न स्यातां** = हुनेछैनौ
**तत्र अपि** = त्यहाँ (वृक्षयोनि)मा पनि
**मदनुग्रहात्** = मेरो कृपाले
**स्मृतिः** = पहिलाको सम्झना
**स्यात्** = रहिरहनेछ

**वाक्यार्थ–** त्यसकारण तिमीहरू दुबै जना वृक्ष बन्न योग्य छौ। वृक्ष भएपछि तिमीहरू अहिलेको जस्तो मदान्ध र अभिमानी हुनेछैनौ। मेरो कृपाले वृक्षयोनिमा पनि तिमीहरूलाई पहिलाको सम्झना रहिरहनेछ।

**वासुदेवस्य सान्निध्यं लब्ध्वा दिव्यशरच्छते।**

**वृत्ते स्वर्लोकतां भूयो लब्धभक्ती भविष्यतः॥ २२॥**

**पदार्थ–**
**दिव्यशरच्छते** = दिव्य सय वर्ष
**वृत्ते** = बितेपछि
**वासुदेवस्य** = भगवान् श्रीकृष्णको
**सान्निध्यं** = सन्निधि
**लब्ध्वा** = पाएर
**भूयः** = फेरि
**स्वर्लोकतां** = स्वर्ग लोक (नलकूबर र मणिग्रीवको आफ्नै स्वरूप) पाएर
**लब्धभक्ती** = भगवान्‌को भक्ति प्राप्त गरेका
**भविष्यतः** = हुनेछौ

**वाक्यार्थ–** दिव्य सय वर्ष बितेपछि तिमीहरूले भगवान् श्रीकृष्णको सान्निध्य प्राप्त गर्नेछौ। भगवान्‌को सन्निधि प्राप्त हुनासाथ तिमीहरूले नलकूबर र मणिग्रीवको आफ्नै स्वरूपमा स्वर्ग लोक प्राप्त गर्नेछौ। अनि तिमीहरू भगवान्‌का परम भक्त हुनेछौ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमुक्त्वा स देवर्षिर्गतो नारायणाश्रमम्।**

**नलकूबरमणिग्रीवावासतुर्यमलार्जुनौ॥ २३॥**

**पदार्थ–**
**सः** = ती
**देवर्षिः** = देवर्षि नारद
**एवम्** = यसो
**उक्त्वा** = भनेर
**नारायणाश्रमं** = भगवान् नारायणको आश्रममा
**गतः** = जानुभयो
**नलकूबरमणिग्रीवौ** = नलकूबर र

मणिग्रीव
**यमलार्जुनौ** = एकै ठाउँमा
एकसाथ उत्पन्न खरी वृक्ष भएर
**आसतुः** = रहे

**वाक्यार्थ–** यसरी देवर्षि नारद श्राप दिएर भगवान् नारायणको आश्रमतिर लाग्नुभयो। नलकूबर र मणिग्रीव एकै ठाउँमा सँगसँगै उत्पन्न खरी वृक्ष भएर रहे।

**ऋषेर्भागवतमुख्यस्य सत्यं कर्तुं वचो हरिः।**

**जगाम शनकैस्तत्र यत्रास्तां यमलार्जुनौ॥ २४॥**

पदार्थ–
**भागवतमुख्यस्य** = भगवान्का श्रेष्ठ भक्त
**ऋषेः** = देवर्षि नारदको
**वचः** = वाणीलाई
**सत्यं** = सत्य
**कर्तुं** = गराउनका लागि
**हरिः** = (ओखलमा बाँधिएका) भगवान् श्रीकृष्ण
**यत्र** = जहाँ
**यमलार्जुनौ** = जोडी खरीको वृक्ष
**आस्तां** = थिए
**तत्र** = त्यहीँ
**शनकैः** = बिस्तारै
**जगाम** = जानुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण आफ्ना श्रेष्ठ भक्त देवर्षि नारदको वचनलाई सत्य गराउनका लागि ओखलमा बाँधिएकै अवस्थामा बिस्तारै-बिस्तारै जोडी खरीको वृक्ष भएको स्थानतर्फ जानुभयो।

**देवर्षिर्मे प्रियतमो यदिमौ धनदात्मजौ।**

**तत्तथा साधयिष्यामि यद् गीतं तन्महात्मना॥ २५॥**

पदार्थ–
**यत्** = किनभने
**देवर्षिः** = देवर्षि नारद
**मे** = मेरा
**प्रियतमः** = अत्यन्त प्रिय छन्
**तत्** = त्यसकारण
**महात्मना** = महात्मा नारदद्वारा
**यद् गीतं** = जे भनिएको थियो
**तत् तथा** = त्यो त्यसै गरी
**इमौ** = वृक्षरूपले रहेका यी
**धनदात्मजौ** = कुबेरका पुत्रहरूलाई
**साधयिष्यामि** = (त्यस्तै उनीहरूकै आफ्नै स्वरूपका) बनाइदिन्छु

**वाक्यार्थ–** (भगवान्ले विचार गर्नुभयो) देवर्षि नारद मेरा परमप्रिय भक्त हुन्। त्यसकारण महात्मा नारदले जे भनेका थिए, त्यसै गरी म वृक्षरूपमा रहेका यी कुबेरका पुत्रहरूलाई उनीहरूकै आफ्नै स्वरूपका बनाइदिन्छु।

**इत्यन्तरेणार्जुनयोः कृष्णस्तु यमयोर्ययौ।**

**आत्मनिर्वेशमात्रेण तिर्यग्गतमुलूखलम्॥ २६॥**

पदार्थ–
**इति** = यस्तो विचार गरेर
**कृष्णः तु** = भगवान् श्रीकृष्णले
**यमयोः** = सँगै रहेका
**अर्जुनयोः** = दुइटा खरीको वृक्षको
**अन्तरेण** = बीचबाट
**ययौ** = जानुभयो
**आत्मनिर्वेशमात्रेण** = भगवान्

बीचमा प्रवेश गर्नासाथ | **उलूखलम्** = ओखल | **तिर्यग्गतम्** = तेर्सो पऱ्यो

**वाक्यार्थ–** यस्तो विचार गरेर भगवान् श्रीकृष्ण जोडी खरीको वृक्षको बीचमा छिर्नुभयो। भगवान् बीचमा प्रवेश गर्नासाथ ओखल चाहिँ तेर्सो पऱ्यो।

**बालेन निष्कर्षयतान्वगुलूखलं तद्**
**दामोदरेण तरसोत्कलिताङ्घ्रिबन्धौ।**
**निष्पेततुः परमविक्रमितातिवेप-**
**स्कन्धप्रवालविटपौ कृतचण्डशब्दौ॥ २७॥**

**पदार्थ–**
**तद्** = त्यो आफूलाई बाँधेको
**अन्वगुलूखलं** = तेर्सो परेर रुखमा अड्किएको ओखल
**निष्कर्षयता** = निकाल्नका लागि तान्नुभएका
**दामोदरेण** = दाम्लाले कम्मरमा बाँधिएका
**बालेन** = बालक भगवान् श्रीकृष्णद्वारा
**तरसा** = वेगपूर्वक
**उत्कलिताङ्घ्रिबन्धौ** = जरो उखेलिएका
**परमविक्रमितातिवेपस्कन्धप्रवाल-विटपौ** = भगवान्को बलको वेगले हाँगा, मुना आदि हल्लिएका
**कृतचण्डशब्दौ** = ठुलो आवाज निस्किएका जोडी खरीका वृक्ष
**निष्पेततुः** = भुइँमा ढले

**वाक्यार्थ–** कम्मरमा आफूलाई बाँधेको ओखल तेर्सो परेर जोडी खरीको वृक्षमा अड्किएपछि भगवान् श्रीकृष्णले त्यसलाई तान्न लाग्नुभयो। वेगपूर्वक दाम्लो तान्दा जोडी खरीको वृक्षको जरा उखेलिए, भगवान् श्रीकृष्णको बलविक्रमको वेगका कारण रुखको हाँगा, मुना आदि हल्लिन थाले र अन्ततः ठुलो आवाजका साथ ती दुई वृक्ष भुइँमा ढले।

**तत्र श्रिया परमया ककुभः स्फुरन्तौ**
**सिद्धावुपेत्य कुजयोरिव जातवेदाः।**
**कृष्णं प्रणम्य शिरसाखिललोकनाथं**
**बद्धाञ्जली विरजसाविदमूचतुः स्म॥ २८॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**कुजयोः** = (पृथ्वीबाट उत्पन्न भएका ती) दुई वृक्षमा रहेका
**जातवेदाः इव** = अग्नि झैँ
**परमया** = परम
**श्रिया** = कान्तिद्वारा
**ककुभः** = दिशाहरूलाई
**स्फुरन्तौ** = प्रकाशमान गराइरहेका
**विरजसौ** = रागरहित भएका
**सिद्धौ** = आफ्नो पूर्वरूपलाई प्राप्त गरेका नलकूबर र मणिग्रीव
**अखिललोकनाथं** = सम्पूर्ण लोकका स्वामी
**कृष्णं** = भगवान् श्रीकृष्णको (नजिकमा)

**उपेत्य** = गएर
**शिरसा** = शिर झुकाएर
**प्रणम्य** = प्रणाम गरी
**बद्धाञ्जली** = हात जोडेर
**इदम्** = यसो
**ऊचतुः स्म** = भन्न लागे

**वाक्यार्थ–** भुइँमा लडेका ती दुई वृक्षबाट निस्केका अग्नि झैँ प्रकाशमान ती दुई पुरुषको शरीरको अत्यन्त उज्ज्वल कान्तिले दिशाहरू प्रकाशित भइरहेका थिए। रागरहित भएका र आफ्नो नलकूबर र मणिग्रीवको पूर्वरूपलाई पुनः प्राप्त गरेका उनीहरूले सम्पूर्ण लोकका स्वामी भगवान् श्रीकृष्णको नजिक गई भगवान्लाई प्रणाम गरे। त्यसपछि हात जोडेर भगवान्को प्रार्थना गर्दै उनीहरू भन्न लागे।

**कृष्ण कृष्ण महायोगिंस्त्वमाद्यः पुरुषः परः।**
**व्यक्ताव्यक्तमिदं विश्वं रूपं ते ब्राह्मणा विदुः॥ २९॥**

पदार्थ–
**कृष्ण** = हे श्रीकृष्ण
**कृष्ण** = हे श्रीकृष्ण
**महायोगिन्** = हे महायोगी
**त्वं** = हजुर
**आद्यः** = जगत्का आद्य कारण
**परः पुरुषः** = परमपुरुष हुनुहुन्छ
**व्यक्ताव्यक्तम्** = व्यक्त र अव्यक्त
**इदं** = यो
**विश्वं** = सम्पूर्ण जगत्
**ते** = हजुरकै
**रूपं** = रूप हो (भनी)
**ब्राह्मणाः** = वेदज्ञहरू
**विदुः** = जान्दछन्

**वाक्यार्थ–** हे श्रीकृष्ण ! हे महायोगी ! हजुर जगत्का आद्य कारण हुनुहुन्छ। यो व्यक्त र अव्यक्त (स्थूल र सूक्ष्म) सम्पूर्ण जगत् परम पुरुष हजुरकै स्वरूप हो भनेर वेदज्ञहरू जान्दछन्।

**त्वमेकः सर्वभूतानां देहास्वात्मेन्द्रियेश्वरः।**
**त्वमेव कालो भगवान् विष्णुरव्यय ईश्वरः॥ ३०॥**

पदार्थ–
**त्वम्** = हजुर नै
**एकः** = एक मात्र
**सर्वभूतानां** = सम्पूर्ण प्राणीहरूको
**देहास्वात्मेन्द्रियेश्वरः** = शरीर, प्राण, अन्तःकरण र इन्द्रियका मालिक हुनुहुन्छ
**त्वम् एव** = हजुर नै
**कालः** = काल
**भगवान्** = भगवान्
**विष्णुः** = व्यापक
**अव्ययः** = अपक्षयशून्य सर्वव्यापक
**ईश्वरः** = सर्वनियामक हुनुहुन्छ

**वाक्यार्थ–** हजुर नै सम्पूर्ण प्राणीहरूको शरीर, प्राण, अन्तःकरण र इन्द्रियहरूका मालिक हुनुहुन्छ अनि हजुर नै काल हुनुहुन्छ। हजुर व्यापक अपक्षयशून्य ईश्वर हुनुहुन्छ।

**विवरण–** माथिका दुई श्लोकमा नलकूबर-मणिग्रीवले श्रीकृष्णलाई आद्य परमपुरुष, ईश्वर, विष्णु, सम्पूर्ण प्राणीहरूका शरीर, प्राण, आत्मा र इन्द्रियका स्वामी भन्दै व्यक्त-अव्यक्त विश्वप्रपञ्चलाई उहाँकै रूप हो भनेर स्तुति गरेका छन्। उपनिषद्मा **सच्च त्यच्चाभवत् निरुक्तञ्चानिरुक्तञ्च निलयनञ्चानिलयनञ्च** (तैत्तिरीयोपनिषद्, २/६/१) भन्दै मूर्त-अमूर्त सबै जगत्को रूपमा ब्रह्म नै देखिएको बताइएको छ। यहाँ व्यक्त-अव्यक्त विश्व ईश्वरको रूप हो र

ईश्वर नै सबै प्राणीका शरीर, इन्द्रिय, प्राण आदिका स्वामी हुन् भन्ने विषयमा विशिष्टाद्वैत, द्वैताद्वैत, शुद्धाद्वैत र अद्वैत मतको चर्चा गर्नु आवश्यक देखिन्छ।

रामानुजाचार्यद्वारा प्रतिपादित विशिष्टाद्वैत सिद्धान्त अनुसार चित्, अचित् र ईश्वर यी तीन तत्त्व छन्। चित् र अचित्ले विशिष्ट ईश्वर नै ब्रह्म हो, यो निर्गुण, निर्धर्मक नभई सगुण, साकार र सविशेष छ। चित् भनेको चेतन भोक्ता जीव हो, अचित् भनेको भोग्य जड जगत् हो। ईश्वर यी दुबैको अन्तर्यामी आश्रय हो। चिदचित् ईश्वरमा आश्रित छन् र ईश्वर यी दुबैको नियामक हो। बृहदारण्यकोपनिषद्मा अन्तर्यामी आत्माले पृथिवी, जल, तेज आदि पदार्थ र सबै प्राणीहरूभित्र बसी तिनीहरूलाई नियन्त्रित गर्दछ, यी सबै प्राणी र पदार्थहरू उसका शरीर हुन्, तर यिनीहरूले यो आत्मालाई बुझ्न सक्दैनन् भनी बताइएको छ– **यः सर्वेषु भूतेषु तिष्ठन् सर्वाणि भूतानि यस्य शरीरं, यः सर्वाणि भूतानि अन्तरो यमयति एष ते आत्मा अन्तर्यामी अमृतः** (बृहदारण्यकोपनिषद्, ३/७/१५)। यही प्रतिपादनलाई तात्त्विक निष्कर्ष बनाई रामानुजाचार्यले चित्-अचित् सबै ईश्वरका शरीर हुन् र ईश्वर त्यसका अन्तर्यामी एवं नियामक हुन् भनी विशिष्टाद्वैत दर्शनको प्रतिपादन गर्नुभएको छ। उहाँ भन्नुहुन्छ– **सर्वं परमपुरुषेण सर्वात्मना स्वार्थे नियाम्यं धार्यं तच्छेषतैकस्वरूपं इति सर्वं चेतनाचेतनं तस्य शरीरं** (ब्रह्मसूत्र, श्रीभाष्य, २/१/९)। यस मतमा चित् र अचित् दुबै ईश्वरका शरीर भएकाले नित्य हुन्। सृष्टिको तात्पर्य यिनले स्थूल आकार लिनु हो र यही ब्रह्मको कार्यावस्था हो भने प्रलयको तात्पर्य यी पदार्थहरू सूक्ष्मावस्थामा पुग्नु हो र यो ब्रह्मको कारणावस्था हो। चित् र अचित् दुबै ईश्वरसापेक्ष भएकाले ईश्वरका अङ्ग एवं गुण हुन्, तर पृथक् सत्ता भएकाले द्रव्य पनि हुन्। महावाक्यमा **त्वं** पदको अर्थ चित् (जीव)को नियामक अन्तर्यामी ब्रह्म हो भने **तत्** पदको अर्थ अचित् (जगत्)को कारणभूत ब्रह्म हो। चित् जीव अचित् (शरीर, इन्द्रिय आदि)ले विशिष्ट छ, यो अल्पज्ञ र संसारदोषले युक्त छ, तर यसको नियामक अङ्गी या विशेष्यभूत अन्तर्यामी भने कुनै दोषले युक्त छैन। जगत्कारणत्वले विशिष्ट ब्रह्म पनि दोषरहित भएकाले यी दुबै विशिष्ट विशिष्टबीचको अभेद हुन्छ भन्ने सिद्धान्त भएकाले यसलाई विशिष्टाद्वैतवाद भनिएको हो। यसरी यस दर्शनमा समस्त जगत्लाई ईश्वरको शरीर माने तापनि ईश्वररूप नभई जगत् छुट्टै सत्तावान् छ भन्ने मानिन्छ।

निम्बार्काचार्यद्वारा प्रतिपादित द्वैताद्वैत दर्शनमा चित्, अचित् एवं ईश्वर यी तीन तत्त्व छन् तर यी दुबै ईश्वरका शरीर नभई शक्तिरूप अंश हुन्। यदि चिदचित् ईश्वरभन्दा अभिन्न हुन्थे भने ईश्वरमा पनि जगत्का अपूर्णता, दुःख आदिको सम्बन्ध हुन्थ्यो अनि चिदचित् ईश्वरभन्दा सर्वथा भिन्न हुन्थे भने ईश्वरको सत्ता परिच्छिन्न एवं सीमित हुन्थ्यो। यसैले स्वतन्त्र सत्ता नभएकाले चिदचित् ईश्वरभन्दा अभिन्न हुन् र परतन्त्रसत्ता रहने हुनाले ईश्वरभन्दा भिन्न पनि हुन्। आगोको झिल्को उष्णता र प्रकाशको अर्थमा आगोभन्दा अभिन्न र पाचकत्व-दाहकत्व आदिको अर्थमा आगोभन्दा भिन्न भए झैं जीव सत् र चित् रूपमा ब्रह्मदेखि अभिन्न भए पनि जगत्कारणत्व, सर्वज्ञत्व आदि अर्थमा ब्रह्मभिन्न छ। यही नै द्वैताद्वैत दर्शनको व्यावहारिक एवं तात्त्विक दार्शनिक सार हो। रामानुजको अनुसार चिदचित्रूप विश्व ईश्वरको विशेषण एवं शरीर हो भने निम्बार्कका अनुसार चिदचित् ईश्वरको शक्तिरूप अंश हो। विशेषणको कार्य व्यावर्तन गर्ने हुन्छ। ईश्वर एउटै

भएकाले चिदचित् विशेषणले ईश्वरलाई अरू कुनै ईश्वरबाट व्यावर्तन गर्नु छैन, त्यसैले यसलाई विशेषण मान्नु आवश्यक छैन। त्यसै गरी चिदचित्लाई शरीर मान्दा शरीरी ईश्वरमा तिनको दोष रहेको मान्नुपर्छ। त्यसैले यिनलाई शरीररूप मान्नु पनि आवश्यक छैन भन्ने आशय निम्बार्कदर्शनको देखिन्छ।

वल्लभाचार्यद्वारा प्रतिपादित शुद्धाद्वैत सिद्धान्त अनुसार ब्रह्म नै जड जगत्, चेतन जीव र अन्तर्यामी तीन रूपमा बनेको हो। शुद्धाद्वैतको अर्थ हुन्छ— **शुद्धयोः अद्वैतम्** अर्थात् शुद्ध जीव र शुद्ध जगत्को ब्रह्मसँग अद्वैत। यी दुबै मायाकल्पित होइनन्, वास्तविक ब्रह्मरूप हुन्। **माया–सम्बन्धरहितं शुद्धमित्युच्यते बुधैः** (शुद्धाद्वैतमार्तण्ड, २८) अर्थात् ब्रह्म मायाको सम्बन्धले रहित हुनु नै यो शुद्ध हुनु हो। अनि अद्वैतको अर्थ हुन्छ— **सजातीयविजातीयस्वगतद्वैतवर्जितम्** (तत्त्वार्थप्रदीप, १/६६) अर्थात् सजातीय, विजातीय र स्वगत भेदले रहित हुनु अद्वैत हो। ब्रह्मको सजातीय जीव हो, विजातीय जगत् हो भने स्वगत रूप अन्तर्यामी हो। यी तिनैमा ब्रह्मरूप अनुस्यूत छ— **सजातीयाः जीवाः, विजातीयाः जडाः स्वगताः अन्तर्यामिणः त्रिष्वपि भगवान् अनुस्यूतः** (तत्त्वार्थदीपप्रकाश, १/६७)। ब्रह्ममा तीनै भेद छैनन्। वल्लभमतमा जगत् र जीव दुबै ब्रह्मरूप भएकाले सत्य हुन्। यिनीहरू उत्पन्न हुनुको अर्थ अनुभवजन्य हुनु र लीन हुनुको अर्थ अनुभवयोग्य नहुनु या तिरोहित हुनु भन्ने हुन्छ— **अनुभवविषयत्वयोग्यता आविर्भावः तदविषययोग्यता तिरोभावः** (विद्वन्मण्डन)। यसरी मुख्य वैष्णव मतमध्ये रामानुजमतमा जीव र जगत् ईश्वरको शरीररूप भएकाले अभिन्न मानिन्छ, मध्वमतमा जीवलाई स्वरूपतः सधैँ नै ईश्वरभन्दा भिन्न मानिन्छ, निम्बार्कमतमा जीव–जगत्लाई ईश्वराधीन भएकाले भिन्न र ईश्वरकै अविभाज्य शक्तिरूप भएकाले अभिन्न पनि मानिन्छ भने वल्लभसिद्धान्त अनुसार जीव ईश्वरको शुद्ध चिदंशद्वारा आविर्भूत भएकाले ईश्वरभिन्न भए तापनि आनन्दांशको तिरोधानका कारण यसले छुट्टै रूपमा आफूलाई कल्पित गर्छ भन्ने मानिन्छ।

शङ्कराचार्यद्वारा प्रतिपादित अद्वैत वेदान्त सिद्धान्त अनुसार भने अज्ञानद्वारा डोरीमा सर्पको कल्पना भए झैँ अनिर्वचनीय अनादि अविद्याका कारण अधिष्ठान ब्रह्ममा पनि जीव, जगत्, ईश्वर आदिको भेद कल्पित भएको मानिन्छ। जसरी सपना देख्ने व्यक्तिको चित्त नै त्यहाँभित्रका प्राणी, सूर्य, चन्द्र, पहाड, बाटो आदि रूपमा देखिन्छ, त्यसै गरी ब्रह्म नै जगत्को रूपमा देखिन्छ। त्यसैले जगत्मा जति वस्तु देखिन्छन् ती सबै पदार्थरूपले मिथ्या हुन् र खास गरी ब्रह्मरूप नै हुन्। अधिष्ठानको सत्तादेखि अध्यस्त वस्तुको सत्ता अलग हुँदैन अनि अध्यस्त वस्तुको दोषले अधिष्ठानलाई छुँदा पनि छुँदैन। ईश्वर शुद्धसत्त्वमय र सच्चिदानन्द ब्रह्मरूप भएकाले जीवले आफ्नो अन्तःकरणका दोषहरूलाई फाल्न उहाँको चिन्तन र भक्ति गर्नुपर्दछ। यसबाट चित्त शुद्ध भएपछि ईश्वरकै अनुग्रहले जीव आफ्नो र ईश्वरको ऐक्यलाई बुझ्न सक्दछ। यसरी वेदान्तको दृष्टिले ईश्वरलाई जीव–जगत्रूप भनी सर्वरूपमा स्तुति गर्नु या यी सबैको नियामक भनी प्रभुरूपले स्तुति गर्नु दुबै सम्भव छ। पारमार्थिक दृष्टिले हेर्दा सबै जगत् ब्रह्मरूप हो अनि व्यावहारिक अवस्थामा आउँदा यी सबै पदार्थ एवं प्राणीहरूका स्वामी ईश्वर हुनुहुन्छ। यसैले माथिका दुई श्लोकमा पहिलो श्लोकले परमात्मालाई व्यक्त–अव्यक्त विश्वरूप एवं दोस्रो श्लोकले

सबै प्राणीहरूका शरीर, इन्द्रिय आदिको स्वामी भनी स्तुति गरेको कुरा मिल्न आउने देखिन्छ।

**त्वं महान् प्रकृतिः सूक्ष्मा रजःसत्त्वतमोमयी।**
**त्वमेव पुरुषोऽध्यक्षः सर्वक्षेत्रविकारवित्॥ ३१॥**

**पदार्थ–**
**रजःसत्त्वतमोमयी** = रजोगुण, सत्त्वगुण र तमोगुणले युक्त
**सूक्ष्मा** = सूक्ष्म
**प्रकृतिः** = प्रकृति तथा
**महान्** = प्रकृतिको कार्य महत्तत्त्व पनि
**त्वं** = हजुर नै हुनुहुन्छ
**पुरुषः** = (प्रकृतिको प्रवर्तक) पुरुष
**अध्यक्षः** = सर्वसाक्षी
**सर्वक्षेत्रविकारवित्** = देह, इन्द्रिय आदिमा हुने विकारलाई जान्ने
**त्वम् एव** = हजुर नै हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान्! सत्त्वगुण, रजोगुण र तमोगुणले युक्त भएकी प्रकृति र प्रकृतिको कार्य महत्तत्त्व पनि हजुर नै हुनुहुन्छ। हजुर नै प्रकृतिको प्रवर्तक पुरुष हुनुहुन्छ। देह, इन्द्रिय आदिमा हुने विकारलाई जान्ने सर्वसाक्षी पनि हजुर नै हुनुहुन्छ।

**गृह्यमाणैस्त्वमग्राह्यो विकारैः प्राकृतैर्गुणैः।**
**को न्विहार्हति विज्ञातुं प्राक्सिद्धं गुणसंवृतः॥ ३२॥**

**पदार्थ–**
**गृह्यमाणैः** = ग्रहण गर्न सकिने
**प्राकृतैः** = प्रकृतिका
**गुणैः** = गुणहरूद्वारा
**विकारैः** = प्रकृतिका विकार (कार्य) बुद्धि, अहङ्कार आदिद्वारा
**त्वं** = हजुर (द्रष्टा)
**अग्राह्यः** = ग्रहण गरिनुहुन्न (जानिनुहुन्न)
**इह** = यस संसारमा
**प्राक्सिद्धं** = शरीरको सृष्टिपूर्व नै स्वयंप्रकाशरूपले सिद्ध हजुरलाई
**गुणसंवृतः** = प्राकृत देह आदिहरूद्वारा ढाकिएको
**कः नु** = कुन व्यक्तिले
**विज्ञातुं** = जान्न
**अर्हति** = सक्दछ

**वाक्यार्थ–** प्रकृतिका गुणहरू र बुद्धि, अहङ्कार, इन्द्रिय आदि विकाररूप (कार्यरूप) दृश्यात्मक पदार्थहरूबाट द्रष्टा हजुरको ग्रहण हुन सक्दैन। शरीर र इन्द्रिय आदिको सृष्टिपूर्व नै यस संसारमा हजुर स्वयंप्रकाशरूपले विद्यमान हुनुहुन्छ। अतः देह आदि प्राकृत गुणहरूद्वारा युक्त भएको कुनै पनि व्यक्तिले स्वयंप्रकाशरूपले पूर्वसिद्ध हजुरलाई कसरी जान्न सक्दछ?

**विवरण–** भगवान् नै रजःसत्त्वतमोमयी प्रकृति र त्यसको कार्य महत्तत्त्व आदि रूप हुनुहुन्छ भने घट-पट आदि जान्दा पनि ईश्वरकै ज्ञान हुने भयो। त्यसो भए परमात्मतत्त्वको ज्ञानका लागि के प्रयास गर्नुपर्‍यो र? सबै ब्रह्मज्ञानी भइसकेपछि शास्त्रहरूको उपदेश र भक्ति-ज्ञान-वैराग्य-कर्म आदि उपाय पनि किन चाहिए? यस शङ्काको समाधानका लागि प्रस्तुत श्लोक आएको छ। हुन त सबै ब्रह्मरूप हुन्, तर तिनीहरूलाई ब्रह्मरूपले नबुझी पदार्थरूपले बुझ्दा ब्रह्मको ज्ञान हुन सक्दैन। फेरि प्रपञ्चलाई जान्ने इन्द्रिय, मन, बुद्धि आदि सबै पदार्थ **गृह्यमाण** अर्थात् दृश्य हुन्छन्। आत्मा ती सबैको पनि प्रकाशक द्रष्टा हो। **दृश्यत्वेन वर्तमानैः बुद्ध्यहङ्कारादिभिः द्रष्टा त्वं न**

**गृह्यसे** अर्थात् दृश्यरूपले वर्तमान बुद्धि आदिद्वारा द्रष्टा परमात्माको बोध हुन सक्दैन। बृहदारण्यकोपनिषद् (३/४/२)मा शब्द, स्पर्श आदि सबैथरी ज्ञानको पनि द्रष्टालाई ती वृत्तिरूप ज्ञानद्वारा जान्न नसकिने बताइएको छ– **न दृष्टेर्द्रष्टारं पश्येः ... न विज्ञातेर्विज्ञातारं विजानीयाः**। इन्द्रियहरूले नजान्ने भए ज्ञाता जीवात्माले जानोस् भन्ने शङ्कामा भनिन्छ– जीवात्मा पनि **गुणसंवृतः** अर्थात् इन्द्रिय, अन्तःकरण आदि उपाधिहरूद्वारा आवृत छ। अन्तःकरण र इन्द्रिय आदि उपाधिको कारणले नै आत्मा भोक्ता जीव बनी देखिएको हो– **आत्मेन्द्रियमनोयुक्तं भोक्तेत्याहुर्मनीषिणः** (कठोपषिद्, १/३/४)। ती उपाधिहरू देखिनुभन्दा अघि सद् ब्रह्म वस्तु थियो र उपाधिहरूको आधार पनि सद् ब्रह्म नै हो। उपाधिको कारण कल्पित भएको जीवले तिनको पनि आश्रय अधिष्ठान ब्रह्मलाई कसरी प्रकाशित गर्न सक्छ ? यसैले संसारको कुनै पनि पदार्थको ज्ञान र स्वयं जीवात्माको **अहं अहं** अर्थात् म हुँ म हुँ भन्ने ज्ञानमा पनि परमात्माको बोध हुँदैन। सबै उपाधिले रहित अखण्डाकार ज्ञानमा मात्रै ब्रह्मबोध सम्भव छ भन्ने यसको तात्पर्य हो।

**तस्मै तुभ्यं भगवते वासुदेवाय वेधसे।**
**आत्मद्योतगुणैश्छन्नमहिम्ने ब्रह्मणे नमः॥ ३३॥**

**पदार्थ–**
**भगवते** = भगवान्
**वासुदेवाय** = वासुदेव
**वेधसे** = जगत्का स्रष्टा
**आत्मद्योतगुणैः** = आफूबाटै प्रकाशित गुणहरूद्वारा
**छन्नमहिम्ने** = आफ्नो महिमालाई ढाक्नुभएका
**ब्रह्मणे** = परब्रह्म
**तस्मै** = ती परमात्मा
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** समस्त जगत्का स्रष्टा हे भगवान् वासुदेव ! प्रकृतिका सत्त्व आदि गुणहरू हजुरबाटै प्रकाशित छन् र आफैँबाट प्रकाशित प्रकृतिका गुणहरूद्वारा हजुरले आफ्नो महिमालाई ढाक्नुभएको छ। यस्ता साक्षात् परब्रह्म परमात्मा हजुरलाई नमस्कार छ।

**यस्यावतारा ज्ञायन्ते शरीरेष्वशरीरिणः।**
**तैस्तैरतुल्यातिशयैर्वीर्यैर्देहिष्वसङ्गतैः॥ ३४॥**

**पदार्थ–**
**तैः तैः** = ती-ती
**देहिषु** = प्राणीहरूमा
**असङ्गतैः** = संभव नभएका
**अतुल्यातिशयैः** = बराबरी र बढी
**वीर्यैः** = पराक्रम आदिद्वारा
**अशरीरिणः** = प्राकृत शरीरले रहित
**शरीरेषु** = शरीरहरूमा
**यस्य** = जुन हजुरका
**अवताराः** = अवतारहरू
**ज्ञायन्ते** = जानिन्छन्

**वाक्यार्थ–** हजुर प्राकृत शरीरले रहित हुनुहुन्छ। तर पनि जब हजुर यस्ता पराक्रमहरू प्रकट गर्नुहुन्छ, जुन साधारण शरीरधारीहरूबाट संभव हुँदैनन्, तिनीहरूभन्दा बढी त के तिनीहरूको बराबरी पनि कसैले गर्न सक्दैनन्, त्यसपछि ती पराक्रमहरूद्वारा ती शरीरहरूमा हजुर नै अवतार

लिएर रहनुभएको छ भन्ने कुरा थाहा हुन्छ।

**विवरण–** यस श्लोकमा परमात्मा अशरीरी हुनुहुन्छ भनिएको छ। कठोपनिषद् (१/२/२२)मा पनि परमात्मालाई अशरीरी नै भनेर बताइएको पाइन्छ– **अशरीरं शरीरेष्वनवस्थेष्ववस्थितम्** अर्थात् परमात्मतत्त्व शरीरले रहित छ, तर अनित्य अनेक शरीरहरूमा नित्य साक्षी रूपले अवस्थित छ। सबै पदार्थभित्र परमात्मा रहँदैमा ती सबै पदार्थ परमात्मासँग सम्बन्धित या परमात्माका शरीर भइहाल्दैनन्। घैंटोभित्र देखिने घटाकाश के घैंटोसँग सम्बन्धित छ र? यसैले परमात्मा वस्तुतः शरीरसम्बन्धले रहित नै हुनुहुन्छ। यदि परमात्मालाई शरीरसम्बन्धयुक्त मान्ने हो भने दृश्यमान विश्वप्रपञ्च नै उहाँको शरीर हो या योभन्दा भिन्नै कुनै शरीर हो भन्ने शङ्का आउँछ। प्रपञ्चलाई नै परमात्माको शरीर मान्दा परमात्मामा कुनै न कुनै रूपले उत्पत्ति–नाश–परिणाम आदि विकारको सम्भावना रहन्छ। यदि अलौकिक दिव्य शरीर छ भनेर मान्ने हो भने परमात्मालाई जीवहरू झैं परिच्छिन्न मान्नुपर्दछ। यी सबै आपत्तिहरूको कारणले परमात्मा वस्तुतः कुनै पनि उपाधिको सम्बन्धले शून्य हुनुहुन्छ भनेर नै मान्नुपर्ने हुन्छ। उसो भए के राम, श्रीकृष्ण, विष्णु, शिव आदिको शरीर नै छैन त? भन्ने शङ्का हुँदा भनिन्छ– **अवताराः ज्ञायन्ते** अर्थात् परमात्माका अनेक अवतार र तिनका पृथक् पृथक् स्वरूपहरू हुन्छन्, तर यी छुट्टाछुट्टै शरीर, स्वरूप आदि मायासापेक्ष भएकाले नित्य भने होइनन्। आफ्नै सङ्कल्पद्वारा मायालाई साथ लिई परमात्माले जगत् बनाउन थालेपछि मायाको सत्त्वगुणद्वारा ईश्वरका अनेक रूप बन्दछन् र प्रलयकालमा मायासम्बन्ध नहुँदा बाहिरी रूप निवृत्त भई केवल ब्रह्मरूपमा रहन्छन्। यदि परमात्माको शरीर नित्य हो भनेर मान्ने हो भने शास्त्रमा बताइएका परमात्माका शिव, विष्णु, दुर्गा आदि सबै रूपलाई छुट्टाछुट्टै सत्य मान्नुपर्ने हुन्छ र यसो मान्दा परमात्मतत्त्व अनेक हुन पुग्दछ। यसैले माया उपाधिलाई स्वीकार गरी अनेक अवतार लिए पनि परमात्मा वास्तवमा शरीरसम्बन्धले रहित नै हुनुहुन्छ भन्ने वेदान्तको निष्कर्ष रहेको छ। अनेक अवतार धारण गर्दा पनि वास्तवमा अशरीर नै रहने उपनिषत्प्रतिपाद्य यही निर्विशेष आत्मतत्त्वको प्रतिपादन यहाँ गरिएको छ।

**स भवान् सर्वलोकस्य भवाय विभवाय च।**
**अवतीर्णोंऽशभागेन साम्प्रतं पतिराशिषाम्॥ ३५॥**

| पदार्थ– | **भवान्** = हजुर | **विभवाय च** = मोक्षका लागि |
|---|---|---|
| **आशिषाम्** = पुरुषार्थहरूका | **साम्प्रतं** = अहिले | **अंशभागेन** = अंश अवतारद्वारा |
| **पतिः** = स्वामी | **सर्वलोकस्य** = सम्पूर्ण लोकको | **अवतीर्णः** = प्रकट हुनुभएको छ |
| **सः** = त्यस्ता | **भवाय** = अभ्युन्नतिका लागि र | |

**वाक्यार्थ–** हे भगवान्! हजुर धर्म, अर्थ, काम र मोक्षरूप पुरुषार्थका स्वामी हुनुहुन्छ। त्यस्ता हजुर अहिले सम्पूर्ण लोकको उन्नति र मोक्षका लागि परिपूर्ण अंश अवतारद्वारा प्रकट हुनुभएको छ।

**नमः परमकल्याण नमः परममङ्गल।**

**वासुदेवाय शान्ताय यदूनां पतये नमः॥ ३६॥**

पदार्थ–
**परमकल्याण** = परमकल्याण-स्वरूप हे भगवान्
**नमः** = हजुरलाई नमस्कार छ
**परममङ्गल** = हे परम मङ्गलस्वरूप प्रभु
**नमः** = हजुरलाई नमस्कार छ
**वासुदेवाय** = वसुदेवका पुत्र
**शान्ताय** = नित्य शान्त
**यदूनां** = यदुहरूका
**पतये** = रक्षक हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवान् ! परम कल्याणस्वरूप हजुरलाई नमस्कार छ। परम मङ्गलस्वरूप हजुरलाई नमस्कार छ। हे वासुदेव ! अत्यन्त शान्त स्वभाव हुनुभएका यदुकुलरक्षक हजुरलाई नमस्कार छ।

**अनुजानीहि नौ भूमंस्तवानुचरकिङ्करौ।**

**दर्शनं नौ भगवत ऋषेरासीदनुग्रहात्॥ ३७॥**

पदार्थ–
**भूमन्** = हे परमात्मा
**तव** = हजुरको
**अनुचरकिङ्करौ** = सेवकहरूका पनि सेवक
**नौ** = हामी नलकूबर र मणिग्रीवलाई
**अनुजानीहि** = बिदा हुन अनुमति दिनुहोस्
**नौ** = हामीलाई
**भगवतः** = भगवान् हजुरको
**दर्शनं** = दर्शन
**ऋषेः** = देवर्षि नारदको
**अनुग्रहात्** = कृपाद्वारा
**आसीत्** = भएको हो

**वाक्यार्थ–** हे परमात्मा ! हजुरको सेवक (नारद)को पनि सेवक हामी नलकूबर र मणिग्रीवलाई बिदा हुने आज्ञा दिनुहोस्। हामीलाई हजुरको दर्शन देवर्षि नारदको अनुग्रहद्वारा प्राप्त भएको हो।

**वाणी गुणानुकथने श्रवणौ कथायां**
**हस्तौ च कर्मसु मनस्तव पादयोर्नः।**
**स्मृत्यां शिरस्तव निवासजगत्प्रणामे**
**दृष्टिः सतां दर्शनेऽस्तु भवत्तनूनाम्॥ ३८॥**

पदार्थ–
**नः** = हामो
**वाणी** = वाणी
**तव** = हजुरको
**गुणानुकथने** = गुणहरूको वर्णनमा
**अस्तु** = प्रवृत्त होस्
**श्रवणौ** = कान
**कथायां** = हजुरका कथाहरूमा (प्रवृत्त होऊन्)
**हस्तौ च** = दुई हात
**कर्मसु** = (हजुरको मन्दिर सफा गर्ने, दुःखीको उपकार गर्ने जस्ता) कर्ममा प्रवृत्त होऊन्
**मनः** = मन
**पादयोः** = हजुरको चरणकमलको
**स्मृत्यां** = स्मरणमा (प्रवृत्त होस्)
**शिरः** = शिर
**तव** = हजुरको
**निवासजगत्प्रणामे** = निवास भएको सम्पूर्ण चराचर जगत्लाई प्रणाम गर्ने काममा (प्रवृत्त होस्)
**दृष्टिः** = आँखा

**भवत्तनूनाम्** = हजुरकै शरीररूपी | **सतां** = सज्जनहरूको | **दर्शने** = दर्शनमा (प्रवृत्त होस्)

**वाक्यार्थ–** हे भगवान्! हाम्रो वाणी सधैँ हजुरको गुणहरूको वर्णनमा प्रवृत्त होस्। हाम्रा कानहरू हजुरका लीलाकथाहरूको श्रवण गर्न प्रवृत्त होऊन्। हाम्रा हातहरू मन्दिर सफा गर्ने, दुःखीको उपकार गर्ने जस्ता कर्ममा लागिरहून्। हाम्रो मन हजुरको चरणकमलको स्मरण गर्नमा लागिरहोस्। हाम्रो शिर हजुरको निवास भएको सम्पूर्ण चराचर जगत्लाई प्रणाम गर्नमा लागिरहोस्। हाम्रा आँखाहरू हजुरकै साकार स्वरूप भएका सज्जनहरूको दर्शन गर्नमा लागिरहून्।

**विवरण–** यस श्लोकमा नलकूबर र मणिग्रीवले आफ्ना सबै इन्द्रियहरू परमात्मामा लागिरहून् भनी प्रार्थना गरेका छन्। परा भक्तिद्वारा **वासुदेवः सर्वम्** अर्थात् सबै पदार्थ वासुदेवरूप हुन् भनी बुझिसकेपछि सबै इन्द्रियहरूले सबैतिर त्यही तत्त्वलाई ग्रहण गर्न थाल्दछन्। यो अवस्थामा पुग्दा इन्द्रियहरूले विषयको ग्रहण गर्नु या समाधि लगाउनु दुबै बराबर हुन्छन्। यसलाई सहजावस्था भनिन्छ। यस्तो व्यक्ति नित्ययुक्त अर्थात् हरेक अवस्थामा परमात्मासँग युक्त भइरहन्छ। यसकै प्रशंसामा भगवान्ले भन्नुभएको छ– **तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते** (भगवद्गीता, ७/१७)। यो स्थिति हुनुभन्दा पहिले साधक या भक्तले आफ्ना सबै इन्द्रियहरूलाई परमात्मामा नै लगाइरहनुपर्दछ। शब्द, स्पर्श आदि बाहिरी पदार्थहरूमा प्रवृत्त भइरहने इन्द्रियहरूलाई त्यताबाट हटाई परमात्मातिर लगाइरहनु भक्तिको साधना हो। इन्द्रियहरू बाहिरी विषयमा सुख छ भन्ने आशाले नै बाहिर जाने गर्दछन्, पदार्थहरूमा नभई परमात्मामा नै सुख छ भन्ने बुझ्नेबित्तिकै सबै इन्द्रिय भगवत्सम्बन्धी विषयहरूमा नै लाग्छन्। परमात्माले कृपा गरेर दिनुभएका इन्द्रिय, मन आदिको सार्थकता पनि सबै जगत्का एक मात्र स्वामी परमात्मालाई ग्रहण गर्नुमा नै छ। अनित्य एवं दुःखदायी पदार्थहरूमा भ्रमवश सत्ता र सुख छ भन्ने ठानी तिनीहरूको लागि मरिमेट्नु मनुष्य जीवनको उद्देश्य हुन सक्दैन। यसरी सबै इन्द्रियहरू भगवान्तिर अभिमुख भएको अवस्थालाई प्रस्तुत श्लोकमा देखाइएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्थं सङ्कीर्तितस्ताभ्यां भगवान् गोकुलेश्वरः।**

**दाम्ना चोलूखले बद्धः प्रहसन्नाह गुह्यकौ॥ ३९॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**ताभ्यां** = ती दुई नलकूबर र मणिग्रीवद्वारा
**सङ्कीर्तितः** = प्रार्थना गरिनुभएका
**दाम्ना** = दाम्लोद्वारा
**उलूखले च** = ओखलमा
**बद्धः** = बाँधिनुभएका
**गोकुलेश्वरः** = गोकुलेश्वर
**भगवान्** = भगवान् श्रीकृष्णले
**प्रहसन्** = हाँसेर
**गुह्यकौ** = यक्षरूप प्राप्त गरेका कुबेरका पुत्रहरूलाई
**आह** = भन्नुभयो

**वाक्यार्थ–** यसरी यक्षरूप प्राप्त गरेका नलकूबर र मणिग्रीवले गोकुलेश्वर भगवान् श्रीकृष्णको स्तुति गरिसकेपछि ओखलमा दाम्लोले बाँधिएकै अवस्थामा मुस्कुराउँदै भगवान्ले ती दुईलाई भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**ज्ञातं मम पुरैवैतदृषिणा करुणात्मना ।**

**यच्छ्रीमदान्धयोर्वाग्भिर्विभ्रंशोऽनुग्रहः कृतः ॥ ४० ॥**

पदार्थ–

**श्रीमदान्धयोः** = सम्पत्तिको मदले अन्धो भएका तिमीहरूको
**करुणात्मना** = कृपालु
**ऋषिणा** = देवर्षि नारदद्वारा
**वाग्भिः** = वाणीहरूद्वारा
**यत्** = जुन
**विभ्रंशः** = मद नष्ट गरियो (त्यो)
**अनुग्रहः** = (मेरो दर्शन प्राप्तिरूप) कृपा नै
**कृतः** = गरियो
**एतत्** = यो कुरा
**पुरा एव** = पहिले नै
**मम** = मद्वारा
**ज्ञातं** = जानिएको थियो

**वाक्यार्थ–** सम्पत्तिको मदले अन्धो भएका तिमीहरूलाई त्यस वेला परमकृपालु देवर्षि नारदले श्राप दिएर तिमीहरूको मदलाई नष्ट पनि गरे र मेरो दर्शन र भक्तिको प्राप्तिरूप कृपा पनि गरे। यो सबै कुरा मलाई पहिले नै थाहा थियो।

**साधूनां समचित्तानां सुतरां मत्कृतात्मनाम् ।**

**दर्शनान्नो भवेद् बन्धः पुंसोऽक्ष्णोः सवितुर्यथा ॥ ४१ ॥**

पदार्थ–

**समचित्तानां** = समदर्शी आत्मज्ञानीहरूको
**सुतरां** = अत्यन्त
**मत्कृतात्मनाम्** = ममा चित्त अर्पण गरेका
**साधूनां** = साधुहरूको
**दर्शनात्** = दर्शनबाट
**सवितुः** = सूर्यको (दर्शनबाट)
**अक्ष्णोः** = आँखाको
**बन्धः यथा** = अन्धकार झैँ
**पुंसः** = मानिसहरूलाई (संसारबन्धन)
**न भवेत्** = हुन सक्दैन

**वाक्यार्थ–** जसरी भगवान् श्रीसूर्यको उदय भएपछि मनुष्यहरूको आँखाका सामु अन्धकार रहन सक्दैन त्यसै गरी ममा चित्त अर्पण गरेका समदर्शी आत्मज्ञानी साधुहरूको दर्शन गर्ने मनुष्यहरूलाई संसारबन्धन प्राप्त हुन सक्दैन।

**तद् गच्छतं मत्परमौ नलकूबर सादनम् ।**

**सञ्जातो मयि भावो वामीप्सितः परमोऽभवः ॥ ४२ ॥**

पदार्थ–

**नलकूबर** = हे नलकूबर
**तत्** = त्यसकारण
**मत्परमौ** = म नै परम सेव्य भएका तिमीहरू
**सादनम्** = आफ्नो घर
**गच्छतं** = जाओ
**मयि** = ममा हुने
**परमः भावः** = परम भक्ति
**ईप्सितः** = चाहने
**वाम्** = तिमी दुईलाई
**अभवः** = संसारचक्रबाट मुक्ति
**सञ्जातः** = प्राप्त भएको छ

**वाक्यार्थ–** त्यसैले हे नलकूबर ! मलाई नै परम सेव्य मान्ने तिमीहरू दुबै जना आफ्नो घर जाओ। तिमीहरूले संसारचक्रबाट मुक्ति र ममा परमभक्ति जो चाहेका थियौ त्यो तिमीहरूलाई प्राप्त भइसकेको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्तौ तौ परिक्रम्य प्रणम्य च पुनः पुनः।**

**बद्धोलूखलमामन्त्र्य जग्मतुर्दिशमुत्तराम्॥ ४३॥**

पदार्थ–

**इति** = यसप्रकार
**उक्तौ** = भगवान्द्वारा बताइएका
**तौ** = ती दुई नलकूबर र मणिग्रीवले
**बद्धोलूखलम्** = ओखलमा बाँधिएका भगवान्लाई
**पुनः पुनः** = अनेक पटक
**परिक्रम्य** = परिक्रमा गरेर
**प्रणम्य** = नमस्कार गरेर
**आमन्त्र्य च** = अनुमति लिएर
**उत्तराम्** = उत्तर
**दिशम्** = दिशातिर
**जग्मतुः** = गए

**वाक्यार्थ–** यसप्रकार भगवान्ले बताइसकेपछि ती दुई मणिग्रीव र नलकूबरले ओखलमा बाँधिइरहनुभएका दामोदर भगवान् श्रीकृष्णलाई बारम्बार परिक्रमा र नमस्कार गरे। त्यसपछि भगवान्को अनुमति लिएर उनीहरू उत्तर दिशातिर गए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**नारदशापो नाम दशमोऽध्यायः॥ १०॥**

# अथ एकादशोऽध्यायः

## वत्सासुर र वकासुरको वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गोपा नन्दादयः श्रुत्वा द्रुमयोः पततो रवम् ।**

**तत्राजग्मुः कुरुश्रेष्ठ निर्घातभयशङ्किताः ॥ १ ॥**

पदार्थ–

**कुरुश्रेष्ठ** = हे कुरुश्रेष्ठ परीक्षित्
**नन्दादयः** = नन्द आदि
**गोपाः** = गोपहरू
**पततोः** = लडिरहेका
**द्रुमयोः** = दुई ओटा वृक्षको
**रवम्** = आवाज
**श्रुत्वा** = सुनेर
**निर्घातभयशङ्किताः** = बिजुलीको गर्जना (चट्याङ)को शङ्का गर्दै
**तत्र** = रुख लडेको त्यस स्थानमा
**आजग्मुः** = आइपुगे

**वाक्यार्थ–** हे कुरुश्रेष्ठ परीक्षित् ! खरीका दुई ओटा वृक्ष लड्दा उत्पन्न भएको भयङ्कर आवाज सुनेपछि चट्याङ परेको आशङ्का गर्दै नन्द आदि गोपहरू वृक्ष लडेको ठाउँमा आइपुगे।

**विवरण–** यहाँ नन्द आदि गोपहरू रुख ढलेको आवाज सुनेर आत्तिँदै आए भनी बताइएको छ। भगवान्का तामस निरोध लीलामध्ये बाललीलाद्वारा निरोध गरिएको यो अन्तिम अध्याय हो भनी वल्लभाचार्यले उल्लेख गर्नुभएको छ। पाँच अध्यायदेखि दश अध्यायसम्मका जम्मा छ ओटा अध्यायमा विशेषतः गोपिनी, यशोदा आदिको निरोधलाई बताइएको थियो। यो अध्यायमा चाहिँ विशेषतः नन्दको निरोध बताइएको छ। त्यसकै सूचनाका लागि पहिल्यै **नन्दादयः** अर्थात् नन्द आदि भन्ने पद आएको छ। यो अध्यायमा भगवान्ले नन्द आदिले अह्राए अनुसार उनीहरूको जुत्ता ल्याइदिने, गोपिनीहरूले ताली बजाइदिँदा मच्चिएर नाच्ने आदि बाललीला देखाउनुभएको छ। श्रीधरस्वामी र वल्लभाचार्य दुबैले यो अध्यायका दशदेखि बीससम्मका एघार श्लोकलाई आफ्नो टीकामा स्विकार्नुभएको छैन। सुबोधिनीकारका अनुसार यो अध्यायमा जम्मा ४९ श्लोक छन्। त्यसको उपपत्ति बताउँदै उहाँ भन्नुहुन्छ– **पुंसां च नन्दप्राधान्यभावतः** प्रधानरूपले नन्द र अन्य गोपहरूको निरोध बताइएको छ। यसमा सुरुका छ श्लोकमा नन्दले श्रीकृष्णलाई बन्धनमुक्त गरेको र त्यसपछिका तीन श्लोकमा भगवान्ले बाल्यभावमा मुग्ध भए झैँ लीला गरेको बताइएको छ। त्यसपछि एक्काईस श्लोकदेखि छत्तीससम्मका सोह्र श्लोकमा गोपहरू गोकुलबाट वृन्दावन सरेको प्रसङ्ग छ भने अरू चार श्लोकमा भगवान्ले अनेक खेल खेल्नुभएको प्रसङ्ग छ। त्यसपछि छ श्लोकमा वत्सासुर मारेको लीला र नौ श्लोकमा बकासुर मारेको लीला देखाइएको छ। त्यसपछि पाँच श्लोकमा भने नन्द आदि गोपहरूले यी सबै घटनालाई सुनी त्यसकै चिन्तन–मनन गरेको बताइएको छ। यी सबै बाललीलाहरू नन्द आदि गोपहरूको मनोनिरोधका लागि हुन् भन्ने सूचना यही अध्यायको अन्ठाउन्नौँ श्लोकमा पाइन्छ। त्यहाँ नन्द आदि गोपहरूले बलराम–

श्रीकृष्णका यस्ता अनेक लीलाहरूलाई सम्झी त्यसको गीत गाई संसारको दुःखलाई भुले भनिएको छ। मन परमात्मामा निरुद्ध भइसकेको अवस्थामा संसारको समेत ख्याल रहँदैन। यसलाई आत्मज्ञानीको जीवन्मुक्ति स्थितिसँग तुलना गर्न सकिन्छ। आत्मज्ञानी ज्ञानद्वारा ब्राह्मी स्थितिमा पुगेको हुन्छ र उसलाई आफ्नो परमानन्दमय स्थितिका कारण शरीरको समेत ख्याल रहँदैन, **नोपजनं स्मरन्निदं शरीरम्** भनी छान्दोग्योपनिषद् (८/१२/३)मा बताइएको छ। यसरी परमात्माको बाललीलालाई अनुभव गरी नन्द आदिको चित्त परमात्मामा नै निरुद्ध भएको देखाउनु यस अध्यायको मूल विषय हो।

**भूम्यां निपतितौ तत्र ददृशुर्यमलार्जुनौ।**
**बभ्रमुस्तदविज्ञाय लक्ष्यं पतनकारणम्॥ २॥**
**उलूखलं विकर्षन्तं दाम्ना बद्धं च बालकम्।**
**कस्येदं कुत आश्चर्यमुत्पात इति कातराः॥ ३॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ (गोपहरूले)
**भूम्यां** = भुइँमा
**निपतितौ** = लडेका
**यमलार्जुनौ** = दुई ओटा खरीका रुखलाई
**ददृशुः** = देखे
**पतनकारणम्** = लड्नाका कारण
**दाम्ना** = डोरीले
**बद्धं** = बाँधिएको
**उलूखलं** = ओखललाई
**विकर्षन्तं** = तानिरहेका
**बालकं च** = बालक भगवान्लाई
**लक्ष्यं** = जान्न सकिने भए पनि
**तत्** = त्यो कुरा
**अविज्ञाय** = नजानेर
**इदं** = यो रुख लडाउने काम
**कस्य** = कसको हो ?
**कुतः** = कसरी लड्यो ?
**आश्चर्यम्** = अचम्म भयो
**उत्पातः** = यो उत्पात (कसरी भयो ?)
**इति** = यसो भन्दै
**कातराः** = भयव्याकुल भएका (नन्द आदि गोपहरू)
**बभ्रमुः** = भ्रमित भए

**वाक्यार्थ–** नन्द आदि गोपहरू त्यहाँ पुगेपछि उनीहरूले त्यहाँ दुई ओटा खरीका रुख भुइँमा लडिरहेको देखे। नजिकै डोरीले बाँधिएका बालक श्रीकृष्णले ओखललाई तानिरहनुभएको थियो। त्यो देख्दा स्पष्ट हुन्थ्यो कि, श्रीकृष्णकै कारण वृक्षहरू लडेका हुन् तर उनीहरूले यो कुरा बुझ्न सकेनन् र भन्न थाले– 'यो वृक्ष कसरी, कुन कारणले लड्यो ? अहो ! कस्तो आश्चर्य ! यो उत्पात कसरी भयो ? यसो भन्दै भयव्याकुल भएका गोपहरू भ्रमित भए।

**बाला ऊचुरनेनेति तिर्यग्गतमुलूखलम्।**
**विकर्षता मध्यगेन पुरुषावप्यचक्ष्महि॥ ४॥**

**पदार्थ–**
**बालाः** = (त्यहीँ खेलिरहेका) बालकहरूले
**तिर्यग्गतं** = तेर्सो भएर गएको
**उलूखलम्** = ओखललाई
**विकर्षता** = तान्दै

**मध्यगेन** = दुई रुखको बीचबाट छिरेका
**अनेन** = यी श्रीकृष्णले (ढालेका हुन्)
**पुरुषौ अपि** = दुई जना पुरुषलाई पनि
**अचक्ष्महि इति** = देख्यौँ भनेर
**ऊचुः** = भने

**वाक्यार्थ–** त्यहीँ वरिपरि खेलिरहेका बालकहरूले भने– 'यी रुखहरूलाई श्रीकृष्णले लडाएका हुन्, यिनी ओखललाई तान्दै दुई रुखका बीचबाट छिरे अनि तेर्सो परेर अड्किएको ओखल तान्दा दुबै रुख ढले, हामीले त ढलेका रुखबाट निस्किएका दुई जना पुरुषहरूलाई पनि देख्यौँ।'

**न ते तदुक्तं जगृहुर्न घटेतेति तस्य तत्।**
**बालस्योत्पाटनं तर्वोः केचित् सन्दिग्धचेतसः॥ ५॥**

**पदार्थ–**
**ते** = ती गोपहरूले
**तर्वोः** = दुई ओटा रुखहरूको
**उत्पाटनं** = लडाउने काम
**तस्य** = ती
**बालस्य** = बालक श्रीकृष्णको
**तत्** = त्यो
**न घटेत इति** = सम्भव हुनै सक्दैन भनेर
**तदुक्तं** = ती बालकहरूको कुरा
**न जगृहुः** = पत्याएनन्
**केचित्** = केही गोपहरू चाहिँ
**सन्दिग्धचेतसः** = हो कि भनी संशयग्रस्त भए

**वाक्यार्थ–** एउटा बालकले दुई-दुई ओटा रुखहरूलाई कसरी लडाउन सक्दछ भनेर केही गोपहरूले ती बालकहरूको कुरा पत्याएनन्। अन्य केही गोपहरू चाहिँ यिनै श्रीकृष्णले नै रुख ढालेका हुन् कि भनी संशययुक्त भए।

**उलूखलं विकर्षन्तं दाम्ना बद्धं स्वमात्मजम्।**
**विलोक्य नन्दः प्रहसद्वदनो विमुमोच ह॥ ६॥**

**पदार्थ–**
**दाम्ना** = डोरीद्वारा
**बद्धं** = बाँधिएका
**उलूखलं** = ओखल
**विकर्षन्तं** = तानिरहेका
**स्वम्** = आफ्ना
**आत्मजम्** = छोरा कृष्णलाई
**विलोक्य** = देखेर
**प्रहसद्वदनः** = हाँसिरहेका
**नन्दः** = नन्दले
**ह** = निश्चय नै
**विमुमोच** = बन्धनमुक्त गराए

**वाक्यार्थ–** ओखलमा बाँधिएर त्यसलाई बलपूर्वक तानिरहेका आफ्ना छोरा कृष्णलाई देखेर मुस्कुराइरहेका नन्दले डोरी फुकाइदिए।

**गोपीभिः स्तोभितोऽनृत्यद् भगवान् बालवत् क्वचित्।**
**उद्गायति क्वचिन्मुग्धस्तद्वशो दारुयन्त्रवत्॥ ७॥**

**पदार्थ–**
**गोपीभिः** = गोपिनीहरूद्वारा
**स्तोभितः** = प्रेरित
**भगवान्** = भगवान् श्रीकृष्ण
**बालवत्** = सामान्य बालक झैँ
**क्वचित्** = कहिलेकाहीँ

**अनृत्यत्** = नाच्न लाग्नुहुन्थ्यो
**क्वचित्** = कहिलेकाहीँ
**मुग्धः** = प्रसन्न भएर
**उद्गायति** = उच्च स्वरमा गीत गाउनुहुन्थ्यो
**दारुयन्त्रवत्** = कठपुतली झैँ (उहाँ)
**तद्वशः** = उनीहरूको वशमा पर्नुभएको थियो

**वाक्यार्थ–** गोपिनीहरूद्वारा प्रेरित भएर भगवान् श्रीकृष्ण सामान्य बालक झैँ कहीलेकाहीँ नाच्नुहुन्थ्यो, कहिलेकाहीँ उच्च स्वरमा गीत गाउनुहुन्थ्यो। यसरी भगवान् कठपुतली झैँ गोपिनीहरूको वशमा पर्नुभएको थियो।

**बिभर्ति क्वचिदाज्ञप्तः पीठकोन्मानपादुकम्।**
**बाहुक्षेपं च कुरुते स्वानां च प्रीतिमावहन्॥ ८॥**

**पदार्थ–**
**क्वचित्** = कहिलेकाहीँ
**आज्ञप्तः** = गोपिनीहरूको आदेश पाएर
**पीठकोन्मानपादुकम्** = पिर्का, नापो गर्ने भाँडो र खराउ
**बिभर्ति** = बोक्नुहुन्थ्यो
**स्वानां च** = आफ्ना प्रेमीहरूलाई
**प्रीतिम्** = प्रसन्न
**आवहन्** = बनाउने भगवान्ले
**बाहुक्षेपं च** = पाखुरामा हातले ठोक्ने काम पनि
**कुरुते** = गर्नुहुन्थ्यो

**वाक्यार्थ–** गोपिनीहरूले अह्राए अनुसार भगवान् कहिले पिर्का, कहिले नापो गर्ने भाँडो र कहिले खराउ बोक्नुहुन्थ्यो। आफ्ना अनन्य प्रेमी भक्तहरूलाई प्रसन्न बनाउन उहाँ कहीँलेकाहीँ (युद्धमा पहलमानले पाखुरा ठोके झैँ) पाखुरामा हातले ठोक्ने काम गर्नुहुन्थ्यो।

**दर्शयंस्तद्विदां लोक आत्मनो भृत्यवश्यताम्।**
**व्रजस्योवाह वै हर्षं भगवान् बालचेष्टितैः॥ ९॥**

**पदार्थ–**
**लोके** = संसारमा
**तद्विदां** = भगवान्को लीलाको रहस्य जान्ने व्यक्तिहरूको लागि
**आत्मनः** = आफ्नो
**भृत्यवश्यताम्** = भक्तहरूको वशमा रहेको वास्तविकतालाई
**दर्शयन्** = देखाउँदै
**भगवान्** = भगवान् श्रीकृष्णले
**बालचेष्टितैः** = आफ्ना बालचरित्रहरूद्वारा
**वै** = निश्चय नै
**व्रजस्य** = व्रजको
**हर्षं** = प्रसन्नतालाई
**उवाह** = फैलाउनुभयो

**वाक्यार्थ–** संसारमा भगवान्को लीलाको रहस्यलाई जान्ने व्यक्तिहरूको लागि आफू भक्तहरूको वशमा रहेको वास्तविकतालाई देखाउँदै भगवान् श्रीकृष्णले आफ्ना बालचरित्रहरूद्वारा व्रजको प्रसन्नतालाई फैलाउनुभयो।

**क्रीणीहि भोः फलानीति श्रुत्वा सत्वरमच्युतः।**
**फलार्थी धान्यमादाय ययौ सर्वफलप्रदः॥ १०॥**

**पदार्थ–**
**भोः** = हे गाउँलेहरू
**फलानि** = फलहरू
**क्रीणीहि इति** = किन्नुहोस् भनी (फल बेच्ने आइमाईले भनेको)
**श्रुत्वा** = सुनेर
**सर्वफलप्रदः** = सम्पूर्ण कर्म, भक्ति र उपासनाको फल दिने
**अच्युतः** = भगवान् श्रीकृष्ण
**फलार्थी** = फलार्थी भएर
**धान्यम्** = (अँजुलीमा) धान
**आदाय** = लिएर
**सत्वरम्** = छिटो-छिटो
**ययौ** = आउनुभयो

**वाक्यार्थ–** एकदिन कुनै एउटी फल बेच्ने आइमाईले 'फल किन्नुहोस्, फल किन्नुहोस्' भनेको सुनेर सम्पूर्ण कर्म, भक्ति र उपासनाका फल दिने भगवान् श्रीकृष्ण अँजुलीमा धान लिएर छिटो-छिटो बाहिर आउनुभयो।

**फलविक्रयिणी तस्य च्युतधान्यं करद्वयम्।**
**फलैरपूरयद् रत्नैः फलभाण्डमपूरि च॥ ११॥**

**पदार्थ–**
**तस्य** = (छिटो-छिटो आउनुभएका) उहाँ भगवान्को
**च्युतधान्यं** = धान जति बाटोमैं खसेर रित्तो भएका
**करद्वयम्** = दुबै हातलाई
**फलविक्रयिणी** = फल बेच्ने आइमाईले
**फलैः** = फलहरूद्वारा
**अपूरयत्** = भरिदिई (भगवान्द्वारा चाहिँ)
**रत्नैः** = रत्नहरूद्वारा
**फलभाण्डम् च** = त्यो आइमाईको फल राख्ने भाँडो पनि
**अपूरि** = पूर्ण गराइयो

**वाक्यार्थ–** छिटो-छिटो आउनाले धान बाटोमैं खसेर रित्तो हात भएका भगवान् श्रीकृष्णका दुबै हातलाई फल बेच्ने आइमाईले फल राखेर भरिदिई। त्यस आइमाईको फल राख्ने भाँडो चाहिँ भगवान्ले रत्नै-रत्नले भरिदिनुभयो।

**सरित्तीरगतं कृष्णं भग्नार्जुनमथाह्वयत्।**
**रामं च रोहिणी देवी क्रीडन्तं बालकैर्भृशम्॥ १२॥**

**पदार्थ–**
**अथ** = एक दिन
**रोहिणी देवी** = रोहिणी देवीले
**भग्नार्जुनम्** = खरीको वृक्षलाई लडाउनुभएका
**सरित्तीरगतं** = यमुना नदीको किनारमा जानुभएका
**बालकैः** = बालकहरूसँग
**भृशम्** = अत्यन्त
**क्रीडन्तं** = खेलिरहेका
**कृष्णं** = श्रीकृष्णलाई र
**रामं च** = बलरामलाई पनि
**आह्वयत्** = बोलाइन्

**वाक्यार्थ–** एक दिन खरीको वृक्षलाई लडाउनुहुने श्रीकृष्ण बलरामको साथमा अन्य बालकहरूसँग यमुना नदीको किनारमा गएर खेलिरहनुभएको थियो। त्यही वेला रोहिणी देवीले श्रीकृष्ण र बलरामलाई बोलाइन्।

**नोपेयातां यदाहूतौ क्रीडासङ्गेन पुत्रकौ ।**
**यशोदां प्रेषयामास रोहिणी पुत्रवत्सलाम् ॥ १३ ॥**

**पदार्थ–**
**आहूतौ** = बोलाइएका भए पनि
**पुत्रकौ** = पुत्र श्रीकृष्ण र बलराम
**क्रीडासङ्गेन** = खेलमा मस्त भएका कारण
**यदा** = जब
**न उपेयातां** = आएनन् (तब)
**रोहिणी** = रोहिणीले
**पुत्रवत्सलाम्** = छोरालाई ज्यादै माया गर्ने
**यशोदां** = यशोदालाई
**प्रेषयामास** = पठाइन्

**वाक्यार्थ–** खेलमा मस्त भएका कारण रोहिणीले बोलाउँदा श्रीकृष्ण र बलराम आउनुभएन। त्यसपछि उहाँहरूलाई बोलाउन रोहिणीले पुत्रवत्सला यशोदालाई पठाइन्।

**क्रीडन्तं सा सुतं बालैरतिवेलं सहाग्रजम् ।**
**यशोदाजोहवीत् कृष्णं पुत्रस्नेहस्नुतस्तनी ॥ १४ ॥**

**पदार्थ–**
**पुत्रस्नेहस्नुतस्तनी** = छोराको स्नेहका कारण स्तनबाट दुध बगाइरहेकी
**सा** = ती
**यशोदा** = यशोदाले
**बालैः** = बालकहरूसँग
**क्रीडन्तं** = खेलिरहेका
**अतिवेलं** = भोजनको समय बिताइरहेका
**सहाग्रजम्** = दाजुले सहित भएका
**सुतं** = छोरा
**कृष्णं** = श्रीकृष्णलाई
**आजोहवीत्** = बोलाइन्

**वाक्यार्थ–** स्नेहका कारण स्तनबाट दुध बगाइरहेकी यशोदाले भोजन गर्ने समय पनि बित्न लागेकाले दाजु बलरामका साथमा अन्य बालकहरूसँग खेलिरहेका छोरा श्रीकृष्णलाई बोलाइन्।

**कृष्ण कृष्णारविन्दाक्ष तात एहि स्तनं पिब ।**
**अलं विहारैः क्षुत्क्षान्तः क्रीडाश्रान्तोऽसि पुत्रक ॥ १५ ॥**

**पदार्थ–**
**कृष्ण** = हे कृष्ण
**कृष्ण** = हे कृष्ण
**अरविन्दाक्ष** = हे कमलनयन
**तात** = हे बाबु
**एहि** = आऊ
**स्तनं** = स्तन
**पिब** = पिऊ
**पुत्रक** = हे छोरा
**क्षुत्क्षान्तः** = भोकाएका
**असि** = छौ
**विहारैः** = क्रीडा
**अलं** = पुग्यो
**क्रीडाश्रान्तः** = खेलेर थाकेका छौ

**वाक्यार्थ–** हे कृष्ण ! हे कमलनयन ! हे बाबु ! आऊ, आमाको दुध पिऊ। हे कृष्ण ! तिमी भोकाइसकेका छौ। अब नखेल, खेलेर थाकिसक्यौ।

**हे रामागच्छ ताताशु सानुजः कुलनन्दन।**
**प्रातरेव कृताहारस्तद् भवान् भोक्तुमर्हति॥ १६॥**

**पदार्थ–**
**हे राम** = हे बलराम
**कुलनन्दन** = कुललाई आनन्दित तुल्याउने
**तात** = हे बाबु
**सानुजः** = भाइले सहित भएर
**आशु** = छिटो
**आगच्छ** = आऊ
**भवान्** = तिमीले
**प्रातः एव** = बिहान मात्रै
**कृताहारः** = भोजन गरेका थियौ
**तत्** = त्यसैले
**भोक्तुम्** = फेरि भोजन गर्न
**अर्हति** = सक्दछौ

**वाक्यार्थ–** हे बलराम ! हाम्रो कुललाई नै आनन्दित बनाउने हे बाबु ! भाइ श्रीकृष्णलाई लिएर तिमी तुरुन्त आऊ। बिहान भोजन गरेपछि तिमीले अहिलेसम्म केही खाएका छैनौ। त्यसैले तिमीले अब फेरि भोजन गर्नुपर्दछ।

**प्रतीक्षते त्वां दाशार्ह भोक्ष्यमाणो व्रजाधिपः।**
**एह्यावयोः प्रियं धेहि स्वगृहान् यात बालकाः॥ १७॥**

**पदार्थ–**
**दाशार्ह** = हे यदुकुमार श्रीकृष्ण
**व्रजाधिपः** = व्रजनरेश नन्दबाबा
**भोक्ष्यमाणः** = भोजनको इच्छा गर्दै
**त्वां** = तिमीलाई
**प्रतीक्षते** = पर्खिरहनुभएको छ
**एहि** = आऊ
**आवयोः** = हामीलाई
**प्रियं** = प्रसन्न
**धेहि** = बनाऊ
**बालकाः** = हे बालकहरू
(तिमीहरू पनि)
**स्वगृहान्** = आ-आफ्नो घर
**यात** = जाओ

**वाक्यार्थ–** हे यदुकुमार श्रीकृष्ण ! व्रजनरेश नन्दबाबा भोजनका लागि तयार भएर तिमीलाई पर्खेर बसिरहनुभएको छ। अब आऊ। आएर हामीलाई आनन्दित गराऊ। हे बालकहरू ! अब तिमीहरू सबै आ-आफ्नो घर जाओ।

**धूलिधूसरिताङ्गस्त्वं पुत्र मज्जनमावह।**
**जन्मर्क्षमद्य भवतो विप्रेभ्यो देहि गाः शुचिः॥ १८॥**

**पदार्थ–**
**पुत्र** = हे छोरा
**धूलिधूसरिताङ्गः** = सबै अङ्ग धुलाम्मे भएका
**त्वं** = तिमी
**मज्जनम्** = स्नान
**आवह** = गर
**अद्य** = आज
**भवतः** = तिम्रो
**जन्मर्क्षम्** = जन्म नक्षत्र हो
**शुचिः** = पवित्र भएर
**विप्रेभ्यः** = ब्राह्मणहरूलाई
**गाः** = गाईहरू
**देहि** = देऊ

**वाक्यार्थ–** हे छोरा ! तिम्रो शरीरका सबै अङ्गहरू धुलाम्मे भएका छन्, स्नान गर। आज तिम्रो जन्मनक्षत्र हो त्यसैले पवित्र भएर ब्राह्मणहरूलाई गाईहरू दान गर।

**पश्य पश्य वयस्यांस्ते मातृमृष्टान् स्वलङ्कृतान्।**
**त्वं च स्नातः कृताहारो विहरस्व स्वलङ्कृतः॥ १९॥**

पदार्थ–
**मातृमृष्टान्** = आमाले स्नान गराइदिएर सफा भएका
**स्वलङ्कृतान्** = राम्ररी सजाइएका
**ते** = तिम्रा
**वयस्यान्** = साथीहरूलाई
**पश्य पश्य** = हेर त हेर
**त्वं च** = तिमी पनि
**स्नातः** = नुहाएका
**कृताहारः** = भोजन गरेका
**स्वलङ्कृतः** = राम्ररी सजिएर
**विहरस्व** = खेल

**वाक्यार्थ–** हेर त तिम्रा साथीहरूलाई, उनीहरूका आमाले उनीहरूलाई नुहाइदिएकाले कति सफा भएका छन्, सजाइएर कति राम्रा भएका छन्। अब तिमी पनि स्नान गर, भोजन पनि गर अनि सजिएर खेल।

**इत्थं यशोदा तमशेषशेखरं मत्वा सुतं स्नेहनिबद्धधीर्नृप।**
**हस्ते गृहीत्वा सहराममच्युतं नीत्वा स्ववाटं कृतवत्यथोदयम्॥ २०॥**

पदार्थ–
**नृप** = हे राजा परीक्षित्
**इत्थं** = यसप्रकार
**स्नेहनिबद्धधीः** = पुत्रस्नेहले बुद्धिवृत्ति बाँधिएकी
**यशोदा** = यशोदा
**अशेषशेखरं** = सबैमा श्रेष्ठ
**अच्युतं** = भगवान् अच्युतलाई
**सुतं** = छोरो
**मत्वा** = ठानेर
**सहरामम्** = बलरामले सहित
**तम्** = ती श्रीकृष्णलाई
**हस्ते** = हातमा
**गृहीत्वा** = समाएर
**स्ववाटं** = आफ्नो घरमा
**नीत्वा** = ल्याएर
**अथ** = त्यसपछि
**उदयम्** = (स्नान, गोदान, भोजन आदि जन्मनक्षत्र सम्बन्धी) मङ्गलकार्य
**कृतवती** = गरिन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! पुत्रस्नेहको बन्धनले सम्पूर्ण बुद्धिवृत्ति बाँधिएकी यशोदाले सबैमा श्रेष्ठ अच्युत भगवान्लाई आफ्नो छोरो ठानी एक हातमा श्रीकृष्ण र अर्को हातमा बलरामलाई समातेर आफ्नो घरमा लिएर आइन्, त्यसपछि (श्रीकृष्णको जन्मनक्षत्रको दिन भएकाले श्रीकृष्णलाई स्नान गराएर गोदानपूर्वक भोजन आदि) मङ्गलकार्य पनि गरिन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गोपवृद्धा महोत्पातानुभूय बृहद्वने।**
**नन्दादयः समागम्य व्रजकार्यममन्त्रयन्॥ २१॥**

पदार्थ–
**नन्दादयः** = नन्द आदि
**गोपवृद्धाः** = वृद्ध गोपहरू
**महोत्पातान्** = ठुला-ठुला उत्पातहरू
**अनुभूय** = अनुभव गरी
**बृहद्वने** = बृहद्वनमा
**समागम्य** = एक ठाउँमा भेला भएर

**व्रजकार्यम्** = व्रजका लागि | हितकर कामको बारेमा | **अमन्त्रयन्** = छलफल गर्न लागे

**वाक्यार्थ–** व्रजमा राक्षसहरूबाट ठुला-ठुला उत्पातहरू हुन लागेको अनुभव गरी व्रजको हितका लागि नन्द आदि वृद्ध गोपहरू बृहद्वनमा भेला भएर छलफल गर्न लागे।

**तत्रोपनन्दनामाह गोपो ज्ञानवयोऽधिकः।**
**देशकालार्थतत्त्वज्ञः प्रियकृद्रामकृष्णयोः॥ २२॥**

**पदार्थ–**
**तत्र** = तिनीहरूमध्ये
**ज्ञानवयोऽधिकः** = ज्ञान र उमेरले ज्येष्ठ
**देशकालार्थतत्त्वज्ञः** = कुन देश र कुन कालमा के काम गर्दा कस्तो प्रतिफल प्राप्त हुन्छ भन्ने कुरा जानेका
**रामकृष्णयोः** = बलराम र श्रीकृष्णको
**प्रियकृत्** = हित चाहने
**उपनन्दनामा** = उपनन्द नाम गरेका
**गोपः** = गोपले
**आह** = भने

**वाक्यार्थ–** त्यहाँ भेला भएका गोपहरूमध्ये ज्ञानले र उमेरले पनि ज्येष्ठ, कुन ठाउँमा, कुन समयमा के काम गर्दा कस्तो प्रतिफल प्राप्त हुन्छ भन्ने कुरा बुझेका अनि बलराम र श्रीकृष्णको हित चिताउने उपनन्द नामका गोपले भने।

**उत्थातव्यमितोऽस्माभिर्गोकुलस्य हितैषिभिः।**
**आयान्त्यत्र महोत्पाता बालानां नाशहेतवः॥ २३॥**

**पदार्थ–**
**गोकुलस्य** = गोकुलको
**हितैषिभिः** = कल्याण चाहने
**अस्माभिः** = हामीहरूद्वारा
**इतः** = यहाँबाट
**उत्थातव्यं** = उठ्नुपर्दछ (अन्यत्रै जानुपर्दछ)
**अत्र** = यहाँ त
**बालानां** = बच्चाहरूको
**नाशहेतवः** = नाशको कारण भएका
**महोत्पाताः** = ठुला उत्पातहरू
**आयान्ति** = आइरहन्छन्

**वाक्यार्थ–** गोकुलको कल्याण चाहने हामीहरू अब यो ठाउँ छाडेर अन्यत्रै जानुपर्दछ। यहाँ गोकुलमा बच्चाहरूका नाशको कारण भएका ठुला उत्पातहरू भइरहेका छन्।

**मुक्तः कथञ्चिद् राक्षस्या बालघ्न्या बालको ह्यसौ।**
**हरेरनुग्रहान्नूनमनश्चोपरि नापतत्॥ २४॥**

**पदार्थ–**
**बालघ्न्याः** = बालकहरूको हिंसा गर्ने
**राक्षस्याः** = राक्षसी (पूतना)बाट
**असौ** = यी
**बालकः** = बालक कृष्ण
**हि** = निश्चय नै
**कथञ्चित्** = कसैगरी
**मुक्तः** = बाँचे
**नूनम्** = निश्चय नै
**हरेः** = भगवान् श्रीहरिको
**अनुग्रहात्** = अनुग्रहका कारण

**अनः च** = गाडा पनि | **उपरि** = (यी कृष्ण) माथि | **न अपतत्** = पल्टिएन

**वाक्यार्थ–** बालकहरू मार्दै हिँडेकी राक्षसी (पूतना)बाट यी बालक कृष्ण कसैगरी बाँच्न सफल भए। फेरि भगवान् श्रीहरिको दयाले गर्दा यिनमाथि पल्टिन लागेको गाडा पनि यिनीमाथि पल्टिएन।

**चक्रवातेन नीतोऽयं दैत्येन विपदं वियत्।**
**शिलायां पतितस्तत्र परित्रातः सुरेश्वरैः॥ २५॥**

**पदार्थ–**
**चक्रवातेन** = भुमरीको रूप धारण गरेको
**दैत्येन** = दैत्यद्वारा
**वियत्** = आकाशमा लगी
**विपदं** = विपत्तिको अवस्थामा
**नीतः** = पुऱ्याइएका
**अयं** = यी बालक कृष्ण
**शिलायां** = ढुङ्गामा
**पतितः** = खसे
**तत्र** = त्यहाँ
**सुरेश्वरैः** = देवताहरूद्वारा
**परित्रातः** = रक्षा गरिए

**वाक्यार्थ–** भुमरीको रूप धारण गरेको तृणावर्त दैत्यले यिनै बालक कृष्णलाई आकाशमा लगी ठुलो विपत्तिको अवस्थामा पुऱ्यायो, त्यहाँबाट यी कृष्ण ढुङ्गामा खसे। धन्य, देवताहरूले यिनको रक्षा गर्नुभयो।

**यन्न म्रियेत द्रुमयोरन्तरं प्राप्य बालकः।**
**असावन्यतमो वापि तदप्यच्युतरक्षणम्॥ २६॥**

**पदार्थ–**
**द्रुमयोः** = दुई ओटा खरीको रुखको
**अन्तरं** = बीचमा
**प्राप्य अपि** = पुगेर पनि
**असौ** = यी
**बालकः** = बालक कृष्ण
**अन्यतमः वा** = वा कुनै अरू बालक
**यत्** = जो
**न म्रियेत** = मरेनन्
**तत् अपि** = त्यो पनि
**अच्युतरक्षणम्** = भगवान् अच्युतले नै रक्षा गर्नुभएको हो

**वाक्यार्थ–** दुई ओटा खरीको वृक्ष लड्दा ती दुई रुखको बीचमा रहेका बालक कृष्ण मरेनन्, न त नजिकै रहेका अरू कुनै बालकहरू नै मरे। त्यो कसैलाई केही नहुनु पनि भगवान् अच्युतले नै रक्षा गर्नुभएको हो।

**यावदौत्पातिकोऽरिष्टो व्रजं नाभिभवेदितः।**
**तावद् बालानुपादाय यास्यामोऽन्यत्र सानुगाः॥ २७॥**

**पदार्थ–**
**यावत्** = जबसम्म
**औत्पातिकः** = उत्पातजन्य
**अरिष्टः** = अनर्थले
**व्रजं** = व्रजलाई
**न अभिभवेत्** = पराजित नगरोस्

**तावत्** = त्यसभन्दा अगाडि नै
**बालान्** = बालबच्चाहरूलाई
**उपादाय** = लिएर
**इतः** = यहाँ (व्रज)बाट
**सानुगाः** = अनुचरले सहित भई
**अन्यत्र** = अन्यत्र
**यास्यामः** = जाऔँ

**वाक्यार्थ–** उत्पातजन्य अनर्थले व्रजलाई विनष्ट गर्न नभ्याउँदै हामी हाम्रा बालबच्चाहरू र अनुचरहरूलाई साथमैं लिएर यस ठाउँबाट कहीं अन्यत्रै जाऔँ।

**वनं वृन्दावनं नाम पशव्यं नवकाननम्।**
**गोपगोपीगवां सेव्यं पुण्याद्रितृणवीरुधम्॥ २८॥**

**पदार्थ–**
**पशव्यं** = पशुहरूका लागि हितकारी
**नवकाननम्** = नयाँ अवान्तर वनहरू भएको
**पुण्याद्रितृणवीरुधम्** = पवित्र पर्वत, घाँसपात र लतागुल्महरूले युक्त
**गोपगोपीगवां** = गोप, गोपिनी र गाईहरूका लागि
**सेव्यं** = बस्न लायक भएको
**वृन्दावनं नाम** = वृन्दावन नाम गरेको
**वनं** = वन छ

**वाक्यार्थ–** वृन्दावन नाम गरेको एउटा वन छ, जहाँ पशुहरूका लागि हितकारी अवान्तर वनहरू पनि छन्। पवित्र पर्वत, घाँसपात र लतागुल्महरू भएको हुनाले गोप, गोपिनी र गाईहरूका लागि त्यो वन बस्न लायक छ।

**विवरण–** यस श्लोकमा उपनन्दले वृन्दावनको प्रशंसा गरेका छन्। जालन्धर मार्नका लागि भगवान्ले जालन्धरकी पत्नी वृन्दालाई पत्नीरूपमा अपनाउनुभएको थियो। भगवान्सँग सम्बद्ध उनकै नामको यो वनमा भगवान्का त्यस्तै गोप्य लीलाहरू हुन्छन् भन्ने जनाइएको छ। वृन्दावनमा तीनथरी भूमिहरू छन्, एउटा अति गोप्यभूमि, जहाँ गोपिनीहरूसँग भगवान्ले कुञ्जलीला, रासलीला आदि गर्नुहुन्छ। अर्को प्रकटभूमि छ, जहाँ नन्द आदि गोपहरूको निवास हुन्छ। अनि अर्को गुफा, कन्दरा आदि घाँसले भरिएको प्रदेश छ, जहाँ गाईहरू चर्छन्। यही तीनथरी भूमिलाई बताउन श्लोकमा **गोपगोपीगवां सेव्यम्** भन्ने पद आएको छ। पुण्यमय गोवर्धन पर्वत, अनि कुश आदि तृण पनि भएकाले यो प्रदेश याज्ञिक ब्राह्मणहरूका लागि पनि उपयुक्त भएको देखिन्छ। यसरी यहाँ वृन्दावनको प्रशंसा गरिएको छ।

**तत् तत्राद्यैव यास्यामः शकटान् युङ्क्त मा चिरम्।**
**गोधनान्यग्रतो यान्तु भवतां यदि रोचते॥ २९॥**

**पदार्थ–**
**तत्** = त्यसकारण
**यदि** = यदि
**भवतां** = तपाईंहरूलाई (मेरो कुरा)
**रोचते** = मन परेको छ भने
**तत्र** = त्यहाँ (वृन्दावनमा)
**अद्य एव** = आजै
**यास्यामः** = जाऔँ
**शकटान्** = गाडाहरू
**युङ्क्त** = गोरुमा जोड
**मा चिरम्** = ढिलो नगर

**गोधनानि** = गोधनहरू | **अग्रतः** = सबैभन्दा अगाडि | **यान्तु** = जाऊन्

**वाक्यार्थ–** यदि तपाईंहरूलाई मेरो कुरा मन पर्‍यो भने हामीहरू आजै वृन्दावनतिर लागौँ। अब कत्ति पनि ढिलो नगरौँ, गाडाहरू तयार गर। हाम्रा सम्पत्ति गाईहरूलाई सबैभन्दा अगाडि लगाऔँ।

**तच्छ्रुत्वैकधियो गोपाः साधु साध्विति वादिनः।**

**व्रजान् स्वान् स्वान् समायुज्य ययू रूढपरिच्छदाः॥ ३०॥**

पदार्थ–
**तत्** = (उपनन्दको) त्यो कुरा
**श्रुत्वा** = सुनेर
**एकधियः** = एकमत भएका
**गोपाः** = गोपहरू
**साधु साधु** = राम्रो, राम्रो
**इति वादिनः** = यसो भन्दै
**स्वान् स्वान्** = आ-आफ्ना आफन्त जन र
**व्रजान्** = व्रजवासीहरूलाई पनि
**समायुज्य** = भेला गराएर
**रूढपरिच्छदाः** = गाडामा आ-आफ्ना सामग्रीहरू राखेर
**ययुः** = गए

**वाक्यार्थ–** वृद्ध गोप उपनन्दको कुरा सुनेर ठिक हो, राम्रो हो भन्दै उनको भनाइमा एकमत भएका सबै गोपहरूले आ-आफ्ना आफन्तजन र सम्पूर्ण व्रजवासीहरूलाई एकत्रित गरी आ-आफ्ना सामग्रीहरू गाडामा राखेर त्यहाँबाट हिँडे।

**वृद्धान् बालान् स्त्रियो राजन् सर्वोपकरणानि च।**

**अनःस्वारोप्य गोपाला यत्ता आत्तशरासनाः॥ ३१॥**

**गोधनानि पुरस्कृत्य शृङ्गाण्यापूर्य सर्वतः।**

**तूर्यघोषेण महता ययुः सहपुरोहिताः॥ ३२॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**यत्ताः** = सावधान भएर
**आत्तशरासनाः** = धनुषबाण बोकेका
**गोपालाः** = गोपहरू
**वृद्धान्** = वृद्ध
**बालान्** = बालबच्चा
**स्त्रियः** = स्त्रीहरू र
**सर्वोपकरणानि च** = आवश्यक सम्पूर्ण सामग्रीहरू पनि
**अनःसु** = गोरुगाडामा
**आरोप्य** = राखेर
**गोधनानि** = गोधनलाई
**पुरस्कृत्य** = अगाडि लगाएर
**सर्वतः** = चारैतिर
**शृङ्गाणि**= (निर्गमनसूचक) सिङ्
**आपूर्य** = भरेर (सिङ्को बाजा बजाएर)
**महता** = ठुलो
**तूर्यघोषेण** = तुरहीको आवाजका साथ
**सहपुरोहिताः** = पुरोहितले सहित
**ययुः** = व्रजबाट हिँडे

**वाक्यार्थ–** हे राजा परीक्षित्! व्रजका गोपहरू सबैले आ-आफ्नो धनुष र बाण बोकेर सावधानपूर्वक वृद्ध, बालक र स्त्रीहरूका साथै आवश्यक घरायसी सामग्रीहरू पनि गोरुगाडामा राखे। त्यसपछि आफ्नो मूलधन गाईहरूलाई अगाडि लगाएर सिङ्को बाजा घन्काए अनि तुरही

बजाउँदै पुरोहितहरूलाई पनि साथमैं लिएर व्रजबाट हिँडे।

**गोप्यो रूढरथा नूत्नकुचकुङ्कुमकान्तयः।**

**कृष्णलीला जगुः प्रीता निष्ककण्ठ्यः सुवाससः॥ ३३॥**

**पदार्थ–**
**रूढरथाः** = रथमा चढेका
**नूत्नकुचकुङ्कुमकान्तयः** = स्तनमा नयाँ-नयाँ कुङ्कुमहरू लगाएर चम्किएका
**निष्ककण्ठ्यः** = गलामा हार लगाएका
**सुवाससः** = राम्रा-राम्रा लुगा लगाएका
**प्रीताः** = प्रसन्न भएका
**गोप्यः** = गोपिनीहरूले
**कृष्णलीलाः** = श्रीकृष्णका लीलामय गीतहरू
**जगुः** = गाउन थाले

**वाक्यार्थ–** आफ्ना स्तनमण्डलमा नयाँ-नयाँ कुङ्कुमहरू लगाउनाले चम्किएका, गलामा हार लगाएका अनि राम्रा-राम्रा लुगाहरू लगाएका, रथमा चढेका गोपिनीहरू प्रसन्न हुँदै श्रीकृष्णका लीलामय गीतहरू गाउन थाले।

**तथा यशोदारोहिण्यावेकं शकटमास्थिते।**

**रेजतुः कृष्णरामाभ्यां तत्कथाश्रवणोत्सुके॥ ३४॥**

**पदार्थ–**
**तथा** = त्यसै गरी
**तत्कथाश्रवणोत्सुके** = श्रीकृष्ण र बलरामको बोली सुन्न उत्सुक
**यशोदारोहिण्यौ** = यशोदा र रोहिणी
**कृष्णरामाभ्यां** = श्रीकृष्ण र बलरामसँग
**एकं** = एउटै
**शकटम्** = गाडामा
**आस्थिते** = बसेर
**रेजतुः** = शोभायमान भए

**वाक्यार्थ–** त्यसै गरी श्रीकृष्ण र बलरामको बोली सुन्न उत्कण्ठित यशोदा र रोहिणी श्रीकृष्ण र बलरामसँग एउटै गाडामा बस्दा अत्यन्त सुशोभित देखिए।

**वृन्दावनं सम्प्रविश्य सर्वकालसुखावहम्।**

**तत्र चक्रुर्व्रजावासं शकटैरर्धचन्द्रवत्॥ ३५॥**

**पदार्थ–**
**सर्वकालसुखावहम्** = सबै कालमा सुख दिने
**वृन्दावनं** = वृन्दावनमा
**सम्प्रविश्य** = प्रवेश गरेर
**तत्र** = त्यहाँ
**शकटैः** = गाडाहरूद्वारा
**अर्धचन्द्रवत्** = अर्धजन्द्र जस्तो आकार (बनाए)
**व्रजावासं** = गाईगोठ
**चक्रुः** = बनाए

**वाक्यार्थ–** सबै कालमा आनन्द दिने वृन्दावनमा प्रवेश गरेपछि गोपहरूले आफ्ना गोरुगाडाहरूलाई अर्धचन्द्र आकारमा राखे अनि गाईहरूलाई बस्न योग्य गोठ पनि बनाए।

**वृन्दावनं गोवर्धनं यमुनापुलिनानि च ।**
**वीक्ष्यासीदुत्तमा प्रीती राममाधवयोर्नृप ॥ ३६ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**वृन्दावनं** = वृन्दावन
**गोवर्धनं** = गोवर्धन पहाड र
**यमुनापुलिनानि च** = यमुना नदीका तटहरू
**वीक्ष्य** = देखेर
**राममाधवयोः** = बलराम र श्रीकृष्णमा
**उत्तमा** = अत्यन्त उत्कृष्ट
**प्रीतिः** = प्रेम (आनन्द)
**आसीत्** = उत्पन्न भयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! वृन्दावन, गोवर्धन पहाड र यमुना नदीका तटहरू देखेर बलराम र श्रीकृष्णको मनमा परम प्रेमको उत्पत्ति भयो।

**एवं व्रजौकसां प्रीतिं यच्छन्तौ बालचेष्टितैः ।**
**कलवाक्यैः स्वकालेन वत्सपालौ बभूवतुः ॥ ३७ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**बालचेष्टितैः** = बालसुलभ चेष्टा
**कलवाक्यैः** = मिठो तोते बोलीद्वारा
**व्रजौकसां** = व्रजवासीहरूलाई
**प्रीतिं** = आनन्द
**यच्छन्तौ** = प्रदान गर्दै बलराम र श्रीकृष्ण
**स्वकालेन** = आफ्नो समय आए पछि (बाच्छा चराउन सक्ने भएपछि)
**वत्सपालौ** = बाच्छाको गोठालो
**बभूवतुः** = हुनुभयो

**वाक्यार्थ–** यसप्रकार बालसुलभ विभिन्न चेष्टा, मिठो तोते बोली आदिद्वारा वृन्दावनमा पनि बलराम र श्रीकृष्णले व्रजवासीहरूलाई आनन्द प्रदान गर्दै रहनुभयो। जब उहाँहरू बाच्छा चराउन सक्ने हुनुभयो, तब बाच्छाको गोठालो भएर वृन्दावनमा बाच्छा चराउन थाल्नुभयो।

**अविदूरे व्रजभुवः सह गोपालदारकैः ।**
**चारयामासतुर्वत्सान् नानाक्रीडापरिच्छदौ ॥ ३८ ॥**

**पदार्थ–**
**व्रजभुवः** = गोठदेखि
**अविदूरे** = नजिकै
**गोपालदारकैः सह** = गोप बालक साथीहरूसँग
**नानाक्रीडापरिच्छदौ** = अनेक प्रकारका खेल सामग्रीहरू लिएर (खेल्दै)
**वत्सान्** = बाच्छाहरू
**चारयामासतुः** = चराउन थाल्नुभयो

**वाक्यार्थ–** अरू साना-साना गोप साथीहरूका साथमा श्रीकृष्ण र बलराम गोठदेखि केही पर पुगी विभिन्न प्रकारका खेल सामग्रीहरू खेल्दै बाच्छाहरू चराउन थाल्नुभयो।

**क्वचिद् वादयतो वेणुं क्षेपणैः क्षिपतः क्वचित् ।**
**क्वचित् पादैः किङ्किणीभिः क्वचित् कृत्रिमगोवृषैः ॥ ३९ ॥**

**वृषायमाणौ नर्दन्तौ युयुधाते परस्परम्।**
**अनुकृत्य रुतैर्जन्तूंश्चेरतुः प्राकृतौ यथा ॥ ४० ॥**

पदार्थ–
**क्वचित्** = कहिले
**वेणुं** = बाँसुरी
**वादयतः** = बजाउँदै
**क्वचित्** = कहिले
**क्षेपणैः** = गुलेलीले
**क्षिपतः** = हान्दै
**क्वचित्** = कहिले
**किङ्किणीभिः** = पाउजुले युक्त
**पादैः** = चरणद्वारा (नाच्दै)
**क्वचित्** = कहिले
**कृत्रिमगोवृषैः** = गाईगोरुको जस्तो रूप बनाएका गोपहरूसँग
**वृषायमाणौ** = आफूहरू पनि गोरु जस्तो भएर
**नर्दन्तौ** = कराउँदै
**परस्परम्** = परस्पर
**युयुधाते** = लड्नुहुन्थ्यो
**रुतैः** = तत्तत् शब्दहरूद्वारा
**जन्तून्** = जीवहरूको
**अनुकृत्य** = अनुकरण गरेर
**प्राकृतौ यथा** = सामान्य बालक झैं
**चेरतुः** = विहार गर्नुभयो

**वाक्यार्थ–** कहिले बाँसुरी बजाउँदै, कहिले गुलेली हान्दै, कहिले लगाएको पाउजुको आवाजसँगै नाच्दै र कहिले चाहिँ गाई-गोरुको जस्तो रूप बनाएका गोपहरूसँग आफूहरू पनि गोरु जस्तो भएर कराउँदै श्रीकृष्ण र बलराम परस्पर लड्नुहुन्थ्यो। यस्तै उहाँहरूले विभिन्न जन्तुहरूको आवाजको अनुकरण गर्दै सामान्य बालकहरूले झैं वृन्दावनमा विहार गर्नुभयो।

**कदाचिद् यमुनातीरे वत्सांश्चारयतोः स्वकैः।**
**वयस्यैः कृष्णबलयोर्जिघांसुर्दैत्य आगमत्॥ ४१ ॥**

पदार्थ–
**कदाचित्** = एक दिन
**यमुनातीरे** = यमुनाको तटमा
**स्वकैः** = आफ्ना
**वयस्यैः** = समान उमेरका साथीहरूसँग
**वत्सान्** = बाच्छाहरूलाई
**चारयतोः** = चराइरहनुभएका
**कृष्णबलयोः** = श्रीकृष्ण र बलरामलाई
**जिघांसुः** = मार्ने इच्छा गरेर
**दैत्यः** = एउटा दैत्य
**आगमत्** = आयो

**वाक्यार्थ–** एक दिन श्रीकृष्ण र बलराम आफ्ना समान उमेरका गोप साथीहरूसँग मिलेर यमुना नदीको किनारमा बाच्छाहरू चराइरहनुभएको थियो, त्यही वेला एउटा दैत्य श्रीकृष्ण र बलरामलाई मार्न भनेर आइपुग्यो।

**तं वत्सरूपिणं वीक्ष्य वत्सयूथगतं हरिः।**
**दर्शयन् बलदेवाय शनैर्मुग्ध इवासदत्॥ ४२ ॥**

पदार्थ–
**हरिः** = भगवान् श्रीकृष्णले
**वत्सरूपिणं** = बाच्छोको रूप लिएर
**वत्सयूथगतं** = बाच्छाहरूको समूहमा प्रवेश गरेको
**तं** = त्यो दैत्यलाई
**वीक्ष्य** = देखेर
**बलदेवाय** = बलरामलाई

**दर्शयन्** = देखाउँदै
**मुग्धः इव** = थाहा नपाए झैं गरी
**शनैः** = बिस्तारै
**आसदत्** = त्यसैको छेउमा जानुभयो

**वाक्यार्थ–** त्यस वेला भगवान् श्रीकृष्णले बाच्छोको रूप लिएर बाच्छाहरूको समूहमा प्रवेश गरेको एउटा दैत्यलाई देख्नुभयो। त्यसपछि उहाँले बलरामलाई पनि त्यो दैत्य देखाउनुभयो अनि आफू चाहिँ केही थाहा नपाए झैं गरी त्यही दैत्यको छेउमा बिस्तारै जानुभयो।

**गृहीत्वापरपादाभ्यां सहलाङ्गूलमच्युतः।**
**भ्रामयित्वा कपित्थाग्रे प्राहिणोद् गतजीवितम्।**
**स कपित्थैर्महाकायः पात्यमानैः पपात ह॥ ४३॥**

**पदार्थ–**
**अच्युतः** = भगवान् श्रीकृष्णले
**अपरपादाभ्यां सह** = पछाडिका दुई ओटा खुट्टाका साथ
**लाङ्गूलम्** = पुच्छरलाई
**गृहीत्वा** = समातेर
**भ्रामयित्वा** = घुमाएर
**गतजीवितम्** = प्राण निस्किएको (मरेको) त्यस दैत्यलाई
**कपित्थाग्रे** = कैथको रुखमा
**प्राहिणोत्** = फ्याँकिदिनुभयो
**पात्यमानैः** = लडाइएका
**कपित्थैः** = कैथका रुखहरूसँगै
**महाकायः** = ठुलो शरीर भएको
**सः** = त्यो दैत्य पनि
**ह** = निश्चय नै
**पपात** = भुइँमा पछारियो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले पुच्छरसहित त्यस दैत्यको पछाडिको दुबै खुट्टालाई समातेर फनफनी घुमाउनुभयो। त्यो दैत्य मरेपछि त्यसलाई कैथको रुखमाथि फालिदिनुभयो। दैत्यको त्यो विशाल शरीर कैथका रुखहरूलाई लडाउँदै भुइँमा पछारियो।

**विवरण–** यहाँ भगवान्ले वत्सासुरलाई मार्नुभएको प्रसङ्ग छ। वल्लभाचार्य भन्नुहुन्छ– भगवान्ले बाच्छाहरूलाई पनि आफूमा निरोध गर्नुभएको प्रसङ्ग हो यो। भगवान्ले वृन्दावनमा आएर नै बाच्छाहरू चराउन थाल्नुभयो। यसको अर्थ भगवान्ले आफ्नो लीलाको साधनको रूपमा बाच्छाहरूलाई स्वीकार गर्नुभएको हो। यद्यपि बाच्छाहरूमा भगवान्मा मन लगाउने र मनको निरोध गर्ने मानवीय चेतना हुँदैन, तर पनि यो पुष्टिमार्ग भएकाले यहाँ भक्तको साधनाभन्दा पनि भगवान्को अनुकम्पा या स्वीकार नै भक्तको भगवान्मा निरोध हुन मुख्य कारण हुन्छ भन्ने देखाइएको छ। फेरि व्रजमा जन्मिएका गाई, बाच्छा, रुख आदिलाई समेत पूर्वजन्मका तपस्वी, ऋषि या भक्त मानिएको पाइन्छ। स्वयं ब्रह्माजी र उद्धवजीले पनि आफूलाई व्रजमा रुख, लहरा बनाई जन्माइदिन प्रार्थना गरेको पाइन्छ। यसरी बाच्छाहरूलाई भगवान्ले चराउनु भनेको उनीहरूलाई स्वीकार गर्नु हो र यही नै उनीहरूको भगवान्मा निरोध हो। निरोधका लागि व्यक्तिमा आसुरभाव रहनुहुँदैन। यसको नाशविना उनीहरू भगवल्लीलामा सामेल हुन सक्दैनन्, यसै कारण उनीहरूको स्वाभाविक आसुरभावरूपी वत्सासुरलाई भगवान्ले मार्नुभएको हो। स्वाभाविक दोषरूप भएकाले त्यो आसुरभावलाई बाच्छाकै रूप लिई बाच्छाकै हूलभित्र पसेको बताइएको छ। त्यसलाई मारी भगवान्ले बाच्छाहरूलाई आसुरभावले रहित पार्नुभयो अनि आफूले

स्वीकार्नुभयो। यही वत्सासुरवध प्रसङ्गको रहस्य हो।

**तं वीक्ष्य विस्मिता बालाः शशंसुः साधु साध्विति।**
**देवाश्च परिसन्तुष्टा बभूवुः पुष्पवर्षिणः॥ ४४॥**

**पदार्थ–**
**तं** = त्यो मरेर लडेको दैत्यलाई
**वीक्ष्य** = देखेर
**विस्मिताः** = चकित भएका
**बालाः** = बालकहरूले
**साधु साधु इति** = राम्रो-राम्रो भन्दै
**शशंसुः** = (श्रीकृष्णको) प्रशंसा गरे
**परिसन्तुष्टाः** = अति हर्षित भएका
**देवाः च** = देवताहरू पनि
**पुष्पवर्षिणः** = पुष्पवर्षा गर्नेवाला
**बभूवुः** = भए

**वाक्यार्थ–** त्यो विशाल शरीर भएको मरेर लडेको दैत्यलाई देखेर अचम्म मानेका गोप बालकहरूले 'राम्रो-राम्रो' भन्दै श्रीकृष्णको प्रशंसा गरे। अति हर्षित भएका देवताहरूले पनि पुष्पवृष्टि गरे।

**तौ वत्सपालकौ भूत्वा सर्वलोकैकपालकौ।**
**सप्रातराशौ गोवत्सांश्चारयन्तौ विचेरतुः॥ ४५॥**

**पदार्थ–**
**सर्वलोकैकपालकौ** = सम्पूर्ण लोकका एक मात्र रक्षक
**सप्रातराशौ** = बिहान खाने खाजा बोकेका
**तौ** = ती दुई श्रीकृष्ण र बलराम
**वत्सपालकौ** = बाच्छा चराउने गोठालो
**भूत्वा** = भएर
**गोवत्सान्** = गाईका बाच्छाहरू
**चारयन्तौ** = चराउँदै
**विचेरतुः** = वनमा डुल्न थाल्नुभयो

**वाक्यार्थ–** सम्पूर्ण लोकका एक मात्र रक्षक श्रीकृष्ण-बलराम गोठालो भएर बिहान खाने खाजा बोकेर गाईका बाच्छाहरू चराउँदै वनमा डुल्न थाल्नुभयो।

**स्वं स्वं वत्सकुलं सर्वे पाययिष्यन्त एकदा।**
**गत्वा जलाशयाभ्याशं पाययित्वा पपुर्जलम्॥ ४६॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**सर्वे** = ती सबै गोपहरू
**स्वं स्वं** = आफ्ना-आफ्ना
**वत्सकुलं** = बाच्छाका समूहलाई
**पाययिष्यन्तः** = पानी पियाउने इच्छा गरी
**जलाशयाभ्याशं** = जलाशयको नजिकमा
**गत्वा** = गएर
**जलम्** = पानी (बाच्छाहरूलाई)
**पाययित्वा** = पियाएर
**पपुः** = आफूले पनि पिए

**वाक्यार्थ–** एक दिन, सबै गोपहरू आ-आफ्ना बाच्छाहरूलाई पानी पियाउने इच्छाले

जलाशयको नजिकमा गए, त्यहाँ पुगेर उनीहरूले बाच्छाहरूलाई पानी पियाए र आफूहरूले पनि पानी पिए।

**ते तत्र ददृशुर्बाला महासत्त्वमवस्थितम्।**
**तत्रसुर्वज्रनिर्भिन्नं गिरेः शृङ्गमिव च्युतम्॥ ४७॥**

**पदार्थ–**
**ते** = ती
**बालाः** = बालकहरूले
**तत्र** = त्यस जलाशयको तीरमा
**अवस्थितम्** = बसेको
**वज्रनिर्भिन्नं** = इन्द्रको वज्रले काटिएर
**च्युतम्** = झरेको
**गिरेः** = पहाडको
**शृङ्गम् इव** = टाकुरो झैं
**महासत्त्वम्** = ठुलो शरीर भएको प्राणीलाई
**ददृशुः** = देखे
**तत्रसुः** = डराए

**वाक्यार्थ–** पानी पिएपछि ती गोपबालकहरूले जलाशयको तीरमा बसिरहेको डरलाग्दो विशाल शरीर भएको विचित्रको प्राणीलाई देखे। इन्द्रको वज्रले काटिएर झरेको पहाडको टाकुरो जस्तो त्यो प्राणीलाई देखेर उनीहरू डराए।

**स वै बको नाम महानसुरो बकरूपधृक्।**
**आगत्य सहसा कृष्णं तीक्ष्णतुण्डोऽग्रसद् बली॥ ४८॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**बकरूपधृक्** = बकुल्लोको रूप धारण गरेको
**बको नाम** = बकासुर नामको
**तीक्ष्णतुण्डः** = तिखो मुख (चुच्चो) भएको
**बली** = ज्यादै बलियो
**सः** = त्यो
**महान्** = ठुलो
**असुरः** = दैत्यले
**सहसा** = अचानक (छिटो-छिटो)
**आगत्य** = आएर
**कृष्णं** = श्रीकृष्णलाई
**अग्रसत्** = मुखमा हाल्यो

**वाक्यार्थ–** बकुल्लोको रूप धारण गरेको, तिखो चुच्चो भएको बकासुर नामको अत्यन्त बलशाली ठुलो त्यस असुरले छिटो-छिटो आएर श्रीकृष्णलाई मुखमा हाल्यो।

**कृष्णं महाबकग्रस्तं दृष्ट्वा रामादयोऽर्भकाः।**
**बभूवुरिन्द्रियाणीव विना प्राणं विचेतसः॥ ४९॥**

**पदार्थ–**
**रामादयः** = बलराम आदि
**अर्भकाः** = बालकहरूले
**कृष्णं** = श्रीकृष्णलाई
**महाबकग्रस्तं** = ठुलो बकुल्लाले मुखमा हालेको
**दृष्ट्वा** = देखेर
**प्राणं विना** = प्राण विनाका
**इन्द्रियाणि इव** = इन्द्रियहरू झैं
**विचेतसः** = अचेत
**बभूवुः** = भए

**वाक्यार्थ–** श्रीकृष्णलाई त्यो ठुलो बकुल्लाले मुखमा हालेको देखेर बलराम आदि गोप बालकहरू प्राण निस्किएर गएपछि चेष्टाहीन भएका इन्द्रियहरू झैँ अचेत भए।

**तं तालुमूलं प्रदहन्तमग्निवद् गोपालसूनुं पितरं जगद्गुरोः।**
**चच्छर्द सद्योऽतिरुषाक्षतं बकस्तुण्डेन हन्तुं पुनरभ्यपद्यत॥ ५०॥**

**पदार्थ–**
**तालुमूलं** = बकुल्लोको तालु (दाँतभन्दा पछाडिको भाग)लाई
**अग्निवत्** = आगोले झैँ
**प्रदहन्तम्** = डढाइरहेका
**जगद्गुरोः** = जगत्का गुरु (पिता) ब्रह्माजीका पनि
**पितरं** = पिता
**गोपालसूनुं** = नन्दका पुत्र भएका
**तं** = ती श्रीकृष्णलाई
**बकः** = बकुल्लोले
**सद्यः** = तुरुन्तै
**चच्छर्द** = बाहिर निकाल्यो
**अक्षतं** = चोट केही नलागेका श्रीकृष्णलाई
**अतिरुषा** = अत्यन्तै क्रोधपूर्वक
**पुनः** = फेरि
**तुण्डेन** = चुच्चोले
**हन्तुं** = मार्नलाई
**अभ्यपद्यत** = नजिकमा गयो

**वाक्यार्थ–** जगत्का पिता ब्रह्माजीका पनि पिता अनि नन्दका पुत्र भगवान् श्रीकृष्ण बकासुरको तालुको तल्तिर पुग्नुभयो। आगोले झैँ बकासुरलाई डढाइरहनुभएका भगवान् श्रीकृष्णलाई बकासुरले तुरुन्तै मुखबाहिर निकाल्यो। भगवान्लाई घाउ-चोट कतै पनि लागेको थिएन। त्यसपछि अत्यन्तै रिसाएको बकासुर श्रीकृष्णलाई मार्न भनेर फेरि श्रीकृष्णको नजिकमा गयो।

**तमापतन्तं स निगृह्य तुण्डयोर्दोर्भ्यां बकं कंससखं सतां पतिः।**
**पश्यत्सु बालेषु ददार लीलया मुदावहो वीरणवद् दिवौकसाम्॥ ५१॥**

**पदार्थ–**
**सतां** = सज्जनहरूका
**पतिः** = रक्षक
**दिवौकसाम्** = देवताहरूका
**मुदावहः** = आनन्दप्रदायक
**सः** = ती श्रीकृष्णले
**आपतन्तं** = वेगपूर्वक आइरहेको
**कंससखं** = कंसको साथी
**तं** = त्यो
**बकं** = बकासुरलाई
**दोर्भ्यां** = दुबै हातद्वारा
**तुण्डयोः** = दुई ओटै चुच्चोमा
**निगृह्य** = समातेर
**बालेषु** = गोप बालकहरूले
**पश्यत्सु** = हेर्दा-हेर्दै
**लीलया** = सजिलैसँग
**वीरणवत्** = उशीर (एक किसिमको शर)लाई झैँ
**ददार** = च्यात्नुभयो

**वाक्यार्थ–** सज्जनहरूका रक्षक र देवताहरूका आनन्दप्रदाता भगवान् श्रीकृष्णले आफूलाई मार्न भनेर वेगपूर्वक आएको बकासुरलाई आफ्ना दुबै हातले त्यसको दुई ओटै चुच्चोलाई च्याप्प समात्नुभयो अनि गोप बालकहरूले हेर्दा-हेर्दै उशीर (एक किसिमको शर)लाई झैँ च्यातिदिनुभयो।

**विवरण–** यहाँ भगवान्ले बकासुरको वध गर्नुभएको प्रसङ्ग छ। वल्लभाचार्य भन्नुहुन्छ– **दम्भात्मकं बकम्** अर्थात् बकासुर भनेको दम्भ हो, त्यसलाई भगवान्ले नष्ट गर्नुभयो। बकासुरले भगवान्लाई मुखभित्रै हालेको र आक्रमण गरेको देखाइएको छ। यो बकासुर कसरी यति

शक्तिशाली भयो ? **भगवदीयानां दोषत्वात्** अर्थात् बकासुर भनेको भगवान्का साथी ती गोपबालकहरूभित्र रहेको दम्भरूपी दोष हो। भगवान्का सम्बन्धीहरूमा दोष भएकाले त्यसले भगवान्लाई पनि ढाक्न या छोप्न खोजे जैँ भयो। भगवान् श्रीकृष्ण सत्स्वरूप अनि परमानन्दरूप हुनुहुन्छ। दम्भमा देखाओटी असत् व्यवहार हुन्छ अनि अर्को भित्री स्वार्थ या लोभ पनि हुन्छ। यी दुई नै दम्भरूप बकासुरका चुच्चा हुन्। लोभले आनन्दलाई अनि असत्ले सत्लाई तिरोहित गरिदिन्छ। त्यही बताउन बकासुरको दुबै चुच्चाले भगवान्लाई प्रहार गरेको देखाइएको हो। यस्तो आफ्नै सम्बन्धी, साथीहरूमा रहेको दम्भरूप बकासुरको वध गरी भगवान्ले ती गोप बालकहरूको चित्तलाई आफूमा निरोध गर्नुभयो।

**तदा बकारिं सुरलोकवासिनः समाकिरन् नन्दनमल्लिकादिभिः।**
**समीडिरे चानकशङ्खसंस्तवैस्तद्वीक्ष्य गोपालसुता विसिस्मिरे ॥ ५२ ॥**

**पदार्थ–**
**तदा** = त्यस वेला
**सुरलोकवासिनः** = स्वर्गवासी देवताहरूले
**नन्दनमल्लिकादिभिः** = नन्दनवनका वेली आदि अनेक पुष्पहरूद्वारा
**बकारिं** = बकका शत्रु भगवान् श्रीकृष्णमाथि
**समाकिरन्** = वृष्टि गरे
**आनकशङ्खसंस्तवैः च** = नगरा, शङ्ख बजाउँदै र स्तोत्र गाउँदै
**समीडिरे** = स्तुति गरे
**तत्** = देवताहरूले त्यसो गरेको
**वीक्ष्य** = देखेर
**गोपालसुताः** = गोपका पुत्रहरू
**विसिस्मिरे** = आश्चर्यचकित भए

**वाक्यार्थ–** त्यस वेला स्वर्गवासी देवताहरूले भगवान् श्रीकृष्णमाथि नन्दनवनका वेली आदि अनेक पुष्पहरूको वृष्टि गरे, नगरा र शङ्ख बजाए साथै विभिन्न किसिमका स्तुतिहरू पनि गरे। देवताहरूले कृष्णको पूजा गरेको देखेर गोपबालकहरू छक्क परे।

**मुक्तं बकास्यादुपलभ्य बालका रामादयः प्राणमिवैन्द्रियो गणः।**
**स्थानागतं तं परिरभ्य निर्वृताः प्रणीय वत्सान् व्रजमेत्य तज्जगुः ॥ ५३ ॥**

**पदार्थ–**
**रामादयः** = बलराम आदि
**बालकाः** = गोप बालकहरू
**बकास्यात्** = बकुल्लोको मुखबाट
**मुक्तं** = निक्लिनुभएका
**स्थानागतं** = आफ्नै ठाउँमा आउनुभएका
**तं** = ती श्रीकृष्णलाई
**उपलभ्य** = पाएर
**परिरभ्य** = अङ्कमाल गरेर
**प्राणम्** = प्राणलाई पाएको
**ऐन्द्रियः गणः इव** = इन्द्रियगण जैँ
**निर्वृताः** = स्वस्थ भए
**वत्सान्** = बाच्छाहरूलाई
**प्रणीय** = जम्मा गरेर
**व्रजम्** = व्रजमा
**एत्य** = आएर
**तत्** = बकासुरवधको त्यो प्रसङ्ग
**जगुः** = सुनाए

**वाक्यार्थ–** बकासुरको मुखबाट बाँचेर आफ्नै अगाडि श्रीकृष्णलाई आएको देखेर बलराम समेतका गोप बालकहरू अति प्रसन्न भए। प्राणको उपस्थितिले इन्द्रियहरू सचेष्ट भए जैँ अघि

अचेत भएका उनीहरू स्वस्थ भए। उनीहरू सबैले श्रीकृष्णसँग आनन्दपूर्वक अङ्कमाल गरे। त्यसपछि सायङ्कालमा सबै गाईबाच्छाहरूलाई जम्मा गरेर व्रज फर्किएपछि उनीहरूले बकासुरको वधको प्रसङ्ग सबैलाई सुनाए।

**श्रुत्वा तद् विस्मिता गोपा गोप्यश्चातिप्रियादृताः।**
**प्रेत्यागतमिवौत्सुक्यादैक्षन्त तृषितेक्षणाः॥ ५४॥**

**पदार्थ–**
**तत्** = (गोपहरूले वर्णन गरेको) त्यो घटना
**श्रुत्वा** = सुनेर
**विस्मिताः** = आश्चर्यचकित भएका
**अतिप्रियादृताः** = अत्यन्त प्रेम र आदरभावले युक्त भई
**तृषितेक्षणाः** = (श्रीकृष्णलाई हेर्न) प्यासी आँखा भएका
**गोपाः** = गोप र
**गोप्यः च** = गोपिनीहरूले पनि
**प्रेत्य** = मरेर
**आगतम् इव** = आएका झैँ गरी
**औत्सुक्यात्** = उत्सुकतापूर्वक
**ऐक्षन्त** = (श्रीकृष्णलाई) हेरे

**वाक्यार्थ–** बकासुरवधको घटना सुनेर छक्क परेका अनि श्रीकृष्णलाई हेर्नका लागि प्यासी आँखा भएका गोप-गोपिनीहरू अत्यन्त प्रेम र आदरभावले युक्त भई मरेर फेरि बाँचेर आएझैँ गरी श्रीकृष्णलाई उत्सुकतापूर्वक हेर्न लागे।

**अहो बतास्य बालस्य बहवो मृत्यवोऽभवन्।**
**अप्यासीद् विप्रियं तेषां कृतं पूर्वं यतो भयम्॥ ५५॥**

**पदार्थ–**
**अहो बत** = आश्चर्य छ
**अस्य** = यी
**बालस्य** = बालक श्रीकृष्णको
**बहवः** = धेरै
**मृत्यवः** = मृत्युका कारणहरू
**अभवन्** = भए
**अपि** = तर पनि
**तेषां** = तिनीहरूकै
**विप्रियं** = अनिष्ट
**आसीत्** = भयो
**यतः** = किनभने (तिनीहरूले)
**पूर्वं** = अगाडि (धेरैको)
**भयम्** = भय (अनिष्ट)
**कृतं** = गरे

**वाक्यार्थ–** (गोपगोपिनीहरूले एक-आपसमा भने–) अहो! आश्चर्य छ। यी बालक श्रीकृष्णलाई धेरैले धेरै पटक मार्ने प्रयास गरे तर तिनीहरूकै अनिष्ट भयो, यसको कारण के हो भने उनीहरूले त्यसभन्दा पहिला पनि धेरैको अनिष्ट गरेका थिए।

**अथाप्यभिभवन्त्येनं नैव ते घोरदर्शनाः।**
**जिघांसयैनमासाद्य नश्यन्त्यग्नौ पतङ्गवत्॥ ५६॥**

**पदार्थ–**
**ते** = ती
**घोरदर्शनाः** = देख्दै डरलाग्दा असुरहरू (नै हुन्)
**अथ अपि** = तर पनि
**एनं** = यी बालक श्रीकृष्णलाई
**न एव अभिभवन्ति** = कत्ति पनि पराजित गर्न सक्दैनन्
**जिघांसया** = मार्ने इच्छाले

**एनम्** = यी श्रीकृष्णको समीपमा
**आसाद्य** = आएर
**अग्नौ** = आगोमा
**पतङ्गवत्** = पुतली झैं
**नश्यन्ति** = नष्ट हुन्छन्

**वाक्यार्थ–** ती हेर्दै डरलाग्दा प्राणीहरू असुरहरू नै हुन् तापनि यी बालक श्रीकृष्णलाई तिनीहरूले केही पनि गर्न सक्दैनन्। बरू यिनलाई मार्ने इच्छाले आउँदा उनीहरू आगोमा परेर पुतली नष्ट भए झैं नष्ट हुन्छन्।

**अहो ब्रह्मविदां वाचो नासत्याः सन्ति कर्हिचित्।**
**गर्गो यदाह भगवानन्वभावि तथैव तत्॥ ५७॥**

**पदार्थ–**
**अहो** = अहो
**ब्रह्मविदां** = ब्रह्मज्ञानी महात्माहरूका
**वाचः** = वाणीहरू
**कर्हिचित्** = कहिल्यै पनि
**असत्याः** = झुट
**न सन्ति** = हुँदैनन्
**भगवान्** = भगवान्
**गर्गः** = गर्गले
**यत्** = जे
**आह** = भन्नुभएको थियो
**तत्** = त्यो
**तथा एव** = त्यही अनुसार
**अन्वभावि** = अनुभव गरियो

**वाक्यार्थ–** निश्चय पनि ब्रह्मज्ञानी महात्माहरूले भनेका कुराहरू कहिल्यै पनि झुट हुँदैनन्। भगवान् गर्गले भन्नुभएको कुरा पूर्ण रूपमा सत्य भएको अनुभव भयो।

**विवरण–** यहाँ गोप-गोपीहरू श्रीकृष्णको नामकरण संस्कारको दिन गर्गले भन्नुभएको कुरा संझदैछन्। गर्गले भनेका थिए– **तस्मान्नन्दात्मजोऽयं ते नारायणसमो गुणैः** (हे नन्द ! तिम्रा यी छोरा अनेक गुणहरूले, ऐश्वर्यले, कीर्ति र प्रभावले पनि भगवान् नारायणजत्तिकै छन्)।

माथिका तीन श्लोकमा भगवान्का तामस, राजस र सात्त्विक तीन थरी भक्तहरूको भाव देखाइएको छ। पहिलो श्लोकको भाव गोपिनी र यशोदाको हो, जो भगवान्मा अत्यन्त आसक्त भएकाले बाहिरी संसारलाई र स्वयं भगवान्को भगवत्तालाई पनि नचिन्ने स्थितिमा पुगेका छन्। उनीहरूले श्रीकृष्णमा प्रेमको दृष्टि मात्र राखी अहो यो बच्चाको नजिक कतिचोटि मृत्यु आइसक्यो, ती राक्षसहरूले **पूर्वं भयं कृतम्** अर्थात् पहिले प्राणीहरूलाई दुःख दिएकाले त्यही पापका कारण उनीहरूको नै अनिष्ट भयो, हाम्रो श्रीकृष्णलाई केही भएन भन्ने भाव व्यक्त गरेका छन्। अर्को श्लोकमा भगवान्का राजसभक्त उहाँका गोप साथीहरूको भाव देखाइएको छ, जहाँ श्रीकृष्णको प्रेमसँग पराक्रमको पनि स्फुरण पाइन्छ। तर उनीहरूमा श्रीकृष्णको भगवत्ताको स्फुरण छैन र स्नेहसम्बन्ध मात्रै प्रकाशित छ। उनीहरूले श्रीकृष्णलाई मार्न आएका राक्षसहरू आगोमा परेका पुतली झैं आफैं नष्ट भएको बताएका छन्। अर्को श्लोकमा नन्द आदि सात्त्विक भक्तहरूको भाव छ, जसमा गर्गको उपदेश अनुसार श्रीकृष्ण नारायणसमान हुन् भन्ने ज्ञानको स्फुरण छ। त्यसैले नन्दले गर्गको वचनलाई नै सम्झँदै श्रीकृष्णलाई दुष्टहरूले केही बिगार्न नसक्ने विचार व्यक्त गरेका छन्।

**इति नन्दादयो गोपाः कृष्णरामकथां मुदा ।**
**कुर्वन्तो रममाणाश्च नाविन्दन् भववेदनाम् ॥ ५८ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**नन्दादयः** = नन्द आदि
**गोपाः** = गोपहरू
**कृष्णरामकथां** = श्रीकृष्ण र बलरामको कुरा
**कुर्वन्तः** = गर्दै
**मुदा** = आनन्दपूर्वक
**रममाणाः च** = रमाउँदै
**भववेदनाम्** = संसारको ताप (दुःख)लाई
**न अविन्दन्** = थाहै पाएनन्

**वाक्यार्थ–** यसरी नन्द आदि गोपहरू श्रीकृष्ण र बलरामको कथा भन्दै उनीहरूसँगै आनन्दपूर्वक रमाउन थाले। श्रीकृष्ण र बलरामसँगै रमाएर बस्दा उनीहरूलाई संसारको दुःखको पत्तै भएन।

**एवं विहारैः कौमारैः कौमारं जहतुर्व्रजे ।**
**निलायनैः सेतुबन्धैर्मर्कटोत्प्लवनादिभिः ॥ ५९ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**निलायनैः** = आँखा बन्द गर्ने
**सेतुबन्धैः** = पुल बाँधेर खेल्ने
**मर्कटोत्प्लवनादिभिः** = बाँदर झैँ उफ्रिएर खेल्ने खेल आदिद्वारा
**कौमारैः** = कुमारावस्थामा खेलिने
**विहारैः** = खेलहरू खेलेर
**व्रजे** = व्रजमा (दुबैले)
**कौमारं** = कुमार अवस्था
**जहतुः** = बिताउनुभयो

**वाक्यार्थ–** यसरी श्रीकृष्ण र बलरामले गोप साथीहरूसँग आँखा चिम्लिएर खेल्ने, पुल बनाएर खेल्ने, बाँदरले झैँ उफ्रिएर खेल्ने आदि विभिन्न प्रकारका कुमारावस्थामा खेलिने खेलहरू खेलेर व्रजमा आफ्नो कुमारावस्था बिताउनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**वत्सवकवधो नामैकादशोऽध्यायः ॥ ११ ॥**

# अथ द्वादशोऽध्यायः

## अघासुरको वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**क्वचिद् वनाशाय मनो दधद् व्रजात्**
**प्रातः समुत्थाय वयस्यवत्सपान् ।**
**प्रबोधयञ्छृङ्गरवेण चारुणा**
**विनिर्गतो वत्सपुरःसरो हरिः ॥ १ ॥**

**पदार्थ–**
**क्वचित्** = कुनै दिन
**वनाशाय** = वनमा नै भोजन गर्ने
**मनः** = मन
**दधत्** = गर्नुभएका
**हरिः** = भगवान् श्रीकृष्णले
**प्रातः** = बिहानै
**समुत्थाय** = उठेर
**चारुणा** = मनोहर
**शृङ्गरवेण** = सिँगले बनेको बाजाको ध्वनिद्वारा
**वयस्यवत्सपान्** = गोप साथीहरूलाई
**प्रबोधयन्** = वन जाने सूचना दिँदै
**वत्सपुरःसरः** = बाच्छाहरूलाई अगाडि लगाएर
**व्रजात्** = व्रजबाट
**विनिर्गतः** = निस्कनुभयो

**वाक्यार्थ–** एक दिन भगवान् श्रीकृष्णलाई वनमा भोजन गर्न मन लाग्यो। त्यसैले बिहान चाँडै उठेर सिँगले बनेको बाजा बजाएर त्यसको ध्वनिद्वारा आफ्ना सबै गोप साथीहरूलाई वन जाने सूचना दिँदै बाच्छाहरूलाई अगाडि लगाएर उहाँ व्रजबाट निस्कनुभयो।

**विवरण–** अघासुरको वधदेखि ब्रह्मस्तुतिसम्मका तीन अध्यायलाई कतिपयले पुराणान्तरको कथाप्रसङ्ग मानेका छन्। यस कथांशलाई श्रीधर स्वामीले राम्रोसँग व्याख्या गर्नुभएको छ। **कौमारं जहतुर्व्रजे** अर्थात् भगवान्ले व्रजमा बाल्यावस्था बिताउनुभयो भनी अघिल्लो अध्यायमा बताएपछि पन्ध्रौं अध्यायको **ततश्च पौगण्डवयः** अर्थात् त्यसपछि भगवान्ले पौगण्ड अवस्थाको लीला गर्नुभयो भन्ने कथा नै प्रसङ्गतः मिल्न आउने हुनाले बीचका तीन अध्याय प्रक्षिप्त हुन् भन्ने कतिपय टीकाकारहरूको मत रहेको छ। उनीहरूले भगवान्का लीलाहरूलाई आफ्नो विचार अनुसार अनेक भाग लगाउँदा यी तीन अध्यायका लीला अलि असामान्य भएकाले त्यहाँभित्र अमिल्दो हुने ठैं देखी यो व्याख्या गरेका हुन्। तर व्याख्याकारले भगवान्को लीला जस्तो भयो, त्यसै अनुसार त्यसको व्याख्या गर्ने हो, आफ्नो व्याख्या या विचारको क्षेत्रभित्र राम्रोसँग मिलेन भनेर त्यो लीलाप्रसङ्गलाई नै असत्य मान्नु उचित होइन। भगवान्का अनन्त लीलाहरूको वैचित्र्य र उद्देश्यलाई पूरा निरूपण गर्न व्यक्तिको सीमित बुद्धि, कसरी सफल हुन्छ र ? ठिक-ठिक नियममा बाँधी निरूपण गर्न नसक्नु भगवान्को अप्रमेय लीलाको भूषण नै हो, दूषण होइन। भगवान्ले

स्वेच्छा अनुसार अलौकिक एवं विचित्र लीलाहरूको प्रकाश गर्नुहुन्छ। प्रायः सबै टीकाकारहरूले यी तीन अध्यायभित्र रहेका अंशहरूलाई पनि भागवतको अंशभित्रै मानी व्याख्या गर्नुभएको छ।

श्रीधर स्वामी बकासुरको वध भएपछि अघासुरको वध भएको लीलाप्रसङ्गलाई जोड्दै भन्नुहुन्छ– बकासुरको मुखभित्र एक्लै भगवान् मात्र पस्नुभयो। यस प्रसङ्गमा भने ऊन् लीलाकौतुकको विस्तारका लागि भगवान् आफ्ना साथीहरूसहित अघासुरको मुखभित्र पस्नुभएको छ। कुमार अवस्था भनेको ५ वर्षसम्मको अवस्था हो। ६ वर्षदेखि १० वर्षसम्मलाई पौगण्ड अवस्था र त्यसपछि ११ वर्षदेखि १५ वर्षसम्म किशोर अवस्था हुन्छ। १६ वर्षदेखि युवावस्था सुरु हुन्छ। अघिल्लो अध्यायको अन्त्यमा कुमार अवस्था बिताउनुभयो भनेपछि सिधै पौगण्डावस्थाको वर्णन नगरी बीचमा किन यी तीन अध्याय बताइयो ? यो शङ्काको उत्तर यही बाह्रौं अध्यायको सैंतीसौं श्लोकमा दिइएको छ। भगवान्ले अघासुरलाई कुमार अवस्थामा नै मार्नुभएको थियो, तर त्यसपछि व्रजका गोप साथीहरूलाई ब्रह्माजीले एक वर्षसम्म लुकाइदिनुभएकाले उनीहरूले एक वर्षपछि पौगण्ड अवस्थामा मात्र त्यो अघासुर मरेको खबर घर गई सुनाएका छन्। यसैले कुमारलीलाको समाप्ति बताई पौगण्डलीला बताउन खोज्दा बीचमा एक वर्षसम्मको यो आश्चर्यमय घटनालाई सम्झिई फेरि नयाँ वर्णन सुरु गरे झैं शुकदेवले यो प्रसङ्ग बताउन सुरु गर्नुभएको हो। भागवतका उपदेशभरिमा दुई प्रसङ्गलाई सुनाउँदा श्रीशुकदेवको मन वासुदेवमा निमग्न भएको र उहाँले बल्ल-बल्ल बाह्य चेतनालाई सम्हाल्दै त्यो चरित्र सुनाउनुभएको वर्णन पाइन्छ। एउटा भगवान्को श्रीदामासँग हार्दिक प्रेम भएको लीला (दशम स्कन्ध ८० अध्याय, ५२ श्लोक) र अर्को सर्वात्मा भगवान्ले सर्वरूप धारण गर्नुभएको यही प्रसङ्ग। यहाँ भगवान्ले एक-आपसमा खाजा बाँड्दै खानुभएको, खाजा खाँदा-खाँदै त्यसलाई हातैमा लिई गाई खोज्न दौडिनुभएको, ब्रह्माजीले गाई-गोप सबैलाई लुकाएको थाहा पाएपछि सबै रूपमा आफैं बन्नुभएको समेतका अनौठा लीलाचरित्रहरू पाइन्छन्। सबभन्दा मुख्य कुरा यहाँ भगवान्ले कुनै पनि बाह्य उपादानको सहायताविना सम्पूर्ण गाई, बाच्छा, तिनलाई बाँध्ने डोरी, गोपाल, तिनका लौरा, लुगा र ती सबैका स्वभाव-संस्कार आदि समेतको रूप लिनुभएको देखाइएको छ। भगवान् कुनै अपेक्षाविना पनि समस्त जीव र तिनका संस्कारहरूको समेत रूप लिन सक्नुहुन्छ भनी उहाँको अकुण्ठित ऐश्वर्यलाई यस प्रसङ्गले सिद्ध गरेको छ। अद्वैत सिद्धान्त अनुसार यो जगत् ब्रह्मको विवर्त हो, यसैलाई विवर्तवाद भनिन्छ। यस वादलाई स्वीकार नगर्नेहरू यस लीलालाई स्वीकार नगर्न सक्छन्, तर **वासुदेवः सर्वम्** अर्थात् सबै जगत् वासुदेवरूप छ भन्ने ज्ञानी भक्तहरूका लागि सर्वरूप धारण गर्ने लीला ठुलो दृष्टान्त र आलम्बन हो। वल्लभाचार्यको शुद्धाद्वैत सिद्धान्तमा पनि जीव, परमात्माको अविकृत चिदंशबाट आविर्भूत भएको हो भन्ने मानिन्छ। त्यसको सप्रमाण पुष्टि भगवान्को यस लीलाद्वारा हुन्छ। निरोधलीलाको बीचमा यो अद्‌भुत लीलाको सङ्गति पनि नहुने होइन। भगवान् सर्वरूपधारी भइसकेपछि व्रजवासीहरूको आफ्ना सबै छोराहरूमा अनि गाईबाच्छाहरूमा पनि श्रीकृष्णमा जत्तिकै असीम प्रेमको उदय भयो– **शनैर्निःसीम ववृधे** (भागवत, १०/१३/२६)। व्रजवासीहरूले सर्वरूपधारी श्रीकृष्णलाई नचिने पनि सबैतिर उहाँलाई नै देख्दथे र अनुभव गर्दथे। छोरा, गाईबाच्छा आदि अनेक रूपमा आई

उहाँले सबैको चित्तलाई पूर्णरूपमा आफैँमा निरुद्ध गर्नुभएको थियो। भागवतभित्रकै साक्ष्यको आधारमा पनि अघासुरवधको लीला भएकै हो भन्ने सिद्ध हुन्छ। नारदजीले श्रीकृष्णको लीलालाई संक्षिप्त रूपमा बताउने क्रममा र सूतजीले भागवतको अन्तमा सारांश बताउने क्रममा पनि अघासुर वध बताउन छुटेकाले व्याख्याकारहरू झुक्किएका हुन सक्छन्, तर गोपीगीतको प्रसङ्गमा गोपिनीहरूले **व्यालराक्षसात्** अर्थात् अजिङ्गररूपी अघासुरबाट जोगाउनुभएको भनेर श्रीकृष्णको प्रार्थना गरी यसलाई प्रामाणिक रूपमा पुष्टि गरेका छन्।

वेदान्तसिद्धान्तमा दुई अवस्थाको बीचको समय वा सन्धिकालमा परमात्माको प्रकाश हुन्छ भन्ने मानिन्छ। जाग्रत् र स्वप्नको बीच, सुषुप्ति र जाग्रत्को बीच या एउटा ज्ञानपछि अर्को ज्ञान उदय नभएको बीचको समयमा परमात्माको भान हुन्छ। अन्तःकरणको वृत्तिरूप एउटा ज्ञान हरायो र अर्को ज्ञानको उदय भएको छैन, त्यो वेला अन्तःकरणमा कुनै विषयको भान नभएकाले साक्षी आत्माको प्रकाश हुन्छ। यसै गरी भगवान् श्रीकृष्णको कुमार अवस्थाको समाप्ति र पौगण्ड अवस्थाको सुरुवातको बीचको अन्तराल अवस्थामा उहाँको सर्वरूपता सबैसामु प्रकट भएको हो। बाललीला र पौगण्डलीलाको बीचमा सन्धिलीलाको रूपमा अघासुरवधको लीला र गोपबालक, गाई, बाच्छा आदि सबै रूपमा भगवान् श्रीकृष्ण नै देखिने लीला हुनु उचित देखिन्छ।

**तेनैव साकं पृथुकाः सहस्रशः**
**स्निग्धाः सुशिग्वेत्रविषाणवेणवः।**
**स्वान् स्वान् सहस्रोपरिसङ्ख्ययान्वितान्**
**वत्सान् पुरस्कृत्य विनिर्ययुर्मुदा ॥ २॥**

**पदार्थ–**
**स्निग्धाः** = श्रीकृष्णमा अतिशय प्रेम भएका
**सुशिग्वेत्रविषाणवेणवः** = खाजाका पोका, बेतको लौरो, सिँगको बाजा र बाँसुरी बोकेका
**सहस्रशः** = हजारौँ
**पृथुकाः** = गोप बालकहरू
**सहस्रोपरिसङ्ख्यया** = हजारभन्दा धेरै सङ्ख्याले
**अन्वितान्** = युक्त भएका
**स्वान् स्वान्** = आ-आफ्ना
**वत्सान्** = बाच्छाहरूलाई
**पुरस्कृत्य** = अगाडि लगाएर
**मुदा** = हर्षपूर्वक
**तेन साकं एव** = उहाँ (श्रीकृष्ण)सँग नै
**विनिर्ययुः** = व्रजबाट निस्किए

**वाक्यार्थ–** श्रीकृष्णमा अतिशय प्रेम भएका गोप बालकहरू उहाँको वन जाने सङ्केत पाउनासाथ खाजाका पोका, बेतको लौरो, सिँगको बाजा र बाँसुरी लिएर हजारौँ गोप बालकहरू हजारौँ सङ्ख्यामा रहेका आ-आफ्ना बाच्छाहरूलाई अगाडि लगाएर श्रीकृष्णसँगै व्रजबाट निस्किए।

**कृष्णवत्सैरसङ्ख्यातैर्यूथीकृत्य स्ववत्सकान्।**
**चारयन्तोऽर्भलीलाभिर्विजह्रुस्तत्र तत्र ह ॥ ३॥**

**पदार्थ–**
**असङ्ख्यातैः** = असङ्ख्य
**कृष्णवत्सैः** = श्रीकृष्णका बाच्छाहरूसँग
**स्ववत्सकान्** = आफ्ना बाच्छाहरूलाई
**यूथीकृत्य** = एकै ठाउँमा मिलाएर
**चारयन्तः** = गाई चराउँदै गोपहरूले
**अर्भलीलाभिः** = बालोचित क्रीडाहरूद्वारा
**ह** = निश्चय नै
**तत्र तत्र** = त्यहाँ–त्यहाँ (वन–वनमा)
**विजह्रुः** = घुम्न लागे

**वाक्यार्थ–** श्रीकृष्णका असङ्ख्य गाईबाच्छाहरूसँग आफ्ना गाईबाच्छाहरू मिलाएर गाई चराउँदै ती गोपहरू वन–वनमा बालोचित क्रीडाहरू गर्दै घुम्न लागे।

**फलप्रबालस्तवकसुमनःपिच्छधातुभिः।**
**काचगुञ्जामणिस्वर्णभूषिता अप्यभूषयन्॥ ४॥**

**पदार्थ–**
**काचगुञ्जामणिस्वर्णभूषिताः अपि** = काँच, राती गेडी, मणि र सुनका गहनाद्वारा अलङ्कृत भए पनि (पुनः आफूलाई)
**फलप्रबालस्तवकसुमनःपिच्छ-धातुभिः** = फल, नयाँ–नयाँ पालुवा, फूलका गुच्छा, फूल, मयूरको प्वाँख र गैरिक आदि धातुद्वारा
**अभूषयन्** = अलङ्कृत गरे

**वाक्यार्थ–** सबै गोपहरूले पहिल्यै काँच, राती गेडी, मणि र सुनका गहनाहरू लगाएका भए पनि वनमा उनीहरूले विभिन्न फल, नयाँ–नयाँ पालुवा, फूलका गुच्छा, अनेक फूल, मयूरको प्वाँख र गेरु वर्णका धातुहरू लगाएर आफूहरूलाई पुनः झकिझकाउ बनाए।

**मुष्णन्तोऽन्योन्यशिक्यादीन् ज्ञातानाराच्च चिक्षिपुः।**
**तत्रत्याश्च पुनर्दूराद्धसन्तश्च पुनर्ददुः॥ ५॥**

**पदार्थ–**
**अन्योन्यशिक्यादीन्** = एउटाले अर्काको खाजाको पोका, लौरो, बाँसुरी आदि
**मुष्णन्तः** = चोर्दै
**ज्ञातान्** = जसको सामान चोरिएको हो उसले यो मेरो वस्तु हो भनेर थाहा पायो भने त्यो वस्तुलाई
**आरात् च** = अर्कोले झन् टाढा
**चिक्षिपुः** = फ्याँक्दथे
**पुनः** = फेरि
**तत्रत्याः च** = त्यहाँ (फ्याँकिएको ठाउँमा) भएका अन्य बालकहरूले (त्यसलाई)
**दूरात्** = झन् टाढा (फ्याँक्दथे अनि)
**हसन्तः च** = हाँस्दै
**पुनः** = फेरि
**ददुः** = (त्यो वस्तु जसको हो उसैलाई) दिन्थे

**वाक्यार्थ–** एउटाले अर्काको खाजाको पोका, लौरो वा बाँसुरी कहिलेकाहीँ चोर्दथे र जसको सामान चोरिएको हो त्यो बालकले मेरो समान यसले चोर्‍यो भनेर थाहा पायो भने त्यो समानलाई अर्कोले फेरि टाढा फ्याँकिदिन्थ्यो, त्यो बालक सामान लिन दौडियो भने फेरि अर्कोले अर्कोतिर फ्याँकिदिन्थ्यो त्यसपछि फेरि ती बालकहरूले हाँस्दै त्यो सामान जसको हो उसैलाई दिन्थे।

**यदि दूरं गतः कृष्णो वनशोभेक्षणाय तम्।**
**अहं पूर्वमहं पूर्वमिति संस्पृश्य रेमिरे ॥ ६ ॥**

**पदार्थ–**
**यदि** = यदि
**वनशोभेक्षणाय** = वनको शोभा हेर्नका लागि
**कृष्णः** = श्रीकृष्ण
**दूरं** = टाढा
**गतः** = जानुभएको छ भने (ती गोपहरू)
**अहं पूर्वम्** = म पहिले
**अहं पूर्वम् इति** = म पहिले भनेर
**तम्** = उहाँ (श्रीकृष्ण)लाई
**संस्पृश्य** = छोएर
**रेमिरे** = रमाउँथे

**वाक्यार्थ–** यदि श्रीकृष्ण वनको शोभा हेर्नका लागि टाढा जानुभएको छ भने ती गोप बालकहरू म पहिले श्रीकृष्णलाई छुन्छु भनेर दौडँदै गएर उहाँलाई छुन्थे र रमाउँथे।

**केचिद् वेणून् वादयन्तो ध्मान्तः शृङ्गाणि केचन।**
**केचिद् भृङ्गैः प्रगायन्तः कूजन्तः कोकिलैः परे ॥ ७ ॥**

**पदार्थ–**
**केचित्** = कोही
**वेणून्** = बाँसुरी
**वादयन्तः** = बजाउँदै
**केचन** = कोही
**शृङ्गाणि** = सिँगको बाजा
**ध्मान्तः** = फुकेर बजाउँदै
**केचित्** = कोही
**भृङ्गैः** = भँवराहरूसँग
**प्रगायन्तः** = गाउँदै (भुँ भुँ गर्दै)
**परे** = अरू चाहिँ
**कोकिलैः** = कोइलीहरूसँग
**कूजन्तः** = कुहू-कुहू गरेर गाउँदै (रमाउँथे)

**वाक्यार्थ–** कोही बाँसुरी बजाउँथे, कोही सिँगको बाजा बजाउँथे, कोही भँवराहरूसँग भुँ-भुँ गरेर गुन्गुनाउँथे अनि कोही चाहिँ कोइलीको स्वरसँगै कुहू-कुहू गरेर गाउँदै रमाउँथे।

**विच्छायाभिः प्रधावन्तो गच्छन्तः साधुहंसकैः।**
**बकैरुपविशन्तश्च नृत्यन्तश्च कलापिभिः ॥ ८ ॥**

**पदार्थ–**
**विच्छायाभिः** = आकाशमा उडेका पक्षीको छायासँगै
**प्रधावन्तः** = दौडँदै
**हंसकैः** = हाँसहरूसँग
**साधु** = राम्ररी
**गच्छन्तः** = हिँड्दै
**बकैः** = बकुल्लाहरूसँग
**उपविशन्तः च** = उस्तै गरी बस्दै
**कलापिभिः** = मयूरहरूसँग
**नृत्यन्तः च** = नाच्दै (रमाउँथे)

**वाक्यार्थ–** कोही गोपबालकहरू आकाशमा उडेका पक्षीहरूको छायासँगै जमिनमा दौडँदै रमाउँथे, कोही हाँसहरूको गतिको अनुसरण गरेर हिँड्दथे, कोही बकुल्लाहरूसँग तिनीहरूको जस्तै आसनमा बसेर रमाइलो गर्दथे भने कोही चाहिँ मयूरहरूसँगसँगै नाचेर रमाउँथे।

**विकर्षन्तः कीशबालानारोहन्तश्च तैर्द्रुमान्।**
**विकुर्वन्तश्च तैः साकं प्लवन्तश्च पलाशिषु ॥ ९॥**

**पदार्थ–**
**कीशबालान्** = बाँदरका बच्चाहरूलाई
**विकर्षन्तः** = तान्दै
**तैः** = तिनीहरूसँगै
**द्रुमान्** = रुखहरूमा
**आरोहन्तः च** = चढ्दै
**तैः साकं** = तिनीहरूसँगै
**विकुर्वन्तः च** = (दाँत ङिच्याउने जस्ता) अङ्गविकारहरू प्रदर्शन गर्दै
**पलाशिषु** = वृक्षहरूमा
**प्लवन्तः च** = एउटा हाँगाबाट अर्को हाँगामा उफ्रिने गर्दै (रमाउँथे)

**वाक्यार्थ–** कोही बालकहरू बाँदरका बच्चाहरूलाई तान्दथे, कोही बाँदरहरूसँगै रुखमा चढ्दथे, कोही बाँदरले जस्तै गरेर दाँत ङिच्याउने आदि अङ्गविकारहरू प्रदर्शन गर्थे भने कोही चाहिँ रुखको एउटा हाँगाबाट अर्को हाँगामा उफ्रिएर रमाइलो गर्थे।

**साकं भेकैर्विलङ्घन्तः सरित्प्रस्रवसम्प्लुताः।**
**विहसन्तः प्रतिच्छायाः शपन्तश्च प्रतिस्वनान्॥ १० ॥**

**पदार्थ–**
**सरित्प्रस्रवसम्प्लुताः** = नदीको बगिरहेको पानीमा पौडी खेल्दै
**भेकैः साकं** = भ्यागुताहरूसँग
**विलङ्घन्तः** = उफ्रँदै
**प्रतिच्छायाः** = (पानीमा आफ्नो) प्रतिबिम्बलाई हेरेर
**विहसन्तः** = हाँस्दै
**प्रतिस्वनान्** = आफ्नै प्रतिध्वनिलाई
**शपन्तः च** = गाली गर्दै (रमाउँथे)

**वाक्यार्थ–** कोही बालकहरू नदीको बगिरहेको पानीमा पौडी खेल्दथे, कोही भ्यागुताहरूसँग तिनीहरूकै अनुकरण गरेर उफ्रन्थे, कोही पानीमा आफ्नो प्रतिबिम्ब हेरेर हाँस्दथे भने कोही आफ्नै प्रतिध्वनिलाई गाली गर्दै रमाउँथे।

**इत्थं सतां ब्रह्मसुखानुभूत्या दास्यं गतानां परदैवतेन।**
**मायाश्रितानां नरदारकेण साकं विजह्रुः कृतपुण्यपुञ्जाः॥ ११ ॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**सतां** = ज्ञानीहरूका लागि
**ब्रह्मसुखानुभूत्या** = ब्रह्मसुख र त्यसको अनुभवस्वरूप हुनुभएका
**दास्यं** = दासभावमा
**गतानां** = प्राप्त भएका भक्तहरूका लागि
**परदैवतेन** = परम देवता स्वरूप हुनुभएका
**मायाश्रितानां** = मायामय विषयहरूमा आसक्तहरूका लागि
**नरदारकेण साकं** = मान्छेको बच्चो मात्र लाग्ने भगवान्सँग
**कृतपुण्यपुञ्जाः** = असङ्ख्य पुण्यकर्महरू गरेका गोपहरू
**विजह्रुः** = विहार गर्दथे

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण ज्ञानीहरूका लागि साक्षात् सच्चिदानन्द ब्रह्मसुख र ब्रह्मानुभूति

स्वरूप, दासभावले युक्त भक्तहरूका लागि परमदेवता परमेश्वर स्वरूप र मायामोहित विषयासक्त संसारी मानिसहरूका लागि केवल एउटा मान्छेको बच्चो मात्र लाग्नुहुन्थ्यो। यस्ता भगवान् श्रीकृष्णसित परम पुण्यात्मा गोपबालकहरू अनेक क्रीडा गरेर रमाउँथे।

**विवरण–** यस श्लोकमा भगवान्सँग खेल्ने गोपबालकहरूको सौभाग्यको प्रशंसा गरिएको छ। **कृतपुण्यपुञ्जाः** अर्थात् उनीहरूले अनन्त पुण्य गरिसकेका छन्, त्यसैले साक्षात् भगवान्सँग खेल्ने सौभाग्य पाएका छन्। संसारमा तीनथरी व्यक्ति हुन्छन्– एउटा ज्ञानी सत्पुरुषहरू, अर्को भगवद्भक्तहरू र अर्का सामान्य संसारी जीवहरू। तीनै दृष्टिमा भगवान्सँग खेल्ने व्रजवासी गोपहरूको यहाँ प्रशंसा गरिएको छ। भगवान् ज्ञानीहरूका लागि सच्चिदानन्दरूप हुनुहुन्छ। सेवा गर्ने भक्तहरूका लागि उहाँ परमदेवता हुनुहुन्छ। जो व्यक्ति मायाद्वारा मोहित छ त्यस्तो सामान्य संसारी मान्छेको लागि उहाँ सामान्य गोपालपुत्र हुनुहुन्छ। यसरी अनेकको दृष्टिमा अनेक रूपले प्रतीत हुने परमात्मासँग खेल्ने सौभाग्य गोपहरूले पाए भनी उनीहरूको प्रशंसा गरिएको हो।

**यत्पादपांसुर्बहुजन्मकृच्छ्रतो धृतात्मभिर्योगिभिरप्यलभ्यः।**
**स एव यद् दृग्विषयः स्वयं स्थितः किं वर्ण्यते दिष्टमतो व्रजौकसाम्॥१२॥**

**पदार्थ–**
**यत्पादपांसुः** = जुन भगवान्को चरणको धुलो
**बहुजन्मकृच्छ्रतः** = धेरै जन्ममा गरिएका कष्टकर तपस्या, समाधि आदिद्वारा
**धृतात्मभिः** = अन्तःकरणलाई वशमा राखेका
**योगिभिः अपि** = योगीहरूका लागि पनि
**अलभ्यः** = अलभ्य छ
**अतः** = तापनि
**सः एव** = उहाँ भगवान्
**व्रजौकसाम्** = व्रजवासी मनुष्यहरूको
**स्वयं** = साक्षात्
**दृग्विषयः** = आँखाको विषय भई
**स्थितः** = बस्नुभएको छ (ती व्रजवासीहरूको)
**यत्** = जुन
**दिष्टम्** = भाग्य हो (त्यो)
**किं** = के
**वर्ण्यते** = वर्णन गरिन्छ र

**वाक्यार्थ–** अनेक जन्ममा गरिएका तपस्या, समाधि आदि कष्टकर कर्महरूका कारण आफ्नो अन्तःकरणलाई वशमा राखेका ठुला-ठुला योगीहरूका लागि पनि भगवान् श्रीकृष्णको चरणको धुलो दुर्लभ छ, त्यस्ता भगवान् आज व्रजवासीहरूको आँखाको सामु साक्षात् उपस्थित हुनुहुन्छ, उनीहरूको भाग्यको के वर्णन गर्न सकिन्छ र ?

**अथाघनामाभ्यपतन्महासुरस्तेषां सुखक्रीडनवीक्षणाक्षमः।**
**नित्यं यदन्तर्निजजीवितेप्सुभिः पीतामृतैरप्यमरैः प्रतीक्ष्यते॥ १३॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**तेषां** = ती श्रीकृष्ण, बलराम आदि गोपहरूको
**सुखक्रीडनवीक्षणाक्षमः** = सुखमयी क्रीडालाई देख्न नसक्ने
**अघनामा** = अघ नाम गरेको
**महासुरः** = महान् दैत्य

**अभ्यपतत्** = अकस्मात् आइपुग्यो
**पीतामृतैः अपि** = अमृत पिएर अमर भए तापनि
**निजजीवितेप्सुभिः** = अघासुरबाट आफ्नो जीवनको सुरक्षा चाहने
**अमरैः** = देवताहरूद्वारा
**यदन्तः** = जुन अघासुरको मृत्यु
**नित्यं** = सधैँ
**प्रतीक्ष्यते** = प्रतीक्षा गरिएको थियो

**वाक्यार्थ–** यसपछि एक दिन श्रीकृष्ण, बलराम आदि गोपहरूले सुखमयी क्रीडा गरेको देख्न पनि नसक्ने अघासुर नाम गरेको डरलाग्दो दैत्य त्यहाँ अचानक आइपुग्यो। अमृतपान गरेर अमर भइसकेका स्वर्गका देवताहरू पनि अघासुरबाट आफ्नो जीवनको सुरक्षा चाहन्थे र उसको मृत्यु कहिले होला भनेर सधैँ प्रतीक्षा गरिरहन्थे।

**दृष्ट्वार्भकान् कृष्णमुखानघासुरः कंसानुशिष्टः स बकीबकानुजः।**
**अयं तु मे सोदरनाशकृत् तयोर्द्वयोर्ममैनं सबलं हनिष्ये ॥ १४ ॥**

**पदार्थ–**
**कंसानुशिष्टः** = कंसद्वारा सिकाइएको (पठाइएको)
**बकीबकानुजः** = पूतना र बकासुरको भाइ
**सः** = त्यो
**अघासुरः** = अघासुरले
**कृष्णमुखान्** = श्रीकृष्ण आदि
**अर्भकान्** = गोप बच्चाहरूलाई
**दृष्ट्वा** = देखेर (विचार गऱ्यो)
**अयं तु** = यो श्रीकृष्ण नै
**मे** = मेरो
**सोदरनाशकृत्** = दिदी र दाजुको हत्यारा हो
**मम** = मेरा
**तयोः** = ती दिदी र दाजु
**द्वयोः** = दुबैको (हत्याको बदलामा)
**सबलं** = यसका सेना भएका (साथी) गोपहरू सहित
**एनं** = यो श्रीकृष्णलाई
**हनिष्ये** = मार्नेछु

**वाक्यार्थ–** श्रीकृष्ण आदि गोपहरूलाई मार्न कंसद्वारा पठाइएको त्यो पूतना र बकासुरको भाइ अघासुरले जब श्रीकृष्ण आदि गोपहरूलाई देख्यो तब उसले विचार गऱ्यो, मेरी दिदी र दाजुलाई मार्ने श्रीकृष्ण यही हो, त्यसैले दिदी र दाजुको हत्याको बदला लिन म यसका सहयोगी सम्पूर्ण गोप बालकहरूसहित यसलाई मार्नेछु।

**एते यदा मत्सुहृदोस्तिलापः कृतास्तदा नष्टसमा व्रजौकसः।**
**प्राणे गते वर्ष्मसु का नु चिन्ता प्रजासवः प्राणभृतो हि ये ते ॥ १५ ॥**

**पदार्थ–**
**एते** = यी गोपहरू
**यदा** = जब
**मत्सुहृदोः** = मेरा दिदी र दाजुको
**तिलापः** = मृतकलाई दिइने तिल र पानी (तिलाञ्जलि)
**कृताः** = बनाइन्छन्
**तदा** = तब
**व्रजौकसः** = व्रजवासीहरू
**नष्टसमाः** = मरेतुल्य हुनेछन्
**प्राणे** = प्राण
**गते** = गएपछि
**वर्ष्मसु** = शरीरमा
**नु** = निश्चय नै
**का** = के
**चिन्ता** = चिन्ता हुन्छ
**हि** = किनभने

**ये** = जो
**प्राणभृतः** = प्राणधारी छन्
**ते** = तिनीहरू
**प्रजासवः** = सन्तान नै प्राण
भएका हुन्छन्

**वाक्यार्थ–** जब मेरो हातबाट मरेर यी गोपहरू मेरा दिदी र दाजुको लागि दिइने तिलाञ्जलि बन्दछन् तब सम्पूर्ण व्रजवासीहरू स्वतः मरेतुल्य हुन्छन्। जब प्राण नै जान्छ तब शरीर बाँच्ने कुरै हुँदैन। सबै प्राणीहरूको सुख भनेको उनीहरूका सन्तानहरू नै हुन्, अतः यी बालकहरू मरेपछि व्रजवासीहरू स्वतः मरे जस्ता हुनेछन्।

**इति व्यवस्याजगरं बृहद्वपुः स योजनायाममहाद्रिपीवरम्।**
**धृत्वाद्भुतं व्यात्तगुहाननं तदा पथि व्यशेत ग्रसनाशया खलः॥ १६॥**

**पदार्थ–**
**खलः** = दुष्ट
**सः** = त्यो अघासुरले
**इति** = यस्तो
**व्यवस्य** = निश्चय गरेर
**योजनायाममहाद्रिपीवरम्** = एक योजन फैलिएको विशाल पहाड जस्तो ठुलो
**व्यात्तगुहाननं** = गुफा जस्तो फारेको मुख भएको
**अद्भुतं** = अद्भुत
**बृहत्** = ठुलो
**अजगरं** = अजिङ्गरको
**वपुः** = शरीर
**धृत्वा** = धारण गरेर
**तदा** = त्यस वेला
**ग्रसनाशया** = ती गोपहरूलाई खाने इच्छाले
**पथि** = बाटोमा
**व्यशेत** = सुत्यो

**वाक्यार्थ–** दुष्ट अघासुरले यस्तो विचार गरेर एक योजन फैलिएको लामो, पहाड जस्तो ठुलो आश्चर्यजनक र मोटो अजिङ्गरको रूप धारण गऱ्यो अनि सबै गोपहरूलाई खानका लागि गुफा जस्तो मुख बाएर बाटोमा सुत्यो।

**धराधरोष्ठो जलदोत्तरोष्ठो दर्याननान्तो गिरिशृङ्गदंष्ट्रः।**
**ध्वान्तान्तरास्यो वितताध्वजिह्वः परुषानिलश्वासदवेक्षणोष्णः॥ १७॥**

**पदार्थ–**
**धराधरोष्ठः** = पृथिवीमा तलको ओठ भएको
**जलदोत्तरोष्ठः** = बादलसम्म माथिको ओठ भएको
**दर्याननान्तः** = मुखको प्वाल गुफाजस्तो भएको
**गिरिशृङ्गदंष्ट्रः** = पहाडको चुचुरोजस्तो दाह्रा भएको
**ध्वान्तान्तरास्यः** = मुखको भित्रीभाग अन्धकारमय भएको
**वितताध्वजिह्वः** = चौडा बाटोजस्तो जिब्रो भएको
**परुषानिलश्वासदवेक्षणोष्णः** = आँधीजस्तो श्वास तथा डढेलो जस्तो तातो आँखा भएको (अघासुर थियो)

**वाक्यार्थ–** अघासुरको तलको ओठ पृथिवीमा थियो र माथिको ओठ बादलसम्म पुगेको थियो, उसको मुखको प्वाल गुफाजस्तो थियो, दाह्रा पहाडका चुचुरा जस्ता थिए, मुखको भित्री भाग अन्धकारमय थियो, उसको जिब्रो चौडा बाटो जस्तो थियो, उसले श्वास फेर्दा आँधी आएजस्तो हुन्थ्यो भने उसका आँखा डढेलो जस्तै जाज्वल्यमान थिए।

**दृष्ट्वा तं तादृशं सर्वे मत्वा वृन्दावनश्रियम्।**
**व्यात्ताजगरतुण्डेन ह्युत्प्रेक्षन्ते स्म लीलया॥ १८॥**

**पदार्थ–**
**तादृशं** = त्यस्तो अद्भुत
**तं** = त्यो अघासुरलाई
**दृष्ट्वा** = देखेर (भ्रमवश)
**सर्वे** = ती सबै गोपबालकहरू
**वृन्दावनश्रियं** = वृन्दावनको शोभा
**मत्वा** = ठानेर
**व्यात्ताजगरतुण्डेन** = अजिङ्गरको फैलिएको मुख पो हो कि भनेर
**लीलया हि** = खेल-खेलमैं
**उत्प्रेक्षन्ते स्म** = उत्प्रेक्षा गरे

**वाक्यार्थ–** त्यस्तो अद्भुत रूप भएको अघासुरलाई देखेर पनि भ्रमका कारण ती सबै गोप बालकहरूले त्यसलाई वृन्दावनकै शोभा ठाने अनि खेलखेलमैं उनीहरूले अजिङ्गरको फैलिएको मुख पो हो कि भनेर उत्प्रेक्षा गरे।

**अहो मित्राणि गदत सत्त्वकूटं पुरः स्थितम्।**
**अस्मत्सङ्ग्रसनव्यात्तव्यालतुण्डायते न वा॥ १९॥**

**पदार्थ–**
**अहो** = अहो !
**मित्राणि** = ए साथी हो
**पुरःस्थितम्** = अगाडि बसेको यो
**सत्त्वकूटं** = पहाड जस्तो वस्तु
**अस्मत्सङ्ग्रसनव्यात्तव्याल-तुण्डायते न वा** = हामीलाई निल्न फैलाएको अजिङ्गरको मुख जस्तै छ कि छैन
**गदत** = भन

**वाक्यार्थ–** अहो ! ए साथी हो ! यो हाम्रो अगाडि बसेको पहाड जस्तो जुन वस्तु छ त्यो हामीलाई निल्न मुख फैलाएको अजिङ्गरको मुखजस्तो देखिएको छ कि छैन भन त ?

**सत्यमर्ककरारक्तमुत्तराहनुवद् घनम्।**
**अधराहनुवद् रोधस्तत्प्रतिच्छाययारुणम्॥ २०॥**

**पदार्थ–**
**सत्यं** = ठिक हो
**अर्ककरारक्तम्** = सूर्यको प्रकाशले रातो-रातो भएको
**घनम्** = बादल
**उत्तराहनुवत्** = माथिल्लो ओठ जस्तो
**तत्प्रतिच्छायया** = त्यसैको प्रतिच्छायाद्वारा
**अरुणम्** = अलिअलि रातो
**रोधः** = नदीको तट जस्तो भाग
**अधराहनुवत्** = तल्लो ओठजस्तो (देखिएको छ हेर)

**वाक्यार्थ–** (अर्को गोप बालकले भन्यो–) ठिक हो, सूर्यको प्रकाशले रातो-रातो भएको बादल जस्तो यसको माथिल्लो ओठ देखिन्छ अनि माथिल्लो ओठको प्रतिच्छाया परेर रातो-रातो भएको नदीको तट जस्तो चाहिँ तल्लो ओठ देखिन्छ।

**प्रतिस्पर्धेते सृक्विभ्यां सव्यासव्ये नगोदरे ।**
**तुङ्गशृङ्गालयोऽप्येतास्तद्दंष्ट्राभिश्च पश्यत ॥ २१ ॥**

**पदार्थ–**
**सव्यासव्ये** = दाहिने र देब्रेतिरका
**नगोदरे** = पहाडका दुई गुफा
**सृक्विभ्यां** = अजिङ्गरको मुखका दुई कुनासँग
**प्रतिस्पर्धेते** = प्रतिस्पर्धा गरिरहेका छन्
**एताः** = यी
**तुङ्गशृङ्गालयः अपि** = अग्ला पहाडका टाकुराहरू पनि
**तद्दंष्ट्राभिः च** = त्यो अजिङ्गरको जस्तो देखिने दाह्रासँग (प्रतिस्पर्धा गरिरहेका छन्)
**पश्यत** = हेर त

**वाक्यार्थ–** (अर्को गोपले भन्यो–) हेर त साथीहरू ! यो दाहिने र देब्रेतिर रहेका पहाडका दुई गुफाले अजिङ्गरको मुखका दुई कुनासँग प्रतिस्पर्धा गरिरहेका छन्। अनि ती अग्ला पहाडका टाकुराहरूले पनि अजिङ्गरको दाह्रासँग प्रतिस्पर्धा गरिरहेका छन्।

**आस्तृतायाममार्गोऽयं रसनां प्रतिगर्जति ।**
**एषां अन्तर्गतं ध्वान्तमेतदप्यन्तराननम् ॥ २२ ॥**

**पदार्थ–**
**अयं** = यो
**आस्तृतायाममार्गः** = चौडा र लामो बाटो
**रसनां** = त्यो जीवको जिब्रोसँग
**प्रतिगर्जति** = प्रतिस्पर्धा गर्दछ
**एषां** = यी पहाडका चुचुराहरूको
**अन्तर्गतं** = भित्र रहेको
**एतत्** = यो
**ध्वान्तम् अपि** = अन्धकारले पनि
**अन्तराननम्** = त्यस जीवको मुखभित्रको अन्धकारसँग प्रतिस्पर्धा गर्दैछ

**वाक्यार्थ–** (अर्को गोपले भन्यो–) यो चौडा र लामो बाटो त त्यो जीवको जिब्रो जस्तो देखिएको छ अनि पहाडका चुचुराहरूको बीचमा रहेको अन्धकार त त्यस जीवको मुखभित्रको अन्धकार जस्तो छ।

**दावोष्णखरवातोऽयं श्वासवद् भाति पश्यत ।**
**तद्दग्धसत्त्वदुर्गन्धोऽप्यन्तरामिषगन्धवत् ॥ २३ ॥**

**पदार्थ–**
**अयं** = यो
**दावोष्णखरवातः** = वनको डढेलो झैं अत्यन्त तातो हावा
**श्वासवत्** = सास झैं
**भाति** = लाग्छ
**तद्दग्धसत्त्वदुर्गन्धः अपि** = त्यही डढेलोद्वारा डढेका जीवहरूको दुर्गन्ध पनि
**अन्तरामिषगन्धवत्** = यसको मुखभित्र निलिएका मासुको गन्ध झैं (लाग्दछ)
**पश्यत** = हेर त

**वाक्यार्थ–** (फेरि अर्को गोपबालकले भन्यो–) हेर त साथीहरू हो ! वनमा डढेलो लागेर

आएको यो तातो हावा त्यस जीवको श्वास हो जस्तो लाग्छ अनि त्यो डढेलोले डढेका जीवहरूको दुर्गन्ध चाहिँ त्यस जीवको पेटभित्र रहेको मासुको दुर्गन्ध जस्तो लाग्छ।

**अस्मान् किमत्र ग्रसिता निविष्टानयं तथा चेद् बकवद् विनङ्क्ष्यति।**
**क्षणादनेनेति बकार्युशन्मुखं वीक्ष्योद्धसन्तः करताडनैर्ययुः ॥ २४ ॥**

**पदार्थ–**
**किं** = के
**अयं** = यसले
**अत्र** = यसको मुखभित्र
**निविष्टान्** = पसेका
**अस्मान्** = हामीलाई
**ग्रसिता** = निल्नेछ
**तथा चेत्** = यदि निल्यो भने
**बकवत्** = बकासुर जस्तै
**क्षणात्** = एकै छिनमा
**अनेन** = यी श्रीकृष्णद्वारा
**विनङ्क्ष्यति इति** = मर्नेछ भन्दै
**बकार्युशन्मुखं** = बक असुरका शत्रु (श्रीकृष्ण)को मनोहर अनुहारलाई
**वीक्ष्य** = हेरेर
**उद्धसन्तः** = बेसरी हाँस्दै गोपहरू
**करताडनैः** = ताली बजाउँदै
**ययुः** = गए (छिरे)

**वाक्यार्थ–** (सबै गोप बालकहरू परस्परमा भन्न लागे–) के हामी सबै जना यसको मुखभित्र पस्यौं भने यसले हामीलाई निल्छ ? यदि निल्यो भने श्रीकृष्णले यसलाई बकासुरलाई मारे जस्तै एकै छिनमा तुरुन्तै मारिदिनेछन् भन्दै ती गोप बालकहरूले बकासुरका शत्रु श्रीकृष्णको मनोहर अनुहारलाई हेरेर बेसरी हाँस्दै ताली बजाउँदै त्यो अघासुरको मुखभित्र पसे।

**इत्थं मिथोऽतथ्यमतज्ज्ञभाषितं श्रुत्वा विचिन्त्येत्यमृषा मृषायते।**
**रक्षो विदित्वाखिलभूतहृत्स्थितः स्वानां निरोद्धुं भगवान् मनो दधे ॥ २५ ॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**मिथः** = परस्पर
**अतज्ज्ञभाषितं** = यो अजिङ्गररूपी राक्षस हो भन्ने नजानेका बालकहरूले भनेको
**अतथ्यम्** = भ्रमपूर्ण कुरा
**श्रुत्वा** = सुनेर
**अमृषा** = सत्य (अजिङ्गररूपको असुर)
**मृषायते** = असत्य (विशाल पहाड) जस्तै प्रतीत भइरहेको छ
**इति** = यस्तो
**विचिन्त्य** = निश्चय गरेर
**अखिलभूतहृत्स्थितः** = सम्पूर्ण प्राणीहरूको हृदयमा विराजमान
**भगवान्** = भगवान्‌ले
**रक्षः** = यो राक्षस हो भन्ने
**विदित्वा** = जानेर
**स्वानां** = आफ्ना साथीहरूलाई
**निरोद्धुं** = सङ्कटबाट हटाउन
**मनः** = मन
**दधे** = दिनुभयो

**वाक्यार्थ–** अजिङ्गरको रूप लिएर बसेको त्यो अद्‌भुत जीव राक्षस हो भन्ने नजानेका ती गोप बालक साथीहरूले परस्पर गरेको भ्रमपूर्ण कुराकानी सुनेर भगवान्‌ले अजिङ्गरको रूप धारण गरेको यो दैत्य वृन्दावनमा विशाल पहाड जस्तो भएर प्रतीत भइरहेको छ, तर वास्तवमा त्यो राक्षस हो भन्ने निश्चय गर्नुभयो। त्यसपछि सम्पूर्ण प्राणीहरूको हृदयमा साक्षीरूपले विराजमान भगवान् श्रीकृष्णले आफ्ना साथीहरूलाई सङ्कटबाट बचाउने विचार गर्नुभयो।

**तावत् प्रविष्टास्त्वसुरोदरान्तरं परं न गीर्णाः शिशवः सवत्साः।**
**प्रतीक्षमाणेन बकारिवेशनं हतस्वकान्तस्मरणेन रक्षसा ॥ २६ ॥**

**पदार्थ–**
**तावत्** = त्यस वेलासम्म
**सवत्साः** = बाच्छाहरूसहित
**शिशवः** = (केही) गोप बालकहरू
**असुरोदरान्तरं** = अघासुरको पेटभित्रसम्म
**प्रविष्टाः** = पसिसकेका थिए
**परं तु** = तर पनि
**बकारिवेशनं** = बकशत्रु श्रीकृष्णको प्रवेशको
**प्रतीक्षमाणेन** = प्रतीक्षा गरिरहेको
**हतस्वकान्तस्मरणेन** = मारिएका आफ्ना प्रिय दिदी र दाजुलाई सम्झिरहेको
**रक्षसा** = दैत्य अघासुरद्वारा
**न गीर्णाः** = (मुखमा बाँकी रहेका बाच्छा र गोपबालकहरू मुख बन्द गरेर) निलिएनन्

**वाक्यार्थ–** त्यस वेलासम्ममा बाच्छाहरूसहित (केही) गोप बालकहरू अघासुरको पेटभित्रसम्म प्रवेश गरिसकेका थिए तर पनि श्रीकृष्णको प्रवेशको प्रतीक्षा गरिरहेको र मारिएका आफ्ना प्रिय दिदी र दाजुलाई सम्झिरहेको दैत्य अघासुरले (मुखमा बाँकी रहेका बाच्छा र गोपबालकहरूलाई मुख बन्द गरेर) निलेन।

**तान् वीक्ष्य कृष्णः सकलाभयप्रदो ह्यनन्यनाथान् स्वकरादवच्युतान्।**
**दीनांश्च मृत्योर्जठराग्निघासान् घृणार्दितो दिष्टकृतेन विस्मितः ॥ २७ ॥**

**पदार्थ–**
**सकलाभयप्रदः** = सम्पूर्ण प्राणीहरूलाई अभय प्रदान गर्ने
**घृणार्दितः** = दयाभावले द्रवित
**कृष्णः** = श्रीकृष्णले
**हि** = निश्चय नै
**अनन्यनाथान्** = आफूदेखि भिन्न कोही पनि रक्षक नभएका
**स्वकरात्** = आफ्नो हातबाट
**अवच्युतान्** = खसिसकेका (टाढा भएका)
**मृत्योः** = मृत्युरूप अघासुरको
**जठराग्निघासान्** = जठराग्निको लागि घाँस (खाना) भएका
**दीनान् च** = दुःखी
**तान्** = ती बाच्छा र गोपहरूलाई
**वीक्ष्य** = देखेर
**दिष्टकृतेन** = प्रारब्धवश अघासुरको मुखमा उनीहरू आफैँ गएकोमा
**विस्मितः** = आश्चर्यचकित हुनुभयो

**वाक्यार्थ–** सम्पूर्ण प्राणीहरूलाई अभयप्रदान गर्ने अनि दयाभावले द्रवित हुनुभएका भगवान् श्रीकृष्णले आफूबाहेक कोही पनि रक्षक नभएका, आफूबाट टाढा भएका, मृत्युरूप अघासुरको जठराग्निको घाँस भएका ती बाच्छा र गोपहरूलाई देखेर प्रारब्धले उनीहरूलाई मृत्युको मुखमा पुऱ्याएकाले आश्चर्यचकित हुनुभयो।

**कृत्यं किमत्रास्य खलस्य जीवनं न वा अमीषां च सतां विहिंसनम्।**
**द्वयं कथं स्यादिति संविचिन्त्य तज्ज्ञात्वाविशत् तुण्डमशेषदृग्घरिः ॥ २८ ॥**

**पदार्थ–**
**अत्र** = यस्तो अवस्थामा
**किम्** = के
**कृत्यं** = गर्नुपर्छ (जसद्वारा)
**अस्य** = यो
**खलस्य** = दुष्ट अघासुरको
**जीवनं** = जीवन
**न** = नरहोस् (अनि)
**अमीषां** = यी
**सतां च** = सज्जन मेरा साथीहरूको
**विहिंसनं वा** = हिंसा पनि (नहोस्)
**द्वयं** = यी दुबै कुरा
**कथं** = कसरी
**स्यात्** = होला
**इति** = यस्तो
**संविचिन्त्य** = विचार गरेर
**तत्** = त्यस्तो उपाय
**ज्ञात्वा** = जानेर
**अशेषदृक्** = सर्वद्रष्टा भगवान्
**हरिः** = श्रीकृष्ण
**तुण्डम्** = अघासुरको मुखमा
**आविशत्** = पस्नुभयो

**वाक्यार्थ–** यस्तो अवस्थामा अब मैले के गर्ने होला ? अब मैले त्यस्तो काम गर्नुपर्दछ, जसद्वारा दुष्ट अघासुरको मृत्यु पनि होस् र सज्जन मेरा साथी गोपहरूको हिंसा पनि नहोस्। यी दुबै कुरा कसरी सम्भव होला ? यस्तो विचार गरेर सर्वद्रष्टा भगवान् श्रीकृष्ण अघासुरको मुखभित्र प्रवेश गर्नुभयो।

**तदा घनच्छदा देवा भयाद्धाहेति चुक्रुशुः।**
**जहृषुर्ये च कंसाद्याः कौणपास्त्वघबान्धवाः॥ २९॥**

**पदार्थ–**
**तदा** = त्यस वेला (भगवान् अघासुरको मुखमा प्रवेश गर्दा)
**घनच्छदाः** = बादलले छेकिएका
**देवाः** = देवताहरू
**भयात्** = अघासुरको डरले
**हा हा इति** = हा हा भनेर
**चुक्रुशुः** = क्रन्दन गर्न थाले
**ये च** = जो
**कंसाद्याः** = कंस आदि
**अघबान्धवाः** = अघासुरका हितैषी
**कौणपाः तु** = राक्षसहरू चाहिँ
**जहृषुः** = प्रसन्न भए

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण अघासुरको मुखमा प्रवेश गर्नुहुँदा (भगवान्कै मृत्युको आशङ्का गरेर) बादलले छेकिएका देवताहरू अघासुरको डरले हा ! हा ! भन्दै कराउन थाले भने अघासुरका हितैषी कंस आदि राक्षसहरू प्रसन्न भए।

**तच्छ्रुत्वा भगवान् कृष्णस्त्वव्ययः सार्भवत्सकम्।**
**चूर्णीचिकीर्षोरात्मानं तरसा ववृधे गले॥ ३०॥**

**पदार्थ–**
**तत्** = त्यो (देवताहरूको हाहाकार शब्द)
**श्रुत्वा** = सुनेर
**अव्ययः** = अविनाशी
**भगवान्** = भगवान्
**कृष्णः तु** = श्रीकृष्णले चाहिँ
**सार्भवत्सकम्** = गोपबालक र बाच्छासहित
**आत्मानं** = आफूलाई
**चूर्णीचिकीर्षोः** = चपाएर चूर्ण बनाउने इच्छा गरेको अघासुरको
**गले** = घाँटीमा
**तरसा** = वेगपूर्वक छिटो-छिटो
**ववृधे** = बढाउन थाल्नुभयो

**वाक्यार्थ–** देवताहरूको हाहाकार शब्द सुनेर बाच्छा र गोपबालकसहित आफूलाई दाँतले चपाएर

चूर्ण-चूर्ण बनाएर मार्ने इच्छा गर्ने त्यो अघासुरको घाँटीमा रही भगवान् श्रीकृष्णले आफ्नो शरीरलाई छिटो-छिटो बढाउन थाल्नुभयो।

**ततोऽतिकायस्य निरुद्धमार्गिणो ह्युद्‌गीर्णदृष्टेर्भ्रमतस्त्वितस्ततः।**
**पूर्णोऽन्तरङ्गे पवनो निरुद्धो मूर्धन् विनिष्पाट्य विनिर्गतो बहिः॥ ३१॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (भगवान् बढ्दै जानुभएकाले)
**निरुद्धमार्गिणः** = सास फेर्ने बाटो (घाँटी) थुनिएको
**हि** = निश्चय नै
**उद्‌गीर्णदृष्टेः** = आँखा बाहिर निस्किएको
**इतस्ततः तु** = छट्पटाएर यताउता
**भ्रमतः** = शरीर हल्लिएको
**अतिकायस्य** = विशाल शरीर भएको अघासुरको
**अन्तरङ्गे** = शरीरभित्रै
**निरुद्धः** = रोकिएर
**पूर्णः** = भरिएको
**पवनः** = प्राणवायु
**मूर्धन्** = टाउकोमा रहेको ब्रह्मरन्ध्रलाई
**विनिष्पाट्य** = फुटाएर
**बहिः** = बाहिर
**विनिर्गतः** = निस्कियो

**वाक्यार्थ–** भगवान्ले आफ्नो शरीरलाई बढाउँदै लानुभएकाले अघासुरको सास फेर्ने बाटो घाँटी बन्द भयो भयो। उसका आँखा बाहिर निस्किएका थिए। उसले छट्पटाएर विशाल शरीरलाई हल्लाउन थाल्यो। यसरी उसको विशाल शरीरभित्र पूर्णरूपमा रोकिएको प्राणवायु उसको ब्रह्मरन्ध्रलाई फुटाएर शरीरबाट बाहिर निस्कियो।

**तेनैव सर्वेषु बहिर्गतेषु प्राणेषु वत्सान् सुहृदः परेतान्।**
**दृष्ट्या स्वयोत्थाप्य तदन्वितः पुनर्वक्त्रान् मुकुन्दो भगवान् विनिर्ययौ॥ ३२॥**

**पदार्थ–**
**तेन एव** = त्यही ब्रह्मरन्ध्रको बाटोबाट
**सर्वेषु** = सबै
**प्राणेषु** = इन्द्रियहरू
**बहिर्गतेषु** = शरीरबाट बाहिर निस्किएपछि
**परेतान्** = राक्षसको जठराग्निले पोलेर मूर्छित भएका
**वत्सान्** = बाच्छा र
**सुहृदः** = गोप साथीहरूलाई
**स्वया** = आफ्नो
**दृष्ट्या** = अमृतमयी दृष्टिद्वारा
**उत्थाप्य** = सचेत बनाएर
**तदन्वितः** = तिनीहरूलाई साथमा लिएर
**भगवान्** = भगवान्
**मुकुन्दः** = मुकुन्द
**पुनः** = फेरि
**वक्त्रात्** = अघासुरको मुखबाट
**विनिर्ययौ** = बाहिर निस्कनुभयो

**वाक्यार्थ–** त्यही ब्रह्मरन्ध्रको बाटोबाट अघासुरका सबै इन्द्रियहरू बाहिर निस्किएपछि त्यस दैत्यको जठराग्निको तापले मूर्च्छित भएका बाच्छा र आफ्ना गोप साथीहरूलाई भगवान् मुकुन्दले आफ्नो अमृतमयी दृष्टिद्वारा सचेत बनाएर उठाउनुभयो अनि उनीहरूलाई आफ्नो साथमा लिएर त्यस दैत्यको मुखबाट बाहिर निस्कनुभयो।

**पीनाहिभोगोत्थितमद्भुतं महज्ज्योतिः स्वधाम्ना ज्वलयद् दिशो दश ।**
**प्रतीक्ष्य खेऽवस्थितमीशनिर्गमं विवेश तस्मिन् मिषतां दिवौकसाम्॥ ३३॥**

**पदार्थ–**
**पीनाहिभोगोत्थितं** = अजिङ्गरको विशाल शरीरबाट उत्पन्न भएको
**अद्भुतम्** = अद्भुत
**महत्** = महान्
**ज्योतिः** = तेजले
**स्वधाम्ना** = आफ्नो प्रकाशद्वारा
**दश दिशः** = दशै दिशालाई
**ज्वलयत्** = प्रकाशित गर्दै
**खे** = आकाशमा
**अवस्थितम्** = बसेर
**ईशनिर्गमं** = भगवान् श्रीकृष्णको बहिरागमनलाई
**प्रतीक्ष्य** = प्रतीक्षा गरेर
**दिवौकसाम्** = देवताहरूले
**मिषतां** = हेर्दाहेर्दै
**तस्मिन्** = उहाँ (भगवान् श्रीकृष्ण)मा
**विवेश** = प्रवेश गर्‍यो

**वाक्यार्थ–** विशाल अजिङ्गरको त्यो शरीरबाट निस्केको अद्भुत महान् तेजले आफ्नो प्रकाशद्वारा दशै दिशालाई प्रकाशित गर्‍यो अनि आकाशमा गएर भगवान् बाहिर निस्कने प्रतीक्षा गर्न थाल्यो। जब भगवान् बाहिर आउनुभयो तब देवताहरूले हेर्दा–हेर्दै त्यो तेजले भगवान् श्रीकृष्णमा प्रवेश गर्‍यो।

**ततोऽतिहृष्टाः स्वकृतोऽकृतार्हणं पुष्पैः सुरा अप्सरसश्च नर्तनैः ।**
**गीतैः सुगा वाद्यधराश्च वाद्यकैः स्तवैश्च विप्रा जयनिःस्वनैर्गणाः ॥ ३४ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (अघासुरको वध भएपछि)
**अतिहृष्टाः** = अत्यन्त प्रसन्न भएका
**सुराः** = देवताहरूले
**पुष्पैः** = पुष्पवृष्टिद्वारा
**अप्सरसः च** = अप्सराहरूले
**नर्तनैः** = नृत्यहरूद्वारा
**सुगाः** = गन्धर्वहरूले
**गीतैः** = गीतहरूद्वारा
**वाद्यधराः च** = विद्याधरहरूले
**वाद्यकैः** = बाजाहरूद्वारा
**विप्राः** = ब्राह्मणहरूले
**स्तवैः च** = स्तुतिहरूद्वारा
**गणाः** = भगवान्का पार्षदहरूले
**जयनिःस्वनैः** = जयजय आवाजद्वारा
**स्वकृतः** = आफ्नो (देवता आदिको) सृष्टि गर्नुहुने भगवान् श्रीकृष्णको
**अर्हणं** = पूजा
**अकृत** = गरे

**वाक्यार्थ–** अघासुरको वध भएपछि अत्यन्त प्रसन्न भएका देवताहरूले फूल बर्साएर, अप्सराहरूले नाचेर, गन्धर्वहरूले गीत गाएर, विद्याधरहरूले बाजा बजाएर, ब्राह्मणहरूले स्तुतिपाठ गरेर र भगवान्का पार्षदहरूले जयजय गरेर आफ्नो सृष्टि गर्नुहुने भगवान् श्रीकृष्णको पूजा गरे।

**तदद्भुतस्तोत्रसुवाद्यगीतिका–**
**जयादिनैकोत्सवमङ्गलस्वनान् ।**

**श्रुत्वा स्वधाम्नोऽन्त्यज आगतोऽचिराद्**

**दृष्ट्वा महीशस्य जगाम विस्मयम्॥ ३५॥**

**पदार्थ–**
**तदद्भुतस्तोत्रसुवाद्यगीतिकाजया-दिनैकोत्सवमङ्गलस्वनान्** = देवताहरूले गरेको अद्भुत स्तोत्रपाठ, कर्णप्रिय बाजागाजा, सुमधुर गीत र जयजयकार शब्द आदि अनेक उत्सवद्वारा उत्पन्न मङ्गलमय ध्वनिहरूलाई
**स्वधाम्नः** = आफ्नो लोकको
**अन्ति** = नजिकैबाट
**श्रुत्वा** = सुनेर
**अजः** = ब्रह्माजी
**अचिरात्** = तुरुन्त
**आगतः** = आउनुभयो
**महीशस्य** = भगवान्को (महिमा)
**दृष्ट्वा** = देखेर
**विस्मयम्** = आश्चर्यभावमा
**जगाम** = प्राप्त हुनुभयो

**वाक्यार्थ–** देवताहरूले गरेको अद्भुत स्तोत्रपाठ, कर्णप्रिय बाजागाजा, सुमधुर गीत-सङ्गीत र जयजयकार शब्द आदि अनेक उत्सवहरूको मङ्गलमय ध्वनि ब्रह्माजीले आफ्नो लोकको नजिकैबाट सुन्नुभयो र तत्काल वृन्दावनमा आउनुभयो। त्यहाँ भगवान् श्रीकृष्णको महिमा देखेर ब्रह्माजी आश्चर्यचकित हुनुभयो।

**राजन्नाजगरं चर्म शुष्कं वृन्दावनेऽद्भुतम्।**

**व्रजौकसां बहुतिथं बभूवाक्रीडगह्वरम्॥ ३६॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**अद्भुतम्** = अद्भुत
**आजगरं** = त्यो अजिङ्गरको
**शुष्कं** = सुकेको
**चर्म** = छाला
**वृन्दावने** = वृन्दावनमा
**व्रजौकसां** = व्रजवासीहरूको लागि
**बहुतिथं** = धेरै समयसम्म
**आक्रीडगह्वरम्** = खेल्ने गुफा
**बभूव** = भयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यो अद्भुत महान् अजिङ्गरको छाला सुकेपछि त्यो व्रजवासीहरूका लागि धेरै कालसम्म खेल्न योग्य गुफा भयो।

**एतत् कौमारजं कर्म हरेरात्माहिमोक्षणम्।**

**मृत्योः पौगण्डके बाला दृष्ट्वोचुर्विस्मिता व्रजे॥ ३७॥**

**पदार्थ–**
**हरेः** = भगवान् श्रीकृष्णको
**एतत्** = यो
**मृत्योः** = मृत्युबाट
**आत्माहिमोक्षणम्** = आफूहरूलाई बचाउने र अजिङ्गररूप अघासुरलाई मोक्ष प्रदान गर्ने
**कौमारजं** = कुमार अवस्थामा (पाँच वर्षकै उमेरमा) गरिएको
**कर्म** = कर्मलाई
**दृष्ट्वा** = देखेर
**पौगण्डके** = भगवान् पौगण्ड अवस्थामा (छैटौं वर्षमा) प्रवेश गर्नुभएपछि
**विस्मिताः** = चकित भएका
**बालाः** = गोप बालकहरूले
**व्रजे** = व्रजमा
**ऊचुः** = वर्णन गर्दथे

**वाक्यार्थ–** आफूहरूलाई मृत्युबाट बचाउने र अजिङ्गररूप अघासुरलाई मोक्ष प्रदान गर्ने यो भगवान्ले कुमार अवस्थामा हुँदा नै गर्नुभएको कार्य देखेर भगवान् पौगण्डावस्था (६ वर्षदेखि १० वर्ष सम्मको उमेर)मा प्रवेश गर्नुभएपछि गोप बालकहरूले चकित हुँदै भगवान्को त्यो कार्यको व्रजमा वर्णन गर्दथे।

**नैतद् विचित्रं मनुजार्भमायिनः परावराणां परमस्य वेधसः।**
**अघोऽपि यत्स्पर्शनधौतपातकः प्रापात्मसाम्यं त्वसतां सुदुर्लभम्॥ ३८॥**

**पदार्थ–**
**मनुजार्भमायिनः** = मायाले मनुष्य बालकको रूप धारण गर्नुभएका
**परमस्य** = साक्षात् परमात्माको
**परावराणां** = अदृश्य र दृश्य सबै पदार्थहरूको
**वेधसः** = स्रष्टा भगवान्को
**स्पर्शनधौतपातकः** = स्पर्श मात्रले सम्पूर्ण पापहरू नष्ट भएको
**अघः अपि** = अघासुरले पनि
**असतां तु** = भगवान्देखि विमुख दुष्टहरूका लागि
**सुदुर्लभम्** = अत्यन्त दुर्लभ
**आत्मसाम्यं** = भगवान्को सारूप्य मुक्ति
**यत्** = जुन
**प्राप** = प्राप्त गऱ्यो
**एतत्** = त्यो
**न विचित्रं** = आश्चर्य होइन

**वाक्यार्थ–** मायाद्वारा मनुष्यको बच्चाको रूप धारण गर्नुभएका, अदृश्य एवं दृश्य सम्पूर्ण चराचर जगत्का स्रष्टा भगवान् श्रीकृष्णको स्पर्श मात्रले सम्पूर्ण पापहरू नष्ट भएको अघासुरले भगवान्देखि विमुख दुष्टहरूका लागि अत्यन्त दुर्लभ सारूप्य मुक्ति प्राप्त गऱ्यो, यो कुनै आश्चर्यको कुरा होइन।

**सकृद् यदङ्गप्रतिमान्तराहिता मनोमयी भागवतीं ददौ गतिम्।**
**स एव नित्यात्मसुखानुभूत्यभिव्युदस्तमायोऽन्तर्गतो हि किं पुनः॥ ३९॥**

**पदार्थ–**
**सकृत्** = एकपटक
**अन्तराहिता** = हृदयभित्र स्थापित
**मनोमयी** = मनले चिन्तन गरिएको
**यदङ्गप्रतिमा** = जुन भगवान्को अङ्गहरू भएको प्रतिमाले
**भागवतीं** = भगवान्को
**गतिम्** = सालोक्य आदि मुक्ति
**ददौ** = (खट्वाङ्ग आदिलाई) प्रदान गऱ्यो
**सः एव** = त्यही
**नित्यात्मसुखानुभूत्यभिव्युदस्तमायः** = नित्य आफ्नै आनन्दमय रूपको अनुभवद्वारा माया र त्यसका कार्यहरूलाई टाढैबाट हटाउनुभएका भगवान्
**हि** = निश्चय नै
**अन्तर्गतः** = अन्तःकरणभित्र प्रवेश गर्नुभएको छ भने
**किं पुनः** = किन सारूप्य मुक्ति प्रदान गर्नुहुन्न

**वाक्यार्थ–** भगवान्को सर्वाङ्गपूर्ण मूर्तिलाई एकपटक मात्र मनले राम्ररी चिन्तन गरेर हृदयभित्र राख्नाले त (खट्वाङ्ग आदि भक्तलाई) सालोक्य आदि मुक्ति प्राप्त भयो भने नित्य आफ्नै आनन्दमय रूपको अनुभवद्वारा माया र त्यसका कार्यहरूलाई टाढैबाट हटाउनुहुने भगवान् यदि

स्वयं कसैको अन्तःकरणभित्र प्रवेश गर्नुहुन्छ भने त्यसको सारूप्य मुक्ति प्राप्त हुने कुरामा के सन्देह रह्यो र ? (अतः अघासुरले सारूप्य मुक्ति प्राप्त गर्‍यो)

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**इत्थं द्विजा यादवदेवदत्तः श्रुत्वा स्वरातुश्चरितं विचित्रम् ।**
**पप्रच्छ भूयोऽपि तदेव पुण्यं वैयासकिं यन्निगृहीतचेताः ॥ ४० ॥**

**पदार्थ–**
**द्विजाः** = हे (दुई पटक जन्मिएका) शौनक आदि ब्राह्मणहरू **यादवदेवदत्तः** = यदुश्रेष्ठ श्रीकृष्णद्वारा जीवनदान दिलाइएका परीक्षित्‌ले **स्वरातुः** = आफ्ना रक्षक श्रीकृष्णको **विचित्रम्** = (अघासुरवध आदि) अद्‌भुत **चरितं** = चरित्र **इत्थं** = यसप्रकार **श्रुत्वा** = सुनेर **यन्निगृहीतचेताः** = जुन चरित्र श्रवणद्वारा मनलाई वशमा राखेका उहाँले **भूयः अपि** = फेरि पनि **तद् एव** = त्यही **पुण्यं** = पवित्र श्रीकृष्ण चरित्रका बारेमा **वैयासकिं** = व्यासपुत्र शुकदेवलाई **पप्रच्छ** = सोध्नुभयो

**वाक्यार्थ–** हे शौनक आदि ब्राह्मणहरू ! यदुश्रेष्ठ भगवान् श्रीकृष्णबाट जीवनदान पाएका राजा परीक्षित्‌ले जब आफ्ना रक्षक श्रीकृष्णको अघासुरवध आदि अद्‌भुत चरित्र सुन्नुभयो तब भगवान्‌को चरित्रले उहाँलाई वशीभूत तुल्यायो अनि फेरि पनि परीक्षित्‌ले व्यासका पुत्र शुकदेवजीलाई भगवान्‌को त्यही लीलाचरित्र सुन्ने इच्छा प्रकट गरी त्यस विषयमा प्रश्न गर्नुभयो ।

**राजोवाच** (राजा परीक्षित्‌ले भन्नुभयो)

**ब्रह्मन् कालान्तरकृतं तत्कालीनं कथं भवेत् ।**
**यत् कौमारे हरिकृतं जगुः पौगण्डकेऽर्भकाः ॥ ४१ ॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेव **यत्** = जुन (गोपहरूको रक्षा, अघासुरको वध आदि) कर्म **कौमारे** = कुमार अवस्थामा **हरिकृतं** = भगवान् श्रीकृष्णद्वारा गरियो (त्यो कर्म) **अर्भकाः** = गोप बालकहरूले **पौगण्डके** = पौगण्ड अवस्थामा **जगुः** = (व्रजमा) भने (भन्नुभयो, तर) **कालान्तरकृतं** = कुमार कालमा गरेको कर्म **तत्कालीनं** = पौगण्ड कालीन **कथं** = कसरी **भवेत्** = हुन सक्छ

**वाक्यार्थ–** हे ब्रह्मज्ञानी शुकदेव ! पाँच वर्षको कुमारावस्थामा भगवान् श्रीकृष्णले गोप बालकहरूको रक्षा, अघासुरवध आदि अद्‌भुत कर्म गर्नुभयो, त्यो कर्म भगवान्‌को पौगण्ड अवस्थामा गोप बालकहरूले व्रजमा वर्णन गरे भनेर भन्नुभयो, तर कुमार अवस्थामा गरिएको कर्म

पौगण्ड अवस्थामा कसरी वर्तमानकालीन हुन सक्छ ?

**तद् ब्रूहि मे महायोगिन् परं कौतूहलं गुरो ।**
**नूनमेतद्धरेरेव माया भवति नान्यथा ॥ ४२ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **माया एव** = माया नै | **ब्रूहि** = बताउनुहोस् (त्यो सुन्न) |
| **महायोगिन्** = हे महायोगी | **भवति** = हो | **मे** = मलाई |
| **गुरो** = हे गुरु | **अन्यथा** = अन्यथा | **परं** = अत्यन्त |
| **नूनम्** = निश्चय नै | **न** = त्यस्तो हुनै सक्दैन | **कौतूहलं** = कुतूहलता छ |
| **एतत्** = यो कथनको कारण | (तापनि) | |
| **हरेः** = भगवान् श्रीकृष्णको | **तत्** = त्यो कारणको बारेमा | |

**वाक्यार्थ–** हे महायोगी ! यो कथनको कारण निश्चय नै स्वयं भगवान् श्रीकृष्णको माया नै हो, अरू हुनै सक्दैन। (तापनि त्यसमा विशेष अरू कारणहरू पनि भए) त्यो मलाई बताउनुहोस्। त्यो कुरा सुन्न म अत्यन्तै उत्कण्ठित छु।

**वयं धन्यतमा लोके गुरोऽपि क्षत्रबन्धवः ।**
**यत् पिबामो मुहुस्त्वत्तः पुण्यं कृष्णकथामृतम् ॥ ४३ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **लोके** = लोकमा | **पुण्यं** = अति पवित्र |
| **गुरो** = हे गुरु | **धन्यतमाः** = अति नै धन्य | **कृष्णकथामृतम्** = भगवान् |
| **क्षत्रबन्धवः अपि** = अधम क्षत्रिय | भएका छौँ | श्रीकृष्णको कथारूपी अमृत |
| भएर पनि | **यत्** = किनभने | **मुहुः** = बारम्बार |
| **वयं** = हामी | **त्वत्तः** = हजुरबाट | **पिबामः** = पान गर्न पाएका छौँ |

**वाक्यार्थ–** हे गुरुदेव ! (ब्राह्मणको तिरस्कार गरेको हुनाले) अधम क्षत्रिय भए पनि हामी लोकमा अति नै धन्य र कृतार्थ भएका छौँ किनभने हामीले हजुरबाट भगवान् श्रीकृष्णको अति पवित्र कथारूपी अमृत बारम्बार पान गर्न पाएका छौँ।

**सूत उवाच** (सूतजीले भन्नुभयो)

**इत्थं स्म पृष्टः स तु बादरायणि-**
**स्तत्स्मारितानन्तहृताखिलेन्द्रियः ।**
**कृच्छ्रात् पुनर्लब्धबहिर्दृशिः शनैः**
**प्रत्याह तं भागवतोत्तमोत्तम ॥ ४४ ॥**

**पदार्थ–**

**भागवतोत्तमोत्तम** = भगवान्का उत्तम भक्तहरूमा श्रेष्ठ हे शौनक
**बादरायणिः** = व्यासका पुत्र
**सः तु** = ती शुकदेवजी
**इत्थं** = यसप्रकार
**पृष्टः** = सोधिनुभएपछि
**तत्स्मारितानन्तहृताखिलेन्द्रियः** = त्यो प्रश्नद्वारा सम्झाइनाले भगवान् श्रीकृष्णद्वारा सम्पूर्ण इन्द्रिय र त्यसका वृत्तिहरू आकृष्ट भएका (अनि)
**कृच्छ्रात्** = इन्द्रियजन्य श्रमबाट
**पुनः** = फेरि
**शनैः** = बिस्तारै
**लब्धबहिर्दृशिः** = बाह्य जगत्को ज्ञान भएका शुकदेवले
**तं** = ती प्रश्नकर्ता परीक्षित्लाई
**प्रत्याह स्म** = भन्नुभयो

**वाक्यार्थ–** भगवान्का उत्तम भक्तहरूमा श्रेष्ठ हे शौनक ! राजा परीक्षित्ले यसप्रकार प्रश्न गरेपछि शुकदेवलाई भगवान् श्रीकृष्णका लीलाचरित्रहरूको सम्झना भयो र उहाँका सम्पूर्ण इन्द्रिय र तिनका वृत्तिहरू भगवान्को चरित्रमा आकृष्ट भए, फेरि इन्द्रियजन्य श्रमबाट उहाँलाई बिस्तारै बाह्यजगत्को ज्ञान हुँदै आयो। त्यसपछि उहाँले प्रश्नकर्ता राजा परीक्षित्लाई भन्न लाग्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे द्वादशोऽध्यायः॥ १२ ॥**

# अथ त्रयोदशोऽध्यायः

## ब्रह्माजीको मोहभङ्ग

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**साधु पृष्टं महाभाग त्वया भागवतोत्तम ।**

**यन्नूतनयसीशस्य शृण्वन्नपि कथां मुहुः ॥ १ ॥**

**पदार्थ–**
**महाभाग** = हे महाभाग्यशाली परीक्षित्
**भागवतोत्तम** = हे भगवान्का श्रेष्ठ भक्त
**त्वया** = तपाईंद्वारा
**साधु** = सुन्दर प्रश्न
**पृष्टं** = सोधियो
**यत्** = किनभने (तपाईं)
**ईशस्य** = भगवान्को
**कथां** = कथा
**मुहुः** = बारम्बार
**शृण्वन् अपि** = सुनेर पनि
**नूतनयसि** = (त्यस कथालाई) नयाँ बनाउँदै हुनुहुन्छ

**वाक्यार्थ–** हे महाभाग्यशाली परीक्षित् ! हे भगवान्का श्रेष्ठ भक्त ! तपाईंले भगवान्को लीलाचरित्रको विषयमा सुन्दर प्रश्न गर्नुभयो। तपाईंले भगवान्का कथाहरू बारम्बार सुनेर पनि (फेरि त्यही विषयमा प्रश्न गरेर) भगवान्का कथाहरूलाई अरु नयाँ बनाउँदै हुनुहुन्छ।

**सतामयं सारभृतां निसर्गो यदर्थवाणीश्रुतिचेतसामपि ।**

**प्रतिक्षणं नव्यवदच्युतस्य यत् स्त्रिया विटानामिव साधुवार्ता ॥ २ ॥**

**पदार्थ–**
**अपि** = निश्चय नै
**यदर्थवाणीश्रुतिचेतसाम्** = जुन भगवान्का गुणकथालाई ग्रहण गर्ने वाणी, कान र मन भएका
**सारभृतां** = तत्त्वग्राही
**सताम्** = सज्जनहरूको
**अयं** = यो
**निसर्गः** = स्वभाव
**यत्** = जुन
**विटानाम्** = कामुक पुरुषहरूका लागि
**स्त्रियाः इव** = स्त्रीको चर्चा झैँ
**अच्युतस्य** = भगवान् श्रीकृष्णको
**साधुवार्ता** = सुन्दर चरित्रहरूको कथा
**प्रतिक्षणं** = प्रतिक्षण
**नव्यवत्** = नयाँ जस्तै हुन्छ

**वाक्यार्थ–** जसरी स्त्रीलम्पट कामुक पुरुषहरूलाई स्त्रीहरूको चर्चा सधैँ नयाँ लाग्दछ त्यसै गरी भगवान्का गुणकथालाई गर्ने वाणी, कान र मन भएका तत्त्वग्राही सज्जन भक्तहरूलाई भगवान् श्रीकृष्णको कथा प्रतिक्षण नयाँ लाग्दछ।

**शृणुष्वावहितो राजन्नपि गुह्यं वदामि ते ।**

**ब्रूयुः स्निग्धस्य शिष्यस्य गुरवो गुह्यमप्युत ॥ ३ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**अवहितः** = सावधान भएर
**शृणुष्व** = सुन्नुहोस्
**गुह्यं अपि** = रहस्यमय भए पनि
**ते** = तपाईंका लागि
**वदामि** = बताउँछु
**स्निग्धस्य** = गुरुमा प्रेम राख्ने
**शिष्यस्य** = शिष्यलाई
**गुरवः** = गुरुहरूले
**उत** = निश्चय नै
**गुह्यम् अपि** = रहस्यमय ज्ञान पनि
**ब्रूयुः** = बताऊन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सावधान भएर सुन्नुहोस्। भगवान्का गुणकथाहरू अत्यन्त रहस्यमय छन् तापनि म तपाईंलाई बताउँछु। किनभने गुरुमा प्रेम राख्ने शिष्यहरूलाई गुरुहरूले रहस्यमय कुराहरू पनि बताउनुपर्दछ।

**तथाघवदनान्मृत्यो रक्षित्वा वत्सपालकान्।**
**सरित्पुलिनमानीय भगवानिदमब्रवीत्॥ ४॥**

**पदार्थ–**
**तथा** = यसरी (मैले पहिले बताए अनुसार)
**अघवदनात्** = अघासुरको मुखरूपी
**मृत्योः** = मृत्युबाट
**वत्सपालकान्** = बाच्छा र गोठाला साथीहरूलाई
**रक्षित्वा** = बचाएर
**सरित्पुलिनम्** = यमुनानदीको तटमा
**आनीय** = ल्याएर
**भगवान्** = भगवान्ले
**इदम्** = यसो
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** मैले पहिले बताए अनुसार अघासुरको मुखरूपी मृत्युबाट भगवान् श्रीकृष्णले बाच्छा र गोठाला साथीहरूलाई बचाएर यमुना नदीको तटमा ल्याउनुभयो र उनीहरूलाई भन्न लाग्नुभयो।

**अहोऽतिरम्यं पुलिनं वयस्याः स्वकेलिसम्पन्मृदुलाच्छबालुकम्।**
**स्फुटत्सरोगन्धहृतालिपत्रिकध्वनिप्रतिध्वानलसद्द्रुमाकुलम्॥ ५॥**

**पदार्थ–**
**वयस्याः** = हे साथीहरू
**अहो** = अहो
**पुलिनं** = यो नदीको तट
**अतिरम्यं** = अत्यन्त मनोहर छ (यहाँ)
**स्वकेलिसम्पन्मृदुलाच्छबालुकम्** = हाम्रो खेलका लागि चाहिने सामग्रीले युक्त राम्रा-राम्रा स्वच्छ बालुवा र
**स्फुटत्सरोगन्धहृतालिपत्रिक-ध्वनिप्रतिध्वानलसद्द्रुमाकुलम्** = पोखरीमा फुलेका कमलहरूको सुगन्धले पानीमा आकृष्ट भएका भँवरा र चराहरूको आवाजको प्रतिध्वनिले सुशोभित धेरै वृक्षहरू छन्

**वाक्यार्थ–** हे साथीहरू ! यो यमुना नदीको तट अत्यन्त मनोहर छ। यहाँ हामीलाई खेल्न चाहिने आवश्यक सामग्री राम्रो स्वच्छ बालुवा छ अनि यहाँ पोखरीमा फुलेका कमलहरूको सुगन्धले पानीमा आकृष्ट भएका भँवरा र चराहरूको आवाजको प्रतिध्वनिले सुशोभित धेरै वृक्षहरू छन्।

**अत्र भोक्तव्यमस्माभिर्दिवारूढं क्षुधार्दिताः ।**
**वत्साः समीपेऽपः पीत्वा चरन्तु शनकैस्तृणम् ॥ ६ ॥**

**पदार्थ–**
**दिवा** = दिन
**आरूढं** = धेरै चढिसक्यो (बितिसक्यो)
**क्षुधार्दिताः** = हामीहरू भोकायौँ (त्यसैले)
**अस्माभिः** = हामीहरूद्वारा
**अत्र** = यहीँ
**भोक्तव्यम्** = भोजन गरिनुपर्दछ
**वत्साः** = गाईबाच्छाहरू
**अपः** = पानी
**पीत्वा** = पिएर
**समीपे** = नजिकै
**शनकैः** = बिस्तारै
**तृणम्** = घाँस
**चरन्तु** = चरून्

**वाक्यार्थ–** दिन धेरै बितिसक्यो, हामीहरू पनि अत्यन्तै भोकायौँ, त्यसैले अब हामीहरू यहीँ नदीतटमा भोजन गरौँ। भोकाएका गाईबाच्छाहरू पनि पानी पिएर हाम्रा नजिक बिस्तारै घाँस चरून्।

**तथेति पाययित्वार्भा वत्सानारुध्य शाद्वले ।**
**मुक्त्वा शिक्यानि बुभुजुः समं भगवता मुदा ॥ ७ ॥**

**पदार्थ–**
**तथा इति** = ठिक छ भनेर
**अर्भाः** = गोप बालकहरूले
**वत्सान्** = गाईबाच्छाहरूलाई
**पाययित्वा** = पानी पियाएर
**शाद्वले** = हरिया घाँसहरू भएको ठाउँमा
**आरुध्य** = छोडिदिएर
**शिक्यानि** = खाजा राखिएका पोकाहरू
**मुक्त्वा** = खोलेर
**मुदा** = हर्षपूर्वक
**भगवता समं** = भगवान् श्रीकृष्णसँग
**बुभुजुः** = खान थाले

**वाक्यार्थ–** यो कुरा सुनेर गोप बालकहरूले 'ठिक छ' भनेर गाईबाच्छाहरूलाई यमुनामा पानी पियाएर हरिया घाँसहरू भएको ठाउँमा छोडिदिए अनि खाजाका पोकाहरू फुकाएर हर्षपूर्वक भगवान् श्रीकृष्णका साथमा खान थाले।

**कृष्णस्य विष्वक् पुरुराजिमण्डलैरभ्याननाः फुल्लदृशो व्रजार्भकाः ।**
**सहोपविष्टा विपिने विरेजुश्छदा यथाम्भोरुहकर्णिकायाः ॥ ८ ॥**

**पदार्थ–**
**विपिने** = वनमा
**पुरुराजिमण्डलैः सह** = धेरै पङ्क्तिहरूमा मण्डलाकार रूपद्वारा
**कृष्णस्य** = श्रीकृष्णको
**विष्वक्** = वरिपरि
**उपविष्टाः** = बसेका
**अभ्याननाः** = भगवान्तिर मुख फर्काएका
**फुल्लदृशः** = प्रफुल्ल नेत्र भएका
**व्रजार्भकाः** = व्रजका गोप बालकहरू
**अम्भोरुहकर्णिकायाः** = कमलपुष्पको वरिपरि रहेका कुण्डलाकार
**छदाः यथा** = पात झैँ
**विरेजुः** = शोभायमान भए

**वाक्यार्थ–** वनमा भगवान् श्रीकृष्णको वरिपरि मण्डलाकार पङ्क्तिहरूमा बसेका, भगवान्तिर फर्किएका र प्रफुल्ल नेत्र भएका गोपबालकहरू वनभोजमा त्यसरी नै शोभायमान देखिए जसरी कमलपुष्पहरूको वरिपरि रहेका कुण्डलाकार पात शोभायमान हुन्छन्।

**केचित् पुष्पैर्दलैः केचित् पल्लवैरङ्कुरैः फलैः।**
**शिग्भिस्त्वग्भिर्दृषद्भिश्च बुभुजुः कृतभाजनाः॥ ९॥**

**पदार्थ–**
**केचित्** = कोहीले
**पुष्पैः** = फूलहरूद्वारा
**केचित्** = कोहीले
**दलैः** = पातहरूद्वारा
**पल्लवैः** = पालुवाहरूद्वारा
**अङ्कुरैः** = अङ्कुरहरूद्वारा
**फलैः** = फलहरूद्वारा
**शिग्भिः** = खाजा राखिएको पोकाहरूद्वारा
**त्वग्भिः** = रुखको बोक्राहरूद्वारा
**दृषद्भिः च** = ढुङ्गाहरूद्वारा पनि
**कृतभाजनाः** = खाजा राख्ने पात्र बनाएका गोपबालकहरूले
**बुभुजुः** = भोजन गर्न लागे

**वाक्यार्थ–** केही गोप बालकहरूले फूल, केहीले पात, पालुवा, अङ्कुर, फल, खाजा राखिएको पोको, रुखको बोक्रो र ढुङ्गाहरूलाई नै खाजा भाग लगाउने पात्र बनाएर भोजन गर्न लागे।

**सर्वे मिथो दर्शयन्तः स्वस्वभोज्यरुचिं पृथक्।**
**हसन्तो हासयन्तश्चाभ्यवजह्रुः सहेश्वराः॥ १०॥**

**पदार्थ–**
**सहेश्वराः** = भगवान् श्रीकृष्णले सहित भएका
**सर्वे** = सबै गोप बालकहरू
**मिथः** = परस्पर
**पृथक्** = भिन्न–भिन्न
**स्वस्वभोज्यरुचिं** = आ–आफ्नो भोज्य पदार्थ सम्बन्धी रुचि
**दर्शयन्तः** = देखाउँदै
**हसन्तः** = हाँस्दै र
**हासयन्तः च** = हँसाउँदै
**अभ्यवजह्रुः** = भोजन गर्न थाले

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण र अन्य सबै गोप बालकहरू भोजनमा हुने आ–आफ्नो रुचिगत भिन्नता देखाउँदै, हाँस्दै र हँसाउँदै भोजन गर्न थाले।

**बिभ्रद्वेणुं जठरपटयोः शृङ्गवेत्रे च कक्षे**
**वामे पाणौ मसृणकवलं तत्फलान्यङ्गुलीषु।**
**तिष्ठन् मध्ये स्वपरिसुहृदो हासयन् नर्मभिः स्वैः**
**स्वर्गे लोके मिषति बुभुजे यज्ञभुग् बालकेलिः॥ ११॥**

**पदार्थ–**
**जठरपटयोः** = पटुकाको दुई फेरोको बीचमा
**वेणुं** = बाँसुरी
**कक्षे च** = काखीमा
**शृङ्गवेत्रे** = सिँगको बाजा र बेतको लौरो (च्यापेर)
**पाणौ** = हातमा
**मसृणकवलं** = स्निग्ध ठुलो गाँस
**वामे** = देब्रे हातको
**अङ्गुलीषु** = औँलाहरूमा
**तत्फलानि** = त्यसका लागि

(बीचबीचमा खाइने) फलहरू
**बिभ्रत्** = धारण गर्नुभएका
**मध्ये** = सबै गोपहरूको बीचमा
**तिष्ठन्** = बसेर
**स्वपरिसुहृदः** = आफ्नो वरिपरि बसेका गोप साथीहरूलाई
**स्वैः** = आफ्ना
**नर्मभिः** = ठट्टाहरूद्वारा
**हासयन्** = हँसाउँदै गर्नुभएका
**स्वर्गे लोके** = स्वर्गमा बस्ने देवताहरूले
**मिषति** = आश्चर्यपूर्वक हेरिरहँदा
**बालकेलिः** = बालक्रीडा गरिरहनुभएका
**यज्ञभुक्** = समस्त यज्ञहरूका भोक्ता भगवान् श्रीकृष्णले
**बुभुजे** = भोजन गर्न लाग्नुभयो

**वाक्यार्थ–** पटुकाको दुई फेरोको बीचमा बाँसुरी घुसार्नुभएका, काखीमा सिँगले बनेको बाजा र बेतको लौरो च्याप्नुभएका, हातमा स्निग्ध ठुलो गाँस लिनुभएका अनि देब्रे हातका औँलाहरूमा खाना खाँदा बीचबीचमा खाइने फलहरू लिनुभएका भगवान्का वरिपरि गोप बालकहरू बसेका थिए भने उहाँ सबैको बीचमा बसेर ठट्टा गर्दै सबैलाई हँसाइरहनुभएको थियो। समस्त यज्ञहरूका भोक्ता भगवान्ले यसरी बालक्रीडा गरिरहनुभएको यो दृश्य स्वर्गवासी देवताहरूले आश्चर्यपूर्वक हेरिरहेका थिए।

**भारतैवं वत्सपेषु भुञ्जानेष्वच्युतात्मसु।**
**वत्सास्त्वन्तर्वने दूरं विविशुस्तृणलोभिताः॥ १२॥**

**पदार्थ–**
**भारत** = हे भरतवंशी परीक्षित्
**एवं** = यसरी
**अच्युतात्मसु** = भगवान् श्रीकृष्णमा नै तन्मय भएका
**वत्सपेषु** = गोठालाहरूले
**भुञ्जानेषु** = भोजन गर्दागर्दै
**तृणलोभिताः** = घाँसमा लोभिएका
**वत्साः तु** = बाच्छाहरू चाहिँ
**अन्तर्वने** = बीच जङ्गलमा
**दूरं** = धेरै टाढा
**विविशुः** = प्रवेश गरे

**वाक्यार्थ–** हे भरतवंशी परीक्षित्! यसरी भगवान् श्रीकृष्णमा नै तन्मय भएका गोठालाहरूले भोजन गरिरहँदा उता बाच्छाहरू चाहिँ हरिया-हरिया घाँसहरूमा लोभिएर चर्दै जाँदा बीच जङ्गलमा प्रवेश गरी धेरै टाढा पुगे।

**तान् दृष्ट्वा भयसन्त्रस्तानूचे कृष्णोऽस्य भीभयम्।**
**मित्राण्याशान्मा विरमतेहानेष्ये वत्सकानहम्॥ १३॥**

**पदार्थ–**
**अस्य** = यो चराचर जगत्को
**भीभयम्** = भयको पनि भयहेतु
**कृष्णः** = भगवान् श्रीकृष्णले
**भयसन्त्रस्तान्** = बाच्छा नदेखेर अत्यन्त डराएका
**तान्** = ती गोपहरूलाई
**दृष्ट्वा** = देखेर
**ऊचे** = भन्नुभयो
**मित्राणि**= हे साथीहरू
**आशात्** = भोजनबाट
**मा विरमत** = विश्राम नगर
**अहम्** = म
**वत्सकान्** = बाच्छाहरूलाई
**इह** = यहाँ
**आनेष्ये** = ल्याउनेछु

**वाक्यार्थ–** बाच्छाहरू नदेखेर अत्यन्त डराएका गोपहरूलाई सम्पूर्ण जगत्को भय (मृत्यु)को पनि भयरूप भगवान् श्रीकृष्णले भन्नुभयो– हे साथीहरू ! तिमीहरू भोजन गरिरहो, म हराएका सबै बाच्छाहरूलाई खोजेर ल्याउँछु।

**इत्युक्त्वाद्रिदरीकुञ्जगह्वरेष्वात्मवत्सकान्।**
**विचिन्वन् भगवान् कृष्णः सपाणिकवलो ययौ ॥ १४ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार (गोपहरूलाई)
**उक्त्वा** = भनेर
**सपाणिकवलः** = हातमा गाँस लिनुभएका
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**आत्मवत्सकान्** = आफ्ना बाच्छाहरूलाई
**विचिन्वन्** = खोज्दै
**अद्रिदरीकुञ्जगह्वरेषु** = पर्वत, ओडार, कुञ्ज र गुफाहरूमा
**ययौ** = पुग्नुभयो

**वाक्यार्थ–** यसप्रकार गोपहरूलाई भनेर हातमा गाँस लिनुभएका भगवान् श्रीकृष्ण आफ्ना बाच्छाहरूलाई खोज्दै पर्वत, ओडार, कुञ्ज र गुफाहरूमा पुग्नुभयो।

**अम्भोजन्मजनिस्तदन्तरगतो मायार्भकस्येशितु-**
**र्द्रष्टुं मञ्जु महित्वमन्यदपि तद्वत्सानितो वत्सपान्।**
**नीत्वान्यत्र कुरूद्वहान्तरदधात् खेऽवस्थितो यः पुरा**
**दृष्ट्वाघासुरमोक्षणं प्रभवतः प्राप्तः परं विस्मयम् ॥ १५ ॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुवंशी परीक्षित्
**यः** = जो (ब्रह्माजी)
**पुरा** = पहिला
**खे** = आकाशमा
**अवस्थितः** = बसेर
**प्रभवतः** = प्रभु श्रीकृष्णबाट
**अघासुरमोक्षणं** = अघासुरको मुक्ति
**दृष्ट्वा** = देखेर
**परं** = अत्यन्त
**विस्मयम्** = आश्चर्यमा
**प्राप्तः** = प्राप्त हुनुभएको थियो
**अम्भोजन्मजनिः** = कमलबाट उत्पन्न हुनुभएका ब्रह्माजीले
**तदन्तरगतः** = श्रीकृष्ण बाच्छाहरूलाई खोज्न जानुभएको वेलामा आएर
**मायार्भकस्य** = आफ्नै इच्छाले बालक्रीडालाई स्वीकार गर्नुभएका
**ईशितुः** = सर्वेश्वर भगवान्को
**अन्यद् अपि** = अरू पनि
**मञ्जु** = अति मनोहर
**महित्वम्** = महिमालाई
**द्रष्टुं** = हेर्नका लागि
**तद्वत्सान्** = भगवान्का बाच्छा र
**वत्सपान्** = गोपहरूलाई
**इतः** = त्यहाँ (यमुनाको तट)बाट
**अन्यत्र** = अन्तै
**नीत्वा** = लगी
**अन्तरदधात्** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** हे कुरुवंशी परीक्षित् ! पहिला ब्रह्माजी आकाशमा बसेर भगवान्ले अघासुरलाई मुक्ति प्रदान गरेको लीला हेर्दा आश्चर्यचकित हुनुभएको थियो। कमलबाट उत्पन्न ब्रह्माजीलाई

मनुष्यबालक बन्नुभएका सर्वेश्वर भगवान् श्रीकृष्णका अरू पनि मनोरम महिमाहरू हेर्न मन लाग्यो। यसैले जब भगवान् हराएका बाच्छाहरू खोज्न जानुभयो, तब ब्रह्माजीले बाच्छा र गोप बालकहरूलाई यमुना नदीतटबाट अन्यत्रै लगेर लुकाउनुभयो र आफू पनि अन्तर्धान हुनुभयो। (ब्रह्माजी आखिर जड कमलबाटै उत्पन्न हुनुभएको न हो, त्यसैले उहाँले यस्तो जडतापूर्ण कार्य गर्नुभयो।)

**ततो वत्सानदृष्ट्वैत्य पुलिनेऽपि च वत्सपान्।**
**उभावपि वने कृष्णो विचिकाय समन्ततः ॥ १६ ॥**

**पदार्थ–**
**कृष्णः** = श्रीकृष्णले
**वत्सान्** = बाच्छाहरूलाई
**अदृष्ट्वा** = नदेखेर
**ततः** = त्यसबाट
**एत्य च** = फर्किएर
**पुलिने** = यमुनातटमा पनि
**वत्सपान् अपि** = गोप साथीहरूलाई पनि (नदेखेर)
**समन्ततः** = चारैतिर
**वने** = वनमा
**उभौ अपि** = दुबै बाच्छा र साथीहरूलाई
**विचिकाय** = खोज्न थाल्नुभयो

**वाक्यार्थ–** बाच्छा खोज्न जानुभएका भगवान् श्रीकृष्णले बाच्छाहरूलाई कहीँ पनि देख्नुभएन अनि फर्किएर यमुनातटमा आएर हेर्दा गोप साथीहरूलाई पनि देख्नुभएन। त्यसपछि उहाँले बाच्छा र गोप साथीहरूलाई वनको चारैतिर खोज्न थाल्नुभयो।

**क्वाप्यदृष्ट्वान्तर्विपिने वत्सान् पालांश्च विश्ववित्।**
**सर्वं विधिकृतं कृष्णः सहसावजगाम ह ॥ १७ ॥**

**पदार्थ–**
**विश्ववित्** = (विश्वलाई नै जान्नुहुने) सर्वज्ञ
**कृष्णः** = श्रीकृष्णले
**अन्तर्विपिने** = वनभित्र
**क्व अपि** = कहीँ पनि
**वत्सान्** = बाच्छाहरूलाई
**पालान् च** = गोपहरूलाई पनि
**अदृष्ट्वा** = नदेखेर
**ह** = निश्चय नै
**सर्वं** = सबै काम (गोप र बाच्छाहरूको हरण आदि कर्म)
**विधिकृतं** = ब्रह्माजीले गर्नुभएको हो भनी
**सहसा** = तुरुन्त
**अवजगाम** = थाहा पाउनुभयो

**वाक्यार्थ–** सर्वज्ञ भगवान् श्रीकृष्णले वनभित्र कहीँ पनि बाच्छाहरूलाई नदेखेपछि यो सब काम ब्रह्माजीबाट भएको हो भन्ने कुरा तत्काल थाहा पाउनुभयो।

**ततः कृष्णो मुदं कर्तुं तन्मातॄणां च कस्य च।**
**उभयायितमात्मानं चक्रे विश्वकृदीश्वरः ॥ १८ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (ब्रह्माको कर्तुत थाहा पाएपछि)
**विश्वकृत्** = विश्वका निर्माता
**ईश्वरः** = सर्वशक्तिमान्
**कृष्णः** = श्रीकृष्णले

**तन्मातृणां च** = ती गोपहरूका र बाच्छाहरूकी आमा (गाई) हरूलाई र
**कस्य च** = ब्रह्माजीलाई पनि
**मुदं** = प्रसन्न
**कर्तुं** = गर्नका लागि
**आत्मानं** = आफूलाई
**उभयायितम्** = दुबै (गोप र बाच्छाको) रूपको
**चक्रे** = बनाउनुयो

**वाक्यार्थ–** सम्पूर्ण संसारका निर्माता सर्वशक्तिमान् भगवान् श्रीकृष्णले ब्रह्माको कर्तुत थाहा पाएपछि गोप बालकहरूका आमाहरूलाई, गाईहरूलाई र स्वयं ब्रह्माजीलाई पनि प्रसन्न बनाउनका लागि आफूलाई नै गोप र बाच्छाहरूको रूपको बनाउनुभयो।

**यावद् वत्सपवत्सकाल्पकवपुर्यावत् कराङ्घ्र्यादिकं**
**यावद् यष्टिविषाणवेणुदलशिग् यावद् विभूषाम्बरम्।**
**यावच्छीलगुणाभिधाकृतिवयो यावद् विहारादिकं**
**सर्वं विष्णुमयं गिरोऽङ्गवदजः सर्वस्वरूपो बभौ ॥ १९ ॥**

**पदार्थ–**
**यावत्** = जति र जस्ता छन् (त्यस्तै)
**वत्सपवत्सकाल्पकवपुः** = गोप र बाच्छाहरूको जस्तै सानो शरीरवाला हुनुभएका
**यावत्** = जस्ता-जस्ता (बाच्छा र गोपका)
**कराङ्घ्र्यादिकं** = हात, पाउ छन्, त्यस्तै बनाउनुभएका
**यावत्** = जस्ता-जस्ता (गोप र बाच्छाहरूका)
**यष्टिविषाणवेणुदलशिक्** = लौरो, सिँग, बाँसुरी, पात र खाजा राख्ने पोका छन् त्यस्तै रूपहरू धारण गर्नुभएका
**यावत्** = जस्ता-जस्ता (गोप र बाच्छाका)
**विभूषाम्बरम्** = गहना र वस्त्र छन्, त्यस्तै रूप धारण गर्नुभएका
**यावत्** = जस्ता-जस्ता (गोप र बाच्छाका)
**शीलगुणाभिधाकृतिवयः** = स्वभाव, गुण, नाम, रूप र उमेर छन्, त्यस्तै आफूलाई पनि बनाउनुभएका
**यावत्** = जसरी (गोप र बाच्छाले)
**विहारादिकं** = खान-पान, क्रीडा आदि व्यवहार गर्दथे, त्यसरी नै व्यवहार गर्नुभएका
**अजः** = जन्मरहित श्रीकृष्ण
**सर्वस्वरूपः** = सर्वस्वरूप भई
**सर्वं विष्णुमयं** = सम्पूर्ण पदार्थहरू विष्णुरूप छन् भन्ने
**गिरः** = वेदवाणीलाई
**अङ्गवत्** = आफ्नै अङ्ग झैँ प्रत्यक्ष चरितार्थ गराई
**बभौ** = शोभायमान हुनुभयो

**वाक्यार्थ–** ब्रह्माजीद्वारा अपहृत गोप र बाच्छाहरू साना-ठुला जस्ता थिए, जति सङ्ख्यामा थिए, उनीहरूको हात, पाउ आदि अङ्ग जस्तो थियो, भगवान् श्रीकृष्णले आफूलाई त्यही सङ्ख्या र त्यही रूपको बनाउनुभयो। गोप र बाच्छाहरूले बोकेको लौरो, सिँग, बाँसुरी पात र खाजा बोक्ने पोकाहरू जस्ता थिए त्यस्तै आफूले पनि धारण गर्नुभयो। उनीहरूले लगाएको गहना, वस्त्र अनि उनीहरूको स्वभाव, गुण, नाम, रूप, उमेर आदि पनि त्यस्तै बनाउनुभयो। गोप र बाच्छाहरूले जसरी खान-पान, क्रीडा आदि व्यवहार गर्दथे, त्यस्तै विहार आफूले पनि गर्न थाल्नुभयो। यसरी

भगवान् श्रीकृष्ण सर्वस्वरूप भएर शोभायमान हुनुभयो र 'सम्पूर्ण पदार्थहरू विष्णुरूप छन्' भन्ने वेदवाणीलाई आफ्नै अङ्गलाई जैँ प्रत्यक्षरूपमा चरितार्थ गराउनुभयो।

**स्वयमात्मात्मगोवत्सान् प्रतिवार्यात्मवत्सपैः।**
**क्रीडन्नात्मविहारैश्च सर्वात्मा प्राविशद् व्रजम्॥ २०॥**

**पदार्थ–**
**स्वयम्** = आफैँ
**आत्मा** = आत्मस्वरूप भगवान्
**आत्मवत्सपैः** = आत्मरूप गोपहरूद्वारा
**आत्मगोवत्सान्** = आत्मरूप गाईबाच्छाहरूलाई
**प्रतिवार्य** = वनबाट फर्काएर
**आत्मविहारैः च** = आत्मरूप विभिन्न खेलहरू
**क्रीडन्** = खेल्दै
**सर्वात्मा** = सर्वात्मस्वरूप भएर
**व्रजम्** = व्रजमा
**प्राविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** आत्मस्वरूप भगवान् आफैँ आत्मरूप गोपहरूद्वारा आत्मरूप गाईबाच्छाहरूलाई वनबाट फर्काएर आत्मरूप विभिन्न खेलहरू खेल्दै सर्वात्मस्वरूप भएर व्रजमा प्रवेश गर्नुभयो।

**तत्तद्वत्सान् पृथङ् नीत्वा तत्तद्गोष्ठे निवेश्य सः।**
**तत्तदात्माभवद्राजंस्तत्तत्सद्म प्रविष्टवान्॥ २१॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्तद्वत्सान्** = ती-ती बाच्छाहरूलाई
**पृथक्** = अलग-अलग रूपमा
**नीत्वा** = लगेर
**तत्तद्गोष्ठे** = ती-ती गोठहरूमा
**निवेश्य** = राखेर
**तत्तदात्मा** = ती-ती गोपबालकको रूपमा
**अभवत्** = हुनुभयो र
**सः** = सर्वात्मा भगवान् पनि
**तत्तत्सद्म** = ती-ती गोपबालकहरूको घरमा
**प्रविष्टवान्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! सर्वात्मा भगवान्ले भिन्न-भिन्न गोपबालकका भिन्न-भिन्न बाच्छाहरूलाई अलग-अलग रूपमा लगेर तिनीहरूको आ-आफ्नो गोठमा राख्नुभयो। अनि आफू पनि ती सबै गोपबालकहरूको रूपमा उनीहरूको भिन्न-भिन्न घरमा प्रवेश गर्नुभयो।

**विवरण–** माथिका तीन श्लोकमा भगवान् श्रीकृष्ण सबै गोपबालक अनि गाईबाच्छा आदिको रूपमा प्रकट हुनुभयो भनी बताइएको छ। परमात्माले **पुरुष एवेदं सर्वं यद्भूतं यच्च भाव्यम्** (शुक्लयजुर्वेद, ३१/२) अर्थात् भूत र भविष्यत् कालका जति वस्तु छन्, ती सबै परमपुरुष रूप नै हुन् भन्ने वेदवचनलाई यस प्रसङ्गद्वारा सिद्ध गरी देखाउनुभयो। भगवान्ले सबै आफैँ बनेर यस्तो अचम्मको लीला किन गर्नुभयो? यसको उत्तर हो– **तन्मातॄणां कस्य च मुदं कर्तुम्** अर्थात् गोपहरूका आमा अनि ब्रह्माजीको पनि खुसीका लागि। भगवान् सर्वसमर्थ हुनुहुन्छ, उहाँले ब्रह्माजीले लुकाएका गोप र बाच्छाहरूलाई सजिलै ल्याउन सक्नुहुन्थ्यो। यदि भगवान्ले ब्रह्माजीले लुकाएका सबैलाई त्यसरी ल्याउनुभएको भए आफूले गरेको काम असफल भएको देखेर ब्रह्माजी दुःखी हुनुहुन्थ्यो, अनि भगवान् एक्लै घर जानुभएको भए ती गोपका आमाहरू दुःखी हुन्थे, दुबै

दुःखी नहोऊन् भनेर भगवान्ले यस्तो लीला रच्नुभयो।

यस प्रसङ्गले श्रीकृष्ण सर्वज्ञ, सर्वसमर्थ र सत्यसङ्कल्प हुनुहुन्छ भन्ने पुष्टि गर्दछ। सर्वज्ञ नभएको भए उहाँले ती सबै गोपहरूका नाम, उमेर, शील-स्वभाव र रुचिलाई कसरी जान्नुहुन्थ्यो ? यदि कसैको व्यवहारमा या आनीबानीमा अलिकति मात्र पनि फरक परेको भए उनीहरूका आमा-बाबुले थाहा पाइहाल्थे र लीलाको रहस्य तत्काल भङ्ग हुन्थ्यो। साक्षात् शेषरूप बलरामले समेत एक वर्ष पूरा बित्न लाग्दा मात्र यो रहस्य थाहा पाउनुभएको छ। यो लीला देखाएर मानौँ परमात्माले आफ्नो सर्वशक्तिमत्ता र सत्यसङ्कल्पलाई प्रकट गर्दै ब्रह्माजीलाई उत्तर दिनुहुँदै थियो— 'हे ब्रह्मा ! तिमी सृष्टिकर्ता भएको अभिमानमा परी मेरो ईश्वरत्वको परीक्षा लिँदैछौ। हेर तिमीलाई प्राणीहरूको सृष्टि गर्नका लागि तिनका कर्म, वासना र संस्कारहरूको अनि पञ्चमहाभूतरूपी उपादानको आवश्यकता पर्दछ। तर म त कुनै साधनविना पनि जगत्को रचना गर्न सक्दछु।' वेदान्तसिद्धान्त अनुसार यो ब्रह्मविवर्तवाद हो। यसमा परमात्मा आफ्नो स्वरूपलाई नछाडी अनेक रूपमा प्रतीत हुनुभएको मानिन्छ। छान्दोग्योपनिषद् (६/२/३)मा **तदैक्षत बहु स्यां प्रजायेय** अर्थात् सृष्टि गर्ने वेलामा परमात्माले एकबाट अनेक हुने इच्छा या विचार गर्नुभयो भनी बताइएको छ। यहाँ पनि परमात्माले आफ्नो सङ्कल्पबाटै सर्वरूप धारण गरी यही रहस्यलाई स्पष्टतः देखाइदिनुभएको हो।

**तन्मातरो वेणुरवत्वरोत्थिता उत्थाप्य दोर्भिः परिरभ्य निर्भरम्।**
**स्नेहस्नुतस्तन्यपयः सुधासवं मत्वा परं ब्रह्म सुतानपाययन्॥ २२॥**

पदार्थ–
**वेणुरवत्वरोत्थिताः** = बाँसुरीको आवाज सुनेर छिटो-छिटो उठेका
**तन्मातरः** = ती गोपका आमाहरू
**परं ब्रह्म** = परब्रह्म श्रीकृष्णलाई
**सुतान्** = आफ्नै छोरा
**मत्वा** = ठानेर
**दोर्भिः** = हातद्वारा
**उत्थाप्य** = उठाएर
**निर्भरम्** = ज्यादै स्नेहका साथ
**परिरभ्य** = आलिङ्गन गरेर
**सुधासवं** = अमृत र आसव जस्तो (मिठो र शक्तिदायक)
**स्नेहस्नुतस्तन्यपयः** = पुत्रवात्सल्यका कारण स्तनबाट चुहिँदै गरेको दुध
**अपाययन्** = पियाए

**वाक्यार्थ–** आफ्ना छोराहरूले बजाएको बाँसुरीको आवाज सुनेर छिटो-छिटो उठेर आएका गोपका आमाहरूले परब्रह्म श्रीकृष्णलाई आफ्नै छोरो ठाने अनि आफ्ना हातले तिनलाई उचालेर स्नेहपूर्वक आलिङ्गन गरे अनि पुत्रवात्सल्यका कारण आफ्ना स्तनबाट चुहिरहेको अमृत र आसव जस्तो मिठो र शक्तिदायक दुध पियाए।

**ततो नृपोन्मर्दनमज्जलेपनालङ्काररक्षातिलकाशनादिभिः।**
**संलालितः स्वाचरितैः प्रहर्षयन् सायं गतो यामयमेन माधवः॥ २३॥**

**पदार्थ–**
**नृप** = हे राजा
**ततः** = त्यसपछि
**यामयमेन** = ती ती समयमा गरिने दैनिक क्रीडाद्वारा
**सायं** = बेलुकीपख
**स्वाचरितैः** = वनबाट बाँसुरी बजाउँदै फर्किने आदि आफ्ना कर्महरूद्वारा
**प्रहर्षयन्** = आफ्नी आमाहरूलाई आनन्दित तुल्याउँदै
**गतः** = घर फर्कनुभएका
**माधवः** = भगवान् श्रीकृष्ण (आमाहरूको)
**उन्मर्दनमज्जलेपनालङ्काररक्षा-तिलकाशनादिभिः** = बुकुवा घसेर माडिदिने, नुहाइदिने, चन्दन र आभूषणहरू लगाइदिने, गाईको पुच्छर घुमाउँदै जङ्गली वायुले पीडा नदेओस् भनेर रक्षा गर्ने, खुवाइदिने आदि कामद्वारा
**संलालितः** = पालित हुनुभयो

**वाक्यार्थ–** हे राजा ! भगवान्ले गोपबालकहरूले जस्तै तत्तत् कालमा गरिने क्रीडाहरू गर्नुहुन्थ्यो। सायङ्कालमा गाई लिएर बाँसुरी बजाउँदै घर आइपुग्नुहुन्थ्यो र आफ्ना आमाहरूलाई आनन्दित तुल्याउनुहुन्थ्यो। भगवान् श्रीकृष्णलाई आफ्नै छोरो ठानेर गोपिनी (आमा)हरूले बुकुवा घसेर माडिदिने, नुहाइदिने, चन्दन आदि लगाइदिने, आभूषणहरू लगाइदिने, गाईको पुच्छर घुमाउँदै जङ्गली वायुले पीडा नदेओस् भनेर रक्षा गर्ने, खाना खुवाइदिने आदि काम गरेर उहाँको पालन–पोषण गर्दथे।

**गावस्ततो गोष्ठमुपेत्य सत्वरं हुङ्कारघोषैः परिहूतसङ्गतान्।**
**स्वकान् स्वकान् वत्सतरानपाययन् मुहुर्लिहन्त्यः स्रवदौधसं पयः॥ २४ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (वनबाट फर्किएपछि)
**गावः** = गाईहरूले
**सत्वरं** = छिटो–छिटो
**गोष्ठं** = गोठमा
**उपेत्य** = आएर
**हुङ्कारघोषैः** = हुङ्कार शब्दद्वारा
**परिहूतसङ्गतान्** = बोलाइएर आएका
**स्वकान् स्वकान्** = आ–आफ्ना
**वत्सतरान्** = बाच्छाहरूलाई
**मुहुः** = बारम्बार
**लिहन्त्यः** = चाट्दै
**स्रवत्** = चुहिएको
**औधसं** = कल्चौंडोबाट चुहिरहेको
**पयः** = दुध
**अपाययन्** = पियाए

**वाक्यार्थ–** वनमा चर्न गएका गाईहरूले वनबाट फर्किएर गोठमा आएपछि हुङ्कार शब्द गरेर आ–आफ्ना बाच्छाहरूलाई बोलाउँथे। त्यो शब्द सुनेर बाच्छाहरू पनि आ–आफ्नो आमा भएको ठाउँमा आइपुग्थे। अनि ती गाईहरूले बाच्छालाई स्नेहपूर्वक चाट्दै आफ्नो कल्चौंडोबाट चुहिरहेको दुध पियाउँथे।

**गोगोपीनां मातृतास्मिन् सर्वा स्नेहर्धिकां विना।**
**पुरोवदास्वपि हरेस्तोकता मायया विना॥ २५॥**

**पदार्थ–**
**गोगोपीनां** = गाई र गोपिनीहरूको

**अस्मिन्** = पुत्ररूप यी श्रीकृष्णमा
**स्नेहर्धिकां विना** = स्नेहको आधिक्य बाहेक
**सर्वा** = सबै
**मातृता** = लालनपालन आदि मातृस्नेह
**पुरोवत्** = पहिलेका पुत्रहरूमा जस्तै थियो
**हरेः** = श्रीकृष्णको
**आसु अपि** = यी गाई र गोपिनीहरूमा पनि
**मायया विना** = मोह बाहेक (यी मेरी आमा र म यिनको पुत्र भन्ने बाहेक)
**स्तोकता** = बालापन (पहिलेका पुत्रहरूमा जस्तै थियो)

**वाक्यार्थ–** गाई र गोपिनीहरूको श्रीकृष्णरूप पुत्रमा लालनपालन आदि मातृस्नेह पहिलेका पुत्रहरूमा जस्तै थियो, तर पुत्ररूप श्रीकृष्णमा पहिलेका पुत्रहरूमा भन्दा स्नेह धेरै थियो। त्यस्तै भगवान्ले पनि पहिलेका पुत्रहरूले जस्तै गाई र गोपिनीहरू समक्ष बालापन देखाउनुभएको थियो, तर भगवान्मा 'म यिनको पुत्र हुँ र यिनी मेरी आमा हुन्' भन्ने मोह थिएन।

**विवरण–** यस श्लोकमा भगवान्को सर्वरूपधारण लीलामा अरू सबै व्यवहार समान नै थिए, तर दुई कुरामा चाहिँ समता भएन भनी बताइएको छ। गाई र गोपिनीहरू, जो-जो ज-जसका आमा थिए, तिनमा मातृत्वको व्यवहार पहिले जस्तै थियो, तर स्नेहको मात्रा चाहिँ अलि बढी थियो। पहिला-पहिला यी सबै गोपिनीहरू र गाईहरूले आ-आफ्ना छोराहरूलाई सामान्य रूपमा माया गर्थे र विशेष प्रेम चाहिँ श्रीकृष्णसँग नै गर्दथे, तर अहिले श्रीकृष्ण नै छोरा भएर आएकाले आफ्ना छोराहरूप्रति उनीहरूको स्नेह श्रीकृष्णकै समान असीम भई बढ्दै गइरहेको थियो। परमात्माले मायाद्वारा आफ्नो स्वरूपलाई जति छोप्न खोजे पनि त्यसबाट स्वभावतः फैलिने प्रेम र आनन्दको प्रकाशलाई उहाँले पनि रोक्न सक्नुहुन्न भन्नु यसको तात्पर्य हो। अर्को अन्तर चाहिँ गोपहरू र बाच्छाहरूमा देखियो। ती सबै पहिले जसरी नै आ-आफ्ना आमाहरूसँग बच्चा भई बसेका थिए, तर उनीहरूमा पहिले जस्तो आसक्ति भने थिएन। यी मेरी आमा हुन् र म यिनको छोरा हुँ भन्ने यस्तो शरीरलाई आत्मा मान्ने भ्रम ती बच्चाहरूमा थिएन। उनीहरू आफूलाई भित्र-भित्र ब्रह्मरूप नै ठान्दथे। परमात्माले मायालाई स्वीकार गरे पनि नित्यज्ञानरूप उहाँमा मायाद्वारा भ्रम उत्पन्न हुनै सक्दैन भन्नु यसको तात्पर्य हो।

**व्रजौकसां स्वतोकेषु स्नेहवल्ल्याब्दमन्वहम्।**
**शनैर्निःसीम ववृधे यथा कृष्णे त्वपूर्ववत्॥ २६॥**

**पदार्थ–**
**व्रजौकसां तु** = व्रजवासीहरूको
**कृष्णे यथा** = (यशोदानन्दन) श्रीकृष्णमा झैँ
**स्वतोकेषु** = आफ्ना छोराहरूमा
**अपूर्ववत्** = अगाडिको भन्दा विलक्षण
**निःसीम** = सीमारहित
**स्नेहवल्ली** = स्नेहको विस्तार
**अन्वहम्** = प्रतिदिन
**शनैः** = बिस्तारै-बिस्तारै
**आब्दम्** = एक वर्षसम्म
**ववृधे** = बढ्दै गयो

**वाक्यार्थ–** पहिले व्रजवासीहरूको आफ्ना पुत्रहरूमा भन्दा धेरै प्रेम यशोदानन्दन श्रीकृष्णमा थियो तर अहिले त्यत्ति नै प्रेम उनीहरूले आफ्नो पुत्रहरूलाई गर्न थाले। अहिलेको उनीहरूको

पुत्रप्रेम पहिलेको भन्दा विलक्षण र सीमारहित थियो। उनीहरूको पुत्रप्रतिको स्नेह प्रतिदिन बिस्तारै-बिस्तारै गरी एक वर्षसम्म बढ्दै गयो।

**इत्थमात्मात्मनात्मानं वत्सपालमिषेण सः।**
**पालयन् वत्सपो वर्षं चिक्रीडे वनगोष्ठयोः॥ २७॥**

**पदार्थ**–
**इत्थम्** = यसरी
**आत्मा** = सर्वात्मा
**सः** = ती श्रीकृष्णले
**वत्सपालमिषेण** = बाच्छा र गोपको बहानामा
**वत्सपः** = गोप भएर
**आत्मना** = बालरूप आफैँले
**आत्मानं** = बाच्छारूप आफैँलाई
**पालयन्** = पालन गर्दै
**वर्षं** = एक वर्षसम्म
**वनगोष्ठयोः** = वन र गोठमा
**चिक्रीडे** = क्रीडा गर्नुभयो

**वाक्यार्थ**– यसरी सर्वात्मा भगवान् श्रीकृष्णले बाच्छा र गोपबालकको छद्मरूप धारण गरेर स्वयं आफू गोपबालक भई गोपबालकरूप आफैँले बाच्छारूप आफैँलाई पालन गर्नुभयो र एक वर्षसम्म वन र गोठमा यही रूपमा क्रीडा गर्नुभयो।

**एकदा चारयन् वत्सान् सरामो वनमाविशत्।**
**पञ्चषासु त्रियामासु हायनापूरणीष्वजः॥ २८॥**

**पदार्थ**–
**एकदा** = एक दिन
**हायनापूरणीषु** = एक वर्ष पुग्न
**पञ्चषासु** = पाँच वा छ
**त्रियामासु** = रात्रि (बाँकी रहेको वेला)
**सरामः** = बलरामले सहित
**अजः** = जन्मरहित श्रीकृष्ण
**वत्सान्** = बाच्छाहरू
**चारयन्** = चराउँदै
**वनम्** = व्रजको वनमा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ**– एक दिनको कुरा हो, एक वर्ष पुग्नलाई पाँच वा छ रात बाँकी रहँदा दाजु बलरामका साथमा भगवान् श्रीकृष्ण गाईबाच्छाहरू चराउँदै व्रजभूमिको वनमा प्रवेश गर्नुभयो।

**ततो विदूराच्चरतो गावो वत्सानुपव्रजम्।**
**गोवर्धनाद्रिशिरसि चरन्त्यो ददृशुस्तृणम्॥ २९॥**

**पदार्थ**–
**गोवर्धनाद्रिशिरसि** = गोवर्धन पर्वतको चुचुरामा
**तृणम्** = घाँस
**चरन्त्यः** = चरिरहेका
**गावः** = गाईहरूले
**ततः** = त्यहाँबाट
**विदूरात्** = टाढा
**उपव्रजं** = व्रजको नजिकै
**चरतः** = चरिरहेका
**वत्सान्** = बाच्छाहरूलाई
**ददृशुः** = देखे

**वाक्यार्थ**– त्यस वेला गोवर्धन पर्वतको चुचुरामा चरिरहेका गाईहरूले त्यहाँबाट धेरै टाढा व्रजको नजिकै चरिरहेका आफ्ना बाच्छाहरूलाई देखे।

**दृष्ट्वाथ तत्स्नेहवशोऽस्मृतात्मा स गोव्रजोऽत्यात्मपदुर्गमार्गः।**
**द्विपात् ककुद्ग्रीव उदास्यपुच्छोऽगाद्धुङ्कृतैरास्नुपया जवेन॥ ३०॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**दृष्ट्वा** = (बाच्छाहरूलाई) देखेर
**तत्स्नेहवशः** = बाच्छाहरूको स्नेहको वशमा परेको
**सः गोव्रजः** = गाईको त्यो समूह
**अस्मृतात्मा** = आफूलाई नै बिर्सिएर
**अत्यात्मपदुर्गमार्गः** = आफ्ना रक्षक गोपहरूको नियन्त्रण र असजिलो बाटोलाई बेवास्ता गरी
**द्विपात्** = दुई खुट्टे झैँ भएर
**ककुद्ग्रीवः** = जुरोतिर घाँटी उचालेर
**उदास्यपुच्छः** = मुख र पुच्छर ठाडो पारेर
**आस्नुपयाः** = थुनबाट दुध चुहाउँदै
**हुङ्कृतैः** = हुङ्कार शब्द गर्दै
**जवेन** = वेगपूर्वक
**अगात्** = (बाच्छाको नजिक) गयो

**वाक्यार्थ–** आफ्ना बाच्छाहरूलाई देख्नासाथ गाईहरू बाच्छाको स्नेहको वशमा परे अनि आफैँलाई बिर्सिए। गोपहरूको नियन्त्रण तथा कठिन बाटोलाई समेत बेवास्ता गर्दै दुई खुट्टे जन्तु झैँ उनीहरू दौडिए। घाँटी जुरोतिर उचालेर, मुख र पुच्छर ठाडो पारेर दौडिएका गाईहरू थुनबाट दुधको धारा बगाउँदै हुङ्कार शब्द गर्दै वेगपूर्वक बाच्छाको नजिक पुगे।

**समेत्य गावोऽधो वत्सान् वत्सवत्योऽप्यपाययन्।**
**गिलन्त्य इव चाङ्गानि लिहन्त्यः स्वौधसं पयः॥ ३१॥**

**पदार्थ–**
**वत्सवत्यः** = बाच्छा भएका (फेरि बाच्छा पाइसकेका)
**गावः अपि** = गाईहरूले पनि
**वत्सान्** = (आफ्ना पहिलाका) बाच्छाहरूलाई देखेर
**अधः** = (गोवर्धन पर्वतको) तल
**समेत्य** = बाच्छा भएको ठाउँमा आएर
**अङ्गानि** = अङ्गहरूलाई
**गिलन्त्यः इव** = निलूँला झैँ गरेर
**लिहन्त्यः च** = चाटेर
**स्वौधसं** = आफ्नो कल्चौँडाको
**पयः** = दुध
**अपाययन्** = पियाए

**वाक्यार्थ–** अर्को बाच्छो पाइसकेका गाईहरूले पनि आफ्ना पहिलाका बाच्छाहरूलाई गोवर्धन पर्वतको फेदीमा चरिरहेको देखेर आ–आफ्ना बाच्छा भएको ठाउँमा आई उनीहरूको अङ्ग–प्रत्यङ्गलाई निलूँला झैँ गरेर चाटे अनि कल्चौँडामा भएको दुध पियाए।

**गोपास्तद्रोधनायासमौघ्यलज्जोरुमन्युना।**
**दुर्गाध्वकृच्छ्रतोऽभ्येत्य गोवत्सैर्ददृशुः सुतान्॥ ३२॥**

**पदार्थ–**
**तद्रोधनायासमौघ्यलज्जोरुमन्युना** = गाईहरूलाई रोक्न खोज्दा असफल भएकाले उठेको लज्जा र अधिक क्रोधका साथ (आएका)
**दुर्गाध्वकृच्छ्रतः** = असजिलो बाटोबाट हिँड्नु परेकाले थाकेका

**गोपाः** = गोपहरूले
**अभ्येत्य** = गाई भएको ठाउँमा आएर
**गोवत्सैः** = गाईका बाच्छाहरूसँग
**सुतान्** = आफ्ना छोराहरूलाई
**ददृशुः** = देखे

**वाक्यार्थ–** गाईहरूलाई रोक्न खोज्दा असफल भएकाले लाज मानेका र ज्यादै रिसाएका अनि असजिलो बाटोबाट हिँड्नु परेकाले थाकेका गोपहरूले गाईहरू भएको ठाउँमा आइपुग्दा त्यहाँ गाईका बाच्छाहरूसँगै आफ्ना छोराहरूलाई देखे।

**तदीक्षणोत्प्रेमरसाप्लुताशया जातानुरागा गतमन्यवोऽर्भकान्।**
**उदुह्य दोर्भिः परिरभ्य मूर्धनि घ्राणैरवापुः परमां मुदं ते॥ ३३॥**

**पदार्थ–**
**तदीक्षणोत्प्रेमरसाप्लुताशयाः** = ती छोराहरूलाई देख्नाले प्रेमरसमा हृदय भिजेका
**जातानुरागाः** = प्रेमले हुरुक्क भएका
**गतमन्यवः** = रिस हराएका
**ते** = ती गोपहरूले
**अर्भकान्** = आफ्ना बालकहरूलाई
**दोर्भिः** = हातले
**उदुह्य** = उठाएर
**परिरभ्य** = आलिङ्गन गरेर
**मूर्धनि** = (तिनीहरूको) शिरमा
**घ्राणैः** = सुँघेर
**परमां** = अत्यन्त
**मुदं** = हर्ष
**अवापुः** = प्राप्त गरे

**वाक्यार्थ–** आफ्ना छोराहरूलाई देख्नासाथ गोपहरूको हृदय वात्सल्यले भिज्यो अनि उनीहरूले आ–आफ्ना बालकहरूलाई हातले उठाएर आलिङ्गन गरे अनि उनीहरूको शिर सुँघेर अत्यन्त खुसी भए।

**ततः प्रवयसो गोपास्तोकाश्लेषसुनिर्वृताः।**
**कृच्छ्राच्छनैरपगतास्तदनुस्मृत्युदश्रवः॥ ३४॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**स्तोकाश्लेषसुनिर्वृताः** = बालक छोराहरूलाई आलिङ्गन गरेर फर्किएका
**तदनुस्मृत्युदश्रवः** = पुत्रहरूको स्मरणका कारण आँसु चुहिरहेका
**प्रवयसः** = बुढा
**गोपाः** = गोपहरू
**कृच्छ्रात्** = कष्टपूर्वक
**शनैः** = बिस्तारै
**अपगताः** = गए

**वाक्यार्थ–** आफ्ना बालक छोराहरूलाई आलिङ्गन गरेर परम आनन्द प्राप्त गरेका बुढा गोपहरूले छोराहरूलाई त्यहीं छोडेर अत्यन्त कष्टपूर्वक त्यहाँबाट बिस्तारै फर्किए, फर्किंदा उनीहरूलाई छोराहरूको सम्झना भयो, त्यसैले उनीहरूको आँखाबाट आँसु बग्न थाल्यो।

**व्रजस्य रामः प्रेमर्धेर्वीक्ष्यौत्कण्ठ्यमनुक्षणम्।**
**मुक्तस्तनेष्वपत्येष्वप्यहेतुविदचिन्तयत्॥ ३५॥**

**पदार्थ–**
**मुक्तस्तनेषु** = दुध चुस्न छोडिसकेका
**अपत्येषु अपि** = सन्तानहरूमा पनि
**व्रजस्य** = व्रजवासी गोपिनी र गाईहरूको
**प्रेमर्धेः** = प्रेमसम्पत्तिको
**अनुक्षणम्** = प्रतिक्षण
**औत्कण्ठ्यम्** = उत्कण्ठा (वृद्धि)
**वीक्ष्य** = देखेर
**अहेतुवित्** = त्यसको कारण नजानेका
**रामः** = बलरामले
**अचिन्तयत्** = विचार गर्नुभयो

**वाक्यार्थ–** व्रजका गोपिनी र गाईहरूको दुध चुस्न छोडिसकेका आफ्ना सन्तानहरूमा पनि प्रतिक्षण वात्सल्यप्रेम बढ्दै गइरहेको देखेर त्यसको कारण थाहा नपाएका बलरामले विचार गर्नुभयो।

**किमेतदद्‌भुतमिव वासुदेवेऽखिलात्मनि।**
**व्रजस्य सात्मनस्तोकेष्वपूर्वं प्रेम वर्धते॥ ३६॥**

**पदार्थ–**
**अखिलात्मनि** = सर्वात्मा
**वासुदेवे इव** = श्रीकृष्णमा झैँ
**सात्मनः** = मसहित
**व्रजस्य** = (गोप, गोपिनी र गाई आदि) व्रजवासीको
**स्तोकेषु** = आफ्ना बच्चाहरूमा
**अपूर्वं** = अपूर्व
**प्रेम** = स्नेह
**वर्धते** = बढिरहेको छ
**एतत्** = यो
**अद्‌भुतम्** = आश्चर्य
**किम्** = के हो

**वाक्यार्थ–** सर्वात्मा श्रीकृष्णमा व्रजका गोप, गोपिनी र गाईहरूको जस्तो प्रेम थियो, त्यस्तै प्रेम आज यिनीहरू आ–आफ्ना बच्चाहरूमा गरिरहेका छन्, यिनीहरूप्रति मेरो पनि प्रेम बढिरहेको छ, यो के आश्चर्य भएको हो ?

**केयं वा कुत आयाता दैवी वा नार्युतासुरी।**
**प्रायो मायास्तु मे भर्तुर्नान्या मेऽपि विमोहिनी॥ ३७॥**

**पदार्थ–**
**इयं** = यो
**माया** = माया
**का** = के हो
**कुतः वा** = कहाँबाट
**आयाता** = आएको हो
**दैवी** = देवताहरूको माया हो ?
**नारी वा** = अथवा मनुष्यहरूको
**उत** = अथवा
**आसुरी** = असुरहरूको हो ?
**प्रायः** = प्रायशः
**मे अपि** = मलाई पनि
**विमोहिनी** = मोहित गराउने (यो माया)
**मे** = मेरा
**भर्तुः** = स्वामी भगवान् श्रीकृष्णको
**अस्तु** = हुनुपर्दछ
**अन्या** = अरूको माया
**न** = हुनै सक्दैन

**वाक्यार्थ–** यो कस्तो माया हो ? कहाँबाट आएको हो ? के यो देवताहरूको माया हो, वा कुनै मानिसको माया हो, अथवा असुरहरूको माया हो ? जसले आफ्नो मायाद्वारा मलाई पनि मोहित गरायो त्यो माया निश्चय नै मेरा स्वामी श्रीकृष्णको हो अरूको हुनै सक्दैन।

**इति सञ्चिन्त्य दाशार्हो वत्सान् सवयसानपि ।**
**सर्वानाचष्ट वैकुण्ठं चक्षुषा वयुनेन सः ॥ ३८ ॥**

पदार्थ–
**इति** = यसप्रकार
**सञ्चिन्त्य** = विचार गरेर
**दाशार्हः** = दशार्हवंशी
**सः** = ती बलरामले
**वयुनेन** = ज्ञानमय
**चक्षुषा** = दृष्टिद्वारा
**सर्वान्** = सबै
**वत्सान्** = बाच्छाहरूलाई
**सवयसान् अपि** = समान उमेरका साथीहरूलाई पनि
**वैकुण्ठं** = श्रीकृष्णको रूपमा
**आचष्ट** = देख्नुभयो

**वाक्यार्थ–** यस्तो विचार गरेपछि बलरामले ज्ञानदृष्टिले हेर्दा त सबै बाच्छा र बालक साथीहरूको रूपमा पनि श्रीकृष्णलाई नै देख्नुभयो।

**नैते सुरेशा ऋषयो न चैते त्वमेव भासीश भिदाश्रयेऽपि ।**
**सर्वं पृथक्त्वं निगमात् कथं वदेत्युक्तेन वृत्तं प्रभुणा बलोऽवैत् ॥ ३९ ॥**

पदार्थ–
**ईश** = हे प्रभु
**एते** = यी गोपहरू
**सुरेशाः** = देवताहरू
**न** = होइनन्
**एते** = यी बाच्छाहरू
**ऋषयः** = ऋषिहरू पनि
**न** = होइनन्
**भिदाश्रये अपि** = गोप र बाच्छाको भिन्न स्वरूपमा पनि
**त्वम् एव** = हजुर नै
**भासि** = प्रकाशित हुनुहुन्छ
**सर्वं** = सबै
**पृथक्त्वं** = नानात्व
**कथं** = कसरी (यो)
**वृत्तं** = सम्भव भयो
**वद** = बताउनुहोस्
**इति** = यसरी
**उक्तेन** = प्रश्न गरिएका
**प्रभुणा** = भगवान् श्रीकृष्णद्वारा
**निगमात्** = सङ्क्षेपमा बताइएका
**बलः** = बलरामले
**अवैत्** = (सबै वृत्तान्त) थाहा पाउनुभयो

**वाक्यार्थ–** हे प्रभु ! (यी गोपहरू देवताका र बाच्छाहरू ऋषिहरूका अवतार हुन् भन्ने मलाई थाहा छ, तर अहिले) यी गोपहरू न देवता हुन् न ऋषि नै। गोप, बाच्छा आदि सबैको रूपमा हजुर नै अहिले अद्वितीय भावले प्रकाशित हुनुभएको छ। त्यसैले हजुर यो सबै नानात्व कसरी सम्भव भयो ? र हजुर किन यी भिन्न-भिन्न विषयहरूमा प्रकाशित भइरहनुभएको छ ? यो कुरा मलाई बताउनुहोस्। यसरी बलरामले प्रश्न गरेपछि भगवान्ले सबै रहस्य संक्षेपमा सुनाउनुभयो र बलरामले पनि सबै कुरा बुझ्नुभयो।

**तावदेत्यात्मभूरात्ममानेन त्रुट्यनेहसा ।**
**पुरोवदब्दं क्रीडन्तं ददृशे सकलं हरिम् ॥ ४० ॥**

पदार्थ–
**आत्ममानेन** = आफ्नो (ब्रह्माजीको) कालमान अनुसार

**त्रुद्यनेहसा** = त्रुटि कालमा (अति शीघ्र)
**एत्य** = आएर
**तावत्** = त्यस वेलासम्म
**आत्मभूः** = ब्रह्माजीले
**सकलं** = गाई, गोप आदि सर्वरूपमा प्राप्त
**हरिम्** = श्रीकृष्णलाई
**पुरोवत्** = पहिले जस्तै
**अब्दं** = वर्ष दिनसम्म
**क्रीडन्तं** = क्रीडा गरिरहेको
**ददृशे** = देख्नुभयो

**वाक्यार्थ–** त्यस वेलासम्ममा ब्रह्माजी ब्रह्मलोक पुगेर फर्किंदा ब्रह्माजीको कालमान अनुसार एक त्रुटि समय (ज्यादै छोटो समय) मात्र बितेको थियो तर यता व्रजमा आएर हेर्दा उहाँले गाई, बाच्छा, गोप आदि सबै रूपमा भगवान् श्रीकृष्णलाई एक वर्षसम्म पहिले जस्तै क्रीडा गरिरहेको देख्नुभयो।

**टिप्पणी–** एक त्रुटिमा एक क्षणको १/४ भाग हुन्छ भने एक क्षणमा एक सेकेन्डको ४/५ भाग समय हुन्छ, त्रसरेणुत्रयं भुंक्ते यः कालः सः त्रुटिः स्मृतः अर्थात् तीन त्रसरेणुको एक त्रुटि हुन्छ।

**यावन्तो गोकुले बालाः सवत्साः सर्व एव हि।**
**मायाशये शयाना मे नाद्यापि पुनरुत्थिताः॥ ४१॥**

**पदार्थ–**
**गोकुले** = गोकुलमा
**यावन्तः** = जति
**सवत्साः** = बाच्छाहरूले सहित
**बालाः** = गोपबालकहरू थिए
**सर्वे एव हि** = ती सबै नै
**मे** = मेरो
**मायाशये** = मायाको शय्यामा
**शयानाः** = सुतिरहेका छन् र
**अद्य अपि** = अहिलेसम्म पनि
**पुनः** = फेरि
**न उत्थिताः** = उठेका छैनन्

**वाक्यार्थ–** (यस्तो देखेर ब्रह्माजी सोच्न लाग्नुभयो) गोकुलमा जति पनि बाच्छा र गोपहरू थिए, ती सबै मेरो मायाको शय्यामा सुतिरहेका छन् र उनीहरू त्यहाँबाट अहिलेसम्म उठेका पनि छैनन्। (फेरि यो सब म के देखिरहेको छु।)

**इत एतेऽत्र कुत्रत्या मन्मायामोहितेतरे।**
**तावन्त एव तत्राब्दं क्रीडन्तो विष्णुना समम्॥ ४२॥**

**पदार्थ–**
**इतः** = यसकारण
**मन्मायामोहितेतरे** = मेरो मायाद्वारा मोहित भएकाभन्दा अन्य
**तावन्तः एव** = त्यति नै सङ्ख्यामा
**तत्र** = त्यसमा पनि
**विष्णुना समम्** = श्रीकृष्णका साथ
**आब्दं** = एक वर्षदेखि
**क्रीडन्तः** = खेलिरहेका
**अत्र** = यहाँ रहेका
**एते** = यी गोपबालक र बाच्छाहरू
**कुत्रत्याः** = कहाँबाट आएका हुन्

**वाक्यार्थ–** यसकारण मेरो मायाद्वारा मोहित भएका गोप र बाच्छाहरूदेखि अतिरिक्त त्यति नै सङ्ख्यामा रहेका यी श्रीकृष्णका साथ एक वर्षदेखि खेलिरहेका गोपबालक र बाच्छाहरू कहाँबाट आएका हुन् ?

**एवमेतेषु भेदेषु चिरं ध्यात्वा स आत्मभूः।**
**सत्याः के कतरे नेति ज्ञातुं नेष्टे कथञ्चन॥ ४३॥**

**पदार्थ–**
**सः** = उहाँ
**आत्मभूः** = ब्रह्माजीले
**भेदेषु** = भिन्नरूपले प्रतीत
**एतेषु** = यी गोप र बाच्छाहरूको विषयमा
**एवम्** = यसरी
**चिरं** = धेरै बेरसम्म
**ध्यात्वा** = विचार गरे तापनि
**सत्याः** = सत्य (पहिलेका असली गोप र बाच्छाहरू)
**के** = कुन् हुन्
**कतरे** = कुन चाहिँ असली
**न** = होइनन्
**इति** = यो कुरा
**कथञ्चन** = केही गरे पनि
**ज्ञातुं** = जान्न
**न इष्टे** = सक्नुभएन

**वाक्यार्थ–** ब्रह्माजीले पहिले आफूले लुकाएका र अहिले भगवान्सँग खेलिरहेका दुबै थरी गोपबालक र बाच्छाहरूलाई देखेर यिनीहरूमध्ये कुन चाहिँ असली हुन् र कुन होइनन् भन्ने वास्तविकता बुझ्न धेरैबेर विचार गर्नुभयो। तर ब्रह्माजीले यसको रहस्यलाई कसै गरै पनि बुझ्न सक्नुभएन।

**एवं सम्मोहयन् विष्णुं विमोहं विश्वमोहनम्।**
**स्वयैव माययाजोऽपि स्वयमेव विमोहितः॥ ४४॥**

**पदार्थ–**
**एवं** = यसरी
**विश्वमोहनम्** = संसारलाई मोहित गराउने
**विमोहं** = कसैको पनि मायाले मोहित नहुने
**विष्णुं** = भगवान् श्रीकृष्णलाई
**सम्मोहयन्** = मोहित बनाउन लागेका
**अजः अपि** = ब्रह्माजी पनि
**स्वया एव** = आफ्नै
**मायया** = मायाद्वारा
**स्वयम् एव** = आफैं
**विमोहितः** = मोहित हुनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण आफ्नो मायाद्वारा संसारलाई मोहित बनाउनुहुन्छ तर उहाँलाई कसैको पनि मायाले स्पर्श गर्न सक्दैन, त्यस्ता भगवान्लाई मोहित गर्न लागेका ब्रह्माजी आफ्नै मायाद्वारा आफैं मोहित हुनुभयो।

**तम्यां तमोवन्नैहारं खद्योतार्चिरिवाहनि।**
**महतीतरमायैश्यं निहन्त्यात्मनि युञ्जतः॥ ४५॥**

**पदार्थ–**
**तम्यां** = ज्यादै अँध्यारो रातमा
**नैहारं** = कुहिरोको
**तमोवत्** = अन्धकार झैं
**अहनि** = दिनमा
**खद्योतार्चिः इव** = जुनकिरीको प्रकाश झैं
**महति** = महान् पुरुषहरूमा
**युञ्जतः** = प्रयोग गर्ने व्यक्तिको
**इतरमाया** = अन्य क्षुद्र मायाले पनि
**आत्मनि** = आफैंमा भएको
**ऐश्यं** = सामर्थ्यलाई
**निहन्ति** = नष्ट गर्दछ

**वाक्यार्थ–** जसरी घना अन्धकारले युक्त रातलाई कुहिरोको अन्धकारले कुनै प्रभाव पार्न सक्दैन, जसरी दिनको प्रकाशलाई जुनकिरीको प्रकाशले प्रभावित पार्दैन त्यसरी नै आफूभन्दा पनि श्रेष्ठ महापुरुषहरूमा प्रयोग गर्ने व्यक्तिको मायाले पनि महापुरुषहरूलाई मोहित गराउन सक्दैन, बरु आफैँमा भएको सामर्थ्यलाई समेत नष्ट गर्दछ।

**विवरण–** माथिका दुई श्लोकमा ब्रह्माजीले भगवान्मा गर्नुभएको मायाको प्रयोग विफल भयो भनी दृष्टान्तपूर्वक बताइएको छ। आफ्नो नित्यशक्ति मायाद्वारा भगवान्ले संसारलाई नै मोहित गर्नुहुन्छ। त्यही शक्तिको एक अंशलाई पाएर ब्रह्मा आदि मायावान् र शक्तिशाली हुन्छन्। त्यसैले ब्रह्माजीले आफ्नो सामान्य मायाद्वारा मायापति भगवान्लाई मोहित बनाउन खोज्दा उहाँ आफैँ त्यहीँ रङ्मगिनुभयो। कुहिरोको अन्धकारले दिनलाई त केही अँध्यारो बनाउन सक्छ तर रातको घना अन्धकारमा त्यो कुहिरोको अन्धकारले केही बढी अँध्यारो थप्न सक्दैन, बरु आफैँ त्यही रातको अन्धकारमा हराउँछ। जुनकिरीको प्रकाशले रातको अन्धकारमा केही उज्यालो त दिन सक्छ, तर दिउँसो त्यसले उज्यालो थप्न सक्दैन। यसै गरी सामान्य मायाले सामान्य व्यक्तिहरूमा आफ्नो प्रभाव त देखाउँछ तर परम पुरुष परमात्मामा पुगेपछि त त्यसको प्रयोगले आफ्नै सामर्थ्य बिलाउँछ। त्यही भएर भगवान्मा माया प्रयोग गर्न खोज्दा ब्रह्माजी आफैँ मोहित हुनुभएको हो।

**तावत् सर्वे वत्सपालाः पश्यतोऽजस्य तत्क्षणात्।**
**व्यदृश्यन्त घनश्यामाः पीतकौशेयवाससः॥ ४६॥**
**चतुर्भुजाः शङ्खचक्रगदाराजीवपाणयः।**
**किरीटिनः कुण्डलिनो हारिणो वनमालिनः॥ ४७॥**

**पदार्थ–**
**अजस्य** = ब्रह्माजीले
**पश्यतः** = हेर्दाहेर्दै
**तावत्** = त्यही वेला
**तत्क्षणात्** = तुरुन्त
**सर्वे** = सम्पूर्ण
**वत्सपालाः** = बाच्छा र गोपहरू
**घनश्यामाः** = मेघ झैँ श्यामवर्ण भएका
**पीतकौशेयवाससः** = पहेँलो रेसमी वस्त्र लगाएका
**चतुर्भुजाः** = चार–चार ओटा हात भएका
**शङ्खचक्रगदाराजीवपाणयः** = शङ्ख, चक्र, गदा र पद्म हातमा धारण गरेका
**किरीटिनः** = मुकुट लगाएका
**कुण्डलिनः** = कुण्डल लगाएका
**हारिणः** = हार लगाएका र
**वनमालिनः** = वनमाला धारण गरेका
**व्यदृश्यन्त** = देखिए

**वाक्यार्थ–** जब ब्रह्माजीले विचारमग्न भई हेरिरहनुभएको थियो, त्यही वेलामा सबै गोप र बाच्छाहरू भगवान् श्रीकृष्णकै रूपमा देखिन थाले। उनीहरू मेघ झैँ श्यामवर्णका थिए, सबैका चार–चार ओटा हात र ती हातमा शङ्ख, चक्र, गदा र पद्म थिए, सबैले मुकुट, कुण्डल, हार र वनमाला धारण गरेका थिए।

**श्रीवत्साङ्गददोरत्नकम्बुकङ्कणपाणयः ।**
**नूपुरैः कटकैर्भाताः कटिसूत्राङ्गुलीयकैः ॥ ४८ ॥**

**पदार्थ–**
**श्रीवत्साङ्गददोरत्नकम्बुकङ्कण-पाणयः** = छातीमा श्रीवत्स चिह्न, बाहुमा बाजू, हातमा रत्नले बनेको शङ्खाकार बाला भएका
**नूपुरैः** = पाउजू
**कटकैः** = कल्ली र
**कटिसूत्राङ्गुलीयकैः** = कम्मरमा कन्दनी र औँलाहरूमा लगाएको औँठीद्वारा
**भाताः** = शोभित भएका देखिए

**वाक्यार्थ–** छातीमा श्रीवत्स चिह्न, बाहुमा बाजू, हातमा रत्नले बनेको शङ्खाकार बाला, पाउमा पाउजू र कल्ली, कम्मरको कन्दनी र औँलामा लगाएका औँठीहरूले उनीहरू सुशोभित थिए।

**आङ्घ्रिमस्तकमापूर्णास्तुलसीनवदामभिः ।**
**कोमलैः सर्वगात्रेषु भूरिपुण्यवदर्पितैः ॥ ४९ ॥**
**चन्द्रिकाविशदस्मेरैः सारुणापाङ्गवीक्षितैः ।**
**स्वकार्थानामिव रजःसत्त्वाभ्यां स्रष्टृपालकाः ॥ ५० ॥**
**आत्मादिस्तम्बपर्यन्तैर्मूर्तिमद्भिश्चराचरैः ।**
**नृत्यगीताद्यनेकार्हैः पृथक्पृथगुपासिताः ॥ ५१ ॥**

**पदार्थ–**
**सर्वगात्रेषु** = सम्पूर्ण शरीरमा
**भूरिपुण्यवदर्पितैः** = (जन्म-जन्मान्तरीय) प्रशस्त पुण्यले युक्त भक्तहरूले अर्पण गरेका
**कोमलैः** = कोमल
**तुलसीनवदामभिः** = तुलसीको नयाँ मालाद्वारा
**आङ्घ्रिमस्तकम्** = पाउको नङदेखि शिखासम्म
**आपूर्णाः** = पूर्णरूपमा धारण गरेका
**चन्द्रिकाविशदस्मेरैः** = चन्द्रिकाको कान्ति जैँ स्वच्छ मुस्कानले युक्त
**सारुणापाङ्गवीक्षितैः** = मन्द लालिमाले युक्त कटाक्षपूर्ण दृष्टिद्वारा
**रजःसत्त्वाभ्यां** = रजोगुण र सत्त्वगुणलाई स्विकारी
**स्वकार्थानां** = आफ्ना भक्तहरूको मनोरथलाई
**स्रष्टृपालकाः इव** = उत्पन्न र पूर्ण गराउन लागेका जैँ (देखिए)
**आत्मादिस्तम्बपर्यन्तैः** = आफूजस्तै अर्को ब्रह्मादेखि लिएर तृणसमूहसम्मका सम्पूर्ण
**चराचरैः** = स्थावर, जङ्गम प्राणीहरूद्वारा
**मूर्तिमद्भिः** = मूर्तिमान् भएर
**नृत्यगीताद्यनेकार्हैः** = नाच, गान आदि अनेक पूजोपचारले
**पृथक् पृथक्** = अलग-अलग रूपमा (सबै जना)
**उपासिताः** = उपासना गरिएका (देखिए)

**वाक्यार्थ–** पाउको नङदेखि शिखापर्यन्त शरीरको सम्पूर्ण अङ्गहरूमा जन्म-जन्मान्तरीय पुण्यपुञ्जको उदय भएर पुण्यवान् भएका भक्तहरूले पहिराइदिएको तुलसीका कोमल नयाँ

मालाहरू धारण गरेका उनीहरू चन्द्रमाको कान्ति झैँ स्वच्छ समुज्वल मन्दमुस्कान र मन्द लालिमाले युक्त कटाक्षदृष्टिद्वारा रजोगुणको माध्यमबाट आफ्ना भक्तहरूको हृदयमा कामनाको उत्पत्ति तथा सत्त्वगुणको माध्यमबाट मनोरथको पालन गरिरहेका छन् कि जस्तो लाग्दथे। अनन्त ब्रह्माण्डका आफू जस्तै अन्य ब्रह्मादेखि लिएर तृणसमूहसम्मका सम्पूर्ण स्थावर र जङ्गम प्राणीहरू मूर्तिमान् भएर नाचगान आदि अनेक प्रकारका पूजोपचारद्वारा अलग-अलग रूपमा प्रतीयमान भगवान्‌को स्वरूपको उपासना गरिरहेका थिए।

**अणिमाद्यैर्महिमभिरजाद्याभिर्विभूतिभिः।**
**चतुर्विंशतिभिस्तत्त्वैः परीता महदादिभिः॥ ५२॥**
**कालस्वभावसंस्कारकामकर्मगुणादिभिः।**
**स्वमहिध्वस्तमहिभिर्मूर्तिमद्भिरुपासिताः॥ ५३॥**

**पदार्थ–**
**अणिमाद्यैः** = अणिमा आदि
**महिमभिः** = अष्ट सिद्धिहरूद्वारा
**अजाद्याभिः** = माया, अविद्या आदि
**विभूतिभिः** = विभूतिहरू (शक्तिहरू)द्वारा
**महदादिभिः** = महत् आदि
**चतुर्विंशतिभिः** = चौबीस
**तत्त्वैः** = (जगत्कारणभूत) तत्त्वहरूद्वारा
**परीताः** = घेरिएका
**स्वमहिध्वस्तमहिभिः** = भगवान्‌को सत्ता र महत्ताका सामु आफ्नो महिमा नष्ट भएका
**कालस्वभावसंस्कारकामकर्मगुणादिभिः** = गुणक्षोभक काल, परिणामको हेतुभूत स्वभाव, वासनाको उद्‌बोधक संस्कार, भोगका लागि गरिने लौकिक एवं वैदिक फलको इच्छाभूत कामना, कर्म र सत्त्व आदि त्रिगुणद्वारा
**मूर्तिमद्भिः** = मूर्तिमान् भएर
**उपासिताः** = उपासना गरिएका (बाच्छा र गोपबालकहरू देखिए)

**वाक्यार्थ–** अणिमा आदि अष्टसिद्धि, माया, अविद्या आदि विभूति (परमात्माको शक्ति), जगत्का कारणभूत चौबीस तत्त्वहरू, प्रकृतिका गुणहरूमा क्षोभ उत्पन्न गर्ने काल, परिणामको हेतुभूत स्वभाव, वासनालाई उद्‌बुद्ध गराउने संस्कार, भोगका लागि गरिने लौकिक एवं वैदिक कर्मफलको कामना र सत्त्व आदि त्रिगुणहरूले मूर्तिमान् भएर भगवान्‌को रूपमा रहेका सबै गोपबालक र बाच्छाहरूलाई वरिपरिबाट घेरेर सेवा गरिरहेका थिए। त्यसवेला भगवान्‌को सत्ता र महिमाको अगाडि काल आदिको सत्ता र महिमा अस्तित्वहीन भएको देखिन्थ्यो।

**टिप्पणी –** महत्तत्त्व, सूत्र (सङ्क्षिप्त रूप), अहङ्कार, मन, दश इन्द्रिय, पञ्चमहाभूत र पञ्चतन्मात्रा यी जगत्का कारणभूत चौबीस तत्त्वहरू हुन्।

**सत्यज्ञानानन्तानन्दमात्रैकरसमूर्तयः।**
**अस्पृष्टभूरिमाहात्म्या अपि ह्युपनिषद्दृशाम्॥ ५४॥**

पदार्थ–
**सत्यज्ञानानन्तानन्दमात्रैकरस-मूर्तयः** = सत्य, ज्ञान, अनन्त र आनन्द मात्र एक रस भएको ब्रह्मको स्वरूप भएका
**उपनिषद्दृशाम् अपि** = उपनिषद्का मर्मज्ञ ज्ञानीहरूका लागि पनि
**हि** = निश्चय नै
**अस्पृष्टभूरिमाहात्म्याः** = अपार माहात्म्य अस्पृश्य भएका (गोपबालक एवं बाच्छाहरू देखिए)

**वाक्यार्थ–** गोपबालक र बाच्छाहरू सत्य, ज्ञान, अनन्त र आनन्द नै स्वरूप भएका साक्षात् परब्रह्म झैँ देखिन्थे। उपनिषद्का मर्मज्ञ ज्ञानीहरूको ज्ञानवैभवले पनि उनीहरूको अनन्त महिमालाई स्पर्श गर्न सक्दैनथ्यो।

**एवं सकृद् ददर्शाजः परब्रह्मात्मनोऽखिलान्।**
**यस्य भासा सर्वमिदं विभाति सचराचरम्॥ ५५॥**

पदार्थ–
**यस्य** = जुन परब्रह्म परमात्माको
**भासा** = प्रकाशद्वारा
**इदं** = यो दृश्यमान
**सचराचरं** = चराचर
**सर्वम्** = सबै जगत्
**विभाति** = प्रकाशित हुन्छ (त्यही)
**परब्रह्मात्मनः** = परब्रह्म श्रीकृष्णको स्वरूप भएका
**अखिलान्** = सम्पूर्ण बाच्छा र गोपबालकहरूलाई
**सकृत्** = एकपटक मात्र
**अजः** = ब्रह्माजीले
**एवं** = उक्त प्रकारले
**ददर्श** = देख्नुभयो

**वाक्यार्थ–** जुन परब्रह्म परमात्माको प्रकाशद्वारा यो दृश्यमान सम्पूर्ण चराचर जगत् प्रकाशित भएको छ त्यही परब्रह्म श्रीकृष्णको स्वरूपमा सम्पूर्ण बाच्छा र गोपबालकहरूलाई उक्त प्रकारले ब्रह्माजीले एक पटक मात्र देख्नुभयो।

**ततोऽतिकुतुकोद्वृत्तस्तिमितैकादशेन्द्रियः।**
**तद्धाम्नाभूदजस्तूष्णीं पूर्देव्यन्तीव पुत्रिका॥ ५६॥**

पदार्थ–
**ततः** = त्यसपछि (उक्त अपूर्वदर्शन भएपछि)
**अतिकुतुकोद्वृत्तः** = ज्यादै आश्चर्यचकित
**तद्धाम्ना** = भगवान्को विग्रह धारण गरेका गोपबालक र बाच्छाहरूको तेजले
**तिमितैकादशेन्द्रियः** = एघारै ओटा इन्द्रियहरू स्तब्ध भएका
**अजः** = ब्रह्माजी
**पूर्देव्यन्ति** = व्रजकी अधिष्ठात्री देवीको नजिकमा रहेको
**पुत्रिका इव** = (बच्चाले खेल्ने) पुतली जस्तै
**तूष्णीं** = मौन
**अभूत्** = हुनुभयो

**वाक्यार्थ–** भगवद्विग्रहको अपूर्व दर्शन भएपछि ब्रह्माजी ज्यादै आश्चर्यचकित हुनुभयो। भगवान्को स्वरूपमा देखिएका गोपबालक र बाच्छाहरूको उत्कट तेजका कारण ज्ञानेन्द्रिय, कर्मेन्द्रिय, मन गरी एघारै ओटा इन्द्रियहरू स्तब्ध भएका ब्रह्माजी त्यस वेला व्रजकी अधिष्ठात्री

देवीको अगाडि बच्चाले खेल्ने पुतली झैँ मौन हुनुभयो।

**इतीरेशेऽतर्क्ये निजमहिमनि स्वप्रमितिके**
**परत्राजातोऽतन्निरसनमुखब्रह्मकमितौ।**
**अनीशेऽपि द्रष्टुं किमिदमिति वा मुह्यति सति**
**चच्छादाजो ज्ञात्वा सपदि परमोऽजाजवनिकाम्॥ ५७॥**

**पदार्थ–**
**इति** = यस प्रकार
**अतर्क्ये** = तर्कको विषय नहुनुभएका
**निजमहिमनि** = आफ्नो असाधारण महिमामा अवस्थित हुनुभएका
**स्वप्रमितिके** = स्वप्रकाश र आनन्दरूपमा स्थित हुनुभएका
**अजातः** = प्रकृतिभन्दा
**परत्र** = पर रहनुभएका
**अतन्निरसनमुखब्रह्मकमितौ** = ब्रह्मभिन्न सम्पूर्ण जगत्को निषेध मात्रले वेदान्तद्वारा पनि यत्किञ्चित् रूपमा मात्र प्रतिपादित हुनुभएका (भगवान्को विषयमा)
**इरेशे** = सरस्वतीका स्वामी ब्रह्माजीले
**इदम्** = यो प्रतीयमान वैचित्र्य
**किम् वा इति** = के हो भनेर
**मुह्यति सति** = बुझ्न नसकी मोहित भएर
**द्रष्टुं अपि** = भगवान्कै महिमालाई हेर्न पनि
**अनीशे** = असमर्थ भएपछि
**परमः अजः** = भगवान् श्रीकृष्णले
**ज्ञात्वा** = (ब्रह्माजीको मोहलाई) जानेर
**अजाजवनिकाम्** = आफ्ना मायारूपी पर्दालाई
**सपदि** = तुरुन्त
**चच्छाद** = हटाइदिनुभयो

**वाक्यार्थ–** तर्कको विषयभन्दा टाढा रहनुभएका र आफ्नो असाधारण महिमामा अवस्थित हुनुभएका भगवान् स्वयंप्रकाश एवं आनन्दस्वरूप हुनुहुन्छ अनि प्रकृतिबाट पर हुनुहुन्छ। साक्षात् वेदान्तले पनि उहाँको वास्तविक स्वरूपलाई प्रतिपादन गर्न सक्दैन, केवल उहाँदेखि भिन्न प्रापञ्चिक पदार्थहरूको निषेध गरेर उहाँको विषयमा बताउँछ। साक्षात् सरस्वतीका पनि स्वामी ब्रह्माजीले भगवान्को विचित्र लीला र सर्वरूपतालाई देखेर पनि 'यो मैले के देखेँ, यो के हो ?' भनेर वास्तविकता (भगवान्को स्वरूप) बुझ्न सक्नुभएन, बरु आफैँ मोहित भई भगवान्को दिव्यस्वरूप र महिमालाई हेर्न सक्नुभएन। यसपछि भगवान्ले ब्रह्माजी मोहित हुनुभएको थाहा पाएर यस्ता भगवान्ले तुरुन्त आफ्नो मायामयी मोहशक्तिको पर्दा हटाइदिनुभयो।

**विवरण–** यस श्लोकमा भगवान्ले ब्रह्माजीबाट मायाको आवरण हटाइदिनुभयो भनी बताइएको छ। भगवान्को महिमा अतर्क्य छ अर्थात् यो तर्क या बुद्धिको सीमाभित्र पर्दैन। यो अतर्क्य हुनुका कारणहरू तीन ओटा छन्, एक त यो भगवन्महिमा स्वप्रकाश सुखरूप छ, अर्को यो अविद्याको क्षेत्रभन्दा पर रहेको छ, अनि वेदवचनहरूले पनि निषेधमुख वचनले बल्ल–तल्ल यसको प्रतिपादन गर्दछन्। परमात्माको स्वरूप या महिमालाई वेदले पनि साक्षात् बताउन सक्दैन। ब्रह्मभिन्न प्रपञ्चको निषेध गरेर वेदले परमात्माको स्वरूपलाई अर्थतः मात्र बताउँछ। त्यसैले परमात्माको

महिमा **अतर्क्य** छ। भगवान्‌को मायाद्वारा ढाकिएकाले ब्रह्माजीले उहाँको महिमालाई के हो भनी छुट्याउन पनि सक्नुभएन। सरस्वतीका पति ब्रह्माजीको यस्तो अवस्था हुँदा परमात्माले मायाको पर्दालाई हटाइदिनुभयो। यहाँ **चच्छाद** शब्दको दुई अर्थ हुन्छ, एउटा ढाकिदिनुभयो र अर्को हटाइदिनुभयो। मायापति परमात्माले मायाद्वारा ब्रह्माजीलाई आफ्नो अनन्त ऐश्वर्यसम्पन्न रूप देखाउनुभएको थियो भन्ने मान्दा यसपछि ब्रह्माजीलाई त्यो ऐश्वर्यमय रूप हेर्न असमर्थ देखी मायाले ढाकिदिनुभयो र सामान्य बालकको रूपमा देखिनुभयो भन्ने अर्थ गर्नुपर्दछ। यसै गरी उहाँले ब्रह्माजीलाई आफ्नो मायाले मोहित गराउँदै विचित्रतामा भुलाउनुभएको थियो भन्ने मान्दा अब शरणमा आएको ठानी आफ्नो मायाको पर्दा हटाउनुभयो र श्रीकृष्णको रूपमैं देखिनुभयो भन्ने अर्थ गर्नुपर्दछ।

**ततोऽर्वाक्प्रतिलब्धाक्षः कः परेतवदुत्थितः।**
**कृच्छ्रादुन्मील्य वै दृष्टीराचष्टेदं सहात्मना॥ ५८॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (मायाको पर्दा हटाइदिएपछि)
**अर्वाक्** = बाह्य विषयहरूको
**प्रतिलब्धाक्षः** = ज्ञान प्राप्त गर्नुभएका
**कः** = ब्रह्माजी
**परेतवत्** = मरेको व्यक्ति झैं
**उत्थितः** = उठ्नुभयो र
**कृच्छ्रात्** = कष्टपूर्वक बिस्तारै
**दृष्टीः** = आँखाहरू
**उन्मील्य** = खोलेर (हेर्दा)
**वै** = निश्चय नै
**सहात्मना** = आफ्नो शरीरले सहित
**इदं** = यो चराचर जगत्
**आचष्ट** = देख्नुभयो

**वाक्यार्थ–** जब भगवान्‌ले मायाको पर्दा हटाइदिनुभयो तब ब्रह्माजीलाई बाह्य विषयको बोध हुन थाल्यो। उहाँ मरेको व्यक्ति उठे झैं उठ्नुभयो र कष्टपूर्वक बिस्तारै आफ्ना आँखाहरू खोलेर हेर्नुभयो अनि उहाँले आफ्नो शरीरसहित यो जगत्‌लाई देख्नुभयो।

**सपद्येवाभितः पश्यन् दिशोऽपश्यत् पुरःस्थितम्।**
**वृन्दावनं जनाजीव्यद्रुमाकीर्णं समाप्रियम्॥ ५९॥**

**पदार्थ–**
**सपदि एव** = (त्यसपछि) तुरुन्त नै
**अभितः** = चारैतिर
**दिशः** = सम्पूर्ण दिशाहरूलाई
**पश्यन्** = हेर्नुभएका ब्रह्माजीले
**जनाजीव्यद्रुमाकीर्णं** = प्राणीहरूको जीवनका आधारभूत वृक्षहरूले युक्त भएको
**समाप्रियम्** = सुन्दर र प्रिय वस्तुले युक्त भएको
**पुरःस्थितम्** = आफ्नो अगाडि रहेको
**वृन्दावनं** = वृन्दावनलाई
**अपश्यत्** = देख्नुभयो

**वाक्यार्थ–** त्यसपछि तुरुन्तै चारैतिर आँखा घुमाएर हेर्नुभएका ब्रह्माजीले फलफूल, पात आदि अतिसुन्दर र प्रिय वस्तुहरू एवं प्राणीहरूको जीवनका आधारभूत वृक्ष र वनस्पतिहरूले युक्त

भएको वृन्दावनलाई देख्नुभयो।

**यत्र नैसर्गदुर्वैराः सहासन् नृमृगादयः।**

**मित्राणीवाजितावासद्रुतरुट्तर्षकादिकम्॥ ६०॥**

**पदार्थ–**
**यत्र** = जहाँ (वृन्दावनमा)
**नैसर्गदुर्वैराः** = स्वाभाविकरूपले शत्रु बनेका
**नृमृगादयः** = मनुष्य, बाघ आदि प्राणीहरू
**मित्राणि इव** = मित्र झैँ
**सह** = एकसाथ
**आसन्** = बसेका थिए (त्यस्तो)
**अजितावासद्रुतरुट्तर्षकादिकम्** = भगवान् श्रीकृष्णको आवास (उपस्थिति)का कारण क्रोध, लोभ आदि भागेका वा यिनीहरूले रहित (वृन्दावनलाई देख्नुभयो)

**वाक्यार्थ–** वृन्दावनमा भगवान् श्रीकृष्ण बस्नुभएको हुनाले त्यहाँ क्रोध, लोभ आदि दुर्भावनाहरू हटेका थिए, त्यसैले त्यहाँ स्वाभाविक शत्रुता भएका मनुष्य-बाघ आदि प्राणीहरू पनि आपसी शत्रुतालाई बिर्सिएर मित्र झैँ सँगसँगै बसेका थिए।

**तत्रोद्वहत् पशुपवंशशिशुत्वनाट्यं**

**ब्रह्माद्वयं परमनन्तमगाधबोधम्।**

**वत्सान् सखीनिव पुरा परितो विचिन्व-**

**देकं सपाणिकवलं परमेष्ठ्यचष्ट॥ ६१॥**

**पदार्थ–**
**तत्र** = त्यो वृन्दावनमा
**परमेष्ठी** = ब्रह्माजीले
**पुरा इव** = पहिले झैँ
**पशुपवंशशिशुत्वनाट्यं** = गोपवंशी बालकले जस्तै गरी नाटक
**उद्वहत्** = धारण गर्नुभएका
**अद्वयं** = अद्वितीय
**परम्** = परमपुरुष
**अनन्तम्** = अनन्त
**अगाधबोधम्** = अपार ज्ञानसम्पन्न भएर पनि
**परितः** = चारैतिर
**सखीन्** = साथीहरूलाई
**वत्सान्** = बाच्छाहरूलाई
**विचिन्वत्** = खोजिरहनुभएका
**सपाणिकवलं** = हातमा खान लागेको गाँस लिनुभएका
**एकं** = अद्वैत
**ब्रह्म** = ब्रह्मरूप भगवान्लाई
**अचष्ट** = देख्नुभयो

**वाक्यार्थ–** वृन्दावनमा ब्रह्माजीले पहिले झैँ गोपवंशी सामान्य बालक भएको नाटक गरिरहनुभएका, अपार ज्ञानसम्पन्न भएर पनि अबोध बालक झैँ हातमा खान लागेको गाँस लिएर आफ्ना हराएका बाच्छा र साथीहरूलाई खोज्न वृन्दावनको चारैतिर घुमिहनुभएका अद्वितीय, परम पुरुष, साक्षात् ब्रह्मरूप भगवान्लाई देख्नुभयो।

**दृष्ट्वा त्वरेण निजधोरणतोऽवतीर्य**

**पृथ्व्यां वपुः कनकदण्डमिवाभिपात्य।**

**स्पृष्ट्वा चतुर्मुकुटकोटिभिरङ्घ्रियुग्मं**
**नत्वा मुदश्रुसुजलैरकृताभिषेकम् ॥ ६२ ॥**

**पदार्थ–**
**दृष्ट्वा** = (भगवान्लाई) देखेर
**त्वरेण** = तत्काल
**निजधोरणतः** = आफ्नो वाहन (हाँस)बाट
**अवतीर्य** = ओर्लिएर
**पृथ्व्यां** = भूमिमा
**कनकदण्डम् इव** = सुनको लौरो झैँ
**वपुः** = शरीरलाई
**अभिपात्य** = सुताएर
**चतुर्मुकुटकोटिभिः** = चार ओटै मुकुटको अग्रभागद्वारा
**अङ्घ्रियुग्मं** = भगवान्को दुई ओटै पाउलाई
**स्पृष्ट्वा** = छोएर
**नत्वा** = ढोगेर
**मुदश्रुसुजलैः** = आनन्दजन्य आँसुका धाराहरूले
(भगवान्को पाउलाई)
**अभिषेकम्** = अभिषेक
**अकृत** = गर्नुभयो

**वाक्यार्थ–** भगवान्लाई देखेपछि ब्रह्माजी तत्काल आफ्नो वाहन हाँसबाट ओर्लिनुभयो र आफ्नो शरीरलाई सुनको लौरोलाई झैँ पृथ्वीमा लम्पसार पारेर सुताउनुयो अनि चारओटा शिरका चारै ओटा मुकुटहरूको अग्रभागले भगवान्को दुई ओटै पाउलाई स्पर्श गर्दै ढोग्नुभयो, अनि उहाँले हर्षका आँसुले भगवान्का पाउलाई अभिषेक गर्नुभयो।

**उत्थायोत्थाय कृष्णस्य चिरस्य पादयोः पतन्।**
**आस्ते महित्वं प्राग्दृष्टं स्मृत्वा स्मृत्वा पुनः पुनः ॥ ६३ ॥**

**पदार्थ–**
**प्राग्दृष्टं** = पहिले देखेको
**कृष्णस्य** = श्रीकृष्णको
**महित्वं** = महिमा
**पुनः पुनः** = बारम्बार
**स्मृत्वा स्मृत्वा** = सम्झिई सम्झिई
**उत्थाय उत्थाय** = उठ्दै-उठ्दै
**चिरस्य** = धेरै समयसम्म
**पादयोः** = भगवान्को पाउमा
**पतन्** = परेर
**आस्ते** = रहनुभयो

**वाक्यार्थ–** ब्रह्माजीले भगवान्को पहिले देखेको महिमाको बारम्बार स्मरण गर्न लाग्नुभयो। भगवान्को चरणमा लड्दै उठ्दै गरेर यसरी धेरै बेरसम्म उहाँ भगवान्कै पाउमा परेर रहनुभयो।

**शनैरथोत्थाय विमृज्य लोचने मुकुन्दमुद्वीक्ष्य विनम्रकन्धरः।**
**कृताञ्जलिः प्रश्रयवान् समाहितः सवेपथुर्गद्गदयैलतेलया ॥ ६४ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**शनैः** = बिस्तारै
**उत्थाय** = उठेर
**लोचने** = आफ्ना आँखाहरू
**विमृज्य** = पुछेर
**मुकुन्दम्** = भगवान् श्रीकृष्णलाई
**उद्वीक्ष्य** = माथितिर हेरेर
**विनम्रकन्धरः** = घाँटी (अनुहार) झुकाउनुभएका
**कृताञ्जलिः** = अञ्जलि जोड्नुभएका
**प्रश्रयवान्** = विनीत
**सवेपथुः** = काँप्नुभएका
**समाहितः** = मनलाई

सम्हाल्नुभएका ब्रह्माजीले
**गद्गदया** = अक्मकाएको
(काँपेको)
**इलया** = वाणीद्वारा
**ऐलत** = स्तुति गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्को चरणकमलबाट बिस्तारै उठेर ब्रह्माजीले आफ्ना दुई ओटा आँखा पुछेर माथितिर हेरेर भगवान्को दर्शन गर्नुभयो। लाजले शिर झुकाउनुभएका उहाँले विनीत भई आदरपूर्वक अँजुली जोड्नुभयो। डरले उहाँ काँपिरहनुभएको थियो तापनि यथाशक्ति मनलाई सम्हालेर अक्मकाएको वाणीद्वारा भगवान्को स्तुति गर्न लाग्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे त्रयोदशोऽध्यायः॥ १३॥**

# अथ चतुर्दशोऽध्यायः

## ब्रह्माजीद्वारा भगवान्को स्तुति

**ब्रह्मोवाच** (ब्रह्माजीले भन्नुभयो)

**नौमीड्य तेऽभ्रवपुषे तडिदम्बराय**
**गुञ्जावतंसपरिपिच्छलसन्मुखाय ।**
**वन्यस्रजे कवलवेत्रविषाणवेणु-**
**लक्ष्मश्रिये मृदुपदे पशुपाङ्गजाय ॥ १ ॥**

**पदार्थ–**
**ईड्य** = स्तुति गर्न योग्य हे भगवान्
**अभ्रवपुषे** = मेघ झैं श्याम शरीर हुनुभएका
**तडिदम्बराय** = बिजुली झैं पहेँलो वस्त्र (पीताम्बर) धारण गर्नुभएका
**गुञ्जावतंसपरिपिच्छ-लसन्मुखाय** = रातीगेडीले बनेको कुण्डल र मयूरको प्वाँखले बनेको मुकुटले शोभायमान मुखाकृति हुनुभएका
**वन्यस्रजे** = वनका पत्र, पुष्पहरूको माला लगाउनुभएका
**कवलवेत्रविषाणवेणुलक्ष्मश्रिये** = खानाको गाँस, बेतको लौरो, सिँगको बाजा र श्रीवत्सचिह्नको कान्तिले सुशोभित हुनुभएका
**मृदुपदे** = अति कोमल पाउ भएका
**पशुपाङ्गजाय** = गोपाल नन्द बाबाको छोरो हुनुभएका
**ते** = हजुरलाई
**नौमि** = नमस्कार गर्दछु

**वाक्यार्थ–** स्तुति गर्न योग्य हे भगवान् ! मेघ झैं श्याम आफ्नो शरीरमा बिजुली झैं पहेँलो (पीताम्बर) वस्त्र धारण गर्नुभएका, कानमा रातीगेडीले बनेको कुण्डल र शिरमा मयूरको प्वाँखले युक्त मुकुट धारण गर्नाले अत्यन्त शोभायमान मुखमण्डल भएका, गलामा भएको वनका पत्रपुष्पहरूले बनेको माला, हातमा भएको खानाको गाँस, सिँगको बाजा, बेतको लौरो तथा छातीमा भएको श्रीवत्सचिह्नले अत्यन्त सुशोभित हुनुभएका एवं अत्यन्त सुकोमल पाउहरू भएका, गोपाल नन्दबाबाको पुत्ररूपमा अवतीर्ण हुनुभएका यस्ता हजुरलाई म नमस्कार गर्दछु।

**अस्यापि देव वपुषो मदनुग्रहस्य**
**स्वेच्छामयस्य न तु भूतमयस्य कोऽपि ।**
**नेशे महि त्ववसितुं मनसान्तरेण**
**साक्षात् तवैव किमुतात्मसुखानुभूतेः ॥ २ ॥**

**पदार्थ**–
**देव** = हे प्रभु
**मदनुग्रहस्य** = मेरो अनुग्रहका लागि
**स्वेच्छामयस्य** = आफ्ना भक्तहरूको इच्छा अनुसार प्रकटित भएको
**न तु भूतमयस्य** = न कि पञ्चमहाभूतहरूद्वारा प्रकटित (शुद्धसत्त्वात्मक)
**अस्य अपि** = यो हजुरको
**वपुषः** = कौमार शरीरको
**महि** = महिमालाई
**अवसितुं** = जान्न
**कः अपि** = म ब्रह्मा भएर पनि
**आन्तरेण** = अन्तर्मुखी भएको
**मनसा** = मनले त
**न ईशे** = सकिनँ (भने)
**साक्षात्** = साक्षात्
**आत्मसुखानुभूतेः एव** = सच्चिदानन्दात्मक
**तव तु** = हजुरको (महिमालाई) त
**किम् उत** = कसरी जान्न सक्छु

**वाक्यार्थ**– हे प्रभु ! आफ्ना भक्तहरूको इच्छा अनुसार प्रकटित भएको, पाञ्चभौतिक नभएर शुद्धसत्त्वात्मक कौमार रूपमा प्रकटित हजुरको दिव्य शरीरको महिमालाई म ब्रह्माले मनलाई अन्तर्मुख गराउँदा पनि जान्न सकिनँ भने सच्चिदानन्दस्वरूप गुणातीत, निर्विकार हजुरको महिमालाई कसरी जान्न सक्छु ?

**विवरण**– माथिका दुई श्लोकमा ब्रह्माजीले सुलभ रूपमा देखिने अवतारहरूको महिमालाई त बुझ्न सकिँदैन भने परमात्माको मायारहित वास्तविक स्वरूपलाई झन् कसरी जान्न–बुझ्न सकिन्छ र भन्दै भगवान्‌को स्तुति गर्नुभएको छ। श्रीकृष्णको स्वरूपको वर्णन गर्दै ब्रह्माजी भन्नुहुन्छ– भगवान् **अभ्रवपुः** अर्थात् बादल झैँ श्यामवर्णको हुनुहुन्छ। बादलमाथि बिजुली चम्किए झैँ सुनौलो पीताम्बर उहाँको शरीरमा टल्किएको छ। **गुञ्जा** अर्थात् रातीगेडीको कर्णभूषण अनि शिरमा सिउरिएको मयूरको प्वाँखको कारणले उहाँको अनुहार झन् सुशोभित भएको छ। भगवान्‌ले देब्रे हातमा खानाको गाँस लिनुभएको छ, देब्रे काखीमा बेतको लौरी र बाजा बजाउने सिङ च्याप्नुभएको छ अनि कम्मरमा बाँसुरी भिर्नुभएको छ। अरू अवतारमा नपाइने यी गोठालाका चिह्नहरूले भगवान् श्रीकृष्णलाई भक्तवत्सल, माधुर्ययुक्त र सहजलभ्य रूपमा प्रस्तुत गर्दै उहाँको शोभालाई झन् बढाइरहेका छन्। भगवान्‌को शरीर पञ्चमहाभूतले बनेको होइन, यो त भक्तहरूलाई अनुग्रह गर्नका लागि स्वेच्छाले नै भगवान्‌ले स्वीकार गर्नुभएको हो। प्रकटरूपमा अवतार लिँदा पनि भगवान्‌का कल्याणगुणहरू अनन्त एवं अप्रमेय छन्। त्यसैले त्यसको महिमालाई विधाताले पनि निश्चित रूपमा जान्न सक्दैनन्। अनेक अवतारहरू परमात्माले मायाद्वारा स्वीकार गरेका अपार रूप हुन्। उहाँको नित्यज्ञानस्वरूप आत्मस्वरूपको महिमा त झन् अगम्य एवं अगोचर छ। मन, वाणी आदि कुनैले पनि परमात्माको स्वरूप एवं महिमालाई पत्ता लगाउन सक्दैनन् भनी तैत्तिरीयोपनिषद् (२/९/१)मा बताइएको छ। त्यही स्वरूपमा यहाँ भगवान् श्रीकृष्णको स्तुति गरिएको छ।

**ज्ञाने प्रयासमुदपास्य नमन्त एव**
**जीवन्ति सन्मुखरितां भवदीयवार्ताम्।**

**स्थाने स्थिताः श्रुतिगतां तनुवाङ्मनोभि-**
**र्ये प्रायशोऽजित जितोऽप्यसि तैस्त्रिलोक्याम्॥ ३॥**

**पदार्थ–**
**ये** = जो मनुष्यहरू
**ज्ञाने** = ज्ञानका लागि गरिने
**प्रयासं** = परिश्रमलाई
**उदपास्य** = त्यागेर
**स्थाने** = भक्तहरूको निवासस्थलमा
**स्थिताः** = बसेर
**सन्मुखरितां** = भक्तहरूले गरेको कीर्तन र
**श्रुतिगतां** = आफूले सुनेको
**भवदीयवार्ताम् एव** = हजुरको लीलाचरित्रसम्बन्धी कथाहरूलाई
**तनुवाङ्मनोभिः** = शरीर, वाणी र मनद्वारा
**नमन्तः** = विनयपूर्वक नै स्वीकार गरेर
**जीवन्ति** = बाँच्दछन् (भने)
**अजितः अपि** = काल, कर्म आदिद्वारा अपराजित भएर पनि
हे भगवान् (हजुर)
**प्रायशः** = प्रायः गरेर
**त्रिलोक्याम्** = तीनै लोकमा
**तैः** = त्यस्ता भक्तहरूद्वारा
**जितः** = जितिएका (वशीभूत)
**असि** = हुनुहुन्छ

**वाक्यार्थ–** हे भगवान्! ज्ञानप्राप्तिका लागि कठोर परिश्रम गर्नलाई छोडेर जो मनुष्यहरू भगवान्का भक्तहरू बसेको ठाउँमा गएर बस्दछन्, भक्तहरूले गाएको हजुरको लीलाचरित्र सम्बन्धी कथाहरू सुन्दछन् र शरीर, वाणी र मनले त्यस कथारूप अमृतलाई विनयपूर्वक स्वीकार गरेर बाँच्दछन् भने त्यस्ता भक्तजनहरूले काल र कर्महरूद्वारा पनि अपराजित हजुरलाई आफ्नो वशमा राख्न सक्दछन्, किनभने हजुर त्यस्ता भक्तहरूको वशमा रहनुहुन्छ।

**श्रेयःस्रुतिं भक्तिमुदस्य ते विभो क्लिश्यन्ति ये केवलबोधलब्धये।**
**तेषामसौ क्लेशल एव शिष्यते नान्यद् यथा स्थूलतुषावघातिनाम्॥ ४॥**

**पदार्थ–**
**विभो** = हे प्रभु
**श्रेयःस्रुतिं** = कल्याणको (धर्म, अर्थ, काम र मोक्ष)को मूल स्रोत
**ते** = हजुरको
**भक्तिम्** = भक्तिलाई
**उदस्य** = त्यागेर
**ये** = जो मनुष्यहरू
**केवलबोधलब्धये** = केवल ज्ञानप्राप्तिका लागि (प्रयासरत छन्, तिनीहरूले)
**क्लिश्यन्ति** = दुःख पाउँछन्
**स्थूलतुषावघातिनाम् यथा** = पुष्ट देखिएको (धान फलेको जस्तो देखिएको) भुस कुट्ने मानिसहरूलाई झैँ
**तेषाम्** = त्यस्ता ज्ञानार्थी मानिसहरूलाई
**असौ** = यो ज्ञानप्राप्तिको लागि गरिएको प्रयास
**क्लेशलः एव** = कष्टदायी मात्र
**शिष्यते** = बाँकी रहन्छ
**न अन्यत्** = अरू हुँदैन

**वाक्यार्थ–** हे प्रभु ! कल्याण (धर्म, अर्थ, काम र मोक्ष)को मूल स्रोत भएको हजुरको भक्तिलाई छाडेर केवल ज्ञानप्राप्तिका लागि श्रम गर्ने मानिसहरूले पुष्ट देखिएको (धान फलेको जस्तो देखिएको) भुस कुट्नेहरूले केवल दुःख मात्र पाए जस्तै उनीहरूले ज्ञानप्राप्तिको लागि गरेको प्रयास केवल दुःखदायक मात्र हुन्छ, अरू केही हुँदैन।

**विवरण–** यस श्लोकमा ब्रह्माजीले भक्तिको प्रशंसा गर्नुभएको छ। भक्ति सबैथरी कल्याणहरूको मूल हो। जो व्यक्तिहरू भक्तिलाई छाडी केवल ज्ञानका पछि लागेर हिँड्छन् ती भक्तिरहित व्यक्तिहरू भुस कुटिरहने मानिस जस्तै मूर्ख हुन्। उनीहरूले केवल दुःख मात्र पाउँछन्। भक्तिमार्गमा परमात्माको श्रवण, कीर्तन, मनन आदि गर्दै चित्तलाई परमात्मामा लगाइरहनुपर्दछ। ज्ञानमार्गमा चाहिँ विषयहरूलाई मिथ्या बुझेर तिनीहरूको बाध गर्दै अद्वितीय आत्माको चिन्तन एवं निदिध्यासन गर्नुपर्दछ। यसरी यी दुबै मार्गमा साधनप्रक्रिया अलग छन्, तर चरम अवस्थामा पुगेको भक्ति र आत्मसाक्षात्काररूप ज्ञानमा भने यस्तो भेद हुँदैन। भक्तिको अन्तिम परिणति भगवत्तत्त्वसाक्षात्कार हो र यही नै असली भक्ति हो। भगवान्‌को साक्षात्काररूप अटल स्मरणलाई नै भक्ति भनिन्छ। भक्तिद्वारा भगवत्तत्त्वको साक्षात्कार हुन सरल छ, ज्ञानको प्रक्रियामा भने विषयहरूको बाध गर्दै चित्तलाई निर्विषय बताउनुपर्ने हुनाले यो अलि जटिल छ। व्यक्त रूपका ईश्वर र उहाँका गुणहरूको चिन्तनभन्दा अव्यक्त ब्रह्मको चिन्तन अवश्य पनि कठिन हुन्छ– **अव्यक्ता हि गतिर्दुःखं देहवद्भिरवाप्यते** (भगवद्गीता, १२/५)। अर्को कुरा, भक्तिद्वारा चित्त शुद्ध नभएको व्यक्ति ज्ञानमार्गमा लाग्यो भने त्यसको झन् दुर्गति हुन्छ। जसको हृदयमा परमात्माप्रति प्रेम छैन, ती शाब्दिक ज्ञानीहरू ईश्वर, परलोक आदिको भय र नियन्त्रणलाई पनि छाडी स्वेच्छाचारमा प्रवृत्त हुन सक्दछन्। यसैले ईश्वरप्रेमपूर्वक उहाँको स्वरूपको चिन्तन गर्नु नै कल्याणकारक छ। यस्तो व्यक्ति नै जीव र ईश्वरको एकताको साक्षात्कारमा पनि योग्य हुन्छ। यसकारण यहाँ ज्ञानको अपेक्षा भक्तिलाई नै कल्याणको मूल भनिएको हो। यहाँ जुन ज्ञानको निन्दा गरिएको छ, त्यो शाब्दिक ज्ञान हो। साक्षात्काररूप मुख्य ज्ञानको निन्दा गरिएको होइन। परमात्माको स्वरूपलाई कत्ति पनि नजानी भक्ति हुनै सक्दैन, यसैले भक्तिभित्र ज्ञानको नित्यप्रवेश छ। शब्दमात्रको ज्ञानमा भने भक्तिको प्रवेश छैन, त्यसैले यो भयानक हुन्छ। भक्तियुक्त ज्ञान, या ज्ञानयुक्त भक्तिको साधनाले नै परमात्मतत्त्व प्राप्ति हुन्छ भन्ने भागवतको मूल सिद्धान्त हो।

**पुरेह भूमन् बहवोऽपि योगिनस्त्वदर्पितेहा निजकर्मलब्धया।**
**विबुध्य भक्त्यैव कथोपनीतया प्रपेदिरेऽञ्जोऽच्युत ते गतिं पराम्॥ ५॥**

**पदार्थ–**
**भूमन्** = हे व्यापक परमात्मा
**अच्युत** = हे अच्युत
**इह** = यस लोकमा
**पुरा** = पहिला
**त्वदर्पितेहाः** = हजुरमा सम्पूर्ण लौकिक, वैदिक कर्म र त्यसको फल अर्पण गरेका
**बहवः** = धेरै
**योगिनः अपि** = (भक्तिबाहेक अन्य अनेक साधनको अवलम्बन गर्ने) योगीहरूले पनि
**निजकर्मलब्धया** = आफ्ना कर्महरू (हजुरमा समर्पण गर्नाले त्यस कर्मसमर्पण) द्वारा प्राप्त
**कथोपनीतया** = भगवान्‌को कथाश्रवण आदिद्वारा हजुरको नजिकमा पुऱ्याइएको
**भक्त्या एव** = भक्तिद्वारा नै
**अञ्जः** = सजिलै
**ते** = हजुरको
**पराम् गतिं** = परम तत्त्वलाई
**विबुध्य** = जानेर
**प्रपेदिरे** = (हजुरकै पदमा) प्राप्त भए

**वाक्यार्थ–** हे परमात्मा ! हे अच्युत ! यस लोकमा हजुरमा आफ्ना सम्पूर्ण लौकिक एवं वैदिक कर्म र त्यसको फल अर्पण गरेका धेरै योगीहरू पहिला पनि भए जसले भक्तिबाहेक अन्य अनेक साधनको अवलम्बन गरे। ती योगीहरूले आफ्ना कर्महरू हजुरमा समर्पण गर्नाले त्यस कर्मसमर्पणद्वारा र हजुरको कथाश्रवण आदिद्वारा हजुरमा भक्ति गर्न थाले र त्यो भक्तिद्वारा उनीहरूले सजिलै हजुरको परम तत्त्वलाई जाने अनि हजुरकै पदलाई प्राप्त गरे।

**तथापि भूमन् महिमागुणस्य ते विबोद्धुमर्हत्यमलान्तरात्मभिः।**
**अविक्रियात् स्वानुभवादरूपतो ह्यनन्यबोध्यात्मतया न चान्यथा ॥ ६ ॥**

**पदार्थ–**
**तथा अपि** = तापनि
**भूमन्** = हे परमेश्वर
**अगुणस्य** = निर्गुण
**ते** = हजुरको
**महिमा** = महिमालाई
**अनन्यबोध्यात्मतया** =
स्वप्रकाशरूपले
**अमलान्तरात्मभिः** =
चित्तशुद्धिपूर्वक इन्द्रियहरूलाई
अन्तर्मुख बनाएका
व्यक्तिहरूद्वारा
**अविक्रियात्** = विकार रहित
**स्वानुभवात्** = आत्माकार
अन्तःकरणको साक्षात्कारबाट
**अरूपतः** = निर्विषयरूपले
**हि** = नै
**विबोद्धुम्** = जान्न
**अर्हति** = सकिन्छ
**अन्यथा च** = अरू उपायद्वारा
**न** = जान्न सकिँदैन

**वाक्यार्थ–** हे परमेश्वर ! हजुर निर्गुण हुनुहुन्छ, तापनि जसले चित्तलाई शुद्ध गरी इन्द्रियहरूलाई अन्तर्मुख गराउँछन्, त्यस्ता मानिसहरूले नियन्त्रित तथा अन्तर्मुख मनद्वारा हजुरको वास्तविक तत्त्व र महिमालाई जान्न सक्दछन्। कुनै पनि विषयमा आकारित नभएको आत्माकार स्थितिमा रहेको अन्तःकरणद्वारा निर्गुण, निर्विषय हजुरलाई स्वयंप्रकाशरूपले मात्र जान्न सकिन्छ। त्यसदेखि भिन्न हजुरलाई जान्ने अरू कुनै उपाय छैन।

**विवरण–** परमात्माको स्वरूप या महिमालाई बुझ्नै नसकिने भए किन त्यसमा प्रयास गर्नु त भन्ने शङ्काको समाधान गर्दै यस श्लोकमा निर्मल अन्तःकरण भएकाहरूले त्यसलाई बुझ्न सक्छन् भनी बताइएको छ। अन्तःकरणवृत्तिरूप जुन आत्मसाक्षात्कार छ, त्यसद्वारा मात्र परमात्माको वास्तविक स्वरूप थाहा पाइन्छ। वेदान्त दर्शन अनुसार आत्माकारवृत्तिले जीव र परमात्माको एकतालाई विषय गर्दछ। त्यसैद्वारा मात्र परमात्माको वास्तविक निरुपाधिक रूपको साक्षात्कार हुन सक्दछ। यसका लागि कस्तो अन्तःकरण चाहिन्छ भन्ने बताउँदै ब्रह्माजी भन्नुहुन्छ– **अविक्रियात्**। विक्रिया भनेको विशेष आकार हो। संसारमा अनेक पदार्थहरूको आकारमा आकारित अन्तःकरणले निर्विकल्प आत्मालाई जान्न सक्दैन। जब चित्तले यो विषयाकारतालाई छोड्छ, तब त्यसमा अन्तर्यामी साक्षी सिधै प्रकाशित हुन्छ। अन्तःकरण आत्माकार हुनु भनेको यही हो। अन्तःकरणले विषय गर्दा त आत्मा पनि घैंटो आदि पदार्थ जस्तै अनात्मा भइहाल्यो नि भन्ने शङ्कामा भनिन्छ– **अरूपतः**। यहाँ रूप शब्दको अर्थ विषय हो। आत्मा अन्तःकरणको विषय छैन भन्नु यसको तात्पर्य हो। श्रीधर स्वामी यस श्लोकको टीकामा लेख्नुहुन्छ– **वृत्तिविषयत्वमेव आत्मनः, न फलविषयत्वम्** अर्थात् आत्मामा वृत्तिविषयता मात्र छ, फलविषयता छैन।

वृत्तिविषयता भनेको अन्तःकरणको वृत्तिले त्यस पदार्थसम्बन्धी अज्ञानलाई नष्ट गर्नु हो भने फलविषयता भनेको चाहिँ वृत्तिमा प्रतिबिम्बित चैतन्यले त्यस वस्तुलाई प्रकाशित गर्नु हो। घैँटो आदि पदार्थहरूलाई जान्दा अन्तःकरणको वृत्तिले अज्ञानलाई नष्ट गर्नुपर्दछ र चैतन्यद्वारा त्यसलाई प्रकाशित पनि गर्नुपर्दछ। आत्मा भने स्वयंप्रकाश भएकाले यसको ज्ञान हुन केवल अज्ञान नष्ट भए मात्र पुग्छ, अज्ञान नष्ट भइसकेपछि आत्मा स्वतः प्रकाशित हुन्छ। यदि आत्मा अन्तःकरणद्वारा प्रकाशित हुन्थ्यो भने आत्मामा जडता, अनात्मता आदि दोष आउँथे, तर त्यसो नभएकाले आत्मामा यी दोष आउँदैनन्। आत्मा स्वप्रकाश भएकाले अज्ञान नष्ट भएपछि आत्मा स्वयं प्रकाशित हुन्छ, यो अरूबाट बोध्य या विषय हुँदैन भन्ने अर्थलाई यस श्लोकमा **अनन्यबोध्यात्मतया** यो पदले बुझाएको छ। यसरी निर्मल अन्तःकरणवृत्तिद्वारा अज्ञान नष्ट भएपछि स्वयंप्रकाश आत्मा स्वतः प्रकाशित हुन्छ, यही नै आत्मसाक्षात्कार हो भन्ने कुरा यहाँ प्रतिपादन गरिएको छ।

**गुणात्मनस्तेऽपि गुणान् विमातुं हितावतीर्णस्य क ईशिरेऽस्य।**
**कालेन यैर्वा विमिताः सुकल्पैर्भूपांशवः खे मिहिका द्युभासः॥ ७॥**

**पदार्थ–**
**यैः** = जुन
**सुकल्पैः** = अत्यन्त निपुण व्यक्तिहरूद्वारा
**कालेन वा** = धेरै जन्मको प्रयासद्वारा
**भूपांशवः** = पृथिवीका परमाणुहरू
**खे** = आकाशमा रहेका
**मिहिकाः** = हिमकणहरू
**द्युभासः** = आकाशका नक्षत्रहरूको किरणका परमाणुहरू
**विमिताः** = गणना गरिन्छन्
**ते अपि** = ती व्यक्तिमध्ये पनि
**हितावतीर्णस्य** = संसारको कल्याणका लागि अवतीर्ण
**गुणात्मनः** = गुणहरूका अधिष्ठाता
**अस्य** = यो सगुणरूपमा स्थित
**ते** = हजुरको
**गुणान्** = गुणहरूलाई
**विमातुं** = गणना गर्न
**के** = को
**ईशिरे** = समर्थ भए

**वाक्यार्थ–** हे भगवान्! अत्यन्त निपुण व्यक्तिहरूले धेरै जन्मको प्रयासद्वारा पृथिवीका परमाणुहरू, आकाशका हिमकण र नक्षत्रका किरणहरूका सूक्ष्मतम अणुहरू गन्न सक्लान् तर निर्गुण भए पनि सगुण रूपमा रहनुभएका गुणहरूका अधिष्ठाता एवं संसारको कल्याणका लागि अवतीर्ण हजुरका अनन्त सगुणरूपको कसले गणना गर्न सक्यो र? (कसैले पनि सक्दैन)।

**तत् तेऽनुकम्पां सुसमीक्षमाणो भुञ्जान एवात्मकृतं विपाकम्।**
**हृद्वाग्वपुर्भिर्विदधन्नमस्ते जीवेत यो मुक्तिपदे स दायभाक्॥ ८॥**

**पदार्थ–**
**तत्** = त्यसकारण (त्यो हजुरको स्वरूप बुझ्न कठिन भएकाले)
**ते** = हजुरको
**अनुकम्पां** = कृपालाई
**सुसमीक्षमाणः** = प्रतीक्षा गरी

**आत्मकृतं** = आफूले गरेको
**विपाकम्** = कर्मफल
**भुञ्जानः एव** = अनासक्त भई भोग गर्ने (तपस्या आदि झन्झट नगर्ने) तर
**हृद्वाग्वपुर्भिः** = मन, वचन र शरीरद्वारा
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**विदधन्** = गर्दै
**यः** = जो
**जीवेत** = बाँच्दछ
**सः** = त्यो व्यक्ति
**मुक्तिपदे** = मुक्तिपदमा
**दायभाक्** = अंसियार (अधिकारी) हुन्छ

**वाक्यार्थ–** हजुरको स्वरूपज्ञान अत्यन्त कठिन भएकाले जो व्यक्ति प्रतिक्षण ममाथि भगवान्‌को कहिले कृपा होला भनेर हजुरको कृपालाई प्रतीक्षा गर्दै अनासक्त मनले आफूद्वारा अर्जित प्रारब्धकर्मको फल सन्तुष्ट भई भोग गर्दछ, अन्य तपस्या आदि साधनहरूको झन्झटमा नफसी मन, वचन र शरीरद्वारा यथासम्भव नमस्कार, भजन आदिरूप भक्ति गर्दै बाँच्दछ भने त्यस्तो भगवान्‌को भक्त नै मोक्षको अधिकारी बन्दछ।

**पश्येश मेऽनार्यमनन्त आद्ये परात्मनि त्वय्यपि मायिमायिनि।**
**मायां वितत्येक्षितुमात्मवैभवं ह्यहं कियानैच्छमिवार्चिरग्नौ॥ ९॥**

**पदार्थ–**
**ईश** = हे ईश्वर
**मे** = मेरो
**अनार्यम्** = धृष्टता (मूर्खता)
**पश्य** = हेर्नुहोस्
**आद्ये** = सम्पूर्ण जगत्‌को कारण
**परात्मनि** = सर्वनियन्ता
**मायिमायिनि** = मायावीहरूलाई पनि मोहित गराउने
**अनन्ते** = अनन्त
**त्वयि अपि** = हजुरमा पनि
**मायां** = आफ्नो माया
**वितत्य** = फैलाएर
**आत्मवैभवं** = आफ्नो प्रभाव
**ईक्षितुं** = हेर्न
**ऐच्छम्** = इच्छा गरें
**अग्नौ** = आगोमा
**अर्चिः इव** = ज्वाला झैं
**हि** = निश्चय नै
**अहं** = म (हजुरको अगाडि)
**कियान्** = कति हुँ र (कत्ति पनि होइन)

**वाक्यार्थ–** हे सर्वेश्वर! मेरो मूर्खतालाई हेर्नुहोस्, सर्वकारण, सर्वनियन्ता हजुर जो मायावीहरूलाई पनि मोहित गराउनुहुन्छ, त्यस्ता अनन्त हजुरमा मैले आफ्नो तुच्छ माया फैलाएर आत्मप्रभाव हेर्न खोजें। जसरी आगोको अगाडि ज्वाला (झिल्का)को कुनै गन्ती हुँदैन, त्यसरी नै हजुरको अगाडि म के हुँ र? म त कत्ति पनि केही पनि होइन।

**अतः क्षमस्वाच्युत मे रजोभुवो ह्यजानतस्त्वत्पृथगीशमानिनः।**
**अजावलेपान्धतमोऽन्धचक्षुष एषोऽनुकम्प्यो मयि नाथवानिति॥ १०॥**

**पदार्थ–**
**अतः** = त्यसैले
**अच्युत** = हे अच्युत
**रजोभुवः** = रजोगुणबाट उत्पन्न
**त्वत्पृथक्** = हजुरभन्दा अलग
**ईशमानिनः** = म नै ईश्वर हुँ भनेर ठान्ने
**हि** = निश्चय नै
**अजानतः** = हजुरको प्रभावलाई

नजान्ने
**अजावलेपान्धतमोऽअन्ध-चक्षुषः** = हजुरको मायाको गाढा अन्धकारले विवेकरूप आँखा ढाकिएर अन्धो भएको
**मे** = मलाई
**मयि** = म स्वामी भएकाले नै यो
**नाथवान्** = सनाथ छ (त्यसैले)
**एषः** = यो ब्रह्मा
**अनुकम्प्यः इति** = दयायोग्य छ भन्ने सोचेर
**क्षमस्व** = क्षमा गर्नुहोस्

**वाक्यार्थ–** हे अच्युत ! रजोगुणबाट उत्पन्न भएको मैले हजुरको वास्तविक स्वरूप र महिमालाई बुझ्न सकिनँ, त्यसैले मैले आफूलाई हजुरभन्दा भिन्न 'म नै जगत्कर्ता ईश्वर हुँ' भन्ने ठानेको थिएँ। हजुरको मायाको गाढा अन्धकारमा मेरो विवेकचक्षु अन्धो भयो। अब हजुरले मलाई 'यो ब्रह्मा म भएर नै सनाथ छ यसैले दयायोग्य छ' भन्ने सोचेर मलाई क्षमा गर्नुहोस्।

**क्वाहं तमोमहदहंखचराग्निवार्भू-**
**संवेष्टिताण्डघटसप्तवितस्तिकायः।**
**क्वेदृग्विधाविगणिताण्डपराणुचर्या-**
**वाताध्वरोमविवरस्य च ते महित्वम्॥ ११॥**

**पदार्थ–**
**तमोमहदहंखचराग्निवार्भूसंवेष्टिताण्डघटसप्तवितस्तिकायः** = प्रकृति, महत्तत्त्व, अहङ्कार, आकाश, वायु, अग्नि, जल र पृथिवीरूप आवरणद्वारा ढाकिएको ब्रह्माण्डनामक सात बित्ता (साढे तीन हात)को घैंटो जस्तो शरीर भएको
**अहं** = म
**क्व** = कहाँ
**ईदृग्विधाविगणिताण्डपराणुचर्या-वाताध्वरोमविवरस्य** = यस्ता असङ्ख्य ब्रह्माण्डरूप परमाणुहरू घुम्ने आँखीझ्याल जस्ता रौँका छिद्रहरू भएका
**ते** = हजुरको
**महित्वम् च** = महिमा चाहिँ
**क्व** = कहाँ

**वाक्यार्थ–** प्रकृति, महत्तत्त्व, अहङ्कार, आकाश, वायु, अग्नि, जल र पृथिवीरूप आठ ओटा आवरणहरूले घेरिएको (बनेको) ब्रह्माण्ड नै मेरो शरीर हो, जुन मेरो शरीर साढे तीन हातको घैंटो जस्तो छ, तर हजुरका प्रत्येक रौँका छिद्रहरूमा असङ्ख्य ब्रह्माण्डहरू त्यसरी घुमेका छन् जसरी आँखीझ्यालमा परेको सूर्यको प्रकाशमा परमाणुहरू घुमेका देखिन्छन्। यसैले एउटै रोमछिद्रमा अनन्त ब्रह्माण्ड भएका हजुरको अचिन्त्य महिमा कहाँ ? र एउटै ब्रह्माण्ड शरीर भएको क्षुद्र म कहाँ ?

**विवरण–** माथिका श्लोकहरूमा भगवान्को महिमाको वर्णन गर्दै ब्रह्माजीले आफ्नो सेवक सम्झी मलाई क्षमा गरिदिनुहोस् भनी उहाँसँग प्रार्थना गर्नुभएको छ। ब्रह्माजी भन्नुहुन्छ– 'म जगत्कर्ता हुँ भन्ने मदको महाअन्धकारद्वारा विवेकरूपी आँखा नष्ट भएको मलाई आफ्नो सेवक सम्झी हजुरले क्षमा गर्नुहोस्। अज्ञानको कारणले मैले आफूलाई हजुरभन्दा छुट्टै स्वतन्त्र ईश्वर हुँ भन्ने ठानेँ। वास्तवमा त हजुरको अनन्त महिमा र मेरो परिच्छिन्नताको के तुलना हुन सक्दछ र ?' सम्पूर्ण

ब्रह्माण्ड नै ब्रह्माजीको विग्रह हो, उहाँ त्यसको अभिमानी हिरण्यगर्भ हुनुहुन्छ भने भगवान्का प्रत्येक रौंका छिद्रहरूमा ब्रह्माजीका विग्रह जस्ता असङ्ख्य ब्रह्माण्डहरू त्यसरी घुमेका छन्, जसरी आँखीझ्यालमा परेको सूर्यको प्रकाशमा परमाणुहरू घुमेका देखिन्छन्।

**तमः** (प्रकृति), **महत्** (महत्तत्त्व), **अहं** (अहङ्कार), **ख** (आकाश), **चर** (वायु), **अग्नि** (तेज), **वाः** (जल) अनि **भूः** (पृथिवी) यी आठ आवरणले सहित **अण्डघटः** अर्थात् ब्रह्माण्डरूपी घैंटो, जुन ब्रह्माजीको नापले सात बित्ताको छ, त्यही नै ब्रह्माजीको शरीर हो। भगवान्मा चाहिँ यस्ता अगणित ब्रह्माण्डहरू परमाणु झैं स-साना कणमात्र हुन्छन्। परमाणुहरूलाई घुम्न तिनीहरूबीच खाली ठाउँ र वायुको पनि आवश्यकता हुन्छ। भगवान्का रौं-रौं पिच्छे भएका प्वालहरू हावा छिर्ने झ्याल जस्ता छन्। जसरी आँखीझ्यालबाट सूर्यकिरण छिर्दा हावामा स-साना धुलोका कणहरू उडिरहेका देखिन्छन्, त्यसै गरी भगवान्का हरेक रौंका प्वालहरूमा अगणित ब्रह्माण्डहरू घुमिरहेका हुन्छन्। यी कुरा स्वयं ब्रह्माजीले भगवान्को स्तुति गर्दै यहाँ बताउनुभएको छ।

**उत्क्षेपणं गर्भगतस्य पादयोः किं कल्पते मातुरधोक्षजागसे।**
**किमस्तिनास्तिव्यपदेशभूषितं तवास्ति कुक्षेः कियदप्यनन्तः॥ १२॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **किं** = के | **तव** = हजुरको |
| **अधोक्षज** = इन्द्रियहरूको विषयातीत प्रभु | **मातुः** = आमाको | **कुक्षेः** = गर्भबाट |
| **गर्भगतस्य** = गर्भमा भएको शिशुको | **आगसे** = अपराधका लागि | **अनन्तः** = बाहिर |
| **पादयोः** = खुट्टाहरूको | **कल्पते** = हुन्छ | **किम्** = के |
| **उत्क्षेपणं** = प्रहार | **अस्तिनास्तिव्यपदेशभूषितं** = भाव र अभावबोधक शब्दद्वारा बोध्य कुनै पनि वस्तु | **कियत् अपि** = अलिकति मात्र पनि |
| | | **अस्ति** = छ |

**वाक्यार्थ–** इन्द्रियहरूको विषय नहुनुभएका हे प्रभु ! गर्भमा रहेको शिशुले खुट्टाले हान्यो भनेर आमाले त्यसलाई अपराध मान्नुहुन्छ र ? भावबोधक र अभावबोधक शब्दद्वारा बताइने कुनै पनि वस्तु हजुरको गर्भभन्दा बाहिर छैन, (सबै हजुरकै गर्भभित्र छ। त्यसैले म पनि हजुरकै गर्भभित्र छु। अतः गर्भमा रहेको शिशुले खुट्टाले हानेकोलाई आमाले अपराध नठाने जस्तै हजुरले मेरो क्रियाकलापलाई अपराध ठान्नुहुनेछैन।)

**जगत्त्रयान्तोदधिसम्प्लवोदे**
**नारायणस्योदरनाभिनालात्।**
**विनिर्गतोऽजस्त्विति वाङ्न वै मृषा**
**किन्त्वीश्वर त्वन्न विनिर्गतोऽस्मि॥ १३॥**

**पदार्थ–**
**जगत्त्रयान्तोदधिसम्प्लवोदे** = तीनै लोकको प्रलयकालमा सुमद्रको जलमा (सुत्नुभएका)
**नारायणस्य** = भगवान् नारायणको
**उदरनाभिनालात्** = पेटमा रहेको नाभिकमलबाट
**अजः** = ब्रह्मा
**विनिर्गतः** = उत्पन्न हुनुभयो
**इति** = यस्तो
**वाक्** = कथन
**वै** = निश्चय नै
**मृषा** = झुटो
**न** = होइन (त्यसैले)
**ईश्वर** = हे ईश्वर
**किम्** = के
**त्वत् तु** = हजुरबाट नै (म)
**विनिर्गतः** = उत्पन्न भएको
**न अस्मि** = होइन र ?

**वाक्यार्थ–** जब तीनै लोक प्रलयकालीन समुद्रको जलमा लीन भएको थियो, त्यस वेला समुद्रको जलमा सुत्नुभएका भगवान् नारायणको नाभिकमलबाट ब्रह्माको उत्पत्ति भयो भन्ने कथन असत्य होइन। त्यसैले के म हजुरबाटै उत्पन्न भएको होइन र ?

**विवरण–** माथिका दुई श्लोकमा आफ्नो अपराधलाई गर्भभित्रको बच्चाले आमालाई लात्ती हाने झैँ सहज रूपमा स्वीकार गरिदिनुहोस् भनी ब्रह्माजीले भगवान्सँग प्रार्थना गर्नुभएको छ। गर्भभित्रको बच्चोले खुट्टा चलाउँदा गर्भभित्रै लाग्छ, ऊ त्यहीँ अडिएकाले त्योभन्दा बाहिर निस्कन सक्दैन। गर्भस्थ बालकले आमालाई लात्ताले हान्नु अपराध होइन। सम्पूर्ण ब्रह्माण्ड भगवान्को पेटभित्र नै छ। भाव-अभाव आदि रूपमा बताइने पदार्थहरू भगवान्को कोखभन्दा बाहिर हुन सक्दैनन्। त्यसैले ब्रह्मा पनि भगवान्को कोखभित्रकै शिशु हुनुहुन्छ। सबै पदार्थ परमात्माबाट नै उत्पन्न हुन्छन् र त्यहीँ अडिएका छन् भन्ने कुरा सामान्यतः बताउँदै ब्रह्माजीले अर्को श्लोकमा परमात्माको नाभिकमलबाट आफू उत्पन्न भएको कुरा बताउनुभएको छ। प्रलयकालीन समुद्रमा सुत्दा नाभिबाट निस्किएको कमलमा ब्रह्माजीको उत्पत्ति भएकाले ब्रह्माजी पनि नारायण भगवान्कै बच्चा हुनुहुन्छ।

**नारायणस्त्वं न हि सर्वदेहिनामात्मास्यधीशाखिललोकसाक्षी ।**
**नारायणोऽङ्गं नरभूजलायनात् तच्चापि सत्यं न तवैव माया ॥ १४ ॥**

**पदार्थ–**
**त्वं** = हजुर
**हि** = निश्चय नै
**नारायणः** = नारायण
**न असि** = हुनुहुन्न ? (हुनुहुन्छ, किनभने)
**सर्वदेहिनाम्** = सम्पूर्ण प्राणीहरूको
**आत्मा** = आत्मा (आश्रय) हुनुहुन्छ
**अधीश** = हे भगवान् (हजुर नै)
**अखिललोकसाक्षी** = सम्पूर्ण लोकको साक्षी हुनुहुन्छ
**नरभूजलायनात्** = नर (परमात्मा)बाट उत्पन्न जल नै निवासस्थान भएका
**नारायणः** = नारायण
**तत् च अपि** = जलशायी रूपले प्रसिद्ध
**अङ्गं** = नारायणको अंश पनि
**न सत्यं** = (परिच्छिन्न भएकाले) सत्य होइन
**तव** = हजुरको
**माया एव** = माया मात्र हो

**वाक्यार्थ–** हे प्रभु ! हजुर नारायण हुनुहुन्छ किनभने सम्पूर्ण प्राणीहरूको आश्रय (आत्मा) हजुर नै हुनुहुन्छ। हजुर नै सम्पूर्ण लोकको साक्षी हुनुहुन्छ तथा नर (परमात्मा)बाट उत्पन्न भएको जलमा

हजुर नै निवास गर्नुहुन्छ। अतः यी विभिन्न कारणहरूले गर्दा हजुर नै नारायण हुनुहुन्छ। जलशायी नारायणको रूपले प्रसिद्ध हजुरको अवतार पनि सत्य होइन, माया मात्र हो।

**विवरण–** ब्रह्माजीलाई नाभिकमलबाट उत्पन्न गर्ने त नारायण हुनुहुन्छ, म को हुँ र भन्ने शङ्का हुँदा ब्रह्माजीले यो श्लोकमा नारायण श्रीकृष्णकै स्वरूप हुनुहुन्छ भनी सिद्ध गर्नुभएको छ। नारायण शब्दले श्रीकृष्णलाई बताउनुपर्दा श्रीधर स्वामीले त्यसका मुख्य तीन ओटा व्युत्पत्तिहरू देखाउनुभएको छ। श्लोकमा आएका **आत्मा, अधीश** र **अखिललोकसाक्षी** भन्ने तीन ओटा पदहरूले तीनथरी व्युत्पत्तिद्वारा श्रीकृष्णलाई नारायण भनी सिद्ध गर्दछन्। **नराणां समूहः नारं** अर्थात् जीवहरूको समूहलाई नार भनिन्छ। **तदेव अयनं आश्रयः यस्य** अर्थात् ती सम्पूर्ण जीवहरूलाई आश्रय बनाई अन्तर्यामी **आत्मा**को रूपले भित्र पस्ने परमात्मा भएकाले श्रीकृष्ण नारायण हुनुहुन्छ। **नारस्य अयनं प्रवृत्तिः यस्मात्** अर्थात् सम्पूर्ण प्राणीहरूलाई प्रवृत्त गर्ने परमात्मा नै नारायण हुनुहुन्छ। भगवान् श्रीकृष्ण सबै जीवहरूका **अधीश** अर्थात् नियामक भई तिनीहरूलाई प्रेरित गर्नुहुन्छ त्यसैले उहाँ नारायण हुनुहुन्छ। यसै गरी **नारं अयसे जानासीति नारायणः** अर्थात् सम्पूर्ण प्राणीहरूलाई तिनका मन, बुद्धि, इन्द्रिय आदिलाई क्षेत्रज्ञ रूपले प्रकाशित गर्ने **सर्वलोकसाक्षी** भएकाले श्रीकृष्ण नारायण हुनुहुन्छ। शेषशायीलाई मात्र नारायण भन्छन् नि त? भन्ने शङ्कामा भनिन्छ– **नरभूजलायनात्। नर** अर्थात् आदिपुरुषबाट **भू** अर्थात् उत्पन्न हुने जललाई नार भनिन्छ, त्यसलाई अयन अर्थात् आश्रय बनाई सुत्ने नारायण हुनुहुन्छ। ती नारायण पनि हजुरकै **अङ्ग** अर्थात् मूर्ति हुन्। लीलाका लागि हजुरले जलशायीरूप स्वीकार गर्नुभएको हो। किनभने हजुर सर्वव्यापक हुनुहुन्छ भने जलशायी नारायणको रूप परिच्छिन्न छ, त्यसैले त्यो सत्य नभएर मायामय मात्र हो। निरुपाधिक हजुरबाट नै त्यो मूर्तरूप प्रकट भएको हो, तर त्यो मायाद्वारा भएको हो, सत्य होइन। हजुर त समस्त उपाधिले रहित अपरिच्छिन्न अप्रमेय परमतत्त्व हुनुहुन्छ भनी यहाँ श्रीकृष्णको स्तुति गरिएको छ।

**तच्चेज्जलस्थं तव सज्जगद् वपुः किं मे न दृष्टं भगवंस्तदैव।**
**किं वा सुदृष्टं हृदि मे तदैव किं नो सपद्येव पुनर्व्यदर्शि॥ १५॥**

**पदार्थ–**
**जलस्थं** = जलमा विद्यमान
**जगत्** = जगत्को आश्रयभूत
**तव** = हजुरको
**वपुः** = शरीर
**सत् चेत्** = सत्य हो भने
**भगवन्** = हे प्रभु
**तदा एव** = त्यही (कमलनालको मार्गबाट जलभित्र पसेर सय वर्षसम्म खोजेको) वेलामा
**तत्** = त्यो शरीर
**मे** = मद्वारा
**किं** = किन
**न दृष्टं** = देखिएन
**वा** = अथवा
**तदा एव** = त्यति वेला (तपस्या गरिसकेपछि नै)
**मे** = मद्वारा
**हृदि** = आफ्नै हृदयमा
**किं** = कसरी
**सुदृष्टं** = स्पष्ट देखियो
**पुनः** = फेरि
**सपदि एव** = तत्क्षण नै
**किं** = किन
**नो व्यदर्शि** = देखिएन

**वाक्यार्थ–** हे भगवान् ! यदि सम्पूर्ण जगत्को आश्रयभूत हजुरको शरीर सत्य हो र त्यसवेला जलमा विराजमान थियो भने कमलनालको मार्ग हुँदै अपार जलराशिभित्र छिरेर सय वर्षसम्म खोज्दा पनि हजुरको त्यो विराट् शरीरलाई मैले किन देखिनँ ? जब मैले तपस्या गरेँ, त्यसपछि आफ्नै हृदयमा त्यसको स्पष्ट दर्शन कसरी भयो र फेरि तत्क्षणमैं त्यो शरीर कसरी लुप्त भयो ?
**टिप्पणी–** विशेष स्पष्टीकरणका लागि भागवत ३/८/१७–३/८/२२ पनि हेर्नुहोस्।

**अत्रैव मायाधमनावतारे ह्यस्य प्रपञ्चस्य बहिः स्फुटस्य।**
**कृत्स्नस्य चान्तर्जठरे जनन्या मायात्वमेव प्रकटीकृतं ते ॥ १६ ॥**

**पदार्थ–**
**मायाधमन** = मायालाई निस्तेज बनाउने हे मायेश्वर
**अत्र एव** = यही मनुष्यरूप
**अवतारे** = अवतारमा
**बहिःस्फुटस्य** = बाहिर प्रकाशित
**अस्य** = यो दृश्यमान
**कृत्स्नस्य** = सम्पूर्ण चराचर
**प्रपञ्चस्य** = प्रपञ्चको
**हि** = निश्चय नै
**अन्तर्जठरे च** = आफ्नै पेटभित्र
**जनन्याः** = माता यशोदालाई
प्रदर्शन गरेर
**ते** = हजुरद्वारा
**मायात्वम् एव** = मायामयता नै
**प्रकटीकृतं** = प्रकट गरियो

**वाक्यार्थ–** मायालाई निस्तेज बनाउने हे मायेश्वर ! हजुरले यही मनुष्य अवतारमा पनि बाहिर प्रकाशित प्रत्यक्षसिद्ध यो सम्पूर्ण चराचर जगत्लाई माता यशोदाको अगाडि आफ्नै पेटभित्र देखाइदिएर हजुरले आफ्नो मायामयता प्रकट गर्नुभएको थियो।

**यस्य कुक्षाविदं सर्वं सात्मं भाति यथा तथा।**
**तत् त्वय्यपीह तत् सर्वं किमिदं मायया विना ॥ १७ ॥**

**पदार्थ–**
**यस्य** = जुन हजुरको
**कुक्षौ** = पेटभित्र
**सात्मं** = आफू (हजुर)ले सहित
**इदं** = यो दृश्यमान
**सर्वं** = सम्पूर्ण जगत्
**यथा** = जसरी
**भाति** = प्रकाशित छ
**तथा** = त्यसै गरी
**तत्** = त्यो
**सर्वं इदं** = सबै यो (दृश्य प्रपञ्च)
**इह अपि** = यहाँ (बाहिर) पनि (भान भइरहेको छ)
**तत्** = त्यो भान
**त्वयि** = हजुरमा
**मायया विना** = माया नभए
**किम्** = के हुन सक्छ

**वाक्यार्थ–** हजुरले सहित सम्पूर्ण जगत् जसरी हजुरको पेटभित्र प्रकाशित भएको छ त्यसै गरी त्यो सबै यहाँ बाहिर पनि प्रतीत भइरहेको छ त्यसैले यो सबै हजुरको माया नभएर अरू के हुन सक्छ र ?

**अद्यैव त्वदृतेऽस्य किं मम न ते मायात्वमादर्शित-**
**मेकोऽसि प्रथमं ततो व्रजसुहृद्वत्साः समस्ता अपि।**

**तावन्तोऽसि चतुर्भुजास्तदखिलैः साकं मयोपासिता-**
**स्तावन्त्येव जगन्त्यभूस्तदमितं ब्रह्माद्वयं शिष्यते ॥ १८ ॥**

**पदार्थ–**
**त्वदृते** = हजुर विना
**अस्य** = यो सम्पूर्ण जगत्को
**मायात्वम्** = मायामयरूप
**ते** = हजुरद्वारा
**अद्य एव** = आज नै
**किं** = के
**मम** = मलाई
**न आदर्शितम्** = देखाइएन र ?
**प्रथमम्** = सबैभन्दा पहिले (गोप र बाच्छाको हरण गर्नुपूर्व)
**एकः** = हजुर एउटै श्रीकृष्णरूपले
**असि** = हुनुहुन्थ्यो
**ततः** = त्यसपछि (गोप र बाच्छाहरूको हरणपश्चात्)
**व्रजसुहृद्वत्साः** = व्रजमा बस्ने साथी र बाच्छाहरू
**समस्ताः अपि** = बाँसुरी, लौरो आदि सम्पूर्ण क्रीडासामग्रीहरू पनि (हजुर नै हुनुभयो, त्यसपछि)
**मया साकं** = मैले सहित
**तदखिलैः** = ती सम्पूर्ण तत्त्वहरूद्वारा
**उपासिताः** = सेवा गरिएका
**तावन्तः** = त्यति नै सङ्ख्यामा रहेका
**चतुर्भुजाः** = चतुर्भुजधारी पनि हजुर नै
**असि** = हुनुहुन्छ (तथा)
**तावन्ति एव** = त्यति नै सङ्ख्यामा
**जगन्ति** = ब्रह्माण्डको रूपमा (हजुर नै)
**अभूः** = हुनुहुन्थ्यो
**तत्** = त्यसबाट
**अमितं** = सर्वत्र अनुगत सर्वव्यापक
**अद्वयं** = अद्वैत
**ब्रह्म** = ब्रह्मरूपमा नै
**शिष्यते** = शेष रहनुभएको छ

**वाक्यार्थ–** हे प्रभु ! हजुरले आज नै आफू (हजुर)देखि भिन्न सम्पूर्ण जगत् मायामय हो भनेर मलाई देखाउनुभएको होइन र ? मैले गोप र बाच्छाहरूको हरण गर्नुभन्दा अगाडि हजुर एउटै मात्र श्रीकृष्णरूपले विराजमान हुनुहुन्थ्यो, जब मैले गोप र बाच्छाहरूको हरण गरेँ, त्यसपछि व्रजवासी सम्पूर्ण गोप र बाच्छाहरूको रूपमा तथा बाँसुरी, लौरो आदि क्रीडा सामग्रीहरूको रूपमा पनि हजुर नै प्रतीत हुनुभएको थियो। मसहित सम्पूर्ण देवता तथा प्रकृति आदि तत्त्वहरूद्वारा हजुर नै सेवित भइरहनुभएको थियो। गोप र बाच्छाहरूको जति सङ्ख्या थियो, त्यति नै सङ्ख्यामा देखिएका चतुर्भुजाधारीहरू पनि हजुर नै हुनुहुन्थ्यो। सम्पूर्ण ब्रह्माण्डहरूको रूपमा पनि हजुर नै हुनुहुन्थ्यो। सर्वत्र अनुगत सर्वव्यापक हजुर नै अहिले एक मात्र अद्वितीय ब्रह्मभावले शेष रहनुभएको छ।

**अजानतां त्वत्पदवीमनात्मन्यात्मात्मना भासि वितत्य मायाम्।**
**सृष्टाविवाहं जगतो विधान इव त्वमेषोऽन्त इव त्रिनेत्रः ॥ १९ ॥**

**पदार्थ–**
**त्वत्पदवीम्** = हजुरको स्वरूपलाई
**अजानतां** = नजान्नेहरूको
**अनात्मनि** = अनात्मा शरीर
**आत्मा** = आत्मस्वरूप हजुर नै
**आत्मना** = स्वतन्त्र रूपले
**मायां** = मायालाई
**वितत्य** = विस्तार गरेर
**भासि** = प्रकाशित हुनुहुन्छ
**त्वम्** = हजुर
**जगतः** = संसारको

**सृष्टौ** = सृष्टिकालमा
**अहं इव** = म (ब्रह्मा) झैं भएर
**विधाने** = पालनकालमा
**एषः इव** = यही विष्णुरूप भएर
**अन्ते** = संहारकालमा
**त्रिनेत्रः इव** = तीन नेत्र भएका रुद्र भएर (प्रकाशित हुनुहुन्छ)

**वाक्यार्थ–** हजुरको स्वरूपलाई जसले जानेको छैन, त्यस्ता अज्ञानीहरूको अनात्मा शरीरमा हजुरले नै आत्मबुद्धि गराइदिन आफ्नो मायाको विस्तार गरिदिनुहुन्छ। अज्ञानीहरूलाई आफ्नो मायाले मोहित गराएर सृष्टिकालमा रजोगुणी म ब्रह्मा, स्थितिकालमा सत्त्वगुणी विष्णु र संहारकालमा तमोगुणी रुद्रको रूपमा हजुर नै प्रकाशित हुनुहुन्छ।

**विवरण–** यो श्लोकमा ब्रह्माजीले परमात्मा मायाद्वारा नै ब्रह्मा, विष्णु र महेश्वरको रूपमा देखिनुभएको हो भनी बताउनुभएको छ। वेदान्त सिद्धान्त अनुसार परमात्मामा मायाको आवरण छैन। यदि परमात्मामा मायाको आवरणद्वारा ब्रह्मा, विष्णु आदि रूप हुन्छन् भन्ने हो भने परमात्मालाई पनि अज्ञानी मान्नुपर्ने हुन्छ, जुन सम्भव छैन। त्यसैले अज्ञानद्वारा आवृत भएको जीवात्माले नै मायाको मलिनताद्वारा परमात्मामा जीव, जगत्, ईश्वर आदि भेद खडा गर्छ। आकाशमा धुवाँ, धुलो आदि मलिनता नभए पनि अज्ञानी बच्चाले त्यहाँ धुलो आदि लागेको कल्पना गरे झैं अज्ञानी जीवले पनि आफ्नै मलिनताद्वारा आत्मामा मायाको मलिनता भएको कल्पना गर्दछ। बादलले सूर्यलाई ढाकेको नभई हेर्ने मानिसको आँखालाई ढाकेको हुन्छ, अनि मानिस बादलले सूर्यलाई ढाक्यो भन्दछ। यदि बादलले सूर्यलाई नै ढाकेको भए सबैतिर अँध्यारो हुनुपर्थ्यो। बादलले हेर्ने मान्छेको दृष्टिलाई ढाकेको हुनाले त्यसले सूर्यलाई ढाक्यो भन्ने व्यवहार हुन्छ, तर बादलद्वारा सूर्य ढाकिएको हुँदैन। यस्तै अज्ञानले पनि जीवात्मालाई नै ढाकेको छ, उसको दृष्टि रोकिएकाले ऊ ब्रह्मस्वरूपलाई यथार्थ रूपमा जान्न सक्दैन, अनि अज्ञानको कारणले जीव, जगत्, ईश्वर आदि भेद कल्पित हुन्छ। श्लोकमा हजुरको स्वरूप नजान्नेहरूका लागि हजुर नै प्रकृतिमा बसी, स्वयंले मायालाई स्वीकार गरी अनेक रूपमा देखिनुहुन्छ भनी बताइएको छ। परमात्मा मायाको रजोगुणलाई लिई ब्रह्मा, सत्त्वगुणलाई लिई विष्णु र तमोगुणलाई लिई महेश्वर बन्नुहुन्छ। यो सबै रूपभेद अद्वितीय परमात्मामा केवल मायाद्वारा कल्पित हो, वास्तविक होइन। यसैले श्लोकमा हरेक ठाउँमा **इव** पद लगाइएको छ। एउटै डोरी अनेक अज्ञानीहरूको दृष्टिमा सर्प, माला, जलधारा, फाटेको जमिन, लौरो आदि अनेक रूपमा देखिए झैं परमात्मामा अनेक रूपहरू देखिए जस्तो भएका मात्र हुन् भन्नु यसको आशय हो।

**सुरेष्वृषिष्वीश तथैव नृष्वपि तिर्यक्षु यादस्स्वपि तेऽजनस्य।**
**जन्मासतां दुर्मदनिग्रहाय प्रभो विधातः सदनुग्रहाय च॥ २०॥**

**पदार्थ–**
**ईश** = हे भगवान्
**प्रभो** = हे प्रभु
**विधातः** = हे विधाता
**अजनस्य** = अजन्मा
**ते** = हजुरको
**असतां** = दुष्टहरूको
**दुर्मदनिग्रहाय** = अहङ्कारलाई नाश गर्न
**सदनुग्रहाय च** = सज्जनहरूलाई अनुग्रह गर्न
**सुरेषु** = (वामन आदि) देवता

**ऋषिषु** = (परशुराम आदि) ऋषि
**नृषु** = (राम आदि) मनुष्य
**तिर्यक्षु अपि** = (वराह आदि) पशु शरीरमा
**तथा एव** = त्यसै गरी
**यादस्सु अपि** = (मत्स्य आदि) जलचरहरू भएर
**जन्म** = जन्म (हुन्छ)

**वाक्यार्थ–** हे प्रभु ! हे विधाता ! अजन्मा हजुर नै दुष्टहरूको अहङ्कारलाई नाश गर्न र आफ्ना भक्तहरूलाई अनुग्रह गर्न देवता, ऋषि, मनुष्य, पशु र जलजन्तुको रूपमा जन्म लिनुहुन्छ।

**को वेत्ति भूमन् भगवन् परात्मन् योगेश्वरोतीर्भवतस्त्रिलोक्याम् ।**
**क्व वा कथं वा कति वा कदेति विस्तारयन् क्रीडसि योगमायाम् ॥ २१ ॥**

**पदार्थ–**
**भूमन्** = हे सर्वव्यापक
**भगवन्** = हे भगवान्
**परात्मन्** = हे परमात्मा
**योगेश्वर** = हे योगेश्वर
**योगमायाम्** = आफ्नो योगमायालाई
**विस्तारयन्** = विस्तार गर्दै
**क्रीडसि** = जब लीला गर्नुहुन्छ (तब)
**त्रिलोक्यां** = तीनै लोकमा
**भवतः** = हजुरको
**ऊतीः** = लीला
**क्व** = कुन ठाउँमा
**कथं वा** = कसरी
**कदा वा** = कहिले
**कति वा** = कति (हुन्छ)
**इति** = यो (रहस्य)
**कः** = कसले
**वेत्ति** = जान्दछ

**वाक्यार्थ–** हे सर्वव्यापक ! हे भगवान् ! हे परमात्मा ! हे योगेश्वर ! जब हजुर आफ्नो योगमायाको विस्तार गरेर लीला गर्नुहुन्छ, तब कुन ठाउँमा, कहिले, कुन प्रयोजनका लागि कति पटक हजुरले आफ्नो लीला गर्नुहुन्छ भन्ने कुरा कसले जान्दछ र ?

**तस्मादिदं जगदशेषमसत्स्वरूपं स्वप्नाभमस्तधिषणं पुरुदुःखदुःखम् ।**
**त्वय्येव नित्यसुखबोधतनावनन्ते मायात उद्यदपि यत्सदिवावभाति ॥ २२ ॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**इदं** = (अज्ञानका कारण देखा परेको) यो
**अशेषम्** = सम्पूर्ण
**जगत्** = जगत्
**अनन्ते** = अनन्त
**नित्यसुखबोधतनौ** = नित्य आनन्द र ज्ञानस्वरूप शरीर भएका
**त्वयि एव** = हजुरमा नै
**स्वप्नाभम्** = स्वप्नकालीन पदार्थ जस्तै (केही क्षण मात्र प्रकाशित हुने असत्य)
**अस्तधिषणं** = विद्वान्हरूद्वारा पनि आकलन गर्न नसकिने
**पुरुदुःखदुःखम्** = धेरै दुःखपश्चात् पनि दुःख दिइरहने
**असत्स्वरूपं** = स्वरूपतः नै असत्य छ
**यत्** = जुन जगत्
**मायातः** = मायाबाट
**उद्यत् अपि** = उत्पन्न भएर पनि
**सत् इव** = सत्य झैँ
**अवभाति** = (हजुरको सत्ताद्वारा) प्रतीत हुन्छ

**वाक्यार्थ–** अज्ञानका कारण देखा परेको यो सम्पूर्ण जगत् अनन्त छ, नित्य आनन्द र ज्ञानस्वरूप विग्रह भएका हजुरमा नै स्वप्नकालीन पदार्थ जस्तै केही क्षण मात्र प्रकाशित भएको छ अनि

विद्वान्हरूद्वारा पनि यसको आकलन गर्न सकिँदैन र यसले दुःखै दुःख दिइरहन्छ। स्वरूपतः असत्य यो जगत् असत् भए पनि मायाबाट उत्पन्न भई हजुरको सत्ताद्वारा सत्तावान् भएर प्रतीत भइरहेको छ।

**एकस्त्वमात्मा पुरुषः पुराणः सत्यः स्वयंज्योतिरनन्त आद्यः।**
**नित्योऽक्षरोऽजस्रसुखो निरञ्जनः पूर्णोऽद्वयो मुक्त उपाधितोऽमृतः॥ २३॥**

**पदार्थ–**
**त्वम्** = हजुर नै
**एकः** = भेदरहित
**आत्मा** = अन्तर्यामी
**पुराणः** = पुराण
**पुरुषः** = पुरुष
**सत्यः** = सत्य
**स्वयंज्योतिः** = स्वयंप्रकाश
**अनन्तः** = अनन्त
**आद्यः** = आद्य
**नित्यः** = नित्य
**अक्षरः** = अविनाशी
**अजस्रसुखः** = नित्यानन्द
**निरञ्जनः** = मायासम्पर्कशून्य निर्मल
**पूर्णः** = परिपूर्ण
**अद्वयः** = अद्वैत
**उपाधितः** = उपाधिबाट
**मुक्तः** = मुक्त
**अमृतः** = अमृतस्वरूप (हुनुहुन्छ)

**वाक्यार्थ–** हे ईश्वर ! हजुर नै भेदरहित एक मात्र सत्य हुनुहुन्छ। सर्वान्तर्यामी पुराणपुरुष हजुर सबैको आत्मा हुनुहुन्छ। हजुरको कुनै अन्त छैन र न त आदि नै छ, त्यसैले सम्पूर्ण विकाररहित सर्वदा आनन्दस्वरूप हजुर स्वयंप्रकाश अद्वैत हुनुहुन्छ। माया र मायाका कार्यहरूले स्पर्श गर्न नसक्ने भएकाले हजुरको स्वरूप निर्मल छ। सदा सर्वत्र परिपूर्ण हजुर सम्पूर्ण उपाधिहरूले शून्य अमृतस्वरूप हुनुहुन्छ।

**विवरण–** माथिका दुई श्लोकमा जगत् स्वप्नसमान असद्रूप छ एवं त्यसलाई सत् रूपमा प्रतीति गराउने अधिष्ठान परमात्मा भने सत्य, स्वयंप्रकाश, पूर्ण र अद्वैत हुनुहुन्छ भनी बताइएको छ। दृश्य जगत् स्वप्न जस्तै मिथ्या हो। स्वप्नका पदार्थहरूको बाह्य सत्ता या आकार हुँदैन, तर ती सबै भित्रै देखिएका हुन्छन्, त्यसै गरी जगत्का पदार्थहरूको पनि बाहिरी सत्ता या आकार छैन, तिनीहरू आत्मामा देखिन्छन् मात्रै। स्वरूपतः नहुनु भन्ने अर्थमा सम्पूर्ण विश्वप्रपञ्च असत् हो, तर प्रतीति हुने भएकाले पूर्ण असत् भने होइन। **सत् चेन्न बाध्येत असत् चेन्न प्रतीयेत** भन्दै वेदान्तमा प्रपञ्चलाई सत् र असत्भन्दा भिन्न मिथ्याकोटिमा राखिएको छ। असत् आकाशपुष्पको प्रतीति हुँदैन अनि सत् वस्तुको निवृत्ति हुँदैन। यसैले प्रतीत पनि हुने अनि ज्ञानपछि निवृत्त पनि हुने भएकाले जगत् मिथ्या हो। अतः श्लोकमा जगत्लाई **स्वप्नाभं** अर्थात् स्वप्न जस्तै भान हुने भनिएको हो। डोरीमा देखिएको सर्पको दृष्टान्तद्वारा पनि जगत्लाई मिथ्या सिद्ध गरिन्छ। तर त्यो भन्दा पनि स्वप्नकै दृष्टान्त उपयुक्त छ।

डोरीमा सर्पको भ्रम हुँदा त्यहाँ दुई अंश हुन्छन्, एउटा डोरी अर्थात् अधिष्ठान अंश र अर्को सर्प अर्थात् अध्यस्त अंश। यी दुबैको संसर्गलाई भ्रमज्ञानले विषय गर्दछ। भ्रमज्ञानका विषय भएका दुई अंशमध्ये सर्प भन्ने बुद्धिको विषयभूत सर्प वास्तवमा छैन, तर **इदं** अंशले विषय गर्ने डोरीको भने बाह्य सत्ता छ। तर स्वप्नमा भने स्वप्नभ्रमका विषयभूत खोला, पहाड, सूर्य, वन

आदि कुनै पनि पदार्थको बाह्य सत्ता छैन, केवल अधिष्ठान आत्माको मात्र सत्ता छ। त्यसैले संसारको अलिकति पनि सत्ता छैन भन्नका लागि स्वप्नको दृष्टान्त दिइने गरिन्छ। जहाँ अधिष्ठान आत्मामा जगत्‌को भ्रम देखिन्छ भनी अधिष्ठानरूपले आत्मालाई बुझाउन खोजिन्छ, त्यहाँ भने **रज्जुसर्प**को दृष्टान्त दिइन्छ। दुबै उदाहरणबाट जगत् मिथ्या हो भन्ने नै सिद्ध गरिन्छ।

अनेक अनर्थहरूले युक्त हुने हुँदा जगत् दुःखरूप छ। उसो भए जगत्‌का पदार्थमा सत्ता र सुखको ज्ञान कसरी हुन्छ त भन्ने जिज्ञासाको समाधान गर्दै भनिन्छ— सुखस्वरूप सद्रूप परमात्मामा कल्पित भएकाले यो प्रपञ्च पनि सुखरूप र सद्रूप झैँ देखिएको मात्र हो।

अर्को श्लोकमा भने आत्मामा षड्भावविकार र चारै थरी क्रियाको सम्बन्ध छैन भनी बताइएको छ। **जायते, अस्ति, वर्धते, विपरिणमते, अपक्षीयते, विनश्यति** यी षड्भावविकार हुन्। कुनै पनि कार्यपदार्थमा यी छ ओटा भावविकारहरू भइरहन्छन्। तर आत्मामा कुनै पनि भावविकार हुँदैनन्। आत्मा उत्पन्न हुँदैन किनभने यो **आद्य** अर्थात् पहिलो हो, त्यसैले यसको कुनै कारण छैन। आद्य हो भन्ने अर्थलाई पुष्टि गर्न **पुराण** पद आएको छ। **पुरा** अर्थात् कार्य हुनुभन्दा पहिले पनि **नव** अर्थात् अहिलेजस्तै रहने आत्मा कसैको कार्य हुन सक्दैन। **पूर्वमेव आसीत्** भन्ने निरुक्तिद्वारा पुरुष शब्दले पनि यही अर्थको सूचना गर्दछ। अस्तित्वरूपी विकार हटाउन **नित्य** पद आएको छ, यसले उत्पत्तिपछि आत्माको अस्तित्व भएको होइन भन्ने जनाउँछ। **पूर्ण**शब्दले वृद्धि अर्थात् बढ्नुरूप विकारलाई हटाउँछ, किनभने पूर्ण एवं व्यापक वस्तु बढ्न सक्दैन। **अजस्रसुख** शब्दले परिणामरूप विकारलाई हटाउँछ, किनभने परमात्मा अजस्र अर्थात् शाश्वत सुखरूप हुनुहुन्छ। जो परिणत हुन्छ, त्यो शाश्वत होइन, नयाँ–नयाँ भइरहन्छ। **अक्षर** शब्दले अपक्षयरूप विकारलाई निषेध गरेको छ भने **अमृत** पदले विनाशरूप विकारलाई निषेध गरेको छ।

यसै गरी आत्मामा **उत्पाद्य, प्राप्य, संस्कार्य** र **विकार्य** यी चार ओटै क्रियाहरूको सम्बन्ध छैन। आत्मा उत्पाद्य होइन किनभने यो **आद्य** एवं **नित्य** हो। प्राप्ति पनि कि आफैँसँग भएको वस्तु पहिला बिर्सिएर पछि सम्झिनाले गलामा लगाइएको हार पाइए झैँ हुन्छ, कि त क्रियाद्वारा अप्राप्त वस्तुको प्राप्ति गरे झैँ हुन्छ। आत्माको क्रियाद्वारा प्राप्ति सम्भव छैन, किनभने आत्मा कहिल्यै पनि आफूसँग नभएको वस्तु हुँदैन। ज्ञानद्वारा प्राप्ति पनि सम्भव छैन, किनभने स्वयंप्रकाश आत्मालाई कहिल्यै बिर्सिएकै छैन। यसरी **आत्मा** र **स्वयंज्योति** शब्दले प्राप्तिरूप क्रियाको निषेध गर्दछन्। आत्मामा विकाररूप क्रिया छैन, किनभने आत्मा असङ्ग छ, यसलाई बताउन **उपाधितः मुक्तः** भन्ने पद आएको छ। आत्मामा संस्काररूपी विकार पनि संभव छैन, किनभने संस्कार दुई किसिमले गरिन्छ— कुनै मल हटाएर अथवा कुनै विशेषता थपेर। विशेषताको आधान गर्ने संस्कार ब्रह्ममा सम्भव छैन किनभने यो **पूर्ण** छ, पूर्णमाथि अर्को विशेषता थप्न सकिन्न। अनि आत्मा **निरञ्जन** अर्थात् निर्मल भएकाले मल हटाउने संस्कार पनि यसमा सम्भव छैन। यसरी यहाँ नित्य एवं स्वतःसिद्ध आत्मवस्तुको प्रतिपादन गरिएको छ।

**एवंविधं त्वां सकलात्मनामपि स्वात्मानमात्मात्मतया विचक्षते।**
**गुर्वर्कलब्धोपनिषत्सुचक्षुषा ये ते तरन्तीव भवानृताम्बुधिम्॥ २४॥**

**पदार्थ–**
**गुर्वर्कलब्धोपनिषत्सुचक्षुषा** = गुरुरूप परमार्थप्रकाशक सूर्यबाट प्राप्त उपनिषज्जन्य ज्ञानचक्षुद्वारा
**ये** = जसले
**एवंविधं** = यस्ता
**सकलात्मनाम् अपि** = सम्पूर्ण जीवहरूका पनि
**स्वात्मानम्** = आफ्नै आत्मस्वरूप हुनुभएका
**त्वां** = हजुरलाई
**आत्मात्मतया** = आफूदेखि अभिन्नरूपले
**विचक्षते** = जान्दछन्
**ते** = त्यस्ता व्यक्तिहरूले
**भवानृताम्बुधिम्** = संसाररूपी मिथ्या सागरलाई
**तरन्ति इव** = पार गर्दछन्

**वाक्यार्थ–** परमार्थप्रकाशक गुरुरूप सूर्यबाट प्राप्त उपनिषज्जन्य दिव्य ज्ञानचक्षुद्वारा सम्पूर्ण जीवहरूका आत्मा हजुरलाई जसले आफ्नै स्वरूपले जान्दछन् उनीहरूले संसाररूपी मिथ्या सागरलाई पार गर्दछन्।

**आत्मानमेवात्मतयाविजानतां तेनैव जातं निखिलं प्रपञ्चितम्।**
**ज्ञानेन भूयोऽपि च तत्प्रलीयते रज्ज्वामहेर्भोगभवाभवौ यथा॥ २५॥**

**पदार्थ–**
**आत्मानम्** = परमात्मालाई
**आत्मतया** = आत्मरूपले
**अविजानतां एव** = नजान्नेहरूका लागि नै
**तेन एव** = त्यही अज्ञानका कारण
**निखिलं** = सम्पूर्ण
**प्रपञ्चितम्** = प्रपञ्च
**जातं** = उत्पत्तिको भ्रम हुन्छ
**तत् च** = प्रपञ्चको त्यो उत्पत्ति
**ज्ञानेन** = आत्मवस्तुको यथार्थ ज्ञानद्वारा
**भूयः अपि** = फेरि पनि
**प्रलीयते** = नष्ट हुन्छ
**यथा** = जसरी
**रज्ज्वाम्** = डोरीमा
**अहेः** = सर्पको
**भोगभवाभवौ** = शरीरको उत्पत्ति र नाश (डोरीको अज्ञान र ज्ञानद्वारा हुन्छ)

**वाक्यार्थ–** जसले परमात्मालाई आत्मरूपले जान्दैनन्, तिनीहरूलाई त्यही परमात्माको वास्तविक स्वरूपको अज्ञानका कारण सम्पूर्ण प्रपञ्चको उत्पत्तिको भ्रम हुन्छ, तर जब उनीहरूलाई परमात्माको ज्ञान हुन्छ, तब प्रपञ्च पनि नष्ट (आत्यन्तिक लय) हुन्छ। जसरी डोरीको अज्ञानका कारण भ्रान्त व्यक्तिहरूले डोरीलाई सर्पको शरीर देख्दछन् तर जब डोरीको ज्ञान हुन्छ तब डोरीकै अज्ञानद्वारा कल्पित सर्पको पनि आत्यन्तिक लय हुन्छ।

**अज्ञानसंज्ञौ भवबन्धमोक्षौ द्वौ नाम नान्यौ स्त ऋतज्ञभावात्।**
**अजस्रचित्यात्मनि केवले परे विचार्यमाणे तरणाविवाहनी॥ २६॥**

**पदार्थ–**
**अजस्रचिति** = नित्यज्ञानरूप
**केवले** = अद्वितीय
**परे** = शुद्ध
**आत्मनि** = आत्मतत्त्वमा
**विचार्यमाणे** = विचार गर्दा

**तरणौ** = सूर्यमा
**अहनी इव** = रात र दिन झैं
**ऋतज्ञभावात्** = अबाधित चिदात्मक परमात्मा बाहेक
**अज्ञानसंज्ञौ** = अज्ञान नामले प्रसिद्ध भएका
**भवबन्धमोक्षौ नाम** = संसारमा हुने बन्धन र त्यसबाट हुने मोक्ष
**द्वौ अन्यौ** = दुई ओटा भिन्न वस्तु
**न स्तः** = छैनन्

**वाक्यार्थ–** सांसारिक बन्धन र मोक्ष भन्ने कुरा नभएका कल्पित वस्तु मात्र हुन्, किनभने यी दुबै अज्ञानदशामा मात्र रहन्छन्। वास्तवमा विचार गर्ने हो भने जसरी सूर्यमा दिन र रातको भेद छैन, त्यसै गरी नित्यज्ञानमय अद्वितीय शुद्ध आत्मतत्त्वमा बन्धन र मोक्ष केही पनि छैन।

**विवरण–** ज्ञानद्वारा रज्जुमा अज्ञानवश देखिएको सर्पको बाध भए झैं आत्मज्ञानद्वारा अज्ञान निवृत्त भएपछि बन्धन पनि हट्छ तर यो बन्धन र मोक्ष पनि कल्पना मात्रै हो। पारमार्थिकरूपले विचार गर्दा बन्धन र मोक्ष यी दुबै वस्तु सत्य होइनन्, किनभने यी अज्ञानद्वारा मात्रै खडा भएका हुन्। बन्धन सत्य नभए पछि त्यसलाई हटाउन मोक्ष पनि किन चाहिन्छ र ? जब बन्धन या भ्रम आफैं काल्पनिक र मायिक हो भने त्यसको निवृत्ति या मोक्ष पनि स्वतः काल्पनिक हुने भयो। बन्धन–मोक्ष, उत्पत्ति–नाश आदि परस्पर सापेक्ष छन्, द्वैतले युक्त छन्, तर अद्वितीय आत्मामा न बन्धन छ न त यसबाट मुक्ति नै। बन्धन र मोक्षको पौर्वापर्य छुट्याउन नसकिने हुनाले यी दुबैलाई सत् मान्नु हुँदैन। यदि पहिले बन्धन थियो र पछि मोक्ष हुन्छ भन्ने मान्ने हो भने मोक्ष उत्पत्तिमान् पदार्थ भएकाले अनित्य हुन्छ। अनि पहिले मोक्ष थियो, अहिले बन्धन छ र अब फेरि मोक्ष पाउनुपर्छ भनी मान्ने हो भने पहिले रहेको मोक्षमा पछि बीचमा कुनै कारणद्वारा बन्धन आयो कि यत्तिकै आयो भन्ने शङ्का हुन्छ। कुनै कारणद्वारा बीचमा बन्धन आयो भन्ने हो भने त्यो कारण रहुन्जेल फेरि बन्धन आइरहन सक्छ। यदि बीचमा बन्धन यत्तिकै आयो भन्ने हो भने आफूखुसी मोक्षको बीचमा आउन सक्ने बन्धन अब मोक्षपछि पनि आइरहन सक्छ। त्यसैले बन्धन र मोक्ष दुबै मिथ्या हुन् भनी मान्नु युक्तिसङ्गत हुन्छ। सत्य एवं ज्ञानस्वरूप आत्माभन्दा भिन्न न मोक्ष भन्ने कुनै वस्तु छ, न त बन्धन नै। जसरी सूर्यमा दिन र रात दुबैको सम्बन्ध छैन, तर सूर्यको प्रकाश परेको ठाउँमा दिन र ओझेल परेको ठाउँमा रात भयो भनी लौकिक व्यवहार गरिन्छ त्यसै गरी बन्धन र मुक्तिको सत्ता पनि व्यवहारमा मात्र छ, परमार्थमा होइन।

उसो भए मोक्षका लागि किन प्रयास गर्नु त ? यस शङ्काको समाधानमा बताइएको छ– आत्मामा भ्रमको कारणले मात्र बन्धन भएको हो, ज्ञानद्वारा यही भ्रमको निवृत्ति हुन्छ, त्यसैले भ्रमको निवृत्तिका लागि प्रयास गर्नुपर्दछ। यो भ्रमनिवृत्तिरूप ज्ञान पनि अज्ञान रहेकै अवस्थामा हुने हो। अज्ञानविना अन्तःकरण अनि अन्तःकरणविना त्यसको आत्माकार वृत्ति सम्भव छैन। त्यसैले आत्मज्ञान पनि अज्ञानकै कार्य हो। अज्ञानकै सहाराले अज्ञानबाट ब्युँझिन कसरी सम्भव छ ? भन्ने शङ्काको उत्तरमा सपनाको दृष्टान्त दिइन्छ। जसरी सपनामा बाघ गर्जिएको सुनेर मानिस सपनाबाट ब्युँझिन्छ अनि ब्युँझिने–ब्युँझाउने दुबै सपना भएको थाहा पाउँछ, त्यसै गरी अज्ञानावस्थामैं गुरु र शास्त्रको उपदेशले अज्ञानबाट ब्युँझिएको जीवले पनि बन्धन–मोक्ष दुबै मिथ्या भएको थाहा पाउँछ। यही पारमार्थिक अवस्थाको प्रतिपादन यहाँ गरिएको छ।

**त्वामात्मानं परं मत्वा परमात्मानमेव च ।**
**आत्मा पुनर्बहिर्मृग्य अहोऽज्ञजनताज्ञता ॥ २७ ॥**

**पदार्थ–**
**आत्मानं** = आफ्नै आत्मरूप
**त्वां** = हजुरलाई
**परं** = आफूभन्दा भिन्न तथा
**परम् च** = आफूदेखि भिन्न देह आदिलाई चाहिँ
**आत्मानम् एव** = आत्मा नै
**मत्वा** = मानेर
**आत्मा** = परमात्मा चाहिँ
**पुनः** = फेरि
**बहिः** = आफूभन्दा बाहिर
**मृग्यः** = (अज्ञानीद्वारा) खोजिन्छ
**अहो** = आश्चर्य
**अज्ञजनताज्ञता** = अज्ञानी मनुष्यहरूको मूर्खता

**वाक्यार्थ–** हे भगवान् ! अज्ञानीहरू आफ्नै आत्मरूप हजुरलाई आफूभन्दा भिन्न तथा आफूभन्दा भिन्न आफ्ना देह आदिलाई चाहिँ आत्मा ठान्दछन् र हजुरलाई बाहिरतिर खोज्न थाल्दछन्। अज्ञानी मनुष्यहरूको यो मूर्खता कस्तो आश्चर्यलाग्दो !

**अन्तर्भवेऽनन्त भवन्तमेव ह्यतत् त्यजन्तो मृगयन्ति सन्तः ।**
**असन्तमप्यन्त्यहिमन्तरेण सन्तं गुणं तं किमु यन्ति सन्तः ॥ २८ ॥**

**पदार्थ–**
**अनन्त** = हे अनन्त
**सन्तः** = विवेकीहरूले
**अन्तर्भवे** = शरीरभित्र हृदयमा बस्नुभएका
**अतत्** = हजुरदेखि भिन्न जड शरीर आदिलाई
**त्यजन्तः** = त्याग गरेर
**भवन्तम् एव** = आत्मरूप हजुरलाई नै
**मृगयन्ति** = खोजेर जान्दछन्
**हि** = निश्चय नै
**असन्तम् अपि** = हुँदै नभए पनि
**अहिम् अन्तरेण** = सर्पलाई अपवाद नगरीकन
**अन्ति** = नजिकमा
**सन्तं** = रहेको
**तं** = त्यो
**गुणं** = डोरीलाई
**सन्तः** = विवेकीहरूले
**किमु** = के
**यन्ति** = जान्दछन्

**वाक्यार्थ–** हे अनन्त ! हजुर जीवहरूको शरीरभित्र हृदयमा निवास गर्नुहुन्छ। त्यसैले विवेकीहरूले हजुरदेखि भिन्न जड शरीर, इन्द्रिय आदिलाई त्याग गरेर मात्र हजुरलाई आफैंभित्र खोज्दछन् र जान्दछन् किनभने रज्जुमा सर्प नभए तापनि त्यहाँ प्रतीयमान सर्पको अपवाद नगरीकन कुनै पनि विवेकीले आफ्नो अगाडि रहेको डोरीलाई जान्न सक्दैन।

**विवरण–** परमात्माको उपलब्धि गर्ने ठाउँ कहाँ हो ? यसको विषयमा बताउँदै ब्रह्माजी शरीरभित्र नै उपाधिको परित्याग गरी आत्माको उपलब्धि गर्नुपर्ने कुरा बताउनुहुन्छ। **भवति इति** यो व्युत्पत्ति अनुसार चिज्जडात्मक शरीरलाई भव भनिन्छ। अन्तःकरण, शरीर यी सबै चिज्जडात्मक छन्, यिनीहरूमा चेतन ब्रह्मको अंश अनि जड मायाको अंश दुबै मिसिएका छन्। यद्यपि चेतन र अचेतन, सत् र असत्बीच प्रकाश र अन्धकारको जस्तै विरोध छ, यिनीहरू एक ठाउँमा मिसिन सक्दैनन्, तर अनादि अविद्याका कारण लोकमा म शरीर हुँ, म गर्छु, म जान्दछु, खान्छु आदि

व्यवहार हुँदैआएको छ। आफू शरीर, इन्द्रिय आदिको प्रकाशक चेतन हो, यो अनुभव हुँदाहुँदै पनि मान्छे त्यसमा जड शरीर आदिलाई पनि मिसाई म नै शरीर हुँ भनी व्यवहार गर्दैछ। यही चित् र जडको सम्मिश्रण अध्यास हो। **अतस्मिन् तद्बुद्धिरध्यासः** (ब्रह्मसूत्रशाङ्करभाष्य, अध्यासभाष्य) अर्थात् जुन वस्तु जे होइन, त्यसमा त्यही बुद्धि हुनु अध्यास हो। अपवाद भनेको चाहिँ **अतत्** अर्थात् नभएको वस्तुको त्याग हो। वास्तवमा भएको वस्तु आत्मा मात्र हो, यही आत्मामा आत्मभिन्न जड शरीर, इन्द्रिय आदिको भ्रम भएको छ। यसैले मानिस आत्मालाई छाडी शरीरलाई आफू मान्दछ।

आत्मालाई जान्ने उपाय हो– जड शरीर, इन्द्रिय आदिको अपवाद गर्नु। शरीर आदिको **अपवाद** भनेको यिनको मृत्यु होइन, अपितु यी आत्मा होइनन् भनेर छुट्याउनु या विवेक गर्नु हो। यसरी छुट्याएर बुझ्दा नै आत्माको साक्षात् ज्ञान हुन सक्दछ, नत्र शरीर आदिलाई मिसाएर या बाँकी राखेर नै आत्माको ज्ञान गर्न खोज्ने हो भने यो सम्भव छैन। डोरीमा सर्पका भ्रम हुँदा नभएको सर्पलाई हटाएर नै भएको डोरीलाई जान्न सकिन्छ। यसरी शरीर र अन्तःकरणभित्रै यी अध्यस्त अंशहरूलाई बाध गरी आत्माको बोध गर्नुपर्दछ भन्ने कुरा ब्रह्माजीले यहाँ बताउनुभएको छ।

**अथापि ते देव पदाम्बुजद्वयप्रसादलेशानुगृहीत एव हि।**
**जानाति तत्त्वं भगवन्महिम्नो न चान्य एकोऽपि चिरं विचिन्वन्॥ २९॥**

**पदार्थ–**
**अथ अपि** = तापनि
**देव** = हे भगवान्
**हि** = निश्चय नै
**ते** = हजुरको
**पदाम्बुजद्वयप्रसादलेशानुगृहीतः**
**एव** = दुई ओटै चरणकमलको अलिकति मात्र पनि अनुग्रह पाएको व्यक्तिले मात्र
**भगवन्महिम्नः** = हजुरको महिमाको
**तत्त्वं** = वास्तविक तत्त्वलाई
**जानाति** = बुझ्दछ
**अन्यः** = हजुरको कृपा नपाएको भक्तिहीन व्यक्तिले
**एकः अपि** = निर्जनस्थानमा एक्लै बसेर पनि
**चिरं** = धेरै समयसम्म
**विचिन्वन् च** = (खोजे पनि) शास्त्रबलले विचार गरे पनि
**न** = हजुरको महिमामय तत्त्वलाई जान्न सक्दैन

**वाक्यार्थ–** हे भगवान्! (यद्यपि ज्ञानद्वारा हजुरको स्वरूपलाई बुझ्न सकिन्छ) तापनि हजुरको चरणकमलको अलिकति मात्र पनि जसले कृपा प्राप्त गर्न सकेको छ, त्यसले मात्र हजुरको अपार महिमा र सच्चिदानन्दमय तत्त्वलाई बुझ्न सक्दछ। यदि हजुरको थोरै पनि कृपा नभएको भक्तिहीन व्यक्ति छ भने त त्यसले निर्जन वनमा एक्लै बसेर केवल शास्त्रज्ञानको भरमा हजुरको महिमामय तत्त्वलाई बुझ्न खोज्दछ भने त्यसले हजुरको तत्त्वलाई कहिल्यै पनि जान्न सक्दैन।

**तदस्तु मे नाथ स भूरिभागो भवेऽत्र वान्यत्र तु वा तिरश्चाम्।**
**येनाहमेकोऽपि भवज्जनानां भूत्वा निषेवे तव पादपल्लवम्॥ ३०॥**

**पदार्थ–**
**नाथ** = हे नाथ
**तत्** = त्यसकारण
**अत्र** = यही
**भवे** = जन्ममा (वा)
**अन्यत्र वा तु** = अर्को जन्ममा
**तिरश्चाम् वा** = पशु आदिहरूको जन्ममा नै पनि
**मे** = मेरो
**भूरिभागः** = महाभाग्यशाली
**सः** = त्यो जन्म
**अस्तु** = होस्
**येन** = जुन सौभाग्यद्वारा
**अहम्** = म
**भवज्जनानां** = हजुरका सेवकहरूमध्ये
**एकः अपि** = कुनै एउटा सेवक
**भूत्वा** = भएर
**तव** = हजुरको
**पादपल्लवम्** = चरणपल्लवको
**निषेवे** = सेवा गरूँ

**वाक्यार्थ–** हे नाथ ! (हजुरको भक्तिविना ज्ञान नहुने भएकाले) यही (ब्रह्माको) जन्ममा, अर्को जन्ममा अथवा कर्मवश पशु-पक्षी आदि हुन पुगेँ भने ती-ती जन्ममा पनि मलाई त्यस्तो अपूर्व सौभाग्य प्राप्त होस्, जुन सौभाग्यद्वारा म हजुरका सेवकहरूमध्ये एउटा सेवक बन्न पाऊँ र हजुरको चरणकमलको सेवा गर्न पाऊँ।

**अहोऽतिधन्या व्रजगोरमण्यः स्तन्यामृतं पीतमतीव ते मुदा।**
**यासां विभो वत्सतरात्मजात्मना यत्तृप्तयेऽद्यापि न चालमध्वराः॥ ३१॥**

**पदार्थ–**
**विभो** = सर्वव्यापक हे प्रभु
**यत्तृप्तये** = जुन हजुरलाई तृप्त बनाउनका लागि
**अद्य अपि** = आजसम्म पनि
**अध्वराः च** = सम्पूर्ण यज्ञहरू
**न अलम्** = समर्थ हुन सकेनन्
**ते** = त्यस्ता हजुरद्वारा
**वत्सतरात्मजात्मना** = गाईको बाच्छा र गोपिनीहरूको बालक बनेर
**यासां** = जुन-जुन गाई र गोपिनीहरूको
**अतीव** = अत्यन्त
**मुदा** = हर्षले
**स्तन्यामृतं** = दुग्धामृत
**पीतम्** = पान गर्नुभयो
**अहो** = अहो (ती)
**व्रजगोरमण्यः** = व्रजका गाई र गोपिनीहरू
**अतिधन्याः** = अत्यन्त धन्य छन्

**वाक्यार्थ–** हे प्रभु ! आजसम्म कुनै पनि यज्ञहरूले हजुरलाई तृप्त बनाउन सकेनन्, तर व्रजमा हजुरले बाच्छा र बालक बनेर जुन-जुन गाई र गोपिनीहरूको अमृत जस्तै मिठो दुध हर्ष मानेर पिउनुभयो, व्रजका ती गाई र गोपिनीहरू धन्य छन्।

**अहो भाग्यमहो भाग्यं नन्दगोपव्रजौकसाम्।**
**यन्मित्रं परमानन्दं पूर्णं ब्रह्म सनातनम्॥ ३२॥**

**पदार्थ–**
**नन्दगोपव्रजौकसां** = नन्द आदि व्रजवासी गोपहरूको
**अहो** = अहो
**भाग्यम्** = भाग्य
**अहो** = अहो
**भाग्यं** = भाग्य
**सनातनम्** = सनातन
**परमानन्दं** = परमानन्दरूप
**पूर्णं** = पूर्ण
**ब्रह्म** = परब्रह्म (हजुर)
**यन्मित्रं** = जुन व्रजवासी गोपहरूको मित्र हुनुहुन्छ

**वाक्यार्थ–** अहो ! व्रजका निवासी नन्द आदि गोपहरू अति धन्य छन्। किनभने पूर्ण, परमानन्द, सनातन, परब्रह्म परमात्मा हजुर (श्रीकृष्ण) उनीहरूको परम मित्र हुनुहुन्छ।

**एषां तु भाग्यमहिमाच्युत तावदास्ता-**
**मेकादशैव हि वयं बत भूरिभागाः।**
**एतद्धृषीकचषकैरसकृत् पिबामः**
**शर्वादयोऽङ्घ्र्युदजमध्वमृतासवं ते ॥ ३३ ॥**

**पदार्थ–**
**अच्युत** = हे श्रीकृष्ण
**एषां** = यी व्रजवासीहरूको
**भाग्यमहिमा तु** = सौभाग्यको महिमा
**तावत्** = त्यहाँसम्म
**आस्ताम्** = रहोस्
**बत** = हर्षको कुरा
**शर्वादयः** = रुद्र आदि
**एकादश एव** = एघारै जना इन्द्रियका अधिष्ठाता देवता
**वयं** = हामीहरू
**हि** = निश्चय नै
**भूरिभागाः** = महाभाग्यमानी छौँ (किनभने)
**एतद्धृषीकचषकैः** = यी व्रजवासीहरूको इन्द्रियरूप पानपात्रद्वारा
**ते** = हजुरको
**अङ्घ्र्युदजमध्वमृतासवं** = चरणकमलको मकरन्दरूप अमृतभन्दा पनि मिठो र संसारलाई भुलाइदिने मादक रस
**असकृत्** = बारम्बार
**पिबामः** = पिउँछौ

**वाक्यार्थ–** हे श्रीकृष्ण ! यी व्रजवासीहरूको सौभाग्यको कुरा अलग छोडौँ (त्यसको वर्णन कसले गर्न सक्छ र ?) हर्षको कुरा त के भने भगवान् रुद्र लगायत एघारै इन्द्रियका अधिष्ठाता देवता हामीहरू पनि अत्यन्त भाग्यमानी छौँ किनभने यिनै व्रजवासीहरूको इन्द्रियरूप अलग-अलग पानपात्रबाट हामीहरू प्रत्येकले हजुरको चरणकमलको अमृतभन्दा पनि मिठो संसारलाई नै बिर्साइदिने मादक मकरन्द रस बारम्बार पिउन पाएका छौँ।

**विवरण–** माथिका श्लोकहरूमा ब्रह्माजीले व्रजवासीहरूको भाग्यको प्रशंसा गर्नुभएको छ। बत्तीसौँ श्लोकमा **अहो भाग्यं अहो भाग्यम्** भन्ने दुई पटक उच्चारण गरेर व्रजवासीहरूको सौभाग्य कुनै पनि रूपले नाप्न नसकिने अपरिच्छिन्न भएको कुरा बताउन खोजिएको हो। यो तेत्तीसौँ श्लोकमा **शर्वादयः एकादश** भन्ने पदले शङ्कर बाहेक अरू एघार देवतालाई मात्र बुझाउन खोजिएको छ, शङ्करलाई चाहिँ त्योभन्दा पृथक् नै बताइएको छ। यी एघार देवताहरू मनसहित एघार इन्द्रियका अधिष्ठाताहरू हुन्। भगवान् शङ्कर अहङ्कार अनि ब्रह्माजी बुद्धिका अधिष्ठाता हुनुहुन्छ। हामी सबै यी व्रजवासीहरूका इन्द्रियहरूबाट श्रीकृष्ण परमात्माको अनुभव गरी आफूलाई महाभाग्यशाली ठान्दछौँ भनी ब्रह्माजी बताउनुहुन्छ। चरणकमलको मधुर मादक अमृत रसलाई एक-एक इन्द्रियको माध्यमले पिउने हामीहरू त यति तृप्त र आनन्दित छौँ भने सबै इन्द्रियले श्रीकृष्णलाई स्वीकार गर्ने तथा उहाँको मधुरताको आस्वादन गर्ने गोप-गोपिनीहरूको आनन्द र सौभाग्य कति महत्त्वपूर्ण होला यो कुरा बताइसाध्य छैन भनी ब्रह्माजी भन्नुहुन्छ। एघार

इन्द्रियका अधिष्ठाता देवता भनी कानका दिशा, त्वगिन्द्रियका वायु, आँखाका सूर्य, जिब्रोका वरुण, नासिकाका अश्विनीकुमार, वाणीका अग्नि, हातका इन्द्र, पाउका विष्णु, गुदद्वारका मित्र र उपस्थका प्रजापति अनि मनका अधिष्ठाता चन्द्रमा हुन्। यसै गरी अहङ्कारका अधिष्ठाता रुद्र र बुद्धिका अधिष्ठाता ब्रह्मा हुन्। सबै प्राणीहरूका इन्द्रियहरूभित्र यिनै अनुग्राहक देवताहरूको शक्तिले काम गरिरहेको हुन्छ। यसरी गोप-गोपिनीका इन्द्रियहरूको माध्यमले ती इन्द्रियका समष्टि अभिमानी देवतासमेत तृप्त हुने रहस्य यहाँ बताइएको छ।

**तद् भूरिभाग्यमिह जन्म किमप्यटव्यां**
**यद् गोकुलेऽपि कतमाङ्घ्रिरजोऽभिषेकम्।**
**यज्जीवितं तु निखिलं भगवान् मुकुन्द-**
**स्त्वद्यापि यत् पदरजः श्रुतिमृग्यमेव ॥ ३४ ॥**

**पदार्थ–**
**तत्** = त्यस्तो
**भूरिभाग्यं** = महासौभाग्य (प्राप्त होस्)
**यत्** = जसद्वारा
**इह** = यस मनुष्यलोकमा (त्यसमा पनि)
**गोकुले** = गोकुलमा (त्यसमा पनि)
**अटव्यां अपि** = वृन्दावनमा
**किम् अपि** = (पशु, पक्षी, वृक्ष, लता, कीरा आदि मध्ये) जुन कुनैको
**जन्म** = जन्म प्राप्त होस् जो
**कतमाङ्घ्रिरजोऽभिषेकम्** = कुनै न कुनै भगवान्का भक्तको चरणरजको अभिषेकले युक्त (होस्)
**यत् तु** = जुन
**निखिलं** = सबै
**जीवितं** = जीवन
**भगवान्** = भगवान्
**मुकुन्दः एव** = श्रीकृष्ण नै हुनुहुन्छ
**यत्पदरजः** = भगवान् श्रीकृष्णको जुन चरणरज
**अद्य अपि तु** = (अनादि कालदेखि) आजसम्म पनि त
**श्रुतिमृग्यम्** = वेदहरूद्वारा खोजिएको छ (तर प्राप्त गरिएको छैन)

**वाक्यार्थ–** हे भगवान्! मलाई त्यस्तो सौभाग्य प्राप्त होस्, जसद्वारा मेरो यही मर्त्यलोकको गोकुलमा, अझ वृन्दावनमा गोप, पशुपक्षी, वृक्ष, लहरा, किरा आदि जुनसुकै योनिमा भए पनि जन्म होस् किनभने यहाँ भगवान्का भक्तहरूको पवित्र चरणरज मेरो शिरमाथि अवश्य पर्नेछ र जन्म कृतार्थ हुनेछ। जुन भक्तहरूको जीवन, गृह, पुत्र, धन आदि सबै भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। (अतः उनीहरूको चरणरज पनि हजुरको चरणरज समान छ।) हजुरको चरणरजलाई त अनादिकालदेखि आजसम्म पनि वेदहरूले खोजिरहेका छन्, तर पाउन सकेका छैनन्।

**विवरण–** यस श्लोकमा गोपहरू जस्ता भक्तहरूको चरणको धुलो भेट्टाउनु पनि महाभाग्यको कुरा हो भनी ब्रह्माजीले बताउनुभएको छ। ब्रह्माजीले व्रजको वनमा कुनै पनि योनिमा आफू जन्मन पाऊँ भनी आफ्नो इच्छा प्रकट गर्नुभएको छ। सत्यलोक छाडी कुनै पनि व्रजवासीको चरणको धुलो पर्ने गरी आफू व्रजमा जन्मन चाहेको कुरा यहाँ ब्रह्माजी व्यक्त गर्नुहुन्छ।

भगवान्‌को स्वरूपलाई श्रुतिले पनि अझैसम्म खोज्दै छ, अनि साक्षात् बताउन नसकी प्रपञ्च र मायाको निषेध गरी बाँकी रहेको तत्त्वको रूपमा बताइरहेको छ। **नेति नेतीत्यात्मा असङ्गो न हि सज्यते, अगृह्यो न हि गृह्यते** (बृहदारण्यकोपनिषद्, ३/९/३३) अर्थात् आत्मा माया पनि होइन र त्यसको कार्य प्रपञ्चरूप पनि होइन, यो असङ्ग भएकाले मन, वाणी आदिको संसर्गभित्र आउँदैन। त्यसैले इन्द्रियहरूद्वारा ग्रहण गर्न नसकिने हुनाले यो अगृह्य छ भनी बृहदारण्यकोपनिषद्‌मा बताइएको छ। त्यस्ता वेदले पनि नभेट्टाउने परमात्मासँग र उहाँकै लागि जीवन बिताउने व्रजवासीहरूको सौभाग्य अनन्त छ भनी यहाँ ब्रह्माजीले व्रजवासीहरूको भाग्यको प्रशंसा गर्नुभएको छ।

यस श्लोकमा ब्रह्माजीले गोप-गोपिनीहरूको भक्तिको बदलामा भगवान्‌ले उनीहरूलाई के दिनुहोला भनी चिन्ता व्यक्त गर्नुभएको छ। भगवान्‌लाई प्राप्त गर्नुभन्दा माथिल्लो फल संसारमा कुनै छैन। विष पियाई मार्न आएकी राक्षसी पूतना केवल गोपिनीको वेश बनाएर दुध पियाएकै कारणले आफ्ना कुलसहित हजुरमा नै प्राप्त भई भने यी गोपहरू जसले आफ्नो शरीर, प्राण, अन्तःकरण, इष्टमित्र, पुत्र, घर सबै हजुरकै लागि समर्पित गरेका छन् तिनीहरूलाई हजुरले के दिनुहुन्छ ? भनी ब्रह्माजी भगवान्‌लाई प्रश्न गर्नुहुन्छ। त्यसैले हजुर अनन्तकालसम्म यी गोपहरूको ऋणी नै रहनुहुन्छ, यो ऋण चुकाउनका लागि दिइने कुनै पनि वस्तु हजुरसँग पक्कै नहोला भनी भगवान्‌लाई प्रश्न गर्दै ब्रह्माजीले गोप-गोपिनीहरूको प्रशंसा गर्नुभएको छ।

**एषां घोषनिवासिनामुत भवान् किं देव रातेति न-**
**श्चेतो विश्वफलात् फलं त्वदपरं कुत्राप्ययन्मुह्यति।**
**सद्वेषादिव पूतनापि सकुला त्वामेव देवापिता**
**यद्धामार्थसुहृत्प्रियात्मतनयप्राणाशयास्त्वत्कृते ॥ ३५ ॥**

**पदार्थ**–
**देव** = हे भगवान्
**सद्वेषात् इव** = (आमातुल्य) असल स्वरूप धारण गरेकी हुनाले नै
**सकुला** = वंश सहित (बकासुर, अघासुर आदि आफ्ना सम्बन्धीहरूले सहित) भएकी
**पूतना अपि** = पूतना पनि
**त्वाम् एव** = हजुरमा नै
**आपिता** = प्राप्त भई भने
**यद्धामार्थसुहृत्प्रियात्मतनय-प्राणाशयाः** = यी व्रजवासीहरूको घर, सम्पत्ति, साथीहरू, पत्नी, शरीर, मन आदि सबै
**त्वत्कृते** = हजुरका लागि नै हो
**देव** = हे प्रभु
**एषां** = यी हजुरका भक्त
**घोषनिवासिनां** = ग्राम (व्रज)वासीहरूलाई
**उत** = चाहिँ
**भवान्** = सम्पूर्ण ऐश्वर्य प्रदान गर्न समर्थ हजुरले
**किं** = के
**राता इति** = दिनुहुनेछ
**विश्वफलात्** = सम्पूर्ण फलस्वरूप
**त्वद् अपरं** = हजुरदेखि भिन्न अरू
**फलं** = फल
**कुत्र अपि** = कुनै पनि स्थान र कालमा

**अयत्** = छैन भन्ने सोचेर
**नः** = हाम्रो (मेरो)
**चेतः** = चित्त
**मुह्यति** = मोहित हुन्छ

**वाक्यार्थ–** हे भगवान् ! आमातुल्य असल स्वरूप धारण गरेकी हुनाले मार्ने मनसायले नै आएकी भए पनि पूतना आफ्ना बकासुर, अघासुर आदि सम्पूर्ण परिवारसहित हजुरमा प्राप्त भई भने जसले सम्पत्ति, साथीहरू, पत्नी, शरीर, मन आदि सर्वस्व हजुरलाई नै अर्पण गरेका छन् त्यस्ता व्रजवासीहरूलाई सम्पूर्ण ऐश्वर्य प्रदान गर्न समर्थ हजुरले भक्तिको बदलामा के दिनुहुन्छ ? सम्पूर्ण फलहरूको फलस्वरूप त हजुर आफैं हुनुहुन्छ। त्यसैले हजुरदेखि अतिरिक्त अरू उत्तम फल त केही पनि छैन। यस्तो विचार गर्दा मेरो चित्त मोहित भएको छ।

**तावद् रागादयः स्तेनास्तावत् कारागृहं गृहम् ।**
**तावन्मोहोऽङ्घ्रिनिगडो यावत् कृष्ण न ते जनाः ॥ ३६ ॥**

**पदार्थ–**
**कृष्ण** = हे श्रीकृष्ण
**यावत्** = जबसम्म
**जनाः** = जीवहरू
**ते** = हजुरको
**न** = हुँदैनन्
**तावत्** = तबसम्म
**रागादयः** = राग आदि
**स्तेनाः** = चोरहरू रहन्छन्
**तावत्** = तबसम्म
**गृहम्** = घर
**कारागृहं** = कारागार हुन्छ
**तावत्** = तबसम्म नै
**मोहः** = मोह
**अङ्घ्रिनिगडः** = खुट्टालाई बाँध्ने फलामे साङ्ला (नेल) हुन्छ

**वाक्यार्थ–** हे श्रीकृष्ण ! जबसम्म जीव हजुरको भक्त बन्न सक्दैन तबसम्म राग आदि चोरहरूले जीवहरूको धैर्य, विवेक आदि धनलाई हरण गर्दछन्, तबसम्म आफ्नै घर पनि कारागार बन्दछ र तबसम्म मोह आफ्नै गोडालाई बाँध्ने फलामे साङ्ला बन्दछ।

**प्रपञ्चं निष्प्रपञ्चोऽपि विडम्बयसि भूतले ।**
**प्रपन्नजनतानन्दसन्दोहं प्रथितुं प्रभो ॥ ३७ ॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**निष्प्रपञ्चः अपि** = प्रपञ्चातीत भएर पनि
**प्रपन्नजनतानन्दसन्दोहं** = शरणमा आएका भक्तजनहरूको आनन्दराशिलाई
**प्रथितुं** = विस्तार गर्न
**भूतले** = यस मर्त्यलोकमा
**प्रपञ्चं** = प्रपञ्च (रूप)को
**विडम्बयसि** = नाटक गर्नुहुन्छ

**वाक्यार्थ–** हे प्रभु ! हजुर प्रपञ्चातीत भएर पनि शरणागत भक्तहरूको आनन्दराशिलाई अझ विस्तार गर्न यस मर्त्यलोकमा जन्म लिई हजुर प्रपञ्चको (कसैको पुत्र, कसैको साथी आदि विभिन्न रूपको) नाटक गर्नुहुन्छ।

**जानन्त एव जानन्तु किं बहूक्त्या न मे प्रभो ।**
**मनसो वपुषो वाचो वैभवं तव गोचरः ॥ ३८ ॥**

पदार्थ–
**जानन्तः एव** = भगवत्तत्त्व जानेको ठान्नेहरूले नै
**जानन्तु** = (हजुरलाई) जानून्
**बहूक्त्या** = धेरै कुरा गरेर
**किं** = के फाइदा हुन्छ
**प्रभो** = हे प्रभु
**तव** = हजुरको
**वैभवं** = ऐश्वर्य
**मे** = मेरो
**मनसः** = मनको
**वपुषः** = शरीरको
**वाचः** = वाणीको पनि
**गोचरः** = विषय
**न** = हुन सक्दैन

**वाक्यार्थ–** हजुरको स्वरूपलाई जानेको छु भन्ठान्नेहरूले जानिरहून्, धेरै कुरा गरेर के फाइदा, हे प्रभु ! मेरा त सम्पूर्ण मन, वचन, शरीर र इन्द्रियहरू हजुरको ऐश्वर्यलाई जान्न असमर्थ छन्।

**अनुजानीहि मां कृष्ण सर्वं त्वं वेत्सि सर्वदृक् ।**
**त्वमेव जगतां नाथो जगदेतत् तवार्पितम् ॥ ३९ ॥**

पदार्थ–
**कृष्ण** = हे श्रीकृष्ण
**मां** = मलाई
**अनुजानीहि** = (सत्यलोक जान) आज्ञा दिनुहोस्
**सर्वदृक्** = सर्वद्रष्टा
**त्वं** = हजुर
**सर्वं** = सबै कुरा
**वेत्सि** = जान्नुहुन्छ
**त्वं एव** = हजुर नै
**जगतां** = जगत्‌को
**नाथः** = स्वामी हुनुहुन्छ
**एतत्** = यो
**जगत्** = जगत् (र मेरो शरीर)
**तव** = हजुरमा
**अर्पितम्** = अर्पित छ

**वाक्यार्थ–** हे श्रीकृष्ण ! सर्वद्रष्टा भएको हुनाले हजुरलाई सबै कुरा थाहा छ। हजुर नै सम्पूर्ण जगत्‌को स्वामी हुनुहुन्छ। यो जगत् र मेरो शरीर पनि हजुरकै सेवामा समर्पण गर्दछु। अब मलाई आफ्नै निवास सत्यलोकमा जानका लागि आज्ञा दिनुहोस्।

**श्रीकृष्ण वृष्णिकुलपुष्करजोषदायिन् क्ष्मानिर्जरद्विजपशूदधिवृद्धिकारिन् ।**
**उद्धर्मशार्वरहर क्षितिराक्षसध्रुगाकल्पमार्कमर्हन् भगवन् नमस्ते ॥ ४० ॥**

पदार्थ–
**श्रीकृष्ण** = हे श्रीकृष्ण
**वृष्णिकुलपुष्करजोषदायिन्** = यदुवंशरूपी कमललाई विकसित गराउने हे सूर्यरूप भगवान्
**क्ष्मानिर्जरद्विजपशूदधिवृद्धिकारिन्** = पृथिवी, देवता, ब्राह्मण र पशुरूपी समुद्रलाई वृद्धि गर्ने हे चन्द्ररूप प्रभु
**उद्धर्मशार्वरहर** = पाखण्डधर्मरूपी अन्धकारलाई नष्ट गर्ने हे चन्द्र र सूर्यसदृश ईश्वर
**क्षितिराक्षसध्रुक्** = पृथिवीका राक्षसहरूको संहार गर्ने
**आर्कम्** = सूर्यदेखि लिएर सबैमा
**अर्हन्** = पूज्य
**भगवन्** = हे भगवान्
**आकल्पम्** = महाकल्पपर्यन्त
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** हे श्रीकृष्ण ! यदुवंशरूपी कमललाई विकसित गराउने हे सूर्यरूप भगवान् ! पृथिवी, देवता, ब्राह्मण र पशुहरूरूपी समुद्रलाई अभिवृद्धि गराउने हे चन्द्ररूप भगवान् ! पाखण्डधर्मरूपी अन्धकारलाई नष्ट गर्नुहुने हे भगवान् ! राक्षसहरूको संहारक पनि हजुर नै हुनुहुन्छ। सूर्य लगायत सम्पूर्ण देवताहरूमा पनि हजुर नै पूज्य हुनुहुन्छ। महाकल्पपर्यन्त म हजुरलाई नमस्कार गरिरहन्छु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यभिष्टूय भूमानं त्रिः परिक्रम्य पादयोः।**

**नत्वाभीष्टं जगद्धाता स्वधाम प्रत्यपद्यत॥ ४१॥**

| पदार्थ– | **इति** = यसरी | **नत्वा** = ढोगेर |
|---|---|---|
| **जगद्धाता** = लोकस्रष्टा ब्रह्माजीले | **अभिष्टूय** = स्तुति गरेर | **अभीष्टं** = आफ्नो इच्छित |
| **भूमानं** = सर्वव्यापक श्रीकृष्णलाई | **त्रिः** = तीन पटक | **स्वधाम** = सत्यलोक |
| | **परिक्रम्य** = प्रदक्षिणा गरेर | **प्रत्यपद्यत** = जानुभयो |
| | **पादयोः** = भगवान्को चरणमा | |

**वाक्यार्थ–** यसप्रकार सम्पूर्ण जगत्का स्रष्टा ब्रह्माजीले सर्वव्यापक भगवान् श्रीकृष्णको स्तुति गरेर उहाँलाई तीन पटक प्रदक्षिणा गर्नुभयो अनि भगवान्का चरणकमलमा ढोगेर उहाँ आफ्नो सत्यलोकतिर प्रस्थान गर्नुभयो।

**ततोऽनुज्ञाप्य भगवान् स्वभुवं प्रागवस्थितान्।**

**वत्सान् पुलिनमानिन्ये यथापूर्वसखं स्वकम्॥ ४२॥**

| पदार्थ– | **प्राक्** = पहिले जस्तैँ | साथीहरूलाई |
|---|---|---|
| **भगवान्** = भगवान्ले | **अवस्थितान्** = रहेका | **स्वकम्** = आफ्नो भोजनस्थान |
| **स्वभुवं** = ब्रह्माजीलाई | **वत्सान्** = बाच्छाहरू र | **पुलिनम्** = यमुनाको तटमा |
| **अनुज्ञाप्य** = आज्ञा दिएर | **यथापूर्वसखं** = पहिले जस्तैँ बसे खेलेकै अवस्थामा रहेका | **आनिन्ये** = ल्याउनुभयो |
| **ततः** = त्यसपछि | | |

**वाक्यार्थ–** ब्रह्माजीलाई सत्यलोक जाने आज्ञा दिएपछि ब्रह्माजीले हरण गरेर फर्काइदिएका बाच्छा र आफ्ना साथीहरूलाई (जो हरणपूर्वकै अवस्थामा जस्ताको त्यस्तै रूपमा थिए) भगवान्ले आफूले भोजन गरिरहेको स्थान यमुनानदीको तटमा ल्याउनुभयो।

**एकस्मिन्नपि यातेऽब्दे प्राणेशं चान्तरात्मनः।**

**कृष्णमायाहता राजन् क्षणार्धं मेनिरेऽर्भकाः॥ ४३॥**

| पदार्थ– | **आत्मनः** = आफ्नो | **अन्तरा** = विना |
|---|---|---|
| **राजन्** = हे राजा परीक्षित् | **प्राणेशं च** = प्राणप्रिय श्रीकृष्ण | **एकस्मिन्** = एक |

**अब्दे** = वर्ष
**याते अपि** = बिते पनि
**कृष्णमायाहताः** = श्रीकृष्णको मायाले मोहित भएका
**अर्भकाः** = गोप बालकहरूले
**क्षणार्धं** = आधा क्षण जैँ
**मेनिरे** = ठाने

**वाक्यार्थ–** हे राजा परीक्षित् ! आफ्ना प्राणप्रिय भगवान् श्रीकृष्ण विना नै एक वर्ष बिते पनि भगवान्को मायाद्वारा मोहित भएका गोपबालकहरूलाई त्यो समय आधा क्षण जस्तो भयो।

**किं किं न विस्मरन्तीह मायामोहितचेतसः।**
**यन्मोहितं जगत् सर्वमभीक्ष्णं विस्मृतात्मकम्॥ ४४॥**

**पदार्थ–**
**मायामोहितचेतसः** = मायाद्वारा मोहित अन्तःकरण भएकाहरूले
**इह** = यस संसारमा
**किं किं** = के–के कुरा
**न विस्मरन्ति** = बिर्सिँदैनन्
**सर्वम्** = सम्पूर्ण
**जगत्** = जगत्
**यन्मोहितं** = भगवान्को जुन मायाद्वारा मोहित भई
**अभीक्ष्णं** = बारम्बार (शास्त्र र आचार्यद्वारा बोधित भए पनि)
**विस्मृतात्मकम्** = आफ्नो स्वरूपलाई बिर्सनेवाला बन्दछन्

**वाक्यार्थ–** मायाद्वारमा मोहित अन्तःकरण भएकाहरूले यो संसारमा के–के कुरा बिर्सिँदैनन् र ? जगत्का सम्पूर्ण प्राणीहरू भगवान्को त्यही मायाद्वारा मोहित भएर (शास्त्र र आचार्यहरूले) बारम्बार सम्झाए पनि आफ्नो स्वरूपलाई बिर्सिरहन्छन्।

**विवरण–** यस श्लोकमा मायाद्वारा मोहित भइसकेपछि सबैथोक बिर्सिइन्छ भन्ने कुरा बताइएको छ। जो आफू स्वयं अस्तित्ववान् छैन तर एक मात्र सत्तावान् ब्रह्मवस्तुलाई पनि ढाकेर असत् प्रपञ्च खडा गरिदिन्छ त्यही माया हो। माया अनादिरूप छ, तर यसलाई छ–छैन दुबै रूपले बताउन सकिँदैन। प्रमाणद्वारा सिद्ध नहुनु र विचारकालमा नटिक्नु यसको स्वभाव नै हो। यदि प्रमाणद्वारा उपपन्न हुन्थ्यो भने यो माया हुँदैनथ्यो, सत् वस्तु हुन्थ्यो। त्यसैले मण्डनमिश्र भन्नुहुन्छ– **अनुपपद्यमानार्थैव हि माया उपपद्यमानार्थत्वे यथार्थभावान्न माया स्यात्** (ब्रह्मसिद्धि, श्लोक १० अन्तर्गत) विचारसिद्ध नहुनु अविद्याको भूषण नै हो– **विचारासहिष्णुत्वमविद्याया अलङ्कार एव।** श्रुति र अनुभव प्रमाणले सिद्ध भएको आत्मालाई अनादर गरी परमात्मा जैँ सत्यरूपमा देखिनु यसको धृष्टता हो– **अहो धाष्ट्र्यमविद्यायाः न कश्चिदतिवर्तते। प्रमाणं वस्त्वनादृत्य परमात्मेव तिष्ठति।** अरू त अरू साक्षात् आफैँलाई, आत्मालाई नै बिसिई अनात्मालाई आत्मा ठान्नु, ती शरीर इन्द्रिय नाशवान् छन् भन्ने सधैँको अनुभव हुँदाहुँदै पनि तिनलाई स्थिर एवं नित्य बनाउन प्रयास गर्नु यी सबै अविद्याकै कार्य हुन्। यसैद्वारा मुग्ध भई जीव ब्रह्मरूप भएर पनि बारम्बार संसारचक्रमा घुमिरहेछ, आफैँलाई बिर्सिरहेछ। मायाको यही अनिर्वचनीय प्रभाव यहाँ बताइएको छ।

**ऊचुश्च सुहृदः कृष्णं स्वागतं तेऽतिरंहसा।**
**नैकोऽप्यभोजि कवल एहीतः साधु भुज्यताम्॥ ४५॥**

**पदार्थ–**
**ते** = ती गोपबालक
**सुहृदः** = मित्रहरूले
**कृष्णं** = श्रीकृष्णलाई
**अतिरंहसा** = अति शीघ्र
**स्वागतं** = स्वागत गर्दै
**ऊचुः** = भने
**एकः अपि च** = एउटै पनि
**कवलः** = गाँस
**न अभोजि** = खाएको छैन
**इतः** = यता
**एहि** = आओ
**साधु** = राम्ररी
**भुज्यताम्** = भोजन गरौं

**वाक्यार्थ–** भगवान्‌को मायाले मोहित भएका गोपबालक साथीहरूले जब भगवान्‌लाई देखे तब अतिशीघ्र छेउमैं गएर उहाँको स्वागत गरे। त्यसपछि उनीहरूले भने– तिम्रो अनुपस्थितिमा हामीले एक गाँस पनि खाएका छैनौं। साथीहरू ! यता आओ, हामी सबै सँगै बसेर राम्ररी भोजन गरौं।

**ततो हसन् हृषीकेशोऽभ्यवहृत्य सहार्भकैः।**
**दर्शयंश्चर्माजगरं न्यवर्तत वनाद् व्रजम्॥ ४६॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**हृषीकेशः** = हृषीकेश (इन्द्रियहरूका स्वामी) श्रीकृष्ण
**हसन्** = हाँस्दै
**अर्भकैः सह** = बालकहरूका साथमा
**अभ्यवहृत्य** = भोजन गरेर
**आजगरं** = (अजिङ्गरको) अघासुरको शरीरको
**चर्म** = छाला
**दर्शयन्** = देखाउँदै
**वनात्** = वनबाट
**व्रजम्** = व्रजमा
**न्यवर्तत** = फर्किनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले हाँस्दै बालक साथीहरूका साथमा भोजन गर्नुभयो अनि अघासुरको शरीरको छालालाई देखाउँदै उहाँ वृन्दावनबाट व्रजमा फर्किनुभयो।

**बर्हप्रसूनवनधातुविचित्रिताङ्गः**
**प्रोद्दामवेणुदलशृङ्गरवोत्सवाढ्यः।**
**वत्सान् गृणन्ननुगगीतपवित्रकीर्ति-**
**र्गोपीदृगुत्सवदृशिः प्रविवेश गोष्ठम्॥ ४७॥**

**पदार्थ–**
**बर्हप्रसूनवनधातुविचित्रिताङ्गः** = मयूरको प्वाँख, फूल र गैरिक आदि वनका धातुहरूद्वारा शरीरका अङ्गहरू रङ्गी-बिरङ्गी बनाएका
**प्रोद्दामवेणुदलशृङ्गरवोत्सवाढ्यः** = बाँसुरी, पात र सिँगको बाजाको आवाजको उत्सवले सम्पन्न भएका
**अनुगगीतपवित्रकीर्तिः** = पछि-पछि हिँडेका गोपबालकहरूद्वारा पवित्र कीर्तिगान गरिएका
**गोपीदृगुत्सवदृशिः** = गोपिनीहरूको दृष्टिका लागि उत्सवरूप दृष्टि भएका भगवान्
**वत्सान्** = बाच्छाहरूलाई (तत्तत् नामले)
**गृणन्** = बोलाउँदै
**गोष्ठम्** = गोठमा
**प्रविवेश** = पस्नुभयो

**वाक्यार्थ–** मयूरको प्वाँख, फूल, पात र गैरिक आदि वनका धातुहरू लगाउनाले आफ्ना अङ्गहरू

रङ्गी–बिरङ्गी बनाउनुभएका, बाँसुरी, पात र सिँगको बाजा बजाएर त्यसको आवाजको उत्सवमा मग्न हुनुभएका, भगवान्कै पवित्र कीर्तिको गान गर्दै हिँडेका गोपबालकहरूलाई आफ्ना पछि–पछि लगाउनुभएका अनि आफ्नो दर्शन दिएर बाटाको छेउछेउमा बसेका गोपिनीहरूको आँखालाई आनन्दोत्सवमा निमग्न गराउनुहुने भगवान् श्रीकृष्ण बाच्छाहरूलाई बोलाउँदै गोठमा प्रवेश गर्नुभयो।

**अद्यानेन महाव्यालो यशोदानन्दसूनुना।**
**हतोऽविता वयं चास्मादिति बाला व्रजे जगुः॥ ४८॥**

**पदार्थ**–
**अद्य** = आज
**अनेन** = यी
**यशोदानन्दसूनुना** = यशोदा र नन्दका पुत्र श्रीकृष्णद्वारा
**महाव्यालः** = ठुलो अजिङ्गर
**हतः** = मारियो
**अस्मात् च** = त्यो अजिङ्गरबाट
**वयं च** = हामीहरू पनि
**अविताः इति** = रक्षा गरियौं भन्ने कुरा
**बालाः** = गोपबालकहरूले
**व्रजे** = व्रजमा
**जगुः** = भने

**वाक्यार्थ**– हे राजा परीक्षित्! व्रजमा आइपुगेपछि गोप बालकहरूले आज यशोदा र नन्दका पुत्र श्रीकृष्णले वनमा एउटा ठुलो अजिङ्गरलाई मारेर हामी सबैलाई रक्षा गरे भनी बताए।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**ब्रह्मन् परोद्भवे कृष्णे इयान् प्रेमा कथं भवेत्।**
**योऽभूतपूर्वस्तोकेषु स्वोद्भवेष्वपि कथ्यताम्॥ ४९॥**

**पदार्थ**–
**ब्रह्मन्** = हे ब्रह्मन् (ब्रह्मविद्)
**यः** = जुन
**प्रेमा** = प्रेम
**स्वोद्भवेषु अपि** = आफैंबाट उत्पन्न भएका
**तोकेषु** = सन्तानहरूमा
**अभूतपूर्वः** = पहिले कहिल्यै नभएको
**इयान्** = त्यति धेरै उत्कट प्रेम
**परोद्भवे** = अर्काको सन्तान
**कृष्णे** = श्रीकृष्णमा
**कथं** = कसरी
**भवेत्** = भयो होला (यो कुरा)
**कथ्यताम्** = बताउनुहोस्

**वाक्यार्थ**– हे ब्रह्मन्! व्रजवासीहरूको आफ्नै सन्तानमा जुन प्रेम हुन सकेको थिएन, त्यो अपूर्व उत्कट प्रेम अर्काको सन्तान श्रीकृष्णमा कसरी हुन गयो? कृपापूर्वक बताउनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सर्वेषामपि भूतानां नृप स्वात्मैव वल्लभः।**
**इतरेऽपत्यवित्ताद्यास्तद्वल्लभतयैव हि॥ ५०॥**

**पदार्थ**–
**नृप** = हे राजा परीक्षित्
**सर्वेषाम् अपि** = सबै नै

**भूतानां** = प्राणीहरूको
**स्वात्मा एव** = आफ्नै आत्मा नै
**वल्लभः** = प्रिय हुन्छ
**इतरे** = आफ्नो आत्मादेखि भिन्न
**अपत्यवित्ताद्याः** = सन्तान, धन आदि
**हि** = निश्चय नै
**तद्वल्लभतया एव** = आत्माकै सुखसाधनका रूपले नै प्रिय हुन्छन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सम्पूर्ण प्राणीहरूलाई आफ्नै आत्मा नै सबैभन्दा बढी प्रिय हुन्छ। आत्मादेखि भिन्न सन्तान, धन आदिमा हुने प्रेम पनि आत्माको सुखका लागि नै हो। (भगवान् श्रीकृष्ण सबैको आत्मस्वरूप हुनुभएकाले उहाँमा सबै व्रजवासीको प्रेम अधिक भएको हो)।

**तद् राजेन्द्र यथा स्नेहः स्वस्वकात्मनि देहिनाम्।**
**न तथा ममतालम्बिपुत्रवित्तगृहादिषु ॥ ५१ ॥**

**पदार्थ–**
**राजेन्द्र** = हे राजेन्द्र (राजाहरूका पनि राजा)
**तत्** = त्यसकारण
**यथा** = जसरी
**देहिनाम्** = प्राणीहरूको
**स्नेहः** = निरतिशय प्रेम
**स्वस्वकात्मनि** = अहङ्कारको विषय भएको आत्मामा हुन्छ
**तथा** = त्यसरी
**ममतालम्बिपुत्रवित्तगृहादिषु** = मेरो भनिने छोरो, धन र घर आदिमा
**न** = हुँदैन

**वाक्यार्थ–** हे राजेन्द्र ! सम्पूर्ण प्राणीहरूको अहङ्कारको विषयभूत आफ्नो आत्मामा (आफूमा) जसरी स्वतः निरतिशय प्रेम हुन्छ, त्यसरी आफ्ना भनिने छोरो, धन र घर आदिमा हुँदैन।

**देहात्मवादिनां पुंसामपि राजन्यसत्तम।**
**यथा देहः प्रियतमस्तथा न ह्यनु ये च तम् ॥ ५२ ॥**

**पदार्थ–**
**राजन्यसत्तम** = हे राजेन्द्र
**देहात्मवादिनां** = शरीरलाई नै आत्मा मान्ने
**पुंसाम् अपि** = व्यक्तिहरूलाई पनि
**यथा** = जसरी
**देहः** = शरीर
**प्रियतमः** = अत्यन्त प्रिय हुन्छ
**तथा हि** = त्यसरी नै प्रिय
**तम् अनु** = शरीर सम्बन्धी
**ये च** = अरू (स्त्री, पुत्र, धन आदि)
**न** = प्रिय हुँदैनन्

**वाक्यार्थ–** हे राजेन्द्र ! शरीरलाई नै आत्मा मान्ने व्यक्तिहरूका लागि पनि आफ्नो शरीर जति धेरै प्रिय हुन्छ, त्यति प्रिय शरीर सम्बन्धी स्त्री, पुत्र, धन आदि हुँदैनन्।

**देहोऽपि ममताभाक् चेत् तर्ह्यसौ नात्मवत् प्रियः।**
**यज्जीर्यत्यपि देहेऽस्मिन् जीविताशा बलीयसी ॥ ५३ ॥**

**पदार्थ–**
**देहः अपि** = (अहङ्कारको विषय भएको) शरीर पनि

**ममताभाक्** = ममताको विषय
**चेत्** = यदि हुन्छ भने
**तर्हि** = त्यसो हो भने पनि
**असौ** = यो शरीर
**आत्मवत्** = आत्मा जस्तै
**प्रियः** = प्रिय
**न** = हुँदैन
**यत्** = किनभने
**अस्मिन्** = यो
**देहे** = शरीर
**जीर्यति अपि** = जीर्ण भएर प्रेमको विषय नभए तापनि
**जीविताशा** = बाँच्ने इच्छा
**बलीयसी** = प्रबल रहन्छ

**वाक्यार्थ–** यदि विवेकपूर्वक विचार गर्ने हो भने अहङ्कारको विषय भएको शरीर आत्माभन्दा भिन्न प्रतीत हुन्छ, तर आत्मासमान प्रिय कदापि हुन सक्दैन, तर आत्माको सुखका लागि प्रिय हुन सक्दछ किनभने शरीर सर्वथा जीर्ण भएर बाँच्न नसक्ने निश्चय भइसकेपछि पनि बाँच्ने इच्छा प्रबल रूपमा रहिरहन्छ।

**तस्मात् प्रियतमः स्वात्मा सर्वेषामपि देहिनाम्।**
**तदर्थमेव सकलं जगदेतच्चराचरम्॥ ५४॥**

**पदार्थ–**
**तस्मात्** = त्यसकारण
**सर्वेषाम् अपि** = सबै नै
**देहिनाम्** = प्राणीहरूका लागि
**स्वात्मा** = आफ्नो आत्मा नै
**प्रियतमः** = बढी प्रिय हुन्छ
**एतत्** = दृश्यमान
**सकलं** = यो सम्पूर्ण
**चराचरम्** = चराचर
**जगत्** = जगत्
**तदर्थम् एव** = आत्माकै सुखका लागि (प्रिय हुन्छ)

**वाक्यार्थ–** त्यसकारण सम्पूर्ण प्राणीहरूका लागि आफ्नै आत्मा सर्वाधिक प्रिय हुन्छ भने दृश्यमान सम्पूर्ण चराचर जगत् आत्माकै सुखका लागि प्रिय हुन्छ।

**विवरण–** माथिका श्लोकहरूमा आत्मामा परमप्रेम हुन्छ र अरू विषयहरूमा हुने प्रेम पनि आत्माकै लागि हुन्छ भनी बताइएको छ। संसारमा बाहिरी पदार्थहरू र इष्टमित्र, बान्धवहरूमाथि प्रेम भएको देखिन्छ। प्रेमकै सम्बन्धको आधारमा पति-पत्नी, पिता-पुत्र, साथी-साथी आदि सम्बन्ध अडिएको हो। जहाँ जति बढी प्रेम हुन्छ, त्यहाँ त्यति नै बढी आनन्द पनि हुन्छ। प्रेम र सुख यी दुई विषयमा विचार गर्दा के थाहा हुन्छ भने जुन वस्तु जति आफ्नो नजिक या उपकारक हुन्छ, त्यसमा त्यति नै बढी प्रेम र सुख हुन्छ। जाडोमा प्यारो लाग्ने घाम गर्मीमा दुःखदायी लाग्छ, तर आफूलाई आफ्नो प्रेम जाडो-गर्मी, दिन-रात सधैँ सबै अवस्थामा उत्तिकै रहन्छ। पुत्र, सम्पत्ति आदिमा चाहिँ आत्माको प्रेमको कारणले नै प्रेम हुन्छ। सामान्य रूपमा सम्पत्ति, जग्गा-जमिन आदिमा प्रेम हुन्छ। ती वस्तुहरूभन्दा पनि बढी पत्नी, पुत्र आदि परिवारसँग प्रेम हुन्छ। परिवारसँगभन्दा पनि मान्छेको आफ्नै शरीरमा प्रेम बढी हुन्छ। शरीरमा पनि अन्य अङ्गहरूमा भन्दा आँखा, कान आदि इन्द्रियमा बढी प्रेम हुन्छ। प्राणीले शरीरमा चोटपटक लाग्ने स्थितिमा पनि आँखा, कान आदि प्रमुख इन्द्रियहरूलाई नै बचाउन चाहन्छ। इन्द्रियहरूभन्दा पनि बढी प्राण प्यारो हुन्छ, किनभने आँखा नदेख्ने, कान नसुन्ने, हिँड्न नसक्ने भएर पनि मानिस प्राणधारण गरिरहन चाहन्छ। संसारका पदार्थमध्ये सबैभन्दा मन पराइने वस्तु प्राण हो। यो प्राणभन्दा पनि आत्मा नै प्रिय हुन्छ, तर यो चाहिँ विशेष विचारद्वारा मात्र थाहा पाइन्छ। लोकमा जीवात्माको

स्थिति या मृत्यु प्राणकै अधीनमा छ। आत्माले प्राणको प्रतिष्ठा हुँदा नै आफू प्रतिष्ठित हुने, अनि प्राणको उत्क्रान्ति हुँदा आफू पनि उत्क्रान्त हुने गरी प्राणको सृजना गरेको हो– **कस्मिन्नु उत्क्रान्ते उत्क्रान्तो भविष्यामि, कस्मिँश्च प्रतिष्ठिते प्रतिष्ठास्यामीति स प्राणमसृजत** (प्रश्नोपनिषद्, ६/३)। प्राण नहुने बित्तिकै लौकिक चेतनाको लोप भइहाल्छ, त्यसैले प्राणभन्दा आत्मा प्रिय भएको उदाहरण लोकमा पाइँदैन। यसै कारणले मानिसले प्राणलाई नै आत्मा भनी सम्झेका हुन्छन्। लोकव्यवहारमा मानिसले जसलाई म हुँ भनेका हुन्छन्, त्यसमा प्राण, इन्द्रिय, मन, शरीर सबैले युक्त भोक्ताकै ग्रहण गरिएको हुन्छ, तर परलोकको प्रतिपादन गर्ने शास्त्रवचन र आत्मप्रतिपादक उपनिषद्वचनको प्रामाण्यबाट प्राणभन्दा पनि अन्तरङ्ग आत्मा छ भन्ने थाहा हुन्छ। मानिसलाई प्राण ज्यादै प्यारो लाग्छ, किनभने ऊ सधैँ बाँचिरहन चाहन्छ। आफ्नो अस्तित्व समाप्त होला भन्ने डरले नै मृत्युबाट डर हुने गर्छ, तर आत्माको अस्तित्व प्राण आदिको भरमा मात्र सिद्ध हुने होइन। प्राण, अन्तःकरण आदि उपाधिको आधारमा त भोक्ता जीवात्माको अस्तित्व रहेको हुन्छ। असली आत्मा यी उपाधिको पनि प्रकाशकरूपले जीवन–मृत्यु सबै कालमा विद्यमान छ। त्यसैले उपनिषद्मा आत्मालाई **स उ प्राणस्य प्राणः** (केनोपषिद्, १/२) अर्थात् आत्मा प्राणको पनि प्राण हो भनिएको हो। शरीर थोत्रिँदा पनि मानिस बाँच्न चाहन्छ, अरू आफ्नो अस्तित्व या व्यक्तित्वमा आघात पुग्न लाग्यो भने मानिस आफैँ मर्न पनि तयार हुन्छ। यद्यपि यी सबै व्यवहार देहात्मवादी अज्ञानीका हुन्, आत्माको प्रियतामा त आत्मज्ञानीकै अनुभव मात्र प्रमाण हुन्छ, तापनि अज्ञानव्यवहारमा समेत आत्माकै प्रियता मुख्य छ भने आफ्नो वास्तविक आत्मस्वरूपलाई जानेपछि त्यो झन् कति प्रिय होला भन्ने बताउन लौकिक दृष्टान्तहरूको प्रयोग शास्त्रहरूमा गरिएको हुन्छ। त्यसैले उपनिषद्मा पनि याज्ञवल्क्य–मैत्रेयीको संवादबाट पति–पत्नी, पिता–माता आदि सम्बन्धले युक्त जीवात्माको नै परम प्रियतालाई पहिला देखाई पछि त्यसको वास्तविक आत्मस्वरूपको बोध गर्न प्रेरित गरिएको पाइन्छ– **आत्मा वारे द्रष्टव्यः श्रोतव्यो मन्तव्यो निदिध्यासितव्यः** (बृहदारण्यकोपनिषद्, २/४/५)। इष्टसिद्धिकार भन्नुहुन्छ– **यदर्थं सर्वं यच्च नान्यार्थं तत्सुखमिति प्रसिद्धम्** अर्थात् जसको लागि सबै हुन्छ, अनि जो कसैको लागि हुँदैन, त्यो सुख हो। आत्मा पनि अरू कसैको लागि होइन, त्यसैले आत्मा सुखरूप सिद्ध हुन्छ। न्यायदर्शनमा **इतरेच्छानधीनेच्छा–विषयत्वं सुखत्वम्** वा जसको इच्छा अरू इच्छाको अधीनमा छैन, त्यही नै सुख हो भनी सुखको परिभाषा गरिएको छ। घर बनाउनु, सम्पत्ति कमाउनु आदि सुखका लागि हुन्छन्, तर सुख पाउने इच्छा अरू कुनै इच्छा पूर्तिका लागि हुँदैन। स्वामी विद्यारण्यले पनि **तत्प्रेमात्मार्थमन्यत्र नैवमन्यार्थमात्मनि, अतस्तत्परमं तेन परमानन्दतात्मनः** (पञ्चदशी, १/९) भनी परमप्रेमको विषय भएकाले आत्मा नै परमानन्दरूप छ भन्ने कुरा बताउनुभएको छ। आत्माका लागि सबै वस्तु प्रिय भएकाले ती शेष हुन्, अनि आत्मा मुख्य भएकाले शेषी हो। त्यसैले श्लोकमा **तदर्थम्** अर्थात् आत्माकै लागि चराचर जगत् प्रिय हुन्छ भनी बताइएको छ।

**कृष्णमेनमवेहि त्वमात्मानमखिलात्मनाम्।**
**जगद्धिताय सोऽप्यत्र देहीवाभाति मायया॥ ५५॥**

पदार्थ–
**त्वं** = तपाईं
**एनं** = यी यशोदानन्दन
**कृष्णं** = श्रीकृष्णलाई
**अखिलात्मनां** = सम्पूर्ण प्राणीहरूको
**आत्मानं** = आत्मा भनेर
**अवेहि** = जान्नुहोस्
**सः अपि** = ती श्रीकृष्ण पनि
**अत्र** = यो लोकमा
**जगद्धिताय** = लोककल्याणका लागि
**मायया** = मायाद्वारा
**देही इव** = शरीरधारी झैं भएर
**आभाति** = प्रतीत हुनुहुन्छ

**वाक्यार्थ–** हे राजा परीक्षित् ! तपाईं यशोदानन्दन श्रीकृष्णलाई सम्पूर्ण प्राणीहरूको आत्मा भनेर जान्नुहोस्। लोककल्याणका लागि उहाँले यस लोकमा आफ्नै मायाद्वारा अवतीर्ण भई शरीरधारी झैं भएर लीला गरिरहनुभएको छ।

**वस्तुतो जानतामत्र कृष्णं स्थास्नु चरिष्णु च।**
**भगवद्रूपमखिलं नान्यद् वस्त्विह किञ्चन॥ ५६॥**

पदार्थ–
**वस्तुतः** = वास्तवमा
**कृष्णं** = श्रीकृष्णलाई
**जानताम्** = जान्ने व्यक्तिहरूका लागि
**अत्र** = यहाँ जगत्मा
**स्थास्नु** = स्थावर र
**चरिष्णु च** = जङ्गम
**अखिलं** = सम्पूर्ण
**वस्तु** = पदार्थ
**भगवद्रूपम्** = भगवान् श्रीकृष्णस्वरूप नै हो
**अन्यत्** = भगवान्देखि भिन्न
**इह** = यहाँ
**किञ्चन** = कुनै पनि वस्तु
**न** = छैन

**वाक्यार्थ–** भगवान् श्रीकृष्णलाई वास्तविक रूपमा जसले जानेका छन् त्यस्ता ज्ञानीहरूको दृष्टिमा संसारमा भएका सबै स्थावर र जङ्गम पदार्थहरू पनि श्रीकृष्णकै स्वरूप हुन्, यहाँ श्रीकृष्णदेखि भिन्न पदार्थ केही पनि छैन।

**सर्वेषामपि वस्तूनां भावार्थो भवति स्थितः।**
**तस्यापि भगवान् कृष्णः किमतद्वस्तु रूप्यताम्॥ ५७॥**

पदार्थ–
**सर्वेषाम् अपि** = सम्पूर्ण
**वस्तूनां** = वस्तुहरूको
**भावार्थः** = कारणरूप वस्तु
**स्थितः** = अवस्थित
**भवति** = हुन्छ
**तस्य अपि** = त्यस कारणभूत वस्तुको पनि (कारण)
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण हुनुहुन्छ
**अतद्** = श्रीकृष्णभिन्न
**किम् वस्तु** = कुन वस्तु (छ भनेर)
**रूप्यताम्** = निरूपण गरौं

**वाक्यार्थ–** सम्पूर्ण वस्तुहरू आ-आफ्नो कारणमा अवस्थित हुन्छन्। ती सबै वस्तुहरूको कारणको पनि परम कारण भगवान् श्रीकृष्ण हुनुहुन्छ। यस्तो अवस्थामा श्रीकृष्णदेखि भिन्न कुन वस्तु छ भनेर त्यसको निरूपण गरौं।

**समाश्रिता ये पदपल्लवप्लवं महत्पदं पुण्ययशोमुरारेः।**
**भवाम्बुधिर्वत्सपदं परं पदं पदं पदं यद् विपदां न तेषाम्॥ ५८॥**

**पदार्थ–**
**ये** = जो
**पुण्ययशोमुरारेः** = पवित्र कीर्ति भएका श्रीकृष्णको
**महत्पदं** = महान् व्यक्तिहरूको पनि आश्रय भएको
**पदपल्लवप्लवं** = चरणपल्लवरूपी डुङ्गामा
**समाश्रिताः** = आश्रित छन्
**तेषां** = तिनीहरूको लागि
**भवाम्बुधिः** = भवसागर
**वत्सपदं** = बाच्छाको खुरले बनेको डोबिल्को (झैं सजिलै तर्न सकिने हुन्छ)
**परं पदं** = परम पद वैकुण्ठको प्राप्ति हुन्छ
**यत्** = जुन
**विपदां** = दुःखहरूको
**पदं** = स्थान (संसार) हो (त्यो)
**पदं** = पद (संसार)
**न** = कहिल्यै प्राप्त हुँदैन

**वाक्यार्थ–** जो पवित्रकीर्ति श्रीकृष्णको महान् व्यक्तिहरूको पनि आश्रय भएको चरणपल्लवरूपी डुङ्गामा आश्रित छन् तिनीहरूको लागि भवसागर बाच्छाको खुरले बनेको डोबिल्को झैं सजिलै तर्न सकिने हुन्छ र परम पद वैकुण्ठको प्राप्ति हुन्छ अनि दुःखहरूको प्राप्तिस्थान भएको यो संसारपद कहिल्यै प्राप्त हुँदैन।

**एतत् ते सर्वमाख्यातं यत् पृष्टोऽहमिह त्वया।**
**यत् कौमारे हरिकृतं पौगण्डे परिकीर्तितम्॥ ५९॥**

**पदार्थ–**
**यत्** = जुन
**कौमारे** = (पाँच वर्षको) कुमार अवस्थामा
**हरिकृतं** = भगवान् श्रीकृष्णद्वारा गरिएको लीलाचरित्र थियो (त्यो)
**पौगण्डे** = (छैटौं वर्षको) पौगण्ड अवस्थामा
**परिकीर्तितम्** = (व्रजबालकहरूद्वारा कसरी) बताइयो भन्ने प्रश्न
**त्वया** = तपाईंद्वारा
**यत्** = जो
**अहम्** = म
**पृष्टः** = सोधिएँ
**इह** = अहिले
**एतत्** = त्यो कुरा
**सर्वम्** = सबै
**ते** = तपाईंलाई
**आख्यातम्** = बताइयो

**वाक्यार्थ–** (हे राजा परीक्षित्!) कुमार अवस्थामा भगवान् श्रीकृष्णद्वारा गरिएको जुन लीलाचरित्र (अघासुरवध आदि) थियो त्यसको विषयमा व्रजबालकहरूले भगवान्को पौगण्ड अवस्थामा कसरी बताए भनी तपाईंले जुन प्रश्न गर्नुभएको थियो त्यसको विषयमा यहाँ मैले सबै कुरा तपाईंलाई बताएँ।

**एतत् सुहृद्भिश्चरितं मुरारेरघार्दनं शाद्वलजेमनं च।**
**व्यक्तेतरद् रूपमजोर्वभिष्टवं शृण्वन् गृणन्नेति नरोऽखिलार्थान्॥ ६०॥**

**पदार्थ–**
**मुरारेः** = भगवान् श्रीकृष्णको
**सुहृद्भिः** = साथीहरूका साथ

**एतत्** = वनमा गर्नुभएको
**चरितं** = क्रीडा
**अघार्दनं** = अघासुर वध
**शाद्वलजेमनं च** = हरियो घाँसमाथि बसेर गरेको भोजन
**व्यक्तेतरत्** = व्यक्त प्रपञ्चदेखि भिन्न
**रूपं** = बाच्छा र गोपहरूको रूप
**अजोर्वभिष्टवं** = ब्रह्माजीले गर्नुभएको भगवान्को स्तुति
**शृण्वन्** = सुन्ने
**गृणन्** = गाउने (सुनाउने)
**नरः** = मनुष्यले
**अखिलार्थान्** = सम्पूर्ण पुरुषार्थहरू
**एति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** गोप साथीहरूका साथमा भगवान्ले क्रीडा गरेको, अघासुर वध गरेको, हरिया घाँसमाथि बसेर साथीहरूसँग भोजन गरेको, व्यक्त प्रपञ्चदेखि भिन्न अव्यक्तरूपमा आफैँ बाच्छा र गोपको रूपमा प्रकट भएको र ब्रह्माजीले स्तुति गर्नुभएको समेतको प्रसङ्ग जसले सुन्छ–सुनाउँछ उसले सम्पूर्ण पुरुषार्थ प्राप्त गर्दछ।

**एवं विहारैः कौमारैः कौमारं जहतुर्व्रजे।**
**निलायनैः सेतुबन्धैर्मर्कटोत्प्लवनादिभिः ॥ ६१ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**निलायनैः** = लुकेर बसेको मान्छेलाई देख्ने खेल (लुकामारी)
**सेतुबन्धैः** = पुल बनाउने खेल
**मर्कटोत्प्लवनादिभिः** = बाँदरले उफ्रँदै खेल्ने इत्यादि खेलहरूद्वारा
**कौमारैः** = कुमार अवस्थामा गरिने
**विहारैः** = विहारहरू गरेर
(श्रीकृष्ण र बलरामले)
**व्रजे** = व्रजमा
**कौमारं** = कुमार अवस्थालाई
**जहतुः** = बिताउनुभयो

**वाक्यार्थ–** यसरी लुकामारी गर्ने, पुल बनाउने खेल, बादरले उफ्रेर खेल्ने खेल आदि कुमार अवस्थामा खेलिने खेलहरू खेलेर अनेक लीला र विहारहरू गर्दै व्रजमा श्रीकृष्ण र बलरामले कुमारावस्था व्यतीत गर्नुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**ब्रह्मस्तुतिर्नाम चतुर्दशोऽध्यायः ॥ १४ ॥**

# अथ पञ्चदशोऽध्यायः

## भगवान् श्रीकृष्णद्वारा धेनुकासुर वध र कालिय नागको विषबाट साथीहरूको रक्षा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**ततश्च पौगण्डवयः श्रितौ व्रजे बभूवतुस्तौ पशुपालसम्मतौ ।**
**गाश्चारयन्तौ सखिभिः समं पदैर्वृन्दावनं पुण्यमतीव चक्रतुः ॥ १ ॥**

**पदार्थ–**
**ततः च** = त्यसपछि
(कुमारावस्था व्यतीत भएपछि)
**तौ** = ती दुई श्रीकृष्ण र बलराम
**व्रजे** = व्रजमा
**पौगण्डवयःश्रितौ** = छैटौँ वर्षमा प्रवेश गरेर
**पशुपालसम्मतौ** = गाई आदि पशुहरूलाई चराउन र पालन गर्न समर्थ
**बभूवतुः** = हुनुभयो (त्यसैले)
**सखिभिः समं** = साथीहरूसँग
**गाः** = गाईहरू
**चारयन्तौ** = चराउँदै
**पदैः** = आफ्ना चरणहरूद्वारा
**वृन्दावनं** = वृन्दावनलाई
**अतीव पुण्यम्** = अत्यन्त पवित्र
**चक्रतुः** = बनाउनुभयो

**वाक्यार्थ–** व्रजमा रहनुभएका श्रीकृष्ण र बलराम कुमारावस्था व्यतीत गरेर पौगण्ड अवस्था (छैटौँ वर्ष)मा प्रवेश गर्नुभएपछि गाईहरू चराउन र पालन गर्न समर्थ हुनुभयो त्यसपछि उहाँहरूले साथीहरूसँग मिलेर गाई चराउँदै आफ्ना चरणहरूद्वारा वृन्दावनलाई अत्यन्त पवित्र बनाउनुभयो।

**तन्माधवो वेणुमुदीरयन् वृतो गोपैर्गृणद्भिः स्वयशो बलान्वितः ।**
**पशून् पुरस्कृत्य पशव्यमाविशद् विहर्तुकामः कुसुमाकरं वनम् ॥ २ ॥**

**पदार्थ–**
**वेणुम्** = बाँसुरी
**उदीरयन्** = बजाउँदै
**स्वयशः** = आफ्नो यश
**गृणद्भिः** = गाइरहेका
**गोपैः** = गोपबालकहरूद्वारा
**वृतः** = घेरिनुभएका
**बलान्वितः** = बलरामले सहित
**विहर्तुकामः** = विहार गर्ने इच्छा गर्ने
**माधवः** = श्रीकृष्णले
**पशून्** = गाई आदि पशुहरूलाई
**पुरस्कृत्य** = अगाडि लगाएर
**पशव्यम्** = पशुहरूका लागि हितकर
**कुसुमाकरं** = फूलको निधि भएको
**तत् वनम्** = त्यस वृन्दावनमा
**आविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले गाई, बाच्छाहरूलाई अगाडि लगाएर बाँसुरी बजाउँदै दाजु बलराम र साथीहरूका साथमा विहार गर्ने इच्छा गरी फूलैफूलले भरिएको र पशुहरूका लागि अत्यन्त उपयुक्त त्यस वृन्दावनमा प्रवेश गर्नुभयो।

**विवरण–** यो अध्यायदेखि भगवान्का पौगण्ड लीलाहरू सुरु हुन्छन्। पौगण्डावस्था भनेको ६ देखि १० वर्षसम्मको अवस्था हो। अब भगवान् बाच्छाहरू मात्र होइन, गाई पनि चराउन सक्ने

हुनुभएको छ। अध्याय १५ देखि अध्याय २१ सम्मका ७ ओटा अध्यायहरूमा भगवान्को मध्यलीला बताइएको छ। बाललीलाका अध्यायहरूमा विशेषतः यशोदा, गोपिनी, नन्द आदिको निरोध बताइएको थियो भने अबको मध्यलीलामा उहाँका आफ्नै साथी गोपालहरूको निरोधलाई मुख्य रूपमा बताइएको छ।

वृन्दावनलाई पवित्र बनाउन र लीलारसले सिक्त गर्न उहाँले बाँसुरी पनि बजाउन थाल्नुभयो। बाँसुरी बजाउन थाल्नु भगवान् विस्तारै मधुर लीलाहरूमा प्रवेश गर्दै हुनुहुन्छ भन्ने सूचना हो। भगवान्को बाँसुरीबाट जुन सङ्गीत निस्कन्छ, त्यसबाट शब्दब्रह्मरूप प्रणवको मधुर नाद फैलिन्छ। वल्लभाचार्य वेणु शब्दको व्युत्पत्ति गर्दै भन्नुहुन्छ– **वश्च इच्च वयौ, तौ अणू यस्मात् सः वेणुः । व** भनेर स्वरूपभूत ब्रह्मानन्दलाई लिनुपर्दछ, **इ** भनेर विषयानन्दलाई। यी दुबै वेणुरसको अगाडि अणुरूप हुन्छन्। यद्यपि स्वयं श्रीकृष्ण आनन्दरूप ब्रह्मस्वरूप नै हुनुहुन्छ, बाँसुरीरसमा उहाँको त्यही स्वरूपभूत आनन्द प्रवाहित हुन्छ, तर उहाँका दिव्य र मधुर लीलारसको आस्वादनमा ज्ञानीहरूको मन पनि छट्पटाउने गरेको देखिएको छ। कुनै कामना नभएका शुकदेव जस्ता आत्माराम मुनिहरूले पनि भगवान्का मधुर गुण एवं लीलारसको आस्वादन गर्न खोज्छन्। यद्यपि ज्ञानीहरूको बुद्धि आत्मानन्दमा रमाउने भइसकेको हुन्छ, तर हरिलीलाको रसले उनीहरूको समाहित भइसकेको बुद्धिलाई पनि फेरि ब्युँझाइदिन्छ र आफ्नो वशमा पारिदिन्छ (भागवत, १/७/११)। भगवान्का कल्याणगुणहरू यस्ता छन् कि तिनीहरूले ज्ञानीहरूलाई पनि वशमा राख्छन् (भागवत, १/७/१०) भनी भागवतमा नै बताइएको छ।

अब भगवान् विहार गर्न खोज्दै हुनुहुन्छ, त्यसैले वनभित्र पनि सौन्दर्य र माधुर्यको सृष्टि हुन्छ। सृष्टि गर्नु रजोगुणको कार्य हो, त्यसैले वसन्त समयको त्यो वन पराग–रजले भरिएका फूलहरूद्वारा ढकमक्क ढाकिन्छ। यहाँ भगवान्ले आफ्ना साथी गोपहरूसँग बाँसुरी बजाउने आदि लीलाहरू सुरु गर्नुभएको कुराको सूचना दिइएको छ।

**तन्मञ्जुघोषालिमृगद्विजाकुलं महन्मनःप्रख्यपयःसरस्वता ।**
**वातेन जुष्टं शतपत्रगन्धिना निरीक्ष्य रन्तुं भगवान् मनो दधे ॥ ३ ॥**

**पदार्थ**–
**मञ्जुघोषालिमृगद्विजाकुलं** = मधुर ध्वनि भएका भँवरा, मृग र पक्षीहरूले युक्त भएको
**महन्मनःप्रख्यपयःसरस्वता** = महात्माहरूको मन झैं शीतल, मधुर र स्वच्छ जलयुक्त पोखरी भएको
**शतपत्रगन्धिना** = कमलपुष्पको वासनाले सहित भएको
**वातेन** = वायुद्वारा
**जुष्टं** = सेवित
**तत्** = त्यो वृन्दावनलाई
**निरीक्ष्य** = देखेर
**भगवान्** = भगवान् श्रीकृष्णले
**रन्तुं** = विहार गर्न
**मनः** = मन
**दधे** = लगाउनुभयो

**वाक्यार्थ**– मधुर ध्वनि भएका भँवरा, मृग र पक्षीहरूको समूहले युक्त भएको एवं महात्माहरूको मन झैं शीतल, मधुर र स्वच्छ जलयुक्त पोखरीमा फुलेका कमलको सुगन्धले व्याप्त हावा भएको वृन्दावनलाई देखेर भगवान् श्रीकृष्णले त्यहाँ विहार गर्न मन लगाउनुभयो।

**विवरण–** यो श्लोकमा वृन्दावनमा पनि भगवान्मा जत्तिकै छ ओटा गुणहरू रहेको बताइएको छ। जब भगवान् लीला गर्न चाहनुहुन्छ, तब त्यसका साधनहरूमा सद्गुणहरूको उत्पत्ति हुन्छ। वल्लभाचार्य भन्नुहुन्छ– **स्वसमाने च रमणं** अर्थात् आफ्नै बराबरसँग नै रमण हुन्छ। भगवान् त छ ओटा ऐश्वर्यहरूले युक्त हुनुहुन्छ, त्यसैले वृन्दावनमा पनि रमण गर्न छ ओटै विशेषताहरू रहनु आवश्यक छ। मिठो शब्दमा भुँ-भुँ गर्दै वरिपरि झुम्मिने भँवराहरू वृन्दावनका एउटा शोभा हुन्, नडराई नजिकैबाट दौडिने मृग-मृगीहरूको बथान अर्को शोभा हो भने मिठो शब्दमा चिरबिर गरिरहेका पक्षीहरूको गीत तेस्रो शोभा हो। **मञ्जुघोषालिमृगद्विजाकुलं** भन्ने शब्दले यी तीन कुराको सूचना गरेको छ। यति मात्र नभई वृन्दावनमा यस्ता सरोवरहरू छन् जहाँ निर्मल, निश्चल जल भरिएको छ, यो चौथो शोभा हो। त्यो सरोवरको पानी महापुरुष ज्ञानीहरूको मन झैं निर्मल र निश्चल छ, यो पाँचौं शोभा हो। त्यहाँ शीतल वायु पनि वहिरहेको छ, अनि कमलका फूल फुलेको बास्ना पनि मगमगाइरहेको छ, यो छैटौं शोभा हो। यसरी छ ओटा गुणहरू वृन्दावनमा रहेका छन्।

भगवान्को लीलारस पिउन कान, आँखा, त्वक् र नासिका यी चार ओटै इन्द्रियहरूको प्रयोग हुने गर्दछ। चार ओटै इन्द्रियले लीलारसको आस्वादन गर्ने हुनाले त्यो वेला यी सबै इन्द्रियहरू रसनारूप नै भएका हुन्छन्। त्यसैले लीलामा चार इन्द्रियको मुख्य प्रयोग हुने गरेको देखिन्छ। अथवा लीलाको रसास्वादनका लागि मुख्य रसनेन्द्रियले अरू चार इन्द्रियहरूको रूपमा चारथरी वृत्ति स्वीकार गर्दछ भनेर पनि बुझ्न सकिन्छ। पहिले आँखाबाट भगवान्को दर्शन गर्नु, कानबाट भगवान्का मिठा शब्दहरू सुन्नु, त्वगिन्द्रियबाट उहाँसँग आलिङ्गन या अङ्गस्पर्श गर्नु अनि अङ्कमालमा रहँदा उहाँको शरीरबाट निस्कने दिव्य कमलपुष्प र माला-चन्दन आदिका सुगन्धलाई सुँघ्नु, यी चार ओटा लीलारसास्वादनका प्रक्रिया हुन्। लीला आस्वादनका यी चारै सम्भावना वृन्दावनमा रहेको सूचना पनि यस श्लोकमा पाइन्छ। यहाँ भुँ-भुँ गर्दै भँवरा झुम्मिनु र पक्षीहरूको मिठो गीत सुनिनुले कानबाट आस्वादन गरिने लीलारसको सूचना हुन्छ। नजिकैबाट दौडिने मृगको बथान अनि स्वच्छ-निर्मल सरोवर देखिनुले आँखाबाट हुने रसास्वादनको सूचना दिन्छ। वायुको शीतलताको अनुभव त्वगिन्द्रियको काम हो, त्यसैले शीतल वायु बहनुले भगवान्सँग अङ्गस्पर्श या अङ्कमाल हुनुको सूचना दिन्छ। त्यसै गरी कमलपुष्पको सुगन्धले भगवान्का दिव्य विग्रहको स्वाभाविक सुगन्ध अनि वनमाला र चन्दनलेप आदिको सुगन्धको आस्वादन भएको सूचना दिन्छ। यसरी लीला रसास्वादनका सबै सम्भावनाहरू वृन्दावनमा रहेको कुरा यहाँ देखाइएको छ।

**स तत्र तत्रारुणपल्लवश्रिया फलप्रसूनोरुभरेण पादयोः।**
**स्पृशच्छिखान् वीक्ष्य वनस्पतीन् मुदा स्मयन्निवाहाग्रजमादिपूरुषः॥ ४ ॥**

**पदार्थ–**
**आदिपूरुषः** = आदिपुरुष
**सः** = उहाँ भगवान् श्रीकृष्णले
**तत्र तत्र** = त्यहाँ-त्यहाँ (वृन्दावनमा)
**अरुणपल्लवश्रिया** = मन्द राता

पालुवाहरूको कान्तिले
**फलप्रसूनोरुभरेण** = फल र फूलको प्रचुर भारले
**पादयोः** = चरणमा
**स्पृशच्छिखान्** = टुप्पाहरू निहुरिएर छोएका
**वनस्पतीन्** = रुखहरूलाई
**वीक्ष्य** = देखेर
**मुदा** = हर्षपूर्वक
**स्मयन् इव** = मुस्कुराए झैँ गरी
**अग्रजम्** = दाजु बलरामलाई
**आह** = भन्नुभयो

**वाक्यार्थ–** वृन्दावनमा विभिन्न ठाउँमा रहेका मन्द-मन्द राता पालुवाहरूको कान्तिले युक्त भएका तथा फल र फूलको अधिक भारले टुप्पो निहुराएर आफ्ना दुबै चरणमा स्पर्श गरिरहेका वृक्षहरूलाई देखेर हर्षपूर्वक मुस्कुराउँदै आदिपुरुष भगवान् श्रीकृष्णले दाजु बलरामलाई भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**अहो अमी देववरामरार्चितं पादाम्बुजं ते सुमनःफलार्हणम्।**

**नमन्त्युपादाय शिखाभिरात्मनस्तमोऽपहत्यै तरुजन्म यत्कृतम्॥ ५॥**

**पदार्थ–**
**अहो** = आश्चर्य
**देववर** = हे देवश्रेष्ठ
**अमी** = यी रुखहरूले
**यत्** = जुन पापका कारण
**तरुजन्म** = वृक्षको योनि
**कृतम्** = प्राप्त गरे (त्यो)
**आत्मनः** = आफ्नो
**तमोऽपहत्यै** = पापको नाशका लागि
**शिखाभिः** = टुप्पाहरूद्वारा
**सुमनःफलार्हणम्** = पुष्प, फल आदि पूजासामग्रीहरू
**उपादाय** = लिएर
**अमरार्चितं** = देवताहरूद्वारा पूजित
**ते** = हजुरको
**पादाम्बुजं** = चरणकमललाई
**नमन्ति** = ढोगिरहेका छन्

**वाक्यार्थ–** हे देवश्रेष्ठ ! वनका यी रुखहरू जुन पापका कारण रुख बने त्यसको नाशका लागि आज यिनीहरू आ-आफ्ना टुप्पाहरूद्वारा पुष्प, फल आदि पूजासामग्रीहरू लिएर हजुरको चरणकमललाई ढोगिरहेका छन्।

**टिप्पणी–** यहाँ ५-८ श्लोकमा स्वयं आदिपुरुष भगवान् श्रीकृष्णले आफ्ना दाजु शेषावतार श्रीबलरामलाई देववर भनी आदरपूर्वक सम्बोधन गर्दै यी कुराहरू भन्नुभएको छ। शेषावतार भगवान् श्रीबलराम लीलामा श्रीकृष्णभन्दा भिन्न देखिए पनि वास्तवमा उहाँ श्रीकृष्णभन्दा भिन्न हुनुहुन्न, त्यसैले पनि यहाँ आठौँ श्लोकमा **यत्स्पृहा श्रीः** अर्थात् लक्ष्मीजी पनि जसलाई चाहनुहुन्छ भनिएको छ।

**एतेऽलिनस्तव यशोऽखिललोकतीर्थं**
**गायन्त आदिपुरुषानुपदं भजन्ते।**
**प्रायो अमी मुनिगणा भवदीयमुख्या**
**गूढं वनेऽपि न जहत्यनघात्मदैवम्॥ ६॥**

**पदार्थ–**
**आदिपुरुष** = हे आदिपुरुष
**एते** = यी
**अलिनः** = भँवराहरू
**अखिललोकतीर्थं** = सम्पूर्ण संसारलाई पवित्र बनाउने
**तव** = हजुरको
**यशः** = कीर्ति
**गायन्तः** = गाउँदै
**अनुपदं** = हजुरकै पछि-पछि
**भजन्ते** = हिँड्दछन्
**अमी** = यी भँवराहरू
**प्रायः** = प्राय
**भवदीयमुख्याः** = हजुरका सेवकहरूमा श्रेष्ठ
**मुनिगणाः** = मुनिगणहरू हुन् (त्यसैले)
**अनघ** = हे निर्मलात्मा
**वने** = वनमा
**गूढं अपि** = लुक्नुभए पनि
**आत्मदैवम्** = आफ्नो देवतालाई
**न जहति** = छोड्दैनन्

**वाक्यार्थ–** हे आदिपुरुष ! यी भँवराहरू भुन्भुनाउँदै सम्पूर्ण लोकलाई नै पवित्र बनाउने हजुरको कीर्तिको महिमागान गरिरहेका छन्। हे निर्मलात्मा ! हजुरकै बाटोमा पछि-पछि लाग्ने यी भँवराहरूमध्ये धेरैजसो हजुरकै श्रेष्ठ सेवक मुनिगणहरू हुन्। यसैले यिनीहरू (एउटा बालकको रूपमा) वनमा लुक्नुभएका आफ्ना देवतालाई नछोडी पछ्याइरहेका छन्।

**नृत्यन्त्यमी शिखिन ईड्य मुदा हरिण्यः**
**कुर्वन्ति गोप्य इव ते प्रियमीक्षणेन।**
**सूक्तैश्च कोकिलगणा गृहमागताय**
**धन्या वनौकस इयान् हि सतां निसर्गः॥ ७॥**

**पदार्थ–**
**ईड्य** = हे पूज्य
**गृहम्** = आफ्नो घर
**आगताय** = आउनुभएका हजुरलाई (प्रसन्न बनाउन)
**अमी** = यी
**शिखिनः** = मयूरहरू
**मुदा** = हर्षपूर्वक
**नृत्यन्ति** = नाच्दछन्
**हरिण्यः** = हरिणीहरू
**गोप्यः इव** = गोपिनीहरूले झैँ
**ईक्षणेन** = कटाक्षपूर्ण दृष्टिद्वारा
**ते** = हजुरलाई
**प्रियम्** = प्रेम
**कुर्वन्ति** = गर्दछन्
**कोकिलगणाः** = कोइलीका समूहहरू
**सूक्तैः च** = मधुर शब्दद्वारा (प्रेम गर्दछन्)
**वनौकसः** = यी वनवासी पशुपक्षीहरू
**धन्याः** = धन्य छन्
**हि** = किनभने
**इयान्** = (घरमा आएका पाहुनाको) यस्तो सत्कार गर्नु
**सतां** = सज्जनहरूको
**निसर्गः** = स्वभाव हो

**वाक्यार्थ–** हे पूज्य दाजु ! आफ्नो घर आउनुभएका हजुरलाई प्रसन्न बनाउन यस वनका मयूरहरू हर्षले नाचिरहेका छन्, हरिणीहरूले पनि गोपिनीले झैँ आफ्नो कटाक्षपूर्ण दृष्टिद्वारा हजुरलाई प्रेम गरिरहेका छन्, हजुरप्रति प्रेम प्रकट गर्न कोइलीहरू कुहू-कुहूको मधुरगान गर्दैछन्। यी वनवासी पशुपक्षीहरू धन्य छन्, आफ्नो घरमा आएका पाहुनालाई यसरी सत्कार गरेर प्रसन्न गराउनु यिनीहरूको स्वभाव नै हो।

**धन्येयमद्य धरणी तृणवीरुधस्त्वत्-**
**पादस्पृशो द्रुमलताः करजाभिमृष्टाः।**
**नद्योऽद्रयः खगमृगाः सदयावलोकै-**
**र्गोप्योऽन्तरेण भुजयोरपि यत्स्पृहा श्रीः॥ ८॥**

**पदार्थ–**
**अद्य** = आज
**इयम्** = यी
**धरणी** = पृथिवी
**धन्या** = धन्य भइन्
**त्वत्पादस्पृशः** = हजुरको चरणको स्पर्श पाएका
**तृणवीरुधः** = घाँस, वनस्पतिहरू पनि धन्य भए
**करजाभिमृष्टाः** = औँलाका नङहरूको स्पर्श पाएका
**द्रुमलताः** = वृक्ष र लहराहरू पनि धन्य भए
**सदयावलोकैः** = हजुरको कृपापूर्ण दृष्टिद्वारा
**नद्यः** = नदीहरू
**अद्रयः** = पहाडहरू
**खगमृगाः** = चरा र मृगहरू पनि धन्य भए
**श्रीः अपि** = लक्ष्मी पनि
**यत्स्पृहा** = जेको (वक्षःस्थलको स्पर्शको) इच्छा राख्नुहुन्छ (त्यस्ता हजुरको)
**भुजयोः अन्तरेण** = दुई बाहुबीचको वक्षःस्थलको स्पर्शद्वारा
**गोप्यः** = गोपिनीहरू पनि धन्य भए

**वाक्यार्थ–** आज हजुरको चरणस्पर्श पाएर यहाँको भूमि, हरिया-हरिया घाँस र वनस्पतिहरू धन्य भएका छन्। हजुरको औँलामा रहेका नङहरूको स्पर्श प्राप्त गरेर रुख र लहराहरू, नदीनाला, पहाड, चराचुरुङ्गी र मृगहरू पनि धन्य भएका छन् अनि हजुरको वक्षःस्थलको स्पर्श पाएर व्रजका गोपिनीहरू पनि धन्य भएका छन्, जुन वक्षःस्थलको स्पर्श प्राप्त गर्न लक्ष्मीजी पनि सधैँ उत्कण्ठित हुनुहुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं वृन्दावनं श्रीमत्कृष्णः प्रीतमनाः पशून्।**
**रेमे सञ्चारयन्नद्रेः सरिद्रोधस्सु सानुगः॥ ९॥**

**पदार्थ–**
**एवं** = यसरी
**श्रीमत्** = शोभासम्पन्न
**वृन्दावनं** = वृन्दावनप्रति
**प्रीतमनाः** = प्रसन्न हुनुभएका
**सानुगः** = गोपबालकहरूले सहित
**कृष्णः** = श्रीकृष्ण
**अद्रेः** = (गोवर्धन) पर्वतको (फेदमा रहेको)
**सरिद्रोधस्सु** = (यमुना) नदीको तटमा
**पशून्** = गाईहरूलाई
**सञ्चारयन्** = चराउँदै
**रेमे** = रमण (विहार) गर्न थाल्नुभयो

**वाक्यार्थ–** यसरी अपूर्व शोभाले सम्पन्न परम सुन्दर वृन्दावनलाई देखेर अत्यन्त प्रसन्न हुनुभएका

भगवान् श्रीकृष्ण गोप बालकहरूका साथमा गोवर्धन पर्वतको फेदमा रहेको यमुना नदीको किनारमा गाईहरू चराउँदै विहार गर्न लाग्नुभयो।

**क्वचिद् गायति गायत्सु मदान्धालिष्वनुव्रतैः।**
**उपगीयमानचरितः स्रग्वी सङ्कर्षणान्वितः॥ १०॥**

**पदार्थ–**
**अनुव्रतैः** = अनुयायीहरूद्वारा
**उपगीयमानचरितः** = आफ्नो चरित्रको मधुर गान गरिनुभएका
**सङ्कर्षणान्वितः** = बलरामले सहित हुनुभएका
**स्रग्वी** = वनमालाधारी श्रीकृष्ण
**मदान्धालिषु** = पुष्परस पिएर उन्मत्त भएका भँवराहरूले
**क्वचित्** = कहिले कहिले
**गायत्सु** = गुन्गुनाउँदा
**गायति** = गीत गाउनुहुन्थ्यो

**वाक्यार्थ–** अनुयायी गोप बालकहरूद्वारा आफ्नो चरित्रको मधुरगान गरिनुभएका अनि बलरामले सहित हुनुभएका वनमालाधारी श्रीकृष्ण पुष्परस पिएर उन्मत्त भएका भँवराहरू गुन्गुनाउँदा ती भँवराहरूसँगै गीत गाउनुहुन्थ्यो।

**क्वचिच्च कलहंसानामनुकूजति कूजितम्।**
**अभिनृत्यति नृत्यन्तं बर्हिणं हासयन् क्वचित्॥ ११॥**

**पदार्थ–**
**क्वचित् च** = कहिलेकाहीँ चाहिँ
**कलहंसानाम्** = राजहंसहरूको
**कूजितम्** = आवाजको
**अनुकूजति** = अनुकरण गर्दै कराउनुहुन्थ्यो
**क्वचित्** = कहिलेकाहीँ
**हासयन्** = (साथीहरूलाई) हँसाउँदै
**नृत्यन्तं** = नाच्दै गरेको
**बर्हिणं** = मयूरसँगै
**अभिनृत्यति** = नाच्नुहुन्थ्यो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण कहिलेकाहीँ राजहंसको आवाजको अनुकरण गर्दै त्यसैसँग सँगसँगै कराउनुहुन्थ्यो भने कहिलेकाहीँ आफ्ना साथीहरूलाई हँसाउँदै मयूरसँगसँगै नाच्नुहुन्थ्यो।

**मेघगम्भीरया वाचा नामभिर्दूरगान् पशून्।**
**क्वचिदाह्वयति प्रीत्या गोगोपालमनोज्ञया॥ १२॥**

**पदार्थ–**
**क्वचित्** = कहिलेकाहीँ
**गोगोपालमनोज्ञया** = गाई र गोठाहरूलाई मन पर्ने
**मेघगम्भीरया** = मेघको झैँ गम्भीर
**वाचा** = आवाजद्वारा
**नामभिः** = नामले सम्बोधन गरी
**दूरगान्** = टाढा गएका
**पशून्** = पशुहरूलाई
**प्रीत्या** = प्रेमपूर्वक
**आह्वयति** = बोलाउनुहुन्थ्यो

**वाक्यार्थ–** कहिलेकाहीँ गाई र आफ्ना गोठाला साथीहरूलाई अत्यन्त मन पर्ने मेघको जस्तो गम्भीर आवाज निकालेर टाढा पुगेका गाईहरूलाई नामले नै सम्बोधन गरी प्रेमपूर्वक बोलाउनुहुन्थ्यो।

**विवरण—** माथिका चार श्लोकमा भगवान्‌ले धर्म, अर्थ, काम र मोक्ष चारै पुरुषार्थहरू लीलाको रूपमा पूरा गर्नुभएको सूचना पाइन्छ। यमुनाको तीरमा गाईहरू चराउनु यो पहिलो धर्मलीला हो। तीरमर्यादा व्यवस्था या धर्मको प्रतीक हो। भगवान्‌ले पशुहरूलाई तीरतिर चराउँदै **रेमे** अर्थात् रमाउनुभयो। यसबाट धर्मलीलाको माध्यमले भगवान्‌को रमणलाई देखाइयो। दिव्य माला लगाउनु, सेवकहरूबाट आफ्नो प्रशंसा गरिनु र भँवराले सङ्गीतकर्मी जस्तो भई गीत गाउनुले कुनै महाधनवान् पुरुषकहाँ भइरहेको रसरङ्गको सूचना दिन्छ। यसबाट यहाँ प्रतीकका रूपमा भगवान्‌ले अर्थलीलाद्वारा आनन्द लिनुभएको देखाइएको छ। राजहंससँगै कराउनु र मयूरसँगै नाँच्नुले हंस-हंसी र मयूर-मयूरीको प्रणयलाई जनाई त्यसद्वारा प्रतीकका रूपमा भगवान्‌ले कामलीला पनि सम्पन्न गर्नुभएको सूचना मिल्छ। बाह्रौं श्लोकमा भने भगवान्‌को मोक्षलीला बताइएको छ। जब जीवहरू भगवान्‌भन्दा टाढा संसारका विषयहरू भोग्न जान्छन्, तब उनीहरूलाई भगवान्‌पट्टि फर्काउन भगवान्‌ले नै प्रयास गर्नुपर्छ। त्यसैले परम कृपाले युक्त भई भगवान् ती जीवहरूलाई एक-एक गरी आफूतिर आकृष्ट गर्नुहुन्छ। चर्दाचर्दै टाढा पुगेका गाईहरूलाई तिनको नाम लिएर बोलाउँदै भगवान्‌ले आफूनजिक ल्याउनुभएको घटनाबाट परमात्माले आफ्नै कृपाले जीवहरूलाई आफूमा मिलाउनुहुन्छ भन्ने सूचना पाइन्छ। यी सबै लीला भगवान्‌ले आफैं रमाउनका लागि गर्नुहुन्छ र आफैं पनि आफ्नो लीलारसको आस्वादन गर्नुहुन्छ। त्यसैले यहाँ **रेमे** अर्थात् रमाउनुभयो भन्ने क्रियापदले भगवान् श्रीकृष्णलाई नै कर्ता बनाएको छ भन्ने बुझिन्छ।

**चकोरक्रौञ्चचक्राह्वभारद्वाजांश्च बर्हिणः।**
**अनुरौति स्म सत्त्वानां भीतवद् व्याघ्रसिंहयोः॥ १३॥**

**पदार्थ–**
**चकोरक्रौञ्चचक्राह्वभारद्वाजान् च** = चकोर, कऱ्याङकुरुङ, चखेवा, भद्राई र
**बर्हिणः** = मयूर आदि चराहरूको
**सत्त्वानां** = प्राणीहरूमध्ये
**व्याघ्रसिंहयोः** = बाघ र सिंहको
**भीतवत्** = डराएजस्तो गरेर
**अनुरौति स्म** = आवाजको अनुकरण गरेर कराउनुहुन्थ्यो

**वाक्यार्थ—** भगवान् श्रीकृष्ण कहिले चकोर, कऱ्याङकुरुङ, चखेवा, भद्राई, मयूर जस्ता चराहरूको आवाजको अनुकरण गरेर कराउनुहुन्थ्यो भने कहिलेकाहीँ बाघ र सिंहबाट डराएका जनावरहरूको जस्तो आवाज निकालेर कराउनुहुन्थ्यो।

**क्वचित् क्रीडापरिश्रान्तं गोपोत्सङ्गोपबर्हणम्।**
**स्वयं विश्रमयत्यार्यं पादसंवाहनादिभिः॥ १४॥**

**पदार्थ–**
**क्वचित्** = कहिलेकाहीँ
**क्रीडापरिश्रान्तं** = खेलेर थाक्नुभएका
**गोपोत्सङ्गोपबर्हणम्** = गोप-बालकहरूको काखलाई तकिया बनाएर सुत्नुभएका
**आर्यं** = पूज्य दाजु बलरामलाई
**पादसंवाहनादिभिः** = गोडा मिच्ने

| | | |
|---|---|---|
| आदि सेवामूलक कार्यद्वारा | **विश्रमयति** = विश्राम | मेटाइदिनुहुन्थ्यो) |
| **स्वयं** = आफैंले | गराइदिनुहुन्थ्यो (थकाइ | |

**वाक्यार्थ–** कहिलेकाहीँ भगवान् श्रीकृष्ण खेल्दा-खेल्दा थाकेर गोप मित्रहरूको काखलाई तकिया बनाएर सुत्नुभएका दाजु बलरामको गोडा मिच्ने आदि सेवामूलक कार्यहरू गरेर उहाँको थकाइ मेटाइदिनुहुन्थ्यो।

**नृत्यतो गायतः क्वापि वल्गतो युध्यतो मिथः।**
**गृहीतहस्तौ गोपालान् हसन्तौ प्रशशंसतुः॥ १५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **गायतः** = गाउने | **गृहीतहस्तौ** = हात समातेर |
| **क्व अपि** = कहिलेकाहीँ | **वल्गतः** = उफ्रने | **हसन्तौ** = हाँस्दै |
| **मिथः** = परस्पर | **युध्यतः** = कुस्ती खेल्ने | **प्रशशंसतुः** = प्रशंसा गर्नुहुन्थ्यो |
| **नृत्यतः** = नाच्ने | **गोपालान्** = गोप बालकहरूलाई | |

**वाक्यार्थ–** कहिलेकाहीँ गोपबालकहरू सँगसँगै नाच्थे, गाउँथे, उफ्रन्थे र कुस्ती खेल्थे। त्यस अवस्थामा श्रीकृष्ण र बलराम एक-अर्काको हात समातेर हाँस्दै ती गोपबालकहरूको कार्यको प्रशंसा गर्नुहुन्थ्यो।

**क्वचित् पल्लवतल्पेषु नियुद्धश्रमकर्शितः।**
**वृक्षमूलाश्रयः शेते गोपोत्सङ्गोपबर्हणः॥ १६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **गोपोत्सङ्गोपबर्हणः** = गोप | **पल्लवतल्पेषु** = पालुवाको |
| **क्वचित्** = कहिलेकाहीँ | बालकको काखलाई तकिया | शय्यामा |
| **नियुद्धश्रमकर्शितः** = बाहुयुद्ध | बनाउनुभएका | **शेते** = सुत्नुहुन्थ्यो |
| गर्दा भएको परिश्रमले | **वृक्षमूलाश्रयः** = रुखको फेदलाई | |
| थाक्नुभएका | आश्रय बनाउनुभएका श्रीकृष्ण | |

**वाक्यार्थ–** कहिलेकाहीँ श्रीकृष्ण गोपबालकहरूसँग बाहुयुद्ध गरेर थाक्नुहुन्थ्यो अनि कुनै एउटा रुखको फेदमा गएर त्यहाँ पालुवाको शय्यामा गोप बालकको काखलाई तकिया बनाएर सुत्नुहुन्थ्यो।

**पादसंवाहनं चक्रुः केचित् तस्य महात्मनः।**
**अपरे हतपाप्मानो व्यजनैः समवीजयन्॥ १७॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **महात्मनः** = महात्मा | **चक्रुः** = गर्दथे |
| **हतपाप्मानः** = निष्पाप | **तस्य** = उहाँ (श्रीकृष्ण)को | **अपरे** = अन्य बालकहरूले |
| **केचित्** = केही गोपबालकहरूले | **पादसंवाहनं** = गोडा मिच्ने काम | चाहिँ |

**व्यजनैः** = पङ्खाहरूद्वारा | **समवीजयन्** = हम्किन्थे

**वाक्यार्थ–** कोही-कोही निष्पाप गोपबालकहरूले सुत्नुभएका महामना भगवान् श्रीकृष्णको गोडा मिच्दथे भने अन्य बालकहरू चाहिँ पङ्खा हम्किन्थे।

**अन्ये तदनुरूपाणि मनोज्ञानि महात्मनः।**
**गायन्ति स्म महाराज स्नेहक्लिन्नधियः शनैः॥ १८॥**

**पदार्थ–**
**महाराज** = हे महाराज परीक्षित्
**अन्ये** = अरू
**स्नेहक्लिन्नधियः** = प्रेमले हृदय भिजेका गोपहरू
**तदनुरूपाणि** = उहाँ (श्रीकृष्ण) का गुण अनुरूप
**मनोज्ञानि** = मनोहर
**महात्मनः** = महात्मा श्रीकृष्णको (यश)
**शनैः** = बिस्तारै
**गायन्ति स्म** = गाउँथे

**वाक्यार्थ–** हे महाराज परीक्षित्! कुनै-कुनै गोपहरूको हृदय भगवान्सँगको प्रेमले निथ्रुक्क भिज्दथ्यो अनि उनीहरू भगवान्को गुण अनुरूपको मनोहर कीर्ति बिस्तारै गाउँथे।

**एवं निगूढात्मगतिः स्वमायया गोपात्मजत्वं चरितैर्विडम्बयन्।**
**रेमे रमालालितपादपल्लवो ग्राम्यैः समं ग्राम्यवदीशचेष्टितः॥ १९॥**

**पदार्थ–**
**चरितैः** = आफ्नो लीलाचरित्रद्वारा
**गोपात्मजत्वं** = गोपको पुत्ररूपलाई
**विडम्बयन्** = अनुकरण गर्दै
**स्वमायया** = आफ्नो मायाद्वारा
**निगूढात्मगतिः** = आफ्नो वास्तविक स्वरूपलाई लुकाउनुभएका (भए तापनि कहिलेकाहीँ)
**ईशचेष्टितः** = साक्षात् ईश्वरको जस्तैँ ऐश्वर्यमय चेष्टा गर्नुहुने
**रमालालितपादपल्लवः** = रमा (सौभाग्यकी देवी)द्वारा चरणपल्लव सेवित हुनुभएका भगवान् श्रीकृष्ण
**ग्राम्यैः समं** = गाउँले गोप बालकहरूसँग
**ग्राम्यवत्** = गाउँले जस्तै भएर
**एवं** = यस प्रकारले
**रेमे** = क्रीडामा मस्त हुनुहुन्थ्यो

**वाक्यार्थ–** आफ्नो वास्तविक स्वरूपलाई आफ्नै मायाले ढाकेर गोपबालकको जस्तो लीला गरिरहनुभएका भगवान् श्रीकृष्ण जसको चरणपल्लवको सेवा सौभाग्यकी देवी रमाले गर्नुहुन्थ्यो उहाँ गाउँले बालक जस्तै भएर गाउँले गोपबालकहरूसँगै क्रीडामा मस्त हुनुहुन्थ्यो तापनि कहिलेकाहीँ उहाँको ईश्वरीय ऐश्वर्यमय चेष्टा प्रकट हुन्थ्यो।

**विवरण–** यस श्लोकमा गाउँले लीला गरिरहे पनि परमात्माले आफ्नो स्वरूपलाई भुल्नुभएको छैन भनी सूचित गरिएको छ। यसबाट श्रीकृष्ण पूर्णावतार हुनुहुन्छ भन्ने सिद्ध हुन्छ। परमात्माका अनेक अवतारहरूमध्ये नृसिंह आदि अवतारहरू भक्तको अनुग्रहका लागि तत्काल व्यक्त भएका हुन्, त्यसैले यी अवतारमा भगवान्ले आफ्नो स्वरूप बिर्सने भन्ने प्रसङ्गै आउँदैन। सामान्य व्यक्तिसरह जीवनभरि लीला गर्ने श्रीराम, परशुराम जस्ता अवतारहरूमा कहाँ कति ईश्वरीय

स्वरूप अभिव्यक्त छ, यसबाट अवतारहरू पूर्ण या अंश हुन् भन्ने कुरा छुट्याइएको पाइन्छ। वेदान्तसिद्धान्तमा त **पूर्णात् पूर्णमुदच्यते** भनिन्छ (ईशावास्योपनिषद्, शान्तिमन्त्र)। अर्थात् परमात्माले आफ्नो पूर्ण रहने स्वरूपलाई कहिल्यै नत्याग्ने हुनाले जगत् पूर्ण परमात्मरूप नै हो। **ब्रह्म वेद ब्रह्मैव भवति** (मुण्डकोपनिषद्, ३/२/९) अर्थात् ज्ञानद्वारा जीव र ब्रह्मको एकता बुझेका ज्ञानीहरू त पूर्ण ब्रह्म नै हुन्छन् भने जसमा अविद्याको आवरण नै छैन, त्यस्ता मायापति परमात्माको अवतारमा अपूर्णताको कल्पना गर्नु मूर्खता मात्र हुन्छ, तर पनि भक्तले इष्टप्रेमको आग्रहका कारण अन्य अवतारसँग आफ्नो उपास्य देवताको तुलना गर्दछ। यही दृष्टिले पुराणमा कसैलाई अंशावतार र कसैलाई पूर्णावतार भनी बताइएको छ। रामावतार आदिमा भगवान्ले आफ्नो ईश्वरत्वलाई सधैं प्रकट गर्नुभएको छैन। त्यहाँ कहीं दुःखी, कहीं मोहित र अज्ञानी झैं व्यवहार गरेको देखिन्छ। योगवाशिष्ठमा श्रीराममा वशिष्ठको उपदेशपछि मात्र ज्ञानको उदय भएको देखाइएको छ। यहाँ परमात्मा अज्ञानी हुनुभएको होइन, अज्ञानी भए झैं लीला मात्र गर्नुभएको हो, किनभने सामान्य मानिससरह बनी तिनीहरूलाई आदर्शको शिक्षा दिनु नै रामावतारको उद्देश्य हो। सीताविरहमा रुने आदि कार्यहरू स्त्रीमा आसक्त व्यक्ति कसरी दुःखी हुन्छ भनी देखाउनको लागि गरिएको थियो, वास्तवमा उहाँ दुःखी हुनुहुन्नथ्यो भनी भागवतमैं बताइएको छ– **स्त्रीसङ्गिनां गतिमिति प्रथयाँश्चकार** (भागवत, ९/१०/११)। तर श्रीकृष्णावतारमा भने भगवान्मा जन्मदेखि नै ईश्वरीय ऐश्वर्यको निरन्तर स्फूर्ति भइरहेको पाइन्छ। जन्मेको केही वर्षमा नै यशोदालाई आफ्नो मुखभित्र विश्व देखाउने, मरेका गोपहरूलाई अनेकपटक बचाउने, इन्द्र, ब्रह्मा आदि देवताहरूलाई झुकाउने, महाभारतमा अर्जुनलाई विश्वरूप देखाउने आदि बारम्बार दोहोरिइरहने ईश्वरीयताले गर्दा पुराणहरूले अरू अवतारको भन्दा श्रीकृष्णावतारको महिमा उच्च रहेको र यो पूर्णावतार भएको बताएका छन्। **गोपात्मजत्वं विडम्बयन्** अर्थात् गोपालको पुत्र भएको अनुकरण गर्दै रमापतिले लीला गर्नुभयो भनी यस श्लोकमा पनि श्रीकृष्णको यही नित्य अभिव्यक्त ईश्वरीय महिमालाई बताउन खोजिएको छ।

**श्रीदामा नाम गोपालो रामकेशवयोः सखा।**
**सुबलस्तोककृष्णाद्या गोपाः प्रेम्णेदमब्रुवन्॥ २०॥**

**पदार्थ**–
**रामकेशवयोः** = बलराम र श्रीकृष्णको
**सखा** = साथी
**श्रीदामा नाम** = श्रीदामा नामका
**गोपालः** = गोप (तथा अन्य)
**सुबलस्तोककृष्णाद्या** = सुबल र स्तोककृष्ण (सानु कृष्ण) आदि नाम गरेका
**गोपाः** = गोपहरूले
**प्रेम्णा** = प्रेमपूर्वक
**इदम्** = यो कुरा
**अब्रुवन्** = भने

**वाक्यार्थ**– श्रीकृष्ण र बलरामका श्रीदामा, सुबल र स्तोककृष्ण आदि नाम भएका गोप मित्रहरूले एक दिन श्रीकृष्ण र बलरामलाई प्रेमपूर्वक यसो भने।

**राम राम महाबाहो कृष्ण दुष्टनिबर्हण।**
**इतोऽविदूरे सुमहद् वनं तालालिसङ्कुलम्॥ २१॥**

**पदार्थ–**
**महाबाहो** = विशाल र बलिष्ठ हात भएका
**राम राम** = हे बलराम, हे बलराम
**दुष्टनिबर्हण** = दुष्टहरूको नाश गर्ने
**कृष्ण** = हे श्रीकृष्ण
**इतः** = यहाँबाट
**अविदूरे** = नजिकै
**तालालिसङ्कुलम्** = ताड वृक्षहरूले व्याप्त
**सुमहत्** = ठुलो
**वनं** = जङ्गल छ

**वाक्यार्थ–** विशाल र बलिष्ठ हात भएका हे बलराम! दुष्टहरूको नाश गर्ने हे श्रीकृष्ण! यहाँबाट नजिकै ताडको रूख धेरै भएको एउटा ठुलो जङ्गल छ।

**फलानि तत्र भूरीणि पतन्ति पतितानि च।**
**सन्ति किन्त्ववरुद्धानि धेनुकेन दुरात्मना॥ २२॥**

**पदार्थ–**
**तत्र** = त्यस जङ्गलमा
**पतन्ति** = झर्न ठिक्क परेका र
**पतितानि च** = झरेका
**भूरीणि** = धेरै
**फलानि** = ताडका फलहरू
**सन्ति** = छन्
**किन्तु** = तर
**दुरात्मना** = दुष्टात्मा
**धेनुकेन** = धेनुक नामको असुरद्वारा
**अवरुद्धानि** = टिप्न, खान रोकिएको छ

**वाक्यार्थ–** त्यस जङ्गलमा पाकेर झर्न ठिक्क परेका र झरिसकेका ताडका फलहरू धेरै छन्, तर ती फलहरूलाई धेनुकासुरले टिप्न र खान रोकेको छ।

**सोऽतिवीर्योऽसुरो राम हे कृष्ण खररूपधृक्।**
**आत्मतुल्यबलैरन्यैर्ज्ञातिभिर्बहुभिर्वृतः॥ २३॥**

**पदार्थ–**
**हे राम** = हे बलराम
**कृष्ण** = हे श्रीकृष्ण
**खररूपधृक्** = गधाको रूप धारण गरेर बस्ने
**अतिवीर्यः** = अत्यन्त बलवान्
**सः** = त्यो धेनुक नामको
**असुरः** = दैत्य
**आत्मतुल्यबलैः** = आफूसमान बल भएका
**अन्यैः** = अरू
**बहुभिः** = धेरै
**ज्ञातिभिः** = इष्टमित्रहरूद्वारा
**वृतः** = घेरिएको छ

**वाक्यार्थ–** हे बलराम! हे श्रीकृष्ण! गधाको रूपमा रहेको अत्यन्त बलवान् त्यो धेनुकासुर आफूसमान बल भएका अरू धेरै इष्टमित्रहरूद्वारा घेरिएर बस्दछ।

**तस्मात् कृतनराहाराद् भीतैर्नृभिरमित्रहन्।**
**न सेव्यते पशुगणैः पक्षिसङ्घैर्विवर्जितम्॥ २४॥**

**पदार्थ–**
**अमित्रहन्** = शत्रुनाशक हे श्रीकृष्ण
**कृतनराहारात्** = धेरै मान्छेलाई आहार बनाएको
**तस्मात्** = त्यो धेनुकासुरबाट
**भीतैः** = डराएका
**नृभिः** = मानिसहरूद्वारा
**पशुगणैः** = पशुहरूको समूहद्वारा र
**पक्षिसङ्घैः** = चराहरूको समुदायद्वारा पनि
**न सेव्यते** = त्यो वनको सेवन गरिँदैन (त्यसैले)
**विवर्जितम्** = (नर, पशु, पक्षी आदि सबै प्राणीद्वारा त्यो वन) त्यक्त छ

**वाक्यार्थ–** हे शत्रुनाशक श्रीकृष्ण ! धेनुकासुरले धेरै मान्छेहरूलाई मारेर खाइसकेको छ। त्यसैले त्यो असुरबाट डराएर त्यहाँ मान्छे, जनावरहरू र चराहरू पनि जाँदैनन्, सबैले त्यस वनलाई त्यागिदिएका छन्।

**विद्यन्तेऽभुक्तपूर्वाणि फलानि सुरभीणि च।**
**एष वै सुरभिर्गन्धो विषूचीनोऽवगृह्यते॥ २५॥**

**पदार्थ–**
**अभुक्तपूर्वाणि** = पहिले कहिल्यै नखाइएका
**सुरभीणि च** = सुगन्धले पनि युक्त
**फलानि** = फलहरू
**विद्यन्ते** = छन्
**वै** = निश्चय नै
**विषूचीनः** = चारैतिर फैलिएको
**एषः** = यो
**सुरभिः** = वासनामय
**गन्धः** = सुगन्ध
**अवगृह्यते** = ग्रहण गरिइरहेको छ

**वाक्यार्थ–** त्यस वनमा हामीले कहिल्यै पनि नखाएका सुगन्धित फलहरू छन्। यो यहाँ आइरहेको सुगन्ध तिनै फलहरूको चारैतिर फैलिएको सुगन्ध नै हो।

**प्रयच्छ तानि नः कृष्ण गन्धलोभितचेतसाम्।**
**वाञ्छास्ति महती राम गम्यतां यदि रोचते॥ २६॥**

**पदार्थ–**
**कृष्ण** = हे श्रीकृष्ण
**गन्धलोभितचेतसाम्** = सुगन्धले मन लोभ्याइएका
**नः** = हामीहरूलाई
**तानि** = ती फलहरू
**प्रयच्छ** = प्रदान गर्नुहोस्
**राम** = हे बलराम
**महती** = ठुलो
**वाञ्छा** = फल खाने इच्छा
**अस्ति** = छ
**यदि** = यदि
**रोचते** = हजुरलाई मन पर्छ भने
**गम्यतां** = जाऔँ

**वाक्यार्थ–** हे श्रीकृष्ण ! ती फलहरूको सुगन्धले मन लोभिएका हामीहरूलाई ती फलहरू दिनुहोस्। हे बलराम ! हामीलाई ती फल खाने ठुलो इच्छा छ, यदि हजुरलाई मनपर्छ भने फल

खान जाऔं।

**एवं सुहृद्वचः श्रुत्वा सुहृत्प्रियचिकीर्षया।**
**प्रहस्य जग्मतुर्गोपैर्वृतौ तालवनं प्रभू॥ २७॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**सुहृद्वचः** = साथीहरूको कुरा
**श्रुत्वा** = सुनेर
**प्रहस्य** = हाँसेर
**सुहृत्प्रियचिकीर्षया** = साथीहरूको इच्छा पूर्ण गर्ने विचारले
**गोपैः** = गोप बालकहरूद्वारा
**वृतौ** = घेरिनुभएका
**प्रभू** = भगवान् श्रीकृष्ण र बलराम
**तालवनं** = ताडको वनमा
**जग्मतुः** = जानुभयो

**वाक्यार्थ–** यसरी आफ्ना साथीहरूको कुरा सुनेर भगवान् श्रीकृष्ण र बलराम हाँस्नुभयो अनि साथीहरूको इच्छा पूर्ण गराउने विचार गरी सबै गोप साथीहरूलाई साथैमा लिएर उहाँहरू ताडको वनमा जानुभयो।

**बलः प्रविश्य बाहुभ्यां तालान् सम्परिकम्पयन्।**
**फलानि पातयामास मतङ्गज इवौजसा॥ २८॥**

**पदार्थ–**
**बलः** = बलरामले
**प्रविश्य** = त्यो वनमा प्रवेश गरेर
**मतङ्गजः इव** = मत्त हात्तीले झैं
**ओजसा** = बलपूर्वक
**तालान्** = ताडका रुखहरूलाई
**बाहुभ्यां** = दुबै बाहुले
**सम्परिकम्पयन्** = बेसरी हल्लाएर
**फलानि** = फलहरू
**पातयामास** = झार्नुभयो

**वाक्यार्थ–** वनमा प्रवेश गरेपछि बलरामले आफ्ना दुबै हातले ताडका रुखहरूलाई मत्त हात्तीले हल्लाए झैं बेसरी हल्लाएर धेरै फलहरू झार्नुभयो।

**फलानां पततां शब्दं निशम्यासुररासभः।**
**अभ्यधावत् क्षितितलं सनगं परिकम्पयन्॥ २९॥**

**पदार्थ–**
**असुररासभः** = गधाको रूपमा रहेको धेनुकासुर
**पततां** = झरिरहेका
**फलानां** = फलहरूको
**शब्दं** = आवाज
**निशम्य** = सुनेर
**सनगं** = वृक्षहरूले सहित
**क्षितितलं** = भूतललाई
**परिकम्पयन्** = हल्लाउँदै
**अभ्यधावत्** = (बलरामतर्फ) दौडियो

**वाक्यार्थ–** गधाको रूपमा रहेको धेनुकासुर ताडको रुखबाट फलहरू झरेको आवाज सुनेर वनका सम्पूर्ण वृक्षहरूसहित भूतललाई नै हल्लाउँदै बलरामतर्फ दौडियो।

**समेत्य तरसा प्रत्यग् द्वाभ्यां पद्भ्यां बलं बली।**
**निहत्योरसि काशब्दं मुञ्चन् पर्यसरत् खलः॥ ३०॥**

पदार्थ–
**तरसा** = वेगपूर्वक
**समेत्य** = (बलरामको छेउमा) आएर
**प्रत्यक्** = पछाडिका
**द्वाभ्यां** = दुई ओटै
**पद्भ्यां** = खुट्टाले
**बलं** = बलरामलाई
**उरसि** = छातीमा
**निहत्य** = प्रहार गरेर
**बली** = बलशाली
**खलः** = दुष्ट धेनुकासुर
**काशब्दं** = गधाको कर्कश शब्द
**मुञ्चन्** = छोड्दै (कराउँदै)
**पर्यसरत्** = पछाडि हट्यो

**वाक्यार्थ–** वेगपूर्वक बलरामको छेउमा आएर धेनुकासुरले पछाडिका दुबै खुट्टाले बलरामको छातीमा प्रहार गऱ्यो अनि गधाको कर्कश शब्द निकाल्दै (फेरि प्रहार गर्न) पछाडि हट्यो।

**पुनरासाद्य संरब्ध उपक्रोष्टा पराक् स्थितः।**
**चरणावपरौ राजन् बलाय प्राक्षिपद् रुषा॥ ३१॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**संरब्धः** = अत्यन्त क्रुद्ध
**उपक्रोष्टा** = गधाको आवाज निकालेर कराइरहेको धेनुक
**पुनः** = फेरि
**आसाद्य** = (बलरामको) नजिकमा आएर
**पराक् स्थितः** = पिठ फर्काएर उभियो र
**रुषा** = रिसले
**बलाय** = बलरामलाई
**अपरौ** = पछाडिका
**चरणौ** = दुबै खुट्टाले
**प्राक्षिपत्** = हान्यो

**वाक्यार्थ–** हे राजा परीक्षित्! अत्यन्त रिसाएर गधाको आवाज निकाली कराइरहेको त्यस धेनुकासुरले फेरि पनि बलरामको नजिकमा आएर उहाँतर्फ पिठ फर्कायो र पछाडिको दुबै खुट्टाले बलरामलाई हिर्कायो।

**स तं गृहीत्वा प्रपदोर्भ्रामयित्वैकपाणिना।**
**चिक्षेप तृणराजाग्रे भ्रामणत्यक्तजीवितम्॥ ३२॥**

पदार्थ–
**सः** = उहाँ (बलराम)ले
**तं** = त्यो असुरलाई
**एकपाणिना** = एउटै हातले
**प्रपदोः** = दुबै खुट्टाको खुरपट्टिको भागलाई
**गृहीत्वा** = समातेर
**भ्रामयित्वा** = घुमाएर
**भ्रामणत्यक्तजीवितम्** = घुमाएकै अवस्थामा प्राण त्यागिसकेको त्यो दैत्यलाई
**तृणराजाग्रे** = ठुलो ताडको रुखमाथि
**चिक्षेप** = फ्याँकिदिनुभयो

**वाक्यार्थ–** त्यो गधाको दुबै खुट्टाको खुरपट्टिको भागलाई बलरामले एउटै हातले च्याप्प समातेर आकाशमा घुमाउनुभयो र घुमाइरहेकै अवस्थामा मरिसकेको त्यो धेनुकासुरलाई एउटा ठुलो ताडको रुखमाथि फ्याँकिदिनुभयो।

**तेनाहतो महातालो वेपमानो बृहच्छिराः ।**

**पार्श्वस्थं कम्पयन् भग्नः स चान्यं सोऽपि चापरम् ॥ ३३ ॥**

**पदार्थ–**
**तेन** = (बलरामले फ्याँकेको) त्यो गधाको शरीरले
**आहतः** = लागेर
**वेपमानः** = हल्लिएको
**बृहच्छिराः** = अत्यन्त अग्लो
**महातालः** = ठुलो ताडको रुख
**पार्श्वस्थं** = छेउमा रहेको ताडको रुखलाई
**कम्पयन्** = हल्लाउँदै
**भग्नः** = (भुइँमा) लड्यो
**सः च** = त्यो ताडको रुखले
**अन्यं** = अर्को ताडको रुखलाई
**सः च अपि** = त्यसले पनि
**अपरम्** = अर्को ताडको रुखलाई (हल्लाउँदै भुइँमा लडायो)

**वाक्यार्थ–** बलरामद्वारा फ्याँकिएको गधाको शरीरले लागेर अत्यन्त अग्लो विशाल ताडको रुख छेउमा रहेको ताडको रुखलाई हल्लाउँदै लड्यो। त्यो रुख लड्दा त्यसले अर्को रुखलाई पनि लडायो र त्यो अर्को रुखले फेरि अर्को रुखलाई पनि लडायो।

**बलस्य लीलयोत्सृष्टखरदेहहताहताः ।**

**तालाश्चकम्पिरे सर्वे महावातेरिता इव ॥ ३४ ॥**

**पदार्थ–**
**बलस्य** = बलरामको
**लीलया** = क्रीडातुल्य सामान्य प्रयासद्वारा
**उत्सृष्टखरदेहहताहताः** = फ्याँकिएको मृत गधाको शरीरको प्रहारले आहत भएका
**सर्वे** = सबै
**तालाः** = ताडका रुखहरू
**महावातेरिताः इव** = आँधीबेरीले हल्लाएको झैं गरी
**चकम्पिरे** = हल्लिए

**वाक्यार्थ–** बलरामले खेल खेले झैं सामान्य तरिकाले फ्याँकिदिएको मृत गधाको शरीरको प्रहारले वनका सम्पूर्ण ताडका रुखहरू आँधीबेरीले हल्लाए झैं गरी हल्लिए।

**नैतच्चित्रं भगवति ह्यनन्ते जगदीश्वरे ।**

**ओतप्रोतमिदं यस्मिंस्तन्तुष्वङ्ग यथा पटः ॥ ३५ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**यस्मिन्** = जुन
**अनन्ते** = अनन्त (शेषावतार) बलराममा
**इदं** = यो दृश्यमान जगत्
**तन्तुषु** = धागोहरूमा
**पटः यथा** = वस्त्र झैं
**ओतप्रोतम्** = ओतप्रोत भएको छ (त्यस्ता)
**जगदीश्वरे** = जगत्का मालिक
**भगवति** = भगवान्मा
**हि** = निश्चय नै
**एतत्** = यो धेनुकासुर वध कार्य
**चित्रं** = आश्चर्यको विषय
**न** = हुन सक्दैन

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! जुन शेषावतार बलराममा धागोमा लुगा झैं यो दृश्यमान जगत्

ओतप्रोत भएको छ त्यस्ता जगदीश्वर भगवान्का लागि यो धेनुकासुर वध गर्नु आश्चर्यको विषय होइन।

**विवरण–** यहाँ बलरामले धेनुकासुर मार्नुभएको प्रसङ्ग बताइएको छ। वल्लभाचार्य भन्नुहुन्छ– **देहाध्यासो हि धेनुकः** अर्थात् धेनुकासुर भनेको देहाध्यासको प्रतीक हो। शरीरमा आत्मबुद्धि या अहङ्कार गर्नु नै देहाध्यास हो। जब शरीरमा आत्मबुद्धि या अहङ्कार हुन्छ, तब शरीरसम्बन्धी पति-पत्नी, पुत्र-पुत्री आदिमा **मम** अर्थात् मेरा हुन् भन्ने बुद्धि हुन्छ। अहन्ता र ममताको यही बन्धनको कारणले प्राणी त्यही सीमित घेराभित्र मात्र जीवन बिताउँछ। आफूसँग भएका राम्रा वस्तुहरू अरूले उपयोग गर्न पर्याप्त हुँदाहुँदै पनि ऊ एक्लै त्यसको उपभोग गर्न चाहन्छ, बरु भोग गर्न नभ्याएर ती वस्तुहरू खेर नै किन नजाऊन्। आफ्ना बन्धुबान्धवद्वारा घेरिएर ऊ आफ्नो जग्गा-जमिन र सम्पत्तिको घेराभित्र आफूलाई ठुलो-ठालु र स्वतन्त्र सम्झिन थाल्दछ। त्यहाँभित्र अरू कोही व्यक्ति पसेको र उसले आफ्नो भनेर सँगालेका वस्तुलाई उपभोग गर्न खोजेको उसलाई सह्य हुँदैन। यो सबै देहाध्यासको परिणाम हो।

यहाँ पनि धेनुकासुर ताडको वनभित्र आफ्ना कुटुम्बहरूद्वारा घेरिएर बसेको, फलेका मिठा ताडका फलहरू झरेर कुहिसक्दा पनि उसले कसैलाई उपभोग गर्न नदिएको, त्यो वनभित्र कसैलाई पस्नै नदिएको आदि घटनाहरू देखाइएका छन्। यो संसाररूपी वनमा धेरै सिधा ताडका रुखहरूजस्ता भक्ति, ज्ञान, वैराग्य आदि उत्तम साधनहरू छन्। त्यसमा परमानन्दरूपी फल पाकिरहेका छन् र कसैले उपयोग गर्ला कि भनी आफैँ झरिरहेका छन्। तर यही देहाध्यासरूपी धेनुकासुरले अनादि कालदेखि आजसम्म प्राणीहरूलाई यो परमानन्द फल्ने बगैँचामा पस्नसम्म पनि दिएको छैन। प्राणीहरूको मनभित्र परम आनन्दलाई पाउने ठुलो इच्छा छ (माथि २६औँ श्लोक)। ती अभुक्तपूर्व फलहरू (माथि २५औँ श्लोक) अर्थात् परम आनन्दको गन्ध या झल्को पाउनाले उनीहरूको तृष्णा झन् बढेको छ। देहाध्यासरूपी धेनुकासुरलाई नमारी त्यो संसाररूपी वनका परमानन्दरूपी फलको उपयोग गर्न सकिन्न। त्यसकारण भगवान्का भक्तहरू देहाध्यासलाई मारिदिन भगवान्सँग प्रार्थना गर्दछन्। यो यस प्रसङ्गको आध्यात्मिक अर्थ हो।

यहाँ धेनुकासुरलाई बलरामजीले मार्नुभएको देखाइएको छ, तर टीकाकारहरूको मतमा बलरामले देखाउनुभएको पराक्रम भगवान्कै पराक्रम हो। भगवान्कै शक्तिको आवेश बलराममा भएकाले बलरामले दुष्टहरूलाई मार्नुभएको देखाइएको हो, यो उहाँको स्वतन्त्र पराक्रम होइन। वल्लभाचार्य भन्नुहुन्छ– **नेदं कर्म बलभद्रस्य किन्तु आविष्टस्य भगवतः** अर्थात् यो कर्म बलरामको नभई उहाँमा आविष्ट हुनुभएका भगवान्को नै हो। त्यसै कारणले यो पैतीसौँ श्लोकमा बलरामको नभई भगवान्कै प्रशंसा गरिएको छ। बलरामले धेनुकासुरलाई फनफनी घुमाई फ्याँक्नुहुँदा ताडका धेरै रुखहरू ढले। यो कुरा सुनेर छक्क परेका परीक्षित्लाई शुकदेवजी भन्नुहुन्छ– हे राजा ! जुन परमात्मामा सारा विश्व अनुस्यूत छ, त्यस्ता परमात्मामा यो एउटा राक्षसको वध गर्ने पराक्रम हुनु कुनै आश्चर्यको कुरा होइन। बलरामको पराक्रम र प्रशंसा चाहिँ भगवान्को नै हो। यसबाट के थाहा पाइन्छ भने जति पनि बलरामका चरित्र छन्, ती सबै सर्वसमर्थ भगवान्का नै चरित्र हुन्, पृथक् होइनन्। यदि पृथक् मान्ने हो भने कुनै पराक्रमद्वारा व्रजवासीको मन भगवान्मा अनि कुनै

पराक्रमद्वारा बलराममा निरुद्ध हुने र दुई ईश्वर हुने आपत्ति आउँछ। त्यसैले निरोध लीलामा कहीँ बलरामले दुष्टदमन गरेको देखाइए तापनि मुख्यतया भगवान्‌ले नै त्यो दुष्टदमन गरी सबैको मन आफूमा निरुद्ध गर्नुभएको हो भनी टीकाकारहरूले यस लीलाको रहस्योद्‌घाटन गरेका छन्।

**ततः कृष्णं च रामं च ज्ञातयो धेनुकस्य ये।**
**क्रोष्टारोऽभ्यद्रवन् सर्वे संरब्धा हतबान्धवाः॥ ३६॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (धेनुकासुरको वध भएपछि)
**हतबान्धवाः** = आफ्नो बन्धु धेनुक मारिएपछि अनाथ भएका
**धेनुकस्य** = धेनुकासुरका
**ये** = जो-जो
**क्रोष्टारः** = गधाको रूपमा रहेका
**ज्ञातयः** = दाजुभाइहरू थिए
**सर्वे** = ती सबै
**संरब्धाः** = अत्यन्त क्रुद्ध भई
**कृष्णं च** = श्रीकृष्ण र
**रामं च** = बलराम नजिक
**अभ्यद्रवन्** = दौडिएर आए

**वाक्यार्थ–** धेनुकासुरको वध भएपछि गधाको रूपमा रहेका र अनाथ भएका उसका सबै बन्धुजनहरू अत्यन्त क्रुद्ध भई श्रीकृष्ण र बलरामतर्फ दौडिए।

**तांस्तानापततः कृष्णो रामश्च नृप लीलया।**
**गृहीतपश्चाच्चरणान् प्राहिणोत् तृणराजसु॥ ३७॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**आपततः** = वेगपूर्वक आएका
**गृहीतपश्चाच्चरणान्** = पछाडिका दुबै खुट्टा भगवान्‌हरूद्वारा समातिएका
**तान् तान्** = छेउमा आएका ती-ती गधारूपका असुरहरूलाई
**कृष्णः** = श्रीकृष्ण र
**रामः च** = बलरामले पनि
**लीलया** = खेल-खेलमैं
**तृणराजसु** = ताडका वृक्षहरूमाथि
**प्राहिणोत्** = फ्याँकिदिनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! वेगपूर्वक दौडिँदै जुन-जुन गधारूपधारी असुरहरू छेउछाउमा आइपुगे, ती-ती असुरहरूको पछाडिको खुट्टा च्याप्प समातेर श्रीकृष्ण र बलरामले सजिलैसँग ताडका वृक्षहरूमाथि फ्याँकिदिनुभयो।

**फलप्रकरसङ्कीर्णं दैत्यदेहैर्गतासुभिः।**
**रराज भूः सतालाग्रैर्घनैरिव नभस्तलम्॥ ३८॥**

**पदार्थ–**
**फलप्रकरसङ्कीर्णं** = ताडका फलहरूको समूहले ढाकिएको
**भूः** = पृथिवी
**सतालाग्रैः** = भाँचिएका ताडका हाँगाहरूद्वारा
**गतासुभिः** = प्राण निस्किएका
**दैत्यदेहैः** = दैत्यहरूको मृत शरीरद्वारा
**घनैः** = मेघहरूद्वारा ढाकिएको
**नभस्तलम् इव** = आकाश झैं
**रराज** = शोभित भयो

**वाक्यार्थ–** ताडको फलैफलले ढाकिएको पृथिवी भाँचिएका ताडको रुखहरूका हाँगा र मृत दैत्यहरूको शरीरले समेत ढाकिएको थियो। त्यसवेला पृथिवी मेघले ढाकेको आकाश जस्तै शोभित भयो।

**तयोस्तत् सुमहत् कर्म निशम्य विबुधादयः।**

**मुमुचुः पुष्पवर्षाणि चक्रुर्वाद्यानि तुष्टुवुः॥ ३९॥**

**पदार्थ–**
**तयोः** = उहाँहरू दुई जना (श्रीकृष्ण र बलराम)को
**तत्** = त्यो (धेनुकासुर वध)
**सुमहत्** = महान्
**कर्म** = कार्य
**निशम्य** = देखेर
**विबुधादयः** = देवता आदिले
**पुष्पवर्षाणि** = फूलहरूको वृष्टि
**मुमुचुः** = छोडिदिए
**वाद्यानि** = (गन्धर्वहरूले) वाद्यवादन
**चक्रुः** = गरे
**तुष्टुवुः** = (मुनिहरूले) स्तुति गरे

**वाक्यार्थ–** धेनुकासुरवध जस्तो महान् कार्य श्रीकृष्ण र बलरामले गरेको देखेर देवताहरूले पुष्पवृष्टि गरे, गन्धर्वहरूले बाजा बजाउन थाले भने ऋषिहरूले उहाँहरूको स्तुति गरे।

**अथ तालफलान्यादन् मनुष्या गतसाध्वसाः।**

**तृणं च पशवश्चेरुर्हतधेनुककानने॥ ४०॥**

**पदार्थ–**
**अथ** = यसपछि (धेनुकासुर मरेपछि)
**हतधेनुककानने** = धेनुकासुर मरेको त्यो वनमा
**गतसाध्वसाः** = भयरहित भएका
**मनुष्याः** = मनुष्यहरूले
**तालफलानि** = ताडका फलहरू
**आदन्** = खाए
**पशवः च** = पशुहरू पनि
**तृणं** = घाँस
**चेरुः** = चर्न थाले

**वाक्यार्थ–** धेनुकासुर मरिसकेपछि त्यस वनमा गएर मान्छेहरू निर्भय भई ताडको फल खान थाले भने पशुहरू पनि त्यहाँ गएर घाँस चर्न थाले।

**कृष्णः कमलपत्राक्षः पुण्यश्रवणकीर्तनः।**

**स्तूयमानोऽनुगैर्गोपैः साग्रजो व्रजमाव्रजत्॥ ४१॥**

**पदार्थ–**
**अनुगैः** = पछि-पछि हिँडेका
**गोपैः** = गोप बालकहरूद्वारा
**स्तूयमानः** = स्तुति गरिनुभएका
**पुण्यश्रवणकीर्तनः** = जसको लीलाचरित्रको श्रवण र कीर्तन गर्नाले पुण्य प्राप्त हुन्छ त्यस्ता
**कमलपत्राक्षः** = कमलको पात जस्ता आँखा भएका
**कृष्णः** = भगवान् श्रीकृष्ण
**साग्रजः** = दाजु बलरामले सहित
**व्रजम्** = व्रजमा
**आव्रजत्** = फर्किनुभयो

**वाक्यार्थ–** पछि-पछि हिँडेका गोप बालकहरूद्वारा स्तुति गरिनुभएका, जसको लीलाचरित्रको

श्रवण र कीर्तन गर्नाले पुण्य प्राप्त हुन्छ त्यस्ता अनि कमलको पात जस्ता आँखा भएका भगवान् श्रीकृष्ण दाजु बलरामले सहित भएर व्रजमा फर्किनुभयो।

**तं गोरजश्छुरितकुन्तलबद्धबर्ह-**
**वन्यप्रसूनरुचिरेक्षणचारुहासम्।**
**वेणुं क्वणन्तमनुगैरुपगीतकीर्तिं**
**गोप्यो दिदृक्षितदृशोऽभ्यगमन् समेताः॥ ४२॥**

**पदार्थ–**
**दिदृक्षितदृशः** = श्रीकृष्णको दर्शन गर्न उत्सुक आँखा भएका
**समेताः** = जम्मा भएका
**गोप्यः** = गोपिनीहरू
**गोरजश्छुरितकुन्तलबद्धबर्हवन्य-प्रसूनरुचिरेक्षणचारुहासम्** = गाईको खुरबाट उडेको धुलाका कणहरूले ढाकिएको केशमा मयूरको प्वाँख र जङ्गलका सुन्दर फूलहरू लगाउनुभएका अनि सुन्दर हेराइ र हाँसो भएका
**वेणुं** = बाँसुरी
**क्वणन्तं** = बजाइरहनुभएका
**अनुगैः** = पछि लागेका गोपबालकहरूद्वारा
**उपगीतकीर्तिं** = कीर्तिगान गरिनुभएका
**तं** = उहाँ (भगवान् श्रीकृष्ण)को
**अभ्यगमन्** = सम्मुख गए

**वाक्यार्थ–** व्रजमा फर्किंदा गाईको खुरबाट उडेको धुलाका कणहरूले ढाकिएको केशमा मयूरको प्वाँख र जङ्गलका सुन्दर फूलहरू लगाउनुभएका, सुन्दर हेराइ र हाँसो भएका भगवान् श्रीकृष्णले बाँसुरी बजाइरहनुभएको थियो भने उहाँको पछि पछि हिँडेका गोपबालकहरू चाहिँ उहाँकै कीर्तिगान गरिरहेका थिए। यसरी भगवान् श्रीकृष्ण व्रजमा फर्किरहनुभएको थाहा पाएर उहाँको दर्शन गर्न उत्सुक आँखा भएका गोपिनीहरू सबै जना जम्मा भएर श्रीकृष्णको सम्मुख गए।

**पीत्वा मुकुन्दमुखसारघमक्षिभृङ्गै-**
**स्तापं जहुर्विरहजं व्रजयोषितोऽह्नि।**
**तत्सत्कृतिं समधिगम्य विवेश गोष्ठं**
**सव्रीडहासविनयं यदपाङ्गमोक्षम्॥ ४३॥**

**पदार्थ–**
**व्रजयोषितः** = व्रजका स्त्रीहरूले
**मुकुन्दमुखसारघम्** = श्रीकृष्णको मुखकमलको मकरन्द (पुष्परस)लाई
**अक्षिभृङ्गैः** = आफ्ना आँखारूपी भँवराहरूद्वारा
**पीत्वा** = पान गरेर
**अह्नि** = दिनमा भएको
**विरहजं** = (भगवान्सँगको) विरहबाट उत्पन्न
**तापं** = तापलाई
**जहुः** = त्याग गरे (भगवान्ले पनि)
**सव्रीडहासविनयं** = लाज,

मुस्कान र विनयले युक्त
**यदपाङ्गमोक्षम्** = जुन गोपिनीहरूको कटाक्षपूर्ण दृष्टि अर्पण गरेर
**तत्सत्कृतिं** = गोपिनीहरूले गरेको आफूप्रतिको सत्कारलाई
**समधिगम्य** = स्वीकार गरेर
**गोष्ठं** = व्रजमा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** गोपिनीहरूले श्रीकृष्णको मुखकमलको मकरन्दरसलाई आफ्ना आँखारूपी भँवराहरूद्वारा पान गरेर (आफ्ना आँखाले श्रीकृष्णको मुखसौन्दर्य हेरेर) भगवान्सँगको दिनभरको विरहव्यथालाई शान्त गरे। भगवान्ले पनि लजालु मुस्कान र विनयले युक्त कटाक्षपूर्ण दृष्टि दिएर गोपिनीहरूले आफूलाई गरेको सत्कारलाई स्वीकार गरेर व्रजमा प्रवेश गर्नुभयो।

**तयोर्यशोदारोहिण्यौ पुत्रयोः पुत्रवत्सले।**
**यथाकामं यथाकालं व्यधत्तां परमाशिषः॥ ४४॥**

**पदार्थ–**
**तयोः** = (वनबाट आएका) ती दुई
**पुत्रयोः** = छोराहरूको
**पुत्रवत्सले** = पुत्रप्रति ममतामयी
**यशोदारोहिण्यौ** = यशोदा र रोहिणीले
**यथाकामं** = छोराहरूको रुचि अनुसार
**यथाकालं** = समयोचित
**परमाशिषः** = उत्कृष्ट खानपानको व्यवस्था
**व्यधत्तां** = गरे

**वाक्यार्थ–** श्रीकृष्ण र बलरामलाई वनबाट घरमा आइपुगेको देखेर उहाँहरूकी ममतामयी माता यशोदा र रोहिणीले छोराहरूकै रुचि अनुसारका समयोचित उत्कृष्ट खानपानको व्यवस्था गरे।

**गताध्वानश्रमौ तत्र मज्जनोन्मर्दनादिभिः।**
**नीवीं वसित्वा रुचिरां दिव्यस्रग्गन्धमण्डितौ॥ ४५॥**
**जनन्युपहृतं प्राश्य स्वाद्वन्नमुपलालितौ।**
**संविश्य वरशय्यायां सुखं सुषुपतुर्व्रजे॥ ४६॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ (आफ्नो घरमा)
**मज्जनोन्मर्दनादिभिः** = स्नान, मालिस आदिद्वारा
**गताध्वानश्रमौ** = बाटोको थकाइ मेटिएका
**रुचिरां** = सुन्दर
**नीवीं** = कटिवस्त्र
**वसित्वा** = लगाएर
**दिव्यस्रग्गन्धमण्डितौ** = दिव्य पुष्पमाला र चन्दनद्वारा अलङ्कृत भएका
**जनन्युपहृतं** = आमाहरूद्वारा पस्किएर दिइएका
**स्वाद्वन्नम्** = मिठा-मिठा अन्नहरू
**प्राश्य** = खाएर
**उपलालितौ** = लालनपालन गरिएका
(श्रीकृष्ण र बलराम)
**वरशय्यायां** = उत्तम शय्यामा
**संविश्य** = सँगै पल्टिएर
**सुखं** = सुखपूर्वक
**व्रजे** = व्रजमा
**सुषुपतुः** = सुत्नुभयो

**वाक्यार्थ–** त्यहाँ आफ्नो घर पुगेपछि स्नान, मालिस आदि गर्नाले बाटोको थकाइ हटेका अनि सुन्दर कटिवस्त्र, दिव्य पुष्पमाला र चन्दन लगाएर अलङ्कृत भएका श्रीकृष्ण र बलरामलाई आमाहरूले लालनपालन गर्नुभयो, यसरी लालनपालन गरिनुभएका उहाँहरू आमाहरूले पस्किएर दिनुभएका मिठा-मिठा अन्नहरू खाएर उत्तम शय्यामा गई सँगै पल्टिएर सुखपूर्वक व्रजमा सुत्नुभयो।

**एवं स भगवान् कृष्णो वृन्दावनचरः क्वचित्।**
**ययौ राममृते राजन् कालिन्दीं सखिभिर्वृतः॥ ४७॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एवं** = यसरी (गाई चराउने, खेल्ने आदि लीला गरेर बस्नुभएका)
**वृन्दावनचरः** = वृन्दावनमा विहार गर्नुहुने
**सः** = उहाँ
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**क्वचित्** = कुनै दिन
**रामम् ऋते** = बलराम बाहेक
**सखिभिः** = अन्य साथीहरूद्वारा
**वृतः** = घेरिएर
**कालिन्दीं** = यमुनानदीको तटमा
**ययौ** = जानुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसरी वृन्दावनमा गाई चराउने, खेल्ने आदि विभिन्न लीलाहरू गरेर विहार गर्नुभएका भगवान् श्रीकृष्ण एक दिन आफ्ना गोप साथीहरूको साथमा यमुनानदीको किनारमा जानुभयो, त्यस दिन बलराम चाहिँ जानुभएको थिएन।

**अथ गावश्च गोपाश्च निदाघातपपीडिताः।**
**दुष्टं जलं पपुस्तस्यास्तृषार्ता विषदूषितम्॥ ४८॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**निदाघातपपीडिताः** = ग्रीष्मकालीन घामले पीडित भई
**तृषार्ताः** = अत्यन्त तिर्खाएका
**गावः च** = गाईहरूले तथा
**गोपाः च** = गोपहरूले पनि
**तस्याः** = ती यमुनाको
**विषदूषितम्** = (कालिय नागको) विषले दूषित भएको
**दुष्टं** = खराब (विषालु)
**जलं** = पानी
**पपुः** = पिए

**वाक्यार्थ–** त्यसपछि ग्रीष्मकालीन घामले सन्तप्त भएका गाई र गोप बालकहरू असाध्यै तिर्खाए अनि उनीहरूले यमुना नदीको (कालिय नागको) विषले दूषित भएको विषालु पानी पिए।

**विषाम्भस्तदुपस्पृश्य दैवोपहतचेतसः।**
**निपेतुर्व्यसवः सर्वे सलिलान्ते कुरूद्वह॥ ४९॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुवंशी परीक्षित्
**दैवोपहतचेतसः** = दैववश चित्त मोहित भएका गाई र गोपहरू
**तत्** = त्यो
**विषाम्भः** = विषालु पानी

**उपस्पृश्य** = पिएर
**सर्वे** = सबै जना
**व्यसवः** = निष्प्राण भई
**सलिलान्ते** = यमुना नदीको किनारमा
**निपेतुः** = लडे

**वाक्यार्थ–** हे परीक्षित् ! दैववश चित्त मोहित भएका गाई र गोपहरूले त्यो विषालु पानी पिए अनि सबै नै प्राणरहित भई यमुनाको किनारमा लडे।

**वीक्ष्य तान् वै तथाभूतान् कृष्णो योगेश्वरेश्वरः।**
**ईक्षयामृतवर्षिण्या स्वनाथान् समजीवयत्॥ ५०॥**

पदार्थ–
**योगेश्वरेश्वरः** = योगेश्वरहरूका पनि ईश्वर
**कृष्णः** = श्रीकृष्णले
**स्वनाथान्** = आफू नै एक मात्र स्वामी (रक्षक) भएका
**वै** = निश्चय नै
**तथाभूतान्** = त्यसरी निष्प्राण भई लडेका
**तान्** = ती गोप साथी र गाईहरूलाई
**वीक्ष्य** = देखेर
**अमृतवर्षिण्या** = अमृत वर्षा गराउने
**ईक्षया** = आफ्नो दृष्टिद्वारा
**समजीवयत्** = जीवित गराउनुभयो

**वाक्यार्थ–** गाई र गोप बालकहरूका एक मात्र रक्षक हुनुभएका योगेश्वरहरूका पनि ईश्वर भगवान् श्रीकृष्णले आफ्ना गोप साथीहरू र गाईहरू विषालु पानी पिई निष्प्राण भई यमुनातटमा लडेको देखेर तिनीहरूलाई आफ्नो अमृत बर्साउने दृष्टिद्वारा जीवित गराउनुभयो।

**ते सम्प्रतीतस्मृतयः समुत्थाय जलान्तिकात्।**
**आसन् सुविस्मिताः सर्वे वीक्षमाणाः परस्परम्॥ ५१॥**

पदार्थ–
**सम्प्रतीतस्मृतयः** = चेतना प्राप्त गरेका
**ते** = ती गाई र गोप बालकहरू
**जलान्तिकात्** = यमुनाको किनारबाट
**समुत्थाय** = उठेर
**सर्वे** = सबै जना
**परस्परम्** = परस्पर
**वीक्षमाणाः** = हेर्दै
**सुविस्मिताः** = आश्चर्यचकित भएका
**आसन्** = थिए

**वाक्यार्थ–** चेतना प्राप्त गरेका ती गाई र गोप बालकहरू यमुनानदीको तटबाट उठे र उनीहरूले आश्चर्यचकित भएर एकले अर्कालाई हेर्न थाले।

**अन्वमंसत तद् राजन् गोविन्दानुग्रहेक्षितम्।**
**पीत्वा विषं परेतस्य पुनरुत्थानमात्मनः॥ ५२॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**विषं** = विषालु पानी
**पीत्वा** = पिएर
**परेतस्य** = मरेको
**आत्मनः** = आफ्नो

**पुनः** = फेरि
**तत्** = त्यो (जीवनप्राप्ति)
**उत्थानम्** = उत्थान

**गोविन्दानुग्रहेक्षितम्** = गोविन्द (श्रीकृष्ण) भगवान्को कृपापूर्ण दृष्टिबाट भएको हो भनेर

**अन्वमंसत** = निश्चय गरे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! विषालु पानी पिएर मरेको आफू फेरि बाँच्नु गोविन्द भगवान्को कृपापूर्ण दृष्टिबाट नै भएको हो भन्ने कुरा गाई र गोप बालकहरूले निश्चय गरे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**धेनुकवधो नाम पञ्चदशोऽध्यायः ॥ १५ ॥**

# अथ षोडशोऽध्यायः

## कालिय नागको उद्धार

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**विलोक्य दूषितां कृष्णां कृष्णः कृष्णाहिना विभुः।**

**तस्या विशुद्धिमन्विच्छन् सर्पं तमुदवासयत्॥ १॥**

**पदार्थ–**
**कृष्णाहिना** = कालिय नागद्वारा
**दूषितां** = प्रदूषित (विषयुक्त) बनाइएको
**कृष्णां** = यमुना नदीलाई
**विलोक्य** = देखेर
**तस्याः** = ती यमुनाको
**विशुद्धिम्** = शुद्धता
**अन्विच्छन्** = चाहने
**विभुः** = सर्वव्यापक
**कृष्णः** = भगवान् श्रीकृष्णले
**तं** = त्यो
**सर्पं** = कालिय नागलाई
**उदवासयत्** = हटाउनुभयो

**वाक्यार्थ–** कालिय नागले यमुना नदीको पानीलाई आफ्नो विषद्वारा प्रदूषित बनाएको देखेर यमुनाको जललाई शुद्ध बनाउन भगवान् श्रीकृष्णले त्यस नागलाई यमुनाबाट हटाइदिनुभयो।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**कथमन्तर्जलेऽगाधे न्यगृह्णाद् भगवानहिम्।**

**स वै बहुयुगावासं यथासीद् विप्र कथ्यताम्॥ २॥**

**पदार्थ–**
**विप्र** = हे ब्राह्मण शुकदेवजी
**भगवान्** = भगवान् श्रीकृष्णले
**कथं** = कसरी
**अगाधे** = गहिरो (यमुनाको)
**अन्तर्जले** = पानीभित्र
**अहिम्** = कालिय नागलाई
**न्यगृह्णात्** = दमन गर्नुभयो (तथा)
**सः वै** = त्यो कालिय नाग
**यथा** = जसरी (त्यहाँ)
**बहुयुगावासं** = धेरै युगसम्म आवास बनाएर रहेको
**आसीत्** = थियो (त्यो सबै)
**कथ्यताम्** = भन्नुहोस्

**वाक्यार्थ–** हे ब्राह्मण शुकदेवजी ! भगवान् श्रीकृष्णले गहिरो यमुना नदीको पानीभित्र रहेको कालियलाई कसरी दमन गर्नुभयो ? त्यो नाग कसरी युगौं युगदेखि यमुनाको जलमा बसेको थियो ? त्यो सबै बताउनुहोस्।

**ब्रह्मन् भगवतस्तस्य भूम्नः स्वच्छन्दवर्तिनः।**

**गोपालोदारचरितं कस्तृप्येतामृतं जुषन्॥ ३॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेवजी
**स्वच्छन्दवर्तिनः** = स्वतन्त्ररूपमा रहने
**भूम्नः** = सर्वव्यापक
**तस्य भगवतः** = उहाँ भगवान्

श्रीकृष्णका **गोपालोदारचरितं** = गोठालाका रूपमा गरिएका प्रसिद्ध लीलारूप **अमृतं** = अमृत **जुषन्** = पान गरेर **कः तृप्येत** = को अघाउला र

**वाक्यार्थ–** हे ब्रह्मज्ञानी शुकदेवजी ! स्वतन्त्र र सर्वव्यापक भगवान् श्रीकृष्णद्वारा गोठालाका रूपमा गरिएका प्रसिद्ध लीलाहरू अमृतसमान छन्। तिनको पान गरेर को अघाउला र ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कालिन्द्यां कालियस्यासीद्ध्रदः कश्चिद् विषाग्निना।**

**श्रप्यमाणपया यस्मिन् पतन्त्युपरिगाः खगाः ॥ ४ ॥**

**पदार्थ–**
**कालिन्द्यां** = यमुनामा
**कालियस्य** = कालिय नागको
**विषाग्निना** = विषरूप अग्निको कारणले
**श्रप्यमाणपयाः** = पानी उम्लिरहेको
**कश्चित्** = कुनै
**ह्रदः** = ठुलो दह
**आसीत्** = थियो
**यस्मिन्** = जुन दहमा
**उपरिगाः** = त्यस माथिबाट उड्ने
**खगाः** = चराहरू
**पतन्ति** = खस्दथे

**वाक्यार्थ–** यमुनामा कालिय नागको विषरूप अग्निको कारणले पानी उम्लिरहेको एउटा ठुलो दह थियो। त्यो दहको माथिबाट उड्ने चराहरू पनि (विषको प्रभावले) त्यहाँ खस्दथे।

**विप्रुष्मता विषोदोर्मिमारुतेनाभिमर्शिताः।**

**म्रियन्ते तीरगा यस्य प्राणिनः स्थिरजङ्गमाः ॥ ५ ॥**

**पदार्थ–**
**यस्य** = जुन दहको
**विप्रुष्मता** = जल कणले युक्त
**विषोदोर्मिमारुतेन** = विषालु जलका छालको हावाद्वारा
**अभिमर्शिताः** = छोइएका
**तीरगाः** = (त्यस दहको) किनारमा रहेका
**स्थिरजङ्गमाः** = अचर (बोटबिरुवा आदि) र चर (पशु-पक्षी आदि)
**प्राणिनः** = प्राणीहरू
**म्रियन्ते** = मर्दथे

**वाक्यार्थ–** त्यस दहको विषालु जलका छालको हावाद्वारा छोइएका तीरमा रहेका बोटबिरुवा र पशु-पक्षीहरू मर्दथे।

**तं चण्डवेगविषवीर्यमवेक्ष्य तेन**

**दुष्टां नदीं च खलसंयमनावतारः।**

**कृष्णः कदम्बमधिरुह्य ततोऽतितुङ्ग-**

**मास्फोट्य गाढरशनो न्यपतद् विषोदे ॥ ६ ॥**

**पदार्थ–**
**चण्डवेगविषवीर्यम्** = अत्यन्त कडा विष नै शक्ति भएको
**तं** = त्यो कालिय नागलाई र
**तेन** = त्यस कालिय नागद्वारा
**दुष्टां** = प्रदूषित बनाइएकी
**नदीं च** = नदी यमुनालाई पनि
**अवेक्ष्य** = देखेर
**ततः** = त्यसपछि
**गाढरशनः** = कम्मरमा पटुका कस्नुभएका
**खलसंयमनावतारः** = दुष्टको दमनका लागि अवतार लिनुभएका
**कृष्णः** = भगवान् श्रीकृष्ण
**अतितुङ्गम्** = अति अग्लो
**कदम्बम्** = कदमको रुखमा
**अधिरुह्य** = चढेर
**आस्फोट्य** = पाखुरा बजार्दै
**विषोदे** = त्यो विषालु जलमा
**न्यपतत्** = हामफाल्नुभयो

**वाक्यार्थ–** कालिय नाग र त्यसको विषले प्रदूषित भएकी यमुना नदीलाई देखेर दुष्टको दमनका लागि अवतार लिनुभएका भगवान् श्रीकृष्ण कम्मरमा पटुका कसेर अग्लो कदमको रुखमा चढ्नुभयो र पाखुरा बजार्दै त्यस विषालु जलमा हामफाल्नुभयो।

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्ण कदमको वृक्षमा चढी यमुनामा हाम फाल्नुभएको बताइएको छ। कालियको विषको कारणले पूरा वनप्रदेश नै रित्तो भएको त्यो विषमय नदीतीरमा एउटा कदमको वृक्ष कसरी बँच्यो भन्ने शङ्का हुन्छ। गरुडले अमृत ल्याउँदा केही क्षण अमृत त्यस रुखमा बिसाएकाले त्यही अमृतको प्रभावले त्यो रुख विषद्वारा नडढेको हो भनी श्रीधर स्वामीले पुराणान्तरको कथालाई सूचित गर्नुभएको छ। अथवा श्रीकृष्णको चरणस्पर्श हुने भावी सौभाग्य या प्रारब्धको बलले त्यसमा कालियको विषले काम नगरेको हो भन्ने पनि उहाँको भनाइ छ।

भगवान् श्रीकृष्ण **खलसंयमनावतार** हुनुहुन्छ। दुष्टहरूको नियमन गर्नकै लागि उहाँको अवतार भएको हो। दुष्टहरूलाई यमराजले नै निग्रह गर्छन्, किन भगवान्ले पनि निग्रह गर्नुपर्‍यो भन्ने शङ्काको समाधानमा भनिन्छ– दुष्टहरू प्रबल पराक्रमी हुन्छन्। यदि उनीहरूलाई जीवनभरि आतङ्क मच्चाउन दिने र मरेपछि यमराजबाट मात्र दण्ड दिलाउने हो भने त उनीहरूको आतङ्कले संसारै ध्वस्त हुन सक्छ। त्यसैले उनीहरू जीवित छँदैमा उनीहरूको दुष्टता रोक्न भगवान् नै आउनुपर्दछ। भयानक दुष्टताको परिणाम यहीँ चखाउन भगवान् आउनुभएको हो। यसबाट सामान्य मानिसहरूको मनमा पाप गर्नुहुन्न भन्ने भाव जाग्दछ। जीवनभरि पाप गर्न दिने हो भने त मानिसहरूले त्यसको दुष्फल नदेखिने हुँदा पाप-पुण्यको व्यवस्थालाई नै असत्य भन्न सक्छन्। यसकै लागि भगवान् दण्डधारी बनेर आउनुहुन्छ। यो कुरा **खलसंयमनावतारः** यो पदले सूचित गर्छ। भगवद्गीता (४/८)मा पनि **विनाशाय च दुष्कृताम्** भनी दुष्टहरूको विनाश गर्न नै भगवान्ले अवतार लिनुहुने कुरा बताइएको छ। खलनिग्रह पनि दुई प्रकारले हुन्छ, जसलाई दण्डद्वारा सपार्न सकिन्छ त्यस्तालाई दण्डद्वारा अनि जसलाई नमारी सपार्न सकिन्न त्यस्तालाई मारेर नै। यहाँ कालियको चाहिँ दण्डद्वारा निग्रह गरिएको छ।

**सर्पह्रदः पुरुषसारनिपातवेग–**
**सङ्क्षोभितोरगविषोच्छ्वसिताम्बुराशिः।**

**पर्यक् प्लुतो विषकषायबिभीषणोर्मि-**
**र्धावन् धनुःशतमनन्तबलस्य किं तत् ॥ ७ ॥**

**पदार्थ–**
**पुरुषसारनिपातवेगसङ्क्षोभितो-रगविषोच्छ्वसिताम्बुराशिः** = पुरुषोत्तम भगवान् श्रीकृष्ण हामफाल्दाको वेगले छचल्किएको सर्पको विषले युक्त पानीको राशि भएको
**विषकषायबिभीषणोर्मिः** = विषालु पहँला-पहँला भयङ्कर छालहरू भएको
**सर्पह्रदः** = त्यो कालिय सर्पको दह
**धावन्** = छचल्किनाले
**पर्यक्** = चारैतिर
**धनुःशतम्** = सय धनुष पर (चार सय हात)सम्म
**प्लुतः** = फैलियो
**तत्** = त्यो कुरा
**अनन्तबलस्य** = अनन्त शक्तिशाली भगवान्का लागि
**किं** = के आश्चर्यको कुरा भयो र ?

**वाक्यार्थ–** पुरुषोत्तम भगवान् श्रीकृष्ण हामफाल्दाको वेगले छचल्किएको सर्पको विषले युक्त पानीको राशि भएको अनि विषालु पहँला-पहँला भयङ्कर छालहरू भएको त्यो कालिय सर्पको दह छचल्किएर चारैतिर सय धनुष (चार सय हात) परसम्म फैलियो, यो कुरा अनन्त शक्तिशाली भगवान्का लागि के आश्चर्य भयो र ?

**तस्य ह्रदे विहरतो भुजदण्डघूर्ण-**
**वार्घोषमङ्ग वरवारणविक्रमस्य ।**
**आश्रुत्य तत् स्वसदनाभिभवं निरीक्ष्य**
**चक्षुःश्रवाः समसरत् तदमृष्यमाणः ॥ ८ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**तस्य ह्रदे** = त्यस कालिय नागको दहमा
**विहरतः** = विहार गरिरहनुभएका
**वरवारणविक्रमस्य** = श्रेष्ठ (बलवान्) हात्तीको जस्तै पराक्रमले युक्त भगवान् श्रीकृष्णको
**भुजदण्डघूर्णवार्घोषम्** = हात चलाउँदा पानी छचल्किनाले उत्पन्न ठुलो आवाजलाई
**आश्रुत्य** = सुनेर (र)
**स्वसदनाभिभवं** = आफ्नो वासस्थान तहसनहस पार्न लागेको
**तत्** = त्यो (दृश्य)
**निरीक्ष्य** = देखेर
**तत्** = त्यो
**अमृष्यमाणः** = सहन गर्न नसक्ने
**चक्षुःश्रवाः** = आँखाद्वारा नै सुन्ने कालिय नाग
**समसरत्** = (भगवान् श्रीकृष्णको) सामुन्ने आइपुग्यो

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! कालिय नागको त्यो दहमा विहार गरिरहनुभएका र बलवान् हात्तीको जस्तै पराक्रमले युक्त हुनुभएका भगवान् श्रीकृष्णले हात चलाउँदा पानी छचल्किनाले उत्पन्न ठुलो आवाज सुनेर अनि आफ्नो वासस्थान तहसनहस पार्न लागेको देखेर त्यो सहन गर्न

नसकी आँखाद्वारा नै सुन्ने कालिय नाग भगवान् श्रीकृष्णको सामुन्ने आइपुग्यो।

**तं प्रेक्षणीयसुकुमारघनावदातं**
**श्रीवत्सपीतवसनं स्मितसुन्दरास्यम्।**
**क्रीडन्तमप्रतिभयं कमलोदराङ्घ्रिं**
**सन्दश्य मर्मसु रुषा भुजया चछाद॥ ९॥**

**पदार्थ–**
(त्यस कालियले)
**प्रेक्षणीयसुकुमारघनावदातं** = मेघको जस्तो हेरिरहूँ जस्तो लाग्ने अत्यन्त कोमल कान्ति भएका
**श्रीवत्सपीतवसनं** = श्रीवत्स चिह्न र पीताम्बर धारण गर्नुभएका
**स्मितसुन्दरास्यम्** = हँसिलो सुन्दर मुहार भएका
**कमलोदराङ्घ्रिं** = कमलको फूलको भित्री भाग जस्तो कोमल पाउ भएका (र)
**अप्रतिभयं** = निडर भएर
**क्रीडन्तम्** = खेलिरहनुभएका
**तं** = उहाँ भगवान् श्रीकृष्णलाई
**रुषा** = रिसले
**मर्मसु** = मर्मस्थलहरूमा
**सन्दश्य** = टोकेर
**भुजया** = कुण्डलिनी बनाएको शरीरले
**चछाद** = बेर्‍यो

**वाक्यार्थ–** मेघको जस्तो हेरिरहूँ जस्तो लाग्ने अत्यन्त कोमल कान्ति भएका, छातीमा श्रीवत्स चिह्न र शरीरमा पीताम्बर धारण गर्नुभएका, हँसिलो सुन्दर मुहार भएका, कमलको फूलको भित्री भाग जस्तो कोमल पाउ भएका अनि निडर भएर पानीमा खेलिरहनुभएका भगवान् श्रीकृष्णलाई देखेर अत्यन्त रिसाएको कालिय नागले रिसले भगवान्का मर्मस्थलहरूमा टोक्दै कुण्डलिनी बनाउँदै शरीरले उहाँलाई बेर्‍यो।

**तं नागभोगपरिवीतमदृष्टचेष्ट-**
**मालोक्य तत्प्रियसखाः पशुपा भृशार्ताः।**
**कृष्णेऽर्पितात्मसुहृदर्थकलत्रकामा**
**दुःखानुशोकभयमूढधियो निपेतुः॥ १०॥**

**पदार्थ–**
**नागभोगपरिवीतम्** = कालिय नागको शरीरद्वारा बेरिनुभएका
**अदृष्टचेष्टं** = हलचल नगरी रहनुभएका
**तं** = उहाँ भगवान्लाई
**आलोक्य** = देखेर
**भृशार्ताः** = अत्यन्त डराएका
**कृष्णे** = भगवान् कृष्णमा
**अर्पितात्मसुहृदर्थकलत्रकामाः** = आफू, मित्र, धन-सम्पत्ति, पत्नी र कामनाहरू सबै समर्पण गरेका
**दुःखानुशोकभयमूढधियः** = दुःख, शोक र भयले मूर्च्छित भएका
**तत्प्रियसखाः** = उहाँका प्रिय मित्र
**पशुपाः** = गोठालाहरू
**निपेतुः** = लडे

**वाक्यार्थ–** कालिय नागको शरीरद्वारा बेरिएर हलचल नगरी रहनुभएका भगवान् कृष्णलाई देखेर आफू, मित्र, धनसम्पत्ति, पत्नी र आफ्ना सबै कामनाहरू भगवान् श्रीकृष्णमा नै समर्पण गरेका उहाँका प्रिय मित्र गोठालाहरू दुःख, शोक र डरले मूर्च्छित भएर पृथिवीमा लडे।

**गावो वृषा वत्सतर्यः क्रन्दमानाः सुदुःखिताः।**

**कृष्णे न्यस्तेक्षणा भीता रुदत्य इव तस्थिरे॥ ११॥**

**पदार्थ–**
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**न्यस्तेक्षणाः** = नजर लगाएका (भगवान् नागद्वारा बेरिनुभएको देखेर)
**सुदुःखिताः** = अत्यन्त दुःखी भएका
**भीताः** = अत्यन्त डराएका
**क्रन्दमानाः** = कराइरहेका
**गावः** = गाईहरू
**वृषाः** = गोरुहरू
**वत्सतर्यः** = साना बाच्छीहरू
**रुदत्यः इव** = रुन लागे झैँ गरी
**तस्थिरे** = उभिइरहे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णलाई हेरिरहेका र उहाँ नागद्वारा बेरिनुभएको देखेर अत्यन्त दुःखी भई डराएर कराइरहेका गाई, गोरु र साना बाच्छीहरू रुन लागे झैँ गरी उभिइरहे।

**अथ व्रजे महोत्पातास्त्रिविधा ह्यतिदारुणाः।**

**उत्पेतुर्भुवि दिव्यात्मन्यासन्नभयशंसिनः॥ १२॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**व्रजे** = व्रजमा
**भुवि** = जमिनमा
**दिवि** = आकाशमा र
**आत्मनि** = प्राणीहरूमा
**त्रिविधाः** = तीनै प्रकारका
**अतिदारुणाः** = अत्यन्त भयङ्कर
**आसन्नभयशंसिनः** = नजिक रहेको खतराको सूचना दिने
**महोत्पाताः** = ठुला-ठुला उत्पातहरू
**हि उत्पेतुः** = उत्पन्न भए

**वाक्यार्थ–** त्यसपछि व्रजमा जमिन, आकाश र त्यहाँका प्राणीहरूमा अत्यन्त भयङ्कर तीनै प्रकारका उत्पातहरू देखिन थाले जसले छिट्टै हुने खतराको सङ्केत गर्दथे।

**तानालक्ष्य भयोद्विग्ना गोपा नन्दपुरोगमाः।**

**विना रामेण गाः कृष्णं ज्ञात्वा चारयितुं गतम्॥ १३॥**

**तैर्दुर्निमित्तैर्निधनं मत्वा प्राप्तमतद्विदः।**

**तत्प्राणास्तन्मनस्कास्ते दुःखशोकभयातुराः॥ १४॥**

**आबालवृद्धवनिताः सर्वेऽङ्ग पशुवृत्तयः।**

**निर्जग्मुर्गोकुलाद् दीनाः कृष्णदर्शनलालसाः॥ १५॥**

**पदार्थ**–
**अङ्ग** = हे प्रिय परीक्षित्
**तान्** = ती उत्पातहरूलाई
**आलक्ष्य** = देखेर
**भयोद्विग्नाः** = डरले आत्तिएका
**अतद्विदः** = श्रीकृष्णको प्रभावलाई नबुझेका
**तत्प्राणाः** = कृष्णलाई नै आफ्नो प्राण मानेका
**तन्मनस्काः** = आफ्नो मन उहाँमा नै अर्पण गरेका
**दुःखशोकभयातुराः** = दुःख, शोक र भयले आत्तिएका
**पशुवृत्तयः** = पशुको जस्तो (सोझो) स्वभाव भएका
**दीनाः** = दुःखी
**कृष्णदर्शनलालसाः** = श्रीकृष्णको दर्शन गर्न आतुर
**आबालवृद्धवनिताः** = बालकदेखि वृद्धसम्मका
**नन्दपुरोगमाः** = नन्दलाई अगाडि लगाएका
**ते** = ती
**सर्वे** = सम्पूर्ण
**गोपाः** = गोपहरू
**कृष्णं** = भगवान् श्रीकृष्ण
**रामेण विना** = बलराम विना नै
**गाः** = गाईहरू
**चारयितुं** = चराउन
**गतं** = जानुभएको
**ज्ञात्वा** = बुझेर
**तैः** = ती
**दुर्निमित्तैः** = उत्पातहरूले
**निधनं प्राप्तम्** = कृष्णको मृत्यु भयो कि भन्ने
**मत्वा** = सोचेर
**गोकुलात्** = गोकुलबाट
**निर्जग्मुः** = निस्किए

**वाक्यार्थ**– हे प्रिय परीक्षित् ! ती उत्पातहरूलाई देखेर डरले आत्तिएका, श्रीकृष्णको प्रभावलाई नबुझेका, उहाँलाई नै आफ्नो प्राण मानेका, आफ्नो मन उहाँमा नै अर्पण गरेका, दुःख, शोक र भयले आत्तिएका, पशुको जस्तो सोझो स्वभाव भएका, दुःखी, श्रीकृष्णको दर्शनका लागि आतुर भएका ती बालकदेखि वृद्धसम्मका सम्पूर्ण गोपहरू भगवान् श्रीकृष्ण बलराम विना नै गाई चराउन जानुभएको थाहा पाई ती उत्पातहरूको आधारमा उहाँको मृत्यु पो भयो कि भन्ने सोचेर नन्दलाई अगाडि लगाएर गोकुलबाट निस्किए।

**तांस्तथा कातरान् वीक्ष्य भगवान् माधवो बलः।**
**प्रहस्य किञ्चिन्नोवाच प्रभावज्ञोऽनुजस्य सः॥ १६ ॥**

**पदार्थ**–
**तान्** = ती व्रजवासीहरूलाई
**तथा** = त्यसरी
**कातरान्** = काँतर बनेका
**वीक्ष्य** = देखेर
**अनुजस्य** = भाइ श्रीकृष्णको
**प्रभावज्ञः** = प्रभावलाई जान्नुभएका
**माधवः** = मधुवंशमा उत्पन्न
**सः भगवान्** = उहाँ भगवान्
**बलः** = बलरामजी
**प्रहस्य** = हाँसेर
**किञ्चित्** = केही
**न उवाच** = बोल्नुभएन

**वाक्यार्थ**– भाइ श्रीकृष्णको प्रभावलाई बुझ्नुभएका भगवान् बलरामजी व्रजवासीहरू काँतर बनेको देखेर केही बोल्नुभएन, हाँसी मात्र रहनुभयो।

**तेऽन्वेषमाणा दयितं कृष्णं सूचितया पदैः।**
**भगवल्लक्षणैर्जग्मुः पदव्या यमुनातटम्॥ १७ ॥**

पदार्थ–
**दयितं** = आफ्ना प्रिय
**कृष्णं** = श्रीकृष्णलाई
**अन्वेषमाणाः** = खोजिरहेका
**ते** = ती व्रजवासीहरू
**भगवल्लक्षणैः** = कमल, जौ आदि भगवान्का चिह्नहरू भएका
**पदैः** = पदचिह्नहरूद्वारा
**सूचितया** = सङ्केत गरिएको
**पदव्या** = बाटोबाट
**यमुनातटम्** = यमुनाको तीरतर्फ
**जग्मुः** = गए

**वाक्यार्थ–** आफ्ना प्रिय श्रीकृष्णलाई खोजिरहेका व्रजवासीहरू कमल, जौ आदि चिह्नहरूले युक्त भगवान्का पदचिह्नहरूद्वारा सङ्केत गरिएको बाटो हुँदै यमुनाको तीरतर्फ गए।

**ते तत्र तत्राब्जयवाङ्कुशाशनिध्वजोपपन्नानि पदानि विश्पतेः।**
**मार्गे गवामन्यपदान्तरान्तरे निरीक्षमाणा ययुरङ्ग सत्वराः ॥ १८ ॥**

पदार्थ–
**अङ्ग** = हे प्रिय परीक्षित्
**तत्र तत्र** = त्यहाँ त्यहाँ
**गवाम्** = गाईहरूको
**मार्गे** = बाटोमा
**अन्यपदान्तरान्तरे** = अन्य पदचिह्नका बीच-बीचमा देखिएका
**अब्जयवाङ्कुशाशनिध्वजो-पपन्नानि** = कमल, जौ, अङ्कुश, वज्र, ध्वजा आदि चिह्नले युक्त
**विश्पतेः** = जनताका स्वामी भगवान् श्रीकृष्णका
**पदानि** = पदचिह्नहरूलाई
**निरीक्षमाणाः** = हेर्दै
**सत्वराः** = छिटो-छिटो गरी
**ते** = ती व्रजवासीहरू (यमुनातर्फ)
**ययुः** = हिँडे

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! गाई हिँडेका बाटामा अन्य पाइलाका बीच-बीचमा कमल, जौ, अङ्कुश, वज्र, ध्वजा आदि चिह्नहरूले युक्त भगवान्का पदचिह्नहरूलाई हेर्दै व्रजवासीहरू छिटो-छिटो यमुनातर्फ हिँडे।

**विवरण–** यो श्लोकमा नन्द आदि गोप र गोपिनीहरू भगवान् श्रीकृष्णलाई खोज्दै यमुनातर्फ गएको कुरा बताइएको छ। भगवान् गाई चराउँदै आफ्ना साथी गोपहरूसँग आउनुभएको थियो। बाटोमा उहाँहरू हिँडेका खुट्टाका पाइला परेका थिए। गाई हिँड्ने त्यो बाटोमा भगवान् पनि खराउ आदि केही नलगाईकनै हिँड्नुभएको थियो। यसबाट **अन्यपदान्तरान्तरे** अर्थात् अरू गोपहरूको पाइलाहरूको बीच-बीचमा श्रीकृष्णका पाइलाहरू चिह्नित देखिन्थे। सम्पूर्ण विश्व नै मेरो पाउ हो भनी जनाउन हो वा गाईहरूको सेवा गर्न उनीहरूकै अनुकरण गरेर हो, सर्वेश्वर परमात्माले खराउ आदि कुनै पनि पाउ ढाक्ने साधनको प्रयोग गर्नुभएको थिएन। उहाँका खाली पैतालाका डोबहरूमा कमल, अङ्कुश आदि चिह्नहरू भएकाले गोप-गोपिनीहरूले भगवान्को चरणचिह्नलाई चिनिहाले। उनीहरू त्यही चरणचिह्नलाई पछ्याउँदै वनको भित्र-भित्र गए। वल्लभाचार्यका अनुसार भगवान्का चरणमा भएका चिह्नहरूको तात्पर्य यसप्रकार छ– **अब्ज** अर्थात् कमलको चिह्नले भगवान्को चरण सबैद्वारा आदरणीय, सेवनीय र आश्रयणीय छ भन्ने जनाउँदछ। **यव** अर्थात् जौ जस्तो आकारको रेखाले उहाँको फैलिँदो अनन्त कीर्तिलाई बताउँछ। **अङ्कुश**को काम हात्तीलाई नियन्त्रणमा लिने हो, उसो भए भगवान्को चरणमा त्यसको के काम

होला ? पक्कै पनि यो अङ्कुशलाई भगवान्ले आफ्नो लागि होइन, भक्तका लागि धारण गर्नुभएको हो। **मनोगजनिवारणाय** अर्थात् भक्तहरूको मनरूपी हात्तीलाई नियन्त्रित गर्नु यो अङ्कुशको काम हो। हात्तीलाई अङ्कुशद्वारा धपाउँदै ठिक ठाउँमा राख्नुपर्ने हुन्छ। मनलाई पनि झन् बढी नियन्त्रित गर्नुपर्दछ। हात्ती र मनको त्यही साम्यलाई लक्षित गरी यो अर्थ गरिएको हो। **अशनि** अर्थात् वज्रको काम पर्वत फोर्ने हो, भगवान्का चरणले पापको पहाडै जत्रो थुप्रोलाई पनि तत्क्षण नाश गरिदिन्छ। आफ्नी माता देवहूतिलाई उपदेश गर्ने क्रममा कपिलले भगवान्का चरणको महिमा गाउँदै भन्नुभएको छ— **ध्यातुर्मनःशमलशैलनिसृष्टिवज्रम्** (भागवत, ३/२८/२२) अर्थात् भगवान्का चरणको जसले ध्यान गर्छ, त्यसका मनमा रहेका पापका पहाडजत्रा थुप्राहरू पनि ध्वस्त हुन्छन्। भगवान्को चरणमा रहेको वज्रले यही सूचित गर्छ। **ध्वजा**ले आफ्नो या अर्काको क्षेत्र भन्ने सूचना दिन्छ। जितेको पक्षले हारेको प्रदेशमा आफ्नो झन्डा गाड्छन्, जसको अर्थ अब त्यो प्रदेश उनीहरूको हो र त्यहाँभित्र उनीहरू सुरक्षित छन् भन्ने हो। भगवान्को चरणमा रहेको ध्वजाको चिह्नले पनि भक्तहरू भगवान्को आश्रयमा निर्भयतापूर्वक आश्रित हुन्छन् भन्ने जनाउँछ। यसरी कमल आदि अनेक चिह्नले युक्त भगवान्का चरणहरूलाई पछ्याउँदै गोप-गोपिनीहरूले उहाँलाई खोज्दै आए। श्रीधर स्वामी **गवां मार्गे** यो पदावलीको अर्थ गर्दै भन्नुहुन्छ, **गौ** भनेका वेदहरू हुन्। वेदमा धर्म र ब्रह्मको प्रतिपादन गरिएको हुन्छ। वेदमार्गभन्दा बाहेक आफ्नो मनखुसी परमात्माको कल्पना या खोजी गरेर उहाँलाई पाउन सकिन्न। वेदमार्गमा पनि परमात्मासँगै अनेक कर्म र तिनका विधिहरूको अनि लोक-लोकान्तरमा प्राप्त हुने फलको वर्णन पाइन्छ। वेदवचन अनुसार परमात्मालाई पाउन ती सबै उपाधिहरूलाई छुट्याई परमात्मालाई पृथक् रूपले चिन्नुपर्दछ। संसारका पदार्थबाट परमात्मालाई छुट्याउन वेदले परमात्मामा नित्यत्व, सर्वप्रकाशकत्व, आनन्दरूपत्व आदि लक्षणहरू बताएको छ। ती लक्षणहरूद्वारा परमात्माको खोजी गर्नुपर्दछ। योगीहरूले यसरी परमात्माको खोजी गरे झैँ गोप-गोपिनीहरूले श्रीकृष्णको खोजी गरे भन्ने कुरा यहाँ बताउन खोजिएको हो।

**अन्तर्ह्रदे भुजगभोगपरीतमारात्**
**कृष्णं निरीहमुपलभ्य जलाशयान्ते।**
**गोपांश्च मूढधिषणान् परितः पशूंश्च**
**सङ्क्रन्दतः परमकश्मलमापुरार्ताः॥ १९॥**

पदार्थ–
**आरात्** = टाढैबाट
**अन्तर्ह्रदे** = दहभित्र
**भुजगभोगपरीतं** = कालिय नागको शरीरले बेरिनुभएका
**निरीहम्** = निश्चल हुनुभएका
**कृष्णं** = भगवान् कृष्णलाई
**जलाशयान्ते** = दहको तीरमा
**मूढधिषणान्** = अचेत बनेका
**गोपान् च** = गोपहरू र
**परितः** = दहको वरिपरि
**सङ्क्रन्दतः** = आत्तिएर कराइरहेका
**पशून् च** = पशुहरूलाई
**उपलभ्य** = पाएर (देखेर)

**आर्ताः** = अत्यन्त पीडित भएका व्रजवासीहरूले
**परमकश्मलम्** = ज्यादै ठुलो दुःख
**आपुः** = प्राप्त गरे

**वाक्यार्थ–** पदचिह्नको अनुसरण गर्दै गएका व्रजवासीहरूले टाढैबाट दहभित्र कालिय नागको शरीरले बेरिनुभएका भगवान्लाई निश्चल अवस्थामा देखे। सम्पूर्ण गोपहरू दहको किनारमा अचेत बनेर लडिरहेका र आत्तिएका गाई, बाच्छाहरू दहको वरिपरि आत्तिएर कराइरहेका देखेर अत्यन्त पीडित भएका व्रजवासीहरू ज्यादै दुःखी भए।

**गोप्योऽनुरक्तमनसो भगवत्यनन्ते**
**तत्सौहृदस्मितविलोकगिरः स्मरन्त्यः।**
**ग्रस्तेऽहिना प्रियतमे भृशदुःखतप्ताः**
**शून्यं प्रियव्यतिहृतं ददृशुस्त्रिलोकम्॥ २०॥**

**पदार्थ–**
**अनन्ते** = सर्वव्यापक
**भगवति** = भगवान् श्रीकृष्णमा
**अनुरक्तमनसः** = मन रमाएका
**तत्सौहृदस्मितविलोकगिरः** = भगवान्को प्रेम, मुस्कान, हेराइ र वाणीलाई
**स्मरन्त्यः** = सम्झिरहेका
**भृशदुःखतप्ताः** = ठुलो दुःखले व्याकुल भइरहेका
**गोप्यः** = गोपीहरूले
**प्रियतमे** = परमप्रिय भगवान्
**अहिना** = कालिय नागद्वारा
**ग्रस्ते** = बेरिनुभएको देखेर
**प्रियव्यतिहृतं** = प्रिय भगवान् विनाको
**त्रिलोकम्** = तीनै लोकलाई
**शून्यं** = शून्य
**ददृशुः** = देखे

**वाक्यार्थ–** सर्वव्यापक भगवान् श्रीकृष्णमा अनुरक्त गोपीहरू सधैँ भगवान्को प्रेम, मुस्कान, हेराइ र वाणीको स्मरण गरिरहन्थे। आफ्ना परमप्रिय भगवान्लाई कालियले बेरेको देखेर उनीहरू अत्यन्त दुःखी भए। प्रिय भगवान् विनाको तीनै लोक उनीहरूलाई शून्य लाग्यो।

**ताः कृष्णमातरमपत्यमनुप्रविष्टां**
**तुल्यव्यथाः समनुगृह्य शुचः स्रवन्त्यः।**
**तास्ता व्रजप्रियकथाः कथयन्त्य आसन्**
**कृष्णाननेऽर्पितदृशो मृतकप्रतीकाः॥ २१॥**

**पदार्थ–**
**अपत्यम्** = छोरो
**अनुप्रविष्टां** = (प्रवेश गरेको दहमा) छोराको पछिपछि पसेकी
**कृष्णमातरं** = कृष्णकी आमा यशोदालाई
**समनुगृह्य** = समाएर
**तुल्यव्यथाः** = समान व्यथा भएका
**शुचः स्रवन्त्यः** = आँसुका धारा बगाउँदै गरेका
**ताः** = ती गोपीहरूले

**ताः ताः** = ती–ती
**व्रजप्रियकथाः** = (भगवान्द्वारा गरिएका) व्रजमा प्रिय बनेका (पूतनावध आदि) कथाहरू
**कथयन्त्यः** = भनिरहेका (र)
**कृष्णानने** = भगवान् श्रीकृष्णको अनुहारमा
**अर्पितदृशः** = आफ्नो दृष्टि अर्पण गरेका (हेरिरहेका गोपीहरू हेर्दा–हेर्दै)
**मृतकप्रतीकाः** = मरे झैँ अचेत बनेका
**आसन्** = थिए

**वाक्यार्थ–** छोरो प्रवेश गरेको दहमा पसेकी भगवान् कृष्णकी माता यशोदालाई समाएर उनको समान व्यथा भए तापनि आफूलाई सम्हालेर आँसुका धारा बगाउँदै व्रजवासीका लागि प्यारा लाग्ने भगवान्का पूतनावध आदि लीलाहरू सुनाउँदै भगवान्को अनुहारलाई हेरिरहेका गोपीहरू उहाँलाई हेर्दाहेर्दै मरे झैँ अचेत बने।

**कृष्णप्राणान् निर्विशतो नन्दादीन् वीक्ष्य तं ह्रदम्।**
**प्रत्यषेधत् स भगवान् रामः कृष्णानुभाववित्॥ २२॥**

**पदार्थ–**
**कृष्णानुभाववित्** = भगवान् श्रीकृष्णको प्रभावलाई जान्नुभएका
**सः** = ती
**भगवान् रामः** = भगवान् बलरामले
**कृष्णप्राणान्** = कृष्णकै भरमा बाँचेका
**नन्दादीन्** = नन्द आदि आफन्तहरू
**तं** = त्यो
**ह्रदम्** = कालियदहमा
**निर्विशतः** = पस्न लागेको
**वीक्ष्य** = देखेर
**प्रत्यषेधत्** = रोक्नुभयो

**वाक्यार्थ–** श्रीकृष्णको प्रभाव बुझ्नुभएका भगवान् बलरामले भगवान् कृष्णकै भरमा बाँचेका नन्द आदि आफन्तहरू कालियदहमा पस्न लागेको देखेर ती सबैलाई रोक्नुभयो।

**इत्थं स्वगोकुलमनन्यगतिं निरीक्ष्य**
**सस्त्रीकुमारमतिदुःखितमात्महेतोः।**
**आज्ञाय मर्त्यपदवीमनुवर्तमानः**
**स्थित्वा मुहूर्तमुदतिष्ठदुरङ्गबन्धात्॥ २३॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**मर्त्यपदवीम्** = मानिसको बाटोमा
**अनुवर्तमानः** = रहिरहनुभएका भगवान् श्रीकृष्ण
**सस्त्रीकुमारम् स्वगोकुलम्** = आइमाई र केटाकेटीले सहित आफ्नो गोकुल (गोकुलवासीहरू)लाई
**अनन्यगतिं** = अर्को आधार नभएका
**निरीक्ष्य** = देखेर तथा
**आत्महेतोः** = आफ्ना लागि
**अतिदुःखितम्** = ज्यादै दुःखी भएको
**आज्ञाय** = जानेर
**मुहूर्तम्** = एक मुहूर्तसम्म मात्र

**स्थित्वा** = रोकिई
**उरङ्गबन्धात्** = कालियको बन्धनबाट
**उदतिष्ठत्** = मुक्त हुनुभयो

**वाक्यार्थ–** यसप्रकार मानिसले जस्तै कर्म गरिहनुभएका भगवान्‌ले आफू बाहेक अर्को बाँच्ने आधार नभएका आइमाई एवं केटाकेटीले सहित गोकुलवासीहरू आफ्ना लागि ज्यादै दुःखी भएको देखेर कालियको बन्धनमा एक मुहूर्तसम्म मात्र बसी त्यसबाट मुक्त हुनुभयो।

**तत्प्रथ्यमानवपुषाव्यथितात्मभोग-**
**स्त्यक्त्वोन्नमय्य कुपितः स्वफणान् भुजङ्गः।**
**तस्थौ श्वसञ्छ्वसनरन्ध्रविषाम्बरीष-**
**स्तब्धेक्षणोल्मुकमुखो हरिमीक्षमाणः॥ २४॥**

**पदार्थ–**
**तत्प्रथ्यमानवपुषा** = भगवान्‌को बढिरहेको त्यो शरीरद्वारा
**व्यथितात्मभोगः** = आफ्नो शरीर पीडित बनेको
**श्वसनरन्ध्रविषाम्बरीषस्तब्धेक्षणोल्मुकमुखः** = नाकको प्वालबाट विषालु श्वास निकाल्दै गरेको तथा कराही जस्ता डरलाग्दा आँखा र अगुल्टो जस्तो रातो मुख बनाएको
**कुपितः** = रिसाएको
**श्वसन्** = सास फेरिरहेको
**भुजङ्गः** = कालिय नागले
**हरिम्** = भगवान् श्रीकृष्णलाई
**त्यक्त्वा** = छोडेर
**स्वफणान्** = आफ्ना फणाहरू
**उन्नमय्य** = उठाएर
(उहाँलाई)
**ईक्षमाणः** = हेर्दै
**तस्थौ** = बस्यो

**वाक्यार्थ–** (भगवान्‌ले आफ्नो शरीर फुलाउनुभएपछि) बढिरहेको भगवान्‌को शरीरले आफ्नो शरीर पीडित भएपछि डराएर नाकबाट विषालु श्वास निकाल्दै गरेको तथा कराही जस्ता डरलाग्दा आँखा र अगुल्टो जस्तो रातो मुख बनाएको कालिय नागले भगवान् श्रीकृष्णलाई छोड्यो र आफ्ना फणाहरू उठाएर हेर्दै उहाँको सामुन्ने बस्यो।

**तं जिह्वया द्विशिखया परिलेलिहानं**
**द्वे सृक्किणी ह्यतिकरालविषाग्निदृष्टिम्।**
**क्रीडन्नमुं परिससार यथा खगेन्द्रो**
**बभ्राम सोऽप्यवसरं प्रसमीक्षमाणः॥ २५॥**

**पदार्थ–**
**द्विशिखया** = दुई ओटा टुप्पा भएको
**जिह्वया** = जिब्रोले
**द्वे सृक्किणी** = ओठको दुई छेउ
**परिलेलिहानं** = चाट्दै गरेको
**अतिकरालविषाग्निदृष्टिम्** = अत्यन्त डरलाग्दो विषालु आगो जस्तो हेराइ भएको
**अमुं तं** = यो कालिय नागलाई
**यथा खगेन्द्रः** = गरुडले झैं
**क्रीडन्** = क्रीडा गरिरहनुभएका

भगवान्
**परिससार** = वरिपरिबाट घुम्नुभयो
**सः अपि** = त्यो कालिय नागले पनि
**अवसरं** = टोक्ने अवसर
**प्रसमीक्षमाणः** = खोज्दै
**हि बभ्राम** = भगवान्लाई घुमिरह्यो

**वाक्यार्थ–** त्यसपछि आफ्ना दुई ओटा जिब्रोले ओठका दुई छेउ चाट्दै गरेको अत्यन्त भयङ्कर विषालु आगो जस्तो हेराइ भएको कालिय नागको वरिपरि भगवान् श्रीकृष्ण गरुडले झैं क्रीडा गर्दै घुम्न लाग्नुभयो। त्यो कालिय नाग पनि टोक्ने अवसर खोज्दै भगवान्को वरिपरि घुम्न थाल्यो।

**एवं परिभ्रमहतौजसमुन्नतांस-**
**मानम्य तत्पृथुशिरःस्वधिरूढ आद्यः।**
**तन्मूर्धरत्ननिकरस्पर्शातिताम्र-**
**पादाम्बुजोऽखिलकलादिगुरुर्ननर्त॥ २६॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**परिभ्रमहतौजसं** = घुम्दा-घुम्दा थाकेको
**उन्नतांसं** = अग्ला फणा भएको कालियलाई
**आनम्य** = दबाएर
**तत्पृथुशिरःसु** = त्यसका ठुला-ठुला शिरमा
**अधिरूढः** = चढ्नुभएका
**तन्मूर्धरत्ननिकरस्पर्शातिताम्र-पादाम्बुजः** = त्यस कालियको शिरमा रहेका रत्नहरूको स्पर्शले सुन्दर ताम्रवर्णको चरणकमलले युक्त हुनुभएका
**अखिलकलादिगुरुः** = सम्पूर्ण कलाका प्रथम गुरु
**आद्यः** = आदिपुरुष श्रीकृष्ण
**ननर्त** = नाच्न लाग्नुभयो

**वाक्यार्थ–** यसप्रकार घुम्दा-घुम्दा थाकेको कालिय नागको अग्ला-अग्ला फणालाई दबाएर सम्पूर्ण कलाका प्रथम गुरु आदिपुरुष भगवान् श्रीकृष्ण त्यसका ठुला-ठुला शिरमा चढ्नुभयो र कालियका शिरमा रहेका मणिहरूको स्पर्शले सुन्दर ताम्रवर्णको बनेका चरणकमलद्वारा नृत्य गर्न लाग्नुभयो।

**तं नर्तुमुद्यतमवेक्ष्य तदा तदीय-**
**गन्धर्वसिद्धमुनिचारणदेववध्वः।**
**प्रीत्या मृदङ्गपणवानकवाद्यगीत-**
**पुष्पोपहारनुतिभिः सहसोपसेदुः॥ २७॥**

**पदार्थ–**
**तदा** = त्यस समयमा
**तं** = उहाँ भगवान् श्रीकृष्णलाई
**नर्तुम्** = नाच्नका लागि
**उद्यतम्** = तयार हुनुभएको
**अवेक्ष्य** = देखेर
**तदीयगन्धर्वसिद्धमुनिचारणदेव-वध्वः** = भगवान्का प्रिय गन्धर्व, सिद्ध, मुनि, चारण र अप्सराहरू

**प्रीत्या** = अत्यन्त खुसी भएर
**मृदङ्गपणवानकवाद्यगीतपुष्पोपहारनुतिभिः** = मादल, ढोलक, नगरा आदि बाजा बजाउँदै र गीत गाउँदै पुष्प उपहार लिएर स्तुति गर्दै
**सहसा** = तत्काल
**उपसेदुः** = आइपुगे

**वाक्यार्थ–** भगवान्ले त्यसरी नृत्य गर्न लाग्नुभएको देखेर प्रसन्न भएका भगवान्का प्रिय गन्धर्व, सिद्ध, मुनि, चारण तथा अप्सराहरू मादल, ढोलक, नगरा आदि बाजा बजाउँदै र माङ्गलिक गीत गाउँदै पुष्प उपहार लिएर स्तुति गर्दै तत्काल त्यहाँ आइपुगे।

**यद् यच्छिरो न नमतेऽङ्ग शतैकशीर्ष्ण-**
**स्तत्तन्ममर्द खरदण्डधरोऽङ्घ्रिपातैः।**
**क्षीणायुषो भ्रमत उल्बणमास्यतोऽसृङ्**
**नस्तो वमन् परमकश्मलमाप नागः॥ २८॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**शतैकशीर्ष्णः** = एक सय एक शिर भएको
**क्षीणायुषः** = शक्ति हीन भएको
**भ्रमतः** = छट्पटाइरहेको कालियको
**यत् यत् शिरः** = जुन-जुन शिर
**न नमते** = झुक्दैनथ्ये
**तत् तत्** = ती-ती शिरलाई
**खरदण्डधरः** = कठोर दण्ड दिनुहुने भगवान् श्रीकृष्णले
**अङ्घ्रिपातैः** = पैतालाको प्रहारद्वारा
**ममर्द** = झुकाइदिनुभयो (त्यसपछि)
**नागः** = कालिय नागले
**आस्यतः** = मुखबाट र
**नस्तः** = नाकबाट
**उल्बणं** = विषालु
**असृक्** = रगत
**वमन्** = छाद्दै
**परमकश्मलम्** = ज्यादै कष्ट
**आप** = प्राप्त गर्‍यो

**वाक्यार्थ–** हे प्रिय परीक्षित्! एक सय एक शिरहरू भएको अनि शक्तिहीन भएको र छट्पटाइरहेको त्यस कालिय नागका जुन-जुन शिरहरू झुकेका थिएनन् ती शिरलाई भगवान्ले आफ्ना पैतालाको प्रहारद्वारा झुकाइदिनुभयो। त्यसपछि नाक र मुखबाट विषालु रगत छाद्दै त्यस कालियले ज्यादै कष्ट प्राप्त गर्‍यो।

**तस्याक्षिभिर्गरलमुद्वमतः शिरस्सु**
**यद्यत् समुन्नमति निःश्वसतो रुषोच्चैः।**
**नृत्यन् पदानुनमयन् दमयाम्बभूव**
**पुष्पैः प्रपूजित इवेह पुमान् पुराणः॥ २९॥**

**पदार्थ–**
**रुषा** = रिसले गर्दा
**उच्चैः निःश्वसतः** = लामो-लामो सास निकालिरहेको (र)
**अक्षिभिः** = आँखाहरूबाट
**गरलम्** = विष

**उद्वमतः** = वमन गरिरहेको
**तस्य** = त्यस कालियका
**शिरःसु** = शिरहरूमध्ये
**यत् यत्** = (उसले) जुन-जुन
**समुन्नमति** = उठाउँथ्यो (त्यस-त्यसलाई)
**नृत्यन्** = नाच्दै
**पदा** = पाउको प्रहारले
**अनुनमयन्** = निहुराइदिँदै
**दमयाम्बभूव** = दमन गर्नुभयो
**इह** = यस समयमा
**पुराणः** = सनातन
**पुमान्** = पुरुष भगवान् श्रीकृष्ण
**पुष्पैः** = (कालियको रगतरूप रक्त) पुष्पहरूद्वारा
**प्रपूजितः इव** = पूजा गरिए झैँ देखिनुभयो

**वाक्यार्थ–** रिसका कारण लामो-लामो सास फेर्दै आँखाबाट विष वमन गरिरहेको कालियले जुन-जुन शिर ठाडो पार्दथ्यो, त्यस-त्यसलाई आफ्नो पाउको प्रहारले निहुराइदिँदै भगवान्ले कालियको दमन गर्नुभयो। त्यस समयमा कालियमाथि नाच्दै गर्नुभएका पुराणपुरुष भगवान् श्रीकृष्ण कालियको रगतरूप रक्तपुष्पद्वारा पूजा गरिए झैँ देखिनुभयो।

**तच्चित्रताण्डवविरुग्णफणातपत्रो**
**रक्तं मुखैरुरु वमन् नृप भग्नगात्रः।**
**स्मृत्वा चराचरगुरुं पुरुषं पुराणं**
**नारायणं तमरणं मनसा जगाम॥ ३०॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**तच्चित्रताण्डवविरुग्ण-फणातपत्रः** = भगवान्को अलौकिक नृत्यले फणारूपी छाता भाँच्चिएको
**भग्नगात्रः** = शरीर छिन्न-भिन्न भएको कालिय नाग
**मुखैः** = आफ्ना मुखहरूबाट
**उरु रक्तं** = धेरै रगत
**वमन्** = छाद्दै
**चराचरगुरुं** = चराचर जगत्का गुरु भएका
**पुराणं पुरुषं** = सनातन पुरुष
**नारायणं** = भगवान् नारायणलाई
**मनसा** = मनले
**स्मृत्वा** = सम्झिएर
**तम्** = उहाँ भगवान्कै
**अरणं** = शरणमा
**जगाम** = गयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान्को त्यो अलौकिक ताण्डव नृत्यले कालियका फणा भाँच्चिएर शरीर छिन्न-भिन्न भई त्यसले मुखबाट रगत छाद्न थाल्यो। त्यसपछि त्यो कालिय नाग मनमनै संसारका गुरु सनातन पुरुष भगवान् श्रीहरिलाई सम्झिँदै उहाँकै शरणमा गयो।

**विवरण–** यस प्रसङ्गमा भगवान्को विचित्र ताण्डव नृत्यद्वारा कालियनागको शक्ति र अभिमान सबै चूर्ण भएको र ऊ परमात्माको शरणमा आएको बताइएको छ। कालियनागका १०१ ओटा फणाहरू थिए। तीमध्ये उसले जुन फणा उठाएर भगवान्लाई डस्न खोज्थ्यो, त्यही फणालाई भगवान्ले आफ्नो चरणले दबाइदिनुहुन्थ्यो। सबैथरी कलाका आदिगुरु उहाँलाई ती नागका चञ्चल फणाहरूमाथि अडिएर नृत्य गर्न केही कठिन भएन। जुन-जुन शिर झुक्दैनथ्यो, त्यस-त्यस शिरलाई आफैँले टेकेर उहाँले झुकाउनुभयो। जबसम्म कालियले भगवान्को अगाडि आफ्नो बल र अभिमान देखाइरह्यो, तबसम्म भगवान्ले त्यसको दमन गरिरहनुभयो। यसबाट भगवान्को कृपा

पाउन उहाँको अगाडि विनम्रतापूर्वक प्रस्तुत हुनुपर्दछ भन्ने सूचना मिल्दछ।

वल्लभाचार्य लेख्नुहुन्छ– **कालिय इन्द्रियाण्याहुर्विषयास्तद्विषं मतम्** अर्थात् कालिय नाग इन्द्रियहरू हुन् भने इन्द्रियका विषयहरू नै कालियको विष हो। विष र विषयमा समानता छ, अझ विषभन्दा पनि विषय नै खराब छ। विषले त खाने मान्छेलाई मात्र मार्दछ, तर विषयले त हेर्नेबित्तिकै या थोरै सम्झनेबित्तिकै पनि मनमा वासनाको वेग पैदा गरी मानिसलाई अनन्त जन्म–मरणको चक्रमा घुमाइदिन्छ। इन्द्रियहरू जब यी विषयतर्फ आकर्षित हुन्छन्, तब त्यस विषयासक्त अवस्थामा इन्द्रियका सयौं प्रकारका वृत्तिहरू हुन्छन्। कालिय नागका एक सय एक शिरले यिनै विषयासक्त इन्द्रियहरूको सूचना गर्दछन्। यसरी विषको मदले उन्मत्त भएको कालियनाग भगवान्को शरणमा जानु इन्द्रियहरू भगवान्तिर अभिमुख हुनु हो। कालिय भगवान्को शरणमा जानका लागि उसका भित्री–बाहिरी सबै दोष निस्किएको हुनुपर्दछ। **मुखैः रक्तं वमन्** भन्ने पदले उसको भित्री दोष निस्किएको जनाएको छ। मुखभित्रबाट रगत निस्कनुको तात्पर्य कालियरूपी इन्द्रियहरूबाट विषयासक्तिरूपी भित्री विषालु दोष हट्नु हो भने **भग्नगात्रः** पदले त्यसका बाहिरी दोषहरू हटेको देखाइएको छ। इन्द्रियहरूबाट विषयको विष ननिस्किई त्यहाँ भगवान् खेल्नुहुन्न। यो अनुग्रहमार्ग भएकाले जब भगवान्लाई भक्तरूसँग खेल्ने इच्छा हुन्छ तब उनीहरूका इन्द्रियलाई आफैंले दमन गरी उहाँले निर्विषय पार्नुहुन्छ र त्यहाँ नृत्य गर्नुहुन्छ भन्ने भगवान्को परम कृपामय स्वभावको सूचना यहाँ पाइन्छ।

**कृष्णस्य गर्भजगतोऽतिभरावसन्नं**
**पार्ष्णिप्रहारपरिरुग्णफणातपत्रम्।**
**दृष्ट्वाहिमाद्यमुपसेदुरमुष्य पत्न्य**
**आर्ताः श्लथद्वसनभूषणकेशबन्धाः॥ ३१॥**

**पदार्थ–**
**गर्भजगतः** = जगत्लाई आफूभित्र राख्नुहुने
**कृष्णस्य** = भगवान् श्रीकृष्णको
**अतिभरावसन्नं** = अत्यन्त गह्रुङ्गो भारले थिचिएको
**पार्ष्णिप्रहारपरिरुग्णफणातपत्रम्** = पाउको प्रहारले छातारूप फणा छिन्न–भिन्न भएको
**अहिम्** = कालिय नागलाई
**दृष्ट्वा** = देखेर
**अमुष्य** = त्यस कालियका
**आर्ताः** = अत्यन्त दुःखी भएका
**श्लथद्वसनभूषणकेशबन्धाः** = वस्त्र, आभूषण र चुल्ठो अस्तव्यस्त भएका
**पत्न्यः** = पत्नीहरू
**आद्यम्** = आदि पुरुष श्रीकृष्णको
**उपसेदुः** = शरणमा गए

**वाक्यार्थ–** जगत्लाई आफूभित्र राख्नुहुने भगवान् श्रीकृष्णको अत्यन्त गह्रुङ्गो भारले थिचिएको र पाउको प्रहारले छातारूप फणा छिन्न–भिन्न भएको कालिय नागलाई देखेर अत्यन्त दुःखी भएका र वस्त्र, आभूषण र चुल्ठो अस्तव्यस्त भएका उसका पत्नीहरू आदिपुरुष भगवान् श्रीकृष्णको शरणमा गए।

**तास्तं सुविग्नमनसोऽथ पुरस्कृतार्भाः**
**कायं निधाय भुवि भूतपतिं प्रणेमुः।**
**साध्व्यः कृताञ्जलिपुटाः शमलस्य**
**भर्तुर्मोक्षेप्सवः शरणदं शरणं प्रपन्नाः॥ ३२॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**भर्तुः** = पतिको
**शमलस्य** = अपराधको
**मोक्षेप्सवः** = उन्मुक्ति चाहने
**सुविग्नमनसः** = अति विह्वल चित्त भएका
**पुरस्कृतार्भाः** = बालबच्चाहरू-लाई अगाडि लगाएका
**साध्व्यः** = पतिव्रता नागपत्नीहरू
**शरणदं** = सबैलाई शरण दिनुहुने भगवान्‌का
**शरणं** = शरणमा
**प्रपन्नाः** = पुगेर
**ताः** = तिनीहरूले
**कायं** = शरीरलाई
**भुवि** = भूमिमा
**निधाय** = लगाएर
**कृताञ्जलिपुटाः** = अँजुली बाँधी
**भूतपतिं** = संसारका मालिक
**तं** = ती भगवान् श्रीकृष्णलाई
**प्रणेमुः** = प्रणाम गरे

**वाक्यार्थ–** त्यसपछि विह्वल चित्त भएका पतिव्रता नागपत्नीहरू आफ्ना पतिको अपराधको क्षमाका लागि बालबच्चालाई अगाडि लगाएर सबैलाई शरण दिनुहुने भगवान्‌को शरणमा पुगे। उनीहरूले हात जोडेर भुइँमा पसारिएर संसारका मालिक भगवान् श्रीकृष्णलाई प्रणाम गरे।

**नागपत्न्य ऊचुः** (नागपत्नीहरूले भने)

**न्याय्यो हि दण्डः कृतकिल्बिषेऽस्मिंस्तवावतारः खलनिग्रहाय।**
**रिपोः सुतानामपि तुल्यदृष्टिर्धत्से दमं फलमेवानुशंसन्॥ ३३॥**

**पदार्थ–**
**कृतकिल्बिषे** = पापकर्म गर्ने
**अस्मिन्** = यी हाम्रा पति कालियलाई
**दण्डः** = सजाय दिनु
**न्याय्यः** = न्यायसङ्गत छ
**हि** = निश्चय नै
**तव** = हजुरको
**अवतारः** = जन्म
**खलनिग्रहाय** = दुष्टहरूको निग्रहका लागि भएको हो
**रिपोः** = शत्रुका लागि र
**सुतानाम् अपि** = छोराहरूका लागि पनि
**तुल्यदृष्टिः** = समान दृष्टि राख्नुहुने हजुरले
**फलम्** = कर्मको फल
**अनुशंसन् एव** = नापजोख गरेर मात्र
**दमं** = दण्ड
**धत्से** = दिनुहुन्छ

**वाक्यार्थ–** हे भगवान्! हजुरको अवतार निश्चय नै दुष्टको निग्रहका लागि भएको हो। अतः हजुरले पाप कर्म गर्नुहुने हाम्रा यी पतिलाई दिनुभएको दण्ड न्यायसङ्गत छ। शत्रु र आफ्ना छोराहरूलाई समान दृष्टिले हेर्नुहुने हजुर त केवल कर्मको फल नापजोख गरेर मात्र दण्ड दिनुहुन्छ।

**विवरण–** यहाँ नागपत्नीहरूले आफ्ना पतिले गरेको अपराधलाई स्वीकार गर्दै भगवान्‌को स्तुति गरेका छन्। भगवान्‌द्वारा दिइने दण्ड-अनुग्रह सबै न्यायपूर्वक हुने गर्दछन्। भगवान् मर्यादाका रक्षक हुनुहुन्छ, त्यसैले उहाँले लोकमर्यादालाई मिची आफूखुसी दण्ड-अनुग्रह गर्नुहुन्न। भगवान्‌ले कालियलाई दिनुभएको दण्ड **न्याय्य** अर्थात् एकदम ठिक छ भनी नागपत्नीहरूले यही कुरा दर्साएका छन्। सामान्य मानिसहरूले शत्रु र पुत्र आदिमा भेददृष्टि राखे जस्तो भगवान्‌ले कसैलाई मित्र र शत्रुको रूपमा देख्नुहुन्न। उहाँ त समदृष्टिवाला हुनुहुन्छ। यद्यपि भगवान्‌को नजिकमा जाने भक्तहरू दुःखको बन्धनबाट चाँडै नै छुट्‌दछन्, तर यो भक्तहरूको दुःखनाश पनि उहाँले न्यायपूर्वक नै गर्नुभएको हुन्छ। भक्तहरूका लागि भगवान्‌को कृपा ज्यादै महत्त्वपूर्ण हुन्छ, उहाँले तिनलाई तत्काल कृपा नगरी कर्मफलको जिम्मामा छोडिदिने हो भने भक्तहरूको बेहाल हुन्छ, तर त्यही तात्कालिक कृपा पनि भगवान्‌को लागि भने विषमता या पक्षपात नभई न्यायरूप नै हुन्छ। जसरी जाडोबाट आत्तिएका मान्छेले प्रकृतिको नियमलाई कुर्ने हो भने जाडो जित्न अरु तीन-चार महिना पर्खिनुपर्छ, तर हिमालको ठन्डीको बीचमा पनि यदि आगो बाल्ने हो भने त्यस विशेष व्यवस्थाले उनीहरूलाई तत्कालै ठन्डीबाट बचाइदिन्छ। कर्मबन्धनबाट आत्तिई भगवान्‌को शरणमा परेका प्राणीहरूलाई भगवान्‌को कृपा हुनु यस्तै विशेष व्यवस्था हो। आगो ताप्नेहरू सबै तत्काल जाडोको कष्टबाट मुक्त हुन सक्छन्, त्यसै गरी भगवान्‌को शरणमा जानेहरू पनि सांसारिक दुःखबाट छुट्छन्। यो नियमसम्मत विशेष व्यवस्था हो। त्यसकारण भगवान्‌का सबै दण्ड-अनुग्रह आदि काम न्यायपूर्वक हुन्छन्। न्यायपूर्वक दण्ड दिइरहँदा पनि उहाँको मनभित्र भने त्यो व्यक्तिको कल्याणकै कामना हुन्छ। यस स्तुतिप्रसङ्गमा नागपत्नीहरूले तीन प्रकारले भगवान्‌को स्तुति गरेका छन्। पहिले ३३ देखि ३८ सम्मका छ ओटा श्लोकमा भगवान्‌ले दिनुभएको दण्डलाई अनुमोदन गरिएको छ। त्यसपछि ३९ देखि ४८ सम्मका दश श्लोकमा भगवान्‌लाई दश रूपमा प्रणाम गरिएको छ भने त्यसपछिका ४९ देखि ५३ सम्मका पाँच श्लोकमा कालियलाई अनुग्रह गर्ने प्रार्थना गरिएको छ।

**अनुग्रहोऽयं भवतः कृतो हि नो दण्डोऽसतां ते खलु कल्मषापहः।**
**यद् दन्दशूकत्वममुष्य देहिनः क्रोधोऽपि तेऽनुग्रह एव सम्मतः॥ ३४ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**भवतः** = हजुरद्वारा
**नः** = हामीहरूलाई
**अयं** = यो
**अनुग्रहः** = ठुलो कृपा
**कृतः** = गरिएको हो
**खलु** = निश्चय नै
**ते** = हजुरद्वारा दिइएको
**दण्डः** = सजाय
**असतां** = पापीहरूका लागि
**कल्मषापहः** = पाप नाश गरिदिने खालको छ
**यत्** = किनभने
**दन्दशूकत्वम्** = सर्परूप (प्राप्त गरेको)
**अमुष्य** = यस
**देहिनः** = जीवमाथिको
**क्रोधः अपि** = क्रोध पनि
**ते** = हजुरको
**अनुग्रहः एव** = कृपा नै
**सम्मतः** = मानिएको छ

**वाक्यार्थ–** हे भगवान् ! हजुरद्वारा हाम्रा पतिलाई दिइएको यो दण्ड हजुरले हामीमाथि गर्नुभएको कृपा हो। हजुरद्वारा दिइएको दण्डले नै पापीहरूको पाप नष्ट गरिदिन्छ। नागरूपधारी यस जीवमाथि हजुरले जुन क्रोध गर्नुभयो त्यसलाई पनि हामीले हजुरको कृपा नै मानेका छौं।

**तपः सुतप्तं किमनेन पूर्वं निरस्तमानेन च मानदेन।**
**धर्मोऽथ वा सर्वजनानुकम्पया यतो भवांस्तुष्यति सर्वजीवः॥ ३५॥**

**पदार्थ–**
(हे भगवान्)
**निरस्तमानेन** = अभिमानरहित भएर
**मानदेन च** = अरूलाई सम्मान दिएर
**अनेन** = यी कालिय नागद्वारा
**पूर्वं** = पूर्वजन्ममा
**किम्** = कुनै
**तपः** = तपस्या
**सुतप्तं** = गरिएको थियो होला
**अथ वा** = अथवा
**सर्वजनानुकम्पया** = सम्पूर्ण प्राणीमाथि दया गरेर
**धर्मः** = धर्म (गरिएको होला)
**यतः** = जुन तपस्या र धर्मबाट
**सर्वजीवः** = सम्पूर्ण प्राणीका जीवनदाता
**भवान्** = हजुर
**तुष्यति** = प्रसन्न हुनुहुन्छ

**वाक्यार्थ–** अवश्य पनि पूर्जजन्ममा यी कालिय नागले आफू अभिमानरहित भएर सबैको सम्मान गर्दै कुनै ठुलो तपस्या गरेका थिए होला। अथवा सम्पूर्ण प्राणीहरूमा दया गर्दै यिनले धर्म गरेका थिए होला। त्यसैले त सम्पूर्ण प्राणीका जीवनदाता हजुर यिनीमाथि प्रसन्न हुनुभयो।

**विवरण–** यो श्लोकमा नागपत्नीहरूले कालियले भगवान्को चरणलाई शिरमा धारण गर्न पूर्वजन्ममा के त्यस्तो विशेष पुण्यकर्म गरेछन् भनी विचार गरेका छन्। अनेकौं जन्मको पुण्य उदय नभई भगवान्को चरणस्पर्श पाउन सकिन्न। धर्म दुई प्रकारको हुन्छ– एउटा प्रवृत्तिधर्म र अर्को निवृत्तिधर्म। निवृत्ति धर्ममा सबै विषय त्यागी तपस्या गर्नु मुख्य छ भने प्रवृत्तिधर्ममा सबै प्राणीहरूको हित हुने गरी सत्कर्म गर्नु मुख्य छ। यी दुबैको आचरण नभई त्यसको फल पाइन्न। तपस्यामा **निरस्तमान** वा अहङ्काररहित हुनु आवश्यक छ भने कर्महरूमा **सर्वजनानुकम्पा** वा सबै जीवहरूप्रति करुणभावले युक्त हुनु आवश्यक छ। तपस्याले अरू सबै दोषहरूलाई हटाउन सक्दछ, तर अहङ्कारलाई त्यसले पनि हटाउन सक्दैन। अहङ्कारले जति तपस्या गरे पनि रुन्-रुन् म ठुलो तपस्वी हुँ भन्ने अभिमान बढाई तपस्यालाई निष्फल बनाइदिन सक्छ। पक्कै कालियले अभिमानरहित भई ठुलो तपस्या गरेछन्, त्यसैले उनले भगवान्को कृपा प्राप्त गरे भन्ने नागपत्नीहरूको विचार छ। प्राणीहरूको हित हुने गरी गरिएको धर्म नै सफल हुन्छ, अर्कालाई दुःख दिई लुटपाट गरी ल्याएको सम्पत्तिले पुण्यकर्म गर्नुको केही अर्थ छैन। भगवान् **सर्वजीवः** अर्थात् सबै प्राणीरूप हुनुहुन्छ। त्यसैले सबै प्राणीको हित हुने कर्मले नै उहाँ प्रसन्न हुनुहुन्छ। परपीडक कालियले कहिले त्यसरी सबैको हित हुने सत्कर्म गरेछन्, जसको कारण आज भगवान्को चरणस्पर्श पाइरहेका छन्। यो जन्ममा त अहङ्कारी कालियबाट अभिमानरहित भई तपस्या गर्नु पनि सम्भव छैन, अनि परपीडक भएकाले सबैको हित हुने धर्म गर्नु पनि यिनबाट सम्भव छैन, तर ती दुबै कुरा नभई भगवान् प्रसन्न नहुने हुनाले र कालियसँग भगवान् प्रसन्न भई

चरणस्पर्श प्रदान गर्नुभएकाले यसबाट कालियले पहिल्यै तपस्या र सत्कर्म गरेको सिद्ध हुन्छ भन्ने नागपत्नीहरूको आशय हो।

**कस्यानुभावोऽस्य न देव विद्महे तवाङ्घ्रिरेणुस्पर्शाधिकारः।**
**यद्वाञ्छया श्रीर्ललनाचरत् तपो विहाय कामान् सुचिरं धृतव्रता ॥ ३६ ॥**

**पदार्थ–**
**देव** = हे भगवान्
**अस्य** = यी कालियले
**तवाङ्घ्रिरेणुस्पर्शाधिकारः** = हजुरका पाउको धुलोलाई स्पर्श गर्ने जुन अधिकार प्राप्त गरे, त्यो
**कस्य** = कसको
**अनुभावः** = कृपा हो
**न विद्महे** = हामीले बुझ्न सकेका छैनौँ
**यद्वाञ्छया** = जुन चरणधुलोको स्पर्शका लागि
**ललना** = हजुरकी पत्नी
**धृतव्रता** = व्रत लिएकी
**श्रीः** = लक्ष्मीजीले
**कामान्** = सम्पूर्ण भोगलाई
**विहाय** = त्यागेर
**सुचिरं** = धेरै समयसम्म
**तपः** = तपस्या
**आचरत्** = गर्नुभएको थियो

**वाक्यार्थ–** हे भगवान् ! यी कालियले हजुरका पाउको धुलोलाई स्पर्श गर्ने जुन अधिकार प्राप्त गरे, त्यो कसको कृपा हो ? हामीले बुझ्न सकेका छैनौँ। हजुरका पाउको धुलोको स्पर्श गर्न हजुरकी पत्नी लक्ष्मीजीले समेत व्रत लिई सम्पूर्ण भोगलाई त्यागेर धेरै समयसम्म तपस्या गर्नुभएको थियो।

**न नाकपृष्ठं न च सार्वभौमं न पारमेष्ठ्यं न रसाधिपत्यम्।**
**न योगसिद्धीरपुनर्भवं वा वाञ्छन्ति यत्पादरजःप्रपन्नाः ॥ ३७ ॥**

**पदार्थ–**
(हे भगवान्)
**यत्पादरजःप्रपन्नाः** = जुन हजुरको पाउको धुलोको शरणमा परेका भक्तहरू
**नाकपृष्ठं न** = स्वर्गको उच्चासन चाहँदैनन्
**सार्वभौमं न** = पृथिवीको सार्वभौम राज्य पनि चाहँदैनन्
**पारमेष्ठ्यं च न** = ब्रह्मपद पनि चाहँदैनन्
**रसाधिपत्यम् न** = रसातलको राज्य पनि चाहँदैनन्
**योगसिद्धीः** = योगद्वारा प्राप्त गरिने सिद्धिहरू तथा
**अपुनर्भवं वा** = पुनः जन्मनु नपर्ने मुक्तिलाई समेत
**न वाञ्छन्ति** = चाहँदैनन्

**वाक्यार्थ–** हे भगवान् ! हजुरको पाउको धुलोको शरणमा परेका भक्तहरू स्वर्गको उच्चासन होस् वा पृथिवीको सार्वभौम राज्य, रसातलको राज्य होस् वा ब्रह्मपद यी केही पनि चाहँदैनन्। उनीहरू योगसिद्धिहरू र जन्ममरणको चक्करबाट छुट्कारा दिलाउने मुक्ति समेत चाहँदैनन्।

**तदेष नाथाप दुरापमन्यैस्तमोजनिः क्रोधवशोऽप्यहीशः।**
**संसारचक्रे भ्रमतः शरीरिणो यदिच्छतः स्याद् विभवः समक्षः ॥ ३८ ॥**

**पदार्थ–**
**नाथ** = हे नाथ
**यद्** = जुन चरणको धुलोलाई

**इच्छतः** = चाहँदै
**संसारचक्रे** = संसारचक्रमा
**भ्रमतः** = घुमिरहेका
**शरीरिणः** = प्राणीहरूको
**समक्षः** = अगाडि
**विभवः** = सम्पूर्ण सम्पत्ति
**स्यात्** = स्वतः प्राप्त हुन्छ
**अन्यैः** = अरू अभक्तद्वारा
**दुरापम्** = प्राप्त गर्न नसकिने
**तत्** = त्यो हजुरको पाउको धुलोको स्पर्श
**एषः** = यी
**अहीशः** = सर्पराज कालियले
**तमोजनिः** = तमोगुणबाट जन्मिएका
**क्रोधवशः अपि** = क्रोधको वशमा रहेका भए पनि
**आप** = प्राप्त गरे

**वाक्यार्थ–** हे नाथ ! हजुरको चरणको धुलो प्राप्त गर्ने इच्छाले मात्र संसारी प्राणीहरूका अगाडि सम्पूर्ण भोग, वैभव स्वतः आइपुग्छन्। अरू अभक्तले प्राप्त गर्न नसक्ने त्यस्तो दुर्लभ चरणधुलोलाई तमोगुणी र क्रोधको वशमा रहेका भए पनि यी कालियले प्राप्त गरे।

**नमस्तुभ्यं भगवते पुरुषाय महात्मने।**
**भूतावासाय भूताय पराय परमात्मने॥ ३९॥**

**पदार्थ–**
**पुरुषाय** = परमपुरुष
**महात्मने** = उदार हृदय भएका
**भूतावासाय** = सम्पूर्ण भौतिक पदार्थहरूका आश्रयस्थल
**भूताय** = सर्वभूतरूप
**पराय** = परब्रह्म
**परमात्मने** = परमात्मा
**भगवते** = भगवत्स्वरूप
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार गर्दछौँ

**वाक्यार्थ–** परमपुरुष, उदार हृदय भएका, सम्पूर्ण भौतिक पदार्थहरूका आश्रयस्थल, सर्वभूतरूप, परब्रह्म, परमात्मा अनि भगवत्स्वरूप हजुरलाई हामी नमस्कार गर्दछौँ।

**ज्ञानविज्ञाननिधये ब्रह्मणेऽनन्तशक्तये।**
**अगुणायाविकाराय नमस्तेऽप्राकृताय च॥ ४०॥**

**पदार्थ–**
**ज्ञानविज्ञाननिधये** = शास्त्रीय ज्ञान र अनुभव विज्ञानका खानी
**अनन्तशक्तये** = अनन्त शक्ति सम्पन्न
**ब्रह्मणे** = परब्रह्मस्वरूप
**अगुणाय** = निर्गुण
**अविकाराय** = निर्विकार (र)
**अप्राकृताय च** = जन्म, मृत्युरूप प्रकृतिदेखि पनि परका
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर ज्ञान र विज्ञानका खानी हुनुहुन्छ। हजुर नै अनन्त शक्ति सम्पन्न निर्विकार परब्रह्म परमात्मा हुनुहुन्छ। त्यस्ता जन्ममृत्युरूप प्रकृतिदेखि परका परमात्मा हजुरलाई नमस्कार छ।

**कालाय कालनाभाय कालावयवसाक्षिणे।**
**विश्वाय तदुपद्रष्ट्रे तत्कर्त्रे विश्वहेतवे॥ ४१॥**

**पदार्थ–**
**कालाय** = कालस्वरूप
**कालनाभाय** = कालका आश्रय

स्वरूप
**कालावयवसाक्षिणे** = कालका अवयवहरू (घडी, पला आदि )का साक्षी
**विश्वाय** = विश्वस्वरूप
**तदुपद्रष्ट्रे** = विश्वका साक्षी
**तत्कर्त्रे** = विश्वका कर्ता र
**विश्वहेतवे** = विश्वका कारणरूप (हजुरलाई नमस्कार छ)

**वाक्यार्थ–** हे भगवान् ! हजुर कालस्वरूप हुनुहुन्छ। हजुर नै कालका आश्रय र घडी, पला आदि कालका अवयवहरूका साक्षी हुनुहुन्छ। हजुर नै विश्वस्वरूप, विश्वका साक्षी र विश्वका कारण समेत हुनुहुन्छ। यस्ता हजुरलाई नमस्कार छ।

**भूतमात्रेन्द्रियप्राणमनोबुद्ध्याशयात्मने ।**
**त्रिगुणेनाभिमानेन गूढस्वात्मानुभूतये ॥ ४२ ॥**

**पदार्थ–**
**भूतमात्रेन्द्रियप्राणमनोबुद्ध्या-शयात्मने** = पञ्च महाभूत, तिनका पञ्च तन्मात्रा, इन्द्रिय, प्राण, मन, बुद्धि र चित्तस्वरूप
**त्रिगुणेन अभिमानेन** = सत्त्व, रज र तमरूप त्रिगुणात्मक अहङ्कारद्वारा
**गूढस्वात्मानुभूतये** = आफ्नो प्रतीतिलाई लुकाउनुभएका (हजुरलाई नमस्कार छ)

**वाक्यार्थ–** हे भगवान् ! हजुर पञ्च महाभूत, तिनका कार्य पञ्च तन्मात्रा, इन्द्रिय, मन, बुद्धि र चित्तस्वरूप हुनुहुन्छ। सत्त्व, रज र तमरूप त्रिगुणात्मक अहङ्कारद्वारा हजुरले आफ्नो प्रतीतिलाई लुकाउनुभएको छ। यस्ता हजुरलाई नमस्कार छ।

**विवरण–** माथिका दुई श्लोकहरूमा परमात्मा सर्वरूप हुनुहुन्छ भनी उहाँको स्तुति गरिएको छ। परमात्मा कालस्वरूप हुनुहुन्छ। कालनाभ शब्दको अर्थ हुन्छ– कालशक्तिको आश्रय। **कालावयवसाक्षी** पदको अर्थ हो सृष्टि आदि वेलाका पनि साक्षी। यद्यपि काल निरवयव वस्तु हो। यसमा वास्तवमा भूत, भविष्यत् र वर्तमानको भेद पनि छैन, तर प्राणीहरूको दृष्टिमा त्यसमा अतीत-अनागतको कल्पना गरिन्छ। त्यो कल्पना त्यस्तै हो, जस्तो निरवयव एवं अखण्ड आकाशलाई पनि मानिसहरू आफ्नो ठाउँभन्दा पूर्वी आकाश, पश्चिमी आकाश भनी छुट्याउँछन्। यसै गरी मानिसले आफूलाई केन्द्रमा राखी त्यसभन्दा पूर्वको समय भूतकाल, पछि आउने समय भविष्यत् काल आदि भनी छुट्याउँछन्। आफू नहुने हो भने कालको भेद पनि प्रतीत हुँदैन। सृष्टि आदिद्वारा नै कालमा अवयव या भेदको कल्पना हुन्छ, परमात्मा यसको पनि साक्षी हुनुहुन्छ। भूत भनेर पञ्चमहाभूत, मात्रा भनेर रूप, रस आदि पञ्च तन्मात्रा अनि इन्द्रिय, प्राण, बुद्धि र चित्तरूप पनि परमात्मा नै हुनुहुन्छ। त्रिगुणमय अहङ्कारद्वारा आत्मानुभूति ढाक्ने पनि परमात्मा नै हुनुहुन्छ। परमात्मामा अहङ्कार सम्भव छैन र यसबाट उहाँको आत्मानुभूति ढाकिँदा पनि ढाकिँदैन। यदि परमात्माको स्वरूपज्ञान पनि ढाकियो भने त परमात्मा पनि जीवजस्तै भइहाल्यो। त्यसैले यहाँ गूढस्वात्मानुभूतिको अर्थ **गूढा स्वांशभूतानां जीवानां अनुभूतिः येन** अर्थात् आफ्ना अंशभूत जीवहरूको स्वरूपज्ञानलाई त्रिगुणमय अहङ्कारूपले ढाक्ने परमात्मा भन्ने गर्नुपर्दछ। यसरी यहाँ सर्वरूपमा परमात्माको स्तुति गरिएको छ।

**नमोऽनन्ताय सूक्ष्माय कूटस्थाय विपश्चिते ।**
**नानावादानुरोधाय वाच्यवाचकशक्तये ॥ ४३ ॥**

**पदार्थ–**
**अनन्ताय** = अन्तरहित
**सूक्ष्माय** = सूक्ष्म
**कूटस्थाय** = कूटस्थस्वरूप
**विपश्चिते** = सर्वज्ञस्वरूप
**नानावादानुरोधाय** = विभिन्न मतमतान्तरका रूपमा प्रसिद्ध
**वाच्यवाचकशक्तये** = वाच्य (अर्थ), वाचक (शब्द) तथा यी दुईको सम्बन्धस्वरूप (हजुरलाई)
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** अन्तरहित, सूक्ष्म, कूटस्थस्वरूप, सर्वज्ञ, विभिन्न मतमतान्तरका अधिष्ठाता अनि शब्द, शब्दको अर्थ तथा यी दुईको सम्बन्धका रूपमा रहनुभएका यस्ता हजुरलाई नमस्कार छ।

**नमः प्रमाणमूलाय कवये शास्त्रयोनये ।**
**प्रवृत्ताय निवृत्ताय निगमाय नमो नमः ॥ ४४ ॥**

**पदार्थ–**
**प्रमाणमूलाय** = प्रत्यक्ष, अनुमान आदि प्रमाणका मूल हुनुभएका भगवान्लाई
**नमः** = नमस्कार छ
**कवये** = कविस्वरूप
**शास्त्रयोनये** = शास्त्रहरूका उत्पत्तिस्थल
**प्रवृत्ताय** = प्रवृत्तिमार्गका (र)
**निवृत्ताय** = निवृत्तिमार्गका प्रवर्तक
**निगमाय** = वेदस्वरूप (हजुरलाई)
**नमो नमः** = बारम्बार नमस्कार छ

**वाक्यार्थ–** प्रत्यक्ष, अनुमान आदि प्रमाणका मूल हुनुभएका भगवान्लाई नमस्कार छ। सम्पूर्ण शास्त्रका मूल कविस्वरूप, प्रवृत्ति र निवृत्ति मार्गका प्रवर्तक एवं वेदस्वरूप हजुरलाई बारम्बार नमस्कार छ।

**विवरण–** यस श्लोकमा परमात्मालाई **प्रमाणमूल** भनिएको छ। इन्द्रिय आदि प्रमाणहरूको मूल परमात्मा नै हुनुहुन्छ। बाहिरी विषयहरूलाई जान्न अनादि कालदेखि इन्द्रियहरूको प्रवृत्ति भइरहेको छ। ती इन्द्रियहरू आफ्नो विषय शब्द, स्पर्श आदिमा निरन्तर कसरी प्रवृत्त भइरहेका होलान् ? यी आफैं प्रवृत्त हुने चेतनावाला छन् कि कोहीद्वारा प्रेरित छन् ? यस्तै जिज्ञासाको उत्तरमा केनोपनिषद्मा चेतन आत्मा नै ती इन्द्रियहरूको प्रवृत्तिको मूल कारण या प्रयोजक हो भनिएको छ। इन्द्रियहरू स्वयंमा चेतन होइनन् अपितु कान, मन, आँखामा पनि वास्तविक कान, आँखा आदि रूपले ब्रह्म नै छ भनी त्यहाँ बताइएको छ। **प्रमाण** भनेर वेदान्तशास्त्रमा अन्तःकरणको वृत्तिलाई लिइन्छ। प्रमाणको काम प्रमा अर्थात् यथार्थ ज्ञान गराउनु हो। वृत्ति स्वयं जड भएकाले यो ज्ञान गराउन असमर्थ छ। त्यसैले वृत्तिमा परेको चैतन्यको प्रतिबिम्बले नै विषयको ज्ञान गराउन सक्दछ। अतः प्रमाण (अन्तःकरण वृत्ति)लाई प्रमाण बनाउने मूल तत्त्व आत्मचैतन्य हो भन्ने दोस्रो अर्थ पनि यसबाट निस्किन्छ। अथवा प्रमाणको उद्‌गम बिन्दु प्रमाता हो। यदि आत्मा प्रमातारूपले नभएको भए प्रमाणरूप अन्तःकरणवृत्ति कसरी बन्दथ्यो ? जसरी कुलोको मूल खोलो

हो, त्यसै गरी प्रमातारूप आत्मा प्रमाणको मूल हो भन्ने तेस्रो अर्थ पनि निस्कन्छ। चौथो अर्थ गर्दा परमात्मा प्रमाणमूल अर्थात् प्रमाणपूर्वक नै जान्न योग्य हुनुहुन्छ। **दृश्यते त्वग्र्यया बुद्ध्या सूक्ष्मया सूक्ष्मदर्शिभिः** अर्थात् सूक्ष्म पदार्थलाई पनि जान्न सक्ने तीक्ष्ण एवं शुद्ध बुद्धिद्वारा परमात्मालाई देख्न सकिन्छ भनी कठोपनिषद् (१/३/१२)मा बताइएको छ। **कवि** शब्दको अर्थ नित्य प्रकाशित हो। परमात्मा इन्द्रिय आदिको अपेक्षा विना नित्य प्रकाशित हुनुहुन्छ त्यसकारण परमात्मा कवि हुनुहुन्छ। **शास्त्रयोनि** शब्दको दुई अर्थ हुन्छन्– एउटा **शास्त्रस्य योनिः**, अर्को **शास्त्रं योनिः (प्रमाणं) यस्य। शास्त्रस्य योनिः** यो तत्पुरुष समास गर्दा शास्त्रको उत्पत्तिस्थल भन्ने बुझिन्छ। परमात्माले सास फेर्दा वेदहरू उत्पन्न भएका हुन्, त्यसकारण शास्त्रयोनि परमात्मा हुनुहुन्छ। **शास्त्रं योनिः प्रमाणं यस्य** यो बहुव्रीहि समास गर्दा शास्त्र नै जसको प्रमाण छ भन्ने अर्थ हुन्छ। शास्त्र नै जसको प्रमाण छ त्यो पनि परमात्मा नै हुनुहुन्छ। उपनिषत्प्रमाणद्वारा मात्र परमात्माको ज्ञान हुन सक्छ। निरपेक्ष आत्मवस्तुको सिद्धि अनुमान आदिद्वारा हुन सक्दैन किनभने ती आफैँ पक्ष, साध्य, हेतु र व्याप्ति (तिनको सम्बन्ध)को आधारमा सिद्ध हुन्छन्। प्रत्यक्षद्वारा द्वैत जगत्को ज्ञान हुन्छ, अद्वैत तत्त्व त्यसको विषय होइन। प्रत्यक्ष त भ्रम, प्रमाद आदि दोषले युक्त छ। प्रत्यक्ष प्रमाणले आकाशलाई नीलो देखाउँछ, सूर्यलाई हत्केलाभन्दा पनि सानो देखाउँछ। उपनिषत्प्रमाणबाट आत्मस्वरूपको निश्चय भइसकेपछि भने त्यसको मनन गर्ने वेलामा प्रत्यक्ष आदि प्रमाण काम लाग्छन्। द्वैत प्रपञ्चको क्षणिकत्व जान्न र अद्वैत आत्माको विचार गर्न प्रत्यक्ष, अनुमान आदि प्रमाणहरूको उपयोग हुन्छ। यसैले ब्रह्मसूत्रको तेस्रो शास्त्रयोनित्वाधिकरणमा शङ्कराचार्यले उपनिषद् शास्त्रद्वारा नै ब्रह्मबोध हुन सक्छ भनी बताउनुभएको छ। **तं त्वौपनिषदं पुरुषं पृच्छामि** (बृहदारण्यकोपनिषद्, ३/९/२६) भनी उपनिषद्मा परमात्मालाई औषनिषद पुरुष भनिएको छ। **उपनिषदा दृष्टः पुरुषः** अथवा उपनिषद्द्वारा देखिएको पुरुष नै औपनिषद पुरुष हो। अतः उपनिषद्द्वारा मात्र जान्न सकिने आत्मा नै औपनिषद पुरुष हो। ब्रह्म शास्त्रयोनि हो भन्नुको पनि यही अर्थ हो। यसरी यहाँ अनेक रूपमा परमात्माको स्तुति गरिएको छ।

**नमः कृष्णाय रामाय वसुदेवसुताय च।**
**प्रद्युम्नायानिरुद्धाय सात्वतां पतये नमः॥ ४५॥**

**पदार्थ–**
**वसुदेवसुताय** = वसुदेवका छोरा
**कृष्णाय** = श्रीकृष्ण र
**रामाय च** = बलराम
भगवान्लाई
**नमः** = नमस्कार छ
**प्रद्युम्नाय** = प्रद्युम्नरूप र
**अनिरुद्धाय** = अनिरुद्धस्वरूप
**सात्वतां पतये** = भक्तहरूका (यादवहरूका) रक्षक हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** वसुदेवका छोरा श्रीकृष्ण र बलराम भगवान्लाई नमस्कार छ। प्रद्युम्नरूप र अनिरुद्धस्वरूप एवं भक्तका रक्षक हजुरलाई नमस्कार छ।

**विवरण–** यस श्लोकमा चतुर्मूर्तिरूपमा भगवान्को स्तुति गरिएको छ। वैष्णव सिद्धान्तमा यसलाई चतुर्व्यूह भनिन्छ। परमात्मा एउटै भए पनि भक्तको अनुग्रहका लागि उहाँ पाँच रूपमा

अवस्थित हुनुहुन्छ। ती पाँच रूप हुन्– अर्चा, विभव, व्यूह, सूक्ष्म र अन्तर्यामी। भगवान्का अर्चावतार पशुपतिनाथ, मुक्तिनाथ आदि प्रसिद्ध ठाउँमा रहेका प्रतिमाहरू र काली गण्डकीका शालग्राम शिलाहरू हुन्। राम, श्रीकृष्ण आदिको रूपमा भगवान्ले लिनुभएका अवतारहरू भगवान्का विभवरूप हुन्। प्रद्युम्न, अनिरुद्ध, सङ्कर्षण र वासुदेव चार रूप भगवान्का व्यूहरूप हुन्। सर्वज्ञ सर्वशक्तिमान् परमात्मा वासुदेव भगवान्को सूक्ष्म रूप हुनुहुन्छ। हरेक प्राणीको शरीरभित्र जीवलाई नियन्त्रण गर्ने परमात्मा भगवान्को अन्तर्यामी रूप हुनुहुन्छ। व्यूहावतारमा वासुदेव पहिलो व्यूह हो, यसबाट नै प्रद्युम्न, अनिरुद्ध, सङ्कर्षणको उत्पत्ति हुन्छ। सूक्ष्मरूपका पर वासुदेव नै आफूसहित चतुर्व्यूहको रूपमा देखिनुहुन्छ। चतुर्व्यूहमध्ये सङ्कर्षण बुद्धितत्त्व या जीवतत्त्वको नियन्ता, प्रद्युम्न मनस्तत्त्वको नियन्ता र अनिरुद्ध अहङ्कारतत्त्वको नियन्ता हुनुहुन्छ।

श्रीकृष्णका उपासकहरूले भने पर वासुदेव भनी लक्ष्मीपति वैकुण्ठवासी नारायणलाई नभई गोलोकवासी राधारमण श्रीकृष्णलाई मान्दछन्। उहाँ नै चतुर्व्यूहको रूपमा देखिनुहुन्छ। पाञ्चरात्रागम अनुसार पहिलो वासुदेव व्यूहबाट सङ्कर्षण आदिको उत्पत्ति भएको मानिन्छ।

अद्वैत वेदान्तसिद्धान्त अनुसार भने वासुदेवबाट सङ्कर्षणरूप जीवको उत्पत्ति हुने होइन। जीव र ब्रह्मको अभेदप्रतिपादनमा नै सम्पूर्ण उपनिषद्वाक्यहरूको सङ्गति हुनाले जीवहरूलाई ब्रह्मरूप एवं नित्य मान्नुपर्दछ। ब्रह्मसूत्रकार भगवान् वेदव्यासले **नात्माश्रुतेः नित्यत्वाच्च ताभ्यः** अर्थात् जीव नित्य ब्रह्मरूप भएकाले त्यो उत्पन्न हुँदैन भन्ने कुरो बताउनुभएको छ। अद्वैतसिद्धान्तमा पनि वासुदेवलाई मूल परमात्मरूप अनि सङ्कर्षण, प्रद्युम्न र अनिरुद्धलाई क्रमशः प्राणतत्त्व, मनस्तत्त्व र अहङ्कारको नियन्ता मान्न सकिन्छ।

वल्लभाचार्यका अनुसार यस श्लोकमा **नमः कृष्णाय** भनी परवासुदेव भगवान् श्रीकृष्णलाई नै नमस्कार गरिएको हो। उहाँका चार व्यूहमध्ये **राम** पदले सङ्कर्षणलाई, **वसुदेवसुत** पदले वासुदेवलाई बताएको छ। प्रद्युम्न र अनिरुद्धसमेत यी चार व्यूहावतार भगवान्ले भक्तहरूको कृपाकै लागि लिनुहुन्छ। भगवान् भक्तहरूका एक मात्र पति हुनुहुन्छ, त्यसैले उनीहरूको कृपा र रक्षाकै लागि उहाँले अनेक रूप धारण गर्नुहुन्छ भन्ने सङ्केत **सात्वतां पतिः** यस पदबाट पाइन्छ।

**नमो गुणप्रदीपाय गुणात्मच्छादनाय च।**
**गुणवृत्त्युपलक्ष्याय गुणद्रष्ट्रे स्वसंविदे ॥ ४६ ॥**

**पदार्थ–**
**गुणप्रदीपाय** = अन्तःकरण आदि गुण र तिनका वृत्तिका प्रकाशक
**गुणात्मच्छादनाय** = गुणहरूद्वारा ढाकिनुभएका
**गुणवृत्त्युपलक्ष्याय** = अन्तःकरण आदि गुण र गुणका वृत्तिहरूद्वारा जान्न सकिने
**गुणद्रष्ट्रे** = गुण र गुणवृत्तिका साक्षी
**स्वसंविदे च** = स्वयंप्रकाशरूप हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवान्! हजुर अन्तःकरण आदि गुण र तिनका वृत्तिका प्रकाशक हुनुहुन्छ तथा अहङ्कार आदिद्वारा ढाकिनुहुन्छ। फेरि तिनै गुण र गुणवृत्तिहरूद्वारा नै हजुरलाई जान्न सकिन्छ।

त्यस्ता सम्पूर्ण गुण र गुणवृत्तिका साक्षी स्वयंप्रकाशरूप प्रभुलाई नमस्कार छ।

**विवरण–** यस श्लोकमा परमात्मालाई **गुणप्रदीप, गुणद्रष्टा** आदि शब्दद्वारा स्तुति गरिएको छ। यहाँ गुण भनेर अन्तःकरण आदिलाई लिनुपर्दछ, तिनीहरूलाई प्रदीप्त या प्रकाशित गर्ने हुनाले परमात्मालाई **गुणप्रदीप** भनिएको हो। मन, बुद्धि, चित्त, अहङ्कार यो अन्तःकरणचतुष्टयको अधिष्ठाता बनी यिनलाई प्रकाशित या प्रेरित गर्ने भन्ने यसको तात्पर्य हो। **गुणात्मच्छादन** यो शब्दको अर्थ हुन्छ, ती गुणहरूद्वारा नै आफूलाई आच्छादित गरी एक भए तापनि अनेक रूपले प्रतीत हुने भन्ने हुन्छ। परमात्मा अनेक रूपले कसरी प्रतीत हुनुहुन्छ ? यसको उत्तर हो– **गुणवृत्त्युपलक्ष्य** अर्थात् चित्त, मन आदिका चेतना, सङ्कल्प आदि वृत्तिहरूद्वारा तिनका प्रेरक परमात्मा उपलक्षित हुनुहुन्छ। यो सबै भएर पनि उहाँ ती अन्तःकरण आदिसँग सम्बद्ध हुनुहुन्न। उहाँ तिनका प्रकाशक अनि स्वयंमा चाहिँ **स्वसंविद्** अर्थात् स्वयंप्रकाश तत्त्व हुनुहुन्छ।

केही टीकाकारहरूले यो श्लोकलाई श्रीकृष्णको ओखलमा बाँधिएको लीलाको तात्पर्य अनुकूल व्याख्या गरेका छन्। भगवान् **गुणप्रदीप** हुनुहुन्छ अर्थात् उहाँ भक्तवात्सल्य आदि गुणहरूलाई अनेक लीलाहरूद्वारा प्रकाशित गर्नुहुन्छ। गुण भनेको डोरी पनि हुन्छ। **मात्रा गुणैः आत्मानं छादयति** अर्थात् माता यशोदाद्वारा डोरीले बाँधिएकाले त्यसैद्वारा शरीर ढाकिएका हुनुहुन्छ। **गुणवृत्त्युपलक्ष्य** अर्थात् कम्मरमा डोरी बाँधिएको दामोदर आदि रूपले उहाँ उपलक्षित हुनुहुन्छ। अनि उहाँ डराई-डराई बारम्बार **गुणद्रष्टा** अर्थात् डोरीलाई हेरिरहनुभएको छ।

**अव्याकृतविहाराय सर्वव्याकृतसिद्धये ।**
**हृषीकेश नमस्तेऽस्तु मुनये मौनशीलिने ॥ ४७ ॥**

**पदार्थ–**
**हृषीकेश** = हे इन्द्रियका मालिक
**अव्याकृतविहाराय** = अव्याकृत मूल प्रकृतिमा नित्य विहार गर्ने
**सर्वव्याकृतसिद्धये** = सम्पूर्ण व्याकृत प्रकृतिको जन्म, स्थिति र लयका कारक
**मुनये** = मननशील
**मौनशीलिने** = मौन स्वभाव (आत्माराम) भएका
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = छ

**वाक्यार्थ–** इन्द्रियका मालिक हे प्रभु ! हजुर अव्याकृत मूल प्रकृतिमा नित्य विहार गर्नुहुन्छ। हजुर नै व्याकृत चराचर प्रकृतिको जन्म, स्थिति र लयका एक मात्र कारण हुनुहुन्छ। त्यस्ता मननशील आत्माराम प्रभुलाई नमस्कार छ।

**परावरगतिज्ञाय सर्वाध्यक्षाय ते नमः ।**
**अविश्वाय च विश्वाय तद्द्रष्ट्रेऽस्य च हेतवे ॥ ४८ ॥**

**पदार्थ–**
**परावरगतिज्ञाय** = पर रहेका (संसारातीत) र यहीँ रहेका (सांसारिक) सबैको गतिलाई जान्ने
**सर्वाध्यक्षाय** = सबैका साक्षी

| | | |
|---|---|---|
| **विश्वाय** = विश्वरूप र | **तद्द्रष्ट्रे** = संसारका द्रष्ट्रा र | **ते** = हजुरलाई |
| **अविश्वाय च** = संसारदेखि | **अस्य** = यस संसारका | **नमः** = नमस्कार छ |
| अलग | **हेतवे च** = कारणरूप | |

**वाक्यार्थ–** हे भगवान् ! हजुर संसारातीत र सांसारिक सबै वस्तुहरूको गतिलाई जान्नुहुन्छ। हजुर सबैका साक्षी र विश्वरूप भएर पनि संसारदेखि अलग हुनुहुन्छ। संसारका द्रष्ट्रा र कारणरूप हे प्रभु ! हजुरलाई नमस्कार छ।

**त्वं ह्यस्य जन्मस्थितिसंयमान् प्रभो गुणैरनीहोऽकृतकालशक्तिधृक् ।**
**तत्तत्स्वभावान् प्रतिबोधयन् सतः समीक्षयामोघविहार ईहसे ॥ ४९ ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **अमोघविहारः** = अमोघ लीला | **प्रतिबोधयन्** = जगाउँदै |
| **प्रभो** = हे भगवान् | गर्दै | **गुणैः** = प्रकृतिका गुणहरूद्वारा |
| **त्वं हि** = हजुर नै | **समीक्षया** = हेराइ मात्रले | **अस्य** = यस संसारको |
| **अनीहः** = इच्छारहित भएर पनि | **सतः** = संस्काररूपले रहेका | **जन्मस्थितिसंयमान्** = जन्म, |
| **अकृतकालशक्तिधृक्** = अनादि | **तत्तत्स्वभावान्** = ती–ती | स्थिति र प्रलय |
| कालशक्तिलाई स्वीकार गरेर | स्वभावहरूलाई | **ईहसे** = गर्नुहुन्छ |

**वाक्यार्थ–** हे भगवान् ! हजुर इच्छारहित भएर पनि अनादि कालशक्तिलाई स्वीकार गरेर अमोघ लीला गर्नुहुन्छ र संस्काररूपमा रहेका जीवका विभिन्न स्वभावलाई आफ्ना हेराइ मात्रले जगाउँदै प्रकृतिका विविध गुणहरूद्वारा यस संसारको जन्म, स्थिति र प्रलय गर्नुहुन्छ।

**तस्यैव तेऽमूस्तनवस्त्रिलोक्यां शान्ता अशान्ता उत मूढयोनयः ।**
**शान्ताः प्रियास्ते ह्यधुनावितुं सतां स्थातुश्च ते धर्मपरीप्सयेहतः ॥ ५० ॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **तस्य** = ती जगत्कर्ता | रक्षाका निम्ति |
| **त्रिलोक्यां** = तीनै लोकका (जो) | **ते** = हजुरका | **ईहतः** = चेष्टा गर्ने |
| **शान्ताः** = सत्त्वगुणी | **तनवः** = शरीरहरू हुन् | **ते** = हजुरका लागि |
| **अशान्ताः** = रजोगुणी | **हि** = निश्चय नै | **ते** = ती |
| **उत** = अथवा | **सतां** = सज्जनहरूको | **शान्ताः एव** = सत्त्वगुणी |
| **मूढयोनयः** = तमोगुणी जीवहरू | **अवितुं** = रक्षा गर्न र | जीवहरू नै |
| हुन् | **स्थातुः** = पालनका निम्ति तथा | **प्रियाः** = प्रिय बन्दछन् |
| **अमूः** = यी सबै | **धर्मपरीप्सया च** = धर्मको | |

**वाक्यार्थ–** हे प्रभु ! तीनै लोकमा जे–जति सत्त्वगुणी, रजोगुणी र तमोगुणी जीवहरू छन् ती सबै हजुरका शरीर हुन्। तापनि तिनीहरूमध्ये हजुरलाई सत्त्वगुणी प्राणीहरू नै ज्यादा प्रिय लाग्दछन्। किनभने हजुरको अवतार नै धर्म र सज्जनको रक्षा र पालनका निम्ति भएको हो।

**अपराधः सकृद् भर्त्रा सोढव्यः स्वप्रजाकृतः।**
**क्षन्तुमर्हसि शान्तात्मन् मूढस्य त्वामजानतः॥ ५१॥**

पदार्थ–
**शान्तात्मन्** = हे शान्तचित्त भगवान्
**स्वप्रजाकृतः** = आफ्ना प्रजाले गरेको
**अपराधः** = अपराध
**भर्त्रा** = मालिकद्वारा
**सकृत्** = एक पटक
**सोढव्यः** = सहन गरिनुपर्दछ (अतः)
**त्वाम्** = हजुरलाई
**अजानतः** = नजानेका
**मूढस्य** = यी मूर्ख कालियको (अपराधलाई)
**क्षन्तुम्** = क्षमा दिन
**अर्हसि** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे शान्तचित्त भगवान्! मालिकले आफ्ना प्रजाले गरेको अपराध एक पटक सहनुपर्दछ। अतः हजुरको महिमालाई नजानेका यी मूर्ख कालियले गरेको अपराधलाई क्षमा गरिदिनुहोस्।

**अनुगृह्णीष्व भगवन् प्राणांस्त्यजति पन्नगः।**
**स्त्रीणां नः साधुशोच्यानां पतिः प्राणः प्रदीयताम्॥ ५२॥**

पदार्थ–
**भगवन्** = हे भगवान्
**पन्नगः** = (अब) यी नागले
**प्राणान्** = प्राण
**त्यजति** = छोड्दछन् (अतः)
**अनुगृह्णीष्व** = कृपा गर्नुहोस् (र)
**साधुशोच्यानां** = सज्जनहरूद्वारा दया गरिने
**स्त्रीणां** = हामी स्त्रीहरूलाई
**नः** = हाम्रा
**पतिः** = पतिरूप
**प्राणः** = प्राण
**प्रदीयताम्** = दिनुहोस्

**वाक्यार्थ–** हे भगवान्! यी नाग मर्न लागेका छन्। सज्जनहरूद्वारा दया गरिने हामी स्त्रीहरूमाथि कृपा गरेर हाम्रा प्राणस्वरूप हाम्रा पति हामीलाई दिनुहोस्।

**विधेहि ते किङ्करीणामनुष्ठेयं तवाज्ञया।**
**यच्छ्रद्धयानुतिष्ठन् वै मुच्यते सर्वतोभयात्॥ ५३॥**

पदार्थ–
**ते** = हजुरका
**किङ्करीणाम्** = दासीलाई
**तव** = हजुरको
**आज्ञया** = आज्ञाद्वारा
**अनुष्ठेयं** = गर्नुपर्ने सेवा
**विधेहि** = बताउनुहोस्
**यत्** = किनभने
**श्रद्धया** = श्रद्धापूर्वक
**अनुतिष्ठन्** = पालन गर्नाले
**वै** = निश्चय नै (प्राणी)
**सर्वतोभयात्** = सबै प्रकारका भयबाट
**मुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** हे प्रभु! हामी हजुरका दासी हौँ। हामीले हजुरको के सेवा गरौँ? त्यो आज्ञा होस्। किनभने हजुरको आज्ञालाई श्रद्धापूर्वक पालन गर्नाले नै प्राणीहरू सबै प्रकारका भयबाट मुक्त

हुन्छन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्थं स नागपत्नीभिर्भगवान् समभिष्टुतः।**

**मूर्च्छितं भग्नशिरसं विससर्जाङ्घ्रिकुट्टनैः॥ ५४॥**

| पदार्थ– | **सः भगवान्** = उहाँ भगवान् श्रीकृष्णले पनि | **भग्नशिरसं** = टाउको फुटेको |
|---|---|---|
| **नागपत्नीभिः** = नागपत्नीहरूद्वारा | **अङ्घ्रिकुट्टनैः** = पाउका प्रहारहरूद्वारा | **मूर्च्छितं** = मूर्च्छा परेको कालियलाई |
| **इत्थं** = यसप्रकार | | **विससर्ज** = छाडिदिनुभयो |
| **समभिष्टुतः** = स्तुति गरिनुभएका | | |

**वाक्यार्थ–** यसप्रकार नागपत्नीहरूले श्रद्धापूर्वक प्रार्थना गरिसकेपछि भगवान् श्रीकृष्णले पनि आफ्ना पाउको प्रहारले टाउको फुटेर मूर्च्छा परेको कालिय नागलाई छाडिदिनुभयो।

**प्रतिलब्धेन्द्रियप्राणः कालियः शनकैर्हरिम्।**

**कृच्छ्रात् समुच्छ्वसन् दीनः कृष्णं प्राह कृताञ्जलिः॥ ५५॥**

| पदार्थ– | **कृच्छ्रात्** = कष्टपूर्वक | **कालियः** = कालिय नागले |
|---|---|---|
| **शनकैः** = बिस्तारै | **समुच्छ्वसन्** = सुस्केरा हाल्दै | **हरिम्** = श्रीहरि भगवान् |
| **प्रतिलब्धेन्द्रियप्राणः** = इन्द्रिय र प्राणमा चेतना आएपछि | **दीनः** = अत्यन्त दुःखी | **कृष्णं** = श्रीकृष्णलाई |
| | **कृताञ्जलिः** = हात जोडेको | **प्राह** = भन्यो |

**वाक्यार्थ–** बिस्तारै-बिस्तारै कालियका इन्द्रिय र प्राणमा चेतना आएपछि त्यो दुःखी कालियले कष्टसँग सुस्केरा हाल्दै दुई हात जोडेर भगवान् श्रीकृष्णसँग यसो भन्यो।

**कालिय उवाच** (कालियले भन्यो)

**वयं खलाः सहोत्पत्त्या तामसा दीर्घमन्यवः।**

**स्वभावो दुस्त्यजो नाथ लोकानां यदसद्ग्रहः॥ ५६॥**

| पदार्थ– | **तामसाः** = तमोगुणी (र) | **लोकानां** = संसारी प्राणीहरूलाई |
|---|---|---|
| **नाथ** = हे रक्षक | **दीर्घमन्यवः** = धेरै रिसाहा छौँ | **असद्ग्रहः** = असत् (पदार्थमा म र मेरो भन्ने) आग्रह हुन्छ |
| **वयं** = हामी सर्पहरू | **स्वभावः** = (आफ्नो) स्वभाव | |
| **उत्पत्त्या सह** = जन्मदेखि नै | **दुस्त्यजः** = छोड्न अति गाह्रो छ | |
| **खलाः** = दुष्ट | **यत्** = जुन दुष्ट स्वभावले | |

**वाक्यार्थ–** हे नाथ ! हामी सर्पहरू जन्मजात रूपमैं दुष्ट, तमोगुणी र धेरै रिसाहा स्वभावका छौँ।

प्राणीहरूलाई आफ्नो स्वभाव छाड्न अति गाह्रो हुन्छ। यसैले त्यही दुष्ट स्वभावले गर्दा संसारी प्राणीहरूलाई म र मेरो भन्ने असत् आग्रहले सताइरहेको हुन्छ।

**त्वया सृष्टमिदं विश्वं धातर्गुणविसर्जनम्।**
**नानास्वभाववीर्यौजोयोनिबीजाशयाकृति ॥ ५७ ॥**

**पदार्थ–**
**धातः** = हे सर्जक
**गुणविसर्जनम्** = भिन्न-भिन्न गुण भेदका कारण
**नानास्वभाववीर्यौजोयोनिबीजाशयाकृति** = विभिन्न स्वभाव, वीर्य, बल, योनि, बीज, चित्त र आकृतिले युक्त भएको
**इदं** = यो
**विश्वं** = संसार
**त्वया** = हजुरद्वारा नै
**सृष्टम्** = सिर्जना गरिएको हो

**वाक्यार्थ–** हे विश्वविधाता ! भिन्न-भिन्न गुणका कारण अनेक स्वभाव, वीर्य, बल, योनि, बीज, चित्त र आकृतिले युक्त भएको यो संसार हजुरद्वारा नै सिर्जना गरिएको हो।

**वयं च तत्र भगवन् सर्पा जात्युरुमन्यवः।**
**कथं त्यजामस्त्वन्मायां दुस्त्यजां मोहिताः स्वयम् ॥ ५८ ॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**तत्र च** = हजुरको त्यस सृष्टिमा
**जात्युरुमन्यवः** = जन्मदेखि नै अति क्रोधी
**वयं** = हामी
**सर्पाः** = सर्पहरू
**स्वयम्** = आफैं
**मोहिताः** = मोहित छौं (भने)
**दुस्त्यजां** = त्याग्न नसकिने
**त्वन्मायां** = हजुरको मायालाई
**कथं** = कसरी
**त्यजामः** = त्याग गर्न सक्छौं

**वाक्यार्थ–** हे भगवान् ! जन्मदेखि नै अति क्रोधी हामी सर्पहरू आफैं मायाको फन्दामा फसेका छौं। यस्ता हामीले हजुरको मायालाई कसरी त्याग गर्न सक्छौं र ?

**भवान् हि कारणं तत्र सर्वज्ञो जगदीश्वरः।**
**अनुग्रहं निग्रहं वा मन्यसे तद् विधेहि नः ॥ ५९ ॥**

**पदार्थ–**
**तत्र** = त्यो सृष्टिमा
**सर्वज्ञः** = सबै जान्ने
**जगदीश्वरः** = संसारका मालिक
**भवान् हि** = हजुर नै
**कारणं** = कारण हुनुहुन्छ (अतः)
**नः** = हाम्रो
**निग्रहं** = दण्ड
**अनुग्रहं वा** = वा कल्याण (जे)
**मन्यसे** = चाहनुहुन्छ
**तत्** = त्यही
**विधेहि** = गर्नुहोस्

**वाक्यार्थ–** हजुर सर्वज्ञ र सम्पूर्ण संसारका मालिक हुनुहुन्छ। हजुर नै सबैका कारण हुनुहुन्छ। अतः हामीलाई दण्ड दिने वा कल्याण गर्ने जे गर्न चाहनुहुन्छ, त्यही गर्नुहोस्।

**विवरण–** माथिका श्लोकमा प्राणीहरूका राम्रा-नराम्रा सबै स्वभावलाई प्रवर्तन गर्ने परमात्मा नै

हुनुहुन्छ भनी कालिय नागले स्तुति गरेको छ। अनेक प्राणीहरू, तिनीहरूका अनेक शरीर, तिनीहरूका अन्तःकरण, त्यसका स्वभाव आदि सबैका सर्जक परमात्मा नै हुनुहुन्छ। प्राणीहरूको स्वभावलाई उनीहरूको प्रकृति भनिन्छ। भगवद्गीतामा भगवान्ले सबै प्राणीहरूलाई उनीहरूको स्वभावले नियन्त्रित गर्छ भनी बताउनुभएको छ— **प्रकृतिस्त्वां नियोक्ष्यति** (भगवद्गीता, १८/५९)। यो सबै भगवान्को मायाको नियन्त्रण हो। हामी सर्प पनि हजुरको मायाद्वारा नियन्त्रित भएकाले आफ्नो स्वभावलाई छाड्न सक्दैनौँ, यो हाम्रो दोष होइन, यसैले निग्रह-अनुग्रह के गर्नुहुन्छ, हजुरकै भरमा छ भनी कालियले परमात्माको स्तुति गरेको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्याकर्ण्य वचः प्राह भगवान् कार्यमानुषः।**
**नात्र स्थेयं त्वया सर्प समुद्रं याहि मा चिरम्।**
**स्वज्ञात्यपत्यदाराढ्यो गोनृभिर्भुज्यतां नदी ॥ ६० ॥**

**पदार्थ–**
**इति** = यसप्रकारको
**वचः** = कालियको कुरा
**आकर्ण्य** = सुनेर
**कार्यमानुषः** = लीलाका निम्ति मनुष्यशरीर धारण गर्नुभएका
**भगवान्** = भगवान् श्रीकृष्णले
**प्राह** = भन्नुभयो
**सर्प** = हे कालिय नाग (अब)
**त्वया** = तिमीद्वारा
**अत्र** = यहाँ
**न स्थेयं** = बसिनुहुँदैन
**स्वज्ञात्यपत्यदाराढ्यः** = आफ्नो जाति, बन्धुबान्धव, पुत्र र पत्नीहरूसहित
**समुद्रं** = समुद्रमा
**मा चिरम्** = चाँडै नै
**याहि** = जाऊ
**नदी** = यमुना नदी
**गोनृभिः** = गाई र मान्छेहरूद्वारा
**भुज्यतां** = उपभोग गरियोस्

**वाक्यार्थ–** लीला गर्नका निम्ति मनुष्य अवतार लिनुभएका भगवान् श्रीकृष्णले कालियको यसप्रकारको प्रार्थनालाई सुनेर भन्नुभयो– हे कालिय नाग ! तिमी छिट्टै आफ्ना बन्धुबान्धव, पुत्र, पत्नीले सहित भएर समुद्रमा जाऊ, यमुनाको जल गाई र मान्छेहरूले उपभोग गरून्।

**य एतत् संस्मरेन्मर्त्यस्तुभ्यं मदनुशासनम्।**
**कीर्तयन्नुभयोः सन्ध्योर्न युष्मद्भयमाप्नुयात् ॥ ६१ ॥**

**पदार्थ–**
**यः** = जुन
**मर्त्यः** = मनुष्यले
**एतत्** = यो
**तुभ्यं** = तिमीलाई दिएको
**मदनुशासनम्** = मेरो उपदेश
**उभयोः सन्ध्योः** = बिहान र बेलुकाको सन्ध्याकालमा
**संस्मरेत्** = स्मरण गर्दछ (वा)
**कीर्तयन्** = कीर्तन गर्दछ
(त्यसले)
**युष्मद्भयम्** = सर्पबाट हुने डर
**न आप्नुयात्** = भोग्नु पर्दैन

**वाक्यार्थ–** जसले मैले तिमीलाई दिएको यो उपदेशलाई साँझ-बिहान सम्झिने र कीर्तन गर्ने

गर्दछ, त्यसलाई सर्पको डर हुँदैन।

**योऽस्मिन् स्नात्वा मदाक्रीडे देवादींस्तर्पयेज्जलैः।**

**उपोष्य मां स्मरन्नर्चेत् सर्वपापैः प्रमुच्यते॥ ६२॥**

**पदार्थ–**
**यः** = जसले
**मदाक्रीडे** = मैले क्रीडा गरेको
**अस्मिन्** = यस कालिय दहमा
**स्नात्वा** = नुहाएर
**जलैः** = जलले
**देवादीन्** = देवता, पितृहरूलाई
**तर्पयेत्** = तर्पण गर्दछ (तथा)
**उपोष्य** = उपवास बसेर
**मां** = मलाई
**स्मरन्** = स्मरण गर्दै
**अर्चेत्** = पूजा गर्दछ (त्यो)
**सर्वपापैः** = सबै प्रकारका पापहरूबाट
**प्रमुच्यते** = मुक्त हुन्छ

**वाक्यार्थ–** मैले क्रीडा गरेको यस कालियदहमा जसले नुहाएर यसको जलले देवता र पितृहरूलाई तर्पण गर्दछ तथा उपवास बसेर मलाई स्मरण गर्दै मेरो पूजा गर्दछ, त्यो सबै प्रकारका पापहरूबाट मुक्त हुन्छ।

**द्वीपं रमणकं हित्वा ह्रदमेतमुपाश्रितः।**

**यद्भयात् स सुपर्णस्त्वां नाद्यान्मत्पादलाञ्छितम्॥ ६३॥**

**पदार्थ–**
**यद्भयात्** = जसको डरले
**रमणकं** = रमणक
**द्वीपं** = द्वीपलाई
**हित्वा** = छोडेर
**एतम्** = यो
**ह्रदम्** = यमुनाको दहलाई
**उपाश्रितः** = आश्रय बनायौ
**सः सुपर्णः** = ती गरुडले
**मत्पादलाञ्छितम्** = मेरा पाउका चिह्नहरूले युक्त
**त्वां** = तिमीलाई
**न अद्यात्** = अब खाँदैनन्

**वाक्यार्थ–** जुन गरुडको डरले तिमीले आफ्नो बासस्थान रमणक द्वीपलाई छोडेर यो यमुनाको दहमा बसेका थियौ, ती गरुडले पनि मेरा पाउका चिह्नले युक्त तिमीलाई अब खानेछैनन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमुक्तो भगवता कृष्णेनाद्भुतकर्मणा।**

**तं पूजयामास मुदा नागपत्न्यश्च सादरम्॥ ६४॥**

**दिव्याम्बरस्रङ्मणिभिः परार्ध्यैरपि भूषणैः।**

**दिव्यगन्धानुलेपैश्च महत्योत्पलमालया॥ ६५॥**

**पदार्थ–**
**अद्भुतकर्मणा** = आश्चर्य लाग्दा लीलाहरू गर्नुहुने
**भगवता** = भगवान्
**कृष्णेन** = श्रीकृष्णद्वारा
**एवं** = यसप्रकार

**उक्तः** = भनिएका (कालिय र)
**नागपत्न्यः च** = नागपत्नीहरूले
**मुदा** = प्रसन्न भएर
**सादरम्** = आदरपूर्वक
**दिव्याम्बरस्रङ्मणिभिः** = राम्रा वस्त्र, पुष्पमाला र मणिहरूले
**परार्ध्यैः** = बहुमूल्य
**भूषणैः अपि** = गरगहनाहरूले र
**महत्या** = सुन्दर
**उत्पलमालया** = कमलका मालाहरू (र)
**दिव्यगन्धानुलेपैः च** = दिव्य गन्ध, चन्दन आदि सामग्रीहरूले पनि
**तं** = उहाँ भगवान् श्रीकृष्णलाई
**पूजयामास** = पूजा गरे

**वाक्यार्थ–** आश्चर्य लाग्दा लीलाहरू गर्नुहुने भगवान् श्रीकृष्णको आज्ञा पाएका कालिय र उसका पत्नीहरूले अति प्रसन्न भएर आदरपूर्वक राम्रा-राम्रा वस्त्र, पुष्पमाला अनि बहुमूल्य गहना, सुगन्धित चन्दन र सुन्दर कमलका माला आदि उत्तम वस्तुहरूद्वारा उहाँको पूजा गरे।

**पूजयित्वा जगन्नाथं प्रसाद्य गरुडध्वजम् ।**
**ततः प्रीतोऽभ्यनुज्ञातः परिक्रम्याभिवन्द्य तम् ॥ ६६ ॥**
**सकलत्रसुहृत्पुत्रो द्वीपमब्धेर्जगाम ह ।**
**तदैव सामृतजला यमुना निर्विषाभवत् ॥**
**अनुग्रहाद् भगवतः क्रीडामानुषरूपिणः ॥ ६७ ॥**

**पदार्थ–**
(यसप्रकार त्यस कालियले)
**गरुडध्वजम्** = गरुडवाहन
**जगन्नाथं** = जगत्का मालिक भगवान् श्रीकृष्णलाई
**पूजयित्वा** = पूजा गरेर
**प्रसाद्य** = प्रसन्न गराएर
**ततः** = त्यसपछि
**प्रीतः** = प्रेमपूर्वक
**तम्** = उहाँलाई
**परिक्रम्य** = प्रदक्षिणा गरेर
**अभिवन्द्य** = अभिवादन गरेर
**अभ्यनुज्ञातः** = आज्ञा लिएर
**सकलत्रसुहृत्पुत्रः** = सम्पूर्ण मित्र र पुत्र आदिले सहित कालिय
**अब्धेः** = समुद्रको
**द्वीपम्** = रमणक द्वीपमा
**ह जगाम** = गयो
**तदा एव** = त्यति वेलादेखि नै
**क्रीडामानुषरूपिणः** = लीला गर्नका निम्ति मनुष्यको स्वरूप धारण गर्नुभएका
**भगवतः** = भगवान् श्रीकृष्णको
**अनुग्रहात्** = कृपाले
**सा** = ती
**अमृतजला** = अमृत जस्तो स्वच्छ जल भएकी
**यमुना** = यमुना नदी
**निर्विषा** = विषरहित
**अभवत्** = भइन्

**वाक्यार्थ–** यसप्रकार श्रद्धापूर्वक पूजा आराधना गरेर त्यस कालिय नागले जगत्का मालिक भगवान् श्रीकृष्णलाई प्रसन्न गरायो। त्यसपछि उसले प्रेमपूर्वक भगवान्लाई प्रदक्षिणा गरेर अभिवादन गऱ्यो अनि भगवान्को आज्ञा लिएर सम्पूर्ण मित्र र पुत्र आदिले सहित भएर ऊ यमुनालाई छोडी समुद्रमा रहेको रमणक द्वीपमा गयो। कालियले छाड्ने बित्तिकै लीलापुरुष भगवान् श्रीकृष्णका कृपाले अमृतसमान जल भएकी यमुना फेरि विषरहित भइन्।

**अध्याय-विवरण—** यस अध्यायमा जम्मा छ ओटा विषयवस्तु बताइएका छन्। भगवान्ले कालियद्वारा यमुना नदी र सम्पूर्ण वनप्रदेश नै दूषित भएको देखी त्यहाँ हाम फाल्नुसम्मको पहिलो उद्यमखण्ड हो। कालियले भगवान्माथि नै आक्रमण गरेको दोस्रो खण्ड हो। तेस्रो प्रकरणमा भगवान्ले कालियको बन्धनद्वारा बाँधिई ऊद्वारा जितिए झैँ भई आफ्ना भक्त गोप-गोपिनी आदिमा आफूप्रति रहेको प्रेम अनि व्याकुलताको परीक्षा गर्नुभएको छ। चौथो प्रकरणमा सम्पूर्ण गोकुललाई आफ्नै चिन्तामा व्याकुल देखेर उहाँले त्यसलाई हटाउन कालियको फणामाथि चढी नृत्य गर्दै उसको दमन गर्नुभएको छ। पाँचौँ प्रकरणमा नागपत्नीहरूले र कालियले भगवान्को स्तुति गरेका छन् भने छैटौँ प्रकरणमा भगवान् उनीहरूसँग प्रसन्न बन्नुभएको छ। यसरी यो अध्यायको कथावस्तुलाई छ खण्डमा विभक्त गर्न सकिन्छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**कालियमोक्षणं नाम षोडशोऽध्यायः॥ १६॥**

# अथ सप्तदशोऽध्यायः

## कालिय नाग यमुनामा आउनुको कारण र भगवान् श्रीकृष्णद्वारा डढेलो पान

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**नागालयं रमणकं कस्मात् तत्याज कालियः।**

**कृतं किं वा सुपर्णस्य तेनैकेनासमञ्जसम्॥ १॥**

पदार्थ–

**कालियः** = कालिय नागले
**नागालयं** = नागहरूको निवासस्थान भएको
**रमणकं** = रमणक द्वीपलाई
**कस्मात्** = किन
**तत्याज** = छोडेको थियो
**तेन** = त्यो
**एकेन** = एक्लैले
**सुपर्णस्य** = गरुडको
**किं वा** = के
**असमञ्जसम्** = अपराध
**कृतं** = गरेको थियो

**वाक्यार्थ–** हे शुकदेव ! कालिय नागले नागहरूको निवासस्थान रमणक द्वीपलाई किन छोडेको थियो ? त्यो कालिय एक्लैले गरुडमाथि के अपराध गरेको थियो ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**उपहार्यैः सर्पजनैर्मासि मासीह यो बलिः।**

**वानस्पत्यो महाबाहो नागानां प्राङ्निरूपितः॥ २॥**

पदार्थ–

**महाबाहो** = हे शक्तिशाली परीक्षित्
**प्राक्** = पहिले
**उपहार्यैः** = (गरुडको आहारका लागि) उपहार बनेका
**सर्पजनैः** = सर्पहरूद्वारा
**इह** = यहाँ
**मासि मासि** = प्रत्येक महिना
**नागानां** = नागहरूको
**यः** = जुन
**वानस्पत्यः** = वृक्षको फेदमा
**बलिः** = आहारको व्यवस्था
**निरूपितः** = मिलाइएको थियो

**वाक्यार्थ–** हे शक्तिशाली परीक्षित् ! पहिला गरुडको आहार बनेका सर्पहरूले प्रत्येक महिना तोकिएको रुखको फेदमा गरुडको आहारका निम्ति व्यवस्था मिलाइएको थियो।

**स्वं स्वं भागं प्रयच्छन्ति नागाः पर्वणि पर्वणि।**

**गोपीथायात्मनः सर्वे सुपर्णाय महात्मने॥ ३॥**

पदार्थ–

**सर्वे** = सबै
**नागाः** = नागहरूले
**आत्मनः** = आफ्नो जातिको
**गोपीथाय** = रक्षाको लागि
**पर्वणि पर्वणि** = औँसी औँसीमा

**महात्मने** = शक्तिशाली
**सुपर्णाय** = गरुडलाई
**स्वं स्वं** = आ-आफ्नो
**भागं** = भाग
**प्रयच्छन्ति** = लगिदिन थाले

**वाक्यार्थ–** त्यसपछि आफ्नो जातिको रक्षाका लागि नागहरूले सम्झौता अनुसार प्रत्येक औँसीमा शक्तिशाली गरुडलाई आ-आफ्नो भाग लगिदिन थाले।

**विषवीर्यमदाविष्टः काद्रवेयस्तु कालियः।**
**कदर्थीकृत्य गरुडं स्वयं तं बुभुजे बलिम्॥ ४॥**

**पदार्थ–**
**काद्रवेयः** = कद्रूको पुत्र
**विषवीर्यमदाविष्टः** = विष र बलको घमन्डले युक्त भएको
**कालियः तु** = कालिय नागले चाहिँ
**गरुडं** = गरुडलाई
**कदर्थीकृत्य** = तिरस्कार गरेर
**तं** = ती गरुडलाई दिइएको
**बलिम्** = उपहारलाई
**स्वयं** = आफूले नै
**बुभुजे** = खान थाल्यो

**वाक्यार्थ–** नागहरूमध्ये कद्रूको पुत्र कालिय विष र बलको कारणले अति घमन्डी थियो। त्यसले गरुडलाई तिरस्कार गर्दै बलिको रूपमा दिइएको उपहारलाई आफैँले खान थाल्यो।

**तच्छ्रुत्वा कुपितो राजन् भगवान् भगवत्प्रियः।**
**विजिघांसुर्महावेगः कालियं समपाद्रवत्॥ ५॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्** = कालियले त्यसो गरेको कुरा
**श्रुत्वा** = सुनेर
**भगवत्प्रियः** = भगवान् नारायणका प्रिय
**कुपितः** = अत्यन्त रिसाएका
**महावेगः** = अति वेगशाली
**भगवान्** = शक्तिशाली गरुडले
**विजिघांसुः** = मार्ने इच्छा गर्दै
**कालियं** = कालिय नागलाई
**समपाद्रवत्** = आक्रमण गरे

**वाक्यार्थ–** हे राजा परीक्षित्! कालियले त्यसो गरेको सुनेर भगवान् नारायणका प्रिय गरुड अति रिसाए। त्यसपछि तीव्र वेग भएका शक्तिशाली गरुडले कालियलाई मार्ने इच्छाले त्यसमाथि आक्रमण गरे।

**तमापतन्तं तरसा विषायुधः प्रत्यभ्ययादुच्छ्रितनैकमस्तकः।**
**दद्भिः सुपर्णं व्यदशद् ददायुधः करालजिह्वोच्छ्वसितोग्रलोचनः॥ ६॥**

**पदार्थ–**
**उच्छ्रितनैकमस्तकः** = अनेक फणाहरू ठाडा-ठाडा पारेको
**करालजिह्वोच्छ्वसितोग्रलोचनः** = डरलाग्दा जिब्रा भएको र लामो-लामो सास फेर्दै भयङ्कर आँखा बनाएको
**ददायुधः** = दाँत नै हतियार भएको
**विषायुधः** = विषरूप हतियारले सम्पन्न कालियले
**तरसा** = वेगले

**आपतन्तं** = झम्टिँदै गरेका
**तम्** = ती गरुडलाई
**प्रत्यभ्ययात्** = झम्टियो (र)
**सुपर्णं** = गरुडलाई
**दद्भिः** = विषालु दाँतहरूले
**व्यदशत्** = टोक्यो

**वाक्यार्थ–** आफ्ना अनेक फणाहरूलाई ठाडा-ठाडा पारेको, डरलाग्दा जिब्रा भएको, लामो-लामो सास फेर्दै भयङ्कर आँखा बनाएको, विषरूप शक्तिले सम्पन्न भएको र दाँत नै हतियार भएको त्यस कालियले वेगपूर्वक आफूलाई झम्टिँदै गरेका गरुडलाई झम्टियो र आफ्ना विषालु दाँतले टोक्यो।

**तं ताक्ष्र्यपुत्रः स निरस्य मन्युमान् प्रचण्डवेगो मधुसूदनासनः।**
**पक्षेण सव्येन हिरण्यरोचिषा जघान कद्रूसुतमुग्रविक्रमः॥ ७॥**

**पदार्थ–**
**उग्रविक्रमः** = अत्यन्त पराक्रमी
**मधुसूदनासनः** = भगवान् श्रीहरिका वाहन
**प्रचण्डवेगः** = तीव्र वेग भएका
**मन्युमान्** = अति रिसाएका
**सः ताक्ष्र्यपुत्रः** = ती ताक्ष्र्यका छोरा गरुडले
**कद्रूसुतम्** = कद्रूको छोरो
**तं** = त्यस कालियलाई
**निरस्य** = रोकेर
**हिरण्यरोचिषा** = सुनौलो चमक भएको
**सव्येन** = दाहिने
**पक्षेण** = पखेटाले
**जघान** = प्रहार गरे

**वाक्यार्थ–** भगवान् श्रीहरिका वाहन अति पराक्रमी र वेगशाली ताक्ष्र्यपुत्र गरुड कालियको दुष्टतालाई देखेर ज्यादै रिसाए अनि उनले त्यसलाई रोक्दै आफ्नो सुनौलो चमक भएको दाहिने पखेटाले प्रहार गरे।

**सुपर्णपक्षाभिहतः कालियोऽतीव विह्वलः।**
**ह्रदं विवेश कालिन्द्यास्तदगम्यं दुरासदम्॥ ८॥**

**पदार्थ–**
**सुपर्णपक्षाभिहतः** = गरुडको पखेटाको प्रहारले पीडित भएको
**अतीव** = अत्यन्त
**विह्वलः** = वेदनाग्रस्त भएको
**कालियः** = कालिय नाग
**तदगम्यं** = गरुड जान नसक्ने
**दुरासदम्** = धेरै गहिरो
**कालिन्द्याः** = यमुनाको
**ह्रदं** = दहमा
**विवेश** = प्रवेश गऱ्यो

**वाक्यार्थ–** गरुडको पखेटाको प्रहारले पीडित भएको त्यो कालिय नाग अत्यन्त विह्वल बन्यो र गरुड जान नसक्ने अति गहिरो यमुनाको दहमा प्रवेश गऱ्यो।

**तत्रैकदा जलचरं गरुडो भक्ष्यमीप्सितम्।**
**निवारितः सौभरिणा प्रसह्य क्षुधितोऽहरत्॥ ९॥**

**पदार्थ–**
**तत्र** = त्यसै दहमा
**एकदा** = एक दिन

**क्षुधितः** = अत्यन्त भोकाएका
**गरुडः** = पक्षिराज गरुडले
**सौभरिणा** = सौभरि ऋषिद्वारा
**निवारितः** = रोकिएका भए पनि
**ईप्सितम्** = खान मन लागेको
**भक्ष्यम्** = भोजन
**जलचरं** = माछालाई
**प्रसह्य** = बलपूर्वक समाएर
**अहरत्** = खाएका थिए

**वाक्यार्थ–** त्यसै दहमा एक दिन भोकले आत्तिएका गरुडले सौभरि ऋषिले रोक्दा–रोक्दै पनि खान मन लागेको माछालाई बलपूर्वक समातेर खाएका थिए।

**मीनान् सुदुःखितान् दृष्ट्वा दीनान् मीनपतौ हते।**
**कृपया सौभरिः प्राह तत्रत्यक्षेममाचरन्॥ १०॥**

**पदार्थ–**
**मीनपतौ** = मत्स्यराज
**हते** = मारिएपछि
**सुदुःखितान्** = ज्यादै दुःखी बनेका
**मीनान्** = अन्य माछाहरूलाई
**दीनान्** = दुःखी भएका
**दृष्ट्वा** = देखेर
**सौभरिः** = सौभरि ऋषिले
**तत्रत्यक्षेमम्** = त्यहाँ रहने जीवजन्तुहरूको कल्याण
**आचरन्** = गर्दै
**कृपया** = कृपापूर्वक
**प्राह** = यसो भने

**वाक्यार्थ–** मत्स्यराज मारिएपछि अत्यन्त दुःखी बनेका माछाहरूको दयनीय अवस्था देखेर सौभरि ऋषिलाई दया आयो र त्यहाँका जीवजन्तुहरूको कल्याणका निम्ति कृपापूर्वक उनले गरुडलाई यसो भने।

**अत्र प्रविश्य गरुडो यदि मत्स्यान् स खादति।**
**सद्यः प्राणैर्वियुज्येत सत्यमेतद् ब्रवीम्यहम्॥ ११॥**

**पदार्थ–**
**सः** = त्यो
**गरुडः** = गरुडले
**अत्र** = यस पोखरीमा
**प्रविश्य** = पसेर
**यदि** = यदि
**मत्स्यान्** = माछाहरूलाई
**खादति** = खान्छ भने
**सद्यः** = तत्काल नै त्यो
**प्राणैः** = प्राणले
**वियुज्येत** = रहित हुन्छ
**अहम्** = म
**एतत्** = यो
**सत्यम्** = साँचो कुरा
**ब्रवीमि** = भन्दैछु

**वाक्यार्थ–** यस पोखरीमा पसेर यदि गरुडले माछाहरू खायो भने तत्काल त्यो प्राणरहित हुनेछ यो म साँचो कुरा भन्दैछु।

**विवरण–** यहाँ माछाहरूको दुःखलाई देखेर दया जागेकाले सौभरि ऋषिले गरुडलाई श्राप दिए भनिएको छ। भोक लाग्दा गरुड यमुनाको किनारमा गई माछाहरू खान्थे। एकपटक माछाहरूको माउलाई खाइदिएकाले त्यहाँका सबै माछा ज्यादै दुःखी भए। यसरी माछाको पीडा देखेर सौभरि ऋषिलाई दया लाग्यो। उनले त्यहाँका माछाको कल्याणका लागि गरुडलाई श्राप दिए। गरुडप्रजातिका पक्षीहरूले सर्प, माछा आदि खाएर जीवित रहनु प्राकृतिक व्यवस्था हो। यो सहजसिद्ध व्यवस्थामाथि सौभरिले हस्तक्षेप गर्दा गरुड त त्यहाँ आउन नसक्ने भए, तर ती

माछाहरूको कल्याण भने भएन। गरुड त्यहाँ आउन नसक्ने थाहा पाएपछि विषालु कालिय नाग त्यहाँ बस्यो र विषको कारणले त्यहाँका सबै माछाहरू मर्न थाले। बाहिर वनप्रदेश पनि विषालु भयो। त्यसैले प्राकृतिक व्यवस्थामा व्यवधान गर्नाले कल्याण नहुने सूचना यस प्रसङ्गले दिन्छ।

सौभरि ऋषिले गरुडलाई यमुनाको तीरमा आई माछा खाँदा मृत्यु हुने श्राप दिएका थिए भनिएको छ। यहाँ माछा भनेर सबै प्राणीहरूको उपलक्षण गरिएको हो। यदि गरुडले माछालाई खाँदा मात्र मृत्युभय हुने हो भने कालिय मार्दा केही नहुने हुनाले कालिय निर्भय भई यमुनामा बस्नु सम्भव थिएन। त्यसैले गरुडले यहाँ आई कुनै पनि प्राणीलाई दुःख दिन खोज्यो भने उसको मृत्यु हुन्छ भन्ने सौभरि ऋषिको श्रापको तात्पर्य रहेको बुझ्नुपर्दछ।

**तं कालियः परं वेद नान्यः कश्चन लेलिहः।**
**अवात्सीद् गरुडाद् भीतः कृष्णेन च विवासितः॥ १२॥**

**पदार्थ–**
**तं** = त्यो कुरा
**परं** = केवल
**कालियः** = कालिय नागले
**वेद** = जान्दथ्यो
**अन्यः** = अरू
**कश्चन** = कुनै
**लेलिहः** = सर्पले
**न** = जान्दैनथे (अतः)
**गरुडात्** = गरुडदेखि
**भीतः** = डराएको कालिय
**अवात्सीत्** = त्यस दहमा बस्यो (अहिले)
**कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा
**विवासितः** = निकालियो

**वाक्यार्थ–** सौभरि ऋषिले गरुडलाई श्राप दिएको यो कुरा केवल कालिय नागलाई थाहा थियो, अरू कुनै पनि सर्पलाई थाहा थिएन। त्यसैले गरुडदेखि डराएको कालिय त्यस दहमा बस्दैआएको थियो। अहिले भगवान् श्रीकृष्णले त्यस कालियलाई त्यहाँबाट निकालिदिनुभयो।

**कृष्णं ह्रदाद् विनिष्क्रान्तं दिव्यस्रग्गन्धवाससम्।**
**महामणिगणाकीर्णं जाम्बूनदपरिष्कृतम्॥ १३॥**
**उपलभ्योत्थिताः सर्वे लब्धप्राणा इवासवः।**
**प्रमोदनिभृतात्मानो गोपाः प्रीत्याभिरेभिरे॥ १४॥**

**पदार्थ–**
**दिव्यस्रग्गन्धवाससं** = दिव्य माला, चन्दन र वस्त्र लगाउनुभएका
**महामणिगणाकीर्णं** = बहुमूल्य रत्नहरू धारण गर्नुभएका
**जाम्बूनदपरिष्कृतम्** = सुवर्णमय गहनाले विभूषित हुनुभएका
**ह्रदात्** = दहबाट
**विनिष्क्रान्तं** = बाहिर निस्कँदै गर्नुभएका
**कृष्णं** = भगवान् श्रीकृष्णलाई
**उपलभ्य** = देखेर
**लब्धप्राणाः** = प्राण प्राप्त गरेका
**असवः** = इन्द्रियहरू
**इव** = झैँ
**उत्थिताः** = ब्युँझिएका
**प्रमोदनिभृतात्मानः** = खुसीले मन भरिएका
**सर्वे** = सम्पूर्ण
**गोपाः** = गोप-गोपीहरूले

**प्रीत्या** = प्रेमपूर्वक
**अभिरेभिरे** = आलिङ्गन गरे

**वाक्यार्थ–** दिव्य माला, चन्दन र वस्त्रहरू लगाएर, बहुमूल्य रत्नहरू तथा सुवर्णमय गहनाहरूले सुशोभित भएर दहबाट बाहिर आइरहनुभएका भगवान् श्रीकृष्णलाई देखेर प्राणलाई प्राप्त गरेर इन्द्रियहरू सक्रिय बने झैं सबै गोप-गोपीहरू ब्युँझिए। त्यसपछि ज्यादै खुसी भएका ती सबैले प्रेमपूर्वक भगवान्‌लाई आलिङ्गन गरे।

**यशोदा रोहिणी नन्दो गोप्यो गोपाश्च कौरव।**
**कृष्णं समेत्य लब्धेहा आसँल्लब्धमनोरथाः॥ १५॥**

पदार्थ–
**कौरव** = हे कुरुवंशी परीक्षित्
**यशोदा** = यशोदा
**रोहिणी** = रोहिणी
**नन्दः** = नन्द
**गोप्यः** = गोपीहरू र
**गोपाः च** = गोपहरू सबै
**कृष्णं** = श्रीकृष्णई
**समेत्य** = प्राप्त गरेर
**लब्धेहाः** = चेतना प्राप्त गरेका
**लब्धमनोरथाः** = मनोरथ पूर्ण भएका
**आसन्** = बने

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान् श्रीकृष्णलाई पाएर यशोदा, रोहिणी, नन्द लगायत सम्पूर्ण गोप-गोपीहरू सचेत र मनोरथ पूर्ण भएका बने।

**रामश्चाच्युतमालिङ्ग्य जहासास्यानुभाववित्।**
**नगा गावो वृषा वत्सा लेभिरे परमां मुदम्॥ १६॥**

पदार्थ–
**अस्य** = यी भगवान् श्रीकृष्णको
**अनुभाववित्** = महिमालाई जानेका
**रामः च** = बलराम पनि
**अच्युतम्** = भगवान् अच्युतलाई
**आलिङ्ग्य** = अँगालो हालेर
**जहास** = हाँस्नुभयो
**नगाः** = वृक्षहरू
**गावः** = गाईहरू
**वृषाः** = गोरुहरू (र)
**वत्साः** = बाच्छाहरू सबैले
**परमां** = परम
**मुदम्** = आनन्द
**लेभिरे** = प्राप्त गरे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको महिमालाई बुझेका बलराम पनि भाइलाई अँगालो हालेर हाँस्न लाग्नुभयो। त्यसबखत वृक्ष, गाई, गोरु, बाच्छा सबैले परम आनन्द प्राप्त गरे।

**नन्दं विप्राः समागत्य गुरवः सकलत्रकाः।**
**ऊचुस्ते कालियग्रस्तो दिष्ट्या मुक्तस्तवात्मजः॥ १७॥**
**देहि दानं द्विजातीनां कृष्णनिर्मुक्तिहेतवे।**
**नन्दः प्रीतमना राजन् गाः सुवर्णं तदादिशत्॥ १८॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**ते** = ती
**सकलत्रकाः** = पत्नीले सहित भएका
**विप्राः** = ब्राह्मणहरू
**गुरवः** = गुरुहरू
**नन्दं** = नन्दकहाँ
**समागत्य** = आएर
**ऊचुः** = भने
**दिष्ट्या** = भाग्यवश
**कालियग्रस्तः** = कालियद्वारा समातिएका
**तव** = तिम्रा
**आत्मजः** = छोरा
**मुक्तः** = मुक्त भए (अतः)
**कृष्णनिर्मुक्तिहेतवे** = कृष्ण छुटेको उपलक्ष्यमा
**द्विजातीनां** = ब्राह्मणहरूलाई
**दानं** = दान
**देहि** = देऊ
**प्रीतमनाः** = प्रसन्न चित्त भएका
**नन्दः** = नन्दले पनि
**तदा** = त्यसै अवसरमा (ब्राह्मणहरूलाई)
**गाः** = गाईहरू (र)
**सुवर्णं** = सुन
**अदिशत्** = दान गरे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! पत्नीसहित ब्राह्मणहरू र गुरुहरूले नन्दकहाँ आएर भने– 'भाग्यवश कालियबाट तिम्रा छोरा छुटे। यस उपलक्ष्यमा ब्राह्मणहरूलाई दान गर।' प्रसन्न चित्त भएका नन्दले पनि तत्काल ब्राह्मणहरूलाई धेरै गाई र सुन दान गरे।

**यशोदापि महाभागा नष्टलब्धप्रजा सती।**
**परिष्वज्याङ्कमारोप्य मुमोचाश्रुकलां मुहुः॥ १९॥**

**पदार्थ–**
**महाभागा** = अति भाग्यवती
**नष्टलब्धप्रजा** = हराएको छोरालाई पुनः प्राप्त गरेकी
**सती** = पतिव्रता
**यशोदा अपि** = यशोदाले पनि (छोरालाई)
**अङ्कम्** = काखमा
**आरोप्य** = राखेर
**परिष्वज्य** = छातीमा लगाउँदै
**मुहुः** = बारम्बार
**अश्रुकलां** = आँसुका धारा
**मुमोच** = बगाउन लागिन्

**वाक्यार्थ–** अति भाग्यवती पतिव्रता अनि हराएको छोरालाई पुनः प्राप्त गरेकी यशोदाले पनि छोरालाई काखमा राखेर छातीमा लगाउँदै आँसुका धारा बगाउन लागिन्।

**तां रात्रिं तत्र राजेन्द्र क्षुत्तृड्भ्यां श्रमकर्षिताः।**
**ऊषुर्व्रजौकसो गावः कालिन्द्या उपकूलतः॥ २०॥**

**पदार्थ–**
**राजेन्द्र** = हे महाराज
**क्षुत्तृड्भ्यां** = भोक, प्यास र
**श्रमकर्षिताः** = थकाइले आत्तिएका
**व्रजौकसः** = व्रजवासी (तथा)
**गावः** = गाईहरू सबै
**तां** = त्यस
**रात्रिं** = रात
**तत्र** = त्यहीँ
**कालिन्द्याः** = यमुनाको
**उपकूलतः** = किनारमा
**ऊषुः** = बसे

**वाक्यार्थ–** हे महाराज ! व्रजवासी सम्पूर्ण जन र गाईहरू भोकप्यास र थकाइले आकुल-व्याकुल बनेका थिए। अतः त्यस रात तिनीहरू त्यहीँ यमुनाको किनारमा बसे।

**तदा शुचिवनोद्भूतो दावाग्निः सर्वतो व्रजम् ।**
**सुप्तं निशीथ आवृत्य प्रदग्धुमुपचक्रमे ॥ २१ ॥**

**पदार्थ–**
**तदा** = त्यस समयमा
**निशीथे** = मध्य रातमा
**शुचिवनोद्भूतः** = ग्रीष्मकालीन वनमा लागेको
**दावाग्निः** = डढेलोले
**सुप्तं** = सुतेका
**व्रजम्** = व्रजवासीलाई
**सर्वतः** = सबैतिरबाट
**आवृत्य** = घेरेर
**प्रदग्धुम्** = डढाउन
**उपचक्रमे** = थाल्यो

**वाक्यार्थ–** ग्रीष्म ऋतुको मध्य रातको त्यस समयमा वनमा लागेको डढेलोले सुतिरहेका व्रजवासीहरूलाई सबैतिरबाट घेरेर जलाउन लाग्यो।

**तत उत्थाय सम्भ्रान्ता दह्यमाना व्रजौकसः ।**
**कृष्णं ययुस्ते शरणं मायामनुजमीश्वरम् ॥ २२ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**दह्यमानाः** = डढ्न लाग्नाले
**सम्भ्रान्ताः** = अत्यन्त आत्तिएका
**ते** = ती
**व्रजौकसः** = व्रजवासीहरू
**उत्थाय** = उठेर
**मायामनुजम्** = लीलापुरुष
**ईश्वरम्** = भगवान्
**कृष्णं** = श्रीकृष्णको
**शरणं** = शरणमा
**ययुः** = गए

**वाक्यार्थ–** डढेलोले चारैतिरबाट डढाउन लागेकाले अत्यन्त आत्तिएका सबै व्रजवासीहरू उठेर लीलापुरुष भगवान् श्रीकृष्णको शरणमा गए।

**कृष्ण कृष्ण महाभाग हे रामामितविक्रम ।**
**एष घोरतमो वह्निस्तावकान् ग्रसते हि नः ॥ २३ ॥**

**पदार्थ–**
**महाभाग** = हे महाभाग्यशाली
**कृष्ण कृष्ण** = हे कृष्ण ! हे कृष्ण !
**हे अमितविक्रम** = हे अनन्त पराक्रमी
**राम** = हे बलरामजी
**एषः** = यो
**घोरतमः** = भयङ्कर
**वह्निः** = आगोले
**हि** = निश्चय नै
**तावकान्** = हजुरहरूका आफन्त
**नः** = हामीहरूलाई
**ग्रसते** = जलाउँछ

**वाक्यार्थ–** हे महाभाग्यशाली कृष्ण ! हे अनन्त पराक्रमी बलरामजी ! यो भयङ्कर आगाले अवश्य पनि हजुरहरूका आफन्त हामीहरूलाई जलाउँछ।

**सुदुस्तरान्नः स्वान् पाहि कालाग्नेः सुहृदः प्रभो ।**
**न शक्नुमस्त्वच्चरणं सन्त्यक्तुमकुतोभयम् ॥ २४ ॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**सुदुस्तरात्** = पार गर्न नसकिने

**कालाग्नेः** = कालाग्निबाट
**स्वान्** = आफ्ना
**सुहृदः** = बन्धुबान्धव
**नः** = हामीहरूलाई
**पाहि** = बचाउनुहोस् (हामी)
**अकुतोभयम्** = भयरहित
**त्वच्चरणं** = हजुरका चरणकमललाई
**सन्त्यक्तुम्** = छोड्न
**न शक्नुमः** = सक्दैनौं

**वाक्यार्थ–** हे प्रभु ! यो अपार कालाग्निबाट हामी बन्धुबान्धवहरूलाई बचाउनुहोस्। कुनै पनि किसिमको डर नभएको हजुरका चरणको शरणलाई हामी छोड्न सक्दैनौं।

**इत्थं स्वजनवैक्लव्यं निरीक्ष्य जगदीश्वरः।**
**तमग्निमपिबत् तीव्रमनन्तोऽनन्तशक्तिधृक् ॥ २५ ॥**

**पदार्थ–**
**अनन्तशक्तिधृक्** = अनन्त शक्ति धारण गर्नुभएका
**अनन्तः** = सर्वव्यापक
**जगदीश्वरः** = भगवान् श्रीकृष्णले
**इत्थं** = यसप्रकार
**स्वजनवैक्लव्यं** = आफ्ना बन्धुबान्धवहरूको व्याकुलतालाई
**निरीक्ष्य** = देखेर
**तम्** = त्यो
**तीव्रम्** = भयङ्कर
**अग्निम्** = आगोलाई
**अपिबत्** = पिइदिनुभयो

**वाक्यार्थ–** अनन्तशक्तिशाली र सर्वव्यापक जगत्का मालिक भगवान् श्रीकृष्णले आफ्ना प्रिय बन्धुबान्धवहरू आगाले जल्न लागेर आकुल-व्याकुल भएको देखेपछि त्यो भयङ्कर अग्निलाई पिइदिनुभयो।

**विवरण–** यस श्लोकमा भगवान्ले अग्निलाई पिइदिनुभएको वर्णन गरिएको छ। **मुखादग्निरजायत** (शुक्लयजुर्वेद, ३१/१२) अर्थात् भगवान्को मुखबाट अग्निको उत्पत्ति भयो भनी वेदमा बताइएको छ। भगवान् विश्वरूप हुनुहुन्छ। भगवान्का आँखा उहाँको मुख, बाहु र पाउ सबैतिर छन् भनी बताइएको छ– **विश्वतश्चक्षुरुत विश्वतो मुखो विश्वतो बाहुरुत विश्वतस्पात्** (शुक्लयजुर्वेद, १७/१९)। अग्नि उनै सर्वरूप परमात्माको मुखबाट उत्पन्न भएको हो। त्यसैले परमात्माले आगो पिउनु भनेको त्यो आगोले आफ्नै कारणमा प्रवेश गर्नु भनिएको हो, यो कुनै आश्चर्य होइन।

यहाँ टीकाकारहरूले यो अग्नि कालियमा रहेको दोषको अभिमानी देवता थियो भनी उल्लेख गरेका छन्। कालियदमन गर्दा उसले रोषपूर्वक भगवान्को प्रतिकार गरेको थियो। दमन भइसकेपछि त्यो रोषाभिमानी देवता पनि भगवान्मा मिल्नु आवश्यक भएकाले भगवान् त्यो रात यमुना नदीकै किनारमा सुत्नुभएको थियो। त्यसैले राति सबै सुतिरहेको वेलामा एकाएक डढेलो सल्कियो। डढेलो लाग्नुका अनेक फाइदा थिए। कालियको विषबाट पूरै डढ्न बाँकी रहेका वनप्रदेशका विषाक्त रुख-लहराहरू थिए। तिनको उपयोग गर्दा गाई, मान्छे आदि सबैको मृत्यु हुन सक्थ्यो। यो विषालु ठाउँ आगोद्वारा डढिसकेपछि फेरि नयाँ पलाएका वृक्ष-वनस्पतिहरू उपभोगयोग्य हुन्छन्। आगोलाई **पावक** भन्दछन्, जसको अर्थ चोखो पार्नेवाला हो। शुद्ध भएको ठाउँमा नै भगवान् खेल्नुहुन्छ। परमानन्द त्यही हृदयमा स्फुरण हुन्छ जुन हृदय एकपटक वैराग्य या

भगवान्सँग विरह भएको चिन्तारूप अग्निमा डढिसकेको छ। विषयासक्त इन्द्रियहरूले दूषित गरेको हृदयमा तिनका संस्कारहरू अवशिष्ट रहेका हुन्छन्। ती विषालु संस्कारहरूले भरिएको मन र विषालु झाडीहरूले भरिएको वन उस्तै-उस्तै हुन्। त्यसमा रहने परमात्मालाई उपनिषद्ले **गुहाहितं गह्वरेष्ठं** (कठोपनिषद्, १/२/१२) भनी बताएको छ। यसको अर्थ परमात्मा अनेकौँ वासना र कर्मरूपी झाडीले भयङ्कर भएको हृदयरूपी गुफामा बस्नुहुन्छ भन्ने हो। जबसम्म मनरूपी वनमा कर्मसंस्काररूपी झाडीहरू छन्, तबसम्म त्यहाँ परमात्माको प्रवेश हुँदैन, यो सबै नष्ट भएपछि मात्र परमात्मा अन्तःकरणभित्र प्रकाशित हुनुहुन्छ। भगवान् श्रीकृष्ण वृन्दावनमा खेल्नु भनेको यही हो।

आगो वैराग्य या विरहको प्रतीक हो। संसारमा हुने रागलाई या विषयहरूबाट हुने आनन्दको भ्रमलाई यसले डढाइदिन्छ। ज्ञानमार्गमा वैराग्य नै आगो हो भने भक्तिमार्गमा भगवान्सँग विरह हुँदाको पीडा नै आगो हो। मुमुक्षुले संसारलाई नै डरलाग्दो देख्दछ, यसबाट आत्तिई ऊ गुरुको शरणमा जान्छ। त्यसै गरी भगवान्को भक्तलाई भगवान्ले रहित यो सम्पूर्ण संसार शून्य लाग्दछ। यो आगोमा जति चाँडै जल्न सक्यो, त्यति चाँडै मानिसहरूको कल्याण हुन्छ। संसारका दुःखहरूले मानिसलाई पोलिरहेका छन्, तर मानिसले ती छुट्टाछुट्टै दुःख हटाउन छुट्टाछुट्टै उपायको अवलम्बन गरिरहेका छन्। उनीहरूलाई सम्पूर्ण संसार नै दुःखदायी बनिसकेको छैन। अलि-अलि दुःखको निवृत्ति विषयभोगबाट नै भइरहेको छ भने त्यसलाई हटाउन परमात्माकहाँ आउनुपर्ने आवश्यकता पनि परिसकेको छैन। जब प्राणीहरूलाई संसार सम्पूर्ण रूपमा दुःखमय प्रतीत हुन्छ र यसले उनीहरूलाई चारैतिरबाट जलाउन थाल्दछ, तब त्यो दुःखको निवृत्ति गर्न साक्षात् परमात्मा नै प्रकट हुन कर लाग्छ। आखिर दुःखले पूरै आहत नभई प्राणी परमात्माको शरणमा जाँदा पनि त जाँदैन। त्यसैले कथामा चारैतिरबाट डढेलो लागेपछि गोपहरू भगवान्को शरणमा गएको, भगवान्ले त्यो आगोलाई पिई उनीहरूको दुःख नष्ट गर्नुभएको र एकपटक डढेर नयाँ रूपमा पलाएको त्यही वनमा आफ्ना गोप्य लीलाहरूलाई प्रकाशित गर्नुभएको देखाइएको छ।

एकपटक डढिसकेको मन पनि फेरि पलाउन सक्छ र ? भन्ने शङ्का हुन सक्छ। यसको उत्तरको रूपमा ज्ञानीहरूको जीवन्मुक्त स्थितिलाई लिन सकिन्छ। **अहं मनुरभवं सूर्यश्च** अर्थात् म मनु र सूर्य भएँ, सर्वरूप भएँ भन्दै ज्ञानीहरू आफ्नो कृतकृत्यताको आनन्द अनुभव गर्दछन्। अज्ञानमा निदाएका प्राणीहरूलाई देखी भगवान्मा उनीहरूमाथि दया जाग्दछ। यो सबै गर्न मन चाहिन्छ नै। यद्यपि आत्माकारवृत्तिद्वारा चित्तको नाश हुन्छ, तर यो नाश भनेको चित्तमा रहेको विषयाध्यासरूपी असत् अंशको नाश हो। असत् अंश नष्ट भएपछि चित्त चित् ब्रह्मरूपमा नै प्रकाशित हुन्छ अनि जीवन्मुक्तहरू त्यही चिद्रूप भएको चित्तद्वारा उपदेश आदि व्यवहार एवं कृतकृत्यताको आनन्दलाई अनुभव गर्दछन्। ठिक यसै गरी जब वृन्दावन पनि एकपटक जल्दछ, तब त्यो पहिलेजस्तो सामान्य वन रहँदैन, भगवान्को लीलाको साधन बनी प्रकाशित हुन्छ। भगवान्ले आगो पिउनुको यही तात्पर्य हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**दावाग्निमोचनं नाम सप्तदशोऽध्यायः ॥ १७ ॥**

# अथ अष्टादशोऽध्यायः

## प्रलम्बासुरको वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ कृष्णः परिवृतो ज्ञातिभिर्मुदितात्मभिः ।**

**अनुगीयमानो न्यविशद् व्रजं गोकुलमण्डितम् ॥ १ ॥**

**पदार्थ–**
**अथ** = यसपछि (कालियदमन र अग्निपान गरिसकेपछि)
**मुदितात्मभिः** = आनन्दित मन भएका
**ज्ञातिभिः** = बन्धुबान्धवहरूद्वारा
**परिवृतः** = घेरिएर
**अनुगीयमानः** = गुणकीर्तन गरिनुभएका
**कृष्णः** = भगवान् श्रीकृष्ण
**गोकुलमण्डितम्** = गोठहरूद्वारा सुशोभित भएको
**व्रजं** = व्रजमा
**न्यविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** कालियदमन र अग्निपान गरिसकेपछि भगवान् श्रीकृष्ण अति प्रसन्न भएका बन्धुबान्धवद्वारा घेरिएर उनीहरूले गरेका आफ्ना गुणकीर्तन सुन्दै गोठहरूद्वारा सुशोभित भएको व्रजमा प्रवेश गर्नुभयो।

**व्रजे विक्रीडतोरेवं गोपालच्छद्ममायया ।**

**ग्रीष्मो नामर्तुरभवन्नातिप्रेयाञ्छरीरिणाम् ॥ २ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार (भगवान् श्रीकृष्ण र बलरामले)
**गोपालच्छद्ममायया** = गोपालको छद्मरूपमा
**व्रजे** = व्रजमा
**विक्रीडतोः** = क्रीडा गर्दै गर्दा
**शरीरिणाम्** = प्राणीहरूका लागि
**न अतिप्रेयान्** = त्यति प्रिय नलाग्ने
**ग्रीष्मः नाम** = ग्रीष्म नामको
**ऋतुः** = ऋतु
**अभवत्** = सुरु भयो

**वाक्यार्थ–** यसप्रकार भगवान् श्रीकृष्ण र बलरामले गोपालको छद्मरूपमा व्रजमा अनेक लीला गर्दै गर्दा प्राणीहरूलाई त्यति मन नपर्ने ग्रीष्म ऋतु सुरु भयो।

**स च वृन्दावनगुणैर्वसन्त इव लक्षितः ।**

**यत्रास्ते भगवान् साक्षाद् रामेण सह केशवः ॥ ३ ॥**

**पदार्थ–**
**यत्र** = जहाँ
**रामेण सह** = बलरामले सहित
**साक्षात् भगवान्** = प्रत्यक्ष भगवान्
**केशवः** = श्रीकृष्ण

**आस्ते** = रहनुहुन्छ
**सः च** = त्यो ग्रीष्म ऋतु
**वृन्दावनगुणैः** = वृन्दावनको गुण (महिमा)ले
**वसन्तः इव** = वसन्त ऋतु झैं
**लक्षितः** = देखियो

**वाक्यार्थ–** बलरामले सहित साक्षात् भगवान् श्रीकृष्णले निवास गरेका कारण त्यो ग्रीष्म ऋतु पनि वृन्दावनको महिमाले गर्दा वसन्त ऋतु झैं देखियो।

**यत्र निर्झरनिर्ह्रादनिवृत्तस्वनझिल्लिकम्।**
**शश्वत् तच्छीकरर्जीषद्रुममण्डलमण्डितम्॥ ४॥**

पदार्थ–
**यत्र** = जुन व्रजमा
**निर्झरनिर्ह्रादनिवृत्तस्वन-झिल्लिकम्** = झरनाहरूबाट निस्किएको मधुर ध्वनिले ग्रीष्मका कठोर आवाजलाई हटाइएको
**शश्वत्** = बारम्बार
**तच्छीकरर्जीषद्रुममण्डल-मण्डितम्** = ती झरनाका शीतल जलकणहरूको स्पर्शले रसिला बनेका वृक्षहरूले सुशोभित बनेको (वृन्दावन छ)

**वाक्यार्थ–** जुन व्रजमा झरनाबाट निस्किएका मधुर ध्वनिहरूले ग्रीष्मका कठोर आवाजहरूलाई हटाएको छ र ती झरनाका शीतल जलकणको स्पर्शले रसिला बनेका वृक्षहरूले सुशोभित बनेको वृन्दावन छ।

**सरित्सरःप्रस्रवणोर्मिवायुना कह्लारकञ्जोत्पलरेणुहारिणा।**
**न विद्यते यत्र वनौकसां दवो निदाघवह्न्यर्कभवोऽतिशाद्वले॥ ५॥**

पदार्थ–
**यत्र** = जुन
**अतिशाद्वले** = हराभरा व्रजमा
**कह्लारकञ्जोत्पलरेणुहारिणा** = कह्लार (श्वेत कमल, साँझमा फुल्ने), कञ्ज (जलकमल, दिनमा फुल्ने), उत्पल (नीलकमल, रातमा फुल्ने) आदि सुगन्धित कमलपुष्पको परागकण (सुगन्ध) बोकेको
**सरित्सरःप्रस्रवणोर्मिवायुना** = नदी, पोखरी र झरनाका शीतल तरङ्गले युक्त भएर वहने वायुका कारण
**वनौकसां** = वनवासीहरूलाई
**निदाघवह्न्यर्कभवः** = ग्रीष्मकालको डढेलो र सूर्यबाट उत्पन्न हुने
**दवः** = पीडा (गर्मी)
**न विद्यते** = छैन

**वाक्यार्थ–** जुन व्रजमा कह्लार (श्वेत कमल), कञ्ज (जल कमल), उत्पल (नील कमल) आदि विभिन्न कमलहरूको सुगन्धलाई लिएर नदी, पोखरी र झरनाका तरङ्गहरूको स्पर्श गर्दै वहने शीतल वायुले गर्दा वनवासीहरूलाई ग्रीष्मकालीन भयङ्कर डढेलो र प्रचण्ड सूर्यबाट उत्पन्न हुने गर्मी हुँदैन।

**अगाधतोयह्रदिनीतटोर्मिभिर्द्रवत्पुरीष्याः पुलिनैः समन्ततः।**
**न यत्र चण्डांशुकरा विषोल्बणा भुवो रसं शाद्वलितं च गृह्णते॥ ६॥**

**पदार्थ**–
**यत्र** = जुन व्रजमा
**अगाधतोयह्रदिनीतटोर्मिभिः** = गहिरा-गहिरा नदीका किनारमा उठेका छालहरूबाट बनेका
**पुलिनैः** = रसिला भुइँहरूद्वारा
**समन्ततः** = चारैतिर
**द्रवत्पुरीष्याः** = गिलो हिलो भएका
**भुवः** = व्रजभूमिको
**रसं** = रस (शीतलता) र
**शाद्वलितं च** = हरियालीलाई
**विषोल्बणाः** = विष जस्तै भयङ्कर
**चण्डांशुकराः** = प्रचण्ड सूर्यका किरणहरूले
**न गृह्णते** = सुकाउन सक्दैनन्

**वाक्यार्थ**– जुन व्रजमा गहिरा-गहिरा नदीका किनारमा उठेका छालहरूबाट बनेका रसिला भुइँहरू हुनाले चारैतिर व्याप्त भएको शीतलता र हरियालीलाई विष जस्तै भयङ्कर प्रचण्ड सूर्यका किरणले पनि सुकाउन सक्दैनथे।

**वनं कुसुमितं श्रीमन्नदच्चित्रमृगद्विजम्।**
**गायन्मयूरभ्रमरं कूजत्कोकिलसारसम्॥ ७॥**

**पदार्थ**–
**वनं** = व्रजको वन
**कुसुमितं** = फुलेका वृक्षहरूले व्याप्त
**श्रीमत्** = अति रमणीय
**नदच्चित्रमृगद्विजम्** = विचित्र प्रकारका मृग र पक्षीहरूको आवाजले व्याप्त
**गायन्मयूरभ्रमरं** = मयूर र भमराका सुमधुर आवाजले गुञ्जित
**कूजत्कोकिलसारसम्** = कोइली र सारसका आवाजले युक्त थियो

**वाक्यार्थ**– व्रजको वन अनेक किसिमका फूलहरूले भरिएकाले र विभिन्न किसिमका मृग, पक्षी, मयूर, भमरा, कोइली र सारसका आवाजहरूले गुञ्जित भएकाले रमणीय बनेको थियो।

**क्रीडिष्यमाणस्तत् कृष्णो भगवान् बलसंयुतः।**
**वेणुं विरणयन् गोपैर्गोधनैः संवृतोऽविशत्॥ ८॥**

**पदार्थ**–
**बलसंयुतः** = बलरामले सहित हुनुभएका
**गोपैः** = गोपहरू (र)
**गोधनैः** = गाईहरूद्वारा
**संवृतः** = घेरिनुभएका
**क्रीडिष्यमाणः** = क्रीडा गरिरहनुभएका
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**वेणुं** = बाँसुरी
**विरणयन्** = बजाउँदै
**तत्** = त्यस सुन्दर वनमा
**अविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ**– बलरामले सहित भएर प्रिय गोप र गाईहरूका साथमा क्रीडा गरिरहनुभएका भगवान् श्रीकृष्ण बाँसुरी बजाउँदै त्यस सुन्दर वनमा प्रवेश गर्नुभयो।

**प्रवालबर्हस्तबकस्रग्धातुकृतभूषणाः।**
**रामकृष्णादयो गोपा ननृतुर्युयुधुर्जगुः॥ ९॥**

**पदार्थ–**
**प्रवालबर्हस्तबकस्रग्धातुकृतभूषणाः** = नयाँ-नयाँ पालुवा, मयूरका प्वाँख, फूलका थुँगा, माला र धातुका विभिन्न आभूषण लगाएर सजिएका
**रामकृष्णादयः** = बलराम, श्रीकृष्ण आदि
**गोपाः** = गोपहरू
**ननृतुः** = नाच्न थाले
**युयुधुः** = युद्ध गरी खेल्न लागे (र)
**जगुः** = गाउन थाले

**वाक्यार्थ–** त्यस सुन्दर वनमा प्रवेश गरेका बलराम, श्रीकृष्ण आदि गोपहरू नयाँ-नयाँ पालुवा, मयूरका प्वाँख, फूलका थुँगा, माला र धातुका गहनाहरू लगाएर कोही नाच्न लागे, कोही आपसमा युद्ध गरी खेल्न लागे र कोही चाहिँ गाउन लागे।

**कृष्णस्य नृत्यतः केचिज्जगुः केचिदवादयन्।**
**वेणुपाणितलैः शृङ्गैः प्रशशंसुरथापरे ॥ १० ॥**

**पदार्थ–**
**कृष्णस्य** = भगवान् श्रीकृष्ण
**नृत्यतः** = नाचिरहँदा
**केचित्** = केहीले
**जगुः** = गाउन लागे
**केचित्** = केहीले
**वेणुपाणितलैः** = बाँसुरी, हातका ताली र
**शृङ्गैः** = शृङ्ग (जनावरको सिङ्‌बाट बनेको बाजा)
**अवादयन्** = बजाउन लागे
**अथ** = त्यसपछि
**अपरे** = अरू चाहिँ
**प्रशशंसुः** = (नृत्यको) प्रशंसा गर्न लागे

**वाक्यार्थ–** जब भगवान् श्रीकृष्ण नाच्न लाग्नुभयो तब केही गोपहरूले गीत गाउन थाले, केहीले बाँसुरी, ताली र शृङ्ग आदि बाजाहरू बजाउन लागे, अरू चाहिँ नृत्यको प्रशंसा गर्न लागे।

**गोपजातिप्रतिच्छन्नौ देवा गोपालरूपिणः।**
**ईडिरे कृष्णरामौ च नटा इव नटं नृप ॥ ११ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**नटाः** = नटहरूले
**नटं इव** = नट (नायक)को प्रशंसा गरे झैं
**गोपालरूपिणः** = गोठालोको रूप धारण गरेका
**देवाः** = देवताहरूले
**गोपजातिप्रतिच्छन्नौ** = गोप जातिमा (जन्म लिएर) रहेका
**कृष्णरामौ च** = भगवान् श्रीकृष्ण र बलरामलाई
**ईडिरे** = स्तुति गर्न लागे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! जसरी नटहरूले आफ्ना नायकको प्रशंसा गर्दछन् त्यसै गरी गोठालोको रूप धारण गरेका देवताहरूले गोपजातिमा जन्म लिएका भगवान् श्रीकृष्ण र बलरामको स्तुति गर्न लागे।

**भ्रमणैर्लङ्घनैः क्षेपैरास्फोटनविकर्षणैः।**
**चिक्रीडतुर्नियुद्धेन काकपक्षधरौ क्वचित् ॥ १२ ॥**

**पदार्थ–**
**काकपक्षधरौ** = घुम्रिएका कपालको चुल्ठो धारण गर्नुभएका (भगवान् श्रीकृष्ण र बलराम)
**क्वचित्** = कहिले
**भ्रमणैः** = (गोपहरूसित) घुम्दै
**लङ्घनैः** = उफ्रिँदै
**क्षेपैः** = (माटाका डल्लालाई) फाल्दै
**आस्फोटनविकर्षणैः** = पाखुरा ठोक्दै र ताना-तान गर्दै (तथा)
**नियुद्धेन** = (आपसमा) युद्ध गर्दै
**चिक्रीडतुः** = खेल्न थाल्नुभयो

**वाक्यार्थ–** घुम्रिएको कपाललाई चुल्ठो बनाउनुभएका भगवान् श्रीकृष्ण र बलराम कहिले गोपहरूसित घुम्दै, कहिले उफ्रिँदै, कहिले माटाका डल्लालाई फाल्दै, कहिले पाखुरा ठोक्दै, कहिले डोरी तानातान गर्दै र कहिले आपसमा युद्ध गर्दै खेल्न थाल्नुभयो।

**क्वचिन्नृत्यत्सु चान्येषु गायकौ वादकौ स्वयम्।**
**शशंसतुर्महाराज साधु साध्विति वादिनौ ॥ १३ ॥**

**पदार्थ–**
**महाराज** = हे महाराज
**क्वचित्** = कहिले
**अन्येषु** = अन्य गोपहरू
**नृत्यत्सु** = नाच्दा
**स्वयम्** = कृष्ण र बलराम आफैं
**गायकौ** = गायक र
**वादकौ च** = वादक बनेर
**साधु साधु इति** = राम्रो-राम्रो
**वादिनौ** = भन्दै
**शशंसतुः** = प्रशंसा गर्न लाग्नुहुन्थ्यो

**वाक्यार्थ–** हे महाराज ! अन्य गोपहरू नाचेको बखत कृष्ण र बलराम आफैं गाउने, बजाउने गर्दै र राम्रो-राम्रो भन्दै प्रशंसा गर्न लाग्नुहुन्थ्यो।

**क्वचिद् बिल्वैः क्वचित् कुम्भैः क्व चामलकमुष्टिभिः।**
**अस्पृश्यनेत्रबन्धाद्यैः क्वचिन्मृगखगेहया ॥ १४ ॥**

**पदार्थ–**
**क्वचित्** = कहिले
**बिल्वैः** = बेलद्वारा
**क्वचित्** = कहिले
**कुम्भैः** = जाइफलद्वारा
**क्व च** = कहिले
**आमलकमुष्टिभिः** = अमलाका फल मुठीमा लिएर (एक-अर्कालाई हानाहान गर्नुहुन्थ्यो)
**क्वचित्** = कहिले
**अस्पृश्यनेत्रबन्धाद्यैः** = एक जनाको आँखा बाँधिदिएर अरू उसको नजिक गएर उसले छुनबाट बच्ने खेल (खेल्नुहुन्थ्यो)
**मृगखगेहया** = पशु-पक्षीहरूको अनुकरण गर्ने खेल (खेल्नुहुन्थ्यो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण र बलराम साथीहरूसित कहिले बेलका फल, कहिले जाइफल र कहिले अमलाका फल मुठीमा लिएर एक-अर्कालाई हानाहान गरेर खेल्नुहुन्थ्यो। कहिले एक जनाको आँखा बाँधिदिएर अरू उसको नजिक-नजिक गएर उसले छुनबाट बच्ने खेल खेल्नुहुन्थ्यो र कहिले पशु-पक्षीहरूको अनुकरण गर्ने खेल खेल्नुहुन्थ्यो।

**क्वचिच्च दर्दुरप्लावैर्विविधैरुपहासकैः।**
**कदाचित् स्पन्दोलिकया कर्हिचिन्नृपचेष्टया ॥ १५ ॥**

**पदार्थ–**
**क्वचित्** = कहिले
**दर्दुरप्लावैः** = भ्यागुता झैं उफ्रँदै
**विविधैः** = विभिन्न प्रकारका
**उपहासकैः** = ख्यालठट्टाहरू गर्दै
**कदाचित्** = कहिले
**स्पन्दोलिकया** = (लहरामा) पिङ् खेल्दै
**कर्हिचित्** = कहिले
**नृपचेष्टया च** = राजाको अनुकरण गर्दै (खेल्ने गर्नुहुन्थ्यो)

**वाक्यार्थ–** (भगवान् श्रीकृष्ण र बलराम साथीहरूसित) कहिले भ्यागुता झैं उफ्रँदै, कहिले विभिन्न प्रकारका ख्यालठट्टा गर्दै, कहिले लहराहरूमा पिङ् खेल्दै र कहिले राजाको अनुकरण गर्दै अनेक खेल खेल्ने गर्नुहुन्थ्यो।

**एवं तौ लोकसिद्धाभिः क्रीडाभिश्चेरतुर्वने।**
**नद्यद्रिद्रोणिकुञ्जेषु काननेषु सरस्सु च॥ १६॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**तौ** = ती दुई श्रीकृष्ण र बलरामले (साथीहरूसित)
**वने** = वृन्दावनका
**नद्यद्रिद्रोणिकुञ्जेषु** = नदी, पहाड, फेदी र कुञ्जहरूमा
**काननेषु च** = वनहरूमा र
**सरस्सु** = पोखरीहरूमा पनि
**लोकसिद्धाभिः** = लोकप्रसिद्ध
**क्रीडाभिः** = खेलहरूद्वारा
**चेरतुः** = विहार गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार श्रीकृष्ण र बलरामले वृन्दावनका नदी, पर्वत, फेदी, कुञ्ज, वन र पोखरीहरूमा लोकप्रसिद्ध विभिन्न खेल खेल्नुभयो।

**पशूंश्चारयतोर्गोपैस्तद्वने रामकृष्णयोः।**
**गोपरूपी प्रलम्बोऽगादसुरस्तज्जिहीर्षया॥ १७॥**

**पदार्थ–**
**गोपैः** = गोपहरूका साथमा
**पशून्** = पशुहरू (गाईबाच्छा) लाई
**चारयतोः** = चराउँदै गरेका
**रामकृष्णयोः** = श्रीकृष्ण र बलराम रहेको
**तद्वने** = त्यो वृन्दावनमा (एक दिन)
**तज्जिहीर्षया** = कृष्ण र बलरामको हरण गर्ने इच्छाले
**गोपरूपी** = गोपको रूप धारण गरेको
**प्रलम्बः** = प्रलम्ब नाम गरेको
**असुरः** = राक्षस
**अगात्** = आयो

**वाक्यार्थ–** गोपहरूका साथमा भगवान् श्रीकृष्ण र बलराम गाई चराउँदै हुनुहुन्थ्यो। एक दिन त्यस वृन्दावनमा कृष्ण र बलरामलाई अपहरण गर्ने इच्छाले प्रलम्ब नाम गरेको राक्षस गोपको रूप धारण गरी आयो।

**तं विद्वानपि दाशार्हो भगवान् सर्वदर्शनः।**
**अन्वमोदत तत्सख्यं वधं तस्य विचिन्तयन्॥ १८॥**

**पदार्थ–**
**दाशार्हः** = दशार्हका वंशज
**सर्वदर्शनः** = सर्वज्ञ
**भगवान्** = भगवान् श्रीकृष्णले
**तं** = त्यस असुरलाई
**विद्वान् अपि** = चिनेर पनि
**तस्य** = त्यसको
**वधं** = विनाश गर्ने
**विचिन्तयन्** = विचार गर्दै
**तत्सख्यं** = त्यसको मित्रताको प्रस्तावलाई
**अन्वमोदत** = स्वीकार गर्नुभयो

**वाक्यार्थ–** दशार्हका वंशज सर्वज्ञ भगवान् श्रीकृष्णले त्यस राक्षसलाई पहिले नै चिने पनि त्यसको नाश गर्ने विचार गर्दै त्यसको मित्रताको प्रस्तावलाई उहाँले स्वीकार गर्नुभयो।

**तत्रोपाहूय गोपालान् कृष्णः प्राह विहारवित्।**
**हे गोपा विहरिष्यामो द्वन्द्वीभूय यथायथम्॥ १९॥**

**पदार्थ–**
**विहारवित्** = लीला गर्न जान्ने
**कृष्णः** = भगवान् श्रीकृष्णले
**तत्र** = त्यहाँ
**गोपालान्** = गोपालहरूलाई
**उपाहूय** = बोलाएर
**प्राह** = भन्नुभयो
**हे गोपाः** = हे गोपहरू हो (अब हामी)
**यथायथम्** = खेलको विधि अनुसार
**द्वन्द्वीभूय** = दुई भागमा विभाजित भएर
**विहरिष्यामः** = खेलौं

**वाक्यार्थ–** त्यसपछि त्यहाँ लीलापुरुष भगवान् श्रीकृष्णले गोपालहरूलाई बोलाएर भन्नुभयो– हे गोपहरू ! अब हामी खेलको विधि अनुसार दुई भागमा बाँडिएर खेलौं।

**तत्र चक्रुः परिवृढौ गोपा रामजनार्दनौ।**
**कृष्णसङ्घट्टिनः केचिदासन् रामस्य चापरे॥ २०॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**गोपाः** = गोपहरूले
**रामजनार्दनौ** = बलराम र श्रीकृष्णलाई
**परिवृढौ** = दुई पक्षका नायक
**चक्रुः** = बनाए (र)
**केचित्** = केही
**कृष्णसङ्घट्टिनः** = श्रीकृष्णका पक्षमा (तथा)
**अपरे च** = अरू बाँकी
**रामस्य** = बलरामका पक्षमा
**आसन्** = भए

**वाक्यार्थ–** त्यसपछि गोपहरूले श्रीकृष्ण र बलरामलाई दुई पक्षका नायक बनाए र आफूहरू केही श्रीकृष्ण पक्षका र केही बलराम पक्षका बने।

**आचेरुर्विविधाः क्रीडा वाह्यवाहकलक्षणाः।**
**यत्रारोहन्ति जेतारो वहन्ति च पराजिताः॥ २१॥**

**पदार्थ–**
**यत्र** = जुन खेलमा
**जेतारः** = जित्नेहरू
**आरोहन्ति** = चढ्दछन्
**पराजिताः च** = हार्नेहरूले
**वहन्ति** = बोक्दछन्

(यसप्रकारका)
**वाह्यवाहकलक्षणाः** = बोक्ने र बोकिने नियम भएका
**विविधाः** = विभिन्न प्रकारका
**क्रीडाः** = खेलहरू
**आचेरुः** = खेल्न थाले

**वाक्यार्थ–** ती गोपहरूले जुन खेलमा जित्नेहरू हार्नेका माथि चढ्ने र हार्नेले तिनलाई बोक्ने गर्दछन् यस्ता बोक्ने र बोकिने नियम भएका अनेक खेलहरू खेल्न थाले।

**वहन्तो वाह्यमानाश्च चारयन्तश्च गोधनम्।**

**भाण्डीरकं नाम वटं जग्मुः कृष्णपुरोगमाः॥ २२॥**

**पदार्थ–**
(यसप्रकार)
**वहन्तः** = बोकिरहेका र
**वाह्यमानाः च** = बोकिँदै गरेका तथा
**गोधनम्** = गाई
**चारयन्तः च** = चराउँदै गरेका
**कृष्णपुरोगमाः** = कृष्ण आदि गोपहरू
**भाण्डीरकं नाम** = भाण्डीरक नाम गरेको
**वटं** = वरको वृक्ष नजिक
**जग्मुः** = गए

**वाक्यार्थ–** यसप्रकार बोक्ने–बोकिने खेल खेल्दै गाई चराइरहेका भगवान् श्रीकृष्ण लगायत गोपहरू भाण्डीरक नाम गरेको वरको वृक्षको नजिक पुगे।

**रामसङ्घट्टिनो यर्हि श्रीदामवृषभादयः।**

**क्रीडायां जयिनस्तांस्तानूहुः कृष्णादयो नृप॥ २३॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**यर्हि** = एक पटक
**रामसङ्घट्टिनः** = बलराम पक्षका
**श्रीदामवृषभादयः** = श्रीदामा, वृषभ आदि
**क्रीडायां** = खेलमा
**जयिनः** = विजयी भए
**कृष्णादयः** = श्रीकृष्ण पक्षकाले
**तान् तान्** = ती ती (जित्नेहरू) लाई
**ऊहुः** = बोके

**वाक्यार्थ–** हे राजा परीक्षित्! खेल्दै जाँदा एक पटक बलराम पक्षका श्रीदामा, वृषभ आदिले खेल जिते। श्रीकृष्ण पक्षकाले जित्नेहरूलाई बोके।

**उवाह कृष्णो भगवान् श्रीदामानं पराजितः।**

**वृषभं भद्रसेनस्तु प्रलम्बो रोहिणीसुतम्॥ २४॥**

**पदार्थ–**
**पराजितः** = हारेका
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्णले
**श्रीदामानं** = श्रीदामालाई
**भद्रसेनः तु** = भद्रसेनले चाहिँ
**वृषभं** = वृषभलाई (र)
**प्रलम्बः** = प्रलम्बले
**रोहिणीसुतम्** = रोहिणीका छोरा बलरामलाई
**उवाह** = बोके

**वाक्यार्थ–** त्यस क्रममा हारेका भगवान् श्रीकृष्णले श्रीदामालाई बोक्नुभयो। यस्तै भद्रसेनले वृषभलाई र प्रलम्बले बलरामलाई बोके।

**अविषह्यं मन्यमानः कृष्णं दानवपुङ्गवः।**
**वहन् द्रुततरं प्रागादवरोहणतः परम्॥ २५॥**

**पदार्थ–**
**कृष्णं** = श्रीकृष्णलाई
**अविषह्यं** = जित्न नसकिने
**मन्यमानः** = ठानेको
**दानवपुङ्गवः** = दानवश्रेष्ठ प्रलम्ब
**द्रुततरं** = वेगले
**वहन्** = (बलरामलाई) बोक्दै
**अवरोहणतः** = ओह्राल्नुपर्ने ठाउँभन्दा
**परम्** = टाढा
**प्रागात्** = पुऱ्यायो

**वाक्यार्थ–** दानवश्रेष्ठ प्रलम्बले श्रीकृष्णलाई जित्न नसक्ने देखी बलरामलाई बोकेर बेगले दौडिँदै ओह्राल्नुपर्ने ठाउँभन्दा धेरै पर पुऱ्यायो।

**तमुद्वहन् धरणिधरेन्द्रगौरवं महासुरो विगतरयो निजं वपुः।**
**स आस्थितः पुरटपरिच्छदो बभौ तडिद्द्युमानुडुपतिवाडिवाम्बुदः॥ २६॥**

**पदार्थ–**
**धरणिधरेन्द्रगौरवं** = पृथिवीलाई उचाल्ने शेषको गह्रौँपनाले युक्त
**तं** = ती बलरामलाई
**उद्वहन्** = बोकिरहेको
**विगतरयः** = गतिहीन भएको
**निजं** = आफ्नो वास्तविक
**वपुः** = राक्षस शरीर
**आस्थितः** = धारण गरेको
**पुरटपरिच्छदः** = सुनका गहनाले ढाकिएको
**सः** = त्यो
**महासुरः** = महासुर प्रलम्ब
**तडिद्द्युमान्** = बिजुलीको शोभा भएको
**उडुपतिवाट्** = चन्द्रमालाई बोकेको
**अम्बुदः इव** = बादल झैँ
**बभौ** = शोभायमान भयो

**वाक्यार्थ–** पृथिवीलाई उचाल्ने शेषको गह्रौँपनाले युक्त बलरामलाई बोकेर भागेको प्रलम्बासुर एकछिनमैं थाकेर गतिहीन बन्यो र उसले आफ्नो वास्तविक स्वरूप धारण गऱ्यो। त्यति वेला सुनका गहना लगाएको र बलरामलाई बोकेको त्यो प्रलम्बासुर चन्द्रमालाई धारण गरेको बिजुलीको शोभा सहितको बादल झैँ शोभायमान देखियो।

**निरीक्ष्य तद्वपुरलमम्बरे चरत् प्रदीप्तदृग्भ्रुकुटितटोग्रदंष्ट्रकम्।**
**ज्वलच्छिखं कटककिरीटकुण्डलत्विषाद्भुतं हलधर ईषदत्रसत्॥ २७॥**

**पदार्थ–**
**अम्बरे** = आकाशमा
**अलं** = अति वेगले
**चरत्** = उडिरहेको
**प्रदीप्तदृक्** = राता-राता आँखा भएको
**भ्रुकुटितटोग्रदंष्ट्रकम्** = आँखीभौँसम्म पुगेका लामा-लामा दाह्रा भएको
**ज्वलच्छिखं** = आगाका लप्का जस्तो कपाल भएको
**कटककिरीटकुण्डलत्विषा** =

बाला, मुकुट र कुण्डलका कान्तिले
**अद्भुतं** = अद्भुत बनेको
**तद्वपुः** = त्यो प्रलम्बासुरको शरीरलाई
**निरीक्ष्य** = देखेर
**हलधरः** = बलरामजी पनि
**ईषत्** = केही
**अत्रसत्** = तर्सिनुभयो

**वाक्यार्थ–** राता-राता आँखा भएको, आँखीभौँसम्म पुगेका लामा-लामा दाह्रा भएको, आगाका लप्का जस्तो कपाल भएको एवं बाला, मुकुट र कुण्डलको कान्तिले अद्भुत बनेर वेगले आकाशमा उडिरहेको प्रलम्बासुरलाई देखेर बलराम पनि केही तर्सिनुभयो।

**अथागतस्मृतिरभयो रिपुं बलो विहायसार्थमिव हरन्तमात्मनः।**
**रुषाहनच्छिरसि दृढेन मुष्टिना सुराधिपो गिरिमिव वज्ररंहसा॥ २८॥**

पदार्थ–
**अथ** = त्यसपछि
**आगतस्मृतिः** = आफ्नो स्वरूपको स्मरण भएर
**अभयः** = भयरहित बन्नुभएका
**बलः** = बलरामले
**अर्थम् इव** = कुनै वस्तुलाई (चोरे) झैँ
**आत्मनः** = आफूलाई
**विहायसा** = आकाशको बाटोबाट
**हरन्तं** = हरण गरेर लगिरहेको
**रिपुं** = शत्रु प्रलम्बासुरलाई
**सुराधिपः** = देवराज इन्द्रले
**वज्ररंहसा** = वज्रका वेगले
**गिरिम् इव** = पर्वतलाई झैँ
**रुषा** = रिसले
**दृढेन** = बलियो
**मुष्टिना** = मुड्कीले
**शिरसि** = टाउकामा
**अहनत्** = हिर्काउनुभयो

**वाक्यार्थ–** त्यसपछि आफ्नो स्वरूपलाई सम्झेर बलराम भयरहित बन्नुभयो। चोरले कुनै वस्तुलाई चोरेर लगे झैँ त्यस राक्षसले आफूलाई हरण गरेर आकाशको बाटोबाट लगिरहेको देखेर उहाँलाई रिस उठ्यो। इन्द्रले कठोर वज्रले पर्वतलाई प्रहार गरे झैँ उहाँले रिसाएर आफ्ना बलिया मुड्कीले त्यस राक्षसको टाउकोमा हिर्काउनुभयो।

**स आहतः सपदि विशीर्णमस्तको मुखाद् वमन् रुधिरमपस्मृतोऽसुरः।**
**महारवं व्यसुरपतत् समीरयन् गिरिर्यथा मघवत आयुधाहतः॥ २९॥**

पदार्थ–
**आहतः** = (मुड्कीद्वारा) प्रहार गरिएको
**सपदि** = तत्काल
**विशीर्णमस्तकः** = टाउको फुटेको
**मुखात्** = मुखबाट
**रुधिरम्** = रगत
**वमन्** = छादिरहेको
**महारवं** = ठुलो स्वरमा
**समीरयन्** = चिच्याइरहेको
**अपस्मृतः** = चेतना हराएको
**व्यसुः** = प्राणहीन
**सः** = त्यो
**असुरः** = राक्षस
**मघवतः** = इन्द्रको
**आयुधा** = हतियार (वज्र)द्वारा
**आहतः** = प्रहार गरिएको
**गिरिः यथा** = पर्वत झैँ
**अपतत्** = भुइँमा लड्यो

**वाक्यार्थ–** मुड्की प्रहारले तत्काल टाउको फुटेको र मुखबाट रगत छाद्दै ठुलो स्वरमा चिच्याइरहेको त्यो राक्षस चेतनाशून्य मुर्दा झैँ बनेर इन्द्रको वज्रद्वारा प्रहार गरिएको पर्वत लडे झैँ

भुइँमा लड्यो।

**विवरण–** यस श्लोकमा बलरामले प्रलम्बासुरलाई मार्नुभएको प्रसङ्गको वर्णन गरिएको छ। प्रलम्बासुर भनेको अन्तःकरणको सूक्ष्म दोष हो। यो धेरै लामो समयसम्म पनि नष्ट नभई रहने हुनाले यसलाई प्रलम्ब भनिएको हो। भक्तको अन्तःकरणमा हुने सूक्ष्मदोष भएकाले यो गोपालकै भेषमा थियो भनिएको छ। यसले भगवान्लाई पनि **अवरोहणतः परम्** अर्थात् मर्यादाभन्दा बाहिर लैजान खोज्छ। जब प्रलम्बासुरले बलरामलाई पिठिउँमा बोकी सीमाभन्दा बाहिर लान थाल्यो, तब उहाँ पृथिवीलाई उचाल्ने शेषको गुरुताले युक्त हुनुभयो। भगवान्को बलले सहित हुनुभएका उहाँले त्यसको टाउकै फुटाइदिनुभयो। यसरी अन्तःकरणमा हुने सूक्ष्म दोषलाई नष्ट गरिएको कथा यहाँ बताइएको छ।

**दृष्ट्वा प्रलम्बं निहतं बलेन बलशालिना।**
**गोपाः सुविस्मिता आसन् साधु साध्विति वादिनः॥ ३०॥**

**पदार्थ–**
**बलशालिना** = शक्तिशाली
**बलेन** = बलरामद्वारा
**प्रलम्बं** = प्रलम्बासुरलाई
**निहतं** = मारिएको
**दृष्ट्वा** = देखेर
**सुविस्मिताः** = आश्चर्यचकित भएका
**गोपाः** = गोपहरू
**साधु साधु इति** = बलरामलाई वाह ! वाह ! यस्तो
**वादिनः** = भनिरहेका
**आसन्** = थिए

**वाक्यार्थ–** शक्तिशाली बलरामले प्रलम्बासुरलाई मार्नुभएको देखेर सम्पूर्ण गोपहरू आश्चर्यचकित भएर बलरामलाई वाह ! वाह ! भनी प्रशंसा गर्न लागे।

**आशिषोऽभिगृणन्तस्तं प्रशशंसुस्तदर्हणम्।**
**प्रेत्यागतमिवालिङ्ग्य प्रेमविह्वलचेतसः॥ ३१॥**

**पदार्थ–**
**प्रेमविह्वलचेतसः** = प्रेमले विह्वल भएका गोपहरूले
**प्रेत्य** = मरेर
**आगतम् इव** = आए झैं मानेर
**आलिङ्ग्य** = अँगालो हाल्दै
**तदर्हणम्** = प्रशंसा गर्न योग्य
**तं** = उहाँ बलरामलाई
**आशिषः** = आशीर्वाद
**अभिगृणन्तः** = दिँदै
**प्रशशंसुः** = प्रशंसा गर्न लागे

**वाक्यार्थ–** बलरामलाई देखेर गोपहरूको हृदय प्रेमले विह्वल भयो। उनीहरूले मरेर आए झैं मानेर अँगालो मार्दै आशीर्वाद दिँदै प्रशंसाका योग्य बलरामजीको प्रशंसा गर्न लागे।

**पापे प्रलम्बे निहते देवाः परमनिर्वृताः।**
**अभ्यवर्षन् बलं माल्यैः शशंसुः साधु साध्विति॥ ३२॥**

**पदार्थ–**
**पापे** = पापी
**प्रलम्बे** = प्रलम्बासुर

**निहते** = मारिएपछि
**परमनिर्वृताः** = अति प्रसन्न भएका
**देवाः** = देवताहरूले
**बलं** = बलरामलाई
**माल्यैः** = फूलमालाहरूद्वारा
**अभ्यवर्षन्** = वृष्टि गरे
**साधु साधु इति** = राम्रो-राम्रो भन्दै
**शशंसुः** = प्रशंसा गर्न लागे

**वाक्यार्थ–** पापी प्रलम्बासुर मारिएपछि देवताहरू ज्यादै प्रसन्न भए। त्यसपछि उनीहरू बलराममाथि फूलमाला बर्साउँदै ज्यादै राम्रो भयो भन्दै उहाँको प्रशंसा गर्न लागे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**प्रलम्बासुरवधो नाम अष्टादशोऽध्यायः ॥ १८ ॥**

# अथ एकोनविंशोऽध्यायः

## डढेलोबाट गाई र गोपहरूको रक्षा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**क्रीडासक्तेषु गोपेषु तद्गावो दूरचारिणीः।**
**स्वैरं चरन्त्यो विविशुस्तृणलोभेन गह्वरम्॥ १॥**

पदार्थ–
**गोपेषु** = गोपहरू
**क्रीडासक्तेषु** = खेल्नमा मग्न भएपछि
**दूरचारिणीः** = टाढा-टाढा पुगेका
**तद्गावः** = तिनका गाईहरू
**स्वैरं चरन्त्यः** = स्वतन्त्रतापूर्वक चर्दै
**तृणलोभेन** = घाँसका लोभले
**गह्वरम्** = गुफामा
**विविशुः** = पसे

**वाक्यार्थ–** जब गोपहरू खेल्नमा मग्न भए तब उनीहरूका गाईहरू स्वतन्त्रतापूर्वक चर्दै धेरै टाढा पुगेर घाँस खाने लोभले गुफामा पसे।

**अजा गावो महिष्यश्च निर्विशन्त्यो वनाद् वनम्।**
**इषीकाटवीं निर्विविशुः क्रन्दन्त्यो दावतर्षिताः॥ २॥**

पदार्थ–
**अजाः** = बाख्राहरू
**गावः** = गाईहरू र
**महिष्यः च** = भैँसीहरू
**वनात्** = एउटा वनबाट
**वनम्** = अर्को वनमा
**निर्विशन्त्यः** = पस्दै
**दावतर्षिताः** = डढेलोले आत्तिएर
**क्रन्दन्त्यः** = कराउँदै
**इषीकाटवीं** = इषीका नामको वनमा
**निर्विविशुः** = प्रवेश गरे

**वाक्यार्थ–** बाख्रा, गाई र भैँसीहरू एउटा वनबाट अर्को वन गर्दै अगाडि बढ्दै गए। त्यसपछि डढेलोले आत्तिएर कराउँदै अघि बढेका तिनीहरू इषीका नामको वनमा प्रवेश गरे।

**विवरण–** यस श्लोकमा बाख्रा, गाई र भैँसीहरू इषीका नामको वनमा प्रवेश गरे भनिएबाट भगवान् श्रीकृष्णले गाईका साथमा बाख्रा र भैँसीहरू पनि चराउनुहुँदोरहेछ भन्ने थाहा हुन्छ। तर भगवान्ले गाईबाहेक बाख्रा र भैँसी पनि पाल्नुभएको थियो र? भन्ने जिज्ञासा हुनु पनि स्वाभाविकै हो। प्रस्तुत श्लोकलाई व्याख्याकारहरूले सामान्य एवं विशेष गरी दुई रूपमा अर्थ्याएका छन्।

सामान्यतया शास्त्रमा बाख्री, गाई र भैँसीको बाहेक अरू प्राणीहरूको दुधलाई अपवित्र मानिएको छ– **अजागोमहिषीदुग्धादन्यदुग्धं हि चामिषम्** । श्रौत यज्ञका विशेष हवनप्रक्रियामा बाख्रीकै घिउ चाहिने विधान पनि छ। मुख्य रूपमा अजाको घिउलाई नै आज्य भनिने भए पनि प्रसिद्धिका कारण गाई, भैँसी आदिको घिउमा पनि आज्य शब्दको प्रयोग भएको मानिन्छ। यसरी

भगवान्ले गाईसँगै केही बाख्रा र भैँसी पनि पाल्नुभएको रहेछ भन्ने थाहा हुन्छ। उसो भए श्रीकृष्णलाई अजापाल, महिषीपाल आदि नभनी किन गोपालमात्र भनियो त भन्ने शङ्कामा तीमध्ये गाई श्रेष्ठ एवं धेरै भएको र बाख्रा, भैँसी चाहिँ गाईहरूको बथानमा थोरै मात्र पालिएका कारण श्रीकृष्णलाई गोपाल मात्र भनिएको हो भन्ने कुरा केही टीकाकारहरूले जनाएका छन्।

ऐतरेयोपनिषद् (१/२/२)मा प्राणीहरूको सृष्टि गर्ने क्रममा सबभन्दा पहिला गाईकै सृष्टि भएको थियो भनी बताइएबाट यो अग्रगण्य जीव भएको स्पष्ट हुन्छ। गाईभित्र सम्पूर्ण देवताहरूको वास छ भन्ने मानिन्छ। पवित्र कर्महरूमा पञ्चगव्य भनेर गाईबाट निस्कने द्रव्यहरूलाई नै ग्रहण गरिन्छ। परमात्माको अवतारको कारण बताउने क्रममा पनि **गोविप्रसुरसाधूनां छन्दसामपि चेश्वरः** (भागवत, ८/२४/५) अर्थात् गाई, ब्राह्मण, देवता, सत्पुरुष र वेदको पनि रक्षाका लागि परमात्माले अवतार लिनुहुन्छ भनिएको छ। यसबाट गाई अनि गोरक्षाको प्रशस्त महत्त्व रहेको कुरा स्पष्ट हुन्छ। गाईको यस्तो विशेष महत्त्व हुनुमा भगवान् नै कारण हुनुहुन्छ। भगवान्लाई गाईहरूका इन्द्र भनी गोविन्दाभिषेक गरिसकेपछि स्वयं पुरुषोत्तम परमात्माद्वारा पालित भएकाले तिनीहरू सर्वाधिक महत्त्वशाली भए भनी बताइएको छ। यसरी प्रमुखता र अधिकताका कारणले श्रीकृष्णलाई गोपाल भनिएको हो।

केही आचार्यहरूले यस श्लोकको अर्थ गर्दा श्रीकृष्णले केवल गाई मात्र चराउनुभएको थियो भन्ने अर्थ गरेका छन्। श्रीकृष्णको ध्यान गर्ने वेलामा उहाँलाई गाईहरूबाट घेरिएको रूपमा ध्यान गर्नुपर्ने विधान पनि छ। श्रीकृष्णले गाईकै अघिपछि हिँडेको, गाईहरूलाई बोलाएको आदि वर्णनमा गाईको मात्र नाम आएको छ। गोपिनीहरूले यमुनाको विषालु जलमा श्रीकृष्ण पस्नुभएको भन्ने सुनेर उहाँलाई खोज्दै आउने क्रममा **मार्गे गवामन्यपदान्तरान्तरे** (भागवत, १०/१६/१८) अर्थात् गाईहरूले बाटोमा हिँड्दा भएका डोबहरूको बीचमा श्रीकृष्णका चरणचिह्नहरूलाई पहिल्याएको वर्णन आउँछ। यसरी श्रीकृष्णसँग गाईहरूको मात्र सम्बन्ध रहेको कुरा थाहा हुन्छ। यसरी अर्थ गर्दा **गावः** शब्दको अर्थ सामान्य गाई हुन्छ भने **अजा** शब्दको अर्थ एक बेत पनि नब्याएको कोरली गाई भन्ने अर्थ हुन्छ। महिषी शब्दको अर्थ चाहिँ भर्खर ब्याएकी दुधालु गाई भन्ने हुन्छ। त्यसैले भनिएको छ— **अजा स्यादप्रसूता गौः सकृत्सूता महिष्यपि। अन्या गाव इह प्रोक्ता इति शब्दार्थवेदिनः।**

यसरी पहिलो प्रकारले अर्थ गर्दा भगवान्ले गाईका साथमा बाख्रा र भैँसीहरू पनि चराउनुहुन्थ्यो भन्ने अर्थ हुन्छ भने दोस्रो प्रकारले अर्थ गर्दा चाहिँ भगवान्ले केवल गाई मात्र चराउनुहुन्थ्यो भन्ने अर्थ निस्कन्छ।

**तेऽपश्यन्तः पशून् गोपाः कृष्णरामादयस्तदा।**
**जातानुतापा न विदुर्विचिन्वन्तो गवां गतिम्॥ ३॥**

**पदार्थ–**
**तदा** = त्यस समयमा
**पशून्** = पशुहरूलाई
**अपश्यन्तः** = नदेखेर
**जातानुतापाः** = चिन्तित भएका
**ते** = ती

**कृष्णरामादयः** = श्रीकृष्ण, बलराम आदि
**गोपाः** = गोपहरूले
**विचिन्वन्तः** = खोजी गर्दा पनि
**गवां** = गाईहरूको
**गतिम्** = गएको बाटो
**न विदुः** = थाहा पाउन सकेनन्

**वाक्यार्थ–** खेल समाप्त भएपछि हेर्दा गाई नदेखेर श्रीकृष्ण, बलराम आदि गोपहरू ज्यादै चिन्तित भए। वरपर खोजी गर्दा पनि उनीहरूले गाई कता गए थाहा पाउन सकेनन्।

**तृणैस्तत्खुरदच्छिन्नैर्गोष्पदैरङ्कितैर्गवाम्।**
**मार्गमन्वगमन् सर्वे नष्टाजीव्या विचेतसः॥ ४॥**

**पदार्थ–**
**नष्टाजीव्याः** = गाईरूप जीविकाका साधन हराएका
**विचेतसः** = ज्यादै चिन्तित भएका
**सर्वे** = सम्पूर्ण गोपहरू
**तत्खुरदच्छिन्नैः** = गाईका खुर र दाँतले चुँडालेका
**तृणैः** = घाँस-पातद्वारा
**गोष्पदैः** = गाईका खुरद्वारा बनेका चिह्नहरूद्वारा
**अङ्कितैः** = बनेका
**गवाम्** = गाईको
**मार्गम्** = बाटोको
**अन्वगमन्** = पछि लागे

**वाक्यार्थ–** बाँच्ने आधारका रूपमा रहेका गाईहरू हराएपछि गोपहरू गाईहरू हिँड्दा खुरले टेकिएर र चर्दा दाँतले काटिएर चुँडिएका घाँस-पातका टुक्रा तथा भुइँमा बनेका गाईका खुट्टाका चिह्नहरू हेर्दै गाई गएको बाटोको पछि लागे।

**मुञ्जाटव्यां भ्रष्टमार्गं क्रन्दमानं स्वगोधनम्।**
**सम्प्राप्य तृषिताः श्रान्तास्ततस्ते सन्न्यवर्तयन्॥ ५॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**मुञ्जाटव्यां** = मुञ्ज वनमा पुगेर
**भ्रष्टमार्गं** = बाटो हराएर
**क्रन्दमानं** = कराइरहेका
**स्वगोधनम्** = आफ्ना गाईरूपी सम्पत्ति
**सम्प्राप्य** = भेट्टाएपछि
**तृषिताः** = तिर्खाएका (र)
**श्रान्ताः** = थाकेका
**ते** = ती गोपहरूले
**सन्न्यवर्तयन्** = फर्काए

**वाक्यार्थ–** मुञ्ज नामको वनमा पुगेर बाटो हराएर कराइरहेका आफ्ना गाईहरूलाई भेट्टाएपछि ज्यादै तिर्खाएका र थाकेका ती गोपहरूले ती गाईहरू फर्काए।

**ता आहूता भगवता मेघगम्भीरया गिरा।**
**स्वनाम्नां निनदं श्रुत्वा प्रतिनेदुः प्रहर्षिताः॥ ६॥**

**पदार्थ–**
**भगवता** = भगवान् श्रीकृष्णद्वारा
**मेघगम्भीरया** = मेघ झैं गम्भीर
**गिरा** = बोलीले
**आहूताः** = बोलाइएका
**ताः** = ती गाईहरू
**स्वनाम्नां** = आ-आफ्नो नामको
**निनदं** = ध्वनि
**श्रुत्वा** = सुनेर

**प्रहर्षिताः** = अति प्रसन्न भएर
**प्रतिनेदुः** = उत्तरमा आफू पनि
कराए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले आफ्नो मेघ जस्तै गम्भीर वाणीले गाईहरूको नाम उच्चारण गरेर तिनीहरूलाई बोलाउनुभयो। आ-आफ्नो नामको ध्वनि सुनेर गाईहरू अति प्रसन्न भए र उत्तरमा उनीहरू पनि उच्च स्वरले कराउन लागे।

**ततः समन्ताद् वनधूमकेतुर्यदृच्छयाभूत् क्षयकृद् वनौकसाम्।**
**समीरितः सारथिनोल्बणोल्मुकैर्विलेलिहानः स्थिरजङ्गमान् महान्॥ ७॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**यदृच्छया** = अचानक
**समन्तात्** = (त्यस वनको) चारैतिरबाट
**वनौकसाम्** = वनवासी जीवहरूको
**क्षयकृत्** = विनाशक
**सारथिना** = सारथि (वायु)द्वारा
**समीरितः** = अभिप्रेरित
**उल्बणोल्मुकैः** = ठुला लप्काहरूले
**स्थिरजङ्गमान्** = चल-अचल जीवहरूलाई
**विलेलिहानः** = (बेसरी चाटिरहेको) डढाइरहेको
**महान्** = (ठुलो) भयङ्कर
**वनधूमकेतुः** = (वनको धूमकेतु) डढेलो
**अभूत्** = लाग्यो

**वाक्यार्थ–** त्यसपछि अचानक त्यस वनमा चारैतिरबाट भयङ्कर डढेलो लाग्यो। वनवासी जीवहरूलाई विनाश गर्ने त्यो डढेलोले हावाको सहायताले झन् तीव्र गतिमा फैलिँदै ठुला-ठुला लप्काहरूद्वारा चल-अचल जीवहरूलाई नष्ट गर्न लाग्यो।

**तमापतन्तं परितो दवाग्निं गोपाश्च गावः प्रसमीक्ष्य भीताः।**
**ऊचुश्च कृष्णं सबलं प्रपन्ना यथा हरिं मृत्युभयार्दिता जनाः॥ ८॥**

**पदार्थ–**
**परितः** = सबैतिरबाट
**आपतन्तं** = आफूतिर आइरहेको
**तम्** = त्यो भयङ्कर
**दवाग्निं** = डढेलोलाई
**प्रसमीक्ष्य** = देखेर
**भीताः** = डराएका
**गोपाः** = गोपहरू र
**गावः च** = गाईहरू
**यथा** = जसरी
**मृत्युभयार्दिताः** = मृत्युको डरले आत्तिएका
**जनाः** = मानिसहरू
**हरिं** = भगवान् श्रीहरिको
शरणमा पर्दछन् (त्यसै गरी)
**सबलं** = बलरामले सहित हुनुभएका
**कृष्णं** = भगवान् श्रीकृष्णको
**प्रपन्नाः** = शरणमा परेर
**ऊचुः** = भने

**वाक्यार्थ–** भयङ्कर डढेलोले चारैतिरबाट घेरेको देखेर गोप तथा गाईहरू अत्यन्त डराए। त्यसपछि जसरी मृत्युको डरले आत्तिएको मानिस भगवान् श्रीहरिको शरणमा पर्दछ, त्यसै गरी ती सम्पूर्ण गोप र गाईहरू बलरामले सहित भगवान् श्रीकृष्णको शरणमा परेर भन्न थाले।

**कृष्ण कृष्ण महावीर हे रामामितविक्रम।**
**दावाग्निना दह्यमानान् प्रपन्नांस्त्रातुमर्हथः॥ ९॥**

**पदार्थ–**
**महावीर** = हे परम बलशाली
**हे कृष्ण कृष्ण** = हे श्रीकृष्ण, हे श्रीकृष्ण
**अमितविक्रम** = अपरिमित पराक्रमी
**राम** = हे बलराम
**दावाग्निना** = डढेलोले
**दह्यमानान्** = डढ्न लागेका
**प्रपन्नान्** = शरणमा परेका हामीलाई
**त्रातुम्** = रक्षा गर्न
**अर्हथः** = (हजुरहरू नै) समर्थ हुनुहुन्छ

**वाक्यार्थ–** परम बलशाली हे श्रीकृष्ण ! अति पराक्रमी हे बलराम ! यो भयङ्कर डढेलोले डढ्न लागेका हामी हजुरहरूको शरणमा परेका छौँ, हाम्रो रक्षा गर्नुहोस्।

**नूनं त्वद्बान्धवाः कृष्ण न चार्हन्त्यवसादितुम्।**
**वयं हि सर्वधर्मज्ञ त्वन्नाथास्त्वत्परायणाः॥ १०॥**

**पदार्थ–**
**कृष्ण** = हे श्रीकृष्ण
**नूनं** = निश्चय नै
**त्वद्बान्धवाः** = हजुरका भाइ-बन्धुहरू
**अवसादितुम् च** = दुःख भोग्न
**न अर्हन्ति** = योग्य छैनन्
**सर्वधर्मज्ञ** = सम्पूर्ण धर्मका ज्ञाता हे भगवान्
**हि** = निश्चय नै
**वयं** = हामीहरू
**त्वन्नाथाः** = हजुरलाई नै संरक्षक मानेका
**त्वत्परायणाः** = हजुरलाई नै परम आश्रय मानेका छौँ

**वाक्यार्थ–** हे भगवान् ! निश्चय नै हजुरका भाइबन्धुहरू कुनै प्रकारको दुःखकष्ट भोग्न योग्य छैनन्। हे सम्पूर्ण धर्मका ज्ञाता भगवान् ! हजुर नै हाम्रा संरक्षक हुनुहुन्छ र हजुर नै हाम्रा परम आश्रय हुनुहुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वचो निशम्य कृपणं बन्धूनां भगवान् हरिः।**
**निमीलयत मा भैष्ट लोचनानीत्यभाषत॥ ११॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**हरिः** = श्रीकृष्णले
**बन्धूनां** = आफ्ना बन्धुहरूको
**कृपणं** = कारुणिक
**वचः** = वचन
**निशम्य** = सुनेर
**मा भैष्ट** = नडराओ
**लोचनानि** = आँखाहरू
**निमीलयत** = बन्द गर (चिम्ल)
**इति** = यस्तो
**अभाषत** = भन्नुभयो

**वाक्यार्थ–** आफ्ना बन्धुहरूको यसप्रकारको करुण पुकार सुनेर भगवान् श्रीकृष्णले उनीहरूलाई 'नडराओ, आँखा चिम्ल' भन्नुभयो।

**तथेति मीलिताक्षेषु भगवानग्निमुल्बणम्।**
**पीत्वा मुखेन तान् कृच्छ्राद् योगाधीशो व्यमोचयत्॥ १२॥**

**पदार्थ–**
**तथा इति** = हुन्छ त्यसै गर्छौं भन्दै

**मीलिताक्षेषु** = (गोपहरूले) आँखा चिम्लिएपछि
**योगाधीशः** = योगेश्वर
**भगवान्** = भगवान् श्रीकृष्णले
**मुखेन** = आफ्नो मुखले
**उल्बणम्** = भयङ्कर
**अग्निम्** = आगोलाई
**पीत्वा** = पिएर
**तान्** = ती गोप र गाईहरूलाई
**कृच्छ्रात्** = घोर सङ्कटबाट
**व्यमोचयत्** = मुक्त गर्नुभयो

**वाक्यार्थ–** हुन्छ त्यसै गर्छौं भन्दै गोपहरूले आँखा चिम्लिएपछि योगेश्वर भगवान् श्रीकृष्णले आफ्नै मुखले त्यो भयङ्कर आगोलाई पिउनुभयो र ती गोप र गाईहरूलाई घोर सङ्कटबाट मुक्त गर्नुभयो।

**विवरण–** यस अध्यायमा भगवान्ले अर्को डढेलोबाट गाई र गोपहरूको रक्षा गर्नुभएको वर्णन गरिएको छ। अन्तःकरणका विक्षेपकारी अरू सूक्ष्म दोषहरू नष्ट भइसक्दा पनि जीवात्मामा अज्ञानरूप दोष बाँकी रहिरहन्छ। अज्ञानदोष बाँकी रहुन्जेल भक्तहरू रसरूप भगवान्सँग एक भई परमानन्द रसको आस्वादन गर्न सक्दैनन्। यो दावाग्नि पिएको लीलाले यही अज्ञानदोष हटेको सूचना दिन्छ। योभन्दा पहिले दावाग्निपान गर्दा रातको समय थियो, त्यसैले भगवान्ले आँखा चिम्लिन लगाउनुभएन। अहिले दिउँसो भएकाले भगवान्ले गोपहरू डराउन सक्ने ठानी आँखा बन्द गर्न लगाउनुभएको हो। डढेलो लागेको बीचमा कोही व्यक्तिले आँखा बन्द गर, म तिमीलाई बचाउँछु भन्यो भने आँखा बन्द गरिन्छ र? झन् त्यही बीचमा डढेलो बढी आफैँलाई जलाउन थाल्यो भने के गर्ने भनेर डराइन्छ। तर गोपहरूले श्रीकृष्णले भन्नेबित्तिकै आँखा बन्द गरे। यसबाट उनीहरूको भगवान्प्रतिको निष्ठाको पनि परीक्षा भयो। भगवान् योगाधीश हुनुहुन्छ। उहाँले आत्मयोगद्वारा त्यो सबै आगो पिइदिनुभयो।

**ततश्च तेऽक्षीण्युन्मील्य पुनर्भाण्डीरमापिताः।**
**निशम्य विस्मिता आसन्नात्मानं गाश्च मोचिताः ॥ १३ ॥**

**पदार्थ–**
**ततः च** = त्यसपछि
**ते** = ती गोपहरू
**अक्षीणि** = आँखा
**उन्मील्य** = उघारेर (हेर्दा)
**पुनः** = फेरि आफूहरू
**भाण्डीरम्** = भाण्डीर नामको वरको रुखको नजिकमा
**आपिताः** = आइपुगेको
**आत्मानं** = आफूहरू र
**गाः च** = गाईहरू
**मोचिताः** = (डढेलोबाट) मुक्त गराइएका
**निशम्य** = देखेर
**विस्मिताः** = आश्चर्यचकित
**आसन्** = भए

**वाक्यार्थ–** त्यसपछि जब गोपहरूले आँखा खोलेर हेरे, तब उनीहरूले आफूलाई पहिलेकै भाण्डीर वरको रुखको नजिकमा पाए। यसरी आफूलाई र गाईलाई डढेलोबाट बचाएको देखेर सम्पूर्ण गोपहरू आश्चर्यचकित भए।

**कृष्णस्य योगवीर्यं तद् योगमायानुभावितम्।**
**दावाग्नेरात्मनः क्षेमं वीक्ष्य ते मेनिरेऽमरम् ॥ १४ ॥**

**पदार्थ–**
**कृष्णस्य** = भगवान् श्रीकृष्णको
**तत्** = त्यस प्रकारको
**योगवीर्यं** = योगसिद्धि (र)
**योगमायानुभावितम्** = योगमायाको प्रभाव (तथा)
**दावाग्नेः** = डढेलोबाट
**आत्मनः** = आफ्नो
**क्षेमं** = रक्षा भएको
**वीक्ष्य** = देखेर
**ते** = ती गोपहरूले (श्रीकृष्णलाई)
**अमरम्** = अमर परमेश्वर
**मेनिरे** = मान्न लागे

**वाक्यार्थ–** श्रीकृष्णको त्यसप्रकारको योगसिद्धि र योगमायाको प्रभावलाई तथा डढेलोबाट आफ्नो रक्षा गरिएको देखेर गोपहरूले श्रीकृष्णलाई परमेश्वर मान्न लागे।

**गाः सन्निवर्त्य सायाह्ने सहरामो जनार्दनः।**
**वेणुं विरणयन् गोष्ठमगाद् गोपैरभिष्टुतः॥ १५॥**

**पदार्थ–**
**गोपैः** = गोपहरूद्वारा
**अभिष्टुतः** = स्तुति गरिनुभएका
**सहरामः** = बलरामले सहित
**जनार्दनः** = भगवान् श्रीकृष्ण
**सायाह्ने** = सन्ध्या कालमा
**गाः** = गाईहरू
**सन्निवर्त्य** = फर्काएर
**वेणुं** = बाँसुरी
**विरणयन्** = बजाउँदै
**गोष्ठम्** = व्रजमा
**अगात्** = आउनुभयो

**वाक्यार्थ–** सन्ध्या काल भएपछि गोपहरूद्वारा स्तुति गरिनुभएका बलरामले सहित भगवान् श्रीकृष्ण गाईहरूलाई फर्काएर बाँसुरी बजाउँदै गाईको पछि लागी व्रजमा फर्किनुभयो।

**गोपीनां परमानन्द आसीद् गोविन्ददर्शने।**
**क्षणं युगशतमिव यासां येन विनाभवत्॥ १६॥**

**पदार्थ–**
**येन विना** = जुन भगवान् श्रीकृष्णको दर्शन विना
**यासां** = जुन गोपिनीहरूलाई
**क्षणं** = एक क्षण पनि
**युगशतम्** = सय युग
**इव** = जैं
**अभवत्** = हुन्थ्यो
**गोपीनां** = ती गोपिनीहरूलाई
**गोविन्ददर्शने** = भगवान् गोविन्दको दर्शनले
**परमानन्दः** = परम आनन्द
**आसीत्** = प्राप्त हुन्थ्यो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको दर्शन नपाएर व्रजमण्डलका गोपिनीहरूलाई एक क्षण पनि सय युग जैं लामो लाग्दथ्यो र भगवान् श्रीकृष्णको दर्शनले ती गोपिनीहरूलाई परम आनन्द प्राप्त हुन्थ्यो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**दावाग्निपानं नामैकोनविंशोऽध्यायः॥ १९॥**

# अथ विंशोऽध्यायः

## वर्षा र शरद् ऋतुको वर्णन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तयोस्तदद्भुतं कर्म दावाग्नेर्मोक्षमात्मनः ।**
**गोपाः स्त्रीभ्यः समाचख्युः प्रलम्बवधमेव च ॥ १ ॥**

**पदार्थ–**
**गोपाः** = गोपहरूले
**दावाग्नेः** = डढेलोबाट
**आत्मनः** = आफूहरूको
**मोक्षम्** = मुक्ति (रक्षा)
**प्रलम्बवधम्** = प्रलम्बासुरको वध
**च एव** = लगायत
**तयोः** = ती श्रीकृष्ण र बलरामका
**तत्** = ती
**अद्भुतं** = आश्चर्यलाग्दा
**कर्म** = काम
**स्त्रीभ्यः** = (आमा, दिदी–बहिनी आदि) आइमाईहरूलाई
**समाचख्युः** = सुनाए

**वाक्यार्थ–** वनबाट घर फर्किएपछि गोपहरूले भगवान् श्रीकृष्ण र बलरामले आफूहरूलाई डढेलोबाट रक्षा गरेको तथा प्रलम्बासुरको वध गरेको आदि आश्चर्यलाग्दा सम्पूर्ण कर्महरू आमा, दिदी–बहिनी आदि आइमाईहरूलाई सुनाए।

**गोपवृद्धाश्च गोप्यश्च तदुपाकर्ण्य विस्मिताः ।**
**मेनिरे देवप्रवरौ कृष्णरामौ व्रजं गतौ ॥ २ ॥**

**पदार्थ–**
**तत्** = त्यो गोपहरूको कुरा
**उपाकर्ण्य** = सुनेर
**विस्मिताः** = आश्चर्यचकित भएका
**गोपवृद्धाः च** = बुढापाका गोपहरू र
**गोप्यः च** = गोपिनीहरूले समेत
**कृष्णरामौ** = श्रीकृष्ण र बलरामलाई
**व्रजं गतौ** = (छद्म भेषमा) व्रजमण्डलमा आएका
**देवप्रवरौ** = कुनै देवताविशेष
**मेनिरे** = मान्न लागे

**वाक्यार्थ–** गोपहरूको कुरा सुनेर बुढापाका गोप–गोपिनीलगायत सम्पूर्ण व्रजवासीहरू आश्चर्यचकित बने। त्यसपछि उनीहरूले श्रीकृष्ण र बलराम छद्म भेषमा व्रजमण्डलमा आएका कुनै देवताहरू हुन् भन्ने मान्न लागे।

**ततः प्रावर्तत प्रावृट् सर्वसत्त्वसमुद्भवा ।**
**विद्योतमानपरिधिर्विस्फूर्जितनभस्तला ॥ ३ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (ग्रीष्म ऋतु बितेपछि)
**विस्फूर्जितनभस्तला** = (बिजुलीसँगै) मेघका गर्जनले युक्त आकाश भएको
**विद्योतमानपरिधिः** = चारै दिशा उज्यालो भएको
**सर्वसत्त्वसमुद्भवा** = सम्पूर्ण प्राणीहरूको पोषक
**प्रावृट्** = वर्षा ऋतु
**प्रावर्तत** = प्रारम्भ भयो

**वाक्यार्थ–** ग्रीष्म ऋतु बितेपछि सम्पूर्ण प्राणीहरूलाई पोषण गर्ने वर्षा ऋतु प्रारम्भ भयो। जसको आगमनसँगै आकाशमा बिजुलीसँगै मेघ गर्जेकाले सबै दिशाहरू उज्याला बने।

**विवरण–** यस अध्यायमा वर्षा र शरद् ऋतुको आगमनमा सबै प्राणीहरू खुसी भए भनिएको छ। वर्षा ऋतु आएपछि ग्रीष्म ऋतुमा पीडित भएका प्राणीहरू पनि खुसी हुन्छन्, पृथिवी पनि हरियालीले भरिन्छिन्। यी सबै सद्गुण भएकाले यहाँ वर्षा ऋतुलाई **सर्वसत्त्वसमुद्भवा** अर्थात् सबै प्राणीहरूलाई जीवन दिने भनिएको छ। आध्यात्मिक अर्थमा जब भक्तहरूको अज्ञाननाश हुन्छ र उनीहरूले परमात्माको स्वरूपलाई थाहा पाउँछन्, तब भगवान्ले लीला गर्न उनीहरूभित्र विशुद्ध सत्त्वगुण उत्पन्न गर्नुहुन्छ। यसरी यो अध्यायभरि अनेक दृष्टान्त दिएर सबैथरी जीवहरूभित्र सत्त्वको उदय भएको देखाइएको छ। जड–चेतन सबैभित्र सत्त्वगुणको उदय भएको देखाउनु यो अध्यायको विषय हो। यहाँ पहिले तीन श्लोकसम्म वर्षा ऋतुको सुरुवात हुने उपक्रम छ भने ४ देखि २४ सम्म जम्मा २१ श्लोकमा २१ वस्तुको उद्बोधन भएको देखाइएको छ भने २५ देखि ३१ सम्मका ७ श्लोकमा भगवान्ले वर्षा ऋतुमा क्रीडा गर्नुभएको बताइएको छ। ३२ औँ श्लोकमा शरद्को प्रवृत्ति हुन्छ र ३३ देखि अध्यायभरिका १७ श्लोकमा शरद्द्वारा १७ ओटै वस्तुमा सत्त्वको उदय भएको देखाइएको छ।

**सान्द्रनीलाम्बुदैर्व्योम सविद्युत्स्तनयित्नुभिः।**
**अस्पष्टज्योतिराच्छन्नं ब्रह्मेव सगुणं बभौ ॥ ४ ॥**

**पदार्थ–**
**सविद्युत्स्तनयित्नुभिः** = बिजुलीले सहित मेघका गर्जनाहरूले (र)
**सान्द्रनीलाम्बुदैः** = काला–काला घना बादलहरूले
**आच्छन्नं** = ढाकिएर
**अस्पष्टज्योतिः** = अँध्यारो बनेको
**व्योम** = आकाश
**सगुणं** = गुणले सहित
**ब्रह्म इव** = ब्रह्म झैँ
**बभौ** = शोभायमान देखियो

**वाक्यार्थ–** बिजुलीसँगसँगै गर्जेका काला–काला घना बादलहरूले ढाकिएर अँध्यारो बनेको आकाश (स्वप्रकाश भएर पनि) सगुणरूपमा शोभायमान बनेको ब्रह्म झैँ सुन्दर देखियो।

**विवरण–** यस श्लोकमा घना कालो बादल र बिजुलीको चमकले ढाकिएको आकाशलाई तीन गुणद्वारा ढाकिएको ब्रह्मसँग तुलना गरिएको छ। **आच्छन्नं सगुणं ब्रह्म** अर्थात् तीन गुणद्वारा ढाकिएको ब्रह्म भनिएकाले श्रीधर स्वामीले त्यसको अर्थ जीवात्मा भन्ने गर्नुभएको छ। भगवान्मा गुणको आवरण हुन सक्दैन भन्ने आशयले यो अर्थ गरिएको हो। आकाशमा रहेको मेघको कालोपनले तमोगुण, गर्जनाले रजोगुण र बिजुलीको चमकले प्रकाशात्मक सत्त्वगुणलाई सूचित

गर्दछ। वल्लभाचार्यले भने यसको अर्थ शरीरधारी श्रीकृष्ण भन्ने गर्नुभएको छ। **सगुण** अर्थात् गुणले युक्त हुनुभएका श्रीकृष्ण लौकिक मानिसहरूलाई **व्यामोह** अर्थात् मोहित गर्नका लागि ईश्वरीय तेजलाई लुकाई गोठालोको भेषमा **अस्पष्टज्योति** बन्नुभएको छ। उहाँ अनेक आभूषण र पीताम्बर आदिद्वारा ढाकिनुहुन्छ र गोपिनीहरूद्वारा पनि घेरिनुहुन्छ। पहिलो अर्थमा भगवान्ले लीलाविस्तारका लागि जीवहरूको उद्बोध गर्नुभएको तात्पर्य निस्कन्छ भने दोस्रो अर्थमा चाहिँ भगवान्ले आफ्नै अनन्त शक्ति र कल्याणकारक गुणहरूको उद्बोध गर्नुभएको तात्पर्य निस्कन्छ।

**अष्टौ मासान् निपीतं यद् भूम्याश्चोदमयं वसु।**
**स्वगोभिर्मोक्तुमारेभे पर्जन्यः काल आगते॥ ५॥**

**पदार्थ–**
**पर्जन्यः** = सूर्यले (१२ वटा सूर्यमध्ये वर्षा ऋतुको सूर्यलाई पर्जन्य भनिन्छ)
**अष्टौ मासान्** = आठ महिनासम्म (मङ्सिरदेखि असारसम्म)
**भूम्याः** = पृथिवीबाट
**यत्** = जुन
**उदमयं** = पानीरूप
**वसु** = धन
**स्वगोभिः** = आफ्ना किरणहरूद्वारा
**निपीतं** = पिएका थिए (त्यो)
**काले** = वर्षा ऋतु
**आगते** = आएपछि
**मोक्तुम्** = फिर्ता गर्न
**आरेभे** = लागे

**वाक्यार्थ–** सूर्यले आठ महिनासम्म पृथिवीबाट आफ्ना किरणहरूद्वारा जुन पानीरूप धन लिएका थिए, त्यो सबै वर्षा ऋतु लागेपछि फिर्ता गर्न लागे।

**तडिद्वन्तो महामेघाश्चण्डश्वसनवेपिताः।**
**प्रीणनं जीवनं ह्यस्य मुमुचुः करुणा इव॥ ६॥**

**पदार्थ–**
**चण्डश्वसनवेपिताः** = जोडसँग चलेको हावाले प्रेरित भएर
**तडिद्वन्तः** = बिजुलीले सहित भएका
**महामेघाः** = घना बादलहरूले
**करुणाः इव** = दयालु व्यक्तिले (दुःखीलाई दया गरे झैं)
**हि** = निश्चय नै
**अस्य** = यस संसारका
**प्रीणनं** = खुसीका लागि
**जीवनं** = जीवनरूप पानी
**मुमुचुः** = वर्षा गर्न लागे

**वाक्यार्थ–** जसरी दयालु व्यक्तिले दुःखीमाथि उपकार गर्दछ, त्यसै गरी जोडसँग चलेको हावाले प्रेरित भएका र बिजुलीले सहित भएका वर्षाकालीन बादलहरूले पृथिवीका प्राणीहरूको खुसीका निम्ति जीवनरूप पानी वर्षा गर्न लागे।

**तपःकृशा देवमीढा आसीद् वर्षीयसी मही।**
**यथैव काम्यतपसस्तनुः सम्प्राप्य तत्फलम्॥ ७॥**

**पदार्थ–**
**तपःकृशा** = ग्रीष्मकालीन तापले सुख्खा बनेकी (दुब्लाएकी)

**मही** = पृथिवी
**देवमीढा** = वर्षाका जलले सिञ्चित भएपछि
**काम्यतपसः** = फलको कामना गरेर तपस्या गर्नेको
**तनुः** = शरीर
**यथा** = जसरी (पहिला सुके तापनि)
**तत्** = त्यो तपस्याको
**फलम्** = फल
**सम्प्राप्य एव** = प्राप्त गरेपछि (दिव्य बन्दछ त्यसै गरी)
**वर्षीयसी** = पुष्ट (हराभरा)
**आसीत्** = भएकी थिइन्

**वाक्यार्थ–** ग्रीष्मकालको प्रचण्ड गर्मीका कारण पृथिवी सुख्खा (दुब्ली) बनेकी थिइन्। जसरी फलको चाहना गरेर तपस्या गर्नेको शरीर त्यस वेला सुके तापनि फल प्राप्त गरेपछि दिव्य बन्दछ, त्यसै गरी वर्षाले सेचन गरेपछि पृथिवी हराभरा (पुष्ट) बनिन्।

**निशामुखेषु खद्योतास्तमसा भान्ति न ग्रहाः।**
**यथा पापेन पाखण्डा न हि वेदाः कलौ युगे॥ ८॥**

**पदार्थ–**
**यथा** = जसरी
**कलौ युगे** = कलियुगमा
**पापेन** = पाप प्रबल हुनाले
**पाखण्डाः** = पाखण्ड मतहरू
**भान्ति** = प्रसिद्ध हुन्छन्
**वेदाः** = वैदिक सिद्धान्तहरू
**न हि** = हुँदैनन् (त्यसै गरी)
**निशामुखेषु** = वर्षाका सन्ध्या कालहरूका
**तमसाः** = अन्धकारमा
**खद्योताः** = जुनकिरीहरू (देखापर्दछन्)
**ग्रहाः** = अन्य प्रकाशमान ग्रहहरू
**न** = देखापर्दैनन्

**वाक्यार्थ–** जसरी कलियुगमा पापका कारण पाखण्ड मतहरू प्रसिद्ध हुन्छन् र वैदिक सिद्धान्तहरू ओझेलमा पर्दछन्, त्यसै गरी वर्षाकालका अँध्यारा साँझहरूमा (उज्याला चन्द्र, सूर्य आदि) ग्रहहरू बादलले ढाकिन्छन् र केवल जुनकिरीहरू मात्र देखापर्न थाल्दछन्।

**श्रुत्वा पर्जन्यनिनदं मण्डुकाः व्यसृजन् गिरः।**
**तूष्णीं शयानाः प्राग् यद्वद् ब्राह्मणा नियमात्यये॥ ९॥**

**पदार्थ–**
**प्राक्** = पहिला
**तूष्णीं** = चुपचाप लागेर
**शयानाः** = सुतेका
**ब्राह्मणाः** = ब्रह्मचारीहरू
**नियमात्यये** = नित्यकर्म सकिएपछि (गुरुको आज्ञा सुनेर)
**यद्वत्** = जसरी
**गिरः** = वाणी उच्चारण गर्दछन् (वेदपाठ गर्दछन्, त्यसै गरी पहिला चुप लागेर बसेका)
**मण्डुकाः** = भ्यागुताहरू
**पर्जन्यनिनदं** = मेघको गर्जन
**श्रुत्वा** = सुनेर
**व्यसृजन्** = (टर्र–टर्र) आवाज निकाल्न लागे

**वाक्यार्थ–** जसरी पहिला चुपचाप लागेर बसेका ब्रह्मचारीहरू नित्यकर्म सकिएपछि गुरुको आज्ञा सुनेर वेदपाठ गर्न लाग्दछन्, त्यसै गरी चुप लागेर बसेका भ्यागुताहरू मेघका गर्जनहरू सुनेर टर्र–टर्र गरी कराउन लागे।

**आसन्नुत्पथवाहिन्यः क्षुद्रनद्योऽनुशुष्यतीः।**
**पुंसो यथास्वतन्त्रस्य देहद्रविणसम्पदः॥ १०॥**

**पदार्थ–**
**यथा** = जसरी
**अस्वतन्त्रस्य** = इन्द्रियहरूको नियन्त्रणमा परेको
**पुंसः** = व्यक्तिको
**देहद्रविणसम्पदः** = शरीर र धनसम्पत्ति
**उत्पथवाहिन्यः** = कुमार्गमा खर्च हुन्छ (त्यसै गरी)
**अनुशुष्यतीः** = (वर्षाको अभावमा) सुकिरहेका
**क्षुद्रनद्यः** = साना नदीहरू (भरिएका)
**आसन्** = थिए

**वाक्यार्थ–** जसरी इन्द्रियहरूको नियन्त्रणमा परेको व्यक्तिको शरीर र धनसम्पत्ति कुमार्गमा खर्च हुन्छ, त्यसै गरी वर्षाको अभावमा सुकिरहेका साना-साना नदीनालाहरू वर्षाको भेलले भरिए (र ती नदीनालाहरूको पानी जथाभावी बग्न थाल्यो)।

**हरिता हरिभिः शष्पैरिन्द्रगोपैश्च लोहिता।**
**उच्छिलीन्ध्रकृतच्छाया नृणां श्रीरिव भूरभूत्॥ ११॥**

**पदार्थ–**
**हरिभिः** = हरिया-हरिया
**शष्पैः** = घाँसहरूद्वारा
**हरिता** = हरियालीमय भएकी र
**इन्द्रगोपैः च** = इन्द्रगोप (ओरिगाँठे) किराहरूले
**लोहिता** = रातम्मे बनेकी (तथा)
**उच्छिलीन्ध्रकृतच्छाया** = च्याउ उम्रिनाले त्यसको छाया परेकी
**भूः** = पृथिवी
**नृणां** = राजाका
**श्रीः इव** = सेनारूप सम्पत्ति झैं
**अभूत्** = भइन्

**वाक्यार्थ–** वर्षाकालमा पृथिवीको कुनै भाग हरिया घाँसहरूले गर्दा हरियो बनेको थियो, कुनै भाग इन्द्रगोप (ओरिगाँठे) किराहरूले गर्दा रातम्मे भएको र कुनै भाग धेरै च्याउ उम्रिनाले त्यसको छाया परेको भयो। यी सबैले गर्दा पृथिवी कुनै राजाका रङ्ग-बिरङ्गी सेना झैं देखिइन्।

**क्षेत्राणि शस्यसम्पद्भिः कर्षकाणां मुदं ददुः।**
**धनिनामुपतापं च दैवाधीनमजानताम्॥ १२॥**

**पदार्थ–**
**क्षेत्राणि** = खेतबारीहरूले
**शस्यसम्पद्भिः** = अन्नरूप सम्पत्तिले
**कर्षकाणां** = किसानहरूलाई
**मुदं** = खुसी
**ददुः** = दिए
**दैवाधीनम्** = सबै कुरा ईश्वरको अधीनमा छ भन्ने
**अजानताम्** = नबुझेका
**धनिनाम् च** = धनीलाई चाहिँ (धनसम्पत्ति भएर अभिमानी बनेकाहरूलाई कसरी संरक्षण गर्ने भन्ने बारेमा)
**उपतापं** = चिन्तित बनाए

**वाक्यार्थ–** (अनुकूल वर्षाका कारण) खेतबारीहरू अन्नरूप सम्पत्तिले भरिपूर्ण बने। यसले कृषकहरू अति प्रसन्न बने भने सबै ईश्वरको अधीनमा छ भन्ने कुरा नबुझेका धनीहरूलाई त्यो

अन्नबालीको संरक्षण कसरी गर्ने भन्ने कुराले चिन्तित बनायो।

**जलस्थलौकसः सर्वे नववारिनिषेवया।**

**अबिभ्रद् रुचिरं रूपं यथा हरिनिषेवया॥ १३॥**

**पदार्थ**–
**हरिनिषेवया** = भगवान् श्रीहरिको सेवन (पूजा, भजन)द्वारा
**यथा** = जसरी (सेवकको भित्री, बाहिरी दुबै रूप सुन्दर हुन्छ, त्यसै गरी)
**नववारिनिषेवया** = नयाँ वर्षाको जलको सेचन आदिद्वारा
**सर्वे** = सम्पूर्ण
**जलस्थलौकसः** = जलचर र स्थलचर प्राणीहरूले
**रुचिरं** = सुन्दर
**रूपं** = स्वरूप
**अबिभ्रत्** = धारण गरे

**वाक्यार्थ**– भगवान् श्रीहरिको सेवन गर्नाले जसरी सेवकको (भित्री र बाहिरी दुबै) रूप सुन्दर बन्दछ, त्यसै गरी वर्षाका नयाँ-नयाँ जलको सेचनका कारण सम्पूर्ण जलचर तथा स्थलचर प्राणीहरूले सुन्दर स्वरूप धारण गरे।

**टिप्पणी**– यहाँदेखि २४ श्लोकसम्म १२ तत्त्वहरूको अवस्था देखाइएको छ। जसमा यो पहिलो श्लोकमा सम्पूर्ण प्राणीहरू अनि क्रमशः नदी, पहाड, मार्ग, कामिनी स्त्री, गुणी पुरुष, चन्द्रमा, मयूर, तपस्वी, गृहासक्त, वेदमार्ग र राजाहरू गरी बाह्र तत्त्वहरूको वर्षाकालीन अवस्था देखाइएको छ।

**सरिद्भिः सङ्गतः सिन्धुश्चुक्षुभे श्वसनोर्मिमान्।**

**अपक्वयोगिनश्चित्तं कामाक्तं गुणयुग्यथा॥ १४॥**

**पदार्थ**–
**अपक्वयोगिनः** = चित्तसंयम नगरेका कच्चा योगीहरूको
**कामाक्तं** = कामनायुक्त
**गुणयुक्** = (गुणहरूमा लागेको) विषयासक्त
**चित्तं** = चित्त
**यथा** = जसरी (चञ्चल हुन्छ, त्यसै गरी)
**सरिद्भिः** = (वर्षाका जलले उर्लेका) नदीहरू
**सङ्गतः** = मिसिएको
**श्वसनोर्मिमान्** = ठुला-ठुला जलतरङ्गहरूले युक्त
**सिन्धुः** = समुद्र
**चुक्षुभे** = चञ्चल बनेर उर्लिन थाल्यो

**वाक्यार्थ**– चित्तसंयम नगरेका कच्चा योगीहरूको कामनाले भरिएको विषयासक्त चित्त जसरी चञ्चल हुन्छ त्यसै गरी वर्षाको भेलले भरिएका नदीहरूको सङ्गमले ठुला-ठुला तरङ्ग उठेर समुद्र चञ्चल बन्यो।

**गिरयो वर्षधाराभिर्हन्यमाना न विव्यथुः।**

**अभिभूयमाना व्यसनैर्यथाधोक्षजचेतसः॥ १५॥**

**पदार्थ**–
**यथा** = जसरी
**व्यसनैः** = दुःखकष्टहरूद्वारा

**अभिभूयमानाः** = सताइए पनि
**अधोक्षजचेतसः** = भगवान्मा चित्त अर्पण गरेका भक्तहरू
**न विव्यथुः** = दुःखी हुँदैनन् (त्यसै गरी)
**वर्षधाराभिः** = मुसलधारे वर्षाले
**हन्यमानाः** = निरन्तर हिर्काइए पनि
**गिरयः** = पर्वतहरू दुःखी भएनन्

**वाक्यार्थ–** जसरी दुःखकष्टद्वारा सताइए पनि भगवान्मा चित्त अर्पण गरेका भक्तहरू दुःखी हुँदैनन्, त्यसै गरी मुसलधारे वर्षाले निरन्तर हिर्काउँदा पनि पर्वतहरू दुःखी भएनन्।

**मार्गा बभूवुः सन्दिग्धास्तृणैश्छन्ना ह्यसंस्कृताः।**
**नाभ्यस्यमानाः श्रुतयो द्विजैः कालहता इव ॥ १६ ॥**

पदार्थ–
**द्विजैः** = ब्राह्मणहरूद्वारा
**न अभ्यस्यमानाः** = अभ्यास (निरन्तर अध्ययन) नगरिएका
**श्रुतयः** = वेदमन्त्रहरू
**कालहताः** = केही समयपछि बिर्सिए
**इव** = झैं
**असंस्कृताः** = सफा नगरिएका
**मार्गाः** = बाटाहरू
**तृणैश्छन्नाः** = घाँसले ढाकिएर
**सन्दिग्धाः हि** = नचिनिने नै
**बभूवुः** = भए

**वाक्यार्थ–** जसरी ब्राह्मणहरूद्वारा निरन्तर अध्ययन नगरिएका वेदमन्त्रहरू केही समयपछि बिर्सिइन्छन् त्यसै गरी सफा नगरिएका बाटाहरू घाँसले ढाकिएर नचिनिने भए।

**लोकबन्धुषु मेघेषु विद्युतश्चलसौहृदाः।**
**स्थैर्यं न चक्रुः कामिन्यः पुरुषेषु गुणिष्विव ॥ १७ ॥**

पदार्थ–
**चलसौहृदाः** = अस्थिर प्रेम गर्ने
**कामिन्यः** = कामिनी स्त्रीहरू
**गुणिषु** = गुणी
**पुरुषेषु इव** = पुरुषहरूसँग पनि (स्थिर नबने) झैं
**लोकबन्धुषु** = लोकको कल्याण गर्ने
**मेघेषु** = बादलहरूमा पनि
**विद्युतः** = बिजुलीहरूले पनि
**स्थैर्यं** = स्थिरता
**न चक्रुः** = गर्न सकेनन्

**वाक्यार्थ–** अस्थिर (क्षणिक) प्रेम गर्ने कामिनी स्त्रीहरू सर्वगुणसम्पन्न पुरुषसँग पनि स्थिर नभए झैं चञ्चल बिजुलीहरू लोककल्याणकारी मेघसँग पनि स्थिर हुन सकेनन्।

**धनुर्वियति माहेन्द्रं निर्गुणं च गुणिन्यभात्।**
**व्यक्ते गुणव्यतिकरेऽगुणवान् पुरुषो यथा ॥ १८ ॥**

पदार्थ–
**यथा** = जसरी
**अगुणवान्** = गुणरहित
**पुरुषः** = पुरुष (परब्रह्म)
**गुणव्यतिकरे** = गुणहरू (सत्त्व, रज र तम)को मिश्रणबाट
**व्यक्ते** = व्यक्त भएको विश्वमा (शोभायमान हुन्छ, त्यसै गरी)
**निर्गुणं** = गुण (रङ्ग, आकार आदि) रहित
**माहेन्द्रं धनुः** = इन्द्रधनु
**गुणिनि च** = (मेघगर्जन आदि)

गुण युक्त | **वियति** = आकाशमा | **अभात्** = शोभायमान देखियो

**वाक्यार्थ–** जसरी गुणरहित परब्रह्म गुणहरू (सत्त्व, रज र तम)को मिश्रणबाट व्यक्त भएको विश्वमा शोभायमान हुन्छ, त्यसै गरी गुण (रङ्ग, आकार आदि) रहित इन्द्रधनु मेघगर्जन आदि गुणहरूले युक्त आकाशमा अति शोभायमान देखियो।

**न रराजोडुपश्छन्नः स्वज्योत्स्नाराजितैर्घनैः।**

**अहंमत्या भासितया स्वभासा पुरुषो यथा॥ १९॥**

**पदार्थ–**
**स्वभासा** = स्वप्रकाशद्वारा
**भासितया** = प्रकाशित
**अहंमत्या** = अहं बुद्धि (अहङ्कार) द्वारा
**यथा** = जसरी
**पुरुषः** = जीवात्मा (स्वयं प्रकाशित हुन सक्दैन, त्यसै गरी)
**स्वज्योत्स्नाराजितैः** = आफ्नै प्रकाशद्वारा प्रकाशित भएका
**घनैः** = बादलहरूद्वारा
**छन्नः** = ढाकिएका
**उडुपः** = चन्द्रमा
**न रराज** = प्रकाशित हुन सकेनन्

**वाक्यार्थ–** जसरी आफ्नै प्रकाशद्वारा प्रकाशित हुने अहङ्कारद्वारा ढाकिनाले जीवात्मा प्रकाशित हुन सक्दैन, त्यसै गरी आफ्नै प्रकाशद्वारा प्रकाशित बादलहरूद्वारा ढाकिएका चन्द्रमा प्रकाशित हुन सकेनन्।

**मेघागमोत्सवा हृष्टाः प्रत्यनन्दञ्छिखण्डिनः।**

**गृहेषु तप्ता निर्विण्णा यथाच्युतजनागमे॥ २०॥**

**पदार्थ–**
**यथा** = जसरी
**गृहेषु** = घरमा
**तप्ताः** = तापहरूले पिल्सिएर
**निर्विण्णाः** = खिन्न भएका गृहस्थहरू
**अच्युतजनागमे** = भगवान्का भक्तहरूको आगमनले
**हृष्टाः** = प्रसन्न हुन्छन् (त्यसै गरी)
**मेघागमोत्सवाः** = मेघको आगमनले उत्सव मनाइरहेका
**शिखण्डिनः** = मयूरहरू
**प्रत्यनन्दन्** = आनन्दित भए

**वाक्यार्थ–** जसरी घरका विभिन्न दुःखकष्टले पिल्सिएर खिन्न भएका गृहस्थहरू भगवान्का भक्तहरूको आगमनले प्रसन्न हुन्छन्, त्यसै गरी मेघको आगमनको उत्सवमा प्रसन्न भएका मयूरहरू आनन्दित भए।

**पीत्वापः पादपाः पद्भिरासन्नानात्ममूर्तयः।**

**प्राक्क्षामास्तपसा श्रान्ता यथा कामानुसेवया॥ २१॥**

**पदार्थ–**
**तपसा** = कठोर तपस्याद्वारा
**प्राक्** = पहिला
**क्षामाः** = दुब्लाएका र
**श्रान्ताः** = अत्यन्त थाकेका व्यक्तिहरू

**कामानुसेवया** = चाहेको वर प्राप्त गरेपछि
**यथा** = जसरी स्वस्थ बन्दछन् (त्यसै गरी ग्रीष्मकालमा प्रचण्ड तातोले सुकेर ओइलाएका)
**पादपाः** = वृक्षहरू
**पद्भिः** = जराहरूद्वारा
**आपः** = वर्षाको जल
**पीत्वा** = पिएर
**नानात्ममूर्तयः** = थरीथरी स्वरूप भएका (हराभरा)
**आसन्** = भए

**वाक्यार्थ–** जसरी कठोर तपस्या गर्नेहरू तपस्या गर्ने वेलामा दुब्लाएका र थकित भएका भए तापनि चाहेको वर प्राप्त गरेपछि स्वस्थ बन्दछन् त्यसै गरी ग्रीष्म ऋतुको प्रचण्ड तातोले सुकेर ओइलाएका वृक्षहरू जराहरूद्वारा वर्षाको जल पान गरेर थरीथरी स्वरूप लिएर हराभरा देखिन लागे।

**सरस्स्वशान्तरोधस्सु न्यूषुरङ्गापि सारसाः।**
**गृहेष्वशान्तकृत्येषु ग्राम्या इव दुराशयाः॥ २२॥**

पदार्थ–
**अङ्ग** = हे प्रिय परीक्षित्
**दुराशयाः** = विषयमा आसक्त
**ग्राम्याः** = गाउँलेहरू
**अशान्तकृत्येषु** = अशान्त (दुःखदायी) कर्मले भरिएको
**गृहेषु** = घरमा
**इव** = (बसे) झैँ
**अशान्तरोधस्सु** = किनार अशान्त (काँडा, हिलो, पानीका छाल आदिले) बनेका
**सरस्सु** = पोखरीहरूमा
**अपि** = पनि
**सारसाः** = सारसहरू
**न्यूषुः** = बसिरहे

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! विषयमा आसक्त गाउँलेहरू दुःखदायी घरमा बसिरहे झैँ पोखरीका किनार अशान्त (काँडा, हिलो, पानीका छाल आदिले) बने पनि सारसहरू त्यहीँ बसिरहे।

**जलौघैर्निरभिद्यन्त सेतवो वर्षतीश्वरे।**
**पाखण्डिनामसद्वादैर्वेदमार्गाः कलौ यथा॥ २३॥**

पदार्थ–
**पाखण्डिनां** = पाखण्डीहरूका
**असद्वादैः** = झुठा वचन (मत-मतान्तर)ले
**कलौ** = कलियुगमा
**यथा** = जसरी
**वेदमार्गाः** = वैदिक मार्गहरू (छिन्नभिन्न हुन्छन्, त्यसै गरी)
**ईश्वरे** = देवराज इन्द्रले
**वर्षति** = वर्षा गर्न थालेपछि
**जलौघैः** = बाढीद्वारा
**सेतवः** = पुल, बाँध आदि
**निरभिद्यन्त** = भत्काइए

**वाक्यार्थ–** जसरी कलियुगमा पाखण्डमतहरूले वैदिक मार्गहरूलाई छिन्नभिन्न पार्दछन्, त्यसै गरी देवराज इन्द्रले जलवर्षा गर्न थालेपछि बाढीले पुल र बाँधहरू भत्कायो।

**व्यमुञ्चन् वायुभिर्नुन्ना भूतेभ्योऽथामृतं घनाः।**
**यथाशिषो विश्पतयः काले काले द्विजेरिताः॥ २४॥**

पदार्थ–
**द्विजेरिताः** = ब्राह्मणहरूद्वारा अभिप्रेरित

**विश्पतयः** = राजाहरूले
**यथा** = जसरी
**काले काले** = समय-समयमा
**आशिषः** = प्रजाको अभिलाषा
(पूर्ण गरिदिन्छन्)
**अथ** = त्यसै गरी
**वायुभिः** = वायुद्वारा
**नुन्नाः** = प्रेरित भएका
**घनाः** = बादलहरूले
**भूतेभ्यः** = प्राणीहरूका निम्ति
**अमृतं** = अमृतसमान जल
**व्यमुञ्चन्** = वर्षा गर्न लागे

**वाक्यार्थ–** ब्राह्मणहरूद्वारा अभिप्रेरित राजाहरूले जसरी समय-समयमा प्रजाको अभिलाषा पूर्ण गरिदिन्छन् त्यसै गरी वायुद्वारा अभिप्रेरित भएका बादलहरूले पनि प्राणीहरूका निम्ति अमृतसमान जल बर्साउन लागे।

**एवं वनं तद् वर्षिष्ठं पक्वखर्जुरजम्बुमत्।**
**गोगोपालैर्वृतो रन्तुं सबलः प्राविशद्धरिः॥ २५॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**पक्वखर्जुरजम्बुमत्** = पाकेका खजुर, जामुन आदिले भरिएको
**वर्षिष्ठं** = समृद्ध
**तत्** = त्यो
**वनं** = वृन्दावनमा
**रन्तुं** = क्रीडा गर्नका लागि
**गोगोपालैः** = गाई र गोपहरूद्वारा
**वृतः** = घेरिनुभएका
**सबलः** = बलरामले सहित
**हरिः** = भगवान् श्रीकृष्ण
**प्राविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार पाकेका खजुर, जामुन आदिले समृद्ध बनेको त्यस वृन्दावनमा विहार गर्न भगवान् श्रीकृष्ण गाई र गोप तथा बलरामले सहित भएर प्रवेश गर्नुभयो।

**धेनवो मन्दगामिन्य ऊधोभारेण भूयसा।**
**ययुर्भगवताहूता द्रुतं प्रीत्या स्नुतस्तनीः॥ २६॥**

**पदार्थ–**
**भगवता** = भगवान् श्रीकृष्णद्वारा
**आहूताः** = बोलाइएका
**भूयसा** = ठुला-ठुला
**ऊधोभारेण** = कल्चौँडाको भारले गर्दा
**मन्दगामिन्यः** = बिस्तारै हिँड्ने
**प्रीत्या** = प्रेमले गर्दा
**स्नुतस्तनीः** = थुनबाट दूधका धारा बगाइरहेका
**धेनवः** = गाईहरू पनि
**द्रुतं** = छिटो-छिटो
**ययुः** = हिँडे

**वाक्यार्थ–** ठुला-ठुला कल्चौँडा भएका गाईहरू स्तनको भारले गर्दा हिँड्न नसकेर बिस्तारै-बिस्तारै हिँड्दथे। भगवान् श्रीकृष्णले बोलाएपछि तिनीहरू पनि थुनबाट दूधका धारा बगाउँदै छिटो-छिटो हिँड्न लागे।

**वनौकसः प्रमुदिता वनराजीर्मधुच्युतः।**
**जलधारा गिरेर्नादानासन्ना ददृशे गुहाः॥ २७॥**

**पदार्थ–**
(वृन्दावनमा भगवान् श्रीकृष्णले)
**प्रमुदिताः** = आनन्दमा मग्न

भएका
**वनौकसः** = वनवासीहरूलाई
**मधुच्च्युतः** = मह चुहाइरहेका
(मधुर सुगन्ध फिँजाइरहेका)
**वनराजीः** = लतावृक्षहरूलाई
**नादान्** = विभिन्न किसिमका
आवाजहरू (सुन्नुभयो)
**गिरेः** = पर्वतका
**आसन्नाः** = नजिकमा रहेका
**जलधाराः** = छहराहरू र
**गुहाः** = गुफाहरूलाई
**ददृशे** = हेर्नुभयो

**वाक्यार्थ–** वृन्दावनमा भगवान् श्रीकृष्णले आनन्दमा मग्न भएका वनवासीहरू, मधुर सुगन्ध फिँजाइरहेका लतावृक्षहरू, छहराहरू र गुफाहरूलाई हेर्नुभयो साथै विभिन्न किसिमका आवाजहरू सुन्नुभयो।

**क्वचिद् वनस्पतिक्रोडे गुहायां चाभिवर्षति।**
**निर्विश्य भगवान् रेमे कन्दमूलफलाशनः॥ २८॥**

**पदार्थ–**
**अभिवर्षति** = वर्षा भइरहँदा
**कन्दमूलफलाशनः** = कन्दमूल र फल खाँदै
**भगवान्** = भगवान् श्रीकृष्ण
**क्वचित्** = कहिले
**वनस्पतिक्रोडे** = वृक्ष, लताका झाडीहरूमा (र कहिले)
**गुहायां च** = गुफाहरूमा पनि
**निर्विश्य** = पसेर
**रेमे** = रमाउनुहुन्थ्यो

**वाक्यार्थ–** जब वृन्दावनमा वर्षा हुन लाग्दथ्यो तब भगवान् श्रीकृष्ण कहिले रुख-लहराका झाडीहरूमा लुकेर र कहिले गुफाहरूमा पसेर कन्दमूल-फल खाँदै रमाइलो गर्नुहुन्थ्यो।

**दध्योदनं समानीतं शिलायां सलिलान्तिके।**
**सम्भोजनीयैर्बुभुजे गोपैः सङ्कर्षणान्वितः॥ २९॥**

**पदार्थ–**
**सङ्कर्षणान्वितः** = बलरामले सहित हुनुभएका भगवान् श्रीकृष्णले
**सलिलान्तिके** = पानीको नजिकमा रहेका
**शिलायां** = ढुङ्गामा बसेर
**सम्भोजनीयैः** = सहभोजी
**गोपैः** = गोपहरूद्वारा
**समानीतं** = ल्याइएको
**दध्योदनं** = दही र भात
**बुभुजे** = भोजन गर्नुभयो

**वाक्यार्थ–** कहिले बलरामले सहित भगवान् श्रीकृष्ण पानीको नजिकमा रहेका ढुङ्गाहरूमा बसेर गोपहरूले ल्याएका दही र भात भोजन गर्नुहुन्थ्यो।

**शाद्वलोपरि संविश्य चर्वतो मीलितेक्षणान्।**
**तृप्तान् वृषान् वत्सतरान् गाश्च स्वोधोभरश्रमाः॥ ३०॥**
**प्रावृट्श्रियं च तां वीक्ष्य सर्वभूतमुदावहाम्।**
**भगवान् पूजयाञ्चक्रे आत्मशक्त्युपबृंहिताम्॥ ३१॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्णले
**शाद्वलोपरि** = हरिया घाँस

भएको ठाउँमा
**संविश्य** = बसेर
**तृप्तान्** = अघाएका र
**चर्वतः** = उग्राइरहेका
**मीलितेक्षणान्** = आँखा चिम्लिएका
**वृषान्** = साँढेहरू
**वत्सतरान्** = बाच्छाहरू र
**स्वोधोभरश्रमाः** = आफ्ना ठुला कल्चौंडाका भारले थाकेका
**गाः च** = गाईहरूलाई पनि
**वीक्ष्य** = देखेर
**सर्वभूतमुदावहाम्** = सम्पूर्ण प्राणीहरूलाई सुख प्रदान गर्ने
**आत्मशक्त्युपबृंहिताम्** = आफ्नै मायाशक्तिद्वारा संरचित
**तां** = त्यो
**प्रावृट्श्रियं च** = वर्षा ऋतुको समृद्धिलाई पनि
**पूजयाञ्चक्रे** = प्रशंसा गर्न लाग्नुहुन्थ्यो

**वाक्यार्थ–** घाँस खाएर अघाएपछि हरिया घाँसहरू भएको ठाउँमा बसी आँखा चिम्लेर उग्राइरहेका बाच्छा र साँढेहरू र आफ्ना ठुला-ठुला कल्चौंडाका भारले थाकेका गाईहरूलाई देखेर भगवान् श्रीकृष्ण अत्यन्त प्रसन्न हुनुहुन्थ्यो र सम्पूर्ण प्राणीलाई सुखप्रदान गर्ने आफ्नै मायाशक्तिद्वारा संरचित वर्षा ऋतुको त्यो समृद्धिको प्रशंसा गर्न लाग्नुहुन्थ्यो।

**एवं निवसतोस्तस्मिन् रामकेशवयोर्व्रजे।**
**शरत् समभवद् व्यभ्रा स्वच्छाम्ब्वपरुषानिला ॥ ३२ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**रामकेशवयोः** = बलराम र श्रीकृष्ण
**तस्मिन्** = त्यस सुन्दर
**व्रजे** = वृन्दावनमा
**निवसतोः** = निवास गरिरहँदा
**स्वच्छाम्ब्वपरुषानिला** = निर्मल पानी, शान्त वायु (र)
**व्यभ्रा** = स्वच्छ आकाशले युक्त भएको
**शरत्** = शरद् ऋतु
**समभवत्** = प्रारम्भ भयो

**वाक्यार्थ–** यसप्रकार भगवान् श्रीकृष्ण र बलरामले गोपहरूका साथ वृन्दावनमा (लीला गरेर) बस्दा-बस्दै निर्मल पानी, शान्त वायु र स्वच्छ आकाशले युक्त भएको शरद् ऋतुको प्रारम्भ भयो।

**विवरण–** यस श्लोकमा वर्षापछि शरद् ऋतु सुरु भएको बताइएको छ। शरद् ऋतुका तीन विशेषता छन्— मेघहरू हट्नु, जल स्वच्छ हुनु र हावा शीतल अनि मन्द हुनु। वर्षाकालमा काला बादल लाग्ने, मेघ गर्जिने र बिजुली चम्किने गुण भए झैँ शरद्का यी तीन स्वाभाविक गुण हुन्। यहाँ ३३ देखि ४९ सम्मका १७ श्लोकमा शरद्ले वर्षाका मलिनतालाई पखालेको आदि वर्णन गरिएको छ। वर्षा ऋतु **सर्वसत्त्वोद्भव** अर्थात् रुख, लहरा आदि सबै जीवजगत्को उत्पत्ति र जीवनको हेतु हो भने शरद् ऋतु त्यसका मलिनताको शोधक ऋतु हो। पाँच ज्ञानेन्द्रिय, पाँच कर्मेन्द्रिय, पाँच प्राण र मन गरी १६ कला हुन्छन्, यी षोडशकलायुक्त जीवका सबै अशुद्धिहरू शोधन गरेको प्रतीकको रूपमा शरद् ऋतुको वर्णनमा १६ श्लोक र तिनीहरूको निष्कर्षरूपमा एउटा श्लोकको प्रयोग गरिएको हो भनी सुबोधिनीकारले लेख्नुभएको छ।

**शरदा नीरजोत्पत्त्या नीराणि प्रकृतिं ययुः।**
**भ्रष्टानामिव चेतांसि पुनर्योगनिषेवया ॥ ३३ ॥**

**पदार्थ–**
**योगनिषेवया** = आत्मसंयम गर्नाले
**भ्रष्टानाम्** = योगभ्रष्ट भएकाहरूको
**चेतांसि** = चित्त
**इव** = (निर्मल बने) झैँ
**नीरजोत्पत्त्या** = कमलहरू फुल्नाले
**शरदा** = शरद् ऋतुका
**नीराणि** = जलहरूले
**पुनः** = फेरि
**प्रकृतिं** = (आफ्नो निर्मल) स्वरूपलाई
**ययुः** = प्राप्त गरे

**वाक्यार्थ–** जसरी योगभ्रष्ट भएकाहरूको चित्त आत्मसंयम गर्नाले पुनः निर्मल र शान्त बन्दछ, त्यसै गरी शरद् ऋतुको आगमनसँगै कमलहरू फुल्नाले शरद् ऋतुका जलले फेरि आफ्नो निर्मल स्वरूपलाई प्राप्त गरे।

**व्योम्नोऽब्भ्रं भूतशाबल्यं भुवः पङ्कमपां मलम्।**
**शरज्जहाराश्रमिणां कृष्णे भक्तिर्यथाशुभम्॥ ३४॥**

**पदार्थ–**
**यथा** = जसरी
**कृष्णे** = भगवान् श्रीकृष्णमा गरिएको
**भक्तिः** = भक्तिले
**आश्रमिणां** = (ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र संन्यास चारै) आश्रममा बस्नेहरूको
**अशुभं** = दुःखकष्ट
**जहार** = नाश गर्दछ, त्यसै गरी
**शरत्** = शरद् ऋतुले
**व्योम्नः** = आकाशको
**अब्भ्रं** = बादललाई
**भूतशाबल्यं** = वर्षामा बढेका कीटपतङ्गलाई
**भुवः** = जमिनको
**पङ्कम्** = हिलोलाई
**अपां** = पानीका
**मलम्** = फोहोरलाई (नाश गरिदियो)

**वाक्यार्थ–** जसरी भगवान् श्रीकृष्णमा गरिएको भक्तिले ब्रह्मचर्य, गृहस्थ, वानप्रस्थ र संन्यास यी चारै आश्रमवासीहरूको दुःखकष्ट नाश गरिदिन्छ, त्यसै गरी शरद् ऋतुले वर्षाकालीन आकाशको मैलो बादल, कीटपतङ्ग, जमिनको हिलोमैलो र पानीको फोहोर आदि सबै नाश गरिदियो।

**सर्वस्वं जलदा हित्वा विरेजुः शुभ्रवर्चसः।**
**यथा त्यक्तैषणाः शान्ता मुनयो मुक्तकिल्बिषाः॥ ३५॥**

**पदार्थ–**
**यथा** = जसरी
**त्यक्तैषणाः** = कामनालाई त्यागेका
**मुक्तकिल्बिषाः** = पापरहित
**शान्ताः** = शान्त
**मुनयः** = मुनिहरू
**शुभ्रवर्चसः** = उज्ज्वल कान्तिले विराजमान हुन्छन् (त्यसै गरी)
**जलदाः** = (शरद्कालीन) मेघहरू
**सर्वस्वं** = आफ्नो सर्वस्व जललाई
**हित्वा** = त्याग गरेर (सफा स्वच्छ बनी)
**विरेजुः** = विराजमान बने

**वाक्यार्थ–** जसरी कामनालाई त्यागेका, निष्पाप, शान्त मुनिहरू उज्ज्वल कान्तिले विराजमान हुन्छन्, त्यसै गरी आफ्नो सम्पूर्ण सर्वस्व जललाई बर्साएर सफा, स्वच्छ बनेका शरद्कालीन

मेघहरू शोभायमान देखिए।

**गिरयो मुमुचुस्तोयं क्वचिन्न मुमुचुः शिवम्।**

**यथा ज्ञानामृतं काले ज्ञानिनो ददते न वा॥ ३६॥**

**पदार्थ–**
**यथा** = जसरी
**ज्ञानिनः** = ज्ञानीहरूले
**काले** = उचित समयमा
**ज्ञानामृतं** = ज्ञानरूपी अमृत
**ददते** = दिन्छन्
(अनुचित समयमा)
**न वा** = दिँदैनन् (त्यसै गरी)
**गिरयः** = पर्वतहरूले
**क्वचित्** = कतै
**तोयं** = (झर्नाहरूबाट) पानी
**मुमुचुः** = झार्न लागे भने (कतै)
**शिवम्** = जल
**न मुमुचुः** = झारेनन्

**वाक्यार्थ–** जसरी ज्ञानीहरूले उचित समय (र अधिकारी) पाए ज्ञानको उपदेश गर्दछन् र नपाए गर्दैनन्, त्यसै गरी पर्वतहरूले पनि कहीं झर्नाहरूबाट पानी झार्न लागे भने कतै झारेनन्।

**नैवाविदन् क्षीयमाणं जलं गाधजलेचराः।**

**यथायुरन्वहं क्षय्यं नरा मूढाः कुटुम्बिनः॥ ३७॥**

**पदार्थ–**
**कुटुम्बिनः** = परिवारको भरणपोषणमा मात्र भुलेका
**मूढाः** = मूर्ख
**नराः** = मानिसहरू
**यथा** = जसरी
**अन्वहं** = प्रतिदिन
**क्षय्यं** = नष्ट भइरहेको
**आयुः** = उमेरलाई (थाहै पाउँदैनन्)
**गाधजलेचराः** = थोरै पानीमा बसेका जलजन्तुहरूले
**क्षीयमाणं** = (शरद् ऋतुमा) सुक्दै गएको
**जलं** = जलको अवस्थालाई
**न एव अविदन्** = थाहै पाएनन्

**वाक्यार्थ–** जसरी परिवारको भरणपोषणमा मात्र लागेका मूर्खहरूले दिनप्रतिदिन आयु नाश भइरहेको कुरा थाहै पाउँदैनन्, त्यसै गरी थोरै पानीमा बस्ने जीवहरूले शरद् ऋतुमा प्रतिदिन पानी घटिरहेको थाहै पाएनन्।

**गाधवारिचरास्तापमविन्दञ्छरदर्कजम्।**

**यथा दरिद्रः कृपणः कुटुम्ब्यविजितेन्द्रियः॥ ३८॥**

**पदार्थ–**
**अविजितेन्द्रियः** = इन्द्रियलाई वशमा राख्न नसकेको
**कृपणः** = अति दुःखी
**कुटुम्बी** = परिवारको भरणपोषणमा लागेको
**दरिद्रः** = दरिद्र व्यक्तिले
**यथा** = जसरी
**तापम्** = विषयको ताप भोग्दछन् (त्यसै गरी)
**गाधवारिचराः** = थोरै पानीमा बस्ने जलजन्तुहरूले
**शरदर्कजम्** = शरद्कालीन सूर्यबाट उत्पन्न (तापलाई)
**अविन्दन्** = भोग्न लागे

**वाक्यार्थ–** जसरी परिवारको भरणपोषणमा मात्र लागेका दरिद्र र दुःखी संसारी व्यक्तिहरू विषयको ताप भोग्दछन्, त्यसै गरी थोरै पानीमा बस्ने जलजन्तुहरू पानी सुक्दै जाँदा शरद्कालीन सूर्यको प्रचण्ड ताप भोग्न थाले।

**शनैः शनैर्जहुः पङ्कं स्थलान्यामं च वीरुधः।**

**यथाहंममतां धीराः शरीरादिष्वनात्मसु॥ ३९॥**

पदार्थ–
**यथा** = जसरी
**धीराः** = ज्ञानीहरूले
**शनैः शनैः** = बिस्तारै-बिस्तारै
**अनात्मसु** = आत्मादेखि भिन्न
**शरीरादिषु** = शरीर आदि अनात्मपदार्थमा
**अहंममतां** = म र मेरो भन्ने भावलाई
**जहुः** = त्याग्दछन् (त्यसै गरी)
**स्थलानि** = पृथिवीले
**पङ्कं** = हिलोमैलो (र)
**वीरुधः** = बोटविरुवाहरूले
**आमं** = कच्चापनलाई (छोडे)

**वाक्यार्थ–** जसरी ज्ञानीहरूले बिस्तारै-बिस्तारै शरीर अनि अनात्मपदार्थबाट यो म हुँ र यो मेरो हो भन्ने भावलाई छोड्दै जान्छन्, त्यसै गरी शरद्कालीन पृथिवीले हिलोमैलो र रुखबिरुवाले आफ्नो कच्चापनलाई छोडे।

**निश्चलाम्बुरभूत् तूष्णीं समुद्रः शरदागमे।**

**आत्मन्युपरते सम्यङ्मुनिर्व्युपरतागमः॥ ४०॥**

पदार्थ–
**आत्मनि** = मन
**सम्यक्** = पूर्णतया
**उपरते** = सङ्कल्परहित बनेपछि
**मुनिः** = मननशील व्यक्ति (जसरी)
**व्युपरतागमः** = वेदाध्ययनबाट निवृत्त हुन्छ (त्यसै गरी)
**शरदागमे** = शरद्ऋतुको आगमनपछि
**समुद्रः** = समुद्र
**निश्चलाम्बुः** = जल स्थिर बनेर
**तूष्णीं** = शान्त
**अभूत्** = बन्यो

**वाक्यार्थ–** जसरी मननशील व्यक्ति मन पूर्णतया सङ्कल्परहित बनेपछि वेदाध्ययनलाई छोडेर शान्त बन्दछन्, त्यसै गरी शरद्को आगमनपछि समुद्रहरू जल स्थिर बनेर शान्त बने।

**केदारेभ्यस्त्वपोऽगृह्णन् कर्षका दृढसेतुभिः।**

**यथा प्राणैः स्रवज्ज्ञानं तन्निरोधेन योगिनः॥ ४१॥**

पदार्थ–
**योगिनः** = योगीहरू
**प्राणैः** = इन्द्रियका माध्यमबाट
**स्रवन्** = नष्ट भइरहेको
**ज्ञानं** = ज्ञानलाई
**यथा** = जसरी
**तन्निरोधेन** = इन्द्रियको नियन्त्रण गरेर (रक्षा गर्दछन् त्यसै गरी)
**कर्षकाः** = किसानहरूले
**दृढसेतुभिः** = बलिया आली लगाएर
**केदारेभ्यः** = खेतहरूबाट बगिरहेको
**अपः तु** = पानीलाई
**अगृह्णन्** = लिए (रोके)

**वाक्यार्थ–** जसरी योगीहरूले अनियन्त्रित इन्द्रियका माध्यमद्वारा नष्ट भइरहेको ज्ञानलाई इन्द्रियनिग्रह गरी रक्षा गर्दछन्, त्यसै गरी किसानहरूले बलिया-बलिया आली बनाएर खेतबाट बगिरहेको पानी रोके।

**शरदर्कांशुजांस्तापान् भूतानामुडुपोऽहरत्।**
**देहाभिमानजं बोधो मुकुन्दो व्रजयोषिताम्॥ ४२॥**

**पदार्थ–**
**बोधः** = (जसरी) आत्मज्ञानले
**देहाभिमानजं** = शरीरमा अभिमान गर्नाले उत्पन्न भएको कष्टलाई (नाश गर्दछ अनि जसरी)
**मुकुन्दः** = भगवान् श्रीकृष्णले
**व्रजयोषिताम्** = गोपिनीहरूको (कष्टलाई नाश गर्नुहुन्छ, त्यसै गरी )
**उडुपः** = चन्द्रमाले
**भूतानाम्** = प्राणीहरूको
**शरदर्कांशुजान्** = शरद्कालीन सूर्यका किरणहरूबाट उत्पन्न
**तापान्** = तापहरूलाई
**अहरत्** = हरण गरे

**वाक्यार्थ–** जसरी शरीरमा अभिमान गर्नाले उत्पन्न हुने कष्टलाई आत्मज्ञानले नष्ट गर्दछ र जसरी गोपिनीहरूको कष्टलाई भगवान् श्रीकृष्णले नष्ट गर्नुहुन्छ, त्यसै गरी शरद्कालीन सूर्यका प्रचण्ड किरणबाट उत्पन्न तापहरूलाई चन्द्रमाले हरण गरे।

**खमशोभत निर्मेघं शरद्विमलतारकम्।**
**सत्त्वयुक्तं यथा चित्तं शब्दब्रह्मार्थदर्शनम्॥ ४३॥**

**पदार्थ–**
**यथा** = जसरी
**शब्दब्रह्मार्थदर्शनम्** = शब्दब्रह्म (वेद)को अर्थलाई बुझेर
**सत्त्वयुक्तं** = शान्त बनेको
**चित्तं** = चित्त (शोभायमान देखिन्छ, त्यसै गरी)
**शरद्विमलतारकम्** = शरद्कालीन उज्याला ताराहरूले युक्त भएको
**निर्मेघं** = बादलरहित
**खम्** = आकाश
**अशोभत** = शोभायमान देखियो

**वाक्यार्थ–** वेदको अर्थलाई बुझेर शान्त बनेको चित्त जसरी शोभायमान देखिन्छ त्यसै गरी बादलहरू हटेर चम्किला ताराहरूले युक्त भएको शरद्कालीन आकाश शोभायमान देखियो।

**अखण्डमण्डलो व्योम्नि रराजोडुगणैः शशी।**
**यथा यदुपतिः कृष्णो वृष्णिचक्रावृतो भुवि॥ ४४॥**

**पदार्थ–**
**वृष्णिचक्रावृतः** = यदुहरूद्वारा घेरिनुभएका
**यदुपतिः** = यदुहरूका मालिक
**कृष्णः** = भगवान् श्रीकृष्ण
**भुवि** = पृथिवीमा
**यथा** = जसरी
**रराज** = शोभायमान देखिनुभयो (त्यसै गरी)
**व्योम्नि** = आकाशमा
**उडुगणैः** = ताराहरूद्वारा घेरिएका

**अखण्डमण्डलः** = पूर्ण कान्ति भएका
**शशी** = चन्द्रमा (शोभायमान देखिए)

**वाक्यार्थ–** जसरी पृथिवीमा यदुहरूका बीचमा यदुपति भगवान् श्रीकृष्ण शोभायमान देखिनुभयो, त्यसै गरी आकाशमा तारामण्डलका बीचमा पूर्णचन्द्रमा शोभायमान देखिए।

**आश्लिष्य समशीतोष्णं प्रसूनवनमारुतम्।**
**जनास्तापं जहुर्गोप्यो न कृष्णहृतचेतसः॥ ४५॥**

पदार्थ–
**समशीतोष्णं** = चिसो र तातो बराबर भएको
**प्रसूनवनमारुतम्** = विभिन्न फूल फुलेका वनबाट बहेको वायुलाई
**आश्लिष्य** = स्पर्श गरेर
**जनाः** = मानिसहरूले
**तापं** = दुःखकष्ट
**जहुः** = त्यागे (तर)
**कृष्णहृतचेतसः** = भगवान् श्रीकृष्णद्वारा चित्त हरण गरिएका
**गोप्यः** = गोपिनीहरूले
**न** = पीडा त्याग्न सकेनन्

**वाक्यार्थ–** चिसो र तातो बराबर भएको र फूल फुलेको वनबाट बहेको सुगन्धित वायुको स्पर्शले मानिसहरूले आफ्ना दुःखकष्ट त्यागे तर भगवान् श्रीकृष्णद्वारा चित्त हरण गरिएका गोपिनीहरूले चाहिँ आफ्नो पीडा त्याग्न सकेनन्।

**गावो मृगाः खगा नार्यः पुष्पिण्यः शरदाभवन्।**
**अन्वीयमानाः स्ववृषैः फलैरीशक्रिया इव॥ ४६॥**

पदार्थ–
**ईशक्रियाः** = ईश्वरार्पण गरेर गरिएका कर्महरू
**फलैः** = फलहरूद्वारा (धर्म, अर्थ आदि पुरुषार्थद्वारा युक्त)
**इव** = (भए) झैँ
**शरदा** = शरद्कालले गर्दा
**स्ववृषैः** = आ-आफ्ना साँढे (पति)हरूद्वारा
**अन्वीयमानाः** = पछ्याइएका
**गावः** = गाईहरू
**मृगाः** = मृगीहरू
**खगाः** = चराहरू (र)
**नार्यः** = स्त्रीहरू
**पुष्पिण्यः** = गर्भवती
**अभवन्** = भए

**वाक्यार्थ–** ईश्वरार्पण गरेर गरिएका कर्महरू फलहरूद्वारा (धर्म, अर्थ आदि पुरुषार्थद्वारा) युक्त भए झैँ शरद्कालको प्रभावले गर्दा आ-आफ्ना पतिहरूद्वारा (सम्भोगका लागि) पछ्याइएका गाई, मृगिणी, चरा र स्त्रीहरू गर्भवती भए।

**उदहृष्यन् वारिजानि सूर्योत्थाने कुमद् विना।**
**राज्ञा तु निर्भया लोका यथा दस्यून् विना नृप॥ ४७॥**

पदार्थ–
**नृप** = हे राजा परीक्षित्
**यथा** = जसरी

**दस्यून् विना** = चोर–फटाहादेखि अतिरिक्त
**लोकाः** = अन्य प्रजाहरू
**राज्ञा** = राजादेखि
**निर्भयाः** = भयरहित हुन्छन्
**तु** = त्यसै गरी
**सूर्योत्थाने** = सूर्योदय भएपछि
**कुमुद् विना** = कुमुदिनी बाहेकका
**वारिजानि** = जलकमलहरू
**उदहृष्यन्** = फुल्न लागे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! जसरी राजादेखि चोर–फटाहाबाहेक अन्य सबै प्रजाहरू भयरहित हुन्छन्, त्यसै गरी सूर्योदय भएपछि (रातमा फुने) कुमुदिनी बाहेकका अन्य सबै जलकमलहरू फुल्न लागे।

**पुरग्रामेष्वाग्रयणैरिन्द्रियैः च महोत्सवैः।**

**बभौ भूः पक्वशष्याढ्या कलाभ्यां नितरां हरेः॥ ४८॥**

**पदार्थ–**
**पुरग्रामेषु** = सहर तथा गाउँहरूमा चलेका
**आग्रयणैः** = नयाँ अन्नप्राशन (वर्षा ऋतुको अन्त्यमा नयाँ अन्नहरू खाने (न्वागी खाने) पर्व) र
**ऐन्द्रियैः च** = देवराज इन्द्रका
**महोत्सवैः** = ठुला–ठुला उत्सवहरूले (र)
**पक्वशष्याढ्या** = पाकेका अन्नबालीले सजिएकी
**भूः** = पृथिवी
**हरेः** = भगवान् श्रीकृष्णका
**कलाभ्यां** = लीलाहरूले
**नितरां** = अत्यन्त
**बभौ** = सुशोभित बनिन्

**वाक्यार्थ–** सहर तथा गाउँहरूमा चलेका न्वागी खाने उत्सव र देवराज इन्द्रलाई पूजा गर्ने ठुला–ठुला उत्सवले सजिएकी अनि अन्नबाली पाक्नाले भरिपूर्ण बनेकी पृथिवी भगवान् श्रीकृष्ण र बलरामका अनेक लीलाले अत्यन्त सुशोभित बनिन्।

**वणिङ्मुनिनृपस्नाता निर्गम्यार्थान् प्रपेदिरे।**

**वर्षरुद्धा यथा सिद्धाः स्वपिण्डान् काल आगते॥ ४९॥**

**पदार्थ–**
**सिद्धाः** = सिद्धहरूले
**यथा** = जसरी
**काले** = समय
**आगते** = आएपछि
**स्वपिण्डान्** = आफ्ना स्वरूपलाई ग्रहण गर्दछन् (त्यसै गरी)
**वर्षरुद्धाः** = वर्षाले रोकिएका
**वणिङ्मुनिनृपस्नाताः** = व्यापारी, संन्यासी, राजा र ब्रह्मचारीहरू
**निर्गम्य** = रोकिएको ठाउँबाट अघि सरेर
**अर्थान्** = आ–आफ्ना कर्तव्यमा
**प्रपेदिरे** = संलग्न बने

**वाक्यार्थ–** कठोर साधना गर्ने सिद्धहरूले जसरी समय आएपछि आफ्ना स्वरूप ग्रहण गर्दछन्, त्यसै गरी शरद् ऋतु लागेपछि वर्षाले गर्दा रोकिएका व्यापारी, संन्यासी, राजा र ब्रह्मचारीहरू रोकिएको स्थानबाट अगाडि बढी आ–आफ्नो कर्तव्यमा संलग्न बने।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**प्रावृट्शरद्वर्णनं नाम विंशोऽध्यायः॥ २०॥**

# अथ एकविंशोऽध्यायः

## वेणुगीत

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्थं शरत्स्वच्छजलं पद्माकरसुगन्धिना ।**
**न्यविशद् वायुना वातं सगोगोपालकोऽच्युतः ॥ १ ॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**शरत्स्वच्छजलं** = शरद् ऋतुको कारण जल स्वच्छ भएको
**पद्माकरसुगन्धिना** = कमलको सुगन्धले युक्त
**वायुना** = हावाले
**वातं** = व्याप्त भएको (त्यस वनमा)
**सगोगोपालकः** = गाई र गोपहरूले सहित हुनुभएका
**अच्युतः** = भगवान् श्रीकृष्ण
**न्यविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार शरद् ऋतुका कारण स्वच्छ भएको जल र कमलको सुगन्धले युक्त मन्द-मन्द वायु व्याप्त भएको वृन्दावनमा भगवान् श्रीकृष्ण, गाई र गोपहरूका साथमा प्रवेश गर्नुभयो।

**कुसुमितवनराजिशुष्मिभृङ्गद्विजकुलघुष्टसरःसरिन्महीध्रम् ।**
**मधुपतिरवगाह्य चारयन् गाः सहपशुपालबलश्चुकूज वेणुम् ॥ २ ॥**

**पदार्थ–**
**कुसुमितवनराजिशुष्मिभृङ्गद्विज-कुलघुष्टसरःसरिन्महीध्रम्** = नाना प्रकारका फूल फुलेका सुगन्धित वृक्षहरूमा उन्मत्त भएर भुन्भुनाउँदै गरेका भमरा र चिर्बिराउँदै गरेका पक्षीहरूको मधुर स्वरले गुञ्जायमान बनेका पोखरी, नदी तथा पर्वतले युक्त भएको वनमा
**अवगाह्य** = प्रवेश गरेर
**सहपशुपालबलः** = गोप र बलरामले सहित हुनुभएका
**मधुपतिः** = (मादक रसका पति) भगवान् श्रीकृष्णले
**गाः** = गाईहरू
**चारयन्** = चराउँदै
**वेणुम्** = बाँसुरी
**चुकूज** = बजाउनुभयो

**वाक्यार्थ–** नाना प्रकारका फूल फुलेका सुगन्धित वृक्षहरूमा उन्मत्त भएर भुन्भुनाउँदै गरेका भमरा र चिर्बिराउँदै गरेका पक्षीहरूको मधुर स्वरले गुञ्जायमान बनेका पोखरी, नदी तथा पर्वतले युक्त भएको त्यस वृन्दावनमा गोप तथा बलरामका साथमा भगवान् श्रीकृष्ण प्रवेश गर्नुभयो र उहाँले गाई चराउँदै बाँसुरी बजाउनुभयो।

**तद् व्रजस्त्रिय आश्रुत्य वेणुगीतं स्मरोदयम् ।**
**काश्चित् परोक्षं कृष्णस्य स्वसखीभ्योऽन्ववर्णयन् ॥ ३ ॥**

**पदार्थ–**
**तत्** = त्यो (भगवान्प्रतिको)
**स्मरोदयम्** = प्रेमलाई जगाउने
**वेणुगीतं** = बाँसुरीको ध्वनिलाई
**आश्रुत्य** = सुनेर
**काश्चित्** = केही
**व्रजस्त्रियः** = गोपिनीहरू
**परोक्षं** = एकान्तमा
**स्वसखीभ्यः** = आफ्ना साथीहरूसँग
**कृष्णस्य** = भगवान् श्रीकृष्णको (रूप, गुण र बाँसुरीको ध्वनिको विषयमा)
**अन्ववर्णयन्** = वर्णन गर्न लागे

**वाक्यार्थ–** भगवान्ले बजाउनुभएको त्यो बाँसुरीको प्रेम जगाउने ध्वनि सुनेर गोपिनीहरू एकान्तमा आफ्ना साथीहरूसँग भगवान्को रूप, गुण र बाँसुरीको ध्वनिको वर्णन गर्न लागे।

**तद् वर्णयितुमारब्धाः स्मरन्त्यः कृष्णचेष्टितम्।**
**नाशकन् स्मरवेगेन विक्षिप्तमनसो नृप ॥ ४ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**स्मरवेगेन** = प्रेमको आवेगले
**विक्षिप्तमनसः** = हृदय व्याकुल भएका
**कृष्णचेष्टितम्** = भगवान् श्रीकृष्णका चेष्टालाई
**स्मरन्त्यः** = सम्झिँदै
**तद् वर्णयितुम्** = उहाँका रूप, गुण र लीलाहरूको वर्णन गर्न
**आरब्धाः** = आरम्भ गरेका गोपिनीहरूले
**न अशकन्** = सकेनन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! भगवान्प्रतिको प्रेमले व्याकुल भएका गोपिनीहरूले भगवान्का चेष्टाहरू सम्झिँदै उहाँका रूप, गुण र लीलाहरूको वर्णन गर्न लागे तर वर्णन गर्न सकेनन्।

**बर्हापीडं नटवरवपुः कर्णयोः कर्णिकारं**
**बिभ्रद् वासः कनककपिशं वैजयन्तीं च मालाम्।**
**रन्ध्रान् वेणोरधरसुधया पूरयन् गोपवृन्दै–**
**वृन्दारण्यं स्वपदरमणं प्राविशद् गीतकीर्तिः ॥ ५ ॥**

**पदार्थ–**
(गोपिनीहरूले मन–मनै ध्यान गर्दा देख्न लागे)
**बर्हापीडं** = शिरमा मयूरको प्वाँख भएको मुकुट धारण गर्नुभएका
**नटवरवपुः** = श्रेष्ठ नटको जस्तो शरीर भएका
**कर्णयोः** = दुबै कानमा
**कर्णिकारं** = काठेचाँपको फूल धारण गर्नुभएका
**कनककपिशं** = सुन झैँ पहेँला
**वासः** = वस्त्र धारण गर्नुभएका
**वैजयन्तीं** = वैजयन्ती
**मालाम् च** = माला पनि
**बिभ्रत्** = धारण गर्नुभएका
**गोपवृन्दैः** = गोपहरूद्वारा
**गीतकीर्तिः** = गुणकीर्तन गरिनुभएका
**अधरसुधया** = मुखको अमृत (समान वायु)ले
**वेणोः** = बाँसुरीका
**रन्ध्रान्** = प्वालहरू
**पूरयन्** = भर्दै (बजाउँदै)
**स्वपदरमणं** = आफ्नो धाम वैकुण्ठभन्दा पनि सुन्दर
**वृन्दारण्यं** = वृन्दावनमा

**प्राविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** (बाँसुरीको ध्वनि सुनेर प्रेमविह्वल बनेका गोपिनीहरूले मन–मनै ध्यान गर्दा देख्न लागे) शिरमा मयूरको प्वाँख भएको मुकुट, कानमा काठेचाँपको फूल, शरीरमा सुनौला पीताम्बर र गलामा वैजयन्ती माला धारण गरेर सुन्दर नट झैँ बन्नुभएका भगवान् श्रीकृष्ण आफ्ना गुणकीर्तन गरिरहेका गोपहरूका साथमा मुखको अमृतसमान वायु बाँसुरीका प्वालहरूमा भर्दै (बाँसुरी बजाउँदै) आफ्नो धाम वैकुण्ठभन्दा पनि सुन्दर वृन्दावनमा प्रवेश गर्नुभयो।

**विवरण–** यस श्लोकमा बाँसुरीको धुन सुनेर मन विक्षिप्त भएका गोपिनीहरूले श्रीकृष्णको यस्तो रूपलाई सम्झे भनी श्रीशुकदेवले बताउनुभएको छ। श्रीकृष्णले वनमा बजाएको बाँसुरीको धुन गोपिनीहरूले मात्र कसरी सुने भन्ने शङ्का हुन सक्छ। यसको उत्तर हो– रतिका लागि भाव उद्दीप्त गराउनु नै बाँसुरी बजाउनुको प्रयोजन हो। त्यसैले शृङ्गार रसको स्थायीभाव रति जसको हृदयमा थियो, तिनैले मात्र यो उद्दीपक बाँसुरीको नाद सुने। निरन्तर स्मरणद्वारा गोपिनीहरूको चित्त श्रीकृष्णमा नै लागिरहने भएकाले त्यसकै सम्बन्धले गर्दा व्रजमा बसी–बसी पनि उनीहरूले बाँसुरीनाद सुनेका हुन्। यहाँ बाँसुरीनादको वर्णनको क्रममा पहिला भगवान्ले वनमा बाँसुरी बजाउनुभएको, गोपिनीहरूले त्यसलाई सुनी आपसमा वर्णन गर्न खोज्दा नसकेको बताई श्रीकृष्णको लीलास्वरूपको स्फूर्ति भएपछि भने उनीहरूले बाँसुरीवादन लीलालाई गाएको देखाइएको छ। यसबाट के थाहा हुन्छ भने भगवान्को रूपस्फुरण हुनुभन्दा लीलास्फूर्ति हुनु अन्तरङ्ग अवस्था हो। गोपिनीहरूलाई श्रीकृष्णको रूप त सामान्य अवस्थामा पनि स्फुरण भइरहन्थ्यो, त्यही सम्बन्धले उनीहरूले बाँसुरीनाद सुने र बाँसुरीको नादद्वारा चित्त झन् एकाकार भएपछि बाँसुरी बजाइरहेका श्रीकृष्णको लीलास्वरूप उनीहरूको अघि स्फुरण भयो। त्यही अन्तरङ्ग लीलास्वरूपको वर्णन यस श्लोकमा गरिएको छ।

भगवान्ले मयूरको प्वाँखबाट बनेको मुकुट शिरमा लगाउनुभएको थियो। असाध्यै रमाई–रमाई नाच्दा मयूरको प्वाँख जसरी फर्फराउँछ, भगवान्को शिरमा त्यसै गरी मयूरको प्वाँख फर्फराइरहेको मुकुट थियो। यसले भगवान्मा पनि प्रेमरसको नृत्य चलिरहेको सूचना दिन्छ। उहाँले दुबै कानमा काठे चाँप फूलको कुण्डल लगाउनुभएको छ। उहाँको **वपुः** अर्थात् शरीर श्रेष्ठ नटको जस्तो छ। नट शब्दको अर्थ अभिनेता वा नर्तक हुन्छ। वल्लभाचार्यले **नटवत् वरवच्च वपुः** भनी यसलाई छुट्याउनुभएको छ। शृङ्गाररस दुई प्रकारको हुन्छ। एउटा नाटकमा नटको अभिनय देखी उद्बुद्ध हुने शृङ्गार र अर्को **वर** अर्थात् आफ्नै प्रियतमका चेष्टालाई देखी उद्बुद्ध हुने शृङ्गार। पहिलो शृङ्गारमा आफूभित्र जागेको प्रेमभावको भोक्ता नट हुन सक्दैन भने दोस्रो शृङ्गारमा प्रिय र प्रिया दुबै एक–आपसको प्रेमका भोक्ता हुन्छन्। लौकिक प्रेममा यी दुईभन्दा माथिल्ला कोटि छैनन्। भगवान् त हृदयभित्र पनि भएकाले त्यहाँका अव्यक्त र रहस्यमय भाव, अनुभाव आदिको पनि भगवान् प्रत्यक्ष भोक्ता हुनुहुन्छ। लौकिक शृङ्गारमा त्यसको भोक्ता बाहिरी व्यक्ति हुन्छ, त्यसैले अन्तरङ्ग भावहरूको भोग गर्न ऊ सधैँ असमर्थ हुन्छ। भक्तिको शृङ्गारमा भने परमात्माले निर्बाधरूपमा हृदयभित्रका चञ्चल भावहरूको पनि भोग गर्न सक्नुहुन्छ। दुबै कानमा कर्णिकार फूलको कुण्डल लगाउनुले पनि संयोग र वियोग दुबै शृङ्गार रसलाई धारण गर्ने भन्ने अर्थ दिन्छ।

प्रेम रसमा एउटा विचित्रता के छ भने यो जति अव्यक्त या रहस्यमय भयो त्यति नै यसको रहस्यात्मकता बढ्छ। प्रेम मुखबाट प्रकट हुने होइन, अपितु हृदयबाट अनुभव गरिने वस्तु हो। प्रेमरसका साकाररूप श्रीकृष्णले शरीरमा पीताम्बर ओढ्नुको यही तात्पर्य हो। भगवान्ले पीताम्बर मात्र होइन, वैजयन्ती माला पनि लगाउनुभएको छ। यसको तात्पर्य बताउँदै वल्लभाचार्य भन्नुहुन्छ— वैजयन्ती माला भनेको भगवान्को विजय र कीर्तिलाई प्रकाशित गर्ने माला हो। वैजयन्ती माला सेतो, पहेँलो, रातो, हरियो र नीलो रङ्गका सुगन्धित फूलहरूद्वारा बनेको हुन्छ।

**श्वेतैः पीतैस्तथा रक्तैर्हरितैर्नीलवर्णकैः।**
**पुष्पैरेभिः सुगन्धैश्च वैजयन्त्यस्ति मालिका।।**

कतिपय विद्वान्हरूले वैजयन्ती माला आठ किसिमका मोतीहरूद्वारा निर्मित हुन्छ भन्ने मानेका छन्। **वैजयन्ती भवेन्मालाष्टधा मौक्तिकनिर्मिता।** ती आठ किसिमका मोतीहरूको नाम यस प्रकार छन्— मेघमणि, हस्तिमणि, मत्स्यमणि, नागमणि, वेणुमणि, शङ्खमणि, वराहमणि र सिपीमणि।

**जीमूतकरिमत्स्याहिवेणुशङ्खवराहकाः।**
**शुक्तयश्चैव विज्ञेया अष्टौ मौक्तिकयोनयः।।**

वैजयन्ती माला गोडासम्म आइपुग्ने लामो हुन्छ भन्ने कुरा पनि पाइन्छ— **आपादलम्बिनी माला वैजयन्ती प्रकीर्तिता।**

प्रेमभाव गुप्त रहनुपर्दछ, तर सँगसँगै प्रेमीको कीर्तिले या सद्गुणहरूको प्रकाशले त्यो भावलाई स्पर्श गरिरहनु पनि आवश्यक छ। पीताम्बरमाथि वनमाला लगाउनुको यही तात्पर्य हो। श्रीकृष्णले बाँसुरी बजाउनु भएकोलाई विशिष्ट रसात्मक शब्दमैं व्याख्या गर्दै श्रीशुकदेव भन्नुहुन्छ— **अधरसुधया पूरयन्** अर्थात् आफूभित्रको आनन्द अमृतलाई अधरको माध्यमले बाँसुरीमा भर्नुभयो। बाँसुरीमा आफैं कुनै रस छैन। यो भित्रबाट खाली छ, तर जसको भित्र विषय सम्बन्धी कुनै रस छैन, त्यसमा नै भगवान्को आनन्द रस भरिन सक्छ। त्यसैद्वारा नै भगवान् आफ्नो आनन्द सबैलाई बाँड्नुहुन्छ। यसरी आनन्दमूर्ति श्रीकृष्णले बाँसुरीनादको माध्यमले आफ्नो रस गोपिनीहरूमा सञ्चार गरिरहनुभएको कुरा यहाँ बताइएको छ।

## इति वेणुरवं राजन् सर्वभूतमनोहरम्।
## श्रुत्वा व्रजस्त्रियः सर्वा वर्णयन्त्योऽभिरेभिरे॥ ६॥

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**इति** = यसप्रकार
**सर्वभूतमनोहरं** = सम्पूर्ण प्राणीको चित्त हरण गरिदिने
**वेणुरवं** = (भगवान्को) बाँसुरीको आवाजलाई
**श्रुत्वा** = सुनेर
**सर्वाः** = सम्पूर्ण
**व्रजस्त्रियः** = व्रजवासी स्त्री (गोपिनी)हरूले
**वर्णयन्त्यः** = (भगवान्का लीलाहरू) वर्णन गर्दै (श्रीकृष्णलाई सम्झँदै एकआपसमा)
**अभिरेभिरे** = आलिङ्गन गरे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सम्पूर्ण प्राणीहरूको चित्त हरण गरिदिने भगवान्‌को त्यो बाँसुरीको आवाज सुनेर सबै गोपिनीहरूले भगवान्‌का लीलाहरू वर्णन गर्दै उहाँलाई सम्झँदै एकआपसमा आलिङ्गन गरे।

**विवरण–** यस श्लोकमा बाँसुरीगीत सुनेर गोपिनीहरूमा परेको प्रभाव बताइएको छ। भगवान्‌को सम्पूर्ण स्वरूप नै रसमय छ। उहाँका अङ्ग–प्रत्यङ्ग प्रेमरसका अभिव्यक्ति हुन्, तर तीमध्ये पनि बाँसुरीनाद नै विशेष रसयुक्त छ। त्यसैले गोपिनीहरूले अरू केहीको वर्णन नगरी बाँसुरीनादकै वर्णन गरे। बाँसुरीनादलाई उनीहरूले **सर्वभूतमनोहरम्** अर्थात् सबै प्राणीहरूको मनलाई हरण गरिदिने भनेका छन्। यद्यपि यो बाँसुरीनाद प्रेमयुक्त हृदय भएको व्यक्तिले मात्र सुन्न सक्छ, तर प्रेमीलाई चाहिँ उसले जुन रसको आस्वादन गरिरहेको छ, त्यसैद्वारा नै जड–चेतन सबै जगत् आनन्दित र प्रफुल्लित भए झैँ लाग्छ। श्रीशुकदेवले पनि उनीहरूको भावलाई नै अनुवाद गर्दै त्यस रसलाई सबै प्राणीहरूलाई सुख दिने भन्नुभएको छ। वृन्दावनबाट बाँसुरीको माध्यमले फुकिएको प्रेमरस जब गोपिनीहरूको हृदयभरि भरियो, तब उनीहरूले त्यसको वर्णन गर्न थाले। प्रेम बाहिर प्रकट हुने वस्तु होइन। प्रेमले हृदयलाई पूर्ण बनाइदिन्छ। गोपिनीहरूले गरेको यो वर्णन बाहिरी वर्णन होइन। यो त प्रेममय भएको चित्त आफैँ पग्लिएको हो। यसैलाई वल्लभाचार्यले **गलनरूपवर्णनम्** भनी उल्लेख गर्नुभएको छ। **अभिरेभिरे** यो पदको व्याख्या गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ– **श्रीकृष्णं परिरब्धवत्यः** अर्थात् बाँसुरीगीतको वर्णन गरिरहँदा गोपिनीहरूले पद–पदमा आनन्दमूर्ति श्रीकृष्णलाई अङ्कमाल गर्थे। यो शारीरिक अङ्कमाल होइन, किनभने शारीरिक अङ्कमाल अपूर्ण हुन्छ, त्यसमा दुई प्रेमीलाई एक बनाउने सामर्थ्य पनि छैन। गोपिनीहरूले त शब्दैपिच्छे श्रीकृष्ण आफूभित्र एक बनी बसेको अनुभव गर्दथे। अङ्कमालको खास रहस्य पनि यही हो। अथवा **सर्वाः अभिरेभिरे** अर्थात् सबैले एक–अर्कालाई श्रीकृष्ण ठानेर अङ्कमाल गरे भन्ने अर्थ पनि हुन सक्छ। पहिलो अर्थमा श्रीकृष्ण आफूभित्र आफ्नो अस्तित्व बनी पसेको आन्तरिक अनुभव छ भने दोस्रो अर्थमा सम्पूर्ण जगत् श्रीकृष्णमय बनेको अलौकिक अनुभव छ।

**गोप्य ऊचुः** (गोपिनीहरूले भने)

**अक्षण्वतां फलमिदं न परं विदामः**
**सख्यः पशूननुविवेशयतोर्वयस्यैः ।**
**वक्त्रं व्रजेशसुतयोरनुवेणु जुष्टं**
**यैर्वा निपीतमनुरक्तकटाक्षमोक्षम् ॥ ७ ॥**

पदार्थ–
**सख्यः** = हे साथीहरू
**वयस्यैः** = साथीहरूका साथमा
**पशून्** = पशु (गाईबाच्छा)लाई
**अनुविवेशयतोः** = वनतिर लगिरहनुभएका
**व्रजेशसुतयोः** = ब्रजका मालिक (नन्द)का छोरा श्रीकृष्ण र बलरामको
**अनुवेणु** = बाँसुरीको पछि रहेको (बाँसुरी बजाइहेको)
**अनुरक्तकटाक्षमोक्षम्** = अनुरक्त

व्यक्तिलाई आँखाको कुनाबाट हेरिरहेको
**वक्त्रं** = मुहारलाई
**यैः** = जो-जोद्वारा
**निपीतम्** = पिइयो (हेर्न पाइयो)
**जुष्टं वा** = सेवन गरियो
(सेवन गर्न पाइयो, ती धन्य छन्)
**इदं** = यही नै
**अक्षण्वतां** = आँखा भएकाहरूले प्राप्त गर्ने
**फलम्** = मुख्य फल हो
**परं वा** = त्यसदेखि अर्को फल छ भन्ने
**न विदामः** = हामीले जानेका छैनौं

**वाक्यार्थ–** हे साथीहरू ! बाँसुरी बजाउँदै र आफूप्रति अनुरक्त व्यक्तिहरूलाई कर्के नजरले हेर्दै साथीहरूसँग गाई-बाच्छा लिएर वनतिर गइरहनुभएका भगवान् श्रीकृष्ण र बलरामको मुहारको ज-जसले दर्शन गर्न पाए तिनीहरू धन्य छन् किनभने आँखा भएकाहरूले प्राप्त गर्ने मुख्य फल नै यही हो वा यसभन्दा अर्को उत्कृष्ट फल छ भन्ने बारेमा हामीलाई थाहा छैन।

**विवरण–** यस श्लोकमा आँखा भएकाहरूको आँखाको सार्थकता श्रीकृष्णदर्शनमा नै छ भनी गोपिनीहरूले भनेका छन्। इन्द्रियहरूले जहिले पनि राम्रा वस्तुहरूको ग्रहण गर्न चाहन्छन्। आँखाले राम्रो वस्तु हेर्न, कानले मिठो शब्द सुन्न, यसै गरी नाकले सुगन्ध सुँघ्न चाहन्छ। यी सबैका विषयहरू छुट्टाछुट्टै छन्। त्यसैले प्राणीहरूको सुख अनेक विषयमा बाँडिएकाले अपूर्ण एवं परिच्छिन्न छ। सम्पूर्ण इन्द्रियले एकैपटक रसास्वाद गर्न सकिने वस्तु भनेको परमात्मा मात्र हुनुहुन्छ। यसकै लागि उहाँले सगुण-साकार स्वरूप लिनुभएको हो। आनन्दमूर्ति त्यस्ता परमात्मालाई सबै इन्द्रियले एकै पटक चाख्न पाएपछि अरू विषयको आनन्दमा मन जाँदैन। सबै इन्द्रिय परमात्मामा नै एकाकार भएको स्थिति नै ती इन्द्रियहरूको सार्थकता हो। परिच्छिन्न एवं नाशवान् विषयहरूलाई हेर्दा त आँखाले आनन्द मानिरहेको छ भने आफ्नै आत्मरूप परम आनन्दस्वरूप श्रीकृष्णलाई हेर्दा त कति आनन्द होला। परमप्रियको दर्शनभन्दा आँखाको अर्को प्रयोजन छैन। ती वनवासी धन्य छन्, जसका आँखाले बाँसुरी बजाउन तल्लीन श्रीकृष्ण र सहवर्ती बलरामका परम सुन्दर मुहार र कर्के हेराइलाई हेरिरहेका छन् भनी गोपिनीहरूले यहाँ वनवासीहरूको प्रशंसा गरेका छन्।

यहाँ गोपिनीहरूले ७ देखि १९ सम्मका १३ ओटा श्लोकमा वेणुगीत गाएका छन्। त्यसको कारण बताउँदै वल्लभाचार्य भन्नुहुन्छ, परमात्मा श्रीकृष्णको रसास्वाद तेह्र किसिमले हुन्छ। भगवान्को दर्शन हुनु, उहाँसँग वार्तालाप गर्नु, मिलन हुनु, अङ्कमाल गर्नु, उहाँको सेवा गर्नु, सर्वाङ्गको स्पर्श गर्न पाउनु, अधरामृतको पान गर्नु, सँगै अनेक भोग गर्नु, प्रेमको कारणले रोमाञ्चित हुनु, भगवान्का मधुर गीतहरू सुन्नु, भगवान्को शरीरको सुगन्ध ग्रहण गर्नु, भगवान्को नजिक रहनु र नित्य भगवद्भावनाले युक्त भइरहनु। यसकै सूचनाका लागि १३ ओटा श्लोकमा वेणुगीत बताइएको हो भन्ने कुरा वल्लभाचार्यले स्पष्ट पार्नुभएको छ।

**चूतप्रवालबर्हस्तबकोत्पलाब्ज-**
**मालानुपृक्तपरिधानविचित्रवेशौ ।**

**मध्ये विरेजतुरलं पशुपालगोष्ठ्यां**
**रङ्गे यथा नटवरौ क्व च गायमानौ ॥ ८ ॥**

**पदार्थ–**
**चूतप्रवालबर्हस्तबकोत्पलाब्ज-मालानुपृक्तपरिधानविचित्रवेशौ** = (शिरमा) आँपका कोमल पालुवा, मयूरका प्वाँख र विभिन्न किसिमका फूलका गुच्छा, (कानमा) कमलको फूल (हातमा पनि) कमल, (गलामा) माला तथा शरीरमा पहेँलो वस्त्रधारण गरी विचित्र स्वरूप बनाउनुभएका भगवान् श्रीकृष्ण र बलराम
**क्व च** = कहिले
**पशुपालगोष्ठ्यां** = गोपसमूहको
**मध्ये** = बीचमा बसेर
**गायमानौ** = गीत गाइरहेका
**रङ्गे** = रङ्गमञ्चमा
**नटवरौ** = सजिएर देखापरेका दुई जना नट
**यथा** = जस्तै
**अलं** = अत्यन्त
**विरेजतुः** = सुशोभित देखिनुभयो

**वाक्यार्थ–** (हे साथीहरू!) शिरमा आँपका कोमल पालुवा, मयूरका प्वाँख र विभिन्न किसिमका फूलका गुच्छा, कान र हातमा कमल फूल, गलामा माला तथा शरीरमा पीताम्बर धारण गरी विचित्र स्वरूप बनाउनुभएका भगवान् श्रीकृष्ण र बलराम कहिलेकाहीँ गोपहरूको माऊमा बसेर गीत गाउन लाग्दा रङ्गमञ्चमा देखापरेका दुई जना नट जस्तै अति सुशोभित देखिनुभयो।

**गोप्यः किमाचरदयं कुशलं स्म वेणु-**
**र्दामोदराधरसुधामपि गोपिकानाम्।**
**भुङ्क्ते स्वयं यदवशिष्टरसं ह्रदिन्यो**
**हृष्यत्त्वचोऽश्रु मुमुचुस्तरवो यथार्याः ॥ ९ ॥**

**पदार्थ–**
**गोप्यः** = हे गोपिनीहरू
**अयं** = यो (भगवान् श्रीकृष्णको हातमा रहेको)
**वेणुः** = बाँसुरीले
**किम् कुशलं** = के त्यस्तो पुण्यकर्म
**आचरत् स्म** = गरेछ
**यत्** = जसका कारण (आज)
**गोपिकानाम्** = हामी गोपिनीहरूका लागि
**अपि** = पनि (दुर्लभ)
**दामोदराधरसुधाम्** = भगवान् दामोदरको अधरामृत
**अवशिष्टरसं** = केवल अलि-अलि रस मात्र बाँकी राखेर
**स्वयं** = आफैँ एक्लै
**भुङ्क्ते** = भोग गरिरहेको छ
**यथा** = जसरी
**आर्याः** = कुलवृद्ध व्यक्तिहरू (आफ्नो वंशमा जन्मेको व्यक्तिले भगवान्को कृपा प्राप्त गर्दा खुसी हुन्छन् त्यसै गरी)
**ह्रदिन्यः** = (आफूले सिञ्चन गरी बढाएको बाँसबाट बनेको बाँसुरीको त्यो भाग्य देखेर) नदीहरूले (कमलका पत्रबाट बग्ने जलबिन्दुका रूपमा र)
**तरवः** = (आफ्नो जातिले प्राप्त गरेको परमानन्दलाई देखेर) वृक्षहरूले (शीतबिन्दुका रूपमा)
**हृष्यत्त्वचः** = आनन्दले रोमाञ्चित हुँदै (त्वक् वा छाला

आनन्दित भएर) | **अश्रु** = (हर्षको) आँसु | **मुमुचुः** = बगाए

**वाक्यार्थ–** हे गोपिनीहरू ! भगवान्‌को त्यस बाँसुरीले के त्यस्तो पुण्यकर्म गरेछ जसका कारण आज गोपिनीहरूका लागि पनि दुर्लभ भगवान् दामोदरको अधरामृतलाई अलि-अलि मात्र बाँकी राखेर उसले एक्लै पान गरिरहेको छ। जसरी कुलवृद्ध व्यक्तिहरू आफ्नो वंशमा जन्मेको व्यक्तिले भगवान्‌को कृपा प्राप्त गर्दा खुसी हुन्छन् त्यसै गरी आफूले जलसेचन गरी बढाएका बाँसबाट बनेको बाँसुरीको त्यो अहोभाग्यलाई देखेर नदीहरूले कमलका पत्रबाट बग्ने जलबिन्दुका रूपमा र आफ्नो जातिले प्राप्त गरेको त्यो परमानन्दलाई देखेर पुलकित बनेका वृक्षहरूले शीतबिन्दुका रूपमा हर्षका आँसुहरू बगाए।

**विवरण–** यस श्लोकमा श्रीकृष्णको अधरसुधालाई पान गर्न बाँसुरीले कहिले त्यस्तो पुण्य गरेछ भनी गोपिनीहरूले आपसमा प्रश्न गरेका छन्। भगवान्‌ले ओठमा राखी बाँसुरी बजाउनुभएको देखी गोपिनीहरूले त्यसमा आफूजस्तै चेतन अरू कोही व्यक्तिको कल्पना गरेका छन्। जसरी हामी श्रीकृष्णको अधरामृत पिउछौँ, त्यसै गरी यथेच्छ अधरामृत पिउने यो को हो भन्ने उनीहरूको जिज्ञासा छ। गोपिनीहरूले श्रीकृष्णको अधरामृत पान गर्न आफूहरूको मात्र अधिकार रहेको जनाएका छन्। आफ्नो मात्र एकाधिकार रहेको क्षेत्रमा प्रवेश गरी अरू कसैले यथेच्छ श्रीकृष्णको अधरामृतको रसास्वाद गरेको देख्दा गोपिनीहरू उसको सौभाग्यको प्रशंसा गर्दछन्।

बाँसुरी बाँसबाट बन्छ र बाँस नदी, पोखरी आदिको छेउमा रसिलो ठाउँमा पनि हुन्छ। गोपिनीहरूले पोखरीलाई बाँसुरीको आमा र बाँस एवं अन्य वृक्षप्रजातिलाई त्यसको पिता भनी कल्पना गरेका छन्। पोखरीमा कमल फुलेको देख्दा र रुखहरूबाट मधुधारा अर्थात् रस बगिरहेको देख्दा उनीहरूले त्यसको सम्बन्ध पनि यही बाँसुरीसँगै रहेको छ भनेका छन्। आफ्नो प्रियतम श्रीकृष्णको अधरसुधालाई बाँसुरीले यथेच्छ पान गर्दछ र त्यसबाट अवशिष्ट रहेको रसलाई यसको सम्बन्धका कारण पोखरीले र वृक्षहरूले पनि पिउँदैछन्। ती वृक्षहरूमा अर्काले भोगिसकेको रस भोग्दा पनि प्रेमका आँसु खसे झैँ मधुधारा रसाएका छन्। त्यस्तै पोखरीले पनि अलिकति रस पिउँदा रोमाञ्च भई कमलका फूलहरूको माध्यमले त्यसलाई व्यक्त गरिरहेको छ। त्यसो भए यो बाँसुरीले कस्तो रसास्वाद गरेको होला ? भन्ने उनीहरूको कल्पना देखिन्छ।

**वृन्दावनं सखि भुवो वितनोति कीर्तिं**
**यद्देवकीसुतपदाम्बुजलब्धलक्ष्मि ।**
**गोविन्दवेणुमनुमत्तमयूरनृत्यं**
**प्रेक्ष्याद्रिसान्वपरतान्यसमस्तसत्त्वम् ॥ १० ॥**

**पदार्थ–**
**सखि** = हे साथी
**वृन्दावनं** = वृन्दावनले
**भुवः** = पृथिवीको
**कीर्तिं** = कीर्तिलाई
**वितनोति** = लोक-लोकान्तरसम्म फैलाइरहेको छ
**यत्** = किनभने
**देवकीसुतपदाम्बुजलब्धलक्ष्मि** =

देवकीपुत्र भगवान् श्रीकृष्णका चरणकमलका चिह्नले शोभा प्राप्त गरेको छ (र) **गोविन्दवेणुम् अनु** = भगवान् गोविन्दको बाँसुरीको ध्वनि सुनेर (बादल गर्जेको ठानेर) **मत्तमयूरनृत्यं** = उन्मत्त भएका मयूरको नृत्यलाई **प्रेक्ष्य** = देखेर **अद्रिसान्वपरतान्यसमस्त-सत्त्वम्** = पर्वतका शिखरमा शान्त बनेर बसेका सम्पूर्ण प्राणीहरूले युक्त भएको छ

**वाक्यार्थ–** हे साथी ! यस वृन्दावनले पृथिवीको कीर्तिलाई लोक-लोकान्तरसम्म फैलाइरहेको छ। किनभने यो वन देवकीपुत्र भगवान् श्रीकृष्णका चरणकमलका चिह्नशोभाले सुशोभित बनेको छ। यस वृन्दावनमा भगवान् जब बाँसुरी बजाउनुहुन्छ, तब बाँसुरीको त्यो धुनलाई सुनेर (बादलको गर्जन झैं ठानी) उन्मत्त बनेका मयूर नाच्न लाग्दछन् अनि त्यो देखेर पर्वतका शिखरमा डुल्ने सम्पूर्ण प्राणीहरू शान्त बनेर रहन्छन्।

**विवरण–** यस श्लोकमा गोपिनीहरूले वृन्दावनको प्रशंसा गरेका छन्। भगवान्को चरणसँग सम्बन्धित भएको हुनाले आज वृन्दावनको यति महत्त्व भएको हो। जुन भूमिमा भगवान् खाली पैताला नै दौडिनुहुन्छ, जहाँ उहाँका ध्वजा, वज्र आदियुक्त चरणचिह्न अङ्कित हुन्छन्, त्यस्तो भूमिको प्रशंसा के गर्न सकिन्छ ? यस श्लोकमा गोपिनीहरूले वृन्दावन र आफ्नो हृदयको तुलना गरेका छन्। वृन्दावनमा पहाड भए झैं हाम्रा मनमा पनि पहाड समान भावका थुप्राहरू छन्। त्यहाँबाट नदी निक्लिए झैं हाम्रो हृदयबाट प्रेमरस बगिरहन्छ। वृन्दावनमा रुखहरू भए झैं हामीमा पनि रोमाञ्चित हुने रौँहरू ठडिएका छन्। यो सबै भएर पनि श्रीकृष्णको चरण केवल वृन्दावनमा मात्र छ, हामीमा छैन। त्यसैले त्यो जड भए पनि हाम्रो हृदयभन्दा बढी भाग्यशाली छ।

वृन्दावनमा जब श्रीकृष्णले बाँसुरी बजाउनुहुन्छ, तब त्यो बाँसुरीको ध्वनि गम्भीर स्वरमा गर्जिएको बादलको जस्तो सुनिन्छ। त्यसलाई भ्रमवश बादल गड्गडाएको ठानी अब पानी पर्छ भन्ने खुसीले मयूरहरू आकाशतिर पनि नहेरी खुसीसाथ नाच्न थाल्दछन्। मयूरहरूको यो मनमोहक नृत्यलाई देखी पहाडका टाकुरामा चरिरहेका सबै गाईवस्तु र मृगहरू जम्मा भई त्यसलाई हेरिरहन्छन्। उनीहरूले हिँड्न र चर्न समेत बिर्सिएका हुन्छन्। यस्तो संसारैलाई मोहित गर्ने बाँसुरीनादको घटना वृन्दावन बाहेक अन्यत्र कहीँ छैन। त्यसैले वृन्दावनको कीर्ति फिँजिएको छ।

यहाँ श्रीकृष्णलाई **देवकीसुत** भनिएबाट गोपिनीहरू सबै रहस्य थाहा पाउने परम ज्ञानी छन् भन्ने कुरा थाहा हुन्छ। व्रजमा यो कुरा व्यक्त नगरे तापनि अन्तरङ्ग लीलाका क्रममा गोपिनीहरूद्वारा धेरै पटक श्रीकृष्णलाई देवकी-वसुदेवका पुत्र भनिएको पाइन्छ।

**धन्याः स्म मूढगतयोऽपि हरिण्य एता**
**या नन्दनन्दनमुपात्तविचित्रवेशम्।**
**आकर्ण्य वेणुरणितं सहकृष्णसाराः**
**पूजां दधुर्विरचितां प्रणयावलोकैः॥ ११॥**

पदार्थ–

**मूढगतयः अपि** = अज्ञानी भएर पनि
**एताः** = यी
**हरिण्यः** = हरिणीहरू
**धन्याः स्म** = धन्य छन्
**सहकृष्णसाराः** = आफ्ना पति कृष्णसार मृगले सहित भएर
**याः** = जुन हरिणीहरूले
**वेणुरणितं** = बाँसुरीको आवाजलाई
**आकर्ण्य** = सुनेर
**उपात्तविचित्रवेशम्** = विचित्र किसिमको स्वरूप धारण गर्नुभएका
**नन्दनन्दनम्** = नन्दनन्दन भगवान् श्रीकृष्णलाई
**प्रणयावलोकैः** = प्रेमपूर्ण हेराइहरूद्वारा
**विरचितां** = विशेष प्रकारले बनाइको
**पूजां** = सम्मान
**दधुः** = गर्न लागे

**वाक्यार्थ–** हे साथीहरू ! अज्ञानी भएर पनि यी हरिणीहरू ज्यादै धन्य छन्। किनभने बाँसुरीको आवाजलाई सुनेर आफ्ना पति कृष्णसार मृगका साथमा भगवान्का नजिक पुगेका यिनीहरूले आफ्ना ठुला-ठुला आँखाहरूका प्रेमपूर्ण हेराइले नन्दनन्दन भगवान् श्रीकृष्णको विशेष सम्मान गर्दछन्। (वृन्दावनका गोपिनी भएर पनि हामीले त्यो सुअवसर पाएका छैनौँ, अतः ती धन्य छन्।)

**कृष्णं निरीक्ष्य वनितोत्सवरूपशीलं**
**श्रुत्वा च तत्क्वणितवेणुविचित्रगीतम्।**
**देव्यो विमानगतयः स्मरनुन्नसारा**
**भ्रश्यत्प्रसूनकबरा मुमुहुर्विनीव्यः॥ १२॥**

पदार्थ–

**वनितोत्सवरूपशीलं** = स्त्रीहरूका लागि प्रिय लाग्ने रूप र शील-स्वभाव भएका
**कृष्णं** = भगवान् श्रीकृष्णलाई
**निरीक्ष्य** = देखेर (र)
**तत्क्वणितवेणुविविक्तगीतम् च** = उहाँले बजाएको बाँसुरीको सुमधुर ध्वनिलाई पनि
**श्रुत्वा** = सुनेर
**विमानगतयः** = विमानबाट गइरहेका
**देव्यः** = स्वर्गका अप्सराहरू
**स्मरनुन्नसाराः** = श्रीकृष्णप्रतिको प्रेमका कारण धैर्यलाई गुमाएर
**भ्रश्यत्प्रसूनकबराः** = केशमा सजाएका फूलहरू खस्दा (तथा)
**विनीव्यः** = साडीको गाँठो फुस्किँदा (पनि थाहा नपाएर)
**मुमुहुः** = अत्यन्त मोहित भए

**वाक्यार्थ–** स्त्रीहरूका लागि अति प्रिय लाग्ने भगवान् श्रीकृष्णको रूप र शील-स्वभावलाई देखेर अनि उहाँले बजाएको बाँसुरीको सुमधुर ध्वनि सुनेर विमानबाट गइरहेका स्वर्गका अप्सराहरूले पनि भगवान्प्रतिको अतिशय प्रेमका कारण धैर्य गुमाएर यति मोहित भए कि उनीहरूले आफ्ना केशमा सजाएका फूल खस्दा र शरीरमा लगाएको साडीको गाँठो फुस्कँदा पनि थाहा पाएनन्।

**गावश्च कृष्णमुखनिर्गतवेणुगीत-**
**पीयूषमुत्तभितकर्णपुटैः पिबन्त्यः।**

**शावाः स्नुतस्तनपयःकवलाः स्म तस्थु-**
**र्गोविन्दमात्मनि दृशाश्रुकलाः स्पृशन्त्यः ॥ १३ ॥**

पदार्थ–
**गोविन्दम्** = भगवान् गोविन्दलाई
**दृशा** = आँखाका माध्यमले
**आत्मनि** = हृदयमा
**स्पृशन्त्यः** = सजाएर (छोएर)
**अश्रुकलाः** = (हर्षका) आँसु बगाइरहेका
**कृष्णमुखनिर्गतवेणुगीतपीयूषं** = श्रीकृष्णको मुखारविन्दबाट निस्केको बाँसुरीको सुमधुर सङ्गीतरूपी अमृत
**उत्तभितकर्णपुटैः** = ठाडा-ठाडा पारेका कानरूपी भाँडोले
**पिबन्त्यः** = पान गरिरहेका
**गावः** = गाई र
**स्नुतस्तनपयःकवलाः** = पग्रिरहेका स्तनबाट दुध चुसिरहेका
**शावाः च** = बाच्छाहरू
**तस्थुः स्म** = निश्चल भएर उभिन लागे

**वाक्यार्थ–** (अप्सराहरूको के कुरा) गाईहरूले समेत आफ्ना आँखाका माध्यमबाट भगवान् श्रीकृष्णलाई हृदयमा राखेर आनन्दले विभोर बनी हर्षका आँसुहरू बगाउन लागे। श्रीकृष्णको मुखारविन्दबाट निस्केको बाँसुरीको सुमधुर सङ्गीतरूपी अमृतपान गरिरहेका गाई र पग्रेका थुनबाट दुध चुसिरहेका बाच्छाहरू समेत चुलबुल नगरी (दुधको घुट्को समेत ननिली) उभिन लागे।

**विवरण–** यस श्लोकमा बाँसुरीको रसलाई पिउँदा गाई-बाच्छाहरूको स्थिति कस्तो भयो भनी बताइएको छ। श्रीकृष्णको मुखबाट निस्किएको बाँसुरीरसको अमृत पिउँदा सम्पूर्ण जगत् स्तब्ध हुन्थ्यो। गोपिनीहरू भन्छन्– बाँसुरीनाद अमृत हो, यसको उपभोग गर्न देवताहरू पनि समर्थ छैनन्। श्रीकृष्णका प्रिय यी गाईहरू भने **कर्णपुटैः** अर्थात् कानरूपी दुनाहरूले यस रसलाई पिइरहेका छन्। यहाँ **कर्णपुटैः** भनेर बहुवचन प्रयोग गर्नुको तात्पर्य के हो भने बाँसुरीरस जति पिए पनि प्रतिक्षण नयाँ हुन्छ। फेरि पुट अर्थात् दुनालाई एक पटक प्रयोग गरिसकेपछि अर्को पटक प्रयोग गरिँदैन। त्यसैले बाँसुरीको रसलाई आस्वादन गर्न उनीहरूले मानौँ छिन-छिनमा नयाँ-नयाँ कान प्राप्त गरे झैँ भयो। उनीहरू कानलाई ठाडो पार्दै रसपान गरिरहेका थिए, जसबाट त्यसको मधुर रस कान कोल्टिएर बाहिर नपोखियोस्। उता दुध पिइरहेका बाच्छाहरू पनि त्यो मधुर बाँसुरीरसको पान गर्न थाले। एकै चोटि दुई ओटा रसलाई पिउन सकिन्छ र ? बाँसुरीको रसले उनीहरूलाई यसरी तानिदियो कि, उनीहरूले दुधै चुस्न भुले। एकातिर बाँसुरीनादलाई सुनी गाईहरूको दुध रसाइरहने, अर्कोतिर थुनमा मुख लगाइरहेका बाच्छाहरू बाँसुरीको मधुर ध्वनि सुनेर दुध चुस्नै बिर्सने। गोपिनीहरू भन्छन्– गाईको दुध रसाइरहेको छ, तर बाच्छाको मुखबाट भित्र गएको छैन, भरिई बाहिरै चुहिइरहेको छ। उनीहरूले आँखाको माध्यमले श्रीकृष्णलाई **आत्मनि** अर्थात् मनभित्र पुऱ्याए र त्यहीँ अङ्कमाल गर्न थाले। **अश्रुकलाः** अर्थात् बाहिर आँखाभरि आँसुको माध्यमले उनीहरूको प्रेम रसायो, गाईबाच्छा दुबैलाई यस्तो विचित्र स्थितिमा पुऱ्याउने यो बाँसुरीको रस कस्तो होला भनी यहाँ गोपिनीहरूले त्यसको प्रशंसा गरेका छन्।

**प्रायो बताम्ब विहगा मुनयो वनेऽस्मिन्**
**कृष्णेक्षितं तदुदितं कलवेणुगीतम् ।**
**आरुह्य ये द्रुमभुजान् रुचिरप्रवालान्**
**शृण्वन्त्यमीलितदृशो विगतान्यवाचः ॥ १४ ॥**

**पदार्थ–**
**अम्ब** = हे आमा (साथीहरू)
**अस्मिन् वने** = यस वृन्दावनमा
**ये** = जो
**अमीलितदृशः** = आँखा नचिम्लीकन (र)
**विगतान्यवाचः** = अरू कुरा नसुनीकन
**रुचिरप्रवालान्** = कोमल-कोमल पालुवाले युक्त
**द्रुमभुजान्** = रुखका हाँगाहरूमा
**आरुह्य** = बसेर
**कृष्णेक्षितं** = श्रीकृष्णलाई हेरिरहँदै (र)
**तदुदितं** = उहाँले बजाएको
**कलवेणुगीतम्** = बाँसुरीको सुमधुर सङ्गीत
**शृण्वन्ति** = सुनिरहेका छन् (ती)
**विहगाः** = पक्षीहरू
**प्रायः** = लगभग
**बत मुनयः** = ऋषिमुनि झैँ देखिएका छन्

**वाक्यार्थ–** हे साथीहरू ! वृन्दावनका कोमल-कोमल पालुवाले युक्त वृक्षका हाँगामा बसेर आँखा नझिम्क्याईकन भगवान् श्रीकृष्णलाई हेरिरहेका र अरू कुरालाई छोडेर कानले उहाँकै बाँसुरीको सुमधुर सङ्गीत सुनिरहेका यी पक्षीहरू ऋषिमुनिहरू जस्तै देखिएका छन्।

**विवरण–** यस श्लोकमा श्रीकृष्णको बाँसुरीगीतलाई सुन्ने पक्षीहरू र तपस्वी मुनिहरूको समता देखाइएको छ। श्रीकृष्णको मिठो बाँसुरीनादलाई सुन्दैगर्दा सबै पक्षीहरू **विगतान्यवाचः** अर्थात् चिरबिर गर्न छाडी श्रीकृष्णलाई एकटक हेरिरहन मिल्ने गरी रुखको हाँगामा बस्छन् र त्यहीँ बसी सङ्गीत सुनिरहन्छन्। **अमीलितदृशः** अर्थात् आँखा नझिम्काई उनीहरू स्थिर भएको देख्दा तपस्वी ऋषिहरूको सम्झना हुन्छ। मुनिहरू वेदरूपी रुखका हाँगामा चढ्दछन्। रुखमा फलहरू पनि फल्दछन्, तर उनीहरू कर्मफललाई त्यागी केवल परमात्मदर्शनका लागि निष्काम कर्मरूपी शाखाको मात्र आश्रय लिन्छन्। अनि मौन भई निरन्तर परमात्मालाई मात्र हेरिरहन्छन्। चराहरूको र मुनिहरूको यही समता यहाँ देखाइएको छ।

**नद्यस्तदा तदुपधार्य मुकुन्दगीत-**
**मावर्तलक्षितमनोभवभग्नवेगाः ।**
**आलिङ्गनस्थगितमूर्मिभुजैर्मुरारे-**
**र्गृह्णन्ति पादयुगलं कमलोपहाराः ॥ १५ ॥**

**पदार्थ–**
**तदा** = त्यस समयमा
**तत्** = त्यो
**मुकुन्दगीतम्** = श्रीकृष्णको बाँसुरीको ध्वनिलाई
**उपधार्य** = सुनेर

**आवर्तलक्षितमनोभवभग्नवेगाः** = भुमरीहरूद्वारा श्रीकृष्णप्रतिको प्रेम देखाउँदै बग्ने क्रमलाई रोकेका
**नद्यः** = (वृन्दावनमा बग्ने) नदीहरूले (पनि)
**आलिङ्गनस्थगितम्** = भगवान्का पाउका स्पर्शका निम्ति रोकेका
**ऊर्मिभुजैः** = छालरूपी हातहरूले
**कमलोपहाराः** = कमलपुष्प अर्पण गर्दै
**मुरारेः** = भगवान् श्रीकृष्णका
**पादयुगलं** = चरणकमललाई
**गृह्णन्ति** = ग्रहण (स्पर्श) गरिरहेका छन्

**वाक्यार्थ–** त्यस समयमा वृन्दावनमा बग्ने नदीहरूले पनि भगवान् श्रीकृष्णको बाँसुरीको ध्वनि सुनेर आफ्नो वेगलाई रोकी भुमरीहरूद्वारा भगवान्प्रतिको प्रेमभावलाई प्रदर्शन गर्दै र छालरूपी आफ्ना हातहरूले भगवान्का चरणमा कमलपुष्प चढाउँदै भगवान्का चरणकमलको स्पर्श गरिरहेका छन्।

**विवरण–** यस श्लोकमा श्रीकृष्णले बजाएको बाँसुरीको नाद सुनी नदीहरूको प्रवाह रोकियो भनी गोपिनीहरूले बताएका छन्। आफ्नो वेगभन्दा बलियो कुनै अर्को वेगले उनीहरूलाई स्तब्ध बनाइदियो। त्यो वेगको नाम हो श्रीकृष्णमिलनको तीव्र कामना। जसको हृदयमा काम उत्पन्न हुन्छ, त्यसको भित्र अनेक भावहरू मडारिइरहन्छन्। नदीहरूमा पनि भुमरी परेबाट उसभित्र श्रीकृष्णमिलन सम्बन्धी अनेक भावहरूले हलचल मच्चाइदिएको थाहा पाइन्छ। भगवान्को चरणलाई ऱ्याप्प अङ्कमाल गरी छोप्नका लागि नदीहरू हतारिएका छन्। अङ्कमाल गर्न त हात चाहियो नि ? भन्दा गोपिनीहरू भन्छन्– **ऊर्मिभुजैः** अर्थात् छालहरू नै तिनीहरूका हात हुन्। प्रियमिलनमा प्रियलाई उपहार दिनका लागि तिनीहरूसँग कमलका फूलहरू छन्। यसरी आफ्नो हृदयबाट निस्केको भावमय कमललाई श्रीकृष्णको चरणकमलमा अर्पण गर्दै त्यो चरणलाई आलिङ्गनद्वारा आफ्नो हृदयभित्र राख्न खोज्ने नदीहरूको व्यग्रता यहाँ बताइएको छ।

**दृष्ट्वातपे व्रजपशून् सह रामगोपैः**
**सञ्चारयन्तमनु वेणुमुदीरयन्तम्।**
**प्रेमप्रवृद्ध उदितः कुसुमावलीभिः**
**सख्युर्व्यधात् स्ववपुषाम्बुद आतपत्रम्॥ १६॥**

**पदार्थ–**
**रामगोपैः सह** = बलराम र गोपहरूका साथमा
**आतपे** = घाममा
**व्रजपशून्** = व्रजका पशु (गाईबाच्छा)हरू
**सञ्चारयन्तम्** = चराइरहनुभएका
**अनु** = अनि पछि
**वेणुम्** = बाँसुरी
**उदीरयन्तम्** = बजाइरहनुभएका श्रीकृष्णलाई
**दृष्ट्वा** = देखेर
**प्रेमप्रवृद्धः** = प्रेमले भरिएर
**उदितः** = उठेको
**अम्बुदः** = बादलले
**कुसुमावलीभिः** = (तुषारोरूपी) पुष्पगुच्छाले (र)
**स्ववपुषा** = आफ्नो शरीरले
**सख्युः** = (आफ्नो जस्तै नीलो वर्ण भएका) साथी भगवान् श्रीकृष्णका लागि
**आतपत्रम्** = छाता
**व्यधात्** = बनायो

**वाक्यार्थ–** बलरामसहित गोपहरूका साथमा घाममा गाईबाच्छा चराउँदै बाँसुरी बजाइरहनुभएका र आफ्नो (बादलको) शरीर जस्तै श्यामवर्ण हुनुभएका भगवान् श्रीकृष्णलाई देखेर प्रेमले गद्‌गद् भएको त्यस बादलले तुषारोरूपी पुष्पगुच्छा चढाउँदै आफ्ना मित्र श्रीकृष्णलाई आफ्नो शरीररूप छाता ओढाउने काम गर्‍यो।

**पूर्णाः पुलिन्द्य उरुगायपदाब्जराग–**
**श्रीकुङ्कुमेन दयितास्तनमण्डितेन।**
**तद्दर्शनस्मररुजस्तृणरूषितेन**
**लिम्पन्त्य आननकुचेषु जहुस्तदाधिम्॥ १७॥**

पदार्थ–
**दयितास्तनमण्डितेन** = (पहिला) प्रिय गोपिनीहरूका स्तनमा लगाइएको
**उरुगायपदाब्जरागश्रीकुङ्कुमेन** = (क्रीडा समयमा) भगवान्‌का चरणकमलमा लाग्नाले अति पवित्र बनेको कुङ्कुम
**तृणरूषितेन** = (भगवान् वनमा विचरण गर्दा) घाँसपातहरूमा लागेको
**तद्दर्शनस्मररुजः** = त्यो देखेर प्रेमवासनाले विक्षिप्त बनेका
**पुलिन्द्यः** = भिल्लपत्नीहरूले
**आननकुचेषु** = अनुहार र स्तनहरूमा
**लिम्पन्त्यः** = लेपन गर्दै
**तत्** = त्यो
**आधिम्** = प्रेमको आवेगलाई
**जहुः** = शान्त गरे (अतः तिनीहरू)
**पूर्णाः** = पूर्ण (धन्य) छन्

**वाक्यार्थ–** प्रिय गोपिनीहरूले आफ्ना स्तनमा लगाएको जुन सुगन्धित कुङ्कुमचन्दन क्रीडा गर्दा भगवान् श्रीकृष्णका चरणकमलमा लागेको थियो, त्यो पछि वृन्दावनमा विचरण गर्दा त्यहाँका घाँसपातमा लाग्यो र त्यसलाई उठाएर प्रेमवासनाले विक्षिप्त बनेका भिल्लपत्नीहरूले आफ्ना अनुहार र स्तनहरूमा लगाई प्रेमको आवेगलाई शान्त पारे, त्यस्ता ती भिल्लपत्नीहरू पनि धन्य (पूर्ण) छन्।

**हन्तायमद्रिरबला हरिदासवर्यो**
**यद्रामकृष्णचरणस्पर्शप्रमोदः।**
**मानं तनोति सहगोगणयोस्तयोर्यत्**
**पानीयसूयवसकन्दरकन्दमूलैः॥ १८॥**

पदार्थ–
**अबला** = हे स्त्रीहरू
**हन्त** = खुसीको कुरा
**रामकृष्णचरणस्पर्शप्रमोदः** = भगवान् श्रीकृष्ण र बलरामका चरणको स्पर्शले प्रसन्न भएको
**यत् अयम्** = जुन यो
**अद्रिः** = गोवर्धन पर्वत
**हरिदासवर्यः** = भगवान्‌का

भक्तहरूमा श्रेष्ठ छ
**यत्** = किनभने
**पानीयसूयवसकन्दरकन्दमूलैः** = पानी, कोमल घाँस, गुफा र कन्दमूलहरू उपलब्ध गराएर
**सहगोगणयोः** = गाईहरू र मित्रहरूका समूहले सहित
**तयोः** = ती भगवान् श्रीकृष्ण र बलरामको
**मानं** = सत्कार
**तनोति** = गर्दछ (अतः यो धन्य छ)

**वाक्यार्थ–** हे गोपिनीहरू ! भगवान् श्रीकृष्ण र बलरामका चरणकमलको स्पर्शलाई प्राप्त गरेर प्रसन्न भएको यो गोवर्धन पर्वत पनि भगवान्का भक्तहरूमा श्रेष्ठ छ। किनभने यसले पानी, कोमल घाँस, गुफा र कन्दमूलहरूद्वारा गाईबाच्छा र गोपहरूले सहित भगवान् श्रीकृष्ण र बलरामको सत्कार गरेको छ।

**गा गोपकैरनुवनं नयतोरुदार-**
**वेणुस्वनैः कलपदैस्तनुभृत्सु सख्यः।**
**अस्पन्दनं गतिमतां पुलकस्तरूणां**
**निर्योगपाशकृतलक्षणयोर्विचित्रम्॥ १९॥**

**पदार्थ–**
**सख्यः** = हे सखीहरू
**गोपकैः** = गोपहरूका साथमा
**गाः** = गाईहरूलाई
**अनुवनं** = वनवनै
**नयतोः** = लगिरहनुभएका
**निर्योगपाशकृतलक्षणयोः** = निहिन (गाई दुहुँदा गाईलाई खुट्टामा बाँध्न प्रयोग गर्ने डोरी) र दाम्लो (भगुवा गाईलाई बाँध्ने डोरी) बोकेर सुशोभित हुनुभएका भगवान् श्रीकृष्ण र बलरामका
**कलपदैः** = सुमधुर सङ्गीतयुक्त
**उदारवेणुस्वनैः** = बाँसुरीको मनमोहक धुनद्वारा
**गतिमतां** = गतिशील
**तनुभृत्सु** = शरीरधारी प्राणीहरूमा
**अस्पन्दनं** = निश्चलता (र)
**तरूणां** = (अचल) वृक्षहरूमा
**पुलकः** = रोमाञ्च उत्पन्न भएर
**विचित्रम्** = आश्चर्य लाग्ने (अवस्था देखा पर्‍यो)

**वाक्यार्थ–** हे सखीहरू ! गोपहरूका साथमा गाईहरूलाई वनवनै लगिरहनुभएका र निहिन र दाम्लो लिएर सुशोभित हुनुभएका भगवान् श्रीकृष्ण र बलरामका सुमधुर सङ्गीतयुक्त बाँसुरीको मनमोहक धुन सुनेर गतिशील शरीरधारी प्राणीहरू अचल (स्थिर) भए र अचल वृक्षहरू प्रेमले रोमाञ्चित हुन लागे। त्यहाँ यस्तो अत्यन्त आश्चर्य लाग्ने अवस्था देखा पर्‍यो।

**विवरण–** यस श्लोकमा बाँसुरीको धुन सुनेर स्थावर-जङ्गम सम्पूर्ण जगत्ले आ-आफ्नो स्वभाव बिर्सिएको बताइएको छ। बलराम र कृष्णले गोठालाको वेशभूषा बनाउनुभएको छ। **निर्योग** अर्थात्, गाई दुहुँदा गाईलाई खुट्टामा बाँध्न प्रयोग गर्ने डोरी निहिन र **पाश** अर्थात् भगुवा गाईलाई बाँध्ने डोरी दाम्लो लिएर शोभायमान हुनुभएका भगवान् श्रीकृष्ण र बलरामको शोभा असाध्यै बढेको छ। उहाँहरूले बजाएको बाँसुरीनाद सुनेर जगत् मोहित हुन्छ। गोपिनीहरूले बाँसुरीको माध्यमबाट प्रवाहित हुने रसले सबैको स्वभावलाई परिवर्तन गरिदिने बताएका छन्। नैसर्गिक स्वभाव नै परिवर्तन गरिदिनु भनेको सानो कुरा होइन। बाँसुरीरसले हिँडिरहेका प्राणीहरूलाई

रोकिदिन्छ, अनि जति पनि जड रुख, लहरा आदि छन्, तिनीहरूमा हलचल ल्याइदिन्छ। तिनीहरू पुलकित हुन्छन्, अकस्मात् फलफूल निस्कनु र रसका धारा बग्नु नै तिनीहरू पुलकित हुनु हो। यसरी जङ्गम प्राणी स्थावर र स्थावर प्राणी जङ्गम भएको घटना यहाँ देखिन्छ।

यसरी माथिका १३ ओटा श्लोकमा गोपिनीहरूले श्रीकृष्णले आफ्नो प्रेमरसलाई बाँसुरीमा भरेर त्यसलाई चारैतर्फ फिँजाउँदा उहाँका प्रेमीहरूमा कस्तो प्रभाव पर्‍यो भन्ने कुराको छुट्टाछुट्टै वर्णन गरेका छन्। वर्णनको भङ्गिमा हेर्दा यहाँ छुट्टाछुट्टै गोपिनीहरूले एक-अर्कालाई आ-आफ्नो अनुभव बताइरहेका छन् भन्ने थाहा हुन्छ। एउटै प्रेमधुनलाई सुनेका गोपिनीहरूको चित्त श्रीकृष्णको बाँसुरी बजाउने लीलाले अनेक रूपमा प्रकट भयो। हरेक वर्णनमा गोपिनीको मन श्रीकृष्णमा गई निश्चेष्ट हुन्छ। त्यसैले यो एकपछि अर्को गरी बताइएको वर्णन होइन। पछाडिको बीसौँ श्लोकमा श्रीशुकदेवले **तन्मयतां ययुः** अर्थात् गोपिनीहरू श्रीकृष्णमय भए भनी बताउनुभएको छ। परमात्मा असीम अनन्त हुनुभएकाले उहाँको एउटै स्वरूपमा पनि अनन्त लीलाका सम्भावनाहरू रहन्छन्। ती अनन्त लीलामध्ये यहाँ तेह्र श्लोकमा केही लीलाहरूको मात्र प्रकाश भएको छ। यसपछि सबै गोपिनीहरू लीला अनुभव गर्ने अवस्थाभन्दा पनि माथि पुगी श्रीकृष्णमय भएकाले यो वर्णन यत्तिमैँ रोकिएको छ।

यस प्रसङ्गमा जड-चेतन सम्पूर्ण जगत्ले श्रीकृष्णसँग प्रेम गरेको र प्रियतम सम्झी उहाँको उपासना गरेको कुरा व्यक्त गरिएको छ। यद्यपि प्रेम चेतनले मात्र गर्न सक्छ, तर प्रेमले भरिएको व्यक्तिले आफूभित्र मात्र नभई संसारैभरि प्रेम भरिएको देख्दछ। त्यसकारणले यहाँ गोपिनीहरूले कृष्णप्रेमका भोक्ताका रूपमा कल्पना गरिएका सबै पात्रहरू उनीहरूका आफ्नै कोमल भावनाका मूर्त रूपहरू हुन् र आन्तरिक हुन्। यस प्रसङ्गमा प्रेमको आवेशबाट व्यक्तिमा देखिने अनेक परिवर्तनहरूको पनि वर्णन गरिएको छ। प्रेमले व्यक्तिमा आठ थरी परिवर्तन ल्याउँछ। तिनलाई अलङ्कार शास्त्रमा आठ सात्त्विक भाव भनिन्छ, ती यस प्रकार छन्–

**स्तम्भः स्वेदोऽथ रोमाञ्चः स्वरभङ्गोऽथ वेपथुः ।**
**वैवर्ण्यमश्रुप्रलयौ इत्यष्टौ सात्त्विकाः गुणाः ।।** (साहित्यदर्पण, ३/१३५-१३६)

**स्तम्भ** भनेको शरीर हलचल हुन नसकी जड हुनु हो। **स्वेद** भनेको शरीर पसिनाले लतपत हुनु हो। **रोमाञ्च** भनेको रौँ ठाडा ठाडा हुनु हो। **स्वरभङ्ग** भनेको बोली बन्द हुनु या राम्ररी बोल्न नसक्नु हो। **वेपथु** भनेको अङ्ग-प्रत्यङ्ग काँप्नु हो। **वैवर्ण्य** भनेको शरीरको रङ्ग फिका हुनु या रङ्ग फेरिनु हो भने **अश्रु** भनेको निरन्तर आँसु बर्सिनु अनि **प्रलय** भनेको चित्त पूरै लीन हुनु हो। जसको हृदयमा अतिशय प्रेम छ, त्यस्ता व्यक्ति छिन-छिनमा मानसिक भाव अनुसार यी अनेक भावहरूको अनुभव गर्दछन्। यहाँ श्रीकृष्णको प्रेममा गतिमान् प्राणीहरू स्थिर भएको, रुखबिरुवा पुलकित भएको, गाईहरूले आँसु बगाएको, पक्षीहरूको स्वरभङ्ग भएको बताई प्रेमका यिनै भावहरूको अभिव्यक्ति देखाइएको छ। **प्रलय** अर्थात् आफू पूरै प्रेमीमैँ लीन हुनु यीमध्ये सबभन्दा मुख्य भाव हो र यो नै प्रेमको पराकाष्ठा पनि हो। यही तन्मयताको स्थितिमा गोपिनीहरू पुगेका छन्। स्वयं अनुभविताले पनि यसको वर्णन गर्न नसक्ने हुनाले श्रीशुकदेवले अर्को श्लोकमा गोपिनीहरूको तन्मयतालाई बताइदिनुभएको छ। गोपिनीहरूमा प्रेमभावको पराकाष्ठा देखिन्छ।

उनीहरू कृष्णप्रेमका आदर्श हुन्। त्यसैले नारदभक्तिसूत्र(२१)मा **यथा व्रजगोपिकानाम्** भनी भक्तिको उदाहरणको रूपमा गोपिनीहरूको भक्तिलाई नै उल्लेख गरिको छ।

**एवंविधा भगवतो या वृन्दावनचारिणः।**
**वर्णयन्त्यो मिथो गोप्यः क्रीडास्तन्मयतां ययुः॥ २०॥**

**पदार्थ–**
**वृन्दावनचारिणः** = वृन्दावनमा विचरण गर्ने
**भगवतः** = भगवान् श्रीकृष्णका
**याः** = जुन
**एवंविधाः** = यसप्रकारका
**क्रीडाः** = लीलाहरू (थिए तिनलाई)
**मिथः** = एक-आपसमा
**वर्णयन्त्यः** = वर्णन गरिरहेका
**गोप्यः** = गोपिनीहरू
**तन्मयतां** = तन्मयतामा (पूर्ण रूपमा भगवान्कै स्वरूपमा)
**ययुः** = पुगे

**वाक्यार्थ–** यसप्रकार वृन्दावनमा विचरण गर्ने भगवान् श्रीकृष्णका लीलाहरू आपसमा वर्णन गरिरहेका गोपिनीहरू भगवान्कै स्वरूपमा प्राप्त भए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**वेणुगीतं नामैकविंशोऽध्यायः॥ २१॥**

# अथ द्वाविंशोऽध्यायः

## भगवान् श्रीकृष्णद्वारा गोपिनीहरूको चीरहरण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**हेमन्ते प्रथमे मासि नन्दव्रजकुमारिकाः।**
**चेरुर्हविष्यं भुञ्जानाः कात्यायन्यर्चनव्रतम्॥ १॥**

**पदार्थ–**
**हेमन्ते** = हेमन्त ऋतुको
**प्रथमे मासि** = पहिलो महिना (मंसिर)मा
**नन्दव्रजकुमारिकाः** = नन्दको व्रजमा निवास गर्ने कुमारीहरूले
**हविष्यं** = हविष्यान्न (पवित्र अन्न मात्र)
**भुञ्जानाः** = खाँदै
**कात्यायन्यर्चनव्रतम्** = कात्यायनी (पार्वती)को पूजा गर्दै व्रत
**चेरुः** = गरे

**वाक्यार्थ–** हेमन्त ऋतुको पहिलो महिना (मंसिर)मा नन्दको व्रजगाउँका कुमारीहरूले हविष्यान्न मात्र खाएर कात्यायनी देवीको पूजा गर्दै व्रत गरे।

**विवरण–** यहाँ गोपिनीहरूले श्रीकृष्णलाई पतिको रूपमा पाउनका लागि कात्यायनीव्रत गरेको बताइएको छ।

सर्वप्रथम गोपिनीशब्दको व्युत्पत्तिद्वारा नै यिनीहरूको प्रेमी स्वभाव थाहा पाउन सकिन्छ। **गोभिः इन्द्रियैः प्रेमरसं पिबति इति गोपी** अर्थात् आफ्ना सम्पूर्ण इन्द्रियहरूबाट श्रीकृष्णप्रेमको रसलाई पिउने नै गोपिनी हुन्। नन्दव्रजमा साना–ठुला अनेक गोपिनीहरू छन्। तिनीहरूमा पनि अन्यपूर्वा र अनन्यपूर्वा गरी दुई थरी छन्। अन्यपूर्वा भनेका अरू कसैसँग विवाहसंस्कार भइसकेका र अनन्यपूर्वा भनेका चाहिँ अविवाहित गोपिनीहरू हुन्। यी व्रजकुमारीहरू यौवनावस्था प्राप्त गरेका कुमारी नारीहरू हुन्। यी सबै श्रीकृष्णप्रेमको रसमा भिजेका छन्। साना–ठुला सबै गोपिनीहरू खाँदा, खेल्दा, सुत्दा, उठ्दा सबैतिर श्रीकृष्ण नै श्रीकृष्ण देख्छन्। वृन्दावनका यी गोपिनीहरूको चरित्र हेर्दा यिनीहरूले लौकिक पति–पत्नी, पुत्र–पुत्री आदिका सबै सम्बन्धलाई अवास्तविक या खेल–खेलको ठानी श्रीकृष्णसँग मात्र वास्तविक प्रेमसम्बन्ध राखेको देखिन्छ। यसो हुँदाहुँदै पनि लोकसंग्रहका लागि ब्रह्मज्ञानीले कर्म गरिरहे झैँ यिनीहरू आ–आफ्ना लौकिक उत्तरदायित्वलाई पूरा गरेरै बसिरहेका छन्। बाँसुरीगीतको अन्त्यमा विवाहित गोपिनीहरूको तन्मयतालाई बताइयो, यो अध्यायमा चाहिँ कुमारी गोपिनीहरूले श्रीकृष्णलाई पतिको रूपमा पाउन उपासना गरेको बताइन्छ।

यहाँदेखि रासलीला सुरु नभएसम्मका सात अध्यायमा भगवान्का उत्तर बाल्यावस्थाका लीला बताइएका छन्। यद्यपि भगवान्मा अबोधपन कहिल्यै छैन, तर पनि यी अध्यायहरूमा भगवान्ले गोपिनीहरूलाई आफ्नो प्रेममा लठ्याउन अलि प्रौढ चरित्र देखाउनुभएको छ।

अहिलेसम्म श्रीकृष्ण आफ्ना साथी व्रजबालकसँग मात्र खेल्नुहुन्थ्यो भने अब उहाँको मुख्य ध्यान अन्तरङ्ग प्रेमी गोपकुमारीहरूतर्फ तानिएको छ। यसको उत्कर्ष रासलीलाको प्रसङ्गमा गएर हुन्छ। त्यस वेलासम्मका भगवान्का सम्पूर्ण चरित्रहरू रासलीलालाई नै ध्यानमा राखी गरिएका छन्। रासलीला परम फल भएकाले यी लीला फलपर्यन्त पुग्ने लीला हुन्। वल्लभाचार्यले अनन्यपूर्वा अर्थात् अरू कसैसँग विवाह नभइसकेका यी कुमारी गोपिनीहरू हजारौँको संख्यामा छन्, जो अनेक ऋषिहरू हुन् भनी पुराणान्तरको प्रसङ्ग उठाउनुभएको छ। गोपिनीहरू पूर्वजन्मका सिद्ध, तपस्वी र ज्ञानी भएकाले यिनीहरूले आफ्ना पति श्रीकृष्ण मात्र होऊन् भनी हेमन्त ऋतुको पहिलो महिना मङ्सिरमा देवी कात्यायनीको आराधना गर्न थाले। **मासानां मार्गशीर्षोऽहं** (भगवद्गीता, १०/३५) अर्थात् म महिनाहरूमध्ये मङ्सिर हुँ भनी श्रीकृष्णले बताउनुभएकाले उहाँको खुसीका लागि गोपिनीहरूले त्यही महिना रोजेका हुन्। केही आचार्यले भने चीरहरणको यही प्रसङ्गका कारण भगवान्लाई मङ्सिर महिना प्यारो भएको हो भन्ने कुरा बताएका छन्।

यी सात अध्यायमध्ये पाँच अध्यायमा भगवान्का अन्तरङ्ग प्रेमीहरूलाई आवश्यक पर्ने पाँच विषयको चर्चा गरिएको छ र अरू दुई अध्यायमा उहाँको भगवत्ता प्रकट भएको छ। यो पहिलो अध्यायमा साक्षात् भगवान्को सेवा गर्न नसकेदेखि परम्पराद्वारा पनि भगवान्कै सेवा गर्नुपर्दछ र आफ्ना सम्पूर्ण इन्द्रिय, मन आदिलाई भगवान्कै निम्ति अर्पण गर्नुपर्दछ भन्ने जनाइएको छ। यहाँ कुमारीहरूले श्रीकृष्णप्रेमकै उद्देश्यले कात्यायनीको पूजा गरे र आफ्नो सम्पूर्ण शरीर, मन, इन्द्रियलाई भगवान्मा अर्पण गरिदिए। अर्को अध्यायमा यज्ञपत्नीहरूको प्रसङ्गबाट आफ्ना सबैथरी दुःखकष्टको वर्णन पनि भगवान्लाई नै गर्नुपर्दछ र भगवत्प्राप्तिमा उहाँको कृपा नै मुख्य हुन्छ, अन्य साधनहरू गौण हुन्छन् भन्ने कुरा बताइएको छ। अर्को अध्यायमा व्रजवासीले श्रीकृष्णको इच्छाबाट इन्द्रयाग छाडिदिएको देखाई उहाँकै इच्छा अनुसार कुलपरम्परालाई समेत छोड्न सक्नुपर्दछ भन्ने देखाइएको छ। चौथो अध्यायमा गोवर्धन धारण गरेको प्रसङ्गमा सबै अवस्थामा भगवान्कै भर पर्नुपर्दछ र उहाँले निश्चय नै रक्षा गर्नुहुन्छ भन्ने कुरा बताइएको छ। पाँचौँ अध्यायमा नन्दले गर्गको भविष्यवाणी सम्झिएबाट भगवान्को माहात्म्य बुझी उहाँसँग परमस्नेह गर्नुपर्ने जनाइएको छ। अर्को अध्यायमा भगवान्द्वारा आफ्नो परम्परागत पूजा रोकिएका इन्द्र पनि भगवान्कै शरणमा आएको बताइएको छ। यसको अर्थ के हो भने, भगवान्ले आफ्नो इच्छाले जे–जस्ता लीला गर्नुहुन्छ, त्यो मर्यादा र परम्पराको विरुद्ध झैँ लाग्ने भए पनि त्यसमा देवताहरूबाट कुनै विघ्न हुन सक्दैन। यो रासलीलाको अनुकूलताका लागि देवताहरूलाई वशीकरण गरेको प्रसङ्ग हो। यसै गरी अर्को अध्यायमा वरुणलोकबाट नन्दलाई ससम्मान फर्काई ल्याउनुभएको अनि सबै व्रजवासीलाई वैकुण्ठको दर्शन गराई भगवान्ले व्रजका मान्यजनहरूभित्र आफ्नो सम्मानित ठाउँ बनाउनुभएको छ। यसबाट भगवान्ले रासलीला गर्दा पनि तिनले भगवान्को र गोपिनीहरूको व्यवहारमाथि शङ्का गर्नेछैनन् भनी आश्वस्त बनाउन खोजिएको छ। यसरी प्रौढलीलाका यी सात अध्यायमध्ये पाँच अध्यायमा प्रेमी भक्तहरूलाई पाँच प्रकारको शिक्षा दिइएको छ भने बाँकी दुई अध्यायमा भगवान्ले आफ्नो ईश्वरीय सामर्थ्यबाट ती प्रेमीसँग रमण गर्ने वातावरण तयार गर्नुभएको छ।

**आप्लुत्याम्भसि कालिन्द्या जलान्ते चोदितेऽरुणे ।**

**कृत्वा प्रतिकृतिं देवीमानर्चुर्नृप सैकतीम् ॥ २ ॥**

**गन्धैर्माल्यैः सुरभिभिर्बलिभिर्धूपदीपकैः ।**

**उच्चावचैश्चोपहारैः प्रवालफलतण्डुलैः ॥ ३ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**अरुणे उदिते** = सूर्योदय हुने बित्तिकै
**कालिन्द्याः** = यमुना नदीको
**अम्भसि** = जलमा
**आप्लुत्य** = स्नान गरेर
**जलान्ते** = नदीको तीरमा
**सैकतीम्** = बालुवाको
**प्रतिकृतिं** = (कात्यायनीको) मूर्ति
**कृत्वा** = बनाएर
**सुरभिभिः** = बास्नादार
**गन्धैः** = चन्दनहरू
**माल्यैः** = मालाहरू
**बलिभिः** = नैवेद्यहरू
**धूपदीपकैः** = धूप, दीप आदि सामग्रीहरू तथा
**उच्चावचैः** = साना-ठुला यथा संभव
**उपहारैः** = भेटीहरूद्वारा र
**प्रवालफलतण्डुलैः च** = नयाँ पालुवा, फल र अक्षताहरूद्वारा पनि
**देवीम्** = कात्यायनी देवीलाई
**आनर्चुः** = पूजा गरे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! ती व्रजकुमारीहरूले बिहान सूर्योदय हुनेबित्तिकै यमुनामा स्नान गरे र नदीको तीरमा बालुवाद्वारा कात्यायनी देवीको मूर्ति बनाए। त्यसपछि अत्यन्त बास्नादार चन्दन, माला, धूप, दीप, नैवेद्य यथासम्भव साना-ठुला भेटी आदि पूजाका सामानहरू र नयाँ पालुवा, फल, अक्षता आदिले देवी कात्यायनीको पूजा गरे।

**कात्यायनि महामाये महायोगिन्यधीश्वरि ।**

**नन्दगोपसुतं देवि पतिं मे कुरु ते नमः ।**

**इति मन्त्रं जपन्त्यस्ताः पूजां चक्रुः कुमारिकाः ॥ ४ ॥**

**पदार्थ–**
**कात्यायनि** = हे कात्यायनी
**महामाये** = हे महामाया
**महायोगिनि** = हे महायोगिनी
**अधीश्वरि** = हे सबका स्वामिनी
**नन्दगोपसुतं** = नन्दगोपका छोरा श्रीकृष्णलाई
**मे** = मेरो (हामीहरूको)
**पतिं कुरु** = पति बनाइदिनुहोस्
**देवि** = हे देवी
**ते** = हजुरलाई
**नमः** = नमस्कार छ
**इति** = यसरी
**मन्त्रं** = मन्त्र
**जपन्त्यः** = जप गर्दै
**ताः** = ती
**कुमारिकाः** = कुमारीहरूले
**पूजां** = कात्यायनीको पूजा
**चक्रुः** = गरे

**वाक्यार्थ–** ती कुमारीहरूले 'हे कात्यायनी ! हे महामाया ! हे महायोगिनी ! हे अधीश्वरी ! नन्दगोपका छोरा श्रीकृष्णलाई हामीहरूको पति बनाइदिनुहोस्, हजुरलाई नमस्कार छ' भन्दै मन्त्र

जपेर कात्यायनी देवीको पूजा गरे।

**विवरण–** यहाँ कुमारी गोपिनीहरूले श्रीकृष्णलाई पतिको रूपमा पाउनका लागि उपासना गरेका छन्। परमात्मा सबैका पति अर्थात् स्वामी हुनुहुन्छ। देख्ने, सुँघ्ने, खाने आदि कार्यद्वारा जीवरूपले यो सम्पूर्ण जगत्लाई भोग्ने पनि एक मात्र परमात्मा नै हुनुहुन्छ। उहाँभन्दा दोस्रो कोही यसको भोक्ता छैन भनी उपनिषद्मा बताइएको छ– **नान्यदतोऽस्ति द्रष्टृ, नान्यदतोऽस्ति श्रोतृ, नान्यदतोऽस्ति मन्तृ नान्यदतोऽस्ति विज्ञातृ** (बृहदारण्यकोपनिषद्, ३/८/११)। सम्पूर्ण प्राणीहरू परमात्माका लागि शेष या भोग्य हुन् भने परमात्मा शेषी हुनुहुन्छ। यही दृष्टिले कतिपय संप्रदायमा संसारमा परमात्मा एउटा मात्र पुरुष हुनुहुन्छ, उहाँभन्दा बाहेक सम्पूर्ण जगत् स्त्रीरूप छ भन्ने गरिएको पाइन्छ। **पति** शब्दको खास तात्पर्यले पनि परमात्मालाई एक मात्र पति रूपमा सिद्ध गर्दछ। **पाति इति पतिः** अर्थात् जसले दुःखबाट रक्षा गर्छ, त्यही पति हो। के कुनै पनि पतिले आफ्नी पत्नीलाई उसका सबै दुःखबाट जोगाउन सक्छ ? लोकमा त केवल व्यवहार चलाउनका लागि पति-पत्नीको सम्बन्धको कल्पना गरिएको हो। लोकमा पति-पत्नी, मामा-भान्जा, बाबु-छोरा आदि सबै सम्बन्ध आ-आफ्नो प्रयोजन पूरा गर्न मानिएका हुन्। वास्तवमा त पतिले पत्नीको लागि होइन आफ्नै लागि नै पत्नीसँग प्रेम गर्दछ, अनि पत्नीले पनि पतिको लागि होइन, आफ्नै स्वार्थका लागि पतिसँग प्रेम गर्दछे। बाहिर कसैसँग नभने पनि भित्री रूपमा त आफ्नै स्वार्थका लागि सबैसँग प्रेम गरिएको हुन्छ– **आत्मनस्तु कामाय सर्वं प्रियं भवति** (बृहदारण्यकोपनिषद्, २/४/५)। यो लौकिक पति-पत्नीभाव गौण हो, किनभने यसमा पतिले आफ्नी पत्नीलाई रोग, बुढ्याइँ, मृत्यु जस्ता कुनै पनि सङ्कटबाट जोगाउन सक्दैन। संसारको दुःखमय बन्धनलाई नष्ट गरिदिने परमात्मा मात्र सबैका वास्तविक पति हुनुहुन्छ। यसो हो भने कल्पनाको सम्बन्धलाई छाडी परमात्मालाई नै पति मान्न केको आपत्ति ? पूर्वजन्मका परम तपस्वी यी गोपकुमारीहरूले लौकिक कल्पनालाई छाडी वास्तविक पतिलाई नै पति मानेका छन्, जो सबै दृष्टिले उपयुक्त छ।

विवाहिता गोपिनीहरूले पनि श्रीकृष्णलाई नै वास्तविक पति मानेको पाइन्छ। रासलीलाका क्रममा घरबार, पति-पुत्र सबैलाई छाडी श्रीकृष्णको नजिक पुगेका यिनीहरूलाई श्रीकृष्णले घर फर्किन भन्दा यी गोपिनीहरूले उहाँलाई सम्पूर्ण प्राणीहरूका पति र आत्मासमेत हजुर नै हुनुहुन्छ भनी उत्तर दिएका छन्– **प्रेष्ठो भवाँस्तनुभृतां किल बन्धुरात्मा** (भागवत, १०/२९/३२)। सबै व्यक्तिहरूभित्र ती-ती व्यक्तिको रूपमा परमात्मा नपसेको भए के ती आफैँ सिद्ध हुन सक्थे ? त्यसैले पतिभित्रका पनि वास्तविक पति मानी परमात्मा श्रीकृष्णसँग प्रेम गर्नु विवाहिता गोपिनीहरूका लागि पनि अशास्त्रीय या नियमविरुद्ध छैन। त्यसैले गोपिनीहरूले श्रीकृष्णलाई जहाँ पति भनेका छन्, त्यहाँ परमात्मदृष्टिले नै उहाँलाई पति मानेका हुन् भन्ने बुझिन्छ।

**एवं मासं व्रतं चेरुः कुमार्यः कृष्णचेतसः।**
**भद्रकालीं समानर्चुर्भूयान्नन्दसुतः पतिः॥ ५॥**

**पदार्थ–**
**कृष्णचेतसः** = श्रीकृष्णमा नै चित्त लगाएका
**कुमार्यः** = ती कुमारीहरूले
**एवं** = यसरी
**मासं** = महिनाभरि नै
**व्रतं** = व्रत
**चेरुः** = गरे र
**नन्दसुतः** = नन्दका छोरा श्रीकृष्ण
**पतिः** = हामीहरूका पति
**भूयात्** = होऊन् (भन्ने इच्छाले)
**भद्रकालीं** = भद्रकाली नामकी कात्यायनी देवीलाई
**समानर्चुः** = खुब पूजा गरे

**वाक्यार्थ–** श्रीकृष्णमा नै चित्त लगाएका ती कुमारीहरूले यसै गरी महिनाभरि नै व्रत गरे र 'नन्दगोपका छोरा श्रीकृष्ण हाम्रा पति होऊन्' भन्ने इच्छाले कात्यायनीको पूजा गरे।

**ऊषस्युत्थाय गोत्रैः स्वैरन्योन्याबद्धबाहवः।**
**कृष्णमुच्चैर्जगुर्यान्त्यः कालिन्द्यां स्नातुमन्वहम्॥ ६॥**

**पदार्थ–**
**अन्वहम्** = दिनदिनै
**ऊषसि** = बिहानै
**उत्थाय** = उठेर
**स्वैः** = आफ्ना
**गोत्रैः** = सगोत्री साथीहरूसँग
**अन्योन्याबद्धबाहवः** = आपसमा हातमा हात मिलाएर
**कालिन्द्यां** = यमुनामा
**स्नातुं** = स्नान गर्न
**यान्त्यः** = जाँदै गर्दा
**उच्चैः** = उच्च स्वरले
**कृष्णम्** = भगवान् श्रीकृष्णलाई
**जगुः** = गान गर्दथे

**वाक्यार्थ–** ती कुमारीहरू हरेक दिन बिहान सबेरै उठेर आ-आफ्ना साथीहरूसँग मिलेर हातमा हात मिलाउँदै स्नान गर्न यमुनामा जान्थे र उच्चस्वरले भगवान् श्रीकृष्णको गुणगान गर्दथे।

**नद्यां कदाचिदागत्य तीरे निक्षिप्य पूर्ववत्।**
**वासांसि कृष्णं गायन्त्यो विजह्रुः सलिले मुदा॥ ७॥**

**पदार्थ–**
**कदाचित्** = कुनै दिन
**नद्यां** = नदीमा
**आगत्य** = आइपुगेर
**तीरे** = नदीको तीरमा
**पूर्ववत्** = अरू दिनहरूमा झैं
**वासांसि** = कपडाहरू
**निक्षिप्य** = राखेर
**कृष्णं** = श्रीकृष्णको
**गायन्त्यः** = गुणगान गर्दै
**मुदा** = आनन्दका साथ
**सलिले** = नदीको जलमा
**विजह्रुः** = नुहाउन थाले

**वाक्यार्थ–** ती कुमारीहरू कुनै एक दिन अरू दिनमा जस्तै गरी नदीमा आइपुगेर सारा कपडा खोलेर नदीको तीरमा राखी श्रीकृष्णको गुणगान गर्दै आनन्दका साथ नदीको जलमा नुहाउन थाले।

**भगवांस्तदभिप्रेत्य कृष्णो योगेश्वरेश्वरः।**
**वयस्यैरावृतस्तत्र गतस्तत्कर्मसिद्धये॥ ८॥**

**पदार्थ–**
**योगेश्वरेश्वरः** = ठुला-ठुला योगीहरूका पनि मालिक

**भगवान् कृष्णः** = भगवान् श्रीकृष्ण
**तदभिप्रेत्य** = त्यो (आफूलाई पाउने उनीहरूको चाहना) बुझेर
**तत्कर्मसिद्धये** = उनीहरूको कर्मको फल पूरा गरिदिनको लागि
**वयस्यैः** = साथीहरूद्वारा
**आवृतः** = घेरिएर
**तत्र** = त्यस ठाउँमा
**गतः** = जानुभयो

**वाक्यार्थ–** योगेश्वरहरूका पनि ईश्वर भगवान् श्रीकृष्ण पनि उनीहरूको आफूलाई प्राप्त गर्ने इच्छा बुझेर उनीहरूको कर्मफल पूरा गरिदिनको लागि आफ्ना साथीहरू सहित त्यस ठाउँमा जानुभयो।

**तासां वासांस्युपादाय नीपमारुह्य सत्वरः।**
**हसद्भिः प्रहसन् बालैः परिहासमुवाच ह॥ ९॥**

**पदार्थ–**
**ह** = निश्चय नै (त्यहाँ आएर)
**तासां** = ती कुमारीहरूको
**वासांसि** = कपडाहरू
**उपादाय** = लिएर
**सत्वरः** = चाँडै
**नीपम्** = कदमको रुखमा
**आरुह्य** = चढेर
**हसद्भिः** = हाँसिरहेका
**बालैः** = बालकहरूका साथमा
**प्रहसन्** = हाँस्दै
**परिहासम्** = परिहासपूर्ण (जिस्कने) वचन
**उवाच** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले पनि त्यस ठाउँमा गएर ती कुमारीहरूका कपडाहरू लिएर छिटोछिटो गरी कदमको रुखमा चढ्नुभयो र यो देखेर हाँसिरहेका बालकहरू सहित आफू पनि हाँस्दै परिहासपूर्ण वचन बोल्न लाग्नुभयो।

**अत्रागत्याबलाः कामं स्वं स्वं वासः प्रगृह्यताम्।**
**सत्यं ब्रवाणि नो नर्म यद् यूयं व्रतकर्शिताः॥ १०॥**

**पदार्थ–**
**अबलाः** = हे कुमारीहरू
**अत्र आगत्य** = यहाँ आएर
**कामं** = इच्छा अनुसार
**स्वं स्वं वासः** = आ-आफ्ना कपडा
**प्रगृह्यताम्** = ग्रहण गर
**सत्यं** = साँचो कुरा
**ब्रवाणि** = म भन्दैछु
**नो नर्म** = यो ठट्टा गरेको होइन
**यत्** = किनभने
**यूयं** = तिमीहरू
**व्रतकर्शिताः** = व्रत गरेर दुब्लाएका छौ (तिमीहरूसित ठट्टा गर्ने त कुरै छैन)

**वाक्यार्थ–** हे कुमारीहरू! यहाँ आऊ र इच्छा अनुसार आ-आफ्ना कपडाहरू लैजाओ, मैले साँचो कुरा भनेको छु, ठट्टा गरेको होइन, तिमीहरू व्रत गर्दागर्दै दुब्लाएका छौ (ठट्टा गर्ने त कुरै छैन)।

**न मयोदितपूर्वं वा अनृतं तदिमे विदुः।**
**एकैकशः प्रतीच्छध्वं सहैवोत सुमध्यमाः॥ ११॥**

पदार्थ–
**सुमध्यमाः** = हे सुन्दरीहरू
**मया** = मद्वारा
**अनृतं** = झुठो कुरा
**न उदितपूर्वं** = पहिले बोलिएन
**तत्** = त्यो कुरा
**इमे** = यी साथीहरूले
**विदुः** = जान्दछन् (त्यसैले)
**एकैकशः** = एक-एक जना गरेर
**प्रतीच्छध्वं** = (आफ्नो कपडा) लैजाऊ
**उत** = अथवा
**सह एव** = सँगै आएर (लैजाओ)

**वाक्यार्थ–** हे सुन्दरीहरू ! मैले पहिले कहिल्यै पनि झुठो कुरा बोलेको छैन, जो यी साथीहरूलाई थाहा छ। त्यसैले तिमीहरू एक-एक गरेर अथवा सबै जना एकैचोटि आएर आफ्नो कपडा लैजाओ।

**तस्य तत् क्ष्वेलितं दृष्ट्वा गोप्यः प्रेमपरिप्लुताः।**
**व्रीडिताः प्रेक्ष्य चान्योन्यं जातहासा न निर्ययुः॥ १२॥**

पदार्थ–
**तस्य** = ती भगवान् श्रीकृष्णको
**तत्** = त्यो
**क्ष्वेलितं** = ठट्यौली कामलाई
**दृष्ट्वा** = देखेर
**प्रेमपरिप्लुताः** = श्रीकृष्णप्रतिको प्रेमले भरिपूर्ण भएका
**गोप्यः** = गोपिनीहरू
**अन्योन्यं** = एक-अर्कालाई
**प्रेक्ष्य** = हेरेर
**व्रीडिताः** = लज्जित हुँदै
**जातहासाः च** = हाँस्दै
**न निर्ययुः** = (पानीबाट) निस्केनन्

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको त्यस्तो कपडा चोर्ने आदि ठट्यौली कामलाई देखेर श्रीकृष्णप्रतिको प्रेमले परिपूर्ण भएका ती गोपिनीहरू एक-अर्कालाई हेरेर लजाउँदै र हाँस्दै बसे, पानीबाट निस्केनन्।

**एवं ब्रुवति गोविन्दे नर्मणाक्षिप्तचेतसः।**
**आकण्ठमग्नाः शीतोदे वेपमानास्तमब्रुवन्॥ १३॥**

पदार्थ–
**एवं** = यसरी
**गोविन्दे** = भगवान् श्रीकृष्णले
**ब्रुवति** = भनेपछि
**नर्मणा** = भगवान्को ठट्यौलीले
**आक्षिप्तचेतसः** = चित्त आकृष्ट भएका
**शीतोदे** = चिसो पानीमा
**आकण्ठमग्नाः** = घाँटीसम्म डुबेकाले
**वेपमानाः** = काँपिरहेका ती गोपिनीहरूले
**तम्** = उहाँ भगवान् श्रीकृष्णलाई
**अब्रुवन्** = भने

**वाक्यार्थ–** यसरी भगवान् श्रीकृष्णले बारम्बार भनेपछि उहाँको ठट्यौलीले चित्त आकृष्ट भएका गोपिनीहरूले चिसो पानीमा घाँटीसम्म डुबेकाले काँप्दै उहाँलाई भन्न थाले।

**मानयं भोः कृथास्त्वां तु नन्दगोपसुतं प्रियम्।**
**जानीमोऽङ्ग व्रजश्लाघ्यं देहि वासांसि वेपिताः॥ १४॥**

**पदार्थ–**
**भोः अङ्ग** = हे प्यारा श्रीकृष्ण
**अनयं** = यस्तो अन्याय
**मा कृथाः** = नगर्नुहोस्
**प्रियम्** = अति प्यारा
**नन्दगोपसुतं** = नन्दगोपका छोरा
**व्रजश्लाघ्यं** = व्रजवासीहरूले पनि माया गर्ने
**त्वां तु** = हजुरलाई त
**जानीमः** = चिनेका छौँ
**वेपिताः** = (अहिले हामी जाडाले) काँपेका छौँ (त्यसैले)
**वासांसि** = कपडाहरू
**देहि** = दिनुहोस्

**वाक्यार्थ–** हे प्यारा श्रीकृष्ण ! हामीहरूमाथि यस्तो अन्याय नगर्नुहोस्। हजुर नन्द गोपका छोरा हुनुहुन्छ, हजुरलाई व्रजवासी सबैले माया गर्छन् भन्ने कुरा हामीले बुझेका छौँ। अहिले हामी जाडाले काँप्न थाल्यौँ, त्यसैले हाम्रो कपडा दिनुहोस्।

**श्यामसुन्दर ते दास्यः करवाम तवोदितम्।**
**देहि वासांसि धर्मज्ञ नो चेद् राज्ञे ब्रुवामहे॥ १५॥**

**पदार्थ–**
**श्यामसुन्दर** = हे श्यामसुन्दर (हामीहरू)
**ते** = हजुरका
**दास्यः** = दासी हौँ (त्यसैले)
**तव उदितम्** = हजुरले भनेको कुरा
**करवामः** = गर्छौं
**धर्मज्ञ** = हे धर्मका मर्म बुझेका प्यारा
**वासांसि** = कपडा
**देहि** = दिनुहोस्
**नो चेत्** = अन्यथा
**राज्ञे** = राजालाई
**ब्रुवामहे** = भन्दछौँ

**वाक्यार्थ–** हे प्रिय श्यामसुन्दर ! हामीहरू हजुरका दासी हौँ। हजुर जे भन्नुहुन्छ, हामी त्यही गर्छौं। हे धर्मज्ञ ! हाम्रो कपडा दिनुहोस्। यदि कपडा दिनुहुन्न भने हामी राजालाई भनिदिन्छौँ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**भवत्यो यदि मे दास्यो मयोक्तं वा करिष्यथ।**
**अत्रागत्य स्ववासांसि प्रतीच्छन्तु शुचिस्मिताः॥ १६॥**

**पदार्थ–**
**शुचिस्मिताः** = हे पवित्र मुस्कान भएका सुन्दरीहरू
**भवत्यः** = तिमीहरू
**यदि** = यदि
**मे** = मेरा
**दास्यः** = दासी हौ
**मया उक्तं वा** = अथवा मद्वारा भनिएको कुरा
**करिष्यथ** = गर्छौं भने
**अत्र** = यहाँ
**आगत्य** = आएर
**स्ववासांसि** = आ-आफ्ना कपडाहरू
**प्रतीच्छन्तु** = लैजाओ

**वाक्यार्थ–** हे सुन्दरीहरू ! यदि तिमीहरू मेरा दासी हौ र मैले भनेको मान्छौ भने यहाँ आएर आ-आफ्ना कपडाहरू लैजाओ।

**ततो जलाशयात् सर्वा दारिकाः शीतवेपिताः।**
**पाणिभ्यां योनिमाच्छाद्य प्रोत्तेरुः शीतकर्शिताः॥ १७॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (भगवान् श्रीकृष्णको वचन सुनिसकेपछि)
**शीतवेपिताः** = जाडोले काँपेका
**शीतकर्शिताः** = जाडोले कठ्याङ्ग्रिएका
**सर्वाः** = सबै
**दारिकाः** = कुमारीहरू
**पाणिभ्यां** = दुबै हातले
**योनिम्** = योनिलाई
**आच्छाद्य** = ढाकेर
**जलाशयात्** = जलाशयबाट
**प्रोत्तेरुः** = निस्किए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको यस्तो वचन सुनिसकेपछि जाडोले काँपेका र कठ्याङ्ग्रिएका ती व्रजकुमारीहरू आफ्ना दुबै हातले योनिलाई ढाक्दै जलाशयबाट बाहिर निस्किए।

**भगवानाहता वीक्ष्य शुद्धभावप्रसादितः।**
**स्कन्धे निधाय वासांसि प्रीतः प्रोवाच सस्मितम्॥ १८॥**

**पदार्थ–**
**शुद्धभावप्रसादितः** = गोपिनीहरूको शुद्ध भावले प्रसन्न हुनुभएका
**भगवान्** = भगवान् श्रीकृष्णले पनि
**आहताः** = लाजले मरेतुल्य भएका
**वीक्ष्य** = देखेर
**वासांसि** = (उनीहरूका) कपडाहरू
**स्कन्धे** = आफ्नो काँधमा
**निधाय** = राखेर
**सस्मितम्** = हाँस्दै र
**प्रीतः** = प्रसन्न हुँदै
**प्रोवाच** = भन्न थाल्नुभयो

**वाक्यार्थ–** गोपिनीहरूको शुद्ध भावले प्रसन्न हुनुभएका भगवान्ले लाजले भुतुक्क भएर कपडा लिन आएका ती गोपिनीहरूलाई देखी उनीहरूका सारा कपडा आफ्नो काँधमा राखी प्रसन्न भएर हाँस्दै भन्न लाग्नुभयो।

**यूयं विवस्त्रा यदपो धृतव्रता व्यगाहतैतत् तदु देवहेलनम्।**
**बद्ध्वाञ्जलिं मूर्ध्न्यपनुत्तयेऽहंसः कृत्वा नमोऽधोवसनं प्रगृह्यताम्॥ १९॥**

**पदार्थ–**
**धृतव्रताः** = व्रत लिएका
**यूयं** = तिमीहरूले
**यत्** = जो
**विवस्त्राः** = निर्वस्त्र भएर
**अपः** = पानीमा
**व्यगाहत** = डुब्यौ (नुहायौ)
**तत् एतत्** = त्यो यो
**देवहेलनम्** = जलाधिष्ठाता वरुणदेवको अपमान हो, त्यसैले
**अंहसः** = त्यो पापको
**अपनुत्तये** = निवृत्तिका लागि
**मूर्ध्नि** = शिरमा
**अञ्जलिं बद्ध्वा** = हात जोडेर
**नमः कृत्वा** = नमस्कार गरी
**अधोवसनं** = (माथि लगाउने कपडा सहित) अधोवस्त्र (तल लगाउने कपडा)
**प्रगृह्यताम्** = लिएर जाओ

**वाक्यार्थ–** हे गोपिनीहरू ! व्रत लिएका तिमीहरूले निर्वस्त्र भएर नदीमा नुहाई वरुण देवताको अपमान गर्‍यौ, त्यसैले त्यो पाप हटाउनका लागि पहिला दुई हात जोडेर शिरले नमस्कार गर अनि आफ्ना कपडाहरू लैजाओ।

**इत्यच्युतेनाभिहिता व्रजाबला मत्वा विवस्त्राप्लवनं व्रतच्युतिम्।**
**तत्पूर्तिकामास्तदशेषकर्मणां साक्षात्कृतं नेमुरवद्यमृग्यतः॥ २०॥**

**पदार्थ–**
**इति** = यसरी
**अच्युतेन** = भगवान् अच्युतद्वारा
**अभिहिताः** = बताइएका
**व्रजाबलाः** = व्रजकुमारीहरूले
**विवस्त्राप्लवनं** = नाङ्गै नुहाउनुलाई
**व्रतच्युतिम्** = व्रतमा त्रुटि भएको
**मत्वा** = मानेर
**तत्पूर्तिकामाः** = व्रतलाई पूर्ण गर्ने चाहना राखेका उनीहरूले
**तदशेषकर्मणां** = ती सारा कर्महरूको
**साक्षात्कृतं** = फलस्वरूप भगवान् श्रीकृष्णलाई
**नेमुः** = नमस्कार गरे
**यतः** = किनभने
**अवद्यमृक्** = (भगवान् श्रीकृष्ण) सर्वदोष निवारक हुनुहुन्छ

**वाक्यार्थ–** यसरी भगवान्ले बताउनुभएपछि उनीहरूले नाङ्गै नुहाउनाले व्रतमा त्रुटि भएको बुझ्रे र व्रत पूर्ण गर्नका लागि सारा कर्मको फलस्वरूप श्रीकृष्णलाई नमस्कार गरे, वास्तवमा भगवान् नै सर्वदोष निवारक हुनुहुन्छ।

**तास्तथावनता दृष्ट्वा भगवान् देवकीसुतः।**
**वासांसि ताभ्यः प्रायच्छत् करुणस्तेन तोषितः॥ २१॥**

**पदार्थ–**
**तथा** = त्यसरी
**अवनताः** = झुकेका
**ताः** = ती व्रजकुमारीहरूलाई
**दृष्ट्वा** = देखेर
**तेन** = (उनीहरूको) त्यस कार्यद्वारा
**तोषितः** = प्रसन्न हुनुभएका
**करुणः** = दयालु
**भगवान्** = ऐश्वर्यसम्पन्न
**देवकीसुतः** = देवकीपुत्र श्रीकृष्णले
**ताभ्यः** = उनीहरूलाई
**वासांसि** = कपडाहरू
**प्रायच्छत्** = दिनुभयो

**वाक्यार्थ–** ती व्रजकुमारीहरूले झुकेर आफ्नो आज्ञाको पालन गरेको देखेर प्रसन्न हुनुभएका दयालु भगवान् श्रीकृष्णले उनीहरूलाई कपडा दिनुभयो।

**दृढं प्रलब्धास्त्रपया च हापिताः प्रस्तोभिताः क्रीडनवच्च कारिताः।**
**वस्त्राणि चैवापहृतान्यथाप्यमुं ता नाभ्यसूयन् प्रियसङ्गनिर्वृताः॥ २२॥**

**पदार्थ–**
(ती गोपिनीहरू)
**दृढं** = बेसरी
**प्रलब्धाः** = छक्याइए (जिस्क्याइए)
**त्रपया च** = लाजद्वारा
**हापिताः** = रहित बनाइए
**प्रस्तोभिताः** = उपहास गरिए
**क्रीडनवत् च** = कठपुतली झैँ
**कारिताः** = बनाइए (त्यति मात्र नभई)
**वस्त्राणि च एव** = कपडाहरू पनि
**अपहृतानि** = चोरिए
**अथ अपि** = तैपनि
**प्रियसङ्गनिर्वृताः** = प्यारा श्रीकृष्णको त्यस्तो व्यवहारबाट पनि प्रसन्न भएका
**ताः** = ती गोपिनीहरूले
**अमुं** = यी श्रीकृष्णलाई
**न अभ्यसूयन्** = दोषदृष्टिले हेरेनन्

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले गोपिनीहरूलाई छक्याउनुभयो, लज्जित बनाउनुभयो, उपहास गर्नुभयो, कठपुतली झैँ नचाउनुभयो र सारा कपडा नै अपहरण गर्नुभयो, तैपनि ती गोपिनीहरू श्रीकृष्णको त्यो व्यवहारबाट प्रसन्न नै भए र उनीहरूले भगवान्लाई दोषदृष्टिले हेरेनन्।

**विवरण–** यहाँ श्रीकृष्णले व्रजकुमारीहरूलाई पुतली खेलाए झैँ खेलाउनुभएको तर उनीहरूले त्यसमा दोषदर्शन नगरेको बताइएको छ। गोपकुमारीहरू कात्यायनी व्रत गरेर दिनदिनै श्रीकृष्णलाई नै सम्झँदै यमुनामा स्नान गर्न जान्थे। सबै कपडा फुकाली उनीहरूले जलक्रीडा गरिरहेको वेला एकदिन श्रीकृष्ण आफ्ना साथीहरूको साथमा त्यहाँ पुग्नुभयो। गोपिनीहरूले श्रीकृष्णप्रतिको प्रेम स्वयं श्रीकृष्णसँग पनि व्यक्त गरेका थिएनन्, तर भगवान् योगेश्वरहरूका पनि स्वामी भएकाले उनीहरूको हृदयभित्रको प्रेमलाई बुझी उहाँ स्वयं त्यहाँ पुग्नुभयो। गोपिनीहरू नुहाइरहेको ठाउँमा गएर उनीहरूले फुकालेर तीरमा राखेका सबै कपडा लिई भगवान् श्रीकृष्ण नजिकैको कदमको रुखमा चढिसकेपछि गोपकुमारीहरूले उहाँलाई देखे। आफ्नो प्रेमीलाई उहाँकै कुरा गरिरहेको वेलामा अकस्मात् देख्दा उनीहरूलाई आश्चर्य लाग्यो र लाज पनि भयो। जसको उद्देश्यले उनीहरू व्रत गरिरहेका थिए, सौन्दर्यमूर्ति श्रीकृष्ण आज उनीहरूका अगाडि हुनुहुन्थ्यो। गोपिनीहरूले भित्री हृदयदेखि श्रीकृष्णलाई प्रेम गरेका थिए, यसै गरी श्रीकृष्ण पनि अन्तर्यामी भएकाले उनीहरूका सबै कुरा उहाँले बुझ्नुहुन्थ्यो। व्रजवासी सबैले श्रीकृष्णलाई हृदयदेखि नै मन पराउने भएकाले हो वा उहाँले आफ्ना प्रेमीहरूका सबै भाव बुझ्ने भएकाले हो, श्रीकृष्णको व्यवहार कहिल्यै बाहिरी सतहको हुँदैनथ्यो, उहाँ जे गर्नुहुन्थ्यो, जे बोल्नुहुन्थ्यो, त्यसबाट मर्मभित्रै प्रहार गर्नुहुन्थ्यो। नदीभित्र नाङ्गै नुहाइरहेका ती बिचरी गोपकुमारीहरूलाई श्रीकृष्णले एक-एक गरी या समूहमैं भए पनि म नजिक आओ र आ-आफ्ना कपडा लिएर जाओ भन्नुभयो। अझ लाजमर्दो हुने गरी उहाँले आफ्ना साथीहरूलाई पनि साक्षी देखाउँदै आफूले कहिल्यै झुटो नबोलेको धक्कुसमेत लगाउनुभयो। हेमन्त ऋतुको महिना, जाडो भए पनि श्रीकृष्णप्रेमको धुनमा उनीहरूले जाडोलाई बिर्सिएका रहेछन्। श्रीशुकदेव भन्नुहुन्छ– बाहिरी व्रजबालकहरूको पनि उपस्थिति देखिसकेपछि बल्ल उनीहरूलाई शरीरको सम्झना आयो र ती गोपिनीहरू जाडोले काँप्न थाले। श्रीकृष्ण त उनीहरूका हृदयका सम्राट् हुनुहुन्थ्यो, अतः उहाँका नजिक जानु लाजको कुरा थिएन, तर त्यहाँ त अरू बालकहरू पनि सँगै थिए। त्यसैले उनीहरूले घाँटीसम्म शरीर डुबाई आफूलाई जाडो भएकाले कपडा दिन प्रार्थना गरे, उनीहरूले राजालाई भनिदिन्छौं भनी धम्क्याए पनि। श्रीकृष्ण कसैको धम्की किन मान्नुहुन्थ्यो ? उहाँले झन् मर्ममा प्रहार गर्दै यदि तिमीहरू मैले भनेको मान्छौ भने यहाँ आई कपडा लैजाओ भन्नुभयो। श्रीकृष्णले अन्तिम निर्णय दिँदै आफ्नो प्रेमकै परीक्षा लिने गरी बोलेपछि ती सबै गोपकुमारीहरू बाहिर आउन बाध्य भए। श्रीकृष्णप्रेमका लागि उनीहरू आफ्नो कुलमर्यादा र लाजलाई पनि त्यागिदिए। ती सबै आफ्नो पूर्ण अस्तित्व श्रीकृष्णमा समर्पण गर्दै बाहिर आए। श्रीकृष्णले नाङ्गै स्नान गर्नाले व्रतको नियम भङ्ग भएकाले त्यसको प्रायश्चित्तका लागि तिमीहरू सबैले हात जोडेर प्रार्थना गर भन्नुभयो। श्रीकृष्णमा पूरै अस्तित्व सुम्पिसकेका गोपिनीहरूले श्रीकृष्णको मनोभाव बुझिहाले। उहाँले कसलाई नमस्कार गर्ने भनेर बताउनुभएको थिएन, तर तिनले सबै कर्मका परमफल उनै श्रीकृष्णलाई हात जोडी नमस्कार

गरिदिए। यो गोपिनीहरूको श्रीकृष्णप्रतिको शुद्ध प्रेम र समर्पण थियो। यसरी गोपिनीहरूलाई जिस्क्याई, लाजै छाड्न लगाई पुतली झैं खेलाउँदा पनि ती गोपिनीहरूको प्रेममा कहीं विचलन देखिएन।

दार्शनिक अर्थमा यो चीरहरणलीला जीवात्माले परमात्माको अगाडि आफ्नो अभिमान वा पृथक् अस्तित्व सबै बिर्सने लीला हो। मुमुक्षु जीवहरू परमात्मप्राप्तिका लागि उहाँकै स्मरण गर्दछन्। उनीहरूको जीवन त्यसकै लागि समर्पित हुन्छ, तर जबसम्म जीवहरूमा आफ्नो अलग अस्तित्वको बोध बाँकी रहिरहन्छ, तबसम्म उनीहरू सर्वव्यापक अस्तित्वसँग एकाकार हुनै सक्दैनन्। सर्वव्यापक अस्तित्व स्वतन्त्र र पूर्ण हुन्छ, यसमा मिल्न जीवहरूले आफू स्त्री-पुरुष, बालक-वृद्ध आदि भएको सबै सीमित अस्तित्वको बोधलाई फालिदिन सक्नुपर्दछ। गोपिनीहरूले कपडा नै नलगाई श्रीकृष्णको अगाडि उपस्थित हुनु जीवले आफ्ना सबै उपाधिगत आवरणलाई छाडी परमात्माको अघि उपस्थित हुनु हो। अलिकति मात्र पृथक् या द्वैत भाव बाँकी रह्यो भने पनि जीवलाई परमात्मामा मिल्न अभिमान, लाज या सङ्कोचको पर्दाले छेकिदिन्छ। त्यसलाई पनि हटाएपछि मात्र परमात्मप्राप्ति हुन्छ। यसैले श्रीकृष्णको यो शृङ्गारिक लीला गोपिनीहरूलाई र मुमुक्षुहरूलाई उनीहरूले नै चाहेको मोक्ष या परमसुख दिने लीला हो भन्ने बुझिन्छ।

**परिधाय स्ववासांसि प्रेष्ठसङ्गमसज्जिताः।**
**गृहीतचित्ता नो चेलुस्तस्मिन् लज्जायितेक्षणाः॥ २३॥**

**पदार्थ–**
**स्ववासांसि** = (त्यसपछि) आ-आफ्ना कपडाहरू
**परिधाय** = लगाएर
**तस्मिन्** = उहाँ श्रीकृष्णमा
**गृहीतचित्ताः** = सारा चित्तवृत्ति लागेका
**लज्जायितेक्षणाः** = लज्जापूर्ण दृष्टि भएका
**प्रेष्ठसङ्गमसज्जिताः** = अतिप्रिय श्रीकृष्णको सान्निध्य पाएर सजिएका (ती गोपिनीहरू त्यस ठाउँबाट)
**नो चेलुः** = अलिकति पनि यताउता चलेनन्

**वाक्यार्थ–** त्यसपछि ती गोपिनीहरूले आ-आफ्ना कपडा लगाए। लजालु दृष्टिले श्रीकृष्णलाई हेरिरहेका, अतिप्रिय श्रीकृष्णको सान्निध्य पाएर सजिएका र सारा चित्तवृत्ति श्रीकृष्णमा लागेका ती गोपिनीहरू त्यस ठाउँबाट अलिकति पनि यताउता चलेनन्।

**तासां विज्ञाय भगवान् स्वपादस्पर्शकाम्यया।**
**धृतव्रतानां सङ्कल्पमाह दामोदरोऽबलाः॥ २४॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**दामोदरः** = दामोदरले
**स्वपादस्पर्शकाम्यया** = (आफूलाई पतिको रूपमा प्राप्त गरी) आफ्नो चरणस्पर्श गर्ने कामनाले
**धृतव्रतानां** = (कात्यायनी) व्रत लिएका
**तासां** = ती गोपिनीहरूको
**सङ्कल्पम्** = सङ्कल्पलाई
**विज्ञाय** = बुझेर

**अबलाः** = ती कुमारीहरूलाई | **आह** = भन्नुभयो

**वाक्यार्थ–** भगवान् दामोदरले आफूलाई नै पतिको रूपमा प्राप्त गरी चरणस्पर्श गर्ने इच्छाले ती गोपिनीहरूले कात्यायनी व्रत लिएको र यही नै उनीहरूको सङ्कल्प भएको कुरा बुझेर तिनीहरूलाई भन्नुभयो।

**सङ्कल्पो विदितः साध्व्यो भवतीनां मदर्चनम्।**
**मयानुमोदितः सोऽसौ सत्यो भवितुमर्हति॥ २५॥**

**पदार्थ–**
**साध्व्यः** = हे सुन्दरीहरू
**भवतीनां** = तिमीहरूको
**मदर्चनम्** = पतिको रूपमा मलाई प्राप्त गरी पूजा गर्ने भन्ने
**सङ्कल्पः** = सङ्कल्पलाई
**मया** = मद्वारा
**विदितः** = बुझिएको छ र
**अनुमोदितः** = स्वीकार पनि गरिएको छ
**सः असौ** = त्यो सङ्कल्प
**सत्यः** = साँचो
**भवितुम्** = हुन
**अर्हति** = योग्य छ

**वाक्यार्थ–** हे सुन्दरीहरू! तिमीहरूको पतिको रूपमा मलाई प्राप्त गरी पूजा गर्ने भन्ने जो सङ्कल्प छ, त्यसलाई मैले बुझेको छु र स्विकारेको पनि छु, त्यसैले त्यो सङ्कल्प सत्य हुन्छ।

**न मय्यावेशितधियां कामः कामाय कल्पते।**
**भर्जिता क्वथिता धानाः प्रायो बीजाय नेष्यते॥ २६॥**

**पदार्थ–**
**मय्यावेशितधियां** = ममा मन, बुद्धि, प्राण सबै अर्पण गरिसकेका व्यक्तिहरूको
**कामः** = (विषयभोगको) सङ्कल्प
**कामाय** = संसार प्राप्तिको लागि
**न कल्पते** = कारण हुन सक्दैन, किनभने
**प्रायः** = प्रायः गरेर
**भर्जिताः** = भुटेका वा
**क्वथिताः** = उसिनेका
**धानाः** = अन्नबीजहरू
**बीजाय** = बिउका लागि
**न इष्यते** = काम लाग्दैन (केवल खानका लागि मात्र हुन्छ)

**वाक्यार्थ–** हे सुन्दरीहरू! जसरी भुटेका वा उसिनेका अन्नहरू बिउका लागि काम लाग्दैनन्, (केवल खानका लागि मात्र हुन्छन्) त्यसै गरी जसले मन, बुद्धि, प्राण आदि ममा अर्पण गरिसकेको छ, त्यस्तो व्यक्तिको विषयभोगको सङ्कल्प फेरि संसारप्राप्तिको लागि कारण हुँदैन।

**विवरण–** यस श्लोकमा श्रीकृष्णले चीरहरणको रहस्य खोल्नुभएको छ। गोपिनीहरूको कामलाई शुद्ध बनाउनका लागि नै भगवान्ले यो लीला रच्नुभएको थियो। उहाँ भन्नुहुन्छ– जसरी भुटिसकेको अन्न फेरि उम्रँदैन, त्यसै गरी ममा लागिसकेको काम सामान्य काम रहँदैन, त्यो काम संसारप्राप्तिको कारण बन्दैन। काम भनेको तीव्र इच्छा हो। सबभन्दा तीव्र आसक्ति स्त्री–पुरुषको बीचमा हुने हुनाले लोकमा काम शब्द त्यसै अर्थमा बढी प्रसिद्ध र प्रयुक्त भयो। अविवेकी एवं वासनाग्रस्त स्त्री–पुरुषले आपसमा जस्तो आसक्ति गर्दछन्, भगवान्सँग भक्तले पनि त्यस्तै तीव्र प्रेम गर्दछ भन्ने अर्थमा भक्तिमा पनि काम शब्दको प्रयोग हुन्छ। **उन्निन्ये प्रेयसीं प्रियः** (भागवत,

१०/३०/३१) अर्थात् प्रिय कृष्णले आफ्नी प्रेयसीलाई बोक्नुभयो। **गोप्यः कामात्** (भागवत, ७/१/३०), अर्थात् गोपिनीहरूले कामद्वारा भगवान्मा मन लगाए आदि अनेक ठाउँमा काम, प्रेयसी, पति आदि शब्दहरूको प्रयोग गरिएबाट भक्तिको रहस्य नबुझेको व्यक्तिको हृदयमा यसले शङ्का जन्माउन सक्छ। तर यी सबै ठाउँमा श्रीकृष्णप्रतिको उत्कट प्रेम, जहाँ वासनाको लेश पनि हुँदैन, त्यसलाई नै काम शब्दले जनाइएको हो। श्रीकृष्ण र गोपिनीको सम्बन्ध लौकिक कामभावको सम्बन्ध होइन आत्मा र परमात्माको सम्बन्ध हो भन्ने कुरा **तन्नः प्रसीद परमेश्वर** (भागवत, १०/२९/३३) हे परमेश्वर ! हामीसँग प्रसन्न हुनुहोस्, **अखिलदेहिनामन्तरात्मदृक्** (भागवत, १०/३१/४) हजुर सबै प्राणीहरूका हृदयका साक्षी हुनुहुन्छ भनी रासलीलाको क्रममा गोपिनीहरूले गरेको प्रार्थनाबाट पनि स्पष्ट हुन्छ। अनि हरेक आपत्ति आएपिच्छे सबै गोपगोपिनी श्रीकृष्णकै शरण परेको र हरेक किसिमको समस्याको समाधान श्रीकृष्णले गरेबाट पनि श्रीकृष्णको परमेश्वररूपता स्पष्ट हुन्छ। त्यसकारण प्रेम, प्रेमी, काम जस्ता यी लौकिक शब्दहरूले के मात्र बुझाउन खोजिएको हो भने जसरी एउटी प्रेमिका प्रेमीसँग मिल्न छटपटाउँछे, त्यसै गरी गोपिनीहरूको श्रीकृष्णमिलनमा तीव्र छटपटी हुन्थ्यो। शृङ्गार रसको विषयमा प्रतिपादन गर्दा आचार्यहरूले परकीया भावमा नै शृङ्गार रसको तीव्रता हुने जनाएका छन्— **अत्रैव परमोत्कर्षः शृङ्गारस्य प्रतिष्ठितः** (भक्तिरसामृतसिन्धु)। पतिसँग नित्य संयोग हुँदा त्यो संयोगमा अलौकिक आनन्दको अनुभूति हुँदैन, तर पति यदि विदेशबाट फर्किएका छन् भने उनसँगको मिलनमा शृङ्गारको सबभन्दा माथिल्लो आनन्द हुन्छ। भक्तहरूले परमात्ममिलनमा आफ्नो हृदय कसरी छटपटाएको छ भनी बताउने क्रममा यसैलाई दृष्टान्त बनाएका छन्— **प्रियं प्रियेव व्युषितं विषण्णा, मनोऽरविन्दाक्ष दिदृक्षते त्वाम्** (भागवत, ६/११/२६) अर्थात् हे कमलनयन ! जसरी कामले सताइएकी पत्नी विदेसिएका पतिको कल्पनामा छट्पटाउँछिन्, त्यसै गरी मेरो मन हजुरको दर्शन गर्न आतुर छ। यो प्रियमिलनको आतुरतामा अभिव्यक्त भावको पराकाष्ठा हो। लौकिक प्रेममा योभन्दा माथिल्लो दृष्टान्त नभएकाले भक्तिशास्त्रमा यसैलाई उदाहरणको रूपमा प्रस्तुत गरिएको हो। यो उदाहरण मात्र हो, तुलना मात्र हो। जेसँग तुलना गरिन्छ त्यो वस्तु र जेको तुलना गरिन्छ त्यो वस्तु एउटै, उस्तै, उत्रै हुँदैनन्। वास्तवमा श्रीकृष्ण त परमानन्दरूप स्वयं आत्मा भएकाले उहाँको मिलनमा गोपिनीहरूलाई योभन्दा झन् बढी आनन्द हुन्थ्यो। त्यसैले गोपिनीहरूको श्रीकृष्णप्रतिको उत्कट प्रेम नै काम भनी प्रसिद्ध भयो— **प्रेमैव गोपरामाणां काम इत्यगमत् प्रथाम्**। प्रेम एउटा वृत्ति हो, जो संसारका पदार्थतिर लाग्दा आसक्ति या काम हुन्छ भने परमात्मतिर लाग्दा भक्ति या शुद्ध प्रेम हुन्छ। यो वृत्ति संसारतिर लाग्नाले नै प्राणीहरूले अनन्त जन्मको चक्कर र हन्डर पाएका हुन्। यदि एकपटक भए पनि यो भावलाई परमात्मातिर लगाउन सकियो भने त्यसले संसारको बन्धनलाई नष्ट गरिदिन्छ। यहाँ भगवान्ले ममा लागिसकेपछि काम भुटिन्छ र त्यो फेरि संसारको कारण हुन सक्दैन भनेर यही कुरा बताउनुभएको हो।

**याताबला व्रजं सिद्धा मयेमा रंस्यथ क्षपाः।**
**यदुद्दिश्य व्रतमिदं चेरुरार्यार्चनं सतीः॥ २७॥**

| पदार्थ– | पूजारूप | यात = जाओ |
|---|---|---|
| सतीः अबलाः = हे सती कुमारीहरू | इदं = यो | इमा क्षपाः = (अब आउने शरद् ऋतुका) यी रातहरूमा |
| यत् उद्दिश्य = जेको उद्देश्य राखेर | व्रतम् = व्रत | मया = मसँग |
| आर्यार्चनं = कात्यायनीको | चेरुः = गर्‍यौ | रंस्यथ = रमण गर्नेछौ |
| | सिद्धाः = सफल भयौ (त्यसैले) | |
| | व्रजं = व्रजमा | |

**वाक्यार्थ–** हे सती कुमारीहरू ! तिमीहरूले जे उद्देश्य राखेर भगवती कात्यायनीको व्रत गरेका थियौ, त्यसमा सफल भयौ। त्यसैले अब आ-आफ्नो घर जाओ। आउने शरद् ऋतुका यी रातहरूमा मसँग रमण गर्नेछौ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यादिष्टा भगवता लब्धकामाः कुमारिकाः।**
**ध्यायन्त्यस्तत्पदाम्भोजं कृच्छ्रान्निर्विविशुर्व्रजम्॥ २८॥**

| पदार्थ– | भएका | कृच्छ्रात् = (श्रीकृष्णको सान्निध्यबाट छुट्न नचाहँदा नचाहँदै पनि) कष्टका साथ |
|---|---|---|
| इति = यसरी | कुमारिकाः = कुमारीहरू | |
| भगवता = भगवान्द्वारा | तत्पदाम्भोजं = उहाँ भगवान्को चरणारविन्दलाई | |
| आदिष्टाः = आदेश दिइएका | | व्रजम् = व्रजमा |
| लब्धकामाः = मनोरथ पूरा | ध्यायन्त्यः = ध्यान गर्दै | निर्विविशुः = गए |

**वाक्यार्थ–** ती कुमारीहरूलाई भगवान्ले यसरी आदेश दिएपछि आफ्नो मनोरथ पूरा भएका तिनीहरू भगवान्को चरणारविन्दको चिन्तन गर्दै नचाहँदा नचाहँदै पनि कष्टका साथ व्रजमा गए।

**अथ गोपैः परिवृतो भगवान् देवकीसुतः।**
**वृन्दावनाद् गतो दूरं चारयन् गाः सहाग्रजः॥ २९॥**

| पदार्थ– | भगवान् देवकीसुतः = देवकीपुत्र भगवान् श्रीकृष्ण | गाः = गाईहरू |
|---|---|---|
| अथ = त्यसपछि कुनै एक दिन | | चारयन् = चराउँदै |
| सहाग्रजः = दाजु बलरामले सहित | गोपैः = गोपहरूद्वारा | वृन्दावनात् = वृन्दावनबाट |
| | परिवृतः = घेरिएर | दूरं गतः = टाढा जानुभयो |

**वाक्यार्थ–** त्यसपछि कुनै एक दिन देवकीपुत्र भगवान् श्रीकृष्ण दाजु बलराम सहित अरू गोपहरूको साथमा गाई चराउँदै वृन्दावनबाट टाढा जानुभयो।

**निदाघार्कातपे तिग्मे छायाभिः स्वाभिरात्मनः।**
**आतपत्रायितान् वीक्ष्य द्रुमानाह व्रजौकसः॥ ३०॥**

**हे स्तोककृष्ण हे अंशो श्रीदामन् सुबलार्जुन ।**
**विशालर्षभ तेजस्विन् देवप्रस्थ वरूथप ॥ ३१ ॥**
**पश्यतैतान् महाभागान् परार्थैकान्तजीवितान् ।**
**वातवर्षातपहिमान् सहन्तो वारयन्ति नः ॥ ३२ ॥**

**पदार्थ–**
**तिग्मे** = अति तातो
**निदाघार्कातपे** = ग्रीष्मकालीन सूर्यको गर्मीमा
**आत्मनः** = आफूलाई
**स्वाभिः** = आफ्ना
**छायाभिः** = छायाले
**आतपत्रायितान्** = छाताको काम गरेर शीतल बनाउने
**द्रुमान्** = रुखहरूलाई
**वीक्ष्य** = देखेर (भगवान्ले)
**व्रजौकसः** = व्रजवासीहरूलाई
**आह** = भन्नुभयो
**हे स्तोककृष्ण** = हे स्तोककृष्ण
**हे अंशो** = हे अंशु
**श्रीदामन्** = हे श्रीदामा
**सुबल** = हे सुबल
**अर्जुन** = हे अर्जुन
**विशाल** = हे विशाल
**ऋर्षभ** = हे ऋषभ
**तेजस्विन्** = हे तेजस्वी
**देवप्रस्थ** = हे देवप्रस्थ
**वरूथप** = हे वरूथप
**परार्थैकान्तजीवितान्** = अर्काको भलाइका लागि नै जीवन अर्पण गरेका
**महाभागान्** = अति भाग्यशाली
**एतान्** = यी रुखहरूलाई
**पश्यत** = हेर (जो)
**वातवर्षातपहिमान्** = हुरीबतास, वर्षा, गर्मी र ठण्डीलाई
**सहन्तः** = सहन गर्दै
**नः** = हामीहरूको (ठण्डी, गर्मी आदि कठिनाइहरूलाई पनि)
**वारयन्ति** = निवारण गरिदिन्छन्

**वाक्यार्थ–** ग्रीष्मकालीन प्रचण्ड सूर्यको घाममा वरिपरिका वृक्षहरूले भगवान्लाई छाताको काम गरेर शीतल बनाइदिएका थिए। यो देखेर भगवान्ले साथीहरूलाई सम्बोधन गर्दै भन्नुभयो– हे स्तोककृष्ण ! हे अंशु ! हे श्रीदामा ! हे सुबल ! हे अर्जुन ! हे विशाल ! हे ऋषभ ! हे तेजस्वी ! हे देवप्रस्थ ! र हे वरूथप ! हेर त, यी भाग्यशाली वृक्षहरू परहितका लागि बाँचिरहेका छन्, हुरीबतास, वर्षा, गर्मी र ठण्डीलाई सहेर यिनीहरूले हामीहरूलाई तिनबाट रक्षा गर्दछन्।

**अहो एषां वरं जन्म सर्वप्राण्युपजीवनम् ।**
**सुजनस्येव येषां वै विमुखा यान्ति नार्थिनः ॥ ३३ ॥**

**पदार्थ–**
**अहो** = अहो धन्य छ
**सर्वप्राण्युपजीवनम्** = सारा प्राणीहरूको जीवनको साधन भएको
**एषां** = यी वृक्षहरूको
**जन्म** = जन्म
**वरं** = श्रेष्ठ छ
**सुजनस्य इव** = सज्जनका (नजिक आएका याचकहरू विमुख नभए) झैँ
**येषां** = यिनीहरू (वृक्ष)को नजिक आएका
**अर्थिनः** = याचकहरू
**वै** = निश्चय नै
**विमुखाः** = विमुख भएर (खालीहात)
**न यान्ति** = जाँदैनन्

**वाक्यार्थ–** अहो ! सारा प्राणीहरूको जीवनको साधन भएका यी वृक्षहरूको जीवन श्रेष्ठ छ।

जसरी सज्जनको सान्निध्यमा आएको याचक रित्तै फर्कँदैन, त्यस्तै यिनीहरूको नजिक आएका व्यक्तिहरू पनि खालीहात फर्कँदैनन्।

**पत्रपुष्पफलच्छायामूलवल्कलदारुभिः।**

**गन्धनिर्यासभस्मास्थितोक्मैः कामान् वितन्वते॥ ३४॥**

**पदार्थ**–
**पत्रपुष्पफलच्छायामूलवल्कल-दारुभिः** = पात, फूल, फल, छहारी, जरा, बोक्रा, दाउरा र **गन्धनिर्यासभस्मास्थितोक्मैः** = गन्ध, चोप, खरानी, अङ्गार तथा अङ्कुरहरूद्वारा यी वृक्षहरूले **कामान्** = हाम्रो कामनालाई **वितन्वते** = पूरा गरिदिन्छन्

**वाक्यार्थ**– यी वृक्षहरू आफ्ना पात, फूल, फल, छहारी, जरा, बोक्रा, दाउरा, गन्ध, चोप, खरानी, अङ्गार, अङ्कुर आदिद्वारा हाम्रो कामनालाई पूरा गरिदिन्छन्।

**एतावज्जन्मसाफल्यं देहिनामिह देहिषु।**

**प्राणैरर्थैर्धिया वाचा श्रेय एवाचरेत् सदा॥ ३५॥**

**पदार्थ**–
**इह** = यो संसारमा
**देहिषु** = प्राणीहरूमा (जसले)
**प्राणैः** = प्राणले
**अर्थैः** = सम्पत्तिले
**धिया** = बुद्धिले र
**वाचा** = वाणीले पनि
**देहिनाम्** = अरू प्राणीहरूको
**सदा** = सधैँ
**श्रेयः एव** = कल्याण मात्रै
**आचरेत्** = गर्दछ भने
**एतावत्** = यत्ति नै (उसको)
**जन्मसाफल्यं** = जन्मको सफलता हो

**वाक्यार्थ**– यस संसारमा कसैले आफ्नो प्राण, सम्पत्ति, बुद्धि र वाणीले समेत सधैँ अरूको कल्याण गर्दछ भने यत्तिले मात्र पनि उसको जन्म सफल भएको मानिन्छ।

**इति प्रवालस्तबकफलपुष्पदलोत्करैः।**

**तरूणां नम्रशाखानां मध्येन यमुनां गतः॥ ३६॥**

**पदार्थ**–
**इति** = यसरी (वृक्षहरूको प्रशंसा गर्दै)
**प्रवालस्तबकफलपुष्पदलोत्करैः** = पालुवा, फूलका गुच्छा, फलफूल तथा पातका समूहले
**नम्रशाखानां** = हाँगाहरू झुकेका
**तरूणां** = रुखहरूको
**मध्येन** = बीचबाट (भगवान् श्रीकृष्ण)
**यमुनां** = यमुना नदीमा
**गतः** = जानुभयो

**वाक्यार्थ**– यसरी वृक्षहरूको प्रशंसा गर्दै पालुवा, फूलका गुच्छा, फलफूल तथा पातको भारले हाँगा झुकेका रुखका बीचबाट भगवान् श्रीकृष्ण यमुना नदीमा जानुभयो।

**तत्र गाः पाययित्वापः सुमृष्टाः शीतलाः शिवाः।**

**ततो नृप स्वयं गोपाः कामं स्वादु पपुर्जलम्॥ ३७॥**

पदार्थ–
**नृप** = हे राजा परीक्षित्
**तत्र** = त्यहाँ (यमुना नदीमा)
**गाः** = गाईहरूलाई
**सुमृष्टाः** = स्वच्छ
**शीतलाः** = चिसो र
**शिवाः** = कल्याणकारी
**अपः** = पानी
**पाययित्वा** = पियाएर
**ततः** = त्यसपछि
**गोपाः** = गोठालाहरूले
**स्वयं** = आफूले पनि
**स्वादु** = मिठो
**जलम्** = पानी
**कामं** = इच्छा अनुसार
**पपुः** = पिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यमुना नदीमा गएर ती गोठालाहरूले गाईहरूलाई स्वच्छ, शीतल र कल्याणकारी पानी पियाए अनि आफूहरूले पनि मिठो पानी इच्छा अनुसार पिए।

**तस्या उपवने कामं चारयन्तः पशून् नृप ।**

**कृष्णरामावुपागम्य क्षुधार्ता इदमब्रुवन् ॥ ३८ ॥**

पदार्थ–
**नृप** = हे राजा परीक्षित्
**तस्याः** = ती यमुनाको
**उपवने** = उपवनमा
**पशून्** = पशु (गाईहरू)लाई
**कामं** = इच्छा अनुसार
**चारयन्तः** = चराइरहेका
**क्षुधार्ताः** = भोकाएका गोठालाहरूले
**कृष्णरामौ** = श्रीकृष्ण र बलरामको
**उपागम्य** = नजिकमा आएर
**इदम्** = यसो
**अब्रुवन्** = भने

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यमुनाको उपवनमा इच्छा अनुसार गाई चराइरहेका गोपहरूले भोक लागेपछि श्रीकृष्ण र बलरामको नजिकमा गएर यसो भने।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**गोपीवस्त्रापहारो नाम द्वाविंशोऽध्यायः ॥ २२ ॥**

# अथ त्रयोविंशोऽध्यायः

## याज्ञिक ब्राह्मणहरूका पत्नीहरूमा भगवान्‌को अनुग्रह

**गोपा ऊचुः** (गोपहरूले भने)

**राम राम महावीर्य कृष्ण दुष्टनिबर्हण ।**

**एषा वै बाधते क्षुन्नस्तच्छान्तिं कर्तुमर्हथः ॥ १ ॥**

**पदार्थ–**
**महावीर्य** = अत्यन्त पराक्रमी
**राम राम** = हे आनन्ददायक बलराम
**दुष्टनिबर्हण** = दुष्टहरूको संहार गर्ने
**कृष्ण** = हे श्रीकृष्ण
**वै** = निश्चय नै
**एषा क्षुत्** = यो भोकले
**नः** = हामीहरूलाई
**बाधते** = सताइरहेको छ
**तच्छान्तिं** = त्यसलाई निवारण
**कर्तुम्** = गर्न
**अर्हथः** = हजुरहरू योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे अतिपराक्रमी बलदेव तथा दुष्टसंहारक श्रीकृष्ण ! हामीलाई भोकले सताइरहेको छ, त्यसलाई निवारण गर्न हजुरहरूले नै सक्नुहुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति विज्ञापितो गोपैर्भगवान् देवकीसुतः ।**

**भक्ताया विप्रभार्यायाः प्रसीदन्निदमब्रवीत् ॥ २ ॥**

**पदार्थ–**
**इति** = यसरी
**गोपैः** = गोपहरूद्वारा
**विज्ञापितः** = भनिनुभएका
**भगवान्** = ऐश्वर्यसम्पन्न
**देवकीसुतः** = देवकीपुत्र श्रीकृष्णले
**भक्तायाः** = आफ्ना परमभक्त
**विप्रभार्यायाः** = ब्राह्मणीहरूमाथि
**प्रसीदन्** = अनुग्रह गर्दै
**इदं** = यसो
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** यसरी गोपहरूले भगवान्‌लाई भनेपछि देवकीपुत्र भगवान् श्रीकृष्णले पनि आफ्ना परमभक्त ब्राह्मणीहरूलाई अनुग्रह गर्नका लागि यसो भन्नुभयो।

**प्रयात देवयजनं ब्राह्मणा ब्रह्मवादिनः ।**

**सत्रमाङ्गिरसं नाम ह्यासते स्वर्गकाम्यया ॥ ३ ॥**

**पदार्थ–**
**ब्रह्मवादिनः** = वेदपाठी
**ब्राह्मणाः** = ब्राह्मणहरू
**स्वर्गकाम्यया** = स्वर्गको चाहनाले
**आङ्गिरसं नाम** = आङ्गिरस नाम गरेको
**सत्रम्** = यज्ञ
**हि** = निश्चय नै

**आसते** = गरिरहेका छन् (त्यो) | **देवयजनं** = देवपूजामा | **प्रयात** = जाओ

**वाक्यार्थ–** हे गोपहरू ! वेदपाठी ब्राह्मणहरूले स्वर्ग जाने चाहनाले आङ्गिरस नामको यज्ञ गरिरहेका छन्, त्यो देवपूजामा जाओ।

**तत्र गत्वौदनं गोपा याचतास्मद्विसर्जिताः।**
**कीर्तयन्तो भगवत आर्यस्य मम चाभिधाम्॥ ४॥**

**पदार्थ–**
**गोपाः** = हे गोपहरू
**अस्मद्विसर्जिताः** = हामीहरूद्वारा पठाइएका तिमीहरू
**तत्र** = त्यहाँ
**गत्वा** = गएर
**भगवतः** = भगवान्
**आर्यस्य** = पूज्य बलरामको र
**मम च** = मेरो पनि
**अभिधाम्** = नाम
**कीर्तयन्तः** = लिँदै
**ओदनं** = भोजन (भात)
**याचत** = माग

**वाक्यार्थ–** हे गोपहरू ! हामीहरूद्वारा पठाइएका तिमीहरू त्यो यज्ञ गरेको ठाउँमा जाओ र दाजु बलराम तथा मेरो पनि नाम लिएर भोजन माग।

**इत्यादिष्टा भगवता गत्वायाचन्त ते तथा।**
**कृताञ्जलिपुटा विप्रान् दण्डवत् पतिता भुवि॥ ५॥**

**पदार्थ–**
**इति** = यसरी
**भगवता** = भगवान्द्वारा
**आदिष्टाः** = अह्राइएका
**ते** = ती गोपहरू
**गत्वा** = (त्यहाँ) गएर
**कृताञ्जलिपुटाः** = हात जोडेर
**दण्डवत्** = दण्डवत् प्रणाम गर्दै
**भुवि पतिताः** = भुइँमा लम्पसार परेर
**तथा** = त्यसरी नै (श्रीकृष्ण र बलरामले भने झैं)
**विप्रान्** = ब्राह्मणहरूसँग
**अयाचन्त** = मागे

**वाक्यार्थ–** यसरी भगवान्को आदेश पाइसकेपछि यज्ञ भएको ठाउँमा गएर ती गोपहरूले ब्राह्मणहरूलाई हात जोर्दै भुइँमा लम्पसार परेर दण्डवत् प्रणाम गर्दै भगवान्ले भने झैं गरी ब्राह्मणहरूसँग भोजन मागे।

**हे भूमिदेवाः शृणुत कृष्णस्यादेशकारिणः।**
**प्राप्ताञ्जानीत भद्रं वो गोपान्नो रामचोदितान्॥ ६॥**

**पदार्थ–**
**हे भूमिदेवाः** = हे भूदेवहरू
**शृणुत** = सुन्नुहोस्
**वः** = हजुरहरूको
**भद्रं** = कल्याण होस्
**प्राप्तान्** = (हजुरहरूको आश्रममा) आएका
**नः** = हामीहरूलाई
**कृष्णस्य** = भगवान् श्रीकृष्णको
**आदेशकारिणः** = आदेश मान्ने
**रामचोदितान्** = बलरामले पठाएका

**गोपान्** = गोपहरू भनेर | **जानीत** = चिन्नुहोस्

**वाक्यार्थ–** हे भूदेव ब्राह्मणहरू ! हजुरहरूको कल्याण होस्, हामीहरूको कुरा सुन्नुहोस्। हामी गोपहरू श्रीकृष्णको आदेश पाएर बलरामले पठाई यहाँ आएका हौँ भनी बुझ्नुहोस्।

**गाश्चारयन्ताववदूर ओदनं रामाच्युतौ वो लषतो बुभुक्षितौ।**
**तयोर्द्विजा ओदनमर्थिनोर्यदि श्रद्धा च वो यच्छत धर्मवित्तमाः॥ ७॥**

पदार्थ–
**धर्मवित्तमाः** = हे धर्मवेत्ता
**द्विजाः** = ब्राह्मणहरू
**अविदूरे** = यहाँबाट नजिकै
**बुभुक्षितौ** = भोकाएका
**रामाच्युतौ** = श्रीकृष्ण र बलराम
**गाः** = गाईहरू
**चारयन्तौ** = चराउँदै
**वः** = हजुरहरूको
**ओदनं** = भोजनलाई
**लषतः** = पाउने चाहना गर्दै रहनुभएको छ
**वः** = हजुरहरूको
**अर्थिनः** = (भोजन) चाहने
**तयोः** = उहाँहरूमाथि
**यदि श्रद्धा** = यदि श्रद्धा छ भने
**ओदनम्** = भोजन
**यच्छत** = दिनुहोस्

**वाक्यार्थ–** हे धर्मतत्त्ववेत्ता ब्राह्मणहरू ! यहाँबाट नजिकै गाई चराउन श्रीकृष्ण र बलराम आउनुभएको छ। उहाँहरू अहिले भोका हुनुहुन्छ, उहाँहरूले हजुरहरूबाट भोजनको इच्छा गर्नुभएको छ, यदि भोजन चाहने उहाँहरूमाथि हजुरहरूको श्रद्धा छ भने भोजन दिनुहोस्।

**दीक्षायाः पशुसंस्थायाः सौत्रामण्याश्च सत्तमाः।**
**अन्यत्र दीक्षितस्यापि नान्नमश्नन् हि दुष्यति॥ ८॥**

पदार्थ–
**सत्तमाः** = हे सज्जनहरू
**पशुसंस्थायाः** = पशुबलि दिइने (अग्निष्टोम) यज्ञको
**दीक्षायाः** = दीक्षा र
**सौत्रामण्याः च** = सौत्रामणी यागको दीक्षाबाट
**अन्यत्र** = अरू यज्ञमा
**दीक्षितस्य अपि** = दीक्षित भएका व्यक्तिहरूको पनि
**अन्नम्** = अन्न
**अश्नन्** = खाँदा
**हि** = निश्चय नै
**न दुष्यति** = कुनै दोष हुँदैन

**वाक्यार्थ–** हे सज्जन ब्राह्मणहरू ! (यद्यपि यज्ञमा दीक्षित व्यक्तिको अन्न खाँदा दोष लाग्ने भए पनि त्यो नियम) पशुबलि दिइने यज्ञ र सौत्रामणी यज्ञमा दीक्षित हुने व्यक्तिको अन्न खाँदा मात्र हो, त्यसदेखि अतिरिक्त यज्ञमा दीक्षित व्यक्तिहरूको अन्न खाँदा कुनै दोष लाग्दैन।

**इति ते भगवद्याच्ञां शृण्वन्तोऽपि न शुश्रुवुः।**
**क्षुद्राशा भूरिकर्माणो बालिशा वृद्धमानिनः॥ ९॥**

पदार्थ–
**क्षुद्राशाः** = स्वर्ग आदि क्षुद्रफलको आशामा डुबेका
**भूरिकर्माणः** = धैरै क्लेशयुक्त कर्महरूमा लागेका
**बालिशाः** = मूर्खहरू (भएर पनि)

**वृद्धमानिनः** = ज्ञानवृद्ध मान्ने
**ते** = ती ब्राह्मणहरूले
**इति** = यस प्रकारको
**भगवद्याच्ञां** = भगवान्को (भोजनको) याचनालाई
**शृण्वन्तः अपि** = सुनेर पनि
**न शुश्रुवुः** = ध्यान दिएनन्

**वाक्यार्थ–** (स्वर्गादि) तुच्छ फलको आशाले अत्यन्त क्लेशयुक्त कर्ममा लागेका ती मूर्ख ब्राह्मणहरू आफूलाई ज्ञानवृद्ध ठान्दथे। उनीहरूले यसरी गोठालाहरूबाट भगवान्को याचनालाई सुनेर पनि त्यसमा कुनै ध्यान दिएनन्।

**देशः कालः पृथग् द्रव्यं मन्त्रतन्त्रर्त्विजोऽग्नयः।**
**देवता यजमानश्च क्रतुर्धर्मश्च यन्मयः॥ १०॥**
**तं ब्रह्म परमं साक्षाद् भगवन्तमधोक्षजम्।**
**मनुष्यदृष्ट्या दुष्प्रज्ञा मर्त्यात्मानो न मेनिरे॥ ११॥**

**पदार्थ–**
**देशः** = ठाउँ
**कालः** = समय
**पृथक् द्रव्यं** = पुरोडाश आदि सामग्रीहरू
**मन्त्रतन्त्रर्त्विजः** = मन्त्र, पद्धति तथा ऋत्विक् आदि आचार्यहरू
**अग्नयः** = अग्निहरू
**देवताः** = देवताहरू
**यजमानः** = यज्ञको कर्ता
**क्रतुः** = साक्षात् यज्ञ र
**धर्मः च** = धर्म पनि
**यन्मयः** = जुन भगवन्मय छ
**तं** = त्यस्ता
**अधोक्षजम्** = इन्द्रियातीत
**परमं ब्रह्म** = परम ब्रह्मस्वरूप
**साक्षात् भगवन्तम्** = प्रत्यक्ष नारायणलाई
**दुष्प्रज्ञाः** = बुद्धि भ्रष्ट भएका
**मर्त्यात्मानः** = मरणशील शरीरमा आत्मबुद्धि गर्ने मूर्ख ब्राह्मणहरूले
**मनुष्यदृष्ट्या** = सामान्य मनुष्यको रूपमा लिई
**न मेनिरे** = वास्तविक रूपले बुझ्न सकेनन्

**वाक्यार्थ–** देश, काल, यज्ञिय द्रव्यहरू, यज्ञ सम्पादन गर्ने मन्त्र, पद्धति तथा ऋत्विक् आदि आचार्यहरू र अग्निहरू, देवताहरू, यजमान, स्वयं यज्ञ र धर्म पनि भगवन्मय छन्। त्यस्ता इन्द्रियातीत साक्षात् नारायणलाई (आज आफ्नै नजिक आएर भोजन माग्दा पनि) यी मरणशील शरीरमा आत्मबुद्धि गर्ने बुद्धिभ्रष्ट भएका मूर्ख ब्राह्मणहरूले मनुष्यको दृष्टिले हेर्नाले चिन्न सकेनन्।

**विवरण–** माथिका श्लोकहरूमा गोपबालकहरूको याचनालाई याज्ञिकहरूले सुनेर पनि वास्ता नगरेको बताइएको छ। श्रीशुकदेव भन्नुहुन्छ— सम्पूर्ण कर्महरू, यज्ञका कर्ता, यजमान र आराध्य देवताको रूपमा समेत श्रीकृष्ण नै हुनुहुन्छ। सबै कर्मका परम फलरूप सर्वात्मा श्रीकृष्णलाई उनीहरूले सामान्य मनुष्य ठाने। उनीहरूको यो दोषदृष्टिको निन्दा गर्दै शुकदेव भन्नुहुन्छ— 'ती मूर्ख थिए, आफूलाई ठुला ज्ञाता ठान्थे तर उनीहरूले कर्मको फलदाता परमात्मालाई नै चिन्न सकेनन्।' स्वर्गीय सुख अनित्य छ, त्यसैले यो क्षुद्र हो, तर यसका लागि प्रयास भने धेरै गर्नुपर्दछ। वेदोक्त कर्ममार्ग परमात्मप्राप्तिकै साधन हो। यसलाई छाडी आफ्नो बुद्धि र प्रयासको

भरमा मात्र परमात्मालाई पाउन खोज्नु झन् मूर्खता हुन्छ। तत्त्वज्ञानका लागि चित्तशुद्धि आवश्यक छ र त्यसका लागि कर्म आवश्यक छ। यही कुरा बताउँदै बृहदारण्यकोपनिषद् (४/४/२२)मा भनिएको छ– **तमेतं वेदानुवचनेन ब्राह्मणा विविदिषन्ति यज्ञेन दानेन तपसाऽनाशकेन** अर्थात् यो आत्मालाई ब्राह्मणहरू वेदाध्ययन, यज्ञ, दान र तपस्याद्वारा जान्न खोज्दछन्। यहाँ निन्दा गरिएको कर्म चाहिँ भगवदर्पण बुद्धिले नगरिएको सकाम कर्म हो। जसमा फल थोरै र दुःख धेरै हुन्छ। यज्ञमा लागेका ती ब्राह्मणहरूले भगवान् आउनुभएको सुनेपछि उहाँको आदर गर्नुपर्थ्यो, तर साधनहरूमा लाग्दा-लाग्दै साध्यवस्तुलाई नै बिर्सेर उनीहरूले भुल गरे। यसैले यहाँ त्यस्ता याज्ञिक ब्राह्मणहरूको निन्दा गरिएको छ।

**न ते यदोमिति प्रोचुर्न नेति च परन्तप।**
**गोपा निराशाः प्रत्येत्य तथोचुः कृष्णरामयोः॥ १२॥**

**पदार्थ–**
**परन्तप** = हे शत्रुपीडक परीक्षित्
**ते** = ती ब्राह्मणहरूले
**यदा** = जब
**न** = न त
**ओम् इति** = ल हुन्छ भनेर
**प्रोचुः** = भने
**न च** = न त
**न इति** = हुँदैन भनेर (बताए त्यस वेला)
**निराशाः** = निराश भएका
**गोपाः** = ती गोपहरू
**प्रत्येत्य** = फर्केर
**कृष्णरामयोः** = श्रीकृष्ण र बलरामका समक्ष
**तथा** = ती सबै कुरा
**ऊचुः** = भने

**वाक्यार्थ–** हे परीक्षित् ! ती ब्राह्मणहरूले हुन्छ पनि भनेनन् र हुँदैन पनि भनेनन् (वास्तै गरेनन्)। त्यसपछि निराश भएका गोपहरू फर्किए र श्रीकृष्ण र बलराम भएको ठाउँमा गई उनीहरूले सबै कुरा बताए।

**तदुपाकर्ण्य भगवान् प्रहस्य जगदीश्वरः।**
**व्याजहार पुनर्गोपान् दर्शयन् लौकिकीं गतिम्॥ १३॥**

**पदार्थ–**
**तत्** = ती सबै कुरा
**उपाकर्ण्य** = सुनेर
**भगवान्** = नारायण
**जगदीश्वरः** = जगत्का मालिक प्रभु
**प्रहस्य** = केही हाँसेर
**लौकिकीं गतिम्** = लौकिक (लोकमा माग्ने मान्छेले कहिलेकाहीँ तिरस्कार पाउनु स्वाभाविक हो भन्ने जस्ता) रीतिलाई
**दर्शयन्** = देखाउँदै
**पुनः** = फेरि
**गोपान्** = गोपहरूलाई
**व्याजहार** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** यी सबै कुरा सुनेर जगत्का मालिक भगवान् श्रीकृष्णले मुसुक्क हाँस्दै (माग्नेले कहिलेकाहीँ तिरस्कार पाउनु स्वाभाविकै हो भन्ने) लौकिक रीतिलाई देखाउँदै ती गोपहरूलाई फेरि भन्न लाग्नुभयो।

**मां ज्ञापयत पत्नीभ्यः ससङ्कर्षणमागतम् ।**
**दास्यन्ति काममन्नं वः स्निग्धा मय्युषिता धिया ॥ १४ ॥**

पदार्थ–
**ससङ्कर्षणं** = बलरामसहित
**आगतम्** = आएको
**मां** = मेरो विषयमा
**पत्नीभ्यः** = (ती ब्राह्मणका) पत्नीहरूलाई
**ज्ञापयत** = बुझाओ
**स्निग्धाः** = (मलाई) अत्यन्त स्नेह गर्ने
**धिया** = चित्तले
**मयि** = ममा नै
**उषिताः** = रहेका ती ब्राह्मणीहरूले
**वः** = तिमीहरूलाई
**कामम्** = इच्छा अनुसार
**अन्नं** = भोजन
**दास्यन्ति** = दिनेछन्

**वाक्यार्थ–** बलरामसहित म आएको कुरा ब्राह्मणपत्नीहरूलाई तिमीहरूले भन। ममा अत्यन्त स्नेह गर्ने, (आफ्नो घरमा बसेर पनि) चित्तले ममा नै रहेका ती ब्राह्मणीहरूले तिमीहरूलाई इच्छा अनुसार भोजन दिनेछन्।

**गत्वाथ पत्नीशालायां दृष्ट्वासीनाः स्वलङ्कृताः ।**
**नत्वा द्विजसतीर्गोपाः प्रश्रिता इदमब्रुवन् ॥ १५ ॥**

पदार्थ–
**अथ** = त्यसपछि
**गोपाः** = ती गोठालाहरू
**गत्वा** = (यज्ञ लगाएको ठाउँमा) गई
**पत्नीशालायां** = ब्राह्मणीहरूको घरमा
**आसीनाः** = बसेका
**स्वलङ्कृताः** = राम्ररी सजिएका
**द्विजसतीः** = ब्राह्मणपत्नीहरूलाई
**दृष्ट्वा** = देखेर
**नत्वा** = नमस्कार गरेर
**प्रश्रिताः** = अत्यन्त विनयपूर्वक
**इदम्** = यस्तो
**अब्रुवन्** = भन्न लागे

**वाक्यार्थ–** त्यसपछि ती गोपहरू ब्राह्मणीहरू बस्ने घरमा गए। त्यहाँ राम्रा-राम्रा गहना लगाएर सजिएर बसेका ब्राह्मणपत्नीहरूलाई देख्ने बित्तिकै गोपहरूले नमस्कार गरे र नम्रतापूर्वक भन्न लागे।

**नमो वो विप्रपत्नीभ्यो निबोधत वचांसि नः ।**
**इतोऽविदूरे चरता कृष्णेनेहेषिता वयम् ॥ १६ ॥**

पदार्थ–
**वः** = हजुरहरू
**विप्रपत्नीभ्यः** = ब्राह्मणका पत्नीहरूलाई
**नमः** = नमस्कार छ
**नः** = हामीहरूका
**वचांसि** = कुराहरू
**निबोधत** = सुन्नुहोस्
**इतः** = यहाँबाट
**अविदूरे** = नजिकै
**चरता** = आउनुभएका
**कृष्णेन** = श्रीकृष्णद्वारा
**इह** = यहाँ
**वयम्** = हामीहरू
**ईषिताः** = पठाइएका हौँ

**वाक्यार्थ–** हजुर ब्राह्मणपत्नीहरूलाई नमस्कार छ, हामीहरूको कुरा सुन्नुहोस्। श्रीकृष्ण यहाँबाट

नजिकै आउनुभएको छ, हामी उहाँले नै पठाएर आएका हौँ।

**गाश्चारयन् स गोपालैः सरामो दूरमागतः।**

**बुभुक्षितस्य तस्यान्नं सानुगस्य प्रदीयताम्॥ १७॥**

**पदार्थ–**
**सः** = उहाँ श्रीकृष्ण
**गोपालैः** = गोठालाहरूको साथमा
**सरामः** = बलरामसहित
**गाः** = गाईहरू
**चारयन्** = चराउँदै
**दूरम्** = (आफ्नो) घरबाट टाढा
**आगतः** = आइपुग्नुभएको छ
**सानुगस्य** = हामी अनुचरसहित
**बुभुक्षितस्य** = भोकाउनुभएका
**तस्य** = उहाँ श्रीकृष्णलाई
**अन्नं** = अन्न
**प्रदीयताम्** = दिनुहोस्

**वाक्यार्थ–** श्रीकृष्ण अरू गोपहरूसहित बलरामको साथमा गाई चराउँदै आफ्नो घरबाट टाढा आइपुग्नुभएको छ। हामी अनुचरहरूसहित भोकाउनुभएका श्रीकृष्णलाई भोजन दिनुहोस्।

**श्रुत्वाच्युतमुपायातं नित्यं तद्दर्शनोत्सुकाः।**

**तत्कथाक्षिप्तमनसो बभूवुर्जातसम्भ्रमाः॥ १८॥**

**पदार्थ–**
**नित्यं** = सधैँ
**तद्दर्शनोत्सुकाः** = उहाँको दर्शन गर्नका लागि उत्सुक भएका
**तत्कथाक्षिप्तमनसः** = उहाँका कथाहरू सुनेर मन तानिएका ती ब्राह्मणीहरू
**अच्युतम्** = श्रीकृष्ण
**उपायातं** = नजिकै आउनुभएको
**श्रुत्वा** = सुनेर
**जातसम्भ्रमाः** = हड्बडाएका
**बभूवुः** = भए

**वाक्यार्थ–** सधैँ श्रीकृष्णको दर्शन गर्नका लागि उत्सुक भएका र उहाँका कथाहरू सुनेर मन तानिएका ती ब्राह्मणीहरू श्रीकृष्ण नजिकै आउनुभएको कुरा सुनेर हड्बडाए।

**चतुर्विधं बहुगुणमन्नमादाय भाजनैः।**

**अभिसस्रुः प्रियं सर्वाः समुद्रमिव निम्नगाः॥ १९॥**

**निषिध्यमानाः पतिभिर्भ्रातृभिर्बन्धुभिः सुतैः।**

**भगवत्युत्तमश्लोके दीर्घश्रुतधृताशयाः॥ २०॥**

**पदार्थ–**
**बहुगुणम्** = धेरै गुणले युक्त भएको
**चतुर्विधं** = भक्ष्य (चपाउने), भोज्य (चुस्ने), लेह्य (चाट्ने) र चोष्य (पिउने) चारै प्रकारका
**अन्नम्** = अन्न आदि भोजनलाई
**भाजनैः** = अलग-अलग भाँडामा
**आदाय** = राखेर
**पतिभिः** = पतिहरूद्वारा
**भ्रातृभिः** = दाजुभाइहरूद्वारा
**बन्धुभिः** = बन्धुबान्धवहरूद्वारा
**सुतैः** = छोराहरूद्वारा पनि
**निषिध्यमानाः** = रोकिएका
**उत्तमश्लोके** = उत्तमकीर्तिवाला
**भगवति** = भगवान् श्रीकृष्णमा
**दीर्घश्रुतधृताशयाः** = पहिलेदेखि

नै लीला र गुणकथा सुन्नाले आफ्नो चित्त अर्पण गरिसकेका
**सर्वाः** = सबै ब्राह्मणीहरू
**निम्नगाः** = नदीहरू
**समुद्रम् इव** = समुद्रमा गए झैँ
**प्रियं** = प्यारा श्रीकृष्ण भएको ठाउँमा
**अभिसस्रुः** = छिटोछिटो गए

**वाक्यार्थ–** भगवान्‌को कीर्ति र गुणकथा सुन्नाले उहाँकै श्रीचरणमा चित्त अर्पण गरिसकेका ती ब्राह्मणीहरू गुणयुक्त भक्ष्य, भोज्य, लेह्य र चोष्य चारै प्रकारका भोजनलाई अलग-अलग भाँडामा लिई पति, दाजुभाइ, बन्धुबान्धव र छोराहरूले रोक्दा पनि नदीहरू समुद्रमा गए झैँ भगवान् श्रीकृष्ण रहनुभएको ठाउँमा छिटोछिटो गरी गए।

**यमुनोपवनेऽशोकनवपल्लवमण्डिते ।**
**विचरन्तं वृतं गोपैः साग्रजं ददृशुः स्त्रियः ॥ २१ ॥**

**पदार्थ–**
**अशोकनवपल्लवमण्डिते** = अशोक वृक्षको नयाँ पालुवाले सुशोभित भएको
**यमुनोपवने** = यमुनाको नजिकैको वनमा
**विचरन्तं** = घुमिरहनुभएका
**गोपैः** = अरू गोठालाहरूद्वारा
**वृतं** = घेरिनुभएका
**साग्रजं** = बलरामसहित श्रीकृष्णलाई
**स्त्रियः** = ती ब्राह्मणीहरूले
**ददृशुः** = देखे

**वाक्यार्थ–** अशोक वृक्षको नयाँ पालुवाले सुशोभित भएको यमुनाको नजिकैको वनमा गोठालाहरूद्वारा घेरिनुभएका र दाजु बलरामले सहित भएर घुमिरहनुभएका श्रीकृष्णलाई ती ब्राह्मणीहरूले देखे।

**श्यामं हिरण्यपरिधिं वनमाल्यबर्ह-**
**धातुप्रवालनटवेषमनुव्रतांसे ।**
**विन्यस्तहस्तमितरेण धुनानमब्जं**
**कर्णोत्पलालककपोलमुखाब्जहासम् ॥ २२ ॥**

**पदार्थ–**
**श्यामं** = मेघजस्तो श्याम वर्ण भएका
**हिरण्यपरिधिं** = सुनौलो पीताम्बर धारण गर्नुभएका
**वनमाल्यबर्हधातुप्रवालनटवेषं** = (गलामा) वनमाला, (शिरमा) मयूरप्वाँख, (अङ्ग-अङ्गमा) विविध धातुको लेप र नयाँ पालुवा आदिले सजिएर नटको जस्तो वेष धारण गर्नुभएका
**अनुव्रतांसे** = साथीहरूको काँधमा
**विन्यस्तहस्तम्** = एक हात टेकाउनुभएका र
**इतरेण** = अर्को हातले
**अब्जं** = कमलको फूललाई
**धुनानम्** = हल्लाइरहनुभएका
**कर्णोत्पलालककपोलमुखाब्ज-हासम्** = कानमा कमलाकार कुण्डल, दुबैतर्फबाट गालासम्म घुमुर्किएको कपालको समूह र मुस्कानले युक्त मुख हुनुभएका (अति सुन्दर श्रीकृष्णलाई देखे)

**वाक्यार्थ–** मेघजस्तो श्यामसुन्दर वर्ण, सुनौलो पीताम्बरले सुशोभित, गलामा वनमाला, शिरमा मयूरको प्वाँख, अङ्ग-अङ्गमा विविध धातुका राग र नयाँ पालुवा सिउरिएर सजिएकाले कुनै नटको जस्तो वेष बनाउनुभएका, एक हात साथीहरूको काँधमा राखी अर्को हातले कमलको फूल घुमाइरहनुभएका, कानमा कमलाकार कुण्डल, दुबैतर्फबाट गालासम्म घुमुर्किएको कपाल र मुस्कानले युक्त हुनुभएका अति सुन्दर श्रीकृष्णलाई ब्राह्मणीहरूले देखे।

**प्रायः श्रुतप्रियतमोदयकर्णपूरै-**
**र्यस्मिन्निमग्नमनसस्तमथाक्षिरन्ध्रैः।**
**अन्तः प्रवेश्य सुचिरं परिरभ्य तापं**
**प्राज्ञं यथाभिमतयो विजहुर्नरेन्द्र ॥ २३ ॥**

**पदार्थ–**
**नरेन्द्र** = हे राजा परीक्षित्
**प्रायः** = धरैजसो
**श्रुतप्रियतमोदयकर्णपूरैः** = सुनिएका आफ्ना प्रियतमका उत्कर्षका कथारूपी कानका गहनाद्वारा (बारम्बार सुनिएका कथाद्वारा)
**यस्मिन्** = जुन श्रीकृष्णमा
**निमग्नमनसः** = आफ्नो चित्तवृत्ति सबै अर्पण गरेका ब्राह्मणीहरूले
**अथ** = अब
**तम्** = उनै भगवान् श्रीकृष्णलाई
**अक्षिरन्ध्रैः** = आँखारूपी (छिद्र) ढोकाबाट
**अन्तः प्रवेश्य** = भित्र हृदयमा प्रवेश गराएर
**सुचिरं** = धेरै समयसम्म
**परिरभ्य** = आलिङ्गन गरेर
**अभिमतयः** = (जाग्रत् र स्वप्नको) अहङ्कारवृत्तिले
**यथा** = जसरी
**प्राज्ञं** = (सुषुप्ति अवस्थामा) प्राज्ञलाई (आलिङ्गन गरेर तापमुक्त हुन्छन्, त्यसै गरी)
**तापं** = सांसारिक तापलाई
**विजहुः** = त्यागे

**वाक्यार्थ–** हे राजा परीक्षित्! अहिलेसम्म ती ब्राह्मणीहरूले आफ्नो कानद्वारा श्रीकृष्णको लीलाकथा सुनेर मनमा नै आफ्ना सारा चित्तवृत्ति अर्पण गरेका थिए भने आज आँखारूपी ढोकाबाट उनै श्रीकृष्णलाई हृदयसम्म प्रवेश गराएर धेरै बेरसम्म आलिङ्गन गरे र (जाग्रत् र स्वप्नको) अहङ्कारवृत्तिले सुषुप्तिमा प्राज्ञलाई अङ्कमाल गरी सारा तापलाई त्यागे झैँ उनीहरूले पनि सारा सांसारिक तापलाई त्यागे।

**विवरण–** माथिका श्लोकहरूमा श्रीकृष्णप्रति असीम श्रद्धा र प्रेम भएका कारण याज्ञिक ब्राह्मणहरूका पत्नीहरूले आफ्ना पति, बन्धु, छोरा आदिले रोक्दारोक्दै पनि श्रीकृष्णको समीपमा पुगेर उहाँको दर्शन गरेको बताइएको छ। यी ब्राह्मणपत्नीहरूले पनि श्रीकृष्णलाई प्रियभावले नै हेरेका थिए। श्यामवर्णका श्रीकृष्णको शरीरमा सुनौलो पीताम्बर सजिएको थियो। आफ्ना केही साथीहरूको काँधमा एउटा हात अड्याई उहाँ अर्को हातले कमलको फूल लिई घुमाउँदै हुनुहुन्थ्यो। यसको तात्पर्य लेख्दै सुबोधिनीकार भन्नुहुन्छ– भगवान्ले विश्वलीलारूपी कमल घुमाउनुभएको हो– **विश्वमेव कमलात्मकं भ्रामयति**। यो सम्पूर्ण संसार परमात्माको लीलाविलास

हो। रसरूप परमात्मा आफ्नै आनन्दलाई छुट्टा-छुट्टै रूपमा भोग्नका लागि यो जगत् प्रपञ्चको रूपमा देखिनुभएको हो। यो जगत्रूप लीलाका नियन्त्रक पनि उहाँ आफैँ हुनुहुन्छ। ती सबै ब्राह्मणपत्नीहरूले आफ्ना प्रियतम श्रीकृष्णका अनेक कीर्तिगाथाहरू सुनेका थिए। प्रेम, ऐश्वर्य आदि सबै गुणले पूर्ण उहाँको कीर्ति सुन्नेबित्तिकै तिनको मन श्रीकृष्णमा लागिसकेको थियो। आज आँखारूपी प्वालबाट आफ्ना प्रियतमलाई मनभित्र सजाई उनीहरूले अङ्कमाल गरेका छन्। यो अङ्कमाल सुषुप्तिकालमा जीवले साक्षीसँग गएर मिले जैँ अत्यन्त आनन्ददायक थियो भनी बताइएको छ।

अद्वैतवेदान्तमा सुषुप्तिको विवेचना गर्दा यो अवस्थामा जीवले आफ्नो जीवभावलाई बिर्सेर परमात्मभावमा पुग्ने बताइएको छ। बृहदारण्यकोपनिषद् (४/३/२१)मा भनिएको छ— चराहरू चारैतर्फ उडी थाकेर आफ्नै गुँडमा फर्किए जैँ जाग्रत् र स्वप्नमा बाहिरी-भित्री पदार्थहरूतिर दौडँदा दौडँदै थाकेको जीव आफ्नो आश्रयमा पुग्छ, त्यो वेलामा ऊ प्राज्ञ अर्थात् सर्वज्ञ परमात्माद्वारा आलिङ्गित हुन्छ अर्थात् गम्लङ्ग अँगालिएको हुन्छ (**प्राज्ञेनात्मना सम्परिष्वक्तो न बाह्यं किञ्चन वेद नान्तरम्**)। सबैथरी दुःख या बन्धनको मूल कारण भनेको परिच्छिन्न जीवभाव हो, यसलाई अहङ्कार या चिदाभास पनि भनिन्छ। व्यष्टि अन्तःकरणमा कल्पित भएको यो भाव सुषुप्तिकालमा अन्तःकरण बिलाउँदा सँगसँगै हराउँछ। त्यसैले यस वेला प्राणीहरू सम्पूर्ण बन्धन, दुःख, शोक आदिबाट पूर्णतया मुक्त हुन्छन्— **तीर्णो हि तदा सर्वाञ्छोकान् हृदयस्य भवति** (बृहदारण्यकोपनिषद्, ४/३/२२)। छान्दोग्योपनिषद्मा पनि स्वपिति अर्थात् सुत्दछ भन्ने शब्दको अर्थ लगाउँदै सुषुप्तिमा जीवले आफ्नो रूपलाई प्राप्त गर्दछ भनिएको छ— **स्वपिति नाम सता सोम्य तदा सम्पन्नो भवति, स्वमपीतो भवति** (छान्दोग्योपनिषद्, ६/८/१) अर्थात् त्यस वेलामा जीव सत् परमात्मासँग सम्पन्न हुन्छ, जीवले आफैँलाई प्राप्त गर्दछ। यस श्लोकमा पनि अहङ्कारले प्राज्ञलाई पाई ताप छाडिदिने कुरा बताइएको छ। **अभिमतयः** यो शब्दको अर्थ गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ— **अहंवृत्तयः** अर्थात् अहङ्कारका वृत्तिहरू। जीव त एउटै छ, तर त्यो जीवभाव या अहङ्कार वृत्तिद्वारा केवल कल्पित भएको हो वास्तविक होइन। **अहं, अहं** अर्थात् म म भन्ने जुन अन्तःकरणको वृत्तिद्वारा हुने अहङ्कारको बोध छ, त्यत्ति मात्रै त्यसको अस्तित्व छ। जुन वेला अहङ्कारको बोध हुँदैन, त्यो वेला यसको अस्तित्व पनि रहँदैन। जीवभाव केवल प्रतीतिमा मात्र छ, वस्तुतः छैन। अन्तःकरणको वृत्तिद्वारा हुने जीवभावको यही प्रतीतिलाई लिएर **अभिमतयः** भन्ने बहुवचन प्रयोग गरिएको हो। यसरी याज्ञिक ब्राह्मणहरूका पत्नीहरूले परमात्मालाई मनभित्रै प्राप्त गरी सबै तापलाई त्यागेको बताइएको छ।

**तास्तथा त्यक्तसर्वाशाः प्राप्ता आत्मदिदृक्षया।**
**विज्ञायाखिलदृग्द्रष्टा प्राह प्रहसिताननः॥ २४॥**

**पदार्थ–**
**त्यक्तसर्वाशाः** = सम्पूर्ण इच्छालाई त्यागेका **आत्मदिदृक्षया** = आफ्नो दर्शनको इच्छाले **तथा** = त्यसप्रकार

| | | |
|---|---|---|
| **प्राप्ताः** = आएका | **अखिलदृग्द्रष्टा** = सम्पूर्ण | **प्रहसिताननः** = हँसिलो अनुहार |
| **ताः** = ती ब्राह्मणीहरूलाई | बुद्धिवृत्तिको साक्षीस्वरूप | पार्दै |
| **विज्ञाय** = बुझेर | श्रीकृष्णले | **प्राह** = भन्नुभयो |

**वाक्यार्थ–** (पति, बन्धुबान्धव आदिले रोक्दा-रोक्दै पनि) विषय सम्बन्धी सम्पूर्ण इच्छालाई त्यागेर आफ्नो दर्शनको लागि ब्राह्मणीहरू त्यहाँ आएको बुझेर सम्पूर्ण बुद्धिवृत्तिका साक्षी भगवान् श्रीकृष्णले मुस्कुराउँदै भन्न लाग्नुभयो।

**स्वागतं वो महाभागा आस्यतां करवाम किम्।**
**यन्नो दिदृक्षया प्राप्ता उपपन्नमिदं हि वः॥ २५॥**

| | | |
|---|---|---|
| पदार्थ– | **आस्यतां** = बस्नुहोस् | **प्राप्ताः** = आउनुभएको छ |
| **महाभागाः** = हे परमभाग्यवती | **किम् करवाम** = के गरौँ | **हि** = निश्चय नै |
| ब्राह्मणीहरू | **यत्** = किनभने (तपाईंहरू) | **वः** = तपाईंहरूका लागि |
| **वः** = तपाईंहरूलाई | **नः** = हाम्रो | **इदं** = यो कुरा |
| **स्वागतं** = स्वागत छ | **दिदृक्षया** = दर्शन गर्ने इच्छाले | **उपपन्नम्** = युक्त नै छ |

**वाक्यार्थ–** हे परमभाग्यवती ब्राह्मणीहरू ! तपाईंहरूलाई स्वागत छ। बस्नुहोस्, स्वागतका लागि हामी के गरौँ ? तपाईंहरू हाम्रो दर्शनका लागि आउनुभएको छ, त्यसैले तपाईंहरूलाई स्वागत गर्नु उचित छ।

**नन्वद्धा मयि कुर्वन्ति कुशलाः स्वार्थदर्शिनः।**
**अहैतुक्यव्यवहितां भक्तिमात्मप्रिये यथा॥ २६॥**

| | | |
|---|---|---|
| पदार्थ– | **अद्धा** = साक्षात् | छल, कपट आदि व्यवधानले |
| **ननु** = निश्चय नै | **मयि** = ममा | रहित |
| **स्वार्थदर्शिनः** = परमार्थलाई | **आत्मप्रिये यथा** = अत्यन्त | **भक्तिम्** = भक्ति |
| बुझेका | प्रियतम वस्तुमा झैँ | **कुर्वन्ति** = गर्दछन् |
| **कुशलाः** = विवेकीहरू | **अहैतुक्यव्यवहितां** = कामना र | |

**वाक्यार्थ–** परमार्थलाई बुझेका विवेकीहरूले अतिशय प्रियवस्तुमा झैँ ममा पनि कामना एवं छल, कपट आदि व्यवधानले रहित भक्ति गर्दछन्।

**प्राणबुद्धिमनःस्वात्मदारापत्यधनादयः।**
**यत्सम्पर्कात् प्रिया आसंस्ततः को न्वपरः प्रियः॥ २७॥**

| | | |
|---|---|---|
| पदार्थ– | **यत्सम्पर्कात्** = जुन आत्माको | सम्पर्कले |

**प्राणबुद्धिमनःस्वात्मदारापत्य-धनादयः** = प्राण, बुद्धि, मन, आफन्त, शरीर, स्त्री, छोरा र धन आदि
**प्रियाः** = प्यारा
**आसन्** = थिए
**ततः** = त्यस आत्मादेखि
**अपरः** = अर्को
**को नु** = कुन चाहिँ
**प्रियः** = प्यारो होला

**वाक्यार्थ–** प्राण, बुद्धि, मन, आफन्त, शरीर, स्त्री, छोरा र धन आदि जुन आत्माको सम्बन्धले गर्दा प्यारा हुन्छन्, त्यस्तो आत्मालाई त्यागेर अर्को कुन चिज वा को व्यक्ति प्यारो होला ?

**तद् यात देवयजनं पतयो वो द्विजातयः ।**
**स्वसत्रं पारयिष्यन्ति युष्माभिर्गृहमेधिनः ॥ २८ ॥**

**पदार्थ–**
**तत्** = त्यसैले अब तपाईंहरू
**देवयजनं** = देवपूजामा
**यात** = जानुहोस् (किनभने)
**वः** = तपाईंहरूका
**पतयः** = पतिहरू
**गृहमेधिनः** = गृहस्थ
**द्विजातयः** = ब्राह्मणहरू हुन्
**युष्माभिः** = तपाईंहरूद्वारा
**स्वसत्रं** = आफूले सुरु गरेको यज्ञलाई
**पारयिष्यन्ति** = पूरा गर्नेछन्

**वाक्यार्थ–** हे ब्राह्मणीहरू ! (तपाईंहरूले मेरो दर्शन गर्नुभयो)। अब देवपूजामा जानुहोस्। तपाईंहरूका पति गृहस्थ ब्राह्मणहरू हुन्। (पत्नीविना यज्ञ पूर्ण हुँदैन) त्यसैले तपाईंहरूलाई साथमा राखेर उनीहरूले यज्ञ समापन गर्नेछन्।

**पत्न्य ऊचुः** (ब्राह्मणपत्नीहरूले भने)

**मैवं विभोऽर्हति भवान् गदितुं नृशंसं**
**सत्यं कुरुष्व निगमं तव पादमूलम् ।**
**प्राप्ता वयं तुलसिदाम पदावसृष्टं**
**केशैर्निवोढुमतिलङ्घ्य समस्तबन्धून् ॥ २९ ॥**

**पदार्थ–**
**विभो** = हे व्यापक प्रभु
**भवान्** = हजुर
**एवं** = यस्तो
**नृशंसं** = कठोर वाणी
**गदितुं** = बोल्न
**मा अर्हति** = योग्य हुनुहुन्न
**निगमं** = आफ्नो प्रतिज्ञालाई ('न च पुनरावर्तते' 'न मे भक्तः प्रणश्यति' आदि भनेर गरेको)
**सत्यं** = सत्य
**कुरुष्व** = गराउनुहोस्
**वयं** = हामीहरू
**समस्तबन्धून्** = सारा बन्धुबान्धवहरूलाई
**अतिलङ्घ्य** = त्यागेर
**केशैः** = आफ्नो केशले
**पदावसृष्टं** = हजुरको चरणकमलबाट खसेको
**तुलसिदाम** = तुलसीदललाई
**निवोढुम्** = धारण गर्नको लागि
**तव** = हजुरको
**पदमूलम्** = चरणकमलमा
**प्राप्ता** = आएका हौँ

**वाक्यार्थ–** हे सर्वव्यापक प्रभु ! हजुर यस्तो कठोर वाणी नबोल्नुहोस्। आफ्नो प्रतिज्ञालाई ('न च पुनरावर्तते' 'न मे भक्तः प्रणश्यति' आदि भनेर गरेको) सत्य बनाउनुहोस्। हामीहरू सारा बन्धुबान्धवहरूलाई त्यागेर हजुरको चरणबाट खसेको तुलसीपत्रलाई आफ्नो कपालमा धारण गर्नका लागि हजुरको यो चरणकमलको शरणमा आएका हौँ।

**गृह्णन्ति नो न पतयः पितरौ सुता वा**
**न भ्रातृबन्धुसुहृदः कुत एव चान्ये।**
**तस्माद् भवत्प्रपदयोः पतितात्मनां नो**
**नान्या भवेद् गतिररिन्दम तद् विधेहि ॥ ३० ॥**

पदार्थ–
**अरिन्दम** = हे शत्रुनाशक प्रभु
**नः** = हामीहरूलाई
**पतयः** = पतिहरूले
**पितरौ** = माता-पिताहरूले
**सुताः** = छोराहरूले र
**भ्रातृबन्धुसुहृदः वा** = अथवा भाइ, बन्धु र साथीहरूले पनि
**न गृह्णन्ति** = स्वीकार गर्दैनन्
**अन्ये च** = अरूले
**कुतः एव** = कताबाट स्वीकार गर्लान् र
**तस्मात्** = त्यसैले
**भवत्प्रपदयोः** = हजुरको चरणकमलको अगाडि
**पतितात्मनां** = शरणागत भएका
**नः** = हामीहरूको
**अन्या** = अरू कुनै
**गतिः** = बाटो (उपाय)
**न भवेत्** = छैन
**तत्** = त्यसैले (हाम्रो लागि कुनै व्यवस्था)
**विधेहि** = गर्नुहोस्

**वाक्यार्थ–** हे शत्रुनाशक प्रभु ! हामीहरूलाई अब पति, माता-पिता, छोरा, भाइ, बन्धु र साथीहरूले पनि स्वीकार गर्नेछैनन् भने अरूले त स्विकार्ने कुरै भएन। त्यसैले हजुरको शरणमा परेका हामीहरूको अरू कुनै गति छैन, केवल हजुर नै गति हुनुहुन्छ। त्यसैले हाम्रो लागि कुनै व्यवस्था गर्नुहोस्।

**विवरण–** यस प्रसङ्गमा ब्राह्मणपत्नीहरूले हामीलाई नछाड्नुहोस् भनी श्रीकृष्णसँग प्रार्थना गरेका छन्। ती सबै ब्राह्मणपत्नीहरू समुद्रमा गई नदीहरू मिलेझैँ श्रीकृष्णमा गई मिल्ने भावले त्यहाँ आएका थिए। त्यसैले तिनीहरू आफ्ना पति, भाइ, छोरा आदिको निषेधलाई पनि तिरस्कार गरी त्यहाँ आइपुगेका हुन्। भगवान्ले फेरि त्यही व्यवहारमा फर्केर जाऊ भनी बताउनुहुँदा उनीहरूलाई ज्यादै कष्ट भयो। एकातिर प्रियतमको विरह अर्कोतिर छोडिसकेको घरपरिवारमा फेरि फर्किनुपर्दाको सङ्कोच अरु ती बन्धुरूबाट हुन सक्ने तिरस्कार या अस्वीकार आदि सबै सम्झी तिनको हृदयमा अपार पीडा भयो। उनीहरूले आफ्नो मनभित्रको वेदना बुझिदिनका लागि श्रीकृष्णलाई **विभो** अर्थात् हे सर्वव्यापक परमात्मा ! भनी सम्बोधन गरेका छन्। आफ्ना प्रियतमले यस्तो कठोर वचन बोल्न नसुहाउने उनीहरूको भनाइ छ। **निगमं** अर्थात् आफ्नो प्रतिज्ञालाई सम्झिन पनि उनीहरूले आग्रह गरेका छन्। भगवान्ले गीता (९/३१)मा आफ्ना भक्तहरूको कहिल्यै नाश नहुने बताउनुभएको छ– **न मे भक्तः प्रणश्यति**। जो परमात्मामा पुग्छ, त्यो फेरि

जन्ममरणको चक्करमा पर्दैन भनी उपनिषद्मा बताइएको छ– **न च पुनरावर्तते** (छान्दोग्योपनिषद्, ८/१५/१)। भगवान्कहाँ पुगिसकेको प्राणी पनि फेरि कहीँ दुःखमय संसारमा फर्किन्छ र? यदि यस्तो भयो भने त ती अनेक शास्त्रहरूमा परमात्मा स्वयंले दिनुभएका आश्वासन सबै व्यर्थ हुन्छन्। त्यसैले ब्राह्मणपत्नीहरूले भगवान्लाई उहाँका प्रतिज्ञाहरू सम्झाएका छन्।

अर्को श्लोकमा ब्राह्मणपत्नीहरूले आफ्नो समस्या बताएका छन्। तपाईंले फर्काएर घर गए पनि हामी समाजबाट बहिष्कृत हुनेछौँ। एकपटक टुटिसकेको मर्यादालाई फेरि जोड्न सकिँदैन। हामीले परिवारको मर्यादा र नियम सबैलाई त्यागेर आएको हुनाले तिनले हामीलाई स्वीकार गर्नेछैनन्। हे सर्वव्यापक प्रभु ! जो एकपटक हजुरको चरणमा परिसक्यो, त्यो व्यक्ति फेरि अरूको शरणमा कसरी जान सक्छ र? परमात्मा सबैका अन्तिम गति हुनुहुन्छ। कहीँ कतैबाट शरण नपाएकाहरू त्यही तत्त्वमा आश्रय पाउँछन्, तर परमात्मामा पनि आश्रय नपाई फेरि संसारमैं आश्रय खोज्न आउनुपर्दा भक्तिको र स्वयं परमात्माको मर्यादा पनि त नष्ट हुन्छ भनी ब्राह्मणपत्नीहरू भन्दछन्। वल्लभाचार्यका अनुसार यज्ञपत्नीहरूको भनाइबाट बरु आफूलाई रुख–बिरुवा बनाइदिनुहोस्, अदृश्य गराइदिनुहोस्, आफैँमा लीन गराइदिनुहोस् या हजुर सर्वसमर्थ भएकाले अरू अनेकौँ उपायहरू गर्नुहोस्, तर निष्ठुर भई हामीलाई फेरि त्यही संसारकै आगोमा नधकेल्नुहोस् भन्ने भाव प्रकट भएको छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**पतयो नाभ्यसूयेरन् पितृभ्रातृसुतादयः।**

**लोकाश्च वो मयोपेता देवा अप्यनुमन्वते॥ ३१॥**

**पदार्थ–**
**मया** = मसँग
**उपेताः** = (भक्तका रूपमा) आएका
**वः** = तपाईंहरूलाई
**पतयः** = पतिहरूले र
**पितृभ्रातृसुतादयः** = माता–पिता, दाजु–भाइ र छोरा आदिहरूले
**लोकाः च** = अरू व्यक्तिहरूले पनि
**न अभ्यसूयेरन्** = तिरस्कार गर्ने छैनन्
**देवाः अपि** = देवताहरूले पनि
**अनुमन्वते** = अनुमोदन गरिरहेका छन्

**वाक्यार्थ–** हे ब्राह्मणपत्नीहरू ! मेरो शरणमा आउनुभएका तपाईंहरूलाई माता–पिता, दाजु–भाइ, छोरा आदिहरूले र अरू संसारका कुनै पनि व्यक्तिले तिरस्कार गर्नेछैनन्। यो कुरो देवताहरूले पनि अनुमोदन गरिरहेका छन्।

**न प्रीतयेऽनुरागाय ह्यङ्गसङ्गो नृणामिह।**

**तन्मनो मयि युञ्जाना अचिरान्मामवाप्स्यथ॥ ३२॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**इह** = यो संसारमा
**अङ्गसङ्गः** = मेरो शरीरको साथ पाउनु मात्र
**नृणाम्** = मानिसका लागि

**प्रीतये** = हर्ष र
**अनुरागाय** = प्रेमका निमित्त
**न** = हुँदैन
**तत्** = त्यसैले (आफ्नै घरमा बसेर पनि)
**मनः** = मनलाई
**मयि** = ममा
**युञ्जानाः** = लगाउँदै (तपाईंहरूले)
**अचिरात्** = चाँडै नै
**माम्** = मलाई
**अवाप्स्यथ** = प्राप्त गर्नुहुनेछ

**वाक्यार्थ–** हे ब्राह्मणीहरू ! यो संसारमा मेरो शरीरको साथ पाउनु मात्र मानिसका लागि हर्ष र प्रेमवृद्धिको कारण हुँदैन, त्यसैले आफ्नै घरमा बसेर पनि ममा मन लगाउनुभयो भने चाँडै नै मलाई प्राप्त गर्नुहुनेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्ता द्विजपत्न्यस्ता यज्ञवाटं पुनर्गताः।**
**ते चानसूयवः स्वाभिः स्त्रीभिः सत्रमपारयन्॥ ३३॥**

**पदार्थ–**
**इति उक्ताः** = (भगवान्द्वारा) यति भनेर सम्झाइएका
**ताः** = ती
**द्विजपत्न्यः** = ब्राह्मणपत्नीहरू
**पुनः** = फेरि
**यज्ञवाटं** = यज्ञ गरेको स्थानमा
**गताः** = गए
**ते च** = ती ब्राह्मणहरूले पनि
**अनसूयवः** = (पत्नीहरूलाई) तिरस्कार नगरीकन
**स्वाभिः** = आफ्ना
**स्त्रीभिः** = स्त्रीहरूसँग रहेर
**सत्रं** = यज्ञलाई
**अपारयन्** = समापन गरे

**वाक्यार्थ–** भगवान्ले यति भनेपछि ती ब्राह्मणीहरू फेरि यज्ञ गरेको ठाउँमा गए। ब्राह्मणहरूले पनि ब्राह्मणीहरूलाई तिरस्कार नगरीकन उनीहरूकै साथमा यज्ञको समापन गरे।

**तत्रैका विधृता भर्त्रा भगवन्तं यथाश्रुतम्।**
**हृदोपगुह्य विजहौ देहं कर्मानुबन्धनम्॥ ३४॥**

**पदार्थ–**
**तत्र** = त्यो यज्ञशालामा
**भर्त्रा** = पतिद्वारा
**विधृता** = बलपूर्वक रोकिएकी
**एका** = एउटी ब्राह्मणी
**यथाश्रुतम्** = सुने अनुसारको
**भगवन्तं** = भगवान्‌को स्वरूपलाई
**हृदा** = हृदयमा
**उपगुह्य** = राखेर
**कर्मानुबन्धनम्** = कर्मबन्धनले युक्त भएको
**देहं** = शरीरलाई
**विजहौ** = त्यागिन् (भगवान्‌लाई प्राप्त गरिन्)

**वाक्यार्थ–** त्यो यज्ञशालामा आफ्ना पतिद्वारा (श्रीकृष्णको दर्शनका लागि जानबाट) जबर्जस्ती रोकिएकी एउटी ब्राह्मणीले आफूले सुने अनुसारको भगवान्‌को रूपलाई हृदयमा ध्यान गरेर तत्काल कर्मबन्धनयुक्त शरीरलाई त्यागिन् (र भगवान्‌लाई प्राप्त गरिन्)।

**भगवानपि गोविन्दस्तेनैवान्नेन गोपकान्।**
**चतुर्विधेनाशयित्वा स्वयं च बुभुजे प्रभुः॥ ३५॥**

**पदार्थ–**
**प्रभुः** = सर्वसमर्थ
**भगवान्** = भगवान्
**गोविन्दः अपि** = गोविन्दले पनि
**तेन** = ती ब्राह्मणीहरूद्वारा दिइएको
**चतुर्विधेन** = चार प्रकारको
**अन्नेन एव** = अन्नले नै
**गोपकान्** = गोपहरूलाई
**अशयित्वा** = खुवाएर
**स्वयं च** = आफूले पनि
**बुभुजे** = भोजन गर्नुभयो

**वाक्यार्थ–** सर्वसमर्थ भगवान् गोविन्दले पनि ती ब्राह्मणीहरूले ल्याएको चार प्रकारका अन्न गोपहरूलाई खुवाएर स्वयं आफैंले पनि भोजन गर्नुभयो।

**एवं लीलानरवपुर्नृलोकमनुशीलयन्।**
**रेमे गोगोपगोपीनां रमयन् रूपवाक्कृतैः॥ ३६॥**

**पदार्थ–**
**लीलानरवपुः** = लीलाका लागि मनुष्यशरीर लिनुभएका श्रीकृष्णले
**एवं** = यसरी
**नृलोकम्** = मनुष्यव्यवहारलाई
**अनुशीलयन्** = अनुकरण गर्दै
**रूपवाक्कृतैः** = रूप, वाणी र चरित्रहरूद्वारा
**गोगोपगोपीनां** = गाई, गोप र गोपिनीहरूलाई
**रमयन्** = आनन्दित पार्दै
**रेमे** = आफू पनि रमाउनुभयो

**वाक्यार्थ–** लीलाका लागि मनुष्यशरीर धारण गर्नुभएका भगवान् श्रीकृष्णले पनि यसप्रकार मनुष्यव्यवहारको अनुकरण गर्दै रूप, वाणी र चरित्रहरूद्वारा गाई, गोप र गोपिनीहरूलाई आनन्दित पार्दै आफू पनि रमाउनुभयो।

**अथानुस्मृत्य विप्रास्ते अन्वतप्यन् कृतागसः।**
**यद्विश्वेश्वरयोर्याच्ञामहन्म नृविडम्बयोः॥ ३७॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**नृविडम्बयोः** = मनुष्यरूपमा आउनुभएका
**विश्वेश्वरयोः** = जगदीश्वर श्रीकृष्ण र बलरामको
**याच्ञाम्** = याचनालाई
**अहन्म** = हनन (तिरस्कार) गर्‍यौं
**यत्** = यसकारण
**कृतागसः** = हामी अपराधी हौं (भन्ने कुरा)
**अनुस्मृत्य** = विचार गर्दै
**ते** = ती
**विप्राः** = ब्राह्मणहरूले
**अन्वतप्यन्** = पश्चात्ताप गरे

**वाक्यार्थ–** त्यसपछि मनुष्यको रूपमा आउनुभएका जगदीश्वर श्रीकृष्ण र बलरामको याचनालाई तिरस्कार गरेर हामीहरूले अपराध गर्‍यौं भन्ने विचार गर्दै ब्राह्मणहरूले पश्चात्ताप गरे।

**दृष्ट्वा स्त्रीणां भगवति कृष्णे भक्तिमलौकिकीम्।**
**आत्मानं च तया हीनमनुतप्ता व्यगर्हयन्॥ ३८॥**

पदार्थ–
**स्त्रीणां** = आफ्ना पत्नीहरूको
**भगवति** = भगवान्
**कृष्णे** = श्रीकृष्णमा
**अलौकिकीम्** = अलौकिक
**भक्तिम्** = भक्तिलाई
**दृष्ट्वा** = देखेर
**आत्मानं च** = आफूलाई भने
**तया** = त्यस्तो भक्तिले
**हीनं** = रहित भएको देखेर
**अनुतप्ताः** = सन्तप्त भएका ती ब्राह्मणहरूले
**व्यगर्हयन्** = (आफूलाई) निन्दा गरे

**वाक्यार्थ–** आफ्ना पत्नीहरूको भगवान् श्रीकृष्णमा अलौकिक भक्ति भएको र आफू चाहिँ त्यस भक्तिले रहित भएको देखेर ती ब्राह्मणहरू पश्चात्ताप गर्दै आफ्नै निन्दा गर्न थाले।

**धिग् जन्म नस्त्रिवृद् विद्यां धिग् व्रतं धिग् बहुज्ञताम्।**
**धिक् कुलं धिक् क्रियादाक्ष्यं विमुखा ये त्वधोक्षजे॥ ३९॥**

पदार्थ–
**नः** = हामीहरूको
**त्रिवृत्** = तीनै प्रकारको (शरीर ग्रहण, गायत्री ग्रहण, वेददीक्षा ग्रहण)
**जन्म** = जन्मलाई
**धिक्** = धिक्कार छ
**विद्यां** = (हाम्रो) विद्यालाई
**धिक्** = धिक्कार छ
**व्रतं** = ब्रह्मचर्यादि व्रत र
**बहुज्ञताम्** = धेरै जान्नुलाई पनि
**धिक्** = धिक्कार छ (त्यसै गरी)
**कुलं** = उच्च कुललाई
**धिक्** = धिक्कार छ
**क्रियादाक्ष्यं** = (हाम्रो यज्ञादि) कर्म गर्ने चातुर्यलाई पनि
**धिक्** = धिक्कार छ
**ये तु** = जो हामीहरू
**अधोक्षजे** = परमतत्त्वरूप भगवान्मा
**विमुखाः** = विमुख भएका छौँ

**वाक्यार्थ–** हामीहरूको शरीर ग्रहण, गायत्री ग्रहण र दीक्षा ग्रहण समेतबाट भएको तीन प्रकारको जन्मलाई धिक्कार छ, हामीले पढेको विद्यालाई धिक्कार छ साथै हामीले आचरण गरेको ब्रह्मचर्यादि व्रत, हाम्रो धेरै जान्नेपन, हाम्रो उच्चकुल र यज्ञ आदि कर्म गर्ने हाम्रो चातुर्यलाई पनि धिक्कार छ, किनभने हामीहरू भगवान्बाट विमुख भएका छौँ।

**नूनं भगवतो माया योगिनामपि मोहिनी।**
**यद् वयं गुरवो नृणां स्वार्थे मुह्यामहे द्विजाः॥ ४०॥**

पदार्थ–
**नूनं** = निश्चय नै
**भगवतः** = भगवान्को
**माया** = माया
**योगिनाम् अपि** = योगीहरूलाई पनि
**मोहिनी** = मोहमा पार्ने खालकी छे
**यत्** = जसबाट
**नृणां** = मानिसहरूका
**गुरवः** = गुरुस्वरूप
**वयं** = हामी
**द्विजाः** = ब्राह्मणहरू पनि
**स्वार्थे** = आफ्नै स्वार्थमा
**मुह्यामहे** = भुलिरहेका छौँ

**वाक्यार्थ–** निश्चय नै भगवान्को माया योगीहरूलाई पनि मोहमा पार्ने खालको छ। त्यसैको कारणले संसारका गुरु बनेका हामी ब्राह्मणहरू पनि स्वार्थमा भुलिरहेका छौँ।

**अहो पश्यत नारीणामपि कृष्णे जगद्गुरौ ।**
**दुरन्तभावं योऽविध्यन्मृत्युपाशान् गृहाभिधान् ॥ ४१ ॥**

पदार्थ–
**अहो** = आश्चर्य छ
**नारीणाम् अपि** = यी नारीहरूको पनि
**जगद्गुरौ** = संसारका गुरु
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**दुरन्तभावं** = अगाध भक्तिभावलाई
**पश्यत** = हेर्नुहोस्
**यः** = जो भक्तिभावले
**गृहाभिधान्** = गृहस्थहरूको
**मृत्युपाशान्** = मृत्युरूपी पाशलाई
**अविध्यत्** = काट्यो

**वाक्यार्थ–** अहो ! आश्चर्य छ, यी नारी भएर पनि यिनीहरूको भगवान् श्रीकृष्णमा अगाध भक्तिभाव हेर त। यिनीहरूमा रहेको भक्तिभावले गृहस्थहरूको मृत्युरूपी बन्धनलाई समेत काटिसकेको छ।

**नासां द्विजातिसंस्कारो न निवासो गुरावपि ।**
**न तपो नात्ममीमांसा न शौचं न क्रियाः शुभाः ॥ ४२ ॥**
**अथापि ह्युत्तमश्लोके कृष्णे योगेश्वरेश्वरे ।**
**भक्तिर्दृढा न चास्माकं संस्कारादिमतामपि ॥ ४३ ॥**

पदार्थ–
**आसां** = यी स्त्रीहरूको
**द्विजातिसंस्कारः** = द्विजातिले गर्नुपर्ने (व्रतबन्धादि) संस्कार
**न** = छैन
**गुरौ** = गुरुकुलमा
**निवासः अपि** = निवास पनि
**न** = छैन
**तपः** = तपस्या
**न** = छैन
**आत्ममीमांसा** = आत्मज्ञानको चर्चा पनि
**न** = छैन
**शौचं** = पवित्रता
**न** = छैन
**शुभाः क्रियाः** = शुभ कर्महरू
**न** = छैन
**अथ अपि** = तैपनि
**हि** = निश्चय नै
**उत्तमश्लोके** = पवित्र कीर्तिवाला
**योगेश्वरेश्वरे** = योगेश्वरहरूमा श्रेष्ठ
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**दृढा** = निश्चल
**भक्तिः** = भक्ति छ
**संस्कारादिमताम् अपि** = संस्कार आदिले युक्त
**अस्माकं च** = हामीहरूमा समेत
**न** = त्यस्तो भक्ति छैन

**वाक्यार्थ–** यी स्त्रीहरूमा न व्रतबन्धादि संस्कार छ, न गुरुकुलमा बसेर प्राप्त हुने गुरुमर्यादाको शिक्षा छ, न कुनै तपस्या छ, न आत्मज्ञानको चर्चा वा पवित्रता छ, न त अरू कुनै शुभ कर्महरू नै छन्, तथापि अनन्तकीर्तिवाला योगेश्वर भगवान् श्रीकृष्णमा यिनीहरूको निश्चल भक्ति छ, परन्तु सारा संस्कारादिसम्पन्न हामीहरूमा भने त्यस्तो भक्तिभाव छैन।

**ननु स्वार्थविमूढानां प्रमत्तानां गृहेहया।**
**अहो नः स्मारयामास गोपवाक्यैः सतां गतिः॥ ४४॥**

**पदार्थ–**
**अहो** = अहो
**ननु** = निश्चय नै
**सतां** = सज्जनहरूका
**गतिः** = गतिस्वरूप भगवान्ले
**गृहेहया** = घरको कामधन्धाले
**प्रमत्तानां** = असावधान भएका
**स्वार्थविमूढानां** = स्वार्थले गर्दा मूर्ख भइसकेका
**नः** = हामीहरूलाई
**गोपवाक्यैः** = गोपहरूको भनाइद्वारा
**स्मारयामास** = (आफ्नो कर्तव्यको) सम्झना गराइदिनुभयो

**वाक्यार्थ–** अहो ! सज्जनहरूका गतिस्वरूप भगवान्ले घरको कामधन्धाले असावधान भएका र स्वार्थले गर्दा मूर्ख भइसकेका हामीहरूकहाँ गोपहरू पठाएर उनीहरूको भनाइद्वारा कर्तव्य सम्झाउनुभयो।

**अन्यथा पूर्णकामस्य कैवल्याद्याशिषां पतेः।**
**ईशितव्यैः किमस्माभिरीशस्यैतद् विडम्बनम्॥ ४५॥**

**पदार्थ–**
**अन्यथा** = नत्र भने
**पूर्णकामस्य** = सम्पूर्ण कामनाले पूर्ण
**कैवल्याद्याशिषां** = मोक्षसम्मका सारा कुराहरूको
**पतेः** = मालिक भगवान्को
**ईशितव्यैः** = उहाँकै सृष्टि अन्तर्गतका
**अस्माभिः** = हामी क्षुद्र जीवहरूद्वारा
**किम्** = के प्रयोजन थियो
**ईशस्य** = सर्वसमर्थका लागि
**एतत्** = यो भोजन माग्नु त
**विडम्बनम्** = बहाना मात्र थियो

**वाक्यार्थ–** पूर्णकाम र मोक्षसम्म सारा कुरा प्रदान गर्न सक्ने ईश्वरलाई हामीजस्ता क्षुद्र जीवसँग के प्रयोजन थियो र ? सर्वसमर्थ प्रभुले खानेकुरा माग्नु त केवल बहाना मात्र थियो।

**हित्वान्यान् भजते यं श्रीः पादस्पर्शाशयासकृत्।**
**स्वात्मदोषापवर्गेण तद्याच्ञा जनमोहिनी॥ ४६॥**

**पदार्थ–**
**श्रीः** = लक्ष्मीजी
**अन्यान्** = अरूलाई
**हित्वा** = छाडेर र
**स्वात्मदोषापवर्गेण** = आफ्ना दोषहरू (चञ्चलता आदि)लाई परित्याग गरी
**सकृत्** = एक पटक
**पादस्पर्शाशया** = केवल चरणस्पर्शको आशाले
**यं** = जुन भगवान्लाई
**भजते** = सेवा गर्नुहुन्छ भने
**तद्याच्ञा** = त्यो याचना त
**जनमोहिनी** = केवल मानिसलाई मोहित पार्ने खेल मात्र हो

**वाक्यार्थ–** लक्ष्मीजी त अरूलाई छाडेर केवल भगवान्को चरणस्पर्शको आशाले चञ्चलता आदि आफ्ना दोषहरूलाई त्यागी भगवान्को सेवा गर्नुहुन्छ भने त्यस्ता भगवान्लाई हामीहरूसँग मागिरहनुपर्छ ? यो त केवल हामीहरू जस्तालाई मोहमा पार्ने खेल मात्र हो।

**देशः कालः पृथग्द्रव्यं मन्त्रतन्त्रर्त्विजोऽग्नयः ।**
**देवता यजमानश्च क्रतुर्धर्मश्च यन्मयः ॥ ४७ ॥**

**द्रष्टव्य**– यो श्लोक यही अध्यायको दशौँ श्लोकसँग पूरै मिल्छ। यसको पदार्थ र वाक्यार्थ सोही ठाउँमा हेर्नुहोला।

**स एषः भगवान् साक्षाद् विष्णुर्योगेश्वरेश्वरः ।**
**जातो यदुष्वित्यशृण्म ह्यपि मूढा न विद्महे ॥ ४८ ॥**

**पदार्थ**–
**सः एषः** = त्यस्ता उहाँ
**साक्षात् भगवान्** = साक्षात् ऐश्वर्यसम्पन्न
**योगेश्वरेश्वरः** = योगेश्वरश्रेष्ठ
**विष्णुः** = नारायण नै
**यदुषु** = यदुकुलमा
**जातः इति** = जन्मिनुभएको हो भन्ने कुरा
**हि** = निश्चय नै
**अशृण्म अपि** = सुन्यौँ पनि (तैपनि)
**मूढाः** = हामी मूर्खहरूले
**न विद्महे** = चिन्न सकेनौँ

**वाक्यार्थ**– साक्षात् भगवान् नारायण नै यदुकुलमा जन्मनुभएको छ भन्ने कुरा सुन्दासुन्दै पनि हामी मूर्खहरूले उहाँलाई चिन्न सकेनौँ।

**अहो वयं धन्यतमा येषां नस्तादृशीः स्त्रियः ।**
**भक्त्या यासां मतिर्जाता अस्माकं निश्चला हरौ ॥ ४९ ॥**

**पदार्थ**–
**अहो** = अहो
**वयं** = हामीहरू
**धन्यतमाः** = अति धन्य छौँ, किनभने
**येषां** = जो
**नः** = हामीहरूका
**स्त्रियः** = पत्नीहरू
**तादृशीः** = त्यस्ता (भगवद्भक्तिसम्पन्न) छन्
**यासां** = जो पत्नीहरूको
**भक्त्या** = भक्तिद्वारा
**अस्माकं** = हामीहरूको
**हरौ** = भगवान् श्रीहरिमा
**निश्चला** = चञ्चलतारहित
**मतिः** = चित्त
**जाता** = भयो

**वाक्यार्थ**– अहो ! हामी अति धन्य छौँ किनभने हाम्रा पत्नीहरूको भगवान्मा दृढ भक्ति छ, जसको कारणले गर्दा हामीहरूको चित्त पनि निश्चल भएर भगवान्मा लाग्न गयो।

**विवरण**– यस प्रसङ्गमा सबै याज्ञिक ब्राह्मणहरूले साक्षात् परमात्मालाई दर्शन गर्ने अवसर पाउँदा पनि आफूले त्यसलाई गुमाएकोमा पश्चात्ताप गरेका छन्। आफूहरूले उत्तम जन्म, वेदाध्ययन, तपस्या, कर्ममा निपुणता सबै पाएर पनि ती सबैका परम फल परमात्मालाई चिन्न नसकेकोमा उनीहरूले आफैँलाई र ती सबै साधनहरूलाई धिक्कारेका छन्। उनीहरू भन्छन्– परमात्माले त गोपहरूको माध्यमले हामीलाई सम्झाउनुभएको थियो। आफैँ थाहा पाएर शरणमा जानुपर्नेमा सम्झाउँदा पनि हामी ठुला ज्ञानी बनेर त्यहाँ गएनौँ भनी तिनले पश्चात्ताप गरेका छन्। आफ्ना

पत्नीहरूले शास्त्रज्ञान विना पनि स्वाभाविक श्रद्धा र समर्पणभावका कारणले परमात्मालाई चिनेको र उहाँमा समर्पित भएको हुँदा उनीहरू असाध्यै प्रसन्न भएका छन्। त्यस्ता पत्नी पाएकोमा उनीहरूले आफू धन्य भएको अनुभव गरेका छन्।

यस प्रसङ्गबाट भगवान्ले ब्राह्मणहरूको समूहलाई कसरी आफ्नो अनुकूल र वशवर्ती बनाउनुभएको छ भन्ने थाहा हुन्छ। यहाँ ब्राह्मणहरूले भगवान् श्रीकृष्णको ईश्वरीय सामर्थ्य बुझेकाले आफ्ना पत्नीहरू आफैँलाई छाडी श्रीकृष्णको शरणमा जाँदा पनि आफूलाई धन्य अनुभव गरेका छन्। शास्त्रका व्याख्याता ब्राह्मणहरूलाई आफ्नो ईश्वरीयता बुझाइदिएपछि तिनले हरेक लीलालाई त्यही अनुसार व्याख्या गर्नेछन् र सामान्य मानिसहरूलाई उनीहरूले भड्काउने छैनन् भन्ने उद्देश्यले यो लीला गरिएको देखिन्छ।

**नमस्तुभ्यं भगवते कृष्णायाकुण्ठमेधसे।**
**यन्मायामोहितधियो भ्रमामः कर्मवर्त्मसु ॥ ५० ॥**

**पदार्थ–**
**अकुण्ठमेधसे** = नित्य ज्ञानवाला
**भगवते** = सर्वैश्वर्यसम्पन्न
**कृष्णाय** = श्रीकृष्ण
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार गर्दछौँ
**यन्मायामोहितधियः** = जसको मायाले बुद्धि मोहित भएका हामीहरू
**कर्मवर्त्मसु** = कर्ममार्गमा
**भ्रमामः** = घुमिरहेका छौँ

**वाक्यार्थ–** नित्यज्ञानस्वरूप सबै ऐश्वर्यसम्पन्न हजुर श्रीकृष्ण प्रभुलाई नमस्कार छ। जुन प्रभुको मायाले मोहित भएर हामीहरू कर्ममार्गमा घुमिरहेका छौँ।

**स वै न आद्यः पुरुषः स्वमायामोहितात्मनाम्।**
**अविज्ञातानुभावानां क्षन्तुमर्हत्यतिक्रमम्॥ ५१ ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**सः** = ती
**आद्यः** = परम
**पुरुषः** = पुरुष नारायणले
**स्वमायामोहितात्मनाम्** = आफ्नै मायाले मोहित भएका र
**अविज्ञातानुभावानां** = भगवत्प्रभावलाई नबुझेका
**नः** = हामीहरूको
**अतिक्रमम्** = अपराधलाई
**क्षन्तुम् अर्हति** = क्षमा गर्नुहुनेछ

**वाक्यार्थ–** आदिपुरुष भगवान् नारायणले पक्कै पनि मायाले मोहित भएका तथा भगवत्प्रभावलाई नबुझ्ने हामीहरूको अपराधलाई क्षमा गर्नुहुनेछ।

**इति स्वाघमनुस्मृत्य कृष्णे ते कृतहेलनाः।**
**दिदृक्षवोऽप्यच्युतयोः कंसाद् भीता न चाचलन्॥ ५२ ॥**

**पदार्थ–**
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**कृतहेलनाः** = तिरस्कार गरेका
**ते** = ती ब्राह्मणहरूले
**इति** = यसरी
**स्वाघम्** = आफ्नो अपराधलाई

**अनुस्मृत्य** = सम्झेर
**अच्युतयोः** = श्रीकृष्ण र बलरामको
**दिदृक्षवः अपि** = दर्शन गर्न चाहेका भए पनि
**कंसात्** = कंसबाट
**भीताः** = डराएर
**न अचलन्** = जान सकेनन्

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको तिरस्कार गरेका ती ब्राह्मणहरूले आफ्नो अपराधलाई सम्झेर फेरि श्रीकृष्ण र बलरामको दर्शन गर्ने चाहना राखे पनि कंसबाट डराएर दर्शन गर्न जान सकेनन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**यज्ञपत्न्युद्धरणं नाम त्रयोविंशोऽध्यायः ॥ २३ ॥**

# अथ चतुर्विंशोऽध्यायः

## इन्द्रयज्ञ निवारण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**भगवानपि तत्रैव बलदेवेन संयुतः।**

**अपश्यन्निवसन् गोपानिन्द्रयागकृतोद्यमान्॥ १॥**

**पदार्थ–**
**बलदेवेन** = बलरामले
**संयुतः** = सहित
**भगवान् अपि** = भगवान् श्रीकृष्ण पनि
**तत्र एव** = त्यहाँ गोकुलमा
**निवसन्** = बस्दै
**इन्द्रयागकृतोद्यमान्** = इन्द्रयज्ञको लागि तयारी गरिरहेका
**गोपान्** = गोपहरूलाई
**अपश्यत्** = देख्नुभयो

**वाक्यार्थ–** बलरामसहित श्रीकृष्णले गोकुलमा बस्दा-बस्दै गोपहरूले इन्द्रयज्ञको तयारी गरिरहेको देख्नुभयो।

**विवरण–** यस अध्यायमा भगवान्ले इन्द्रयाग रोकी गोवर्धनयाग चलाउनुभएको प्रसङ्गको वर्णन गरिएको छ। भगवान्ले देवराज इन्द्रको मदलाई नष्ट गर्न यो लीला गर्नुभएको हो। योभन्दा अघिल्लो अध्यायमा भगवान्ले ब्राह्मणहरूको गर्वलाई हटाउनुभएको थियो भने यो अध्यायमा उहाँले स्वर्गका देवताहरू र तिनमध्ये मुख्य देवराज इन्द्रको गर्वलाई हटाउनुभएको छ। यहाँ भगवान्ले व्रजमा अकस्मात् कुनै महोत्सव झैँ चल्न थालेको र बुझ्दै जाँदा पानी बर्साउने देवतालाई खुसी पार्न यज्ञ गरिएको थाहा पाई त्यसलाई युक्तिपूर्वक रोक्नुभएको छ। के भगवान्ले सात वर्षको हुँदासम्म यस विषयमा थाहा पाउनुभएको थिएन त भन्ने शङ्का उठाउँदै सुबोधिनीकारले **शनैः शनैर्निरोधं कर्तुं** अर्थात् बिस्तार-बिस्तार अरू साधनहरूबाट निरोध गर्नका लागि भगवान्ले बिस्तारै नै लीला गर्दै जानुहुन्छ भन्ने कुरा बताउनुभएको छ। भगवान्ले कसैलाई विशेषरूपमा थाहा नै नहुने र सबैलाई स्वाभाविक नै लाग्ने गरी तिनको मनलाई आफूतिर तान्नुहुन्छ। श्लोकमा आएको **निवसन्** यो शतृप्रत्ययान्त शब्दले भगवान्ले लामो समयसम्म चुपचाप हेरेरै बसिरहनुभएको भन्ने अर्थ बताउँछ।

जहाँ सबैका आत्मभूत श्रीहरिकै श्रवण, मनन आदि हुन्छन् भने त्यहाँ पृथक् पृथक् देवताहरूको आराधना गर्ने अन्य धर्महरू रहन सक्दैनन्। भगवान्सँग सम्बन्धित श्रवण आदि धर्मले त अन्य धर्म या अन्य निष्ठा हट्छन् भने जहाँ साक्षात् धर्मी परमात्मा नै रहनुभएको छ, त्यहाँ अरू देवताहरूको आराधना कसरी सम्भव होला र? तर व्रजमा यो सबै चलिरह्यो। यो सब कसरी सम्भव भयो भन्ने आश्चर्यभाव पनि यस श्लोकमा प्रकट भएको छ। भगवान्मा अनेक कल्याणगुणहरू छन्, उहाँमा अनन्त ऐश्वर्य र अखण्डकीर्ति छ। भगवान्ले दयालु भएर सहन गरे पनि उहाँका यी सबै सद्गुणहरूले अर्काको प्रसिद्धि र आराधनालाई अहिलेसम्म कसरी सहन गरे

होलान् ? यो देखी भगवान् पनि **अपश्यत्** अर्थात् हेरेको हेऱ्यै हुनुभयो, छक्क पर्नुभयो। भगवान्को हेराइ ज्ञानमय छ। यसकारण **अपश्यत्** यो पदबाट भगवान्ले इन्द्रयाग रोकी गोवर्धनपूजा चलाउने आफ्नो विचार नन्द आदिको हृदयमा स्थापित गराउनुभयो भन्ने पनि सूचित हुन्छ। नत्र एउटा सानो बालकले भनेको भरमा परम्पराबाट प्राप्त कर्मलाई व्रजवासीले छोड्न सम्भव थिएन। यसैले पहिले भगवान्ले आफ्नो शक्तिद्वारा आफ्नो विचारलाई नन्द आदिको हृदयमा स्थापित गराइदिनुभयो र त्यसपछि त्यही कुरा बताउँदा नन्द आदिले सहजै स्वीकार गरेका हुन् भन्ने बुझिन्छ।

**तदभिज्ञोऽपि भगवान् सर्वात्मा सर्वदर्शनः।**
**प्रश्रयावनतोऽपृच्छद् वृद्धान् नन्दपुरोगमान्॥ २॥**

**पदार्थ–**
**सर्वात्मा** = सर्वान्तर्यामी
**सर्वदर्शनः** = सर्वज्ञ
**भगवान्** = भगवान् श्रीकृष्णले
**तदभिज्ञः अपि** = त्यो (इन्द्रयागको तयारी गरेको) बुझेर पनि
**प्रश्रयावनतः** = विनयपूर्वक झुक्दै
**नन्दपुरोगमान्** = नन्द आदि
**वृद्धान्** = वृद्ध गोपहरूलाई
**अपृच्छत्** = सोध्नुभयो

**वाक्यार्थ–** सर्वान्तर्यामी र सर्वज्ञ भगवान् श्रीकृष्णले इन्द्रयागको विषयमा आफूलाई सबै जानकारी हुँदा हुँदै पनि नजाने झैं गरी विनयपूर्वक नन्द आदि वृद्ध गोपहरूलाई सोध्नुभयो।

**कथ्यतां मे पितः कोऽयं सम्भ्रमो व उपागतः।**
**किं फलं कस्य चोद्देशः केन वा साध्यते मखः॥ ३॥**

**पदार्थ–**
**पितः** = हे पिताजी
**वः** = हजुरहरूको
**अयं** = यो
**सम्भ्रमः** = हतार
**कः** = कुन चाहिँ
**उपागतः** = आयो
**मे** = मलाई
**कथ्यतां** = बताउनुहोस्
**मखः** = यो यज्ञ
**कस्य च** = कुन देवताको
**उद्देशः** = उद्देश्यले गर्न लागिएको हो र
**फलं** = यसको फल
**किं** = के हुन्छ
**केन वा** = कुन साधनहरूद्वारा
**साध्यते** = सिद्ध गरिन्छ

**वाक्यार्थ–** हे पिताजी ! हजुरहरू किन यो हतार गरिरहनुभएको छ ? यो यज्ञ कुन देवताको निमित्त गर्न लागिएको हो ? यसको फल के हो र यो यज्ञ सम्पादन गर्ने साधन कुन हो ?

**एतद् ब्रूहि महान् कामो मह्यं शुश्रूषवे पितः।**
**न हि गोप्यं हि साधूनां कृत्यं सर्वात्मनामिह॥ ४॥**

**पदार्थ–**
**पितः** = हे पिताजी
**महान् कामः** = ठुलो महोत्सवको चाहना गर्ने हजुरले
**शुश्रूषवे** = सुन्न चाहने
**मह्यं** = मलाई

**एतत्** = यी सबै कुरा
**ब्रूहि** = भन्नुहोस्
**हि** = किनभने
**इह** = यो लोकमा
**सर्वात्मनाम्** = सबैमा आत्मदृष्टि भएका
**साधूनां** = सज्जनहरूको
**गोप्यं** = लुकाएर राख्नुपर्ने
**कृत्यं** = कार्य
**न हि** = केही पनि हुँदैन

**वाक्यार्थ–** हे पिताजी ! हजुरहरूले ठुलो उत्सव थाल्नुभएको छ, यसको विषयमा सुन्न चाहने मलाई सबै कुरा बताउनुहोस्, किनभने सबैमा आत्मदृष्टि भइसकेका सज्जनहरूका लागि लुकाएर राख्नुपर्ने कुरा केही पनि हुँदैन।

**अस्त्यस्वपरदृष्टीनाममित्रोदास्तविद्विषाम् ॥**
**उदासीनोऽरिवद् वर्ज्य आत्मवत् सुहृदुच्यते ॥ ५ ॥**

पदार्थ–
**अस्वपरदृष्टीनाम्** = आफ्नो र अर्काको भन्ने भावना नभएका
**अमित्रोदास्तविद्विषाम्** = मित्र, उदासीन र शत्रु कोही पनि नभएका सज्जनहरूका लागि (गोप्य कार्यमा चाहिँ)
**उदासीनः** = उदासीन व्यक्ति (पनि)
**अरिवत्** = शत्रुसमान
**वर्ज्यः** = त्याज्य
**अस्ति** = हुन्छ भने
**सुहृत्** = मित्र (चाहिँ)
**आत्मवत्** = आफूसमानको हुन्छ
**उच्यते** = भनेर भनिन्छ

**वाक्यार्थ–** आफ्नो र अर्काको भन्ने भावना नभएका अनि मित्र, उदासीन र शत्रु कोही पनि नभएका सज्जनहरूका लागि पनि गोप्य कार्यमा चाहिँ उदासीन व्यक्ति पनि शत्रु जस्तै त्याज्य हुन्छ तर मित्र चाहिँ आफूसमानको हुन्छ भनेर भनिन्छ। (मित्र आफू जस्तै हुने हुनाले, उसलाई केही कुरा लुकाउनु पर्दैन)।

**ज्ञात्वाज्ञात्वा च कर्माणि जनोऽयमनुतिष्ठति ।**
**विदुषः कर्मसिद्धिः स्यात् तथा नाविदुषो भवेत् ॥ ६ ॥**

पदार्थ–
**अयम् जनः** = यो मानिस
**ज्ञात्वा** = बुझेर र
**अज्ञात्वा च** = नबुझीकन पनि
**कर्माणि** = कर्महरू
**अनुतिष्ठति** = गर्दछ
**विदुषः** = बुझेर कर्म गर्ने व्यक्तिको
**कर्मसिद्धिः स्यात्** = कर्मको सफलता हुन्छ भने
**तथा** = त्यसै गरी
**अविदुषः** = नबुझी कर्म गर्ने व्यक्तिको
**न भवेत्** = नहुन सक्छ

**वाक्यार्थ–** संसारमा कोही मानिस बुझेर कर्म गर्छन् भने कोही नबुझीकन कर्म गर्छन्, त्यसमा बुझेर कर्म गर्नेको जसरी कर्म सफल हुन्छ, त्यसरी नबुझीकन कर्म गर्नेको नहुन सक्छ।

**तत्र तावत् क्रियायोगो भवतां किं विचारितः ।**
**अथवा लौकिकस्तन्मे पृच्छतः साधु भण्यताम् ॥ ७ ॥**

पदार्थ–
**तत्र तावत्** = यो अनुष्ठान गर्न लागिएको

**भवतां** = हजुरहरूको
**क्रियायोगः** = क्रियात्मक यज्ञ
**किं** = के
**विचारितः** = (शास्त्रीय हो भनेर) विचार गर्नुभएको हो
**अथवा** = वा
**लौकिकः** = लोकमा त्यसै चल्दै आएको हो
**तत् पृच्छतः** = यस विषयमा सोध्ने
**मे** = मलाई
**साधु** = राम्रोसँग
**भण्यताम्** = बताउनुहोस्

**वाक्यार्थ–** हजुरहरूले अनुष्ठान गर्न लाग्नुभएको यो क्रियात्मक यज्ञ शास्त्रीय हो भनेर कतै प्रमाणपूर्वक विचार गर्नुभएको हो कि लोकव्यवहारमा चल्दै आएकाले गर्न लाग्नुभएको हो, यो मलाई राम्रोसँग बताउनुहोस्।

**नन्द उवाच** (नन्दले भने)

**पर्जन्यो भगवानिन्द्रो मेघास्तस्यात्ममूर्तयः।**
**तेऽभिवर्षन्ति भूतानां प्रीणनं जीवनं पयः॥ ८॥**
**तं तात वयमन्ये च वार्मुचां पतिमीश्वरम्।**
**द्रव्यैस्तद्रेतसा सिद्धैर्यजन्ते क्रतुभिर्नराः॥ ९॥**

**पदार्थ–**
**तात** = हे बाबु
**भगवान् इन्द्रः** = ऐश्वर्यशाली इन्द्रदेव
**पर्जन्यः** = वृष्टिका अधिपति हुनुहुन्छ
**मेघाः** = बादलहरू
**तस्य** = ती इन्द्रदेवका
**आत्ममूर्तयः** = आफ्नै रूप हुन्
**ते** = ती बादलहरू
**भूतानां** = प्राणीहरूको
**प्रीणनं** = तृप्ति गर्ने
**जीवनं** = जीवनस्वरूप
**पयः** = पानी
**अभिवर्षन्ति** = बर्साउँछन्
**वार्मुचां** = मेघका
**पतिम्** = पति
**ईश्वरम्** = ऐश्वर्यवान्
**तं** = त्यस्ता भगवान् इन्द्रलाई
**वयम्** = हामीहरू र
**अन्ये** = अरू
**नराः च** = मानिसहरू पनि
**तद्रेतसा** = ती इन्द्रले वर्साएको पानीबाट
**सिद्धैः** = सिद्ध भएको
**द्रव्यैः** = अन्न आदि द्रव्ययुक्त
**क्रतुभिः** = यज्ञहरूद्वारा
**यजन्ते** = आराधना गर्दछन्

**वाक्यार्थ–** हे बाबु ! भगवान् इन्द्र वृष्टिका अधिपति देवता हुनुहुन्छ। मेघहरू उहाँकै रूप हुन्। तिनै मेघहरूले हामी सम्पूर्ण प्राणीहरूको जीवनस्वरूप जल बर्साउँछन्। त्यसैले त ती मेघका अधिपति ऐश्वर्यशाली भगवान् इन्द्रलाई हामीहरू र अरू मानिसहरूले पनि उहाँले दिएको जलबाट फलेको अन्नादिद्वारा यज्ञ गरेर उहाँको आराधना गर्दछौँ।

**तच्छेषेणोपजीवन्ति त्रिवर्गफलहेतवे।**
**पुंसां पुरुषकाराणां पर्जन्यः फलभावनः॥ १०॥**

**पदार्थ–**
**तच्छेषेण** = त्यो यज्ञशेष अन्नबाट
**त्रिवर्गफलहेतवे** = (धर्म, अर्थ, काम) त्रिवर्ग फल प्राप्तिका लागि (मानिसहरूले)
**उपजीवन्ति** = आफ्नो जीवन निर्वाह गर्दछन्
**पुंसां** = मानिसहरूको
**पुरुषकाराणां** = पुरुषार्थको
**फलभावनः** = फल प्रदान गर्ने
**पर्जन्यः** = भगवान् इन्द्र नै हुनुहुन्छ

**वाक्यार्थ–** इन्द्रयज्ञको शेष अन्नबाट नै मानिसहरू आफ्नो जीविका चलाउँछन् र धर्म, अर्थ, काम यी त्रिवर्गरूप फल प्राप्त गर्दछन्। मानिसहरू जुन पुरुषार्थ सिद्ध गर्न चाहन्छन् त्यसको फलदाता भगवान् इन्द्र नै हुनुहुन्छ।

**य एवं विसृजेद् धर्मं परम्पर्यागतं नरः।**
**कामाद् द्वेषाद् भयाल्लोभात् स वै नाप्नोति शोभनम्॥ ११॥**

**पदार्थ–**
**एवं** = यस प्रकार
**यः नरः** = जो व्यक्तिले
**परम्पर्यागतं** = परम्पराबाट चलिआएको
**धर्मं** = धर्मलाई
**कामात्** = कुनै कामनाले
**लोभात्** = लोभले
**भयात्** = डरले
**द्वेषात्** = द्वेषले पनि
**विसृजेत्** = त्याग्छ भने
**वै** = निश्चय नै
**सः** = त्यसले
**शोभनम्** = कल्याण
**न आप्नोति** = प्राप्त गर्न सक्दैन

**वाक्यार्थ–** यस प्रकार जो व्यक्तिले परम्पराबाट चल्दै आएको धर्मलाई, काम, लोभ, डर वा द्वेषको कारणले आचरण गर्दैन, उसको कल्याण हुँदै हुँदैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)
**वचो निशम्य नन्दस्य तथान्येषां व्रजौकसाम्।**
**इन्द्राय मन्युं जनयन् पितरं प्राह केशवः॥ १२॥**

**पदार्थ–**
**केशवः** = भगवान् केशवले
**नन्दस्य** = नन्दको
**तथा** = त्यस्तै
**व्रजौकसाम्** = व्रजवासी
**अन्येषां** = अरूहरूको पनि
**वचः** = कुरा
**निशम्य** = सुनेर
**इन्द्राय** = इन्द्रलाई
**मन्युं** = क्रोध
**जनयन्** = उत्पन्न गराउँदै
**पितरं** = पिता नन्दलाई
**प्राह** = भन्न थाल्नुभयो

**वाक्यार्थ–** भगवान् केशवले नन्द र अरू व्रजवासीहरूको कुरा सुनेपछि इन्द्रलाई रिस उठ्ने गरी पिता नन्दलाई भन्न थाल्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**कर्मणा जायते जन्तुः कर्मणैव विलीयते।**
**सुखं दुःखं भयं क्षेमं कर्मणैवाभिपद्यते॥ १३॥**

**पदार्थ–**
**जन्तुः** = जीव
**कर्मणा** = आफ्नै कर्म अनुसार
**जायते** = जन्मन्छ र
**कर्मणा एव** = कर्म अनुसार नै
**विलीयते** = मर्दछ
**सुखं** = सुख
**दुःखं** = दुःख
**भयं** = डर र
**क्षेमं** = मङ्गल पनि
**कर्मणा एव** = कर्मद्वारा नै
**अभिपद्यते** = प्राप्त गर्दछ

**वाक्यार्थ–** सारा जीवहरू कर्मद्वारा जन्मन्छन् र कर्मद्वारा नै मर्दछन्। संसारमा जो सुख, दुःख, डर र मङ्गल आदि प्राप्त हुन्छ त्यो पनि कर्मद्वारा नै प्राप्त हुन्छ।

**अस्ति चेदीश्वरः कश्चित् फलरूप्यन्यकर्मणाम्।**
**कर्तारं भजते सोऽपि न ह्यकर्तुः प्रभुर्हि सः॥ १४॥**

**पदार्थ–**
**अन्यकर्मणाम्** = कर्मदेखि भिन्न
**फलरूपी** = कर्मफलदाता
**कश्चित्** = कुनै
**ईश्वरः** = समर्थ तत्त्व
**अस्ति चेत्** = छ भने
**हि** = निश्चय नै
**सः अपि** = उसले पनि (कर्मफल दिनको लागि)
**कर्तारं** = कर्ताको
**भजते** = अपेक्षा गर्दछ
**हि** = किनभने
**सः** = ऊ
**अकर्तुः** = कर्म नगर्ने व्यक्तिलाई फल प्रदान गर्न
**प्रभुः** = समर्थ
**न** = छैन

**वाक्यार्थ–** कर्मदेखि भिन्न कर्मफलदाता कोही ईश्वर छ भने पनि जीवलाई कर्मफल दिन उसले पनि कर्ताको अपेक्षा त गर्ने पर्दछ किनभने उसले पनि कर्म नगर्ने व्यक्तिलाई कर्मफल दिन सक्दैन।

**किमिन्द्रेणेह भूतानां स्वस्वकर्मानुवर्तिनाम्।**
**अनीशेनान्यथा कर्तुं स्वभावविहितं नृणाम्॥ १५॥**

**पदार्थ–**
**स्वस्वकर्मानुवर्तिनाम्** = आ-आफ्ना कर्मका पछि लागेका
**भूतानां** = प्राणीहरूको
**इह** = यो लोकमा
**नृणाम्** = मानिसहरूको
**स्वभावविहितं** = आफ्नो स्वभाव (कर्मसंस्कार) द्वारा गरिएको सुखदुःख आदि फललाई
**अन्यथा कर्तुं** = परिवर्तन गराउन
**अनीशेन** = असमर्थ
**इन्द्रेण** = ती इन्द्रद्वारा
**किम्** = के प्रयोजन सिद्ध होला

**वाक्यार्थ–** हे पिताजी ! आ-आफ्ना कर्मका पछि लागेका प्राणीहरू र मानिसहरूले आफ्नो

स्वभावले गरेको कर्मको फललाई इन्द्रले परिवर्तन गराउन सक्दैनन् भने तिनबाट अन्य के प्रयोजन सिद्ध होला ?

**स्वभावतन्त्रो हि जनः स्वभावमनुवर्तते ।**
**स्वभावस्थमिदं सर्वं सदेवासुरमानुषम् ॥ १६ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**जनः** = मानिस
**स्वभावतन्त्रः** = स्वभाव (कर्मसंस्कार)को अधीनमा छन् र
**स्वभावम्** = कर्मसंस्कारलाई नै
**अनुवर्तते** = अनुसरण गर्दछन्
**सदेवासुरमानुषं** = देवता, असुर तथा मनुष्य आदि सहित
**इदं सर्वं** = यो सारा जगत् पनि
**स्वभावस्थम्** = कर्मसंस्कारकै आधारमा चलेको छ

**वाक्यार्थ–** संसारका सारा प्राणीहरू कर्मसंस्कारको अधीनमा छन् र कर्मसंस्कारलाई नै अनुसरण गर्दछन्। देवता, असुर र मनुष्यले सहित यो जगत् पनि कर्मसंस्कारकै आधारमा चलेको छ।

**देहानुच्चावचाञ्जन्तुः प्राप्योत्सृजति कर्मणा ।**
**शत्रुर्मित्रमुदासीनः कर्मैव गुरुरीश्वरः ॥ १७ ॥**

**पदार्थ–**
**जन्तुः** = प्राणीहरू
**कर्मणा** = कर्मद्वारा नै
**उच्चावचान्** = राम्रा र नराम्रा खालका
**देहान्** = शरीरलाई
**प्राप्य** = प्राप्त गरेर (भोगसमाप्ति पछि)
**उत्सृजति** = त्याग्दछ
**शत्रुः** = शत्रु
**मित्रं** = साथी र
**उदासीनः** = तटस्थ व्यक्तिहरू पनि
**कर्म एव** = कर्म नै हुन् (कर्मकै परिणाम हुन्)
**गुरुः** = गुरु आदि उपदेष्टा तथा
**ईश्वरः** = ईश्वर पनि कर्म नै हुन् (किनभने कर्मविना गुरुकृपा र ईश्वर कृपा प्राप्त हुन सक्दैन)

**वाक्यार्थ–** प्राणीहरूले कर्मकै आधारमा राम्रा र नराम्रा शरीर प्राप्त गर्दछन् अनि समय पुगेपछि त्यसलाई त्याग्दछन्। संसारमा शत्रु, मित्र वा उदासीन जो व्यक्तिहरू छन्, ती पनि कर्मकै आधारमा भएका हुन् र गुरु तथा ईश्वर पनि कर्मस्वरूप नै हुन्। (कर्मविना गुरुकृपा र ईश्वर कृपा प्राप्त हुन सक्दैन) ।

**तस्मात् सम्पूजयेत् कर्म स्वभावस्थः स्वकर्मकृत् ।**
**अञ्जसा येन वर्तेत तदेवास्य हि दैवतम् ॥ १८ ॥**

**पदार्थ–**
**तस्मात्** = त्यसकारण
**स्वभावस्थः** = स्वभाव (कर्माधीन वर्णाश्रम व्यवस्था) मा रहेर
**स्वकर्मकृत्** = आफ्नो कर्म गरोस् र
**कर्म एव** = कर्मलाई नै
**सम्पूजयेत्** = पूजा गरोस्

(सर्वोपरि मानोस्)
**येन** = जसद्वारा
**अञ्जसा** = सजिलैसँग
**वर्तेत** = जीविका चल्दछ
**हि** = निश्चय नै
**अस्य** = यस प्राणीको
**तत् एव** = त्यही नै
**दैवतम्** = देवता हो

**वाक्यार्थ–** त्यसैले प्राणीहरूले कर्माधीन रहेर कर्महरू गर्दै कर्मलाई नै सर्वोपरि स्थान दिनुपर्दछ। जसद्वारा आफ्नो जीविका सजिलैसँग चल्दछ, त्यही नै देवता हो।

**आजीव्यैकतरं भावं यस्त्वन्यमुपजीवति।**
**न तस्माद् विन्दते क्षेमं जारं नार्यसती यथा॥ १९॥**

**पदार्थ–**
**यः तु** = जो व्यक्ति
**एकतरं भावं** = एउटा कुनै भाव (देव) विशेषलाई
**आजीव्य** = जीविकाको आधारको रूपमा स्वीकार गरेर
(तिनमा विश्वास नगरी)
**अन्यम्** = अरूलाई
**उपजीवति** = सेवा गर्दछ (त्यो व्यक्तिले)
**तस्मात्** = त्यस कर्मबाट
**क्षेमं** = कल्याण
**न विन्दते** = प्राप्त गर्दैन
**यथा** = जसरी
**असती** = वेश्या
**नारी** = नारीले
**जारं** = जारको सेवा गरेर (कल्याण प्राप्त गर्दिन)

**वाक्यार्थ–** जुन व्यक्तिले एक थोक (देवता आदि)लाई जीविकाको आधारका रूपमा स्वीकार गरेर अर्को थोकको सेवा गर्छ, त्यसलाई कहिल्यै कल्याण हुँदैन, जसरी पतिलाई छाडेर जारको सेवा गर्ने नारीलाई कल्याण हुँदैन।

**वर्तेत ब्रह्मणा विप्रो राजन्यो रक्षया भुवः।**
**वैश्यस्तु वार्तया जीवेच्छूद्रस्तु द्विजसेवया॥ २०॥**

**पदार्थ–**
**विप्रः** = ब्राह्मणले
**ब्रह्मणा** = वेदद्वारा (वेदको अध्ययन-अध्यापन गरेर)
**वर्तेत** = जीविका चलाओस्
**राजन्यः** = क्षत्रियले
**भुवः** = पृथिवीको
**रक्षया** = रक्षाद्वारा (जीविका चलाओस्)
**वैश्यः तु** = वैश्यले चाहिँ
**वार्तया** = कृषि, व्यापार आदि वृत्तिले (जीविका गरोस् र)
**शूद्रः तु** = शूद्रले चाहिँ
**द्विजसेवया** = द्विज (ब्राह्मण, क्षेत्रिय, वैश्य)को सेवाद्वारा
**जीवेत्** = बाँचोस् (आफ्नो जीविका चलाओस्)

**वाक्यार्थ–** ब्राह्मणले वेदको अध्ययन-अध्यापनद्वारा, क्षत्रियले पृथिवीको रक्षा गरेर, वैश्यले कृषि, व्यापार आदिद्वारा र शूद्रले द्विज जातिको सेवा गरेर आफ्नो जीविका चलाउनुपर्दछ।

**कृषिवाणिज्यगोरक्षा कुसीदं तूर्यमुच्यते।**
**वार्ता चतुर्विधा तत्र वयं गोवृत्तयोऽनिशम्॥ २१॥**

पदार्थ–
**वार्ता** = (वैश्यको) वार्ता वृत्ति
**चतुर्विधा** = चार प्रकारको छ जो
**कृषिवाणिज्यगोरक्षा** = कृषि, व्यापार, गाईको रक्षा र
**तूर्यम्** = चौथो चाहिँ
**कुसीदं** = व्याजमा लगाई धन वृद्धि गर्ने हो भनी
**उच्यते** = भनिन्छ
**तत्र** = ती चारमध्ये
**वयं** = हामीहरू
**अनिशम्** = धेरै अघिदेखि
**गोवृत्तयः** = गोरक्षा वृत्तिमा लागेका छौँ

**वाक्यार्थ–** वैश्यको वार्ता वृत्ति कृषि, व्यापार, गोपालन र व्याजले धनवृद्धि गर्ने गरी चार प्रकारको हुन्छ। त्यसमा हामीहरूको गोपालनको वृत्ति धेरै पहिलेदेखि चलिआएको छ।

**सत्त्वं रजस्तम इति स्थित्युत्पत्त्यन्तहेतवः।**
**रजसोत्पद्यते विश्वमन्योन्यं विविधं जगत्॥ २२॥**

पदार्थ–
**सत्त्वं रजः तमः इति** = सत्त्वगुण, रजोगुण र तमोगुण, यिनीहरू (क्रमशः)
**स्थित्युत्पत्त्यन्तहेतवः** = संसारको स्थिति, उत्पत्ति र प्रलयका कारण हुन्
**रजसा** = रजोगुणद्वारा
**अन्योन्यं** = स्त्री र पुरुषको संयोगले
**विश्वम्** = सारा विश्व र
**विविधं** = विभिन्न खालको
**जगत्** = प्राणी जगत्को
**उत्पद्यते** = उत्पत्ति हुन्छ

**वाक्यार्थ–** सत्त्व, रजः र तमोगुण नै संसारको स्थिति, उत्पत्ति र नाशका कारण हुन्। रजोगुणद्वारा स्त्री र पुरुषको संसर्गले सारा विश्वसहित विभिन्न प्राणीजगत्को उत्पत्ति हुन्छ।

**रजसा चोदिता मेघा वर्षन्त्यम्बूनि सर्वतः।**
**प्रजास्तैरेव सिध्यन्ति महेन्द्रः किं करिष्यति॥ २३॥**

पदार्थ–
**रजसा** = रजोगुणद्वारा
**चोदिताः** = प्रेरित गरिएका
**मेघाः** = बादलहरूले
**सर्वतः** = सबैतिर
**अम्बूनि** = पानीहरू
**वर्षन्ति** = बर्साउँछन्
**तैः एव** = तिनै वृष्टिद्वारा
**प्रजाः** = मानिसहरू
**सिध्यन्ति** = (अन्न आदि उत्पादनद्वारा आफ्नो जीविका) सिद्ध गर्दछन्
**महेन्द्रः** = इन्द्रले
**किं करिष्यति** = के सहयोग गर्छन् र ?

**वाक्यार्थ–** रजोगुणद्वारा प्रेरित बादलहरूले सबैतिर पानी बर्साउँछन् र त्यही पानीद्वारा मानिसहरू अन्नादि उत्पादन गरेर आफ्नो जीविका चलाउँछन् भने इन्द्रले हाम्रो के सहयोग गरेका छन् र ?

**न नः पुरो जनपदा न ग्रामा न गृहा वयम्।**
**नित्यं वनौकसस्तात वनशैलनिवासिनः॥ २४॥**

पदार्थ–
**तात** = हे पिताजी
**नः** = हामीहरूका
**पुरः न** = सहर छैनन्
**जनपदाः न** = देशहरू छैनन्
**ग्रामाः न** = गाउँहरू पनि छैनन्

**गृहाः** = घरहरू (पनि छैनन्)
**वयम्** = हामीहरू त
**नित्यं** = सधैँ
**वनौकसः** = वन नै घर भएका
**वनशैलनिवासिनः** = वन, पर्वत आदिमा बस्ने मानिसहरू हौँ

**वाक्यार्थ–** हे पिताजी ! हामीहरूको सहर, देश, गाउँ वा घर केही पनि छैन। हामीहरू त सधैँ वन, पर्वत आदिमा बस्ने, वन नै घर भएका मानिस हौँ।

**तस्माद् गवां ब्राह्मणानामद्रेश्चारभ्यतां मखः।**
**य इन्द्रयागसम्भारास्तैरयं साध्यतां मखः॥ २५॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**गवां** = गाईहरूको
**ब्राह्मणानाम्** = ब्राह्मणहरूको र
**अद्रेः च** = गोवर्धन पहाडको पनि
**मखः** = यज्ञ
**आरभ्यतां** = प्रारम्भ गरियोस् र
**ये** = जो
**इन्द्रयागसम्भाराः** = इन्द्रयागका लागि तयार पारिएका सामग्रीहरू छन्
**तैः** = ती सामग्रीहरूद्वारा नै
**अयं** = यो
**मखः** = यज्ञ
**साध्यतां** = सिद्ध गरियोस्

**वाक्यार्थ–** त्यसैले गाईहरूको, ब्राह्मणहरूको र गोवर्धन पहाडको यज्ञ गर्न सुरु गर्नुहोस् र यो इन्द्रयागको लागि तयार गरिएका सामग्रीहरूद्वारा नै यो यज्ञ गराउनुहोस्।

**विवरण–** माथिका श्लोकहरूमा श्रीकृष्णले इन्द्रलाई नै ईश्वर मानी उनको पूजा गर्नुको साटो गाई र ब्राह्मणहरूको सेवा गर्नु अनि पर्वतको पूजा गर्नु नै श्रेष्ठ भएको बताउनुभएको छ। भगवान् स्वयं धर्ममर्यादाको रक्षक एवं संस्थापक हुनुहुन्छ। अतः भगवान्ले यहाँ वैदिक विधान अनुसार हुने यज्ञहरूको निषेध गर्नुभएको होइन, सामान्य बुद्धि अनुसार इन्द्रलाई नै ईश्वर मानी उनको आराधना गर्ने लौकिक परम्पराको खण्डन गर्नुभएको हो। वैदिक यज्ञमा त इन्द्र, वरुण, वायु आदि सबै देवताहरूलाई हवि प्रदान गरिन्छ, तर नन्दले गर्न लागेको यज्ञ वृष्टिका मालिक मानिएका केवल इन्द्रका लागि मात्र थियो। नन्द आदिले इन्द्र देवताले यहाँ-यहाँ पानी पार भनी बादललाई आज्ञा दिएपछि तिनले त्यहीँ-त्यहीँ पानी पार्दछन् भन्ने बुझेका थिए। कृष्णले दिनुभएको तर्कको तात्पर्य प्रकाशित गर्दै सुबोधिनीकार भन्नुहुन्छ– 'कुनै देवताको आदेश अनुसार पानी पर्दैन, यो त रजोगुणद्वारा मेघ क्षुब्ध भएपछि आफैँ बर्सिन्छ। यदि इन्द्र ईश्वर हुन् र उनले भनेको ठाउँमा पानी पर्छ भने के नदी, पोखरी, समुद्र आदिमा प्रशस्त पानी भएकाले त्यहाँ पानी बर्साउन नपर्ने उनलाई थाहा हुँदैनथ्यो र ? के इन्द्र अतिवृष्टि-अनावृष्टिको हेक्का राखी समानरूपमा पानी बर्साउन सक्दैनथे ?' यसरी केवल पानी परेको आधारमा ग्राम्यबुद्धिको बलले चलेको इन्द्रपूजालाई भगवान्ले पनि तर्ककै आधारमा खण्डन गर्नुभएको छ। उहाँले ईश्वर भन्ने धारणाकै खण्डन गर्नुभएको छ, जसको उद्देश्य इन्द्रलाई ईश्वर मान्ने मतको खण्डन गर्नु हो। प्राणीहरू आ-आफ्नो कर्महरूकै आधारमा जन्म, मृत्यु, सुख, दुःख पाउँछन् भने त्यहाँ इन्द्रको के आवश्यकता ? कर्मको व्यवस्थाद्वारा ईश्वरको खण्डन गर्ने यो मत मीमांसकहरूको मतसँग ठ्याक्कै मिल्ने देखिन्छ। कर्म जड र क्षणिक भएकाले त्यसको फल दिन कुनै चेतन ईश्वर त चाहियो नि भन्ने शङ्का हुँदा

मीमांसकहरूले कर्मद्वारा सिद्ध हुने अपूर्वबाट नै फल पाइने कुरा व्यक्त गरेका छन्। वस्तुतः भगवान् विष्णु यज्ञाधिपति हुनुहुन्छ, वेदविधिले उहाँकै पूजा गर्नु आवश्यक देखी भगवान्ले गोवर्धनको पूजा गराउनुभएको हो। यज्ञमूर्ति विष्णुका दुई रूप हुन्छन्। एउटा हविहरूको आश्रय गाई र अर्को मन्त्रहरूको आश्रय ब्राह्मण। त्यसैले **गवां ब्राह्मणानां अद्रेश्च** अर्थात् गाई, ब्राह्मण र गोवर्धन पर्वतको पूजा गर्नुपर्छ भनी सर्वयज्ञमय भगवान्को पूजा गर्नुपर्दछ भनिएको हो। यसै अध्यायको पैंतीसौं श्लोकमा भगवान् श्रीकृष्णले म नै गोवर्धन पर्वत हुँ भन्नुभएको छ। **विष्णु** शब्दको अर्थ सर्वव्यापक परमात्मा भन्ने हुन्छ। पहाड, गाई, नदी, मान्छे आदि सबै रूपमा देखिने र सबै देवताको रूपमा उनीहरूभित्र रहने यज्ञपति परमात्माको पूजा हुनु वैदिक पूजाको तात्पर्य हो। त्यसकारण श्रीकृष्णले इन्द्रको एकलौटी परम्परागत अवैदिक पूजाको खण्डन गरी गोवर्धनपूजाको निहुँले यज्ञपति परमात्मा स्वयंको आराधना गर्ने परम्परा चलाउनुभएको हो। यो पनि प्रकृतिपूजन हो तर प्रकृतिको जड स्वरूपको नभई त्यहाँ व्याप्त चेतन ब्रह्मतत्त्वको पूजन हो। त्यसैले वेदमा पनि वायु, अग्नि, नदी आदिको पूजा या स्तुति बताइएको हो।

**पच्यन्तां विविधाः पाकाः सूपान्ताः पायसादयः।**
**संयावापूपशष्कुल्यः सर्वदोहश्च गृह्यताम्॥ २६॥**

**पदार्थ–**
**विविधाः** = विभिन्न प्रकारका
**पाकाः** = पक्वान्नहरू
**पायसादयः** = खिर आदिदेखि
**संयावापूपशष्कुल्यः** = हलुवा, पुवा, सेल र
**सूपान्ताः** = दालसम्म पनि
**पच्यन्तां** = पकाइयून् अनि
**सर्वदोहः च** = (व्रजभरिको) सम्पूर्ण दुग्ध पदार्थ पनि
**गृह्यताम्** = ग्रहण गरियोस्

**वाक्यार्थ–** विभिन्न प्रकारका पक्वान्नहरू जसमा खिरदेखि लिएर हलुवा, पुवा, सेल र दालसम्म पनि पकाउनुहोस् र सारा व्रजका दुध, दही आदि एकत्र पार्नुहोस्।

**हूयन्तामग्नयः सम्यग् ब्राह्मणैर्ब्रह्मवादिभिः।**
**अन्नं बहुविधं तेभ्यो देयं वो धेनुदक्षिणाः॥ २७॥**

**पदार्थ–**
**ब्रह्मवादिभिः** = वेद पढेका
**ब्राह्मणैः** = ब्राह्मणहरूद्वारा
**अग्नयः** = अग्निहरू
**सम्यक्** = राम्रोसँग
**हूयन्ताम्** = हवन गरियून्
**वः** = हामीहरूद्वारा
**तेभ्यः** = ती ब्राह्मणहरूलाई
**बहुविधं** = धेरै प्रकारका
**अन्नं** = अन्नहरू
**देयं** = दिइनुपर्दछ र
**धेनुदक्षिणाः** = गाईहरू दक्षिणाको रूपमा दिइनुपर्दछ

**वाक्यार्थ–** वेद पढेका ब्राह्मणहरूद्वारा राम्रोसँग अग्निको हवन गराउनुहोस्, ब्राह्मणहरूलाई पनि धेरै प्रकारका अन्न आदि दान दिनुपर्दछ र दक्षिणाको रूपमा धेरै गाईहरू पनि दिनुपर्दछ।

**अन्येभ्यश्चाश्वचाण्डालपतितेभ्यो यथार्हतः।**
**यवसं च गवां दत्त्वा गिरये दीयतां बलिः॥ २८॥**

**पदार्थ–**
**अन्येभ्यः** = अरू
**आश्वचाण्डालपतितेभ्यः च** = कुकुर, चाण्डाल र पतितहरूलाई पनि
**यथार्हतः** = यथायोग्य (अन्न आदि दिइनुपर्दछ, त्यसै गरी)
**गवां** = गाईहरूलाई
**यवसं च** = घाँस
**दत्त्वा** = दिएर
**गिरये** = गिरिराज गोवर्धनलाई
**बलिः** = नैवेद्य
**दीयतां** = दिइयोस्

**वाक्यार्थ–** कुकुर, चाण्डाल र पतितहरूलाई पनि यथायोग्य अन्न आदि दिनुपर्दछ र गाईहरूलाई घाँस तथा गिरिराज गोवर्धनलाई नैवेद्य चढाउनुपर्दछ।

**स्वलङ्कृता भुक्तवन्तः स्वनुलिप्ताः सुवाससः।**
**प्रदक्षिणां च कुरुत गोविप्रानलपर्वतान्॥ २९॥**

**पदार्थ–**
**स्वलङ्कृताः** = राम्ररी सजिएका
**भुक्तवन्तः** = खाइसकेका
**स्वनुलिप्ताः** = चन्दन लगाएका
**सुवाससः** = राम्रा कपडा लगाउनुभएका (हजुरहरू सबैले)
**गोविप्रानलपर्वतान्** = गाई, ब्राह्मण, अग्नि र गिरिराज गोवर्धनलाई
**प्रदक्षिणां च** = प्रदक्षिणा पनि
**कुरुत** = गर्नुहोस्

**वाक्यार्थ–** राम्रा-राम्रा गहना-कपडाहरू लगाएर मिठा-मिठा वस्तु खाएर चन्दन आदि लगाई हजुरहरूले गाई, ब्राह्मण, अग्नि र गोवर्धनको प्रदक्षिणा पनि गर्नुहोस्।

**एतन्मम मतं तात क्रियतां यदि रोचते।**
**अयं गोब्राह्मणाद्रीणां मह्यं च दयितो मखः॥ ३०॥**

**पदार्थ–**
**तात** = हे पिताजी
**एतत्** = यो
**मम** = मेरो
**मतं** = विचार हो
**यदि** = यदि (हजुरहरूलाई)
**रोचते** = मनपर्छ भने
**क्रियतां** = गर्नुहोस्
**अयं** = यो
**मखः** = यज्ञ चाहिँ
**गोब्राह्मणाद्रीणां** = गाई, ब्राह्मण र गोवर्धन तथा
**मह्यं च** = मलाई पनि
**दयितः** = प्रिय लाग्दछ

**वाक्यार्थ–** हे पिताजी ! यो त मेरो विचार हो। यदि हजुरहरूलाई मन पर्छ भने यसै गर्नुहोस्, यो यज्ञ चाहिँ गाई, ब्राह्मण, गोवर्धन पहाड र मलाई पनि प्रिय लाग्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**कालात्मना भगवता शक्रदर्पं जिघांसता ।**

**प्रोक्तं निशम्य नन्दाद्याः साध्वगृह्णन्त तद्वचः ॥ ३१ ॥**

**पदार्थ–**
**शक्रदर्पं** = इन्द्रको घमन्डलाई
**जिघांसता** = नाश गर्न चाहने
**कालात्मना** = कालस्वरूप
**भगवता** = भगवान् श्रीकृष्णद्वारा
**प्रोक्तं** = भनिएको कुरा
**निशम्य** = सुनेर
**तद्वचः** = उहाँको कुरालाई
**नन्दाद्याः** = नन्द आदि गोपहरूले
**साधु** = राम्रोसँग
**अगृह्णन्तः** = स्वीकार गरे

**वाक्यार्थ–** इन्द्रको घमन्डलाई नाश गर्न चाहने कालस्वरूप भगवान् श्रीकृष्णले भनेको कुरा सुनेर त्यस कुरालाई नन्द आदि गोपहरूले राम्रोसँग स्वीकार गरे।

**तथा च व्यदधुः सर्वं यथाह मधुसूदनः ।**

**वाचयित्वा स्वस्त्ययनं तद्द्रव्येण गिरिद्विजान् ॥ ३२ ॥**

**उपहृत्य बलीन् सर्वानादृता यवसं गवाम् ।**

**गोधनानि पुरस्कृत्य गिरिं चक्रुः प्रदक्षिणम् ॥ ३३ ॥**

**पदार्थ–**
**मधुसूदनः** = भगवान् मधुसूदनले
**यथा** = जस्तो
**आह** = भन्नुभयो (गोपहरूले)
**सर्वान्** = ती सबै कुराहरू
**तथा** = त्यसै गरी
**सर्वं** = सबै काम
**व्यदधुः** = सम्पन्न गरे
**स्वस्त्ययनं वाचयित्वा** = स्वस्तिवाचन गराएर
**तद्द्रव्येण** = त्यही इन्द्रयागकै सामग्रीले
**गिरिद्विजान्** = गिरिराज गोवर्धन र ब्राह्मणहरूलाई
**बलीन्** = नैवेद्य आदि बलिहरू र
**गवां** = गाईहरूलाई
**यवसं च** = घाँसहरू
**उपहृत्य** = अर्पण गरेर
**आदृताः** = आदरभावले युक्त भएका गोपहरूले
**गोधनानि च** = गाईहरूलाई पनि
**पुरस्कृत्य** = अगाडि लगाएर
**गिरिं** = गोवर्धन पर्वतलाई
**प्रदक्षिणम्** = प्रदक्षिणा
**चक्रुः** = गरे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले जस्तो भन्नुभएको थियो त्यसै गरी गोपहरूले पनि पहिला स्वस्तिवाचन गराएर त्यही इन्द्रयागको सामग्रीले गोवर्धन पर्वत र ब्राह्मणहरूको पूजा गरी नैवेद्य चढाए। त्यसपछि गाईहरूलाई पनि घाँस खुवाए र सम्मानका साथ गाईहरूलाई अगाडि लगाई गोवर्धन पर्वतको प्रदक्षिणा गरे।

**अनांस्यनडुद्युक्तानि ते चारुह्य स्वलङ्कृताः ।**

**गोप्यश्च कृष्णवीर्याणि गायन्त्यः सद्विजाशिषः ॥ ३४ ॥**

**पदार्थ–**
**सद्विजाशिषः** = ब्राह्मणको आशीर्वादले सहित भएका (ब्राह्मणबाट आशीर्वाद प्राप्त गरेका)
**स्वलङ्कृताः** = आभूषणादिले सुशोभित
**ते** = ती गोपहरू र
**गोप्यः च** = गोपिनीहरू पनि
**अनडुद्युक्तानि** = (गोरुले युक्त) गोरुले तानेका
**अनांसि** = गाडाहरूमा
**आरुह्य** = चढेर
**कृष्णवीर्याणि** = भगवान् श्रीकृष्णका पुरुषार्थहरूको
**गायन्त्यः** = गान गर्दै (परिक्रमा गर्न थाले)

**वाक्यार्थ–** ब्राह्मणहरूबाट आशीर्वाद पाएका तथा राम्रा-राम्रा आभूषणले सजिएका गोप-गोपिनीहरू गोरुले तानेका गाडामा चढेर श्रीकृष्णको कीर्ति गाउँदै गोवर्धनको परिक्रमा गर्न थाले।

**कृष्णस्त्वन्यतमं रूपं गोपविश्रम्भणं गतः।**
**शैलोऽस्मीति ब्रुवन् भूरि बलिमादद् बृहद्वपुः॥ ३५॥**

**पदार्थ–**
**गोपविश्रम्भणं गतः** = गोपगोपिनीहरूलाई विश्वास दिलाउन लागिपर्नुभएका
**कृष्णः तु** = श्रीकृष्णले चाहिँ
**अन्यतमं** = अर्को
**रूपं** = रूपलाई धारण गरेर
**बृहद्वपुः** = ठुलो शरीर देखाउँदै
**शैलः अस्मि इति** = म गोवर्धन हुँ यस्तो
**ब्रुवन्** = भन्दै
**भूरि** = धेरै
**बलिम्** = (चढाइएको) नैवेद्य
**आदत्** = खानुभयो

**वाक्यार्थ–** गोपहरूलाई विश्वास दिलाउन चाहने भगवान् श्रीकृष्णले अर्को विशाल रूप धारण गर्नुभयो र 'म गोवर्धन पर्वत हुँ' भन्दै चढाइएका नैवेद्य खानुभयो।

**तस्मै नमो व्रजजनैः सह चक्रेऽऽत्मनात्मने।**
**अहो पश्यत शैलोऽसौ रूपी नोऽनुग्रहं व्यधात्॥ ३६॥**

**पदार्थ–**
**अहो** = आश्चर्य छ
**पश्यत** = सबैले हेर त
**असौ** = यो
**रूपी** = विचित्र रूप धारण गरेको
**शैलः** = पहाडले
**नः** = हामीहरूको
**अनुग्रहं** = कल्याण
**व्यधात्** = गऱ्यो (भन्दै)
**व्रजजनैः सह** = व्रजवासीहरूको साथमा
**आत्मना** = आफैँले
**तस्मै** = त्यो गोवर्धनरूप
**आत्मने** = आफ्नै स्वरूपलाई
**नमः** = नमस्कार
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** 'अहो ! आश्चर्य छ, हेर त विचित्र रूप धारण गरेर पहाडले हामीहरूको अनुग्रह गऱ्यो' भन्दै भगवान् श्रीकृष्णले व्रजवासी गोपहरूसँगै आफूले आफ्नै अर्को रूपलाई नमस्कार गर्नुभयो।

**एषोऽवजानतो मर्त्यान् कामरूपी वनौकसः।**
**हन्ति ह्यस्मै नमस्यामः शर्मणे आत्मनो गवाम्॥ ३७॥**

**पदार्थ–**
**एषः** = यो
**कामरूपी** = इच्छा अनुसार रूप धारण गर्न सक्ने पहाडले
**अवजानतः** = आफ्नो अपमान गर्ने
**वनौकसः** = वनवासीहरू (वा)
**मर्त्यान्** = मानिसहरूलाई पनि
**हन्ति** = नष्ट गर्दछ (त्यसैले)
**हि** = निश्चय नै
**आत्मनः** = आफ्नो र
**गवाम्** = गाईहरूको
**शर्मणे** = कल्याणका लागि
**अस्मै** = यो पर्वतलाई
**नमस्यामः** = नमस्कार गर्दछौं

**वाक्यार्थ–** यो इच्छा अनुसार रूप धारण गर्न सक्ने गोवर्धन पहाडले आफ्नो अपमान गर्ने वनवासी जीवहरूको र मानिसहरूको समेत नाश गर्दछ, त्यसैले आफ्नो र गाईको कल्याणका लागि हामी उसलाई नमस्कार गर्दछौं।

**इत्यद्रिगोद्विजमखं वासुदेवप्रणोदिताः।**
**यथा विधाय ते गोपाः सहकृष्णा व्रजं ययुः॥ ३८॥**

**पदार्थ–**
**इति** = यसरी
**वासुदेवप्रणोदिताः** = श्रीकृष्णद्वारा प्रेरित
**गोपाः** = गोपहरूले
**अद्रिगोद्विजमखं** = पर्वत, गाई र ब्राह्मणहरूलाई प्रसन्न पार्ने यज्ञ
**यथा** = भने बमोजिम
**विधाय** = सम्पन्न गरेर
**सहकृष्णाः** = श्रीकृष्ण सहित
**ते** = ती सबै जना
**व्रजं** = व्रजमा
**ययुः** = गए

**वाक्यार्थ–** यसरी भगवान् श्रीकृष्णको प्रेरणाले गोपहरूले उहाँले भने बमोजिम गिरि, गाई र ब्राह्मणलाई प्रसन्न पार्ने यज्ञ सम्पन्न गरेर श्रीकृष्ण सहित सबै जना व्रजमा गए।

**विवरण–** यो अध्यायमा भगवान् श्रीकृष्णद्वारा इन्द्रयागको परम्परालाई रोकी गोवर्धनपूजाको परम्परा सुरु गरिएको प्रसङ्ग छ। यहाँ भगवान्ले इन्द्रयागलाई भन्दा पनि इन्द्रको अभिमानलाई ध्वस्त गर्न खोज्नुभएको हो। कुलधर्म या परम्परागत चालचलनलाई पनि धर्मको एउटा अङ्गकै रूपमा मानिएकाले भगवान्ले वेदविधिद्वारा प्रतिपादित नभए पनि त्यो इन्द्रपूजालाई नष्ट गरिहाल्नुपर्ने अवस्था थिएन, तर इन्द्रका बढ्दो अभिमानलाई भने हटाइहाल्नु पर्ने थियो। त्यसैले श्रीधर स्वामीले अध्यायको सुरुवातमा यसलाई इन्द्रको यज्ञ भङ्ग गर्ने लीला नभनेर इन्द्रको अभिमान भङ्ग गर्ने लीलाको रूपमा प्रतिपादन गर्नुभएको छ। सुबोधिनीकारले चीरहरण, यज्ञपत्नीहरूको स्वीकार र इन्द्रयागध्वंस यी तीन लीलामा तीन थरी व्यक्तिहरूको निरोध भएको देखाउनुभएको छ। चीरहरण लीलामा भगवान्का लागि संसारै भुल्ने गोपिनीहरूको मनको निरोध गरिएको थियो। यसका लागि श्रीकृष्णले तिनीहरूका वस्त्रहरू लिइदिनुभएको थियो। अर्को लीलामा उहाँले यज्ञपत्नीहरूलाई स्वीकार गरी तिनका पति ब्राह्मणहरूको घमन्ड नष्ट गर्नुभएको

थियो भने यो अध्यायमा चाहिँ इन्द्रको यज्ञभागलाई गोवर्धनरूपले आफैँ लिई उनलाई आफ्नो वशमा ल्याउनुभएको छ। कृष्णको प्रेममा जगत् भुल्ने अर्थमा गोपिनीहरूलाई तामस, कर्ममा सधैँ तत्पर रहने भएकाले कर्मश्रद्धा भएका ब्राह्मणलाई राजस र देवता स्वयं ज्ञानयुक्त हुने भएकाले इन्द्रलाई सात्त्विक भनी छुट्याइएको छ। वल्लभाचार्य लेख्नुहुन्छ– **येषु ते सुप्रतिष्ठिताः** जो-जो जुन-जुन साधनद्वारा आफूलाई प्रतिष्ठित र सुरक्षित मान्थे, तिनका ती-ती साधनलाई नै भगवान्ले हरण गरिदिनुभएको छ। गोपकुमारीहरू वस्त्रद्वारा ढाकिएर आफ्नो अस्तित्व सुरक्षित ठान्थे, याज्ञिक ब्राह्मणहरू सती पत्नी पाएर आफूलाई प्रतिष्ठित मान्थे भने इन्द्र पनि प्राणीहरूद्वारा दिइने विशेष हवि पाएर आफूलाई प्रतिष्ठित ठान्थे। यी तीनै ओटाको प्रतिष्ठालाई भगवान्ले लिइदिनुभएको छ।

अर्को रूपले विचार गर्दा यी तीन अध्यायमा तीन प्रकारले अभिमान भङ्ग गरिएको छ। गोपिनीहरू आफू स्त्री भएको र कृष्णभन्दा भिन्न भएको ठान्थे। सर्वरूप परमात्माभन्दा आफूलाई अलग अस्तित्वले युक्त मान्नु र शरीरलाई नै आफू ठान्नु यो उनीहरूको सूक्ष्म अहङ्कार थियो। यसै गरी ब्राह्मणहरू पनि आफूलाई शास्त्रज्ञान र कर्मनिष्ठा सबै साधनले युक्त भएका महाज्ञानी सम्झिन्थे। उनीहरू ज्यादै अभिमानी थिए, त्यसैले उनीहरूले स्वयं श्रीकृष्णको सन्देशलाई पनि अवज्ञा गरे। तर भगवान्ले उनीहरूका पत्नीहरूको माध्यमले तिनीहरूको अभिमानलाई पनि ध्वस्त गरिदिनुभयो। अर्का महाअभिमानी इन्द्र हुन्, जसले कृष्णसँगै द्वेष गर्ने साहस समेत गरे। गाउँलेहरूले पानी बर्सिएको देखेर आफूलाई ईश्वर भनेको भरमा उनले त आफूलाई साँच्चै ईश्वर पो ठान्न थालेछन्। के गोपहरूले पूजा गरिदिएको भरमा उनी ईश्वर नै भइहाल्थे र ? आफू ईश्वर नभएको भन्ने सत्य स्विकार्न पनि उनलाई धेरै समय लाग्यो। यस दृष्टिले विचार गर्दा आफूलाई ईश्वर नै ठान्ने अज्ञानले युक्त इन्द्रमा भयङ्कर तामस अभिमान रहेको देखिन्छ। शास्त्रज्ञान र कर्मनिष्ठाको आधारमा आफूलाई पूज्य सम्झिने, तर सानो शिक्षाले नै श्रीकृष्णको महत्तालाई बुझ्ने ब्राह्मणहरूमा राजस अभिमान देखिन्छ भने कृष्णप्रेममा सबै भुले तापनि कृष्णभन्दा आफ्नो अलग अस्तित्व मानी उहाँको अघि उपस्थित हुन लज्जाबोध गर्ने गोपकुमारीहरूमा सात्त्विक अभिमान देखिन्छ। यसरी अभिमान नाशको लीलामा गोपकुमारीहरूको व्यष्टि अस्तित्वबोध या अभिमानलाई नष्ट गरी उनीहरूलाई आफूमा मिलाउनु मुख्य उद्देश्य हो भने त्यस अनुकूलताका लागि ब्राह्मण र देवताहरूको अभिमान नष्ट गर्नु आनुषङ्गिक उद्देश्य हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां**

**दशमस्कन्धे पूर्वार्धे चतुर्विंशोऽध्यायः ॥ २४ ॥**

# अथ पञ्चविंशोऽध्यायः

## गोवर्धन धारण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इन्द्रस्तदात्मनः पूजां विज्ञाय विहतां नृप।**

**गोपेभ्यः कृष्णनाथेभ्यो नन्दादिभ्यश्चुकोप सः॥ १॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**तदा** = त्यस वेला
**इन्द्रः** = इन्द्रले
**आत्मनः** = आफ्नो
**पूजां** = पूजा (गोपहरूद्वारा)
**विहतां** = त्यागिएको
**विज्ञाय** = बुझेर
**सः** = ती देवराज इन्द्र
**कृष्णनाथेभ्यः** = श्रीकृष्णलाई रक्षक मान्ने
**नन्दादिभ्यः** = नन्द आदि
**गोपेभ्यः** = गोपहरूप्रति
**चुकोप** = रिसाए

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यस वेला आफ्नो पूजा त्यागेको कुरा बुझेर श्रीकृष्णलाई नै रक्षकको रूपमा मान्ने नन्द आदि गोपहरूसँग इन्द्र रिसाए।

**गणं सांवर्तकं नाम मेघानां चान्तकारिणाम्।**

**इन्द्रः प्राचोदयत् क्रुद्धो वाक्यं चाहेशमान्युत॥ २॥**

**पदार्थ–**
**क्रुद्धः** = रिसाएका
**इन्द्रः** = इन्द्रले
**अन्तकारिणाम्** = विनाश गर्ने
**मेघानां** = मेघको
**सांवर्तकं नाम** = (प्रलय गराउने भनेर प्रसिद्ध) सांवर्तक नामको मेघको
**गणं** = गणलाई
**प्राचोदयत्** = (व्रजको नाश गर्नको लागि) प्रेरित गरे
**उत** = र
**वाक्यं** = यस्तो कुरा
**आह च** = भने पनि

**वाक्यार्थ–** अपमानले गर्दा रिसाएका इन्द्रले विनाशशील सांवर्तक नामको (प्रलय गर्ने) मेघलाई व्रजको विनाश गर्नका लागि प्रेरणा गरे र भने।

**अहो श्रीमदमाहात्म्यं गोपानां काननौकसाम्।**

**कृष्णं मर्त्यमुपाश्रित्य ये चक्रुर्देवहेलनम्॥ ३॥**

**पदार्थ–**
**अहो** = आश्चर्य छ
**काननौकसां** = वनमा बस्ने
**गोपानां** = गोपहरूको
**श्रीमदमाहात्म्यं** = सम्पत्तिको घमन्डको थुप्रो (हेर त)
**ये** = जो गोठालाहरूले
**मर्त्यम्** = साधारण मानिस
**कृष्णं** = कृष्णको
**उपाश्रित्य** = आश्रयमा रहेर
**देवहेलनम्** = देवताको अपहेलना
**चक्रुः** = गरे

**वाक्यार्थ–** अहो आश्चर्य छ ! यी वनवासी गोपहरूको ऐश्वर्यको घमन्डको थुप्रो हेर त ! यिनीहरूले साधारण मानिस कृष्णको आश्रयमा रहेर हामी देवताको अपहेलना गरे।

**यथादृढैः कर्ममयैः क्रतुभिर्नामनौनिभैः ।**

**विद्यामान्वीक्षिकीं हित्वा तितीर्षन्ति भवार्णवम् ॥ ४ ॥**

**वाचालं बालिशं स्तब्धमज्ञं पण्डितमानिनम् ।**

**कृष्णं मर्त्यमुपाश्रित्य गोपा मे चक्रुरप्रियम् ॥ ५ ॥**

**पदार्थ–**
**यथा** = जसरी (लोकमा मूर्ख मानिसहरू)
**आन्वीक्षिकीं विद्याम्** = ब्रह्मविद्यालाई
**हित्वा** = छाडेर
**अदृढैः** = नाशवान्
**कर्ममयैः** = क्रियाद्वारा सम्पादन गरिने
**नामनौनिभैः** = नाममात्रको थोत्रो डुङ्गाजस्तो
**क्रतुभिः** = यज्ञयागादिद्वारा
**भवार्णवं** = संसारको सागरलाई
**तितीर्षन्ति** = तर्न खोज्दछन्, त्यसै गरी
**गोपाः** = यी गोपहरूले पनि
**वाचालं** = धैरै बोल्ने
**बालिशं** = एउटा बालक
**स्तब्धम्** = अभिमानी
**अज्ञं** = केही नजान्ने तर
**पण्डितमानिनं** = आफूलाई विद्वान् सम्झने
**मर्त्यम्** = मर्ने स्वभाव भएका
**कृष्णं** = कृष्णलाई
**उपाश्रित्य** = आश्रय मानेर
**मे** = मेरो
**अप्रियम्** = अपहेलना
**चक्रुः** = गरे

**वाक्यार्थ–** जसरी लोकमा मूर्ख मानिसहरू संसारसागर तर्नको लागि ब्रह्मविद्यालाई छाडेर नाशवान् र क्रियात्मक नाम मात्रका डुङ्गा जस्ता यज्ञहरूको सहारा लिन्छन्, त्यस्तै यी गोपहरूले पनि यो धैरै बोल्ने, अज्ञानी, अभिमानी तर आफूलाई विद्वान् सम्झने र मर्ने स्वभाव भएको बालक कृष्णको आश्रयमा रहेर मेरो अपहेलना गरे।

**विवरण–** अभिमानी इन्द्रले गरेको श्रीकृष्णको निन्दालाई व्याख्याकारहरूले स्तुतिको रूपमा अर्थ्याउनुभएको छ। श्रीधरस्वामी लेख्नुहुन्छ– **इन्द्रस्य भारती कृष्णं स्तौति** अर्थात् इन्द्रले निन्दा गरे पनि उनको वचनको अधिष्ठात्री देवीले भने श्रीकृष्णको स्तुति नै गरिरहेकी छिन्। **वाचालं** अर्थात् प्यारप्यार जे पायो त्यही बोल्ने भन्ने निन्दापरक अर्थ हो, तर स्तुति अर्थ गर्दा धैरै बोल्नुको अर्थ वेद आदि अनेक शास्त्रहरूका उपदेष्टा या सम्प्रदायप्रवर्तक भन्ने हुन्छ। अर्को अर्थ चाहिँ **वाचा अलं, पूर्णं** जहाँ वाणीको प्रवेश छैन, त्यो परमात्मा भन्ने हुन्छ। पूरणार्थक **अल्** धातुमा अच्प्रत्यय लागेर **अलं** शब्द बन्दछ, यो अर्थ गर्दा **वाचालं** शब्द द्वितीयाको एकवचनको रूप हो। **बालिश**को अर्थ मूर्ख या केही नजान्ने भन्ने हुन्छ, तर स्तुतिमा चाहिँ यसको अर्थ केही नजान्ने बच्चा जस्तै अभिमानरहित भन्ने हुन्छ। सुबोधिनीकारले **बालि** (सुग्रीवका दाजु)को पनि **शं** अर्थात् कल्याण भयो जसबाट भन्ने अर्थमा **बालिश** शब्दले भगवान्लाई बुझाउने जनाउनुभएको छ। **स्तब्ध**को अर्थ हुन्छ– नम्रतारहित। परमात्माभन्दा ठुलो एवं वन्दना गर्न योग्य कुनै अर्को नभएकाले उहाँ नम्र

हुनुहुन्न। परमात्मा **अज्ञ** हुनुहुन्छ, यसको अर्थ हो, उहाँभन्दा अर्को कुनै **ज्ञ** अर्थात् जान्ने छैन। **पण्डितमानी**को सामान्यतः अर्थ आफैँलाई पण्डित मान्ने भन्ने हुन्छ। तर स्तुतिपरक अर्थ गर्दा **पण्डित** अर्थात् श्रेष्ठ बुद्धि भएका ब्रह्मज्ञानीहरूद्वारा पनि माननीय भएको भन्ने अर्थ हुन्छ। श्रीकृष्ण अर्थात् सच्चिदानन्दरूप ब्रह्म भएर पनि उहाँ **मर्त्य** अर्थात् मानवशरीरमा अवतीर्ण हुनुभएको छ। यस्ता परमात्माको सहायताद्वारा गोपहरूले मेरो **अप्रिय** अर्थात् जुनभन्दा माथि प्रिय छैन, त्यस्तो हित हुने काम गरे। इन्द्रको अभिमान नष्ट भई उनी भगवान्‌को शरणमा जानु उनकै लागि परम हित हो।

यसरी इन्द्रले श्रीकृष्णलाई निन्दा गरेको यस श्लोकको स्तुतिपरक अर्थ पनि गर्न सकिन्छ।

**एषां श्रियावलिप्तानां कृष्णेनाध्मायितात्मनाम्।**
**धुनुत श्रीमदस्तम्भं पशून् नयत सङ्क्षयम्॥ ६॥**

**पदार्थ–**
**श्रियावलिप्तानां** = ऐश्वर्यले घमन्डी भएका तथा
**कृष्णेन** = कृष्णद्वारा
**आध्मायितात्मनां** = मनोबल ज्यादै बढाइएका
**एषां** = यी गोठालाहरूको
**श्रीमदस्तम्भं** = सम्पत्तिको घमन्डलाई
**धुनुत** = हल्लाइदेओ र
**पशून्** = पशुहरूलाई पनि
**सङ्क्षयम् नयत** = विनाशतिर लैजाओ (नाश गर)

**वाक्यार्थ–** हे मेघहरू हो ! ऐश्वर्यले मातेका र श्रीकृष्णको भनाइले मनोबल ज्यादै बढेका यी गोठालाहरूको सम्पत्तिको घमन्डलाई नाश गर र यिनका पशुहरूको पनि विनाश गर।

**अहं चैरावतं नागमारुह्यानुव्रजे व्रजम्।**
**मरुद्गणैर्महावीर्यैर्नन्दगोष्ठजिघांसया॥ ७॥**

**पदार्थ–**
**अहं च** = म पनि
**ऐरावतं** = ऐरावत नामको
**नागं** = हात्तीमा
**आरुह्य** = चढेर
**नन्दगोष्ठजिघांसया** = नन्दको गोठ (व्रज)लाई विनाश गर्न
**महावीर्यैः** = अत्यन्त बलशाली
**मरुद्गणैः** = हुरी-बतास सहित
**व्रजम्** = व्रजमा
**हि** = निश्चय नै
**अनुव्रजे** = पछि-पछि आउनेछु

**वाक्यार्थ–** म पनि ऐरावतमा चढेर अत्यन्त बलशाली हुरी-बतासलाई साथमा लिई नन्दको व्रजलाई विनाश गर्न तिमीहरूको पछि-पछि आउनेछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्थं मघवताज्ञप्ता मेघा निर्मुक्तबन्धनाः।**
**नन्दगोकुलमासारैः पीडयामासुरोजसा॥ ८॥**

**पदार्थ–**
**इत्थं** = यसरी
**मघवता** = इन्द्रद्वारा
**आज्ञप्ताः** = आज्ञा दिइएका र
**निर्मुक्तबन्धनाः** = स्वतन्त्र छाडिएका
**मेघाः** = मेघहरूले
**नन्दगोकुलम्** = नन्दको गोकुलमा
**आसारैः** = मुसलधारे पानी पारेर
**ओजसा** = बलपूर्वक
**पीडयामासुः** = बाधा गर्न थाले

**वाक्यार्थ–** यसप्रकार इन्द्रद्वारा आज्ञा दिइएका र स्वतन्त्र भएका मेघहरूले नन्दको गोकुलमा गई मुसलधारे पानी पारेर उनीहरूलाई बेसरी सताउन थाले।

**विद्योतमाना विद्युद्भिः स्तनन्तः स्तनयित्नुभिः।**
**तीव्रैर्मरुद्गणैर्नुन्ना ववृषुर्जलशर्कराः॥ ९॥**

**पदार्थ–**
**विद्युद्भिः** = बिजुलीहरूद्वारा
**विद्योतमानाः** = चम्किरहेका र
**स्तनयित्नुभिः** = मेघहरूद्वारा
**स्तनन्तः** = गर्जिरहेका
**तीव्रैः** = अति वेगशाली
**मरुद्गणैः** = हुरी–बतासद्वारा
**नुन्नाः** = प्रेरित भएका
**जलशर्कराः** = पानीका फोहराहरू
**ववृषुः** = बर्सिए

**वाक्यार्थ–** बिजुलीले गर्दा चम्किरहेका, मेघले गर्दा गर्जिरहेका र हुरी–बतासद्वारा जतातत्तै लगिएका पानीका फोहराहरू बर्सिए।

**स्थूणास्थूला वर्षधारा मुञ्चत्स्वभ्रेष्वभीक्ष्णशः।**
**जलौघैः प्लाव्यमाना भूर्नादृश्यत नतोन्नतम्॥ १०॥**

**पदार्थ–**
**अभीक्ष्णशः** = बारम्बार
**स्थूणास्थूलाः** = खम्बाजस्ता ठुला
**वर्षधाराः** = पानीका धाराहरू
**अभ्रेषु** = मेघहरूले
**मुञ्चत्सु** = बर्साएपछि
**जलौघैः** = पानीको प्रवाहद्वारा
**प्लाव्यमाना** = डुबाउन लागिएको
**भूः** = व्रजभूमि
**नतोन्नतम्** = होचो र अग्लो
**न अदृश्यत** = देखिएन

**वाक्यार्थ–** मेघले बारम्बार खम्बाजस्ता ठुला पानीका धारा बर्साउनाले डुब्न लागेको व्रजभूमिमा कुनै पनि होचो–अग्लो भाग देखिएन।

**अत्यासारातिवातेन पशवो जातवेपनाः।**
**गोपा गोप्यश्च शीतार्ता गोविन्दं शरणं ययुः॥ ११॥**

**पदार्थ–**
**अत्यासारातिवातेन** = अति ठुलो वर्षा र हुरीबतास आउनाले
**शीतार्ताः** = जाडाले कठ्याङ्ग्रिएका
**जातवेपनाः** = काँप्न थालेका
**पशवः** = पशुहरू
**गोपाः** = गोपहरू र
**गोप्यः च** = गोपिनीहरू पनि
**गोविन्दं** = श्रीकृष्णको
**शरणं** = शरणमा
**ययुः** = गए

**वाक्यार्थ–** अति ठुलो वर्षा र हुरीबतास आउनाले जाडाले कठ्याङ्ग्रिएका र काँप्न थालेका पशु, गोप र गोपिनीहरू सबै श्रीकृष्णको शरणमा गए।

**शिरः सुतांश्च कायेन प्रच्छाद्यासारपीडिताः।**

**वेपमाना भगवतः पादमूलमुपाययुः॥ १२॥**

**पदार्थ–**
**आसारपीडिताः** = ठुलो वर्षाले सताइएका
**वेपमानाः** = काँपिरहेका (पशु, गोप र गोपिनीहरू)
**शिरः** = आफ्नो टाउकोलाई र
**सुतान् च** = आफ्ना बालबच्चाहरूलाई पनि
**कायेन** = आफ्नै शरीरले
**प्रच्छाद्य** = ढाकेर
**भगवतः** = भगवान्‌को
**पादमूलम्** = शरणमा
**उपाययुः** = गए

**वाक्यार्थ–** ठुलो वर्षाद्वारा सताइएका, काँपिरहेका पशुहरू, गोपहरू र गोपिनीहरू आफ्नो शिरलाई जोगाउँदै र आफ्नै शरीरले बालवच्चाहरूलाई ढाक्दै भगवान् श्रीकृष्णको शरणमा गए।

**कृष्ण कृष्ण महाभाग त्वन्नाथं गोकुलं प्रभो।**

**त्रातुमर्हसि देवान्नः कुपिताद् भक्तवत्सल॥ १३॥**

**पदार्थ–**
**कृष्ण कृष्ण** = हे श्रीकृष्ण
**महाभाग** = हे भाग्यवान्
**प्रभो** = हे सर्वसमर्थ
**भक्तवत्सल** = हे भक्तरक्षक
**त्वन्नाथं** = हजुरको शरणमा रहेको
**गोकुलं** = गोकुललाई र
**नः** = हामीहरूलाई पनि
**कुपितात्** = रिसाएका
**देवात्** = देवता इन्द्रबाट
**त्रातुम्** = रक्षा गर्न
**अर्हसि** = समर्थ हुनुहुन्छ

**वाक्यार्थ–** हे श्रीकृष्ण! हे भाग्यशाली प्रभु! हे भक्तरक्षक! शरणमा परेको गोकुल र हामीहरूलाई रिसाएका देवता इन्द्रबाट रक्षा गर्नुहोस्।

**शिलावर्षातिवातेन हन्यमानमचेतनम्।**

**निरीक्ष्य भगवान् मेने कुपितेन्द्रकृतं हरिः॥ १४॥**

**पदार्थ–**
**शिलावर्षातिवातेन** = असिना, पानी र ठुलो हुरी-बतासले
**हन्यमानम्** = प्रहार गरिएको
**अचेतनं** = बेहोस भएको गोकुल (गोकुलबासी)लाई
**निरीक्ष्य** = देखेर
**भगवान् हरिः** = भगवान् श्रीकृष्णले
**कुपितेन्द्रकृतं** = रिसाएका इन्द्रद्वारा यो सबै गरिएको हो भन्ने
**मेने** = बुझ्नुभयो

**वाक्यार्थ–** असिना, पानी र ठुलो हुरी-बतासको प्रहारले गोकुलवासीहरू बेहोस भएको देखेर

रिसाएका इन्द्रद्वारा यो सबै काम गरिएको हो भन्ने कुरा भगवान् श्रीकृष्णले बुझ्नुभयो।

**अपर्त्वत्युल्बणं वर्षमतिवातं शिलामयम्।**
**स्वयागे विहतेऽस्माभिरिन्द्रो नाशाय वर्षति॥ १५॥**

**पदार्थ–**
**अस्माभिः** = हामीहरूद्वारा
**स्वयागे** = इन्द्रको यागलाई
**विहते** = छाडेपछि
**इन्द्रः** = इन्द्रले
**नाशाय** = व्रजको विनाश गर्न
**अपर्त्वत्युल्बणं** = विना मौसममा नै यो ज्यादै भयङ्कर
**अतिवातं** = हुरीबतासयुक्त
**शिलामयम्** = असिनासहित
**वर्षम्** = वृष्टि
**वर्षति** = वर्षा गरिरहेका छन्

**वाक्यार्थ–** हामीहरूले इन्द्रको यज्ञ बन्द गराएपछि व्रजलाई नाश गर्न इन्द्रले विना मौसममा नै यो ज्यादै भयङ्कर हुरी–बतास सहितको असिना–पानीको वर्षा गराइरहेका छन्।

**तत्र प्रतिविधिं सम्यगात्मयोगेन साधये।**
**लोकेशमानिनां मौढ्याद्धरिष्ये श्रीमदं तमः॥ १६॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ (इन्द्रले यस्तो काम गरेकोमा)
**आत्मयोगेन** = आफ्नो योगमायाद्वारा
**सम्यक्** = राम्रोसँग
**प्रतिविधिं** = यसको प्रत्युत्तर
**साधये** = सिद्ध गर्नेछु
**मौढ्यात्** = मूर्खताको कारणले
**लोकेशमानिनां** = आफूलाई लोकपाल मान्ने यी देवताहरूको
**श्रीमदं** = ऐश्वर्यको घमन्ड र
**तमः** = अज्ञानलाई
**हरिष्ये** = नाश गरिदिनेछु

**वाक्यार्थ–** (भगवान्ले विचार गर्नुभयो) म योगमायाको सहायताले इन्द्रको यो कर्मको उत्तर दिनेछु। मूर्खताले गर्दा आफूलाई लोकपाल मानेर ऐश्वर्यको घमन्ड गर्ने यी देवताहरूको अहङ्कारलाई म नाश गरिदिनेछु।

**न हि सद्भावयुक्तानां सुराणामीशविस्मयः।**
**मत्तोऽसतां मानभङ्गः प्रशमायोपकल्पते॥ १७॥**

**पदार्थ–**
**सद्भावयुक्तानां** = सात्त्विक भावले युक्त भएका
**सुराणाम्** = देवताहरूको
**ईशविस्मयः** = ईश्वर हुँ भन्ने अहङ्कार हुनु
**न हि** = उचित हुँदैन
**मत्तः** = मबाट
**असतां** = यी दुष्टहरूको
**मानभङ्गः** = मानभङ्ग गराइनु
**प्रशमाय** = शान्तिका लागि
**उपकल्पते** = साधन बन्दछ

**वाक्यार्थ–** सात्त्विक भावले युक्त भएका देवताहरूलाई ईश्वर हुँ भन्ने अहङ्कार हुनुहुँदैन। म यिनीहरूको घमन्डलाई चकनाचूर गराउँछु, त्यो पनि उनीहरूको शान्तिकै लागि हुनेछ।

**तस्मान्मच्छरणं गोष्ठं मन्नाथं मत्परिग्रहम्।**
**गोपाये स्वात्मयोगेन सोऽयं मे व्रत आहितः॥ १८॥**

**पदार्थ**–
**तस्मात्** = त्यसैले
**मच्छरणं** = मेरो शरणमा रहेको
**मन्नाथं** = मलाई नै रक्षक मान्ने
**मत्परिग्रहं** = मबाट नै (परिवारलाई झैँ) रक्षा गरिनुपर्ने
**गोष्ठं** = यो सारा गोठ (व्रज)लाई
**स्वात्मयोगेन** = आफ्नो योगबलद्वारा
**गोपाये** = रक्षा गर्दछु
**मे** = मद्वारा
**सः अयं** = त्यो साराको रक्षा गर्नु नै
**व्रतः** = व्रतको रूपमा
**आहितः** = स्वीकार गरियो

**वाक्यार्थ**— मेरो शरणमा रहेको र मलाई नै रक्षक मानेको र मैले परिवारलाई झैँ रक्षा गर्नुपर्ने यो सम्पूर्ण व्रजभूमिलाई आफ्नो योगबलद्वारा म रक्षा गर्दछु। यही कार्यलाई नै मैले व्रतको रूपमा स्विकारेको छु।

**इत्युक्त्वैकेन हस्तेन कृत्वा गोवर्धनाचलम्।**
**दधार लीलया कृष्णश्छत्राकमिव बालकः॥ १९॥**

**पदार्थ**–
**इति उक्त्वा** = यति भनेर
**कृष्णः** = श्रीकृष्णले
**गोवर्धनाचलम्** = गोवर्धन पर्वतलाई
**लीलया** = सजिलैसित
**एकेन हस्तेन** = एउटै हातले
**बालकः** = बालकले
**छत्राकम् इव** = च्याउलाई झैँ
**कृत्वा** = गरेर
**दधार** = धारण गर्नुभयो

**वाक्यार्थ**— यति भनेर भगवान् श्रीकृष्णले ख्याल ख्यालमैँ गोवर्धन पर्वतलाई एउटै हातले बच्चाले च्याउलाई उठाए झैँ गरी उठाउनुभयो।

**विवरण**— यस श्लोकमा बालकले च्याउ उठाए झैँ गरी श्रीकृष्णले गोवर्धन पर्वतलाई उठाउनुभयो भन्ने वर्णन गरिएको छ। भगवान् आफैँ गोकुलको नाथ अर्थात् स्वामी हुनुहुन्थ्यो। गाई, गोप, नन्द आदि सबै उहाँकै आधारमा थिए। 'जो आफ्नो शरणमा पर्दछ र म हजुरको हुँ भन्छ, त्यसलाई म अभय दिन्छु' भन्ने भगवान्को प्रतिज्ञा रहेको छ। भक्तहरूलाई अभय दिनु नै भगवान्को एक मात्र नियम या व्रत हो। भक्तको रक्षा गर्ने आफ्नो नियमलाई जोगाउनका लागि पनि भगवान्ले ती सबैलाई इन्द्रको अत्याचारबाट रक्षा गर्नुपर्ने थियो। यसका लागि भगवान्ले पहाडलाई साथ लिनुभयो। जो शत्रुका पनि शत्रु हुन्छन्, ती आफ्ना लागि सहज मित्र हुन्छन्। इन्द्रले पहाडहरूको पखेटा काटेकाले उनी पर्वतका शत्रु हुन्। अहिले इन्द्रले भगवान्सँग शत्रुता गरे, भगवान्ले पनि इन्द्रकै पुराना शत्रु पहाडलाई उठाई इन्द्रको बललाई नष्ट गरिदिनुभयो।

गोवर्धन धारण गर्दा श्रीकृष्ण सात वर्षको हुनुहुन्थ्यो र सातै दिनसम्म उहाँले त्यसलाई धारण गर्नुभयो। यसको तात्पर्य बताउँदै सुबोधिनीकार लेख्नुहुन्छ— **भगवतो गुणानां च मर्यादायां प्रतीक्षार्थम्**। इन्द्रले आफ्ना भक्तहरूलाई नष्ट गर्न खोजेपछि भगवान्ले गोवर्धन पर्वतलाई

उठाउनुभयो। भगवान्मा ऐश्वर्य आदि ६ ओटा गुण या नित्य धर्महरू छन्, सातौँ स्वयं धर्मी परमात्मा हुनुहुन्छ। भगवान्ले हरेक दिन आफ्ना एक-एक गुण वा धर्मबाट व्रजवासीको रक्षा गर्नुभयो। सातौँ दिन उहाँले आफ्नै स्वरूपद्वारा व्रजको रक्षा गर्नुभयो। यति सात दिनसम्म परमात्माले इन्द्रलाई केही गर्नुभएन। भगवान्ले मर्यादालाई देखाउन यसो गर्नुभएको हो। यदि भगवान्ले आफ्नै स्वरूपले रक्षा गरिरहँदा त्यसलाई पनि अनादर गरी इन्द्रले आठौँ दिन पनि उत्पात मच्चाएको भए भगवान्ले त्यसलाई सहनुहुन्नथ्यो। तर इन्द्रले यो सब थाहा पाए झैँ सात दिन पूरा नहुँदै थोरै रात बाँकी रहँदा नै आफूले गरेको उत्पातलाई रोके। सात दिनसम्म रक्षा गर्नुको यही तात्पर्य हो।

गोवर्धन धारण गर्नुको आध्यात्मिक रहस्य पनि रहेको छ। गोपिनीहरूले कृष्णलाई तन, मन, वचन सबै रूपले पाउन खोजेका थिए। भगवान् श्रीकृष्णले पनि तिनको सम्पूर्ण इन्द्रियले आस्वादन गर्न सक्ने गरी आफ्नो अनन्त लीलालाई प्रकट गर्न चाहनुभएको थियो। इन्द्रियहरू स्वभावतः नै कम शक्तिशाली र परिच्छिन्न हुन्छन्। परमात्माको विराट् महिमा अनन्त एवं अप्रमेय छ। परमात्माको महिमा जब पूर्ण रूपले प्रकाशित हुन्छ, तब व्यक्तिको सीमित चेतनाले त्यसलाई ग्रहण गर्नै सक्दैन, उल्टै त्यसको तीव्र झोक्काबाट नष्ट हुने सक्ने सम्भावना रहन्छ। सानो भकुन्डोभित्र त्यसको क्षमताभन्दा बढी हावा भर्न खोज्दा भकुन्डो फुटे झैँ अथवा मसिनो तारबाट हजारौँ भोल्टेजको विद्युत् तरङ्ग प्रवाहित गर्दा तार डढे झैँ एकैपटक अनन्त परमात्मालाई पाउँदा त्यसको प्रकाशले लौकिक इन्द्रिय नष्ट हुन सक्छन्। इन्द्रिय, मन आदि जब शुद्ध एवं समर्थ हुन्छन्, तब मात्र उसले आत्माको महिमालाई अनुभव गर्न सक्छ। यही कुरा कठोपनिषद् (१/२/२०)मा बताइएको छ— **तमक्रतुः पश्यति वीतशोको धातुः प्रसादान्महिमानमात्मनः**। गोवर्धन धारण गर्नुसँगै इन्द्रियहरूलाई शुद्ध एवं समर्थ पार्ने यही रहस्य लुकेको छ। आफूले रासको क्रममा व्यक्त गर्ने अनन्त लीलावैभवलाई गोपिनीहरूका सबै इन्द्रियले राम्ररी आस्वादन गर्न सकून् भन्नका लागि उहाँले गोवर्धन धारण गर्नुभयो। **गो** शब्दको एउटा अर्थ इन्द्रिय पनि हुन्छ, त्यसको **वर्धन** अर्थात् वृद्धि या पुष्टि भएपछि मात्र तिनले परमानन्दको तीव्र प्रवाहलाई अनुभव गर्न सक्छन्। भगवान्को कृपादृष्टिद्वारा नै **गोवर्धन** अर्थात् गोपिनीका इन्द्रियहरूको पुष्टि हुन्छ, भगवान्ले गोवर्धनरूपले त्यही कृपादृष्टिलाई स्वीकार गर्नुभएको हो। सात दिन गोवर्धन धारण गर्नुको रहस्य चाहिँ पाँच ज्ञानेन्द्रिय, मन र बुद्धि यी सबैलाई आफ्नो शक्तिले पुष्टि गर्नु नै हो।

**अथाह भगवान् गोपान् हेऽम्ब तात व्रजौकसः।**

**यथोपजोषं विशत गिरिगर्तं सगोधनाः॥ २०॥**

**पदार्थ**–
**अथ** = त्यसपछि
**भगवान्** = भगवान् श्रीकृष्णले
**गोपान्** = गोपहरूलाई
**आह** = भन्नुभयो
**हे अम्ब** = हे आमा
**तात** = हे बुबा
**व्रजौकसः** = हे व्रजवासीहरू
**यथोपजोषं** = सुखपूर्वक
**सगोधनाः** = गाईरूप सम्पत्ति लिएर
**गिरिगर्तं** = पहाडको ओडारमा

**विशत** = प्रवेश गर्नुहोस्

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले गोपहरूलाई भन्नुभयो– हे आमा ! हे बुवा ! हे व्रजवासीहरू ! सम्पूर्ण गाईहरू सहित तपाईंहरू मैले उठाएको गोवर्धन पर्वतको ओडारमा सुखपूर्वक प्रवेश गर्नुहोस्।

**न त्रास इह वः कार्यो मद्धस्ताद्रिनिपातने।**
**वातवर्षभयेनालं तत्त्राणं विहितं हि वः॥ २१॥**

**पदार्थ–**
**मद्धस्ताद्रिनिपातने** = मेरो हातबाट पर्वत खस्ला भनेर
**वः** = तपाईंहरूले
**इह** = यहाँ
**त्रासः** = डर
**न कार्यः** = मान्नुपर्दैन
**वातवर्षभयेन** = हावा र वर्षाको डर मानेर
**अलं** = अब केही काम छैन
**वः** = तपाईंहरूलाई
**तत्त्राणं** = त्यसबाट रक्षा गर्ने काम
**हि** = निश्चय नै
**विहितं** = गरिएको छ

**वाक्यार्थ–** हे व्रजवासीहरू ! मेरो हातबाट पर्वत खस्ला भनेर डर मान्नुपर्दैन। अब हावा र वर्षाबाट पनि डर छैन किनभने सबैको रक्षाका लागि मैले उपाय गरिसकेको छु।

**तथा निर्विविशुर्गर्तं कृष्णाश्वासितमानसाः।**
**यथावकाशं सधनाः सव्रजाः सोपजीविनः॥ २२॥**

**पदार्थ–**
**कृष्णाश्वासितमानसाः** = श्रीकृष्णको आश्वासनले ढुक्क भएका
**सव्रजाः** = सारा व्रजवासीहरू सहित भएका
**सोपजीविनः** = उपजीवी (आश्रितहरू)हरूले सहित भएका
**सधनाः** = गोधन आदिलाई साथ लिएका गोप र गोपिनीहरू
**तथा** = भने बमोजिम
**यथावकाशं** = खुलमखुला रूपमा
**गर्तं** = पर्वतको ओडारमा
**निर्विविशुः** = प्रवेश गरे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको आश्वासनले ढुक्क भएका सारा गोप-गोपिनीहरू उहाँले भने बमोजिम सारा व्रजवासीहरू, आश्रितहरू र गाईहरूलाई साथमा लिएर पर्वतको ओडारमा पसे।

**क्षुत्तृड्व्यथां सुखापेक्षां हित्वा तैर्व्रजवासिभिः।**
**वीक्ष्यमाणो दधावद्रिं सप्ताहं नाचलत् पदात्॥ २३॥**

**पदार्थ–**
**क्षुत्तृड्व्यथां** = भोक-प्यासको पीडा र
**सुखापेक्षां** = (निद्रा आदि) सुखको चाहनालाई
**हित्वा** = छोडेर
**तैः** = ती
**व्रजवासिभिः** = व्रजवासी गोप-गोपिनीद्वारा
**वीक्ष्यमाणः** = लगातार हेरिनुभएका भगवान् श्रीकृष्णले
**सप्ताहं** = सात दिनसम्म

| | | |
|---|---|---|
| **अद्रिं** = पर्वतलाई | **पदात्** = एक पाउ पनि | **न अचलत्** = चल्नुभएन |
| **दधौ** = धारण गर्नुभयो | (यताउता) | |

**वाक्यार्थ–** सारा व्रजवासीहरूले भोक-प्यासको पीडा र सुखको चाहनालाई छाडेर लगातार श्रीकृष्णलाई हेरिरहे। भगवान् श्रीकृष्णले पनि सात दिनसम्म पर्वतलाई लिएर उभिनुभयो, उहाँ एक पाउ पनि यताउति चल्नुभएन।

**कृष्णयोगानुभावं तं निशाम्येन्द्रोऽतिविस्मितः।**
**निस्तम्भो भ्रष्टसङ्कल्पः स्वान् मेघान् संन्यवारयत्॥ २४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **अतिविस्मितः** = अत्यन्त चकित भएका | **इन्द्रः** = इन्द्रले |
| **तं** = त्यस्तो | **निस्तम्भः** = अहङ्काररहित भएका | **स्वान्** = आफ्ना |
| **कृष्णयोगानुभावं** = श्रीकृष्णको अलौकिक सामर्थ्यलाई | **भ्रष्टसङ्कल्पः** = व्रजलाई डुबाउने सङ्कल्पबाट च्युत भएका | **मेघान्** = मेघहरूलाई |
| **निशाम्य** = देखेर | | **सन्न्यवारयत्** = रोके |

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको अलौकिक सामर्थ्य देखेर इन्द्र चकित भए र उनले अहङ्कार र व्रजलाई डुबाउने सङ्कल्पबाट च्युत भई मेघलाई पानी पार्नबाट रोके।

**खं व्यभ्रमुदितादित्यं वातवर्षं च दारुणम्।**
**निशाम्योपरतं गोपान् गोवर्धनधरोऽब्रवीत्॥ २५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **व्यभ्रं** = बादल हटेको | **गोवर्धनधरः** = गोवर्धनधारी भगवान् श्रीकृष्णले |
| **दारुणम्** = भयावह | **उदितादित्यं** = सूर्य उदाएको | |
| **वातवर्षं** = हुरी-बतास | **खं च** = आकाशलाई पनि | **गोपान्** = गोपहरूलाई |
| **उपरतं** = शान्त भएको (देखेर र) | **निशाम्य** = देखेर | **अब्रवीत्** = भन्नुभयो |

**वाक्यार्थ–** आकाशबाट बादल हट्यो, सूर्य देखिए, भयावह वृष्टि र हुरी-बतास पनि शान्त भयो। यो देखेर भगवान् श्रीकृष्णले गोपहरूलाई भन्नुभयो।

**निर्यात त्यजत त्रासं गोपाः सस्त्रीधनार्भकाः।**
**उपारतं वातवर्षं व्युदप्रायाश्च निम्नगाः॥ २६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **निर्यात** = (गोवर्धनको ओडारबाट बाहिर) निस्कनुहोस् | **वातवर्षं** = हुरीबतास र पानी |
| **गोपाः** = हे गोप-गोपिनीहरू | | **उपारतं** = बन्द भयो |
| **सस्त्रीधनार्भकाः** = स्त्री, धन र बालबच्चासहित | **त्रासं** = डर | **निम्नगाः च** = नदीहरू पनि |
| | **त्यजत** = छाड्नुहोस् | **व्युदप्रायाः** = घटिसके |

**वाक्यार्थ–** हे गोपगोपिनीहरू ! तपाईंहरू आफ्ना स्त्री, धन, बालबच्चा आदि लिएर गोवर्धनको ओडारबाट बाहिर निस्कनुहोस्। अब डराउनुपर्दैन, हुरी-बतास र पानी शान्त भइसक्यो र नदीहरू पनि घटेर सामान्य भइसके।

**ततस्ते निर्ययुर्गोपाः स्वं स्वमादाय गोधनम्।**

**शकटोढोपकरणं स्त्रीबालस्थविराः शनैः॥ २७॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**स्त्रीबालस्थविराः** = स्त्री, बालक र बुढाहरूलाई साथमा लिई
**ते** = ती
**गोपाः** = गोपहरू
**शकटोढोपकरणं** = सारा सामग्रीलाई गाडामा बोकाएर
**स्वं स्वम्** = आ-आफ्ना
**गोधनम्** = गोधनलाई पनि
**आदाय** = लिएर
**शनैः** = बिस्तारै
**निर्ययुः** = (पर्वतको ओडारबाट) निस्किए

**वाक्यार्थ–** त्यसपछि स्त्री, बालक र बुढाहरू सहित सारा गोपहरू गाडामा सामग्रीहरू राखी आ-आफ्ना गाईहरूलाई पनि साथै लिई पर्वतको ओडारबाट बिस्तारै निस्किए।

**भगवानपि तं शैलं स्वस्थाने पूर्ववत् प्रभुः।**

**पश्यतां सर्वभूतानां स्थापयामास लीलया॥ २८॥**

**पदार्थ–**
**प्रभुः** = सर्वसमर्थ
**भगवान् अपि** = भगवान् श्रीकृष्णले पनि
**सर्वभूतानां** = सबैले
**पश्यतां** = हेर्दाहेर्दै
**तं शैलं** = त्यो गोवर्धन पर्वतलाई
**पूर्ववत्** = पहिले झैं नै
**स्वस्थाने** = आफ्नो ठाउँमा
**लीलया** = सजिलैसँग
**स्थापयामास** = राखिदिनुभयो

**वाक्यार्थ–** सर्वसमर्थ श्रीकृष्णले पनि सबैले हेर्दाहेर्दै त्यो गोवर्धन पर्वतलाई पहिले झैं उही ठाउँमा सजिलैसँग राखिदिनुभयो।

**तं प्रेमवेगान्निभृता व्रजौकसो यथा समीयुः परिरम्भणादिभिः।**

**गोप्यश्च सस्नेहमपूजयन्मुदा दध्यक्षताद्भिर्युयुजुः सदाशिषः॥ २९॥**

**पदार्थ–**
**प्रेमवेगात्** = प्रेमको प्रवाहले
**निभृताः** = परिपूर्ण भएका
**व्रजौकसः** = व्रजवासीहरूले
**तं** = उहाँ भगवान् श्रीकृष्णलाई
**परिरम्भणादिभिः** = अङ्कमाल आदिद्वारा
**यथा** = आ-आफ्नो सम्बन्ध अनुसार
**समीयुः** = नजिक गई भेटघाट गरे
**गोप्यः च** = गोपिनीहरूले पनि
**मुदा** = हर्षले
**सस्नेहम्** = स्नेहपूर्वक
**अपूजयन्** = पूजा गरे र
**दध्यक्षताद्भिः** = दही, अक्षता लगाई पानी घुमाएर
**सदाशिषः** = राम्रा-राम्रा आशीर्वादहरू
**युयुजुः** = दिए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको यो अद्भुत कर्मलाई देखेर प्रेमको प्रवाहले पूर्ण भएका व्रजवासीहरूले अङ्कमाल आदि गरेर आ–आफ्नो सम्बन्ध अनुसार नजिक गई भेटघाट गरे। गोपिनीहरूले पनि हर्षले गद्‌गद् हुँदै स्नेहपूर्वक पूजा गरे र दही–अक्षता लगाएर पानी घुमाई राम्रा–राम्रा आशीर्वादहरू दिए।

**यशोदा रोहिणी नन्दो रामश्च बलिनां वरः।**
**कृष्णमालिङ्ग्य युयुजुराशिषः स्नेहकातराः॥ ३०॥**

**पदार्थ–**
**यशोदा** = यशोदा
**रोहिणी** = रोहिणी
**नन्दः** = नन्द र
**बलिनां** = बलवान्‌हरूमा
**वरः** = श्रेष्ठ
**रामः च** = बलराम समेतका
**स्नेहकातराः** = स्नेहले व्याकुल भएका व्रजवासीहरूले
**कृष्णम्** = श्रीकृष्णलाई
**आलिङ्ग्य** = अङ्कमाल गरेर
**आशिषः** = आशीर्वाद
**युयुजुः** = प्रदान गरे

**वाक्यार्थ–** यशोदा, रोहिणी, नन्द र बलशाली बलरामले पनि स्नेहले व्याकुल हुँदै श्रीकृष्णलाई आलिङ्गन गरेर आशीर्वाद दिए।

**दिवि देवगणाः साध्याः सिद्धगन्धर्वचारणाः।**
**तुष्टुवुर्मुमुचुस्तुष्टाः पुष्पवर्षाणि पार्थिव॥ ३१॥**

**पदार्थ–**
**पार्थिव** = हे राजा परीक्षित्
**दिवि** = आकाशमा
**देवगणाः** = देवताहरू
**साध्याः** = साध्यहरू
**सिद्धगन्धर्वचारणाः** = सिद्ध, गन्धर्व र चारणहरूले पनि
**तुष्टाः** = प्रसन्न भएर
**तुष्टुवुः** = स्तुति गर्न थाले र
**पुष्पवर्षाणि** = पुष्पवृष्टिहरू
**मुमुचुः** = छोडे (बर्साउन थाले)

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यस वेला आकाशमा देवता, साध्य, सिद्ध, गन्धर्व र चारणहरूले पनि प्रसन्न हुँदै भगवान् श्रीकृष्णको स्तुति गर्दै पुष्पवृष्टि समेत गर्न थाले।

**शङ्खदुन्दुभयो नेदुर्दिवि देवप्रणोदिताः।**
**जगुर्गन्धर्वपतयस्तुम्बुरुप्रमुखा नृप॥ ३२॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**दिवि** = आकाशमा
**देवप्रणोदिताः** = देवताहरूद्वारा बजाइएका
**शङ्खदुन्दुभयः** = शङ्ख, दुन्दुभि आदि बाजाहरू
**नेदुः** = बज्न थाले
**तुम्बुरुप्रमुखाः** = तुम्बुरु आदि
**गन्धर्वपतयः** = गन्धर्वपतिहरूले
**जगुः** = गाउन थाले

**वाक्यार्थ–** हे राजा परीक्षित् ! आकाशमा देवताहरूले बजाएका शङ्ख, दुन्दुभि आदि बाजाहरू

बज्न थाले र तुम्बुरु आदि गन्धर्वपतिहरूले गाउन थाले।

**ततोऽनुरक्तैः पशुपैः परिश्रितो राजन् स गोष्ठं सबलोऽव्रजद्धरिः।**
**तथाविधान्यस्य कृतानि गोपिका गायन्त्य ईयुर्मुदिता हृदिस्पृशः॥ ३३॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**ततः** = त्यसपछि
**अनुरक्तैः** = प्रेमले पूर्ण भएका
**पशुपैः** = गोपहरूद्वारा
**परिश्रितः** = युक्त भएका
**सबलः** = बलरामसहित
**सः हरिः** = उहाँ भगवान् श्रीकृष्णले
**गोष्ठं** = व्रजतिर
**अव्रजत्** = प्रस्थान गर्नुभयो
**हृदिस्पृशः** = हृदयमा (श्रीकृष्णलाई) छुँदै (सम्झँदै)
**मुदिताः** = अति प्रसन्न भएका
**गोपिकाः** = गोपिनीहरू पनि
**अस्य** = यी श्रीकृष्णको
**तथाविधानि** = त्यस्ता (गोवर्धन धारण आदि विभिन्न खालका)
**कृतानि** = कर्महरूलाई
**गायन्त्यः** = गाउँदै
**ईयुः** = (व्रजतिर) गए

**वाक्यार्थ–** हे परीक्षित्! प्रेमले पूर्ण भएका गोपहरू र बलरामसहित भगवान् श्रीकृष्ण व्रजतिर लाग्नुभयो। प्रेम र प्रसन्नताले भरिपूर्ण भएका भगवान्‌को स्मरण गरिरहने गोपिनीहरू पनि श्रीकृष्णले गरेका अद्‌भुत चरित्रहरू गाउँदै व्रजतिर गए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**पञ्चविंशोऽध्यायः॥ २५॥**

# अथ षड्विंशोऽध्यायः

## भगवान् श्रीकृष्णको प्रभावका बारेमा नन्द र गोपहरूको संवाद

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवंविधानि कर्माणि गोपाः कृष्णस्य वीक्ष्य ते।**

**अतद्वीर्यविदः प्रोचुः समभ्येत्य सुविस्मिताः॥ १॥**

**पदार्थ–**
**कृष्णस्य** = भगवान् श्रीकृष्णका
**एवंविधानि** = यस्ता किसिमका
**कर्माणि** = कर्महरूलाई
**वीक्ष्य** = देखेर
**सुविस्मिताः** = ज्यादै चकित भएका
**अतद्वीर्यविदः** = श्रीकृष्णको प्रभावलाई नबुझेका
**ते** = ती
**गोपाः** = गोपहरू
**समभ्येत्य** = एकै ठाउँमा जम्मा भई
**प्रोचुः** = (आपसमा) भन्न थाले

**वाक्यार्थ–** भगवान् श्रीकृष्णका यस्ता अद्भुत कर्महरूलाई देखेर ज्यादै चकित भएका र श्रीकृष्णको प्रभावलाई बुझ्न नसकेका ती गोपहरू एकै ठाउँमा जम्मा भएर कुरा गर्न थाले।

**विवरण–** यस अध्यायमा गोपिनीहरूले श्रीकृष्णले अहिलेसम्म गरेका सबै पराक्रमहरूलाई सम्झी उहाँ सामान्य नन्दकुमार हुन नसक्ने धारणा व्यक्त गरेका छन् र नन्दले मेरो पुत्र कृष्ण नारायणको अंश भएकाले पराक्रमी भएका हुन् भन्ने उत्तर दिएका छन्। पूतना, तृणावर्त आदिलाई कृष्णले मारेका हुन् भन्नेमा गोपहरूलाई त्यस वेलासम्म विश्वास थिएन, तर आजसम्मका सबै पराक्रमलाई विचार गरी ल्याउँदा ती सबै काम उहाँबाटै भएको हो भन्ने तिनले बुझ्दैगएका छन्। गर्गले कृष्णको नामकरण गर्ने वेलामा नै कृष्णको पराक्रम र ईश्वरीय गुणहरूबारे नन्दलाई सूचित गरेका थिए, तर नन्दले पनि त्यस वेलासम्म यी सबै रहस्यहरूलाई बुझेका थिएनन्। आजसम्मका श्रीकृष्णका चरित्रहरू हेर्दा उनलाई ती भनाइहरूको अर्थ बल्ल खुलेको छ। उनले आफ्नो छोरो कृष्ण नारायणरूप नै भएको निश्चय गरेका छन् र उनले गर्गका तिनै पुराना भविष्यवाणीहरू सुनाएका छन्।

सुबोधिनीकारका अनुसार यस अध्यायमा श्रीकृष्णको स्वरूपज्ञान गराई त्यस विषयको अज्ञान या भ्रमलाई निवारण गरिएको छ। श्रीकृष्णमा सम्पूर्ण व्रजवासीहरूको अन्तःकरणको निरोध भइसकेपछि तिनलाई कृष्णको वास्तविक स्वरूप के हो ? त्यो पनि त थाहा हुनु पर्‍यो ? त्यसैले श्रीकृष्णलाई प्रेम गर्ने सबैका अघि श्रीकृष्णको ईश्वरीय स्वरूपको रहस्योद्घाटन गरिएको छ। अन्तरङ्ग गोपिनीहरूलाई यो पहिल्यै थाहा भए पनि नन्द, यशोदा र अरू गोपगोपीहरूलाई श्रीकृष्णको ईश्वरत्वको पहिलो पटक बोध भएको छ। सुबोधिनीकार लेख्नुहुन्छ– **समत्वाय निरुद्धानां** अर्थात् सात्त्विक, राजस र तामस भेदले अनेक प्रकारले आफूमा निरुद्ध गरिएका गोप–गोपिनीहरूलाई समभाव गराउन या एउटै स्वरूपमा मिलाउन यहाँ भगवान्‌को स्वरूपज्ञान

गराइएको छ। लक्ष्य वस्तुको अखण्डता र पूर्णतालाई नबुझी त्यसमा अखण्ड र पूर्णरूपले मन लगाउन सकिँदैन। अहिलेसम्म भगवान्‌का छुट्टाछुट्टै चरित्रहरू मात्र प्रकाशमा आएका थिए, जसको कारणले अनेक चोटि व्रजवासीहरूको मन निरुद्ध भएको थियो। यो साधनाको अवस्था हो। यसमा खण्ड भावहरूद्वारा मात्र मनको निरोध हुन्छ। ज्ञानको प्रक्रियामा भन्ने हो भने यो मुमुक्षुले निरन्तर अभ्यास गरी आत्मामा मन टिकाइरहेको अवस्था हो। जब साध्य तत्त्व अखण्ड एवं पूर्णरूपले भासित हुन्छ, तब साधनावस्था पूरा हुन्छ। सिद्धावस्थामा मात्र लक्ष्य परमात्मामा मन अखण्डरूपले लाग्दछ। वेदान्तको सिद्धान्त अनुसार यो जीवन्मुक्तको अखण्ड आत्मानुभवको अवस्था हो। महारास अखण्ड लीला हो, यसद्वारा गोपिनीहरूको मन अखण्डरूपमा नै परमात्मामा लाग्दछ। पूतना-मृत्युदेखिका अनेक लीलाहरू भने खण्डलीलाहरू हुन्। भावसाधनाको प्रक्रियामा यिनलाई खण्ड भाव र अखण्ड महाभावको संज्ञा दिइएको छ। खण्ड भावहरू अखण्ड महाभावमा पुग्न बीचमा स्वरूपज्ञानको बल आवश्यक हुन्छ। त्यसकै लागि यो प्रसङ्ग बताइएको हो।

**बालकस्य यदेतानि कर्माण्यत्यद्भुतानि वै।**
**कथमर्हत्यसौ जन्म ग्राम्येष्वात्मजुगुप्सितम्॥ २॥**

**पदार्थ–**
**यत्** = किनभने
**बालकस्य** = बालक श्रीकृष्णका
**एतानि** = यी (गोवर्धनधारण आदि)
**अत्यद्भुतानि** = अति विचित्र
**कर्माणि** = कामहरू छन्
**वै** = निश्चय नै
**असौ** = यस्ता व्यक्तिले
**ग्राम्येषु** = हामीजस्ता गाउँलेको
**आत्मजुगुप्सितं** = आफ्नो लागि निन्दित (अनुपयुक्त)
**जन्म** = जन्म लिनु
**कथम्** = कसरी
**अर्हति** = उचित हुन्छ

**वाक्यार्थ–** बालककालमा नै अद्भुत कर्महरू गर्न सक्ने यस्ता व्यक्तिले हामीजस्ता गाउँलेहरूको कुलमा आफ्नो लागि अनुपयुक्त हुने जन्म लिनु कसरी उचित हुन्छ ?

**यः सप्तहायनो बालः करेणैकेन लीलया।**
**कथं बिभ्रद् गिरिवरं पुष्करं गजराडिव॥ ३॥**

**पदार्थ–**
**यः** = जो
**सप्तहायनः** = सातै वर्षको
**बालः** = बालकले
**एकेन** = एउटै
**करेण** = हातले
**लीलया** = सजिलैसँग
**गजराट्** = हात्तीले
**पुष्करं इव** = कमलको फूल उचाले झैं
**गिरिवरं** = ठुलो गोवर्धन पर्वतलाई
**कथं** = कसरी
**बिभ्रत्** = धारण गर्दै (उभिए)

**वाक्यार्थ–** यी सातै वर्षका बालकले एउटै हातले सजिलैसँग हात्तीले कमलको फूल उचाले झैं यत्रो गोवर्धन पर्वतलाई कसरी उचाले ?

**तोकेनामीलिताक्षेण पूतनाया महौजसः ।**

**पीतः स्तनः सह प्राणैः कालेनेव वयस्तनोः ॥ ४ ॥**

**पदार्थ–**
**तनोः** = शरीरको
**वयः** = आयुलाई
**कालेन इव** = कालले (निले) झैँ
**आमीलिताक्षेण** = आँखा चिम्लिरहेका
**तोकेन** = शिशुद्वारा
**महौजसः** = अति बलशाली
**पूतनायाः** = पूतनाको
**प्राणैः सह** = प्राणसहित
**स्तनः** = दूध
**पीतः** = पिइयो

**वाक्यार्थ–** शरीरको आयुलाई कालले निले झैँ आँखा चिम्लिरहेको एउटा शिशुले अत्यन्त बलशाली पूतनाको प्राणसहित दुध पिइदियो ।

**हिन्वतोऽधः शयानस्य मास्यस्य चरणावुदक् ।**

**अनोऽपतद् विपर्यस्तं रुदतः प्रपदाहतम् ॥ ५ ॥**

**पदार्थ–**
**अधः** = (गाडाको) तल
**शयानस्य** = सुतेका
**रुदतः** = रुँदै
**उदक्** = माथितिर
**चरणौ** = आफ्ना दुई खुट्टालाई
**हिन्वतः** = फ्याँकिरहेका
**मास्यस्य** = केवल तीन महिनाको बच्चाको
**प्रपदाहतम्** = पाउको ठक्कर खाएको
**अनः** = गाडा
**विपर्यस्तं** = उल्टिएर
**अपतत्** = लड्यो

**वाक्यार्थ–** गाडामुनि सुतेको र रुँदै दुई खुट्टा माथितिर फट्कारेको एउटा तीन महिनाको बालकको खुट्टाको प्रहारले त्यो गाडा उल्टिएर लड्यो ।

**एकहायन आसीनो ह्रियमाणो विहायसा ।**

**दैत्येन यस्तृणावर्तमहन् कण्ठग्रहातुरम् ॥ ६ ॥**

**पदार्थ–**
**यः** = जुन बालकले
**एकहायनः** = एक वर्षको
**आसीनः** = बसिरहेको वेलामा
**दैत्येन** = तृणावर्त दानवद्वारा
**विहायसा** = आकाशमार्गबाट
**ह्रियमाणः** = लगिँदै गर्दा
**कण्ठग्रहातुरम्** = घाँटी अँठ्याएर छट्पटी पार्दै
**तृणावर्तम्** = तृणावर्तलाई
**अहन्** = मारेका थिए

**वाक्यार्थ–** यिनै बालकलाई एक वर्षको छँदा बसिरहेको वेला तृणावर्त दानवले आकाशमार्गबाट लैजाँदै गर्दा यिनले उसको घाँटी अँठ्याएर छट्पटी पारी मारेका थिए ।

**क्वचिद्धैयङ्गवस्तैन्ये मात्रा बद्ध उलूखले ।**

**गच्छन्नर्जुनयोर्मध्ये बाहुभ्यां तावपातयत् ॥ ७ ॥**

**पदार्थ–**
**क्वचित्** = कुनै समयमा
**हैयङ्गवस्तैन्ये** = नौनी चोरेकोमा
**मात्रा** = आमाद्वारा
**उलूखले** = ओखलमा
**बद्धः** = बाँधिएका यी बालकले
**अर्जुनयोः मध्ये** = दुईओटा खरीको वृक्षको बीचमा
**गच्छन्** = जाँदै
**बाहुभ्यां** = हातले
**तौ** = ती दुबैलाई
**अपातयत्** = लडाएका थिए

**वाक्यार्थ–** कुनै समयमा आमाले नौनी चोरेकोमा ओखलमा बाँधिदिँदा दुईओटा खरीको वृक्षको बीचमा ओखलै सहित गई यी बालकले ती दुबैलाई हातले लडाएका थिए।

**वने सञ्चारयन् वत्सान् सरामो बालकैर्वृतः।**
**हन्तुकामं बकं दोर्भ्यां मुखतोऽरिमपाटयत्॥ ८॥**

**पदार्थ–**
**बालकैः** = बालकहरूद्वारा
**वृतः** = घेरिएका
**वने** = वनमा
**वत्सान्** = बाच्छाहरूलाई
**सञ्चारयन्** = चराइरहेका
**सरामः** = बलराम सहित श्रीकृष्णले
**हन्तुकामं** = आफूलाई मार्न चाहने
**अरिम्** = शत्रु
**बकं** = बकासुरलाई (बकुल्लोको रूपमा रहेको)
**दोर्भ्यां** = आफ्ना दुई हातले
**मुखतः** = मुखबाट
**अपाटयत्** = चिरे (मारे)

**वाक्यार्थ–** अरू बालकहरूसित वनमा बाच्छाहरू चराइरहेका वेलामा आफूलाई मार्न चाहने बकासुरलाई पनि बलराम सहित भएर यिनै बालकले आफ्ना दुई हातले मुखबाट चिरेर मारेका थिए।

**वत्सेषु वत्सरूपेण प्रविशन्तं जिघांसया।**
**हत्वा न्यपातयत् तेन कपित्थानि च लीलया॥ ९॥**

**पदार्थ–**
**जिघांसया** = (यिनलाई) मार्ने इच्छाले
**वत्सरूपेण** = बाच्छाकै रूप लिई
**वत्सेषु** = बाच्छाको समूहमा
**प्रविशन्तं** = प्रवेश गर्ने (वत्सासुरलाई)
**लीलया** = सजिलैसँग
**हत्वा** = मारेर
**तेन** = त्यस मृतशरीरद्वारा
**कपित्थानि च** = कैथका रुखहरूलाई पनि
**न्यपातयत्** = लडाएका थिए

**वाक्यार्थ–** बाच्छाको समूहमा बाच्छाकै रूप लिई यिनलाई मार्ने इच्छाले आएको वत्सासुरलाई यिनले सजिलैसँग मारी त्यसको मृतशरीरद्वारा कैथका रुखलाई पनि लडाएका थिए।

**हत्वा रासभदैतेयं तद्बन्धूंश्च बलान्वितः।**
**चक्रे तालवनं क्षेमं परिपक्वफलान्वितम्॥ १०॥**

पदार्थ–
**बलान्वितः** = बलरामसहित भएर
**रासभदैतेयं** = गधाको रूपमा रहने धेनुकासुरलाई र
**तद्बन्धूंश्च** = उसका अरू बन्धुबान्धवलाई पनि
**हत्वा** = मारेर
**परिपक्वफलान्वितम्** = पाकेका फलहरूले भरिपूर्ण
**तालवनं** = ताडवनलाई
**क्षेमं** = मङ्गलमय
**चक्रे** = बनाएका थिए

**वाक्यार्थ–** बलरामसहित भएर यिनै बालकले गधाको रूपमा रहेको धेनुकासुरलाई र उसका बन्धुबान्धवलाई पनि मारेर फलहरूले भरिपूर्ण ताडवनलाई मङ्गलमय बनाएका थिए।

**प्रलम्बं घातयित्वोग्रं बलेन बलशालिना।**
**अमोचयद् व्रजपशून् गोपांश्चारण्यवह्नितः॥ ११॥**

पदार्थ–
**उग्रं** = अति भयावह
**प्रलम्बं** = प्रलम्बासुरलाई
**बलशालिना** = अत्यन्त बलवान्
**बलेन** = बलरामद्वारा
**घातयित्वा** = मार्न लगाएर
**व्रजपशून्** = व्रजका पशु (गाई)हरू र
**गोपान् च** = गोपहरूलाई पनि
**अरण्यवह्नितः** = वनको डढेलोबाट
**अमोचयत्** = मुक्त गराएका थिए

**वाक्यार्थ–** यिनै बालकले डरलाग्दो प्रलम्बासुरलाई बलशाली बलरामद्वारा मार्न लगाएर सारा व्रजका गाईहरू र गोपहरूलाई वनको डढेलोबाट बचाएका थिए।

**आशीविषतमाहीन्द्रं दमित्वा विमदं ह्रदात्।**
**प्रसह्योद्वास्य यमुनां चक्रेऽसौ निर्विषोदकाम्॥ १२॥**

पदार्थ–
**आशीविषतमाहीन्द्रं** = अति भयानक विषयुक्त सर्पराज कालीय नागलाई
**दमित्वा** = दमन गरेर
**विमदं** = अहङ्काररहित भएको (त्यस कालिय नागलाई)
**ह्रदात्** = त्यो दहबाट
**प्रसह्य** = जबर्जस्ती
**उद्वास्य** = हटाएर
**असौ** = यिनै बालकले
**यमुनां** = यमुना नदीलाई
**निर्विषोदकाम्** = विषरहित जलयुक्त
**चक्रे** = बनाए

**वाक्यार्थ–** यिनै बालकले नै अति भयानक विषयुक्त कालीय नागलाई दमन गरेर उसको मदलाई नष्ट पारी त्यस दहबाट जबर्जस्ती हटाएका थिए र यमुनालाई विषरहित बनाएका थिए।

**दुस्त्यजश्चानुरागोऽस्मिन् सर्वेषां नो व्रजौकसाम्।**
**नन्द ते तनयेऽस्मासु तस्याप्यौत्पत्तिकः कथम्॥ १३॥**

पदार्थ–
**नन्द** = हे नन्दजी
**ते** = तपाईंका
**अस्मिन्** = यी
**तनये** = छोरा श्रीकृष्णमा
**नः** = हामी
**सर्वेषां** = सबै
**व्रजौकसाम्** = व्रजवासीहरूको
**दुस्त्यजः** = छोड्नै नसकिने

**औत्पत्तिकः** = स्वाभाविक
**अनुरागः** = प्रेम छ र
**अस्मासु** = हामीहरूमा
**तस्य अपि च** = ती श्रीकृष्णको पनि (त्यस्तै प्रेम)
**कथम्** = कसरी भयो

**वाक्यार्थ–** हे नन्दजी ! यी तपाईंका छोरा श्रीकृष्णमा हामी सारा व्रजवासीको छाड्नै नसकिने स्वाभाविक प्रेम छ र हामीहरूमा पनि श्रीकृष्णको त्यस्तै प्रेम छ, यो कसरी भयो ?

**क्व सप्तहायनो बालः क्व महाद्रिविधारणम् ।**
**ततो नो जायते शङ्का व्रजनाथ तवात्मजे ॥ १४ ॥**

**पदार्थ–**
**व्रजनाथ** = हे व्रजका स्वामी नन्दजी
**सप्तहायनः** = सात वर्षको
**बालः** = बालक
**क्व** = कहाँको
**महाद्रिविधारणम्** = यत्रो विशाल गोवर्धन पर्वत धारण गर्नु
**क्व** = कहाँको
**ततः** = यसबाट
**तव** = तपाईंको
**आत्मजे** = छोरामा
**नः** = हाम्रो
**शङ्का** = शङ्का
**जायते** = उत्पन्न भइरहेको छ

**वाक्यार्थ–** हे व्रजका स्वामी नन्दजी ! कहाँको सात वर्षको बालक, कहाँको यत्रो विशाल गोवर्धन पर्वलाई धारण गर्नु। यसबाट हामीहरूलाई तपाईंको छोरामा शङ्का उत्पन्न भइरहेको छ।

**नन्द उवाच** (नन्दले भने)

**श्रूयतां मे वचो गोपा व्येतु शङ्का च वोऽर्भके ।**
**एनं कुमारमुद्दिश्य गर्गो मे यदुवाच ह ॥ १५ ॥**

**पदार्थ–**
**गोपाः** = हे गोपहरू
**मे** = मेरो
**वचः** = कुरा
**श्रूयतां** = सुन्नुहोस्
**अर्भके** = मेरो बालकमाथि भएको
**वः** = तपाईंहरूको
**शङ्का च** = शङ्का पनि
**व्येतु** = (यो सुनेर) हटोस्
**ह** = निश्चय नै
**एनं** = यी
**कुमारम्** = कुमारलाई
**उद्दिश्य** = उद्देश्य गरेर
**गर्गः** = महर्षि गर्गले
**यत्** = जो
**मे** = मलाई
**उवाच** = भन्नुभएको थियो

**वाक्यार्थ–** हे गोपहरू ! यी बालक मेरा छोराका सम्बन्धमा महर्षि गर्गले मलाई जे भन्नुभएको थियो म त्यो सुनाउँछु, सुन्नुहोस्। त्यसबाट तपाईंहरूको यी बालकप्रतिको शङ्का हट्नेछ।

**वर्णास्त्रयः किलास्यासन् गृह्णतोऽनुयुगं तनूः ।**
**शुक्लो रक्तस्तथा पीत इदानीं कृष्णतां गतः ॥ १६ ॥**

**पदार्थ–**
**अनुयुगं** = हरेक युगमा
**तनूः** = शरीर
**गृह्णतः** = धारण गर्ने
**अस्य** = यिनको
**शुक्लः** = सेतो
**रक्तः** = रातो र
**तथा** = त्यस्तै
**पीतः** = पहेँलो पनि

**किल** = निश्चय नै
**त्रयः** = तीन
**वर्णाः** = वर्णहरू
**आसन्** = थिए
**इदानीं** = अहिले
**कृष्णतां गतः** = कालो रङ्गवाला भएका छन्

**वाक्यार्थ–** हरेक युगमा यिनले शरीर धारण गर्दछन्। पहिले यिनका सेतो, रातो र पहेँलो गरी तीन थरी रङ्गहरू थिए। अहिले यिनी कालो रङ्गका भएका छन्।

**प्रागयं वसुदेवस्य क्वचिज्जातस्तवात्मजः।**
**वासुदेव इति श्रीमानभिज्ञाः सम्प्रचक्षते॥ १७॥**
**बहूनि सन्ति नामानि रूपाणि च सुतस्य ते।**
**गुणकर्मानुरूपाणि तान्यहं वेद नो जनाः॥ १८॥**
**एष वः श्रेय आधास्यद् गोपगोकुलनन्दनः।**
**अनेन सर्वदुर्गाणि यूयमञ्जस्तरिष्यथ॥ १९॥**
**पुरानेन व्रजपते साधवो दस्युपीडिताः।**
**अराजके रक्ष्यमाणा जिग्युर्दस्यून् समेधिताः॥ २०॥**
**य एतस्मिन् महाभागाः प्रीतिं कुर्वन्ति मानवाः।**
**नारयोऽभिभवन्त्येतान् विष्णुपक्षानिवासुराः॥ २१॥**

**द्रष्टव्य–** यहाँका यी १७-२१ श्लोकहरू दशम स्कन्धको आठौँ अध्यायका १४-१८ श्लोकसँग पूर्ण रूपमा मिल्छन्। त्यसकारण यहाँका यी श्लोकहरूको पदार्थ र वाक्यार्थ उक्त स्थानमा नै हेर्नुहोला। यहाँका १६ औँ श्लोक र २२ औँ श्लोक पनि त्यहाँका १३ औँ र १९ औँ श्लोकसँग लगभग मिल्दछन्। गर्गले बताएका कुराहरू नन्दले यहाँ जस्ताको तस्तै गोपहरूलाई बताएकाले यी श्लोकहरूमा समानता रहेको हो।

**तस्मान्नन्द कुमारोऽयं नारायणसमो गुणैः।**
**श्रिया कीर्त्यानुभावेन तत्कर्मसु न विस्मयः॥ २२॥**

**पदार्थ–**
**नन्द** = हे नन्द !
**तस्मात्** = त्यसैले
**अयं** = यी
**कुमारः** = तिम्रा छोरा
**गुणैः** = गुणहरूले
**श्रिया** = ऐश्वर्यले
**कीर्त्या** = कीर्तिले र
**अनुभावेन** = प्रभावले पनि
**नारायणसमः** = भगवान् नारायणबराबर छन् (त्यसैले)
**तत्कर्मसु** = उनका कर्ममा
**न विस्मयः** = आश्चर्य मान्नुपर्दैन

**वाक्यार्थ–** हे नन्द ! यी तिम्रा छोरा अनेक गुणहरू, ऐश्वर्य, कीर्ति र प्रभावले पनि भगवान् नारायणजत्तिकै छन्, त्यसैले यिनले अनौठा काम गरे भनेर आश्चर्य मान्नुपर्दैन।

**इत्यद्धा मां समादिश्य गर्गे च स्वगृहं गते।**

**मन्ये नारायणस्यांशं कृष्णमक्लिष्टकारिणम्॥ २३॥**

पदार्थ–
**इति** = यसरी
**अद्धा** = स्पष्ट रूपले
**मां** = मलाई
**समादिश्य** = बताएर
**गर्गे च** = महर्षि गर्ग
**स्वगृहं गते** = आफ्नो घर जानुभएपछि
**अक्लिष्टकारिणम्** = सधैँ क्लेशनिवारक कर्म गर्ने
**कृष्णम्** = श्रीकृष्णलाई
**नारायणस्य** = भगवान् नारायणको
**अंशं** = अंशको रूपमा
**मन्ये** = मानेको छु

**वाक्यार्थ–** यसरी महर्षि गर्गले स्पष्टसँग यति भनी घर जानुभएपछि सधैँ हाम्रो क्लेश निवारण गरिदिने श्रीकृष्णलाई मैले नारायणको अंशको रूपमा मानेको छु।

**इति नन्दवचः श्रुत्वा गर्गगीतं व्रजौकसः।**

**दृष्टश्रुतानुभावास्ते कृष्णस्यामिततेजसः॥**

**मुदिता नन्दमानर्चुः कृष्णं च गतविस्मयाः॥ २४॥**

पदार्थ–
**अमिततेजसः** = अचिन्त्य प्रभाव भएका
**कृष्णस्य** = श्रीकृष्णको
**दृष्टश्रुतानुभावाः** = अद्भुत शक्तिलाई देखे-सुनेका
**व्रजौकसः** = व्रजवासीहरूले
**इति** = यसरी
**गर्गगीतं** = गर्गले भनेको
**नन्दवचः** = नन्दको भनाइलाई
**श्रुत्वा** = सुनेर
**गतविस्मयाः** = आश्चर्यरहित र
**मुदिताः** = प्रसन्न भएका
**ते** = ती व्रजवासीहरूले
**तं नन्दम्** = ती नन्दलाई र
**कृष्णं च** = श्रीकृष्णलाई पनि
**आनर्चुः** = पूजा गरे

**वाक्यार्थ–** अत्यन्त प्रभावशाली श्रीकृष्णको अद्भुत कर्मलाई देखे-सुनेका ती व्रजवासीहरूले नन्दको मुखबाट गर्गको भनाइ सुनेर आश्चर्यरहित भए र खुसीले रमाउँदै नन्द र श्रीकृष्णको पूजा गरे।

**देवे वर्षति यज्ञविप्लवरुषा वज्रास्मवर्षानिलैः**

**सीदत्पालपशुस्त्रि आत्मशरणं दृष्ट्वानुकम्प्युत्स्मयन्।**

**उत्पाट्यैककरेण शैलमबलो लीलोच्छिलीन्ध्रं यथा**

**बिभ्रद् गोष्ठमपान्महेन्द्रमदभित् प्रीयान्न इन्द्रो गवाम्॥ २५॥**

**पद्धार्थ–**
**यज्ञविप्लवरुषा** = आफ्नो यज्ञविनाश भएको क्रोधले
**वज्रास्मवर्षानिलैः** = वज्रपात, असिनावृष्टि र हुरी–बतासद्वारा
**देवे** = इन्द्रले
**वर्षति** = वर्षा गराएपछि
**सीदत्पालपशुस्त्रि** = पीडित भएका गोप, पशुहरू र स्त्रीहरू रहेको
**आत्मशरणं** = आफ्नै शरणमा रहेको
**गोष्ठम्** = व्रजलाई
**दृष्ट्वा** = देखेर
**अनुकम्पी** = भक्तहरूमा अनुग्रह गर्ने भगवान् श्रीकृष्णले
**उत्स्मयन्** = मुस्कुराउँदै
**यथा** = जसरी
**अबलः** = शक्तिहीन (बालक)ले
**लीलोच्छिलीन्ध्रं** = खेल्दा च्याउलाई (सजिलै उचाल्छ, त्यसै गरी)
**एककरेण** = एउटै हातले
**शैलम्** = गोवर्धन पर्वतलाई
**उत्पाट्य** = उखेलेर
**बिभ्रत्** = धारण गर्दै (सारा व्रजवासीलाई)
**अपात्** = रक्षा गर्नुभयो, (त्यस्ता)
**महेन्द्रमदभित्** = इन्द्रको अहङ्कारलाई नष्ट गर्ने
**गवाम्** = गाईहरूको
**इन्द्रः** = प्रिय (गोविन्द)
**नः** = हामीहरूप्रति
**प्रीयात्** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** यज्ञभङ्ग भएको क्रोधले इन्द्रले वज्रपात, असिनावृष्टि र हुरी–बतासद्वारा व्रजमा ठुलो पानी बर्साउँदा आफ्नो शरणमा परेका गोप, गाईहरू र स्त्री लगायत सम्पूर्ण व्रजलाई देखेर भक्तहरूको रक्षा गर्ने उद्देश्यले मुस्कुराउँदै बालकले खेल्दा च्याउ सजिलै उचाले झैँ गोवर्धन पर्वतलाई उखेलेर सजिलैसँग हातमा धारण गरी सम्पूर्ण व्रजको रक्षा गर्नुहुने र इन्द्रको अहङ्कारलाई नष्ट गर्नुहुने गोविन्द भगवान् हामीहरूप्रति प्रसन्न हुनुहोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे षड्विंशोऽध्यायः ॥ २६ ॥**

# अथ सप्तविंशोऽध्यायः

## श्रीकृष्णको अभिषेक

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गोवर्धने धृते शैले आसाराद् रक्षिते व्रजे।**

**गोलोकादाव्रजत् कृष्णं सुरभिः शक्र एव च॥ १॥**

| पदार्थ– | **आसारात्** = मुसलधारे वर्षाबाट | **सुरभिः** = कामधेनु गाई र |
|---|---|---|
| **गोवर्धने** = गोवर्धन | **व्रजे** = व्रजलाई | **शक्रः एव च** = इन्द्र पनि |
| **शैले** = पर्वतलाई | **रक्षिते** = रक्षा गरेपछि | **कृष्णं** = श्रीकृष्णको नजिक |
| **धृते** = धारण गरेपछि र | **गोलोकात्** = गोलोकबाट | **आव्रजत्** = आए |

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले गोवर्धन धारण गरेर मुसलधारे वर्षाबाट व्रजधामलाई रक्षा गरेपछि गोलोकबाट कामधेनु गाई र स्वर्गबाट इन्द्र आए।

**विविक्त उपसङ्गम्य व्रीडितः कृतहेलनः।**

**पस्पर्श पादयोरेनं किरीटेनार्कवर्चसा॥ २॥**

| पदार्थ– | **विविक्ते** = एकान्तमा | भएको |
|---|---|---|
| **कृतहेलनः** = भगवान्को | **उपसङ्गम्य** = गएर | **किरीटेन** = मुकुटले |
| तिरस्कार गरेका (यसैले) | **एनं** = यी भगवान् श्रीकृष्णलाई | **पादयोः** = चरणमा |
| **व्रीडितः** = लजाएका इन्द्रले | **अर्कवर्चसा** = सूर्यसमान तेज | **पस्पर्श** = छोए (अभिवादन गरे) |

**वाक्यार्थ–** आफूले भगवान्को तिरस्कार गरेको हुनाले लज्जित भएका इन्द्रले एकान्तमा गई सूर्यसमान तेज भएको आफ्नो मुकुटलाई झुकाएर चरणमा छुँदै अभिवादन गरे।

**दृष्टश्रुतानुभावोऽस्य कृष्णस्यामिततेजसः।**

**नष्टत्रिलोकेशमद इन्द्र आह कृताञ्जलिः॥ ३॥**

| पदार्थ– | **दृष्टश्रुतानुभावः** = देखेर र सुनेर | अहङ्कार नष्ट भएका |
|---|---|---|
| **अमिततेजसः** = अपरिमित तेज | प्रभावबाट परिचित भएका | **इन्द्रः** = इन्द्रले |
| भएका | **नष्टत्रिलोकेशमदः** = म तीनै | **कृताञ्जलिः** = हात जोडेर |
| **अस्य कृष्णस्य** = यी श्रीकृष्णको | लोकको मालिक हुँ भन्ने | **आह** = भने |

**वाक्यार्थ–** अपरिमित तेज भएका भगवान् श्रीकृष्णको प्रभावलाई देखेर र सुनेर तीनै लोकको

मालिक हुँ भन्ने अहङ्कार नष्ट भएका इन्द्रले हात जोडेर भने।

**इन्द्र उवाच** (इन्द्रले भने)

**विशुद्धसत्त्वं तव धाम शान्तं तपोमयं ध्वस्तरजस्तमस्कम्।**
**मायामयोऽयं गुणसम्प्रवाहो न विद्यते तेऽग्रहणानुबन्धः ॥ ४ ॥**

**पदार्थ–**
**तव** = हजुरको
**धाम** = स्वरूप
**ध्वस्तरजस्तमस्कम्** = रजोगुण र तमोगुणरहित
**विशुद्धसत्त्वं** = शुद्ध सत्त्वगुण युक्त छ र
**शान्तं** = शान्त तथा
**तपोमयं** = तपोमय छ
**गुणसम्प्रवाहः** = प्रकृतिका गुणका आधारमा चल्ने
**अग्रहणानुबन्धः** = अज्ञानको कार्य (अध्यास)
**अयं** = यो
**मायामयः** = मायामय प्रपञ्च
**ते** = हजुरमा
**न विद्यते** = छैन

**वाक्यार्थ–** हे प्रभु ! हजुरको स्वरूप तमोगुण र रजोगुणरहित, शुद्धसात्त्विक, शान्त र तपोमय छ। प्रकृतिका गुणका आधारमा चल्ने अनि अज्ञानको कार्य यो मायामय प्रपञ्च हजुरमा छैन।

**विवरण–** यो श्लोकमा परमात्मामा अज्ञानको सम्बन्ध छैन भनी इन्द्रले परमात्माको स्तुति गरेका छन्। यहाँ **धाम** शब्दको अर्थ बाह्य लोक नभई आत्मस्वरूप भन्ने हुन्छ। **लोक्यते प्रकाशते** यस्तो व्युत्पत्ति गर्दा लोक शब्दको अर्थ पनि स्वयंप्रकाश आत्मा भन्ने नै हुन्छ। बृहदारण्यकोपनिषद् (१/४/१५)मा **आत्मानमेव लोकमुपासीत** अर्थात् अरू बाह्य लोक आदिको भर नपरी आत्मलोककै उपासना गर्नू भन्ने उपदेश पाइन्छ। त्यसैले लोक भनेको पनि वास्तवमा आत्मा नै हो। **तद्विष्णोः परमं पदम्** (शुक्लयजुर्वेद, ६/५) अर्थात् त्यो विष्णुको परम पद हो, **तद्धाम परमं मम** (भगवद्गीता, १५/६) अर्थात् त्यो मेरो परम धाम हो, **एष ब्रह्मलोकः** (बृहदारण्यकोपनिषद्, ४/४/२३) अर्थात् यही ब्रह्मलोक हो। वेद, उपनिषद् र भगवद्गीताका वचनले पनि पद, धाम या लोक शब्दलाई आत्माकै अर्थमा प्रयोग गरेको देखिन्छ। यसैले बाहिरी मायामय लोकको अर्थमा नभई परमात्मस्वरूपकै अर्थमा धाम शब्दको प्रयोग भएको हुँदा **विशुद्धसत्त्वं** अर्थात् त्यो विशुद्ध सत्त्वमय छ भन्ने अर्थ पनि मिल्न आउने देखिन्छ।

**तपोमयं** शब्दको अर्थ हुन्छ– ज्ञानस्वरूप या सर्वज्ञ। उपनिषद्मा पनि **यः सर्वज्ञः सर्वविद् यस्य ज्ञानमयं तपः** (मुण्डकोपनिषद्, १/१/९) अर्थात् सर्वज्ञ परमात्माको तपस्या ज्ञानमय छ भनी यही कुरा बताइएको छ। परमात्माले अरूको तपस्या गर्नु अनावश्यक मात्र होइन, अनुचित पनि छ। यसैले **स तपस्तप्त्वा मिथुनमुत्पादयते** (प्रश्नोपनिषद्, १/४)को अर्थ परमात्माले सङ्कल्प या ज्ञानपूर्वक रयि-प्राणको जोडी उत्पन्न गर्नुभयो भन्ने गरिएको छ। उहाँको स्वरूपमा रजोगुण र तमोगुणको सम्भावना छैन। मायाका कार्य भएका तीन गुणहरूको प्रवाहरूपी जुन संसार छ, त्यो परमात्मामा छैन। किनभने परमात्मामा **अग्रहणानुबन्धः न** अर्थात् अविद्याको सम्बन्ध छैन भनी स्तुति गरिएको छ। अथवा अग्रहण अर्थात् अज्ञान अनि अनुबन्ध अर्थात् अज्ञानद्वारा हुने शरीरसम्बन्ध, यी दुबै परमात्मामा छैनन् भन्ने कुरा यहाँ भनिएको हो।

**कुतो नु तद्धेतव ईश तत्कृता लोभादयो येऽबुधलिङ्गभावाः।**
**तथापि दण्डं भगवान् बिभर्ति धर्मस्य गुप्त्यै खलनिग्रहाय॥ ५॥**

**पदार्थ–**
**ईश** = हे प्रभु (यद्यपि हजुरमा प्रकृतिका गुण)
**तद्धेतवः** = त्यो अज्ञान नै कारण भएका (जन्म, मृत्यु आदि र)
**तत्कृताः** = त्यो देहाध्यासको कारणले भएका
**अबुधलिङ्गभावाः** = अज्ञानीहरूको परिचायक
**ये** = जो
**लोभादयः** = लोभ आदि
**कुतो नु** = कहाँबाट हुने
**तथा अपि** = तैपनि
**भगवान्** = भगवान् (हजुर शरीर धारण गरेर)
**धर्मस्य** = धर्मको
**गुप्त्यै** = रक्षाका लागि र
**खलनिग्रहाय** = दुष्टलाई दमन गर्नका लागि
**दण्डं** = दण्ड
**बिभर्ति** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** हे प्रभु! यद्यपि हजुरमा अज्ञानीहरूको परिचायक अज्ञानका कार्यहरू जन्म, मृत्यु आदि र देहाध्यासका कार्य लोभ आदि पनि छैनन्। तैपनि हजुरले धर्मको रक्षाका लागि र दुष्टको दमनका लागि शरीर धारण गरेर दण्ड धारण गर्नुहुन्छ।

**पिता गुरुस्त्वं जगतामधीशो दुरत्ययः काल उपात्तदण्डः।**
**हिताय स्वेच्छातनुभिः समीहसे मानं विधुन्वञ्जगदीशमानिनाम्॥ ६॥**

**पदार्थ–**
**त्वं** = हजुर
**जगताम्** = सम्पूर्ण प्राणीजगत्को
**पिता** = पालक
**गुरुः** = गुरु र
**अधीशः** = स्वामी पनि हुनुहुन्छ
**उपात्तदण्डः** = दुष्टलाई सजाय दिन दण्डधारण गरेका
**दुरत्ययः काल** = पार पाइनसक्नु काल पनि हुनुहुन्छ
**जगदीशमानिनाम्** = आफूलाई संसारको मालिक सम्झने (हामीजस्ता अहङ्कारीहरूको)
**मानं** = अहङ्कारलाई
**विधुन्वन्** = मर्दन गर्दै
**हिताय** = (आफ्ना भक्तहरूको) हितका लागि
**स्वेच्छातनुभिः** = इच्छानुसारका रूप धारण गरेर
**समीहसे** = लीला देखाउने इच्छा गर्नुहुन्छ

**वाक्यार्थ–** हजुर सारा प्राणीहरूको पिता, गुरु र स्वामी हुनुहुन्छ र दुष्टलाई दण्ड दिने दुस्तर कालस्वरूप पनि हजुर नै हुनुहुन्छ। हजुर नै आफूलाई संसारको मालिक सम्झने अहङ्कारीहरूको अहङ्कारलाई नाश गर्दै भक्तहरूको हितका लागि विविध रूप धारण गरेर लीला देखाउने इच्छा गर्नुहुन्छ।

**ये मद्विधाज्ञा जगदीशमानिनस्त्वां वीक्ष्य कालेऽभयमाशु तन्मदम्।**
**हित्वार्यमार्गं प्रभजन्त्यपस्मया ईहा खलानामपि तेऽनुशासनम्॥ ७॥**

**पदार्थ–**
**ये** = जो
**जगदीशमानिनः** = आफूलाई नै जगत्को ईश्वर मान्ने
**मद्विधाज्ञाः** = मजस्ता अज्ञानी व्यक्तिहरू छन् (ती)

**काले** = (डरको) समयमा पनि
**अभयम्** = भयरहित भएर रहने
**त्वां** = हजुरलाई
**वीक्ष्य** = देखेर
**तन्मदम्** = त्यो (आफूलाई जगदीश मान्ने) अहङ्कार
**आशु** = चाँडै नै
**हित्वा** = त्यागेर
**अपस्मयाः** = सारा अहङ्कारले रहित भएर
**आर्यमार्गं** = सज्जनहरूको बाटोमा
**प्रभजन्ति** = आउँछन् (त्यसैले)
**ते** = हजुरको
**ईहा अपि** = सामान्य चेष्टा पनि
**खलानाम्** = दुष्टहरूको लागि
**अनुशासनम्** = अनुशासन (शिक्षा र दण्ड) बन्दछ

**वाक्यार्थ–** जो आफूलाई नै जगत्‌को ईश्वर मान्ने मजस्ता अज्ञानी व्यक्तिहरू छन्, उनीहरू अति भयावह कालमा पनि निर्भय भएर रहने हजुरलाई देखेर आफ्नो अहङ्कारलाई त्याग्छन् र सारा घमन्डरहित भएर सज्जनहरूको मार्गको अनुसरण गर्दछन्। यसरी हजुरको चेष्टा सामान्य भए पनि दुष्टहरूको लागि अनुशासन (शिक्षा र दण्ड) बन्दछ।

**स त्वं ममैश्वर्यमदप्लुतस्य कृतागसस्तेऽविदुषः प्रभावम्।**
**क्षन्तुं प्रभोऽथार्हसि मूढचेतसो मैवं पुनर्भून्मतिरीश मेऽसती ॥ ८ ॥**

पदार्थ–
**प्रभो** = हे सर्वसमर्थ प्रभु
**ईश** = हे सर्वेश्वर
**सः** = त्यस्तो
**त्वं** = हजुरले
**ऐश्वर्यमदप्लुतस्य** = ऐश्वर्यको अहङ्कारले व्याप्त भएको
**कृतागसः** = अपराधी
**ते** = हजुरको
**प्रभावम्** = प्रभावलाई
**अविदुषः** = नबुझ्ेको
**मूढचेतसः** = मूर्ख
**मम** = मेरो अपराधलाई
**क्षन्तुं** = क्षमा गरिदिन
**अर्हसि** = योग्य हुनुहुन्छ
**अथ** = यसपछि
**मे** = मेरो
**असती** = दुष्ट
**मतिः** = बुद्धि
**एवं** = यस्तो (गल्ती गर्ने)
**मा भूत्** = नहोस्

**वाक्यार्थ–** हे सर्वसमर्थ प्रभु ! सर्वेश्वर हजुरले ऐश्वर्यको अहङ्कारले अपराधी बनेको, हजुरको प्रभावलाई नबुझ्ेको र मूर्ख मेरो अपराधलाई क्षमा गरिदिनुहोस्। यसपछि मेरो दुष्ट बुद्धि फेरि यस्तो गल्ती गर्ने नहोस्।

**तवावतारोऽयमधोक्षजेह स्वयम्भराणामुरुभारजन्मनाम्।**
**चमूपतीनामभवाय देव भवाय युष्मच्चरणानुवर्तिनाम्॥ ९॥**

पदार्थ–
**अधोक्षज** = हे इन्द्रियातीत
**देव** = स्वयंप्रकाश प्रभु
**इह** = यहाँ
**तव** = हजुरको
**अयम्** = यो
**अवतारः** = अवतार
**स्वयम्भराणाम्** = आफूलाई मात्र पोषण गर्ने भएका
**उरुभारजन्मनाम्** = जन्मले गर्दा (पृथिवीका लागि) धेरै भार भएका
**चमूपतीनाम्** = सेनापति (राजा) हरूको
**अभवाय** = नाशका लागि
**युष्मच्चरणानुवर्तिनाम्** = हजुरका चरणको अनुसरण (उपासना) गर्नेहरूको

**भवाय** = कल्याणका लागि | (हुनेछ)

**वाक्यार्थ–** हे इन्द्रियातीत स्वयंप्रकाश प्रभु ! यो लोकमा हजुरले जो अवतार लिनुभएको छ त्यो आफ्नो शरीरलाई मात्र पोषण गर्ने पृथिवीका भार भएका दुष्ट राजाहरूको विनाशका निमित्त र हजुरका चरणका उपासक भक्तहरूका लागि कल्याणका निमित्त हुनेछ।

**नमस्तुभ्यं भगवते पुरुषाय महात्मने ।**
**वासुदेवाय कृष्णाय सात्वतां पतये नमः ॥ १० ॥**

| पदार्थ– | **सात्वतां** = यदुवंशीहरूको | **तुभ्यं** = हजुरलाई |
|---|---|---|
| **भगवते** = सर्वैश्वर्यसम्पन्न | **पतये** = स्वामी | **नमो नमः** = बारम्बार नमस्कार |
| **पुरुषाय** = परमपुरुष | **वासुदेवाय** = वसुदेवपुत्र | छ |
| **महात्मने** = परमात्मस्वरूप | **कृष्णाय** = श्रीकृष्ण | |

**वाक्यार्थ–** सर्वैश्वर्यसम्पन्न, परमपुरुष, परमात्मा, यदुवंशीहरूका स्वामी, वसुदेवपुत्र हजुर श्रीकृष्णलाई बारम्बार नमस्कार छ।

**स्वच्छन्दोपात्तदेहाय विशुद्धज्ञानमूर्तये ।**
**सर्वस्मै सर्वबीजाय सर्वभूतात्मने नमः ॥ ११ ॥**

| पदार्थ– | ज्ञानस्वरूप | अन्तर्यामीरूपले अवस्थित |
|---|---|---|
| **स्वच्छन्दोपात्तदेहाय** = | **सर्वबीजाय** = सारा संसारको | प्रभुलाई |
| स्वतन्त्ररूपले अनेक शरीर धारण | मूलकारण र | **नमः** = नमस्कार छ |
| गर्नुहुने | **सर्वस्मै** = सर्वस्वरूप तथा | |
| **विशुद्धज्ञानमूर्तये** = विशुद्ध | **सर्वभूतात्मने** = सबैका | |

**वाक्यार्थ–** स्वतन्त्ररूपले अनेक शरीर धारण गर्नुहुने, विशुद्ध ज्ञानस्वरूप, संसारको मूलकारण, सर्वस्वरूप र सर्वान्तर्यामी प्रभुलाई नमस्कार छ।

**मयेदं भगवन् गोष्ठनाशायासारवायुभिः ।**
**चेष्टितं विहते यज्ञे मानिना तीव्रमन्युना ॥ १२ ॥**

| पदार्थ– | **तीव्रमन्युना** = अति क्रोधित | लागि |
|---|---|---|
| **भगवन्** = हे प्रभु | **मया** = म इन्द्रद्वारा | **इदं** = यो (कुकृत्य) |
| **यज्ञे** = यज्ञ | **आसारवायुभिः** = मुसलधारे वर्षा | **चेष्टितं** = गरियो |
| **विहते** = नष्ट भएपछि | र हुरीबतासद्वारा | |
| **मानिना** = अहङ्कारी र | **गोष्ठनाशाय** = व्रजको नाशको | |

**वाक्यार्थ–** हे प्रभु ! मेरो पूजा गरिने यज्ञ नष्ट भएपछि अहङ्कारी मैले रिसाएर मुसलधारे वर्षा र हुरीबतासद्वारा व्रजको नाश गर्न भनी यो कुकृत्य गरेँ।

**त्वयेशानुगृहीतोऽस्मि ध्वस्तस्तम्भो वृथोद्यमः।**

**ईश्वरं गुरुमात्मानं त्वामहं शरणं गतः॥ १३॥**

**पदार्थ–**
**ईश** = हे प्रभु
**त्वया** = हजुरद्वारा
**अनुगृहीतः** = अनुगृहीत
**अस्मि** = छु
**वृथोद्यमः** = प्रयास व्यर्थ भएर
**ध्वस्तस्तम्भः** = अहङ्कार चूर्ण भएको
**अहं** = म
**ईश्वरं** = स्वामी
**गुरुम्** = गुरु र
**आत्मानं** = आत्मस्वरूप
**त्वाम्** = हजुरको
**शरणं** = शरणमा
**गतः** = परेको छु

**वाक्यार्थ–** हे प्रभु ! हजुरले मलाई अनुग्रह गर्नुभएको छ। व्रजको नाश गर्ने आफ्नो प्रयास विफल भएपछि अहङ्काररहित भएको म अब स्वामी, गुरु र आत्मस्वरूप हजुरको शरणमा परेको छु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं सङ्कीर्तितः कृष्णो मघोना भगवानमुम्।**

**मेघगम्भीरया वाचा प्रहसन्निदमब्रवीत्॥ १४॥**

**पदार्थ–**
**एवं** = यसरी
**मघोना** = इन्द्रद्वारा
**सङ्कीर्तितः** = स्तुति गरिनुभएका
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्णले
**प्रहसन्** = हाँस्दै
**अमुं** = यी इन्द्रलाई
**मेघगम्भीरया** = मेघ झैँ गम्भीर
**वाचा** = वाणीले
**इदम्** = यसो
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** यसरी इन्द्रले स्तुति गरिसकेपछि भगवान् श्रीकृष्णले हाँस्दै मेघ झैँ गम्भीर वाणीमा इन्द्रलाई यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**मया तेऽकारि मघवन् मखभङ्गोऽनुगृह्णता।**

**मदनुस्मृतये नित्यं मत्तस्येन्द्रश्रिया भृशम्॥ १५॥**

**पदार्थ–**
**मघवन्** = हे इन्द्र
**अनुगृह्णता** = अनुग्रह गर्ने
**मया** = मद्वारा
**इन्द्रश्रिया** = इन्द्र पदवीको ऐश्वर्यले
**भृशम्** = अत्यन्त
**मत्तस्य** = मत्त भएका
**ते** = तिम्रो
**मखभङ्गः** = यज्ञविनाश
**अकारि** = गरियो (जो)
**नित्यं** = सधैँ
**मदनुस्मृतये** = मेरो सम्झनाका लागि हुन्छ

**वाक्यार्थ–** हे इन्द्र ! मैले तिम्रो अनुग्रहका लागि इन्द्रपदवीको ऐश्वर्यले मत्त भएको तिम्रो पूजा हुने यज्ञ विनाश गरेँ, जसद्वारा तिमीलाई मेरो सम्झना रहिरहनेछ।

**मामैश्वर्यश्रीमदान्धो दण्डपाणिं न पश्यति ।**

**तं भ्रंशयामि सम्पद्भ्यो यस्य चेच्छाम्यनुग्रहम् ॥ १६ ॥**

**पदार्थ–**
**ऐश्वर्यश्रीमदान्धः** = ऐश्वर्य र सम्पत्तिले अन्धो भएको व्यक्तिले
**दण्डपाणिं** = (कालस्वरूप) हातमा दण्ड लिएको
**माम्** = मलाई
**न पश्यति** = देख्दैन (त्यसैले)
**यस्य च** = जसको
**अनुग्रहम्** = अनुग्रह गर्न
**इच्छामि** = चाहन्छु
**तं** = त्यसलाई
**सम्पद्भ्यः** = ऐश्वर्य आदि सम्पत्तिबाट
**भ्रंशयामि** = भ्रष्ट पारिदिन्छु

**वाक्यार्थ–** हे इन्द्र ! सम्पत्ति र ऐश्वर्यले अन्धो भएको व्यक्तिले दण्ड लिएर बसेको कालस्वरूप मलाई देख्दैन। त्यसैले म जसको अनुग्रह गर्न चाहन्छु, उसको ऐश्वर्य आदिलाई नष्ट पारिदिन्छु।

**गम्यतां शक्र भद्रं वः क्रियतां मेऽनुशासनम् ।**

**स्थीयतां स्वाधिकारेषु युक्तैर्वः स्तम्भवर्जितैः ॥ १७ ॥**

**पदार्थ–**
**शक्र** = हे इन्द्र
**गम्यतां** = (अब स्वर्ग) जाऊ
**मे** = मेरो
**अनुशासनम्** = आदेशलाई
**क्रियतां** = पालन गर (त्यसैमा)
**वः** = तिम्रो
**भद्रं** = कल्याण छ
**स्तम्भवर्जितैः** = अहङ्काररहित भएर
**युक्तैः** = कर्तव्यपरायण बनी
**वः** = तिमीहरूद्वारा
**स्वाधिकारेषु** = आफ्नो अधिकार (र मर्यादा)मा
**स्थीयतां** = बसिनुपर्दछ

**वाक्यार्थ–** हे इन्द्र ! अब तिमी स्वर्ग जाऊ, मेरो आदेशको पालना गर। यसैमा नै तिम्रो कल्याण छ। अहङ्काररहित भएर कर्तव्य पालन गर्दै आफ्नो अधिकार अनुसार मर्यादामा बस।

**अथाह सुरभिः कृष्णमभिवन्द्य मनस्विनी ।**

**स्वसन्तानैरुपामन्त्र्य गोपरूपिणमीश्वरम् ॥ १८ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**मनस्विनी** = उदार स्वभाव भएकी
**सुरभिः** = कामधेनु गाईले
**स्वसन्तानैः** = आफ्ना सन्तानसहित भएर
**कृष्णम्** = श्रीकृष्णलाई
**उपामन्त्र्य** = सम्बोधन गरेर
**अभिवन्द्य** = अभिवादन गरी
**गोपरूपिणम्** = गोपको वेशमा रहनुभएका
**ईश्वरम्** = परमेश्वरलाई
**आह** = भन्न लागिन्

**वाक्यार्थ–** त्यसपछि उदार स्वभाव भएकी कामधेनुले आफ्ना सन्तान सहित भएर श्रीकृष्णलाई

सम्बोधन गरी अभिवादन गरिन् र गोपको वेशमा रहनुभएका परमेश्वरलाई भन्न थालिन्।

**सुरभिरुवाच** (सुरभिले भनिन्)

**कृष्ण कृष्ण महायोगिन् विश्वात्मन् विश्वसम्भव।**

**भवता लोकनाथेन सनाथा वयमच्युत॥ १९॥**

पदार्थ–
**कृष्ण कृष्ण** = हे श्रीकृष्ण प्रभु
**महायोगिन्** = हे महायोगी
**विश्वात्मन्** = हे विश्वात्मा
**विश्वसम्भव** = हे विश्वका आदिकारण
**अच्युत** = हे अच्युत
**लोकनाथेन** = लोकहरूका रक्षक
**भवता** = हजुरद्वारा
**वयम्** = हामीहरू
**सनाथाः** = रक्षित भएका छौँ

**वाक्यार्थ–** हे श्रीकृष्ण ! हे महायोगी ! हे विश्वात्मा ! हे विश्वका आदिकारण ! हे अच्युत ! लोकहरूका रक्षक हजुरद्वारा हाम्रो रक्षा भएको छ।

**त्वं नः परमकं दैवं त्वं न इन्द्रो जगत्पते।**

**भवाय भव गोविप्रदेवानां ये च साधवः॥ २०॥**

पदार्थ–
**जगत्पते** = हे जगत्का पति प्रभु
**त्वं** = हजुर
**नः** = हामीहरूका
**परमकं** = परम
**दैवं** = देवता हुनुहुन्छ
**त्वं** = हजुर नै
**नः** = हामीहरूका
**इन्द्रः** = इन्द्र (मालिक) हुनुहुन्छ
**गोविप्रदेवानां** = गाई, ब्राह्मण र देवताहरूको र
**ये च** = जो
**साधवः** = साधुहरू छन्
(तिनीहरूको पनि)
**भवाय** = अभ्युदयका लागि
**भव** = हुनुहोस्

**वाक्यार्थ–** हे जगत्का स्वामी ! हजुर नै हामीहरूका परमदेवता र इन्द्र हुनुहुन्छ। हजुरले गाई, ब्राह्मण र देवता तथा साधुहरूको अभ्युदय गराइदिनुहोस्।

**इन्द्रं नस्त्वाभिषेक्ष्यामो ब्रह्मणा नोदिता वयम्।**

**अवतीर्णोऽसि विश्वात्मन् भूमेर्भारापनुत्तये॥ २१॥**

पदार्थ–
**ब्रह्मणा** = ब्रह्माजीद्वारा
**नोदिताः** = प्रेरणा दिइएका
**वयम्** = हामी गाईहरू
**नः** = हामीहरूको
**इन्द्रं** = (इन्द्र) मालिकका रूपमा
**त्वा** = हजुरलाई
**अभिषेक्ष्यामः** = अभिषेक गर्नेछौँ
**विश्वात्मन्** = हे विश्वका आत्मा
**भूमेः** = पृथिवीको
**भारापनुत्तये** = भार हरण गर्न
**अवतीर्णः** = अवतार ग्रहण गर्नुभएको
**असि** = छ

**वाक्यार्थ–** ब्रह्माजीद्वारा प्रेरित भएर आएका हामीहरू आफ्नो मालिकको रूपमा हजुरलाई

अभिषेक गर्छौं। हे विश्वात्मा ! पृथिवीको भार हरण गर्नका लागि हजुरले अवतार लिनुभएको छ।

**विवरण–** यस प्रसङ्गमा कामधेनु गाईले भगवान् श्रीकृष्णलाई आफ्नो समूहको मालिक या इन्द्र भइदिनुहोस् भनी प्रार्थना गरेकी छिन्। अहिलेसम्म स्वर्गका इन्द्र नै यी दिव्य गाईहरूका पनि मालिक हुन्थे, तर जब इन्द्रले व्रजमा गाईहरूको कुललाई नै ध्वस्त पार्न आदेश दिए, तब त्यसबाट आफूमाथि अत्याचार गरिएको ठानी कामधेनुले भगवान्को अगाडि आई आफ्नो असन्तुष्टि पोखेकी छिन्। हजुर विश्वात्मा र सम्पूर्ण लोकका नाथ हुनुभएकाले हाम्रो पनि नाथ भइदिनुहोस् भनी कामधेनुले प्रार्थना गरेकी छिन्। व्रजमा प्रलयकालीन वर्षा गराएर हामीलाई मार्न खोज्ने यी इन्द्र हाम्रा स्वामी हुन सक्दैनन् भन्ने कामधेनुको भाव रहेको छ। जगत्कर्ता ब्रह्माले बनाएको व्यवस्थामा भगवान्ले पनि हस्तक्षेप गर्न नमिल्ने देखी कामधेनुले ब्रह्माजीको पनि यही इच्छा रहेको बताएकी छिन्। ब्रह्माजीले आफ्ना पनि स्वामीलाई गाईहरूका मालिक भनी अभिषेक गर्न हिम्मत गर्नुभएन, तर हामी त हजुरलाई आफ्नो स्वामी भइदिन प्रार्थना गर्न सक्छौँ भन्ने कामधेनुको भाव रहेको छ। सुबोधिनीकार लेख्नुहुन्छ– **हीनोऽपि महान्तं पतित्वेन वृणुते** अर्थात् सानोभन्दा सानोले पनि महान् व्यक्तिलाई नै आफ्नो मालिक बनाउन चाहन्छ। त्यसैले गोपरूपधारी हजुर गाईहरूका मालिक **गोविन्द** भइदिनुहोस् भनी यहाँ प्रार्थना गरिएको छ। भगवान्ले पनि कृपावश त्यसलाई स्वीकार गर्नुभएको छ। जब साक्षात् परमात्मा नै गाईहरूका स्वामी हुनुभयो, तबदेखि नै गाईहरूको सर्वाधिक महत्त्व भयो। गाईको सेवा सर्वदेवतारूप परमात्माकै सेवा र गाईहरूको अनादर परमात्माकै अनादर हुने भयो। यहाँ परमात्माको सम्बन्धकै कारणले गाईहरू सर्वपूज्य भएका हुन् भनी सुबोधिनीकारले उल्लेख गर्नुभएको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं कृष्णमुपामन्त्र्य सुरभिः पयसात्मनः।**
**जलैराकाशगङ्गाया ऐरावतकरोद्धृतैः॥ २२॥**
**इन्द्रः सुरर्षिभिः साकं नोदितो देवमातृभिः।**
**अभ्यसिञ्चत दाशार्हं गोविन्द इति चाभ्यधात्॥ २३॥**

**पदार्थ–**
**एवं** = यसरी
**सुरभिः** = कामधेनु गाईले
**कृष्णम्** = श्रीकृष्णलाई
**उपामन्त्र्य** = नजिकै बोलाएर
**आत्मनः** = आफ्नो
**पयसा** = दुधले र
**देवमातृभिः** = देवमाताहरूद्वारा
**नोदितः** = प्रेरित
**इन्द्रः** = इन्द्रले
**सुरर्षिभिः साकं** = देवर्षि नारद आदि सहित
**ऐरावतकरोद्धृतैः** = ऐरावत हात्तीको सुँडले उबाएको
**आकाशगङ्गायाः** = आकाशगङ्गाको
**जलैः** = जलले
**अभ्यसिञ्चत** = सेचन गरे अनि
**दाशार्हं** = यदुकुलमा जन्मनुभएका भगवान् श्रीकृष्णलाई
**गोविन्दः इति च** = गोविन्द भनेर पनि
**अभ्यधात्** = सम्बोधन गरे

**वाक्यार्थ–** यसरी कामधेनु गाईले श्रीकृष्णलाई नजिकै बोलाई आफ्नो दुधले सेचन गरिन् र देवमाताहरूद्वारा प्रेरित इन्द्रले देवर्षिहरू सहित आएर ऐरावतको सुँडले आकाशगङ्गाको पानी ल्याई सेचन गरे। अनि भगवान् कृष्णलाई गोविन्द भनेर सम्बोधन गरे।

**तत्रागतास्तुम्बुरुनारदादयो गन्धर्वविद्याधरसिद्धचारणाः।**
**जगुर्यशो लोकमलापहं हरेः सुराङ्गनाः सन्ननृतुर्मुदान्विताः॥ २४॥**

पदार्थ–
**तत्र** = त्यस ठाउँमा
**तुम्बुरुनारदादयः** = तुम्बुरु, नारद आदि र
**गन्धर्वविद्याधरसिद्धचारणाः** = गन्धर्व, विद्याधर, सिद्ध तथा चारणहरू पनि
**आगताः** = आए र
**लोकमलापहं** = सांसारिक मललाई पखाल्ने
**हरेः** = भगवान् श्रीहरिको
**यशः** = कीर्तिलाई
**जगुः** = गाए र
**मुदान्विताः** = प्रसन्न भएका
**सुराङ्गनाः** = अप्सराहरू
**सन्ननृतुः** = राम्ररी नाचे

**वाक्यार्थ–** भगवान्को अभिषेक भएको त्यस ठाउँमा देवर्षि नारद सहित तुम्बुरु आदि गन्धर्व, विद्याधर, सिद्ध, चारणहरू पनि आए र भगवान्को सांसारिक मललाई निवारण गर्ने कीर्तिलाई गाए अनि खुसी भएका अप्सराहरू नाचे।

**तं तुष्टुवुर्देवनिकायकेतवो व्यवाकिरंश्चाद्भुतपुष्पवृष्टिभिः।**
**लोकाः परां निर्वृतिमाप्नुवंस्त्रयो गावस्तदा गामनयन् पयोद्रुताम्॥ २५॥**

पदार्थ–
**देवनिकायकेतवः** = देवसमूहमा ध्वजा झैं श्रेष्ठ देखिने देवताहरू
**तं च** = उहाँ भगवान्प्रति
**तुष्टुवुः** = प्रसन्न भए र
**अद्भुतपुष्पवृष्टिभिः** = अद्भुत पुष्पवृष्टिद्वारा
**व्यवाकिरन्** = वर्षा गराए
**त्रयो लोकाः** = तीनै लोकका सारा प्रजाहरूले
**परां निर्वृतिम्** = परम आनन्दलाई
**आप्नुवन्** = प्राप्त गरे
**तदा** = त्यस बखतमा
**गावः** = गाईहरूले
**गाम्** = पृथिवीलाई
**पयोद्रुताम्** = दुधले भिजेको अवस्थामा
**अनयन्** = पुऱ्याए

**वाक्यार्थ–** मुख्य देवताहरूले पनि भगवान्प्रति प्रसन्न भएर स्वर्गबाट पुष्पवृष्टि गरे तथा तीनै लोकका प्रजाहरूले परम आनन्दको अनुभव गरे। त्यस बखतमा गाईहरूले दुधले पृथिवीलाई भिजाइदिए।

**नानारसौघाः सरितो वृक्षा आसन् मधुस्रवाः।**
**अकृष्टपच्यौषधयो गिरयोऽबिभ्रदुन्मणीन्॥ २६॥**

पदार्थ–
**सरितः** = नदीहरू
**नानारसौघाः** = विभिन्न स्वादका

पानी बगाउने भए
**वृक्षाः** = रुखहरू पनि
**मधुस्रवाः** = महहरू बगाउने
**आसन्** = भए
**अकृष्टपच्यौषधयः** = खनजोत नगरीकन नै बोटबिरुवामा फलहरू फल्न थाले
**गिरयः** = पहाडहरूले पनि
**उन्मणीन्** = गर्भभित्रका मणिहरूलाई
**अबिभ्रत्** = (बाहिर नै) धारण गर्न थाले

**वाक्यार्थ–** नदीहरूले विभिन्न स्वाद भएको पानी बगाउन थाले, रुखहरूबाट पनि महका धाराहरू झरे, खनजोत नगरीकन नै गहुँ, धान आदिका बोटबिरुवामा फलहरू फल्न थाले र पर्वतहरूले पनि भित्रका रत्न–मणिहरूलाई बाहिरै धारण गरे।

**कृष्णेऽभिषिक्त एतानि सत्त्वानि कुरुनन्दन ।**
**निर्वैराण्यभवंस्तात क्रूराण्यपि निसर्गतः ॥ २७ ॥**

**पदार्थ–**
**कुरुनन्दन** = हे कुरुवंशी
**तात** = हे प्रिय परीक्षित्
**कृष्णे** = भगवान् श्रीकृष्ण
**अभिषिक्ते** = अभिषिक्त हुनुभएपछि
**निसर्गतः** = स्वभावैले
**क्रूराणि** = क्रूर
**एतानि** = यस्ता
**सत्त्वानि अपि** = प्राणीहरू पनि
**निर्वैराणि** = वैरभावले रहित
**अभवन्** = भए

**वाक्यार्थ–** हे कुरुवंशी प्रिय परीक्षित् ! भगवान् श्रीकृष्ण अभिषिक्त हुनुभएपछि स्वभावैले क्रूर भएका प्राणीहरू पनि वैरभावले रहित भए।

**इति गोगोकुलपतिं गोविन्दमभिषिच्य सः ।**
**अनुज्ञातो ययौ शक्रो वृतो देवादिभिर्दिवम् ॥ २८ ॥**

**पदार्थ–**
**इति** = यसरी
**गोगोकुलपतिं** = गाई र गोकुलका स्वामी
**गोविन्दम्** = गोविन्दलाई
**अभिषिच्य** = अभिषेक गरेर
**अनुज्ञातः** = (जान) आज्ञा पाएका
**सः** = ती
**शक्रः** = इन्द्र
**देवादिभिः** = देवता आदिद्वारा
**वृतः** = घेरिएर
**दिवम्** = स्वर्गतिर
**ययौ** = गए

**वाक्यार्थ–** यसरी गाई र गोकुलका स्वामी गोविन्दलाई अभिषेक गरेर देवता आदिले सहित इन्द्र भगवान् श्रीकृष्णसँग आज्ञा लिई स्वर्गतिर गए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**इन्द्रस्तुतिर्नाम सप्तविंशोऽध्यायः ॥ २७ ॥**

# अथ अष्टाविंशोऽध्यायः

## भगवान् श्रीकृष्णले वरुण लोकबाट नन्दलाई ल्याउनु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकादश्यां निराहारः समभ्यर्च्य जनार्दनम्।**

**स्नातुं नन्दस्तु कालिन्द्या द्वादश्यां जलमाविशत्॥ १॥**

**पदार्थ–**
**नन्दः तु** = नन्द चाहिँ
**एकादश्यां** = एकादशीमा
**निराहारः** = निराहार व्रत बसेर
**जनार्दनम्** = भगवान् जनार्दनलाई
**समभ्यर्च्य** = पूजा गरेर
**द्वादश्यां** = द्वादशीमा (राति नै)
**स्नातुं** = स्नान गर्नका लागि
**कालिन्द्याः** = यमुनाको
**जलम्** = जलमा
**आविशत्** = प्रवेश गरे

**वाक्यार्थ–** नन्दले कार्तिक शुक्ल एकादशीमा निराहार व्रत बसेर भगवान् जनार्दनको पूजा गरी भोलिपल्ट द्वादशीमा (राति नै) नुहाउन यमुनाको जलमा प्रवेश गरे।

**तं गृहीत्वानयद् भृत्यो वरुणस्यासुरोऽन्तिकम्।**

**अवज्ञायासुरीं वेलां प्रविष्टमुदकं निशि॥ २॥**

**पदार्थ–**
**आसुरीं** = असुरहरूको विहार गर्ने
**वेलां** = समयलाई
**अवज्ञाय** = वास्तै नगरी
**निशि** = रातमा नै
**उदकं** = पानीमा
**प्रविष्टम्** = प्रवेश गरेका
**तं** = ती नन्दलाई
**गृहीत्वा** = समातेर
**वरुणस्य** = वरुणको
**भृत्यः** = सेवक
**असुरः** = कुनै असुरले
**अन्तिकम्** = वरुणको नजिक
**अनयत्** = लग्यो

**वाक्यार्थ–** असुरहरूको विहार गर्ने वेला हो भन्ने कुरा विचारै नगरी राति नै नुहाउन जलमा प्रवेश गरेका नन्दलाई वरुणको सेवक कुनै असुरले समातेर वरुण भए ठाउँमा लग्यो।

**विवरण–** यस श्लोकमा वरुणको अनुचरले आसुरी वेला अर्धरात्रिमा यमुनाभित्र नुहाउन पसेका नन्दलाई हरण गरेको बताइएको छ।

एकादशीको दिन नन्दले जनार्दन भगवान्को पूजा गरे। एकादशीमा निराहार रही द्वादशीको दिन व्रत पारायण गर्नुपर्ने शास्त्रीय विधान छ। सूर्योदयकालमा यदि द्वादशी आधा मुहूर्त मात्रै बाँकी हुने रहेछ भने अर्धरात्रिमैँ उठी अग्निहोत्र आदि नित्य कर्म समाप्त गरेर भए पनि प्रातःकाल द्वादशीमा पारायण गर्नैपर्दछ। यद्यपि यी वैदिक कृत्यहरू प्रातःकालदेखि मध्याह्नकालसम्ममा गरिन्छन्, तर सूर्योदयपछि द्वादशी जम्मा आधा मुहूर्त मात्र बाँकी रहेछ भने त द्वादशीमा अनिवार्य पारायण गर्नुपर्ने उपासनाको नियमले गर्दा ती वैदिक कर्महरूलाई पनि अघि नै गरिसक्नुपर्दछ भन्ने मान्यता छ– **कलार्धां द्वादशीं दृष्ट्वा निशीथादूर्ध्वमेव हि। आमध्याह्नाः क्रियाः सर्वाः कर्तव्याः**

**शम्भुशासनात्**। नन्दले यही मान्यता अनुसार अर्धरात्रिमा नै नुहाएका हुन् तर वरुणको सेवकले अर्धरात्रिमा नुहाउनुहुन्न भन्ने सामान्य नियम मात्र जानेकाले नन्दको हरण गर्‍यो। आसुरी वेला ठानी वरुणको सेवकले नन्दको हरण गर्नु यस विषयमा उसको ज्ञान नहुनाले हो भनी वरुणले नै सातौँ श्लोकमा भनेका छन्।

**चुक्रुशुस्तमपश्यन्तः कृष्ण रामेति गोपकाः।**
**भगवांस्तदुपश्रुत्य पितरं वरुणाहृतम्।**
**तदन्तिकं गतो राजन् स्वानामभयदो विभुः॥ ३॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**तम्** = ती नन्दलाई
**अपश्यन्तः** = नदेखेका
**गोपकाः** = गोपहरूले
**कृष्ण राम इति** = हे श्रीकृष्ण ! हे बलराम ! भनेर
**चुक्रुशुः** = कराए
**भगवान्** = भगवान्ले पनि
**तत् उपश्रुत्य** = त्यो कोलाहललाई सुनेर
**पितरं** = पितालाई
**वरुणाहृतम्** = वरुणद्वारा हरण गरिएको कुरा बुझी
**स्वानाम्** = आफ्ना भक्तहरूलाई
**अभयदः** = अभयप्रदान गर्ने
**विभुः** = व्यापक परमात्मा श्रीकृष्ण
**तदन्तिकं** = ती वरुणको समीपमा
**गतः** = जानुभयो

**वाक्यार्थ–** नन्दलाई नदेखेपछि सारा गोपहरू 'हे श्रीकृष्ण ! हे बलराम !' भनेर कराउन थाले। यो कोलाहल सुनेर पिताजीलाई वरुणले हरण गरेको कुरा भगवान्ले बुझ्नुभयो र आफ्ना भक्तहरूलाई अभयप्रदान गर्नुहुने भगवान् श्रीकृष्ण वरुण भएको ठाउँमा जानुभयो।

**प्राप्तं वीक्ष्य हृषीकेशं लोकपालः सपर्यया।**
**महत्या पूजयित्वाह तद्दर्शनमहोत्सवः॥ ४॥**

पदार्थ–
**तद्दर्शनमहोत्सवः** = उहाँ (भगवान्)को दर्शनको महोत्सवले आनन्दित भएका
**लोकपालः** = लोकपाल वरुणले
**प्राप्तं** = (आफ्नो ठाउँमा) आउनुभएका
**हृषीकेशं** = इन्द्रियका ईश्वर भगवान्लाई
**वीक्ष्य** = देखेर
**महत्या** = ठुलो
**सपर्यया** = पूजाविधिद्वारा
**पूजयित्वा** = पूजा गरेर
**आह** = भन्न थाले

**वाक्यार्थ–** भगवान्को दर्शनलाई महोत्सव समान मान्ने लोकपाल वरुणले हृषीकेश भगवान् आउनुभएको देखेर धुमधामसँग भगवान्को पूजा गरी उहाँलाई भन्न थाले।

**वरुण उवाच** (वरुणले भने)

**अद्य मे निभृतो देहोऽद्यैवार्थोऽधिगतः प्रभो।**
**त्वत्पादभाजो भगवन्नवापुः पारमध्वनः॥ ५॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**अद्य** = आज
**मे** = मेरो
**देहः** = शरीर धारण गरेको
**निभृतः** = सफल भयो
**अद्य एव** = आज नै
**अर्थः** = (सारा) पुरुषार्थ
**अधिगतः** = प्राप्त भयो
**प्रभो** = हे प्रभु
**त्वत्पादभाजः** = हजुरका चरण उपासकहरू
**अध्वनः** = संसारमार्गको
**पारम्** = पार (लक्ष्य)
**अवापुः** = प्राप्त गर्दछन्

**वाक्यार्थ–** हे भगवान् ! आज मैले शरीर धारण गरेको सफल भयो र सारा पुरुषार्थको प्राप्ति पनि भयो। हे प्रभु ! जो हजुरको चरणकमलको उपासना गर्दछन् उनीहरूले संसारमार्गको लक्ष्य प्राप्त गर्दछन्।

**नमस्तुभ्यं भगवते ब्रह्मणे परमात्मने।**
**न यत्र श्रूयते माया लोकसृष्टिविकल्पना॥ ६॥**

**पदार्थ–**
**भगवते** = ऐश्वर्यशाली
**ब्रह्मणे** = व्यापक स्वरूप र
**परमात्मने** = आत्मस्वरूप
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ
**यत्र** = जुन परमात्मामा
**लोकसृष्टिविकल्पना** = चराचरलोकको सृष्टि गर्ने
**माया** = माया
**न श्रूयते** = वास्तविक रूपमा छैन भनेर वेदले भन्दछ

**वाक्यार्थ–** ऐश्वर्यशाली, व्यापक र सबैका आत्मस्वरूप हजुरलाई नमस्कार छ। हजुरमा यो चराचरको सृष्टि गराउने जो माया शक्ति छ, त्यो वास्तविक रूपले छैन भनेर वेदले भन्दछ।

**अजानता मामकेन मूढेनाकार्यवेदिना।**
**आनीतोऽयं तव पिता तद्भवान् क्षन्तुमर्हति॥ ७॥**

**पदार्थ–**
**अजानता** = नजानेको
**अकार्यवेदिना** = कर्तव्य नबुझेको
**मूढेन** = मूर्ख
**मामकेन** = मेरो भृत्यद्वारा
**अयं** = यहाँ
**तव पिता** = हजुरका पिता
**आनीतः** = ल्याइनुभएको छ
**भवान्** = हजुरले
**तत्** = त्यो अपराध
**क्षन्तुम् अर्हति** = क्षमा गरिदिनुहोस्

**वाक्यार्थ–** केही नजानेको र कर्तव्य नबुझेको मूर्ख यो मेरो सेवकले हजुरका पिताजीलाई ल्याएछ, हजुरले यो अपराध क्षमा गरिदिनुहोस्।

**ममाप्यनुग्रहं कृष्ण कर्तुमर्हस्यशेषदृक्।**
**गोविन्द नीयतामेष पिता ते पितृवत्सल॥ ८॥**

**पदार्थ–**
**कृष्ण** = हे श्रीकृष्ण
**गोविन्द** = हे गोविन्द
**अशेषदृक्** = हजुर सबैको साक्षी हुनुहुन्छ, त्यसैले
**मम अपि** = मलाई पनि

**अनुग्रहं** = अनुग्रह
**कर्तुम्** = गर्न
**अर्हसि** = योग्य हुनुहुन्छ
**पितृवत्सल** = हे पितृप्रिय प्रभु
**एष** = यहाँ रहनुभएका
**ते** = हजुरका
**पिता** = पिता
**नीयताम्** = लगियोस्

**वाक्यार्थ–** हे श्रीकृष्ण ! हे गोविन्द ! हजुर संसारको साक्षी हुनुहुन्छ, ममाथि कृपा गर्नुहोस् र हे पितृप्रिय प्रभु ! यहाँ रहनुभएका आफ्ना पिताजीलाई लैजानुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकेदवले भन्नुभयो)

**एवं प्रसादितः कृष्णो भगवानीश्वरेश्वरः।**

**आदायागात् स्वपितरं बन्धूनां चावहन् मुदम्॥ ९॥**

पदार्थ–
**एवं** = यसरी
**प्रसादितः** = (स्तुति आदिद्वारा) प्रसन्न गराइनुभएका
**ईश्वरेश्वरः** = (ब्रह्मा आदि) ईश्वरहरूका पनि ईश्वर
**भगवान् कृष्णः** = भगवान् श्रीकृष्णले
**स्वपितरं** = आफ्ना पिताजीलाई
**आदाय** = लिएर
**बन्धूनां** = बन्धुबान्धवहरूको
**मुदम् च** = हर्षलाई
**आवहन्** = बढाउँदै
**अगात्** = (व्रजतिर) जानुभयो

**वाक्यार्थ–** यसरी वरुणले स्तुति गरेर भगवान्लाई प्रसन्न बनाएपछि ईश्वरहरूका पनि ईश्वर भगवान् श्रीकृष्ण सारा व्रजवासीहरूलाई आनन्दित पार्दै पिताजीलाई लिएर व्रजतिर जानुभयो।

**नन्दस्त्वतीन्द्रियं दृष्ट्वा लोकपालमहोदयम्।**

**कृष्णे च सन्नतिं तेषां ज्ञातिभ्यो विस्मितोऽब्रवीत्॥ १०॥**

पदार्थ–
**नन्दः तु** = नन्दले चाहिँ
**अतीन्द्रियं** = कहिल्यै नदेखेको
**लोकपालमहोदयम्** = लोकपाल वरुणको ऐश्वर्यलाई र
**कृष्णे च** = श्रीकृष्णमा
**तेषां** = ती लोकपाल र उनका सेवकहरूको
**सन्नतिं** = आदरभाव
**दृष्ट्वा** = देखेर
**विस्मितः** = चकित हुँदै
**ज्ञातिभ्यः** = आफ्ना बन्धुबान्धवहरूलाई
**अब्रवीत्** = भन्न थाले

**वाक्यार्थ–** नन्द कहिल्यै नदेखेको लोकपाल वरुणको ऐश्वर्य र उनीहरूको श्रीकृष्णप्रतिको आदरभाव देखेर चकित भए अनि ती सबै कुरा उनी आफन्तहरूलाई भन्न थाले।

**ते त्वौत्सुक्यधियो राजन् मत्वा गोपास्तमीश्वरम्।**

**अपि नः स्वगतिं सूक्ष्मामुपाधास्यदधीश्वरः॥ ११॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**औत्सुक्यधियः** = नन्दको कुरा सुनेर उत्सुकता बढेका
**ते** = ती
**गोपाः तु** = गोपहरूले चाहिँ

**तं** = ती श्रीकृष्णलाई
**ईश्वरम्** = ईश्वर
**मत्वा** = मानेर
**अधीश्वरः** = संसारका मालिक परमात्माले
**नः अपि** = हामीहरूलाई पनि
**सूक्ष्मां** = सूक्ष्म
**स्वगतिं** = आफ्नो परमधामको दर्शन
**उपाधास्यत्** = गराइदिनुहोला कि

**वाक्यार्थ–** हे परीक्षित् ! नन्दको कुरा सुनेर गोपहरूले जगत्का एक मात्र स्वामी परमात्माले हामीहरूलाई पनि आफ्नो सूक्ष्म परमधामको दर्शन गराइदिनुहोला कि भनी अति उत्सुकतापूर्वक विचार गर्न थाले।

**इति स्वानां स भगवान् विज्ञायाखिलदृक् स्वयम्।**
**सङ्कल्पसिद्धये तेषां कृपयैतदचिन्तयत्॥ १२॥**

**पदार्थ–**
**इति** = यसरी विचार गरिरहेका
**स्वानां** = आफ्ना प्रेमी भक्तहरूको इच्छालाई
**अखिलदृक्** = सर्वसाक्षी
**सः भगवान्** = उहाँ भगवान् श्रीकृष्णले
**स्वयम्** = आफैं
**विज्ञाय** = बुझेर
**कृपया** = कृपापूर्वक
**तेषां** = तिनीहरूको
**सङ्कल्पसिद्धये** = इच्छा पूर्ण गर्न
**एतत्** = यो
**अचिन्तयत्** = विचार गर्न लाग्नुभयो

**वाक्यार्थ–** यसरी विचार गरिरहेका आफ्ना प्रेमी भक्तहरूको इच्छालाई सर्वसाक्षी हुनुभएका भगवान् श्रीकृष्णले आफैं बुझेर उनीहरूको इच्छा पूर्ण गर्ने विचार गर्न लाग्नुभयो।

**जनो वै लोक एतस्मिन्नविद्याकामकर्मभिः।**
**उच्चावचासु गतिषु न वेद स्वां गतिं भ्रमन्॥ १३॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**जनः** = मानिस
**एतस्मिन् लोके** = यो लोकमा
**अविद्याकामकर्मभिः** = अविद्या, कामना र कर्मको आधारमा
**उच्चावचासु** = उचनीच
**गतिषु** = अवस्थाहरूमा
**भ्रमन्** = घुम्दा-घुम्दै
**स्वां** = आफ्नो
**गतिं** = स्वरूपलाई
**न वेद** = जान्न सक्दैन

**वाक्यार्थ–** मानिसले यस लोकमा अविद्या, कामना र कर्मको वासनाले उचनीच अवस्थाहरूमा घुम्दा घुम्दै आफ्नो वास्तविक स्वरूपलाई जान्न सक्दैन।

**इति सञ्चिन्त्य भगवान् महाकारुणिको हरिः।**
**दर्शयामास लोकं स्वं गोपानां तमसः परम्॥ १४॥**

**पदार्थ–**
**इति** = यसरी
**सञ्चिन्त्य** = विचार गरेर
**महाकारुणिकः** = अत्यन्त दयालु
**भगवान् हरिः** = भगवान् श्रीकृष्णले

**गोपानां** = गोपहरूको
**तमसः परम्** = प्रकृतिभन्दा पर रहेको
**स्वं** = आफ्नो
**लोकं** = परमधाम (वैकुण्ठ)
**दर्शयामास** = देखाउनुभयो

**वाक्यार्थ–** परम दयालु भगवान् श्रीकृष्णले यति विचार गरेर ती गोपहरूलाई प्रकृतिभन्दा पर रहेको आफ्नो परमधाम देखाउनुभयो।

**सत्यं ज्ञानमनन्तं यद् ब्रह्मज्योतिः सनातनम्।**
**यद्धि पश्यन्ति मुनयो गुणापाये समाहिताः॥ १५॥**

पदार्थ–
**सत्यं** = सत्स्वरूप
**ज्ञानम्** = चित्स्वरूप र
**अनन्तं** = अनन्त (अन्त्यरहित)
**सनातनम्** = नित्यसिद्ध
**यत् ब्रह्मज्योतिः** = जो ब्रह्मज्योति छ (त्यसको दर्शन गराउनुभयो)
**हि** = निश्चय नै
**यत्** = जसलाई
**गुणापाये** = गुणातीत भएर
**समाहिताः** = समाधिमा बसेका
**मुनयः** = मुनिहरूले
**पश्यन्ति** = देख्दछन् (अनुभव गर्दछन्)

**वाक्यार्थ–** भगवान्ले सत्स्वरूप, चित्स्वरूप, अनन्त र नित्यसिद्ध ब्रह्मज्योतिको दर्शन दिनुभयो जुन ब्रह्मज्योतिको दर्शन गुणातीत भई समाधिमा बसेका मुनिहरूले मात्र प्राप्त गर्दछन्।

**ते तु ब्रह्महृदं नीता मग्नाः कृष्णेन चोद्धृताः।**
**ददृशुर्ब्रह्मणो लोकं यत्राक्रूरोऽध्यगात् पुरा॥ १६॥**

पदार्थ–
**ते तु** = (त्यसपछि) ती गोपहरू
**ब्रह्महृदं** = ब्रह्मकुण्डमा
**नीताः** = पुऱ्याइए
**मग्नाः** = (ब्रह्मकुण्डको आनन्दमा) मग्न भएका उनीहरू
**कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा
**उद्धृताः** = त्यहाँबाट झिकिए (त्यसपछि)
**ब्रह्मणः लोकं च** = ब्रह्मलोकको (ब्रह्मज्योतिको) पनि
**ददृशुः** = दर्शन गरे
**यत्र** = जहाँ
**पुरा** = पहिले
**अक्रूरः** = अक्रूर
**अध्यगात्** = गएका थिए (भगवान्को दर्शन पाएका थिए)

**वाक्यार्थ–** भगवान्ले गोपहरूलाई ब्रह्मकुण्डमा लैजानुभयो। ब्रह्मकुण्डको आनन्दमा मग्न भएका उनीहरूलाई भगवान्ले त्यहाँबाट झिकिदिनुभयो र ब्रह्मलोकको दर्शन गराउनुभयो, जहाँ पहिले अक्रूर गएका थिए।

**नन्दादयस्तु तं दृष्ट्वा परमानन्दनिवृताः।**
**कृष्णं च तत्रच्छन्दोभिः स्तूयमानं सुविस्मिताः॥ १७॥**

पदार्थ–
**परमानन्दनिवृताः** = परमानन्दमा मग्न भएका
**नन्दादयः तु** = नन्द आदि गोपहरू त (त्यो भगवत्लोक र)
**तत्र** = त्यहाँ

| | | |
|---|---|---|
| **छन्दोभिः** = मूर्तिमान् वेदहरूद्वारा | पनि | भए |
| **स्तूयमानं** = स्तुति गरिनुभएका | **दृष्ट्वा** = देखेर | |
| **तं कृष्णं च** = उहाँ श्रीकृष्णलाई | **सुविस्मिताः** = आश्चर्यचकित | |

**वाक्यार्थ–** परमानन्दमा मग्न भएका नन्द आदि गोपहरू भगवान्को धाम र त्यहाँ मूर्तिमान् वेदहरूले भगवान् श्रीकृष्णको स्तुति गरेको देखेर आश्चर्यचकित भए।

**विवरण–** यस अध्यायमा भगवान्का भक्तले अनन्य भावले उहाँको सेवा गर्नुपर्छ भन्ने रहस्य बताइएको छ। भगवान्को सेवक अन्य अनुष्ठान गर्ने धुनमा लाग्यो र उसले भगवान्लाई बिर्सियो भने उसको अनन्यता भङ्ग हुन्छ। अनन्यता भनेको जताततै र सबैरूपमा आफ्ना इष्टदेवको मात्र उपासना, चिन्तन, पूजन गर्नु हो। जब यो अनन्य निष्ठा भक्तमा रहँदैन र कुनै अर्को साधनको खोजीमा ऊ लाग्छ, तब उसले दुःख पाउँछ। यसैले नन्दले पनि दैत्यद्वारा अपहृत भई दुःख पाउनुपरेको हो। यसरी दुःख पाए पनि आफ्ना भक्तलाई भगवान्ले दुःखबाट छुटकारा दिनुहुन्छ। श्रीकृष्णले वरुणलोकमा गएर नन्दलाई छुटाई त्यसैको पुष्टि गर्नुभयो। एकपटक दुःख पाएर त्यसबाट परमात्माले नै जोगाएपछि बल्ल नन्दले श्रीकृष्णको महत्तालाई हृदयभित्रैबाट बुझे। जब भक्तको आफूमा दृढ या अनन्य निष्ठा हुन्छ, तब भगवान्ले तिनीहरूलाई आफ्नो स्वरूपको अपरोक्ष ज्ञान दिनुहुन्छ। गीता (१२/६–७)मा पनि भगवान्ले ममा निरन्तर युक्त भई प्रीतिपूर्वक भजन गर्नेहरूलाई म आफ्नो स्वरूपको ज्ञान गराइदिन्छु र संसारसागरबाट उद्धार गरिदिन्छु भनी यही कुरा भन्नुभएको छ। यहाँ श्रीकृष्णले आफ्नो सगुण र निर्गुण दुबै स्वरूपलाई प्रत्यक्ष देखाइदिनुभएको छ। परमात्माको सनातन रूप भनेको नित्य ब्रह्मचैतन्यरूप हो। भगवान्ले पहिला आफ्नो ब्रह्मचैतन्यको बोध गराइदिनुभयो र गोपहरू सगुण रूपकै उपासक भएकाले पछि दिव्य सगुणरूपको दर्शन पनि गराउनुभयो भनी यस श्लोकमा बताइएको छ। यसरी परमात्माप्रति अनन्य निष्ठा हुनुको फल यहाँ बताइएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां**

**दशमस्कन्धे पूर्वार्धेऽष्टाविंशोऽध्यायः ॥ २८ ॥**

# अथ एकोनत्रिंशोऽध्यायः

## रासलीलाको प्रारम्भ

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**भगवानपि ता रात्रीः शारदोत्फुल्लमल्लिकाः।**

**वीक्ष्य रन्तुं मनश्चक्रे योगमायामुपाश्रितः॥ १॥**

**पदार्थ–**
**भगवान् अपि** = भगवान्ले पनि
**शारदोत्फुल्लमल्लिकाः** = शरद् ऋतुमा बेली फूलहरू फुलेका
**ताः** = ती
**रात्रीः** = रातहरूलाई
**वीक्ष्य** = देखेर
**योगमायाम्** = योगमालाई
**उपाश्रितः** = साथ लिई
**रन्तुं** = क्रीडा गर्न
**मनः** = मन
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** भगवान्ले पनि शरद् ऋतुमा बेली फूलहरू ढकमक्क फुलेका ती रातहरूलाई देखी आफ्नो योगमायाको साथ लिई क्रीडा गर्ने इच्छा गर्नुभयो।

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्णले रासलीलाको सङ्कल्प गर्नुभएको छ। यस श्लोकमा शरत्कालमा बेली फूल फुलेका रातहरूलाई देखेपछि भगवान्लाई पनि रमाउने इच्छा भयो भनिएको छ। परमात्मा आप्तकाम एवं अकाम हुनुहुन्छ भनी बृहदारण्यकोपनिषद् (४/३/२१)मा बताइएको छ। तर अहिले त परमात्मा आफ्ना प्रेमीहरूसँग आफ्नो आनन्द साट्न अनि उनीहरूको प्रेमरस लाई स्वीकार गरी सन्तुष्ट हुन नै व्रजमण्डलभित्र प्रवेश गर्नुभएको हो। यस श्लोकमा प्रयोग भएका सम्पूर्ण पदावलीले परमात्मामा आएको यही रसमय परिवर्तनलाई देखाएका छन्।

यस श्लोकमा सबभन्दा पहिले **भगवान्** शब्दको प्रयोग गरी श्रीशुकदेवले उहाँको सर्वगुणसम्पन्न एवं कामनारहित ईश्वरीय स्वरूपको सम्झना गर्नुभएको छ। भगवान् त ऐश्वर्य, सौभाग्य, यश, धर्म, ज्ञान र वैराग्य यी छ ओटै गुणहरूद्वारा नित्य युक्त रहनुहुन्छ, उहाँलाई अरू कसैबाट आनन्दित हुन या आनन्द सापटी लिनुपर्दैन। बरु परमात्माकै रसलाई पाएर सबै आनन्दित हुन्छन् भनी उपनिषद्मा पनि बताइएको छ– **रसं ह्येवायं लब्ध्वानन्दीभवति** (छान्दोग्योपनिषद्, ८/७/१)। उसो भए उहाँलाई यो प्रेमको प्यासले कहिलेदेखि सताउन थाल्यो ? प्रेमको महिमाद्वारा सर्वसमर्थ एवं कामनारहित परमात्मा पनि पग्लिई परिवर्तित भएर प्रेमको प्यासले युक्त हुनु भक्तहरूका लागि अवश्य नै खुसीको विषय हो। यहाँ भगवान् रमाउन चाहनुभएको छ। जीवहरूले रमाउन विषयहरूको सहारा लिनुपर्दछ, तर भगवान् त स्वतन्त्र हुनुहुन्छ। उहाँको आनन्द अरू कसैको अधीनमा छैन। उसो भए परमात्मा आफ्नै स्वरूपबाट आनन्दित नभई किन बाँसुरी बजाउँदै गोपिनीहरूको प्रतीक्षामा रहनुभयो ? भागवतका टीकाकार विद्वान्हरूले यसको रहस्य बताउनुभएको छ– गोपिनीहरूका माध्यमले लिइएको रस पनि भगवान्को आफ्नै रस हो। वेदान्तमा परमात्मा आनन्दस्वरूप हुनुहुन्छ भनी बताइइको छ, त्यो स्वरूपमा भोग्य-भोक्ता आदि

भावको स्फुरण छैन, तर प्रेममा चाहिँ आनन्दस्वरूप परमात्मा केवल निर्गुण–निष्क्रिय नभई सबै कामना र सबै रसले युक्त हुनुहुन्छ— **सर्वकामः सर्वगन्धः सर्वरसः** (छान्दोग्योपनिषद्, ८/७/१)। ब्रजलीलामा परमात्माको स्वरूपभूत आनन्दको स्फुरण या विमर्श भएको छ। यहाँ केवल निष्क्रिय आनन्दमात्र नभई कामना, उल्लास र नृत्यसहितको आनन्द छ। यसैले यसलाई रस मात्र नभनी रास भनिएको छ।

रास शब्दको अर्थ हुन्छ— रसहरूको समूह (**रसानां समूहः रासः**)। परमात्मा एउटै भएपछि उहाँको स्वरूपभूत आनन्द पनि एउटै हुन्छ, तब **रसानाम्** यसमा बहुवचनको प्रयोग कसरी भयो भन्ने शङ्का हुन सक्छ। तर ब्रजलीलामा स्वरूपभूत आनन्द केवल भगवान्मा मात्र होइन, उहाँकै स्वरूपभूता कृष्णमय गोपिनीहरूमा पनि रहेको छ। अरु भनौं कृष्णमा रहेको स्वरूपभूत निष्क्रिय एवं आस्वादन गर्न नसकिने आनन्द नै गोपिनीहरूमा सरी सक्रिय एवं आस्वाद्य बनेको छ। यस दृष्टिले हेर्दा रासलीलाको प्रसङ्गमा श्रीकृष्णमा भन्दा गोपिनीहरूमा बढी रस छ। आफैंमा अत्यन्त सुन्दर भएको व्यक्ति पनि चुपचाप एकान्तमा रहँदा आफ्नो आनन्दलाई उसले रसास्वादन गर्न सक्दैन। तर जब त्यही व्यक्ति ऐना अगाडि बस्छ, तब त्यहाँ देखिएको आफ्नै स्वरूपले उसलाई परम आनन्दित बनाइदिन्छ। स्फुरित भइरहेको आनन्द निष्क्रिय आनन्दभन्दा बढी आस्वाद्य एवं मनोहर हुन्छ। गोपिनीहरू भगवान्का प्रेममय प्रतिरूप हुन्, उनीहरूमा रहेको यही विशेष आनन्दको आस्वादन गर्न नै स्वरूपतः निष्काम रहने श्रीकृष्ण पनि सकाम हुनुभएको छ। प्रेमरसको यही विलक्षणता हो कि पहिले परमात्माले आफ्नो स्वरूपानन्दलाई प्रेमीहरूको हृदयभित्र फिँजाउनुहुन्छ अनि त्यहाँ मूर्तिमान् भएको आफ्नै रसलाई आफैं आस्वादन गर्नुहुन्छ।

यस श्लोकमा आएको **वीक्ष्य** यो पदले भगवान्ले आफ्नो हेराइद्वारा नै सम्पूर्ण ब्रजमण्डलमा आफ्नो रसको स्थापना गर्नुभएको सूचित गर्दछ। रसलाई भोग्न त मन चाहिन्छ, परमात्मामा संसारी जीवहरूमा जस्तो मन छैन, तब कसरी भोग सम्भव छ ? यो समस्याको समाधानका लागि भगवान्ले आफैंमा **मनश्चक्रे** अर्थात् मनको पनि रचना गर्नुभयो। कुनै पनि काम गर्न सबभन्दा पहिले मन चाहिन्छ **यस्मान्न ऋते किञ्चन कर्म क्रियते** भनी वेदमा (रुद्राष्टाध्यायी १/७) बताइएको छ। सृष्टिकालमा पनि पहिले मनको रचना भएको छ— **तन्मनोऽसृजत**। महारासमा पनि सबभन्दा पहिले यही मनको रचना भएको छ। टीकाकार वंशीधरले **चक्रे** यो आत्मनेपदको तात्पर्य बताउँदै भन्नुभएको छ— भगवान्ले मनको रचना आफ्नै लागि गर्नुभएको हो। क्रियाको फल स्वयं कर्तामा रहन्छ भने त्यहाँ आत्मनेपदको प्रयोग हुन्छ। यसैले यहाँ मनद्वारा आनन्द भोग्नुको मुख्य फल भगवान्मा छ। भगवान्को प्रेमले भरिपूर्ण भएका गोपिनीहरूले भगवान्लाई नै प्रेमरसको दान गर्नु ब्रजलीलाको विशेषता हो।

**ताः रात्रीः** यो पदको विद्वान्हरूले अनेक अर्थ गर्नुभएको छ। यसको सामान्य अर्थ हो, चीरहरणको समयमा भगवान्ले **रंस्यथ क्षपाः** अर्थात् मसँग रातहरूमा विहार गर्नेछौ भनी जुन रातहरूको सङ्केत गर्नुभएको थियो, तिनैलाई **ताः** भन्ने शब्दले बुझाएको छ। भगवान्ले रासलीला गर्दाको समय कुन थियो भनी सारार्थदर्शिनी, वंशीधरी आदि अनेक टीकामा विस्तृत विवेचना गरिएको छ। भगवान् श्रीकृष्ण सात वर्षको हुँदा कार्त्तिक महिनाको औंसीमा उहाँले इन्द्रयागको

निषेध गर्नुभएको थियो। शुक्लप्रतिपदामा गोवर्धन पूजा, उत्सव आदि भयो भने द्वितीयाको दिन इन्द्रले यो सब थाहा पाई क्रोध गरे। तृतीयादेखि नवमीसम्म सात दिन उहाँले गोवर्धनधारण गर्नुभयो। दशमीमा गोप-गोपिनीहरू र स्वयं इन्द्र पनि भगवान्‌को पराक्रम देखी विस्मित भए। एकादशीको दिन गोविन्दाभिषेक, इन्द्रस्तुति आदि भयो। द्वादशीको दिन भगवान् श्रीकृष्णले नन्दलाई वरुणलोकबाट छुटाई ल्याउनुभयो भने पूर्णिमामा सबै व्रजवासीलाई वैकुण्ठमा लिई जानुभयो। यसरी सातौँ वर्षको शरद् ऋतु समाप्त भयो। अब आठौँ वर्षको शरद् ऋतु आएपछि आश्विन पूर्णिमाको दिन सायङ्कालमा भगवान्‌ले रास आरम्भ गर्ने विचार गर्नुभयो। यहाँ पूर्णिमाको एउटै रातलाई किन **रात्रीः** यो बहुवचनको प्रयोग गरियो भन्ने शङ्का हुन सक्छ। टीकाकारहरू लेख्छन्— भगवान्‌ले पूर्णिमाको एउटै रातमा अनन्त रातहरूको विस्तार गर्नुभएको थियो। गोपिनीहरूमा रहेको अनन्त प्रेम र अनन्त उत्कण्ठाको शान्ति गर्न एउटै रातको विहारले नपुग्ने अनि आफूले उनीहरूको प्रेमको आस्वादन गर्न पनि एउटा रात मात्र अपुग हुने देखी भगवान्‌ले आफ्नो चिन्मय सङ्कल्पशक्तिबाट अनेक रातहरूको विस्तार गर्नुभयो। वस्तुतः रासलीला पूर्णिमा आदि कुनै लौकिक तिथिहरूमा होइन, अपि तु भगवान्‌द्वारा नै सङ्कल्पित दिव्य अनेक रात्रिहरूमा भएको थियो भनी यसले बताउँछ। रासपञ्चाध्यायीको अन्त्य (भागवत १०/३३/३९)मा **ब्रह्मरात्र उपावृत्ते** भनेर ब्रह्माजीको एक रात अर्थात् एक हजार चतुर्युगीको पूर्ण अवधिसम्म महारास भएको बताइएको छ। जे होस्, ती अनेक रातहरूको विस्तार एउटै पूर्णिमाको रातमा भएको थियो।

भगवान्‌ले रासको सङ्कल्प गर्नुभएपछि दोस्रो श्लोकमा मात्र चन्द्रमा उदाएको वर्णन गरिएको छ। **उदगात्** अर्थात् चन्द्रमा बल्ल उदाए भन्नुको अर्थ कृष्णचन्द्रले गर्न लागेको लीलामा सहयोगी हुने रसमय चन्द्रमा नै त्यहाँ उदाएको भन्ने हुन्छ। यो रासविहारको भावमय चन्द्र हो र पूर्व दिशादेखि मध्य आकाशसम्म मात्र यो पुग्छ, अस्त हुँदैन। शरत्कालमा मल्लिका (बेली) नफुल्ने भए पनि त्यो फुलेको बताउनुले वृन्दावनको भावमय अप्राकृत जगत्‌मा सबै ऋतुका फूलहरू त्यहाँ फुलेका थिए भनी सूचित गर्दछ। वंशीधरका अनुसार **ताः रात्रीः** यो पदको अर्को अर्थ हुन्छ— **रात्रिवत् तमोव्याप्ताः प्रजाः** अर्थात् रात झैं महाअन्धकारमा रहेका प्राणीहरू। यहाँ **शरदोत्फुल्लमल्लिकाः** यो पद प्रजा पदको विशेषण हो, जसको अर्थ हुन्छ— **शर इव द्यन्ति पीडयन्ति इति शरदाः— पुत्राद्याः विषयाः, तेषु उत्फुल्लमल्लिकावत् सुखबुद्धयः ये ते**। पुत्र-परिवार आदि विषयहरू बाणले रोपे झैं पीडा दिने स्वभावका छन्, तिनमा पनि सामान्य प्राणीहरू फूल फुले झैं सुख भरिएको देख्छन्। यस्ता अज्ञानी प्राणीहरूसँग आफैं घुलमिल गरेविना यिनीहरूको कुनै उपायले पनि उद्धार हुन सक्दैन। मेरा लागि यिनले त्याग, पुरुषार्थ आदि केही नगर्ने भएपछि यिनका लागि म नै प्रयास गर्छु भनी **रन्तुं** अर्थात् तिनीहरूसँग घुलमिल भई भगवान् रमाउन खोज्नुभयो। यो कृपाप्रधान लीला भएकाले यहाँ **योगमाया**को आश्रय लिनु भनेको अज्ञानीहरूलाई आफूमा **योग** गराउन **या** अर्थात् जुन **मा** अर्थात् कृपा आवश्यक छ, त्यसकै आश्रय लिनु हो।

दान गर्ने अर्थको **रा** धातुमा **त्रि** प्रत्यय लागेर पनि रात्रि शब्द बन्दछ, जसको अर्थ हुन्छ, दान गर्ने या आफैंलाई भगवान्‌मा समर्पित गरिदिने शरणागत भक्तहरू। **उत्फुल्लमल्लिकादिरूपाणि विषयसुखानि शर इव द्यन्ति याः** यो व्युत्पत्तिबाट

**शरदोत्फुल्लमल्लिकाः** यो पद बन्दछ। यसको अर्थ हुन्छ— मल्लिका फूल फुले झैँ संसारी व्यक्तिले राम्रा मान्ने विषयसुखले जसलाई बाण बिझे झैँ पीडा दिन्छन्, यस्ता विरक्त भक्तहरू, जसलाई विषयभोगले झन् दुःख दिएको भान हुन्छ, त्यस्तालाई ब्रह्मरूप आफूमा मिलाउन भगवान्ले इच्छा गर्नुभयो भन्ने अर्को अर्थ हो। यहाँ **योगमाया** पदको अर्थ हुन्छ, आफूमा **योग** अर्थात् अभेद गराउनका लागि **या** जुन **मा** अर्थात् ब्रह्मप्रमा (ज्ञान) छ, त्यसको आश्रय लिई भगवान् विरक्तहरूसँग खेल्नुहुन्छ।

यो प्रेममय लीलाको प्रसङ्ग भएकाले पनि रहस्यवादी अनेक विद्वान्हरूले यसलाई आध्यात्मिक रहस्यकै अर्थमा प्रस्ट्याउनुभएको छ। रासरहस्य टीकाकार लेख्नुहुन्छ— यहाँ भगवान् मुमुक्षु व्यक्तिको स्थानमा हुनुहुन्छ। **भगः भाग्यं तद्वान् भगवान्** मुक्त हुने इच्छा राख्ने महाभाग्यशाली नै भगवान् हो। अनेक विषयहरूका आकारमा आकारित अज्ञानात्मिका वृत्तिहरू नै **रात्रीः** हुन्। ती संसारी वृत्तिहरूलाई देखी मुमुक्षु **योग** अर्थात् स्वरूप साक्षात्कारका लागि **या** जुन **मा** अर्थात् ब्रह्मप्रमा छ, त्यसको आश्रय लिन्छ। यहाँ **मनः चक्रे** यस पदावलीको अर्थ चित्तसमाधान गर्नु भन्ने हुन्छ।

यो २९ अध्यायदेखिको ३५ अध्यायसम्मका ७ अध्यायहरूलाई सुबोधिनीकारले कामप्रकरण भनी छुट्याउनुभएको छ। यहाँ काम भनेर प्रेमको पराकाष्ठा या फलरूप अवस्थालाई बताइएको हो। किनभने भक्तिशास्त्र अनुसार भगवान्मा परमप्रेम हुनुलाई नै परमपुरुषार्थ मानिन्छ। त्यसैले अनेक टीकाकारहरूले यसलाई फलप्रकरण भनी उल्लेख गरेका छन्। यी प्रसङ्गहरूमा गोपिनीहरूमा प्रेमको चरम उत्कर्ष देखेर स्वयं रसमय भगवान् पनि ती अनेक गोपिनीहरूबाट प्रेमरस प्राप्त गर्न अनेक बन्नुभएको छ। कहिले हराउँदै, कहिले देखिँदै अनि कहिले उनीहरूका प्रेमजिज्ञासाहरूको समाधान गर्दै भगवान्ले उनीहरूको प्रेमलाई झन्-झन् परिपुष्ट गरिरहनुभएको छ। गोपिनीहरूसँगको रासलीलामा अङ्गस्पर्श, बाँसुरीको गीतश्रवण, ताम्बुलभक्षण, अङ्गरागको सुगन्ध सुँघ्नु आदि अनेक वृत्तिहरूको प्रकाश भएको छ। भागवतलाई साक्षात् भगवान्कै वाङ्मयी मूर्ति एवं दशम स्कन्धलाई उहाँको हृदय भनी बताइन्छ। हृदयमा पनि सबैभन्दा मुख्य पञ्चप्राण हुन्छन्। प्राण, अपान, समान, व्यान, उदान गरी यी पाँच सञ्चारी प्राणहरूद्वारा नै हृदय बन्दछ। यो पञ्चाध्यायी रासलीला पनि वाङ्मय मूर्ति भगवान्को पाँच प्राणसमानको रहेको छ। हृदय भावना एवं संवेदनाको केन्द्र हो। दशम स्कन्धको भावमय श्रीविग्रहमा रासलीलाका यी पाँच अध्यायले भगवान्को प्रेमलीलामा प्राणसञ्चार गराएका छन्।

श्रीधर स्वामीका अनुसार— **ब्रह्मादिजयसंरूढदर्पकन्दर्पदर्पहा** अर्थात् ब्रह्मा आदि सबै देवतालाई एक-एक गरी जितेपछि दर्प बढेको **कन्दर्प** अर्थात् कामदेवको **दर्प** वा अभिमानलाई नष्ट गर्न नै भगवान्ले रासलीला गर्नुभएको हो। भक्तहरू भन्छन्— शिवजीले जलाइदिनुभएको कामदेवले एक दिन श्रीकृष्णलाई युद्ध गर्न डाकेछ। श्रीकृष्णले शिवजीबाट कामदेव भस्म हुनुपरेको कुरा कामदेवलाई सम्झाउँदा पनि उसले त्यो वेला शिवजी तपस्या गर्न एकान्तवासमा हुनुभएकाले आफूले हार्नुपरेको बताएछ। तब भगवान् श्रीकृष्णले अत्यन्त कामी पुरुषहरूको झैँ आचरण गर्दा पनि आफूमाथि कामको प्रभाव अलिकति पनि नपरेको देखाउन सयौँ स्त्रीहरूसँग

विहार गर्नुभएको हो। **आत्मन्यवरुद्धसौरतः** अर्थात् कामलाई आफैंभित्र थुनिदिई लीला गर्नुभयो भन्ने जस्ता पदहरूले भगवान्को यही अच्युततालाई देखाएका छन्। स्त्री, एकान्त रात, पूर्णचन्द्रको उदय आदि कामका सबै सामग्रीलाई पाउँदा त म यिनलाई अवश्य नै जित्नेछु भनी ढुक्क भएको कामदेव भगवान्माथि आफ्नो कुनै पनि प्रभाव नपरेको देखी साहसविहीन एवं निरुपाय बन्यो। कामदेवको अभिमान चूर्ण गरिदिने यो श्रीकृष्णचरित्रको श्रवण-पठनले श्रद्धालु व्यक्तिहरूको हृदयभित्र रहेको बचे-खुचेको काम पनि चूर्ण हुन्छ भन्ने भावुक भक्तहरूको विश्वास रहेको छ।

**तदोडुराजः ककुभः करैर्मुखं प्राच्या विलिम्पन्नरुणेन शन्तमैः।**
**स चर्षणीनामुदगाच्छुचो मृजन् प्रियः प्रियाया इव दीर्घदर्शनः॥ २॥**

**पदार्थ–**
**तदा** = त्यस वेला
**सः** = ती
**उडुराजः** = चन्द्रमा
**चर्षणीनां** = मानिसहरूको
**शुचः** = गर्मीबाट उत्पन्न तापलाई
**मृजन्** = हटाउँदै
**दीर्घदर्शनः** = लामो समयपछि भेटिएका
**प्रियः** = प्रियले
**प्रियायाः इव** = आफ्नी प्रियाको (अनुहार सिँगारे) झैं
**प्राच्याः** = पूर्वी
**ककुभः** = दिशाको
**मुखं** = मुखलाई
**शन्तमैः** = शीतल
**करैः** = किरणरूपी हातहरूद्वारा
**अरुणेन** = अरुणिमा (लाली) द्वारा
**विलिम्पन्** = लेपन गरिँदिदै
**उदगात्** = उदाए

**वाक्यार्थ–** त्यसै वेला मानिसहरूमा गर्मीबाट उत्पन्न तापलाई हटाउँदै, लामो समयपछि भेट भएका प्रियतमले आफ्नी प्रियाको अनुहार सिँगारिदिए झैं पूर्वी दिशाको मुखलाई आफ्ना शीतल किरणरूपी हातहरूद्वारा लाली लेपन गरिदिँदै चन्द्रमा उदाए।

**विवरण–** भगवान्ले रासक्रीडामा मन गर्नेबित्तिकै पूर्व दिशाबाट चन्द्रमा उदाए। चन्द्रमालाई मनको देवता मानिन्छ। अनुग्राहक देवताको अनुग्रहविना इन्द्रियहरूले काम गर्न सक्दैनन्। भगवान्ले भर्खरै रासका लागि आवश्यक मनको सृष्टि गर्नुभयो अतः त्यसको पनि अनुग्राहक चाहियो। रासलीलाको लागि योग्य अप्राकृत मन अरू सामान्य मन जस्तो होइन, जसलाई सामान्य चन्द्रको अनुग्रहले काम गरोस्, यसका लागि त भावजगत्मा नै दिव्य चन्द्रमाको उदय हुनु आवश्यक छ। त्यसैले भगवान्ले आफ्नो नयाँ मनको अधिष्ठाता देवताको रूपमा नयाँ चन्द्रमाको पनि सृष्टि गर्नुभयो भन्ने सुबोधिनीकारको मत रहेको छ। आफ्ना किरणद्वारा पूर्वी दिशाको मुहारमा लाली छर्दै चन्द्रमा उदाउनुले चन्द्रमामा भरिएको प्रसन्नतालाई बताउँछ। आजसम्म चन्द्रमा मनका अधिष्ठाता त थिए, तर भगवान्मा परिच्छिन्न मन नभएकाले भगवान्सँग उनको सम्बन्ध हुन पाएको थिएन। जब भगवान्ले लीलाविहारको लागि मनको रचना गर्नुभयो तब भगवान्को मनको समेत अधिष्ठाता हुन पाएकोमा चन्द्रमा अत्यन्त प्रसन्न भए र पूर्णताका साथ उदाए। मानौं सम्पूर्ण प्राणीहरूको आँखामा परी आफ्नो यो अपूर्व सौभाग्य सबैलाई देखाउनकै लागि चन्द्रमा चम्किएका हुन् कि भने झैं थियो। यसरी चन्द्रमा उदाउनुका अनेक तात्पर्य रहेका छन्।

चन्द्रमालाई उडुराज भनिन्छ, यसको अर्थ ताराहरूका स्वामी भन्ने हुन्छ। श्रीकृष्ण पनि उडुराज हुनुहुन्छ, भगवान् तारा जस्ता अनेक गोपिनीहरूको बीचमा शोभित हुने चन्द्रमा समान हुनुहुन्छ। तर आकाशको चन्द्रमाका भन्दा पनि श्रीकृष्णचन्द्रमाका धेरै विशेषताहरू छन्। चन्द्रमामा अलिकति मात्र दाग छ, ताराहरूको बीचमा रही आफैं बढी चम्किरहेको छ तर श्रीकृष्णले त आफ्नो सौन्दर्यजति सबै गोपिनीहरूलाई दिनुभएको छ र उज्याला-चम्किला तिनीहरूको बीचमा बस्नुभएको छ। चन्द्रमा र ताराहरूको अवस्थाभन्दा श्रीकृष्ण एवं गोपिनीहरूबीचको अवस्था फरक छ। यहाँ प्रेमीहरू अलग-अलग व्यक्तित्व भएका छैनन्, अपि तु एक भई मिलेका छन्। यही श्रीकृष्णको प्रेमलीलाको विचित्रता हेर्न चन्द्रमा भएभरको प्रकाश निकाली पूर्णताका साथ चम्किरहेका छन् ताकि कुनै पनि अंशमा यो लीला हेर्नबाट वञ्चित हुन नपरोस्।

चन्द्रमा उदाएपछि पूर्वी दिशा उज्यालो भयो भन्नुको साटो श्रीशुकदेवले चन्द्रमाले आफ्ना सुनौला किरणरूपी हातले पूर्वी दिशाको अनुहारमा लाली दलिदिए भन्नुभएको छ। यसमा चन्द्रमा र पूर्व दिशामा प्रिय-प्रियाको भाव कल्पना गरिएको छ। भगवान् श्रीकृष्ण चन्द्रवंशमा जन्मिनुभएको हो। रासमा गोपिनीहरूसँग नाचिरहँदा आकाशमा आफ्ना कुलका आदि पुरुष चन्द्रमालाई देखी सङ्कोचले उहाँ लजाउन सक्नुहुन्छ। यसैले रसमा व्यवधान नआओस् भन्नका लागि चन्द्रमा पहिल्यै आफैंले शृङ्गारलीलालाई प्रकट गर्दैछन्। आकाशका कुलपुरुष चन्द्रमाले जन्मिने (उदाउने)बित्तिकै पूर्वी दिशाको अनुहारमा लाली लगाइदिएर रासको सुरुवात गरिसकेका छन् भने श्रीकृष्ण त आठ वर्षका भइसक्नुभएको छ, उहाँले रासलीला गर्नु अनुचित छैन। यसरी भगवान्‌को सङ्कोचलाई हटाउनकै लागि चन्द्रमा र पूर्वी दिशाको प्रेमलीलालाई पहिल्यै बताइएको हो।

आध्यात्मिक अर्थमा भने चन्द्रमा उदाउनुको मतलब जिज्ञासुको हृदयमा वैराग्यको उदय हुनु हो। पूर्वी दिशा पहिलो दिशा हो, त्यसैले पूर्वी दिशा ज्ञान उत्पन्न हुनुभन्दा पहिलाको प्रतीक हो। वैराग्यको सुखको अगाडि सम्पूर्ण विषयसुख तुच्छ हुन्छन्। वेदान्तसिद्धान्तमा त विषयको सुख पनि वैराग्यकै सुख हो भनी बताइन्छ। विषयहरू प्राप्त भएपछि त्यसको इच्छा समाप्त भई वृत्ति अन्तर्मुखी हुन्छ र त्यहाँ आनन्दरूप आत्माको प्रतिबिम्ब पर्छ, यसैले विषय प्राप्तिमा सुख हुन्छ। विषयहरूबाट वैराग्य नभई तिनमा आनन्द आउँदैन। **कं सुखं कुत्सितेषु विषयेषु भाति यस्मात्** अर्थात् जसबाट कुत्सित विषयहरूमा पनि सुखको भान भएको छ भन्ने ककुभ शब्दको व्युत्पत्तिले यही तात्पर्यलाई सङ्केत गर्दछ। ज्ञानरूपी चन्द्रमाले **प्राच्याः मुखं** अर्थात् ज्ञान उत्पन्न हुनुभन्दा अघिको साधना मार्गलाई प्रकाशित एवं उज्ज्वल बनाइदिन्छ। वैराग्य वा चन्द्रमाको उदय भएन भने ज्ञान प्राप्त हुनुभन्दा पहिलाको अवस्था वा पूर्वी दिशा अन्धकारमय नै रहन्छ भन्नु यसको तात्पर्य हो।

**दृष्ट्वा कुमुद्वन्तमखण्डमण्डलं रमाननाभं नवकुङ्कुमारुणम्।**
**वनं च तत्कोमलगोभिरञ्जितं जगौ कलं वामदृशां मनोहरम्॥ ३॥**

**पदार्थ–**
**अखण्डमण्डलं** = पूर्ण मण्डल भएका
**रमाननाभं** = लक्ष्मीको मुखको जस्तो कान्ति भएको
**नवकुङ्कुमारुणम्** = नयाँ कुङ्कुमसमान रातो वर्णका
**कुमुद्वन्तम्** = कमल फुलाउने चन्द्रमालाई र
**तत्कोमलगोभिः** = तिनका कोमल किरणहरूद्वारा
**अञ्जितं** = रङ्गिएको
**वनं च** = वनलाई पनि
**दृष्ट्वा** = देखी
**वामदृशां** = गोपसुन्दरीहरूको
**मनोहरम्** = मनै हरण गर्ने
**कलं** = मिठो धुनमा
**जगौ** = बाँसुरी बजाउनुभयो

**वाक्यार्थ–** लक्ष्मीको मुखको झैं कान्ति भएका, नयाँ कुङ्कुमसमान अरुण वर्णका र अनेक कमलहरू फुलाउने पूर्णमण्डल चन्द्रमालाई र चन्द्रमाका कोमल किरणहरूद्वारा रङ्गिएको वनलाई देखेर श्रीकृष्णले गोपसुन्दरीहरूको मनलाई हरण गर्दै मिठो धुनमा बाँसुरी बजाउनुभयो।

**निशम्य गीतं तदनङ्गवर्धनं व्रजस्त्रियः कृष्णगृहीतमानसाः।**
**आजग्मुरन्योन्यमलक्षितोद्यमाः स यत्र कान्तो जवलोलकुण्डलाः॥ ४॥**

**पदार्थ–**
**अनङ्गवर्धनं** = कामभावना (प्रियमिलनको तीव्र इच्छा) लाई झन् बढाइदिने
**तत्** = त्यो
**गीतं** = (बाँसुरीको) धुनलाई
**निशम्य** = सुनेर
**यत्र** = जहाँ
**सः** = ती
**कान्तः** = आफ्ना प्यारा (छन्, त्यहीँ)
**अन्योन्यम्** = एक–अर्कामा
**अलक्षितोद्यमाः** = आफ्नो अभिप्रायलाई गुप्त राखेका
**कृष्णगृहीतमानसाः** = श्रीकृष्णद्वारा मन हरिएका
**व्रजस्त्रियः** = व्रजसुन्दरीहरू
**जवलोलकुण्डलाः** = छिटो–छिटो हिँडेकाले कुण्डल हल्लाउँदै
**आजग्मुः** = आइपुगे

**वाक्यार्थ–** प्रियमिलनको तीव्र इच्छालाई झन् बढाइदिने त्यो बाँसुरीको धुन सुनेर श्रीकृष्णद्वारा मन हरिएका व्रजसुन्दरीहरू एक–अर्कालाई आफ्नो अभिप्राय थाहै नदिई छिटो–छिटो हिँडेर आफ्ना कुण्डल हल्लाउँदै आफ्ना प्यारा श्रीकृष्ण भएको ठाउँमा आइपुगे।

**विवरण–** माथिका दुई श्लोकमा भगवान्‌ले बजाउनुभएको बाँसुरीको मधुर धुन सुनेर गोपिनीहरू भगवान्तिर आकृष्ट भए भनी बताइएको छ। श्रीशुकदेव भन्नुहुन्छ– शरत्कालमा पूर्ण चन्द्र उदाएर त्यो पूरा वनप्रदेशलाई नै आफ्ना कोमल किरणहरूद्वारा रङ्गाइरहेका थिए। रासलीलामा चन्द्रमाको महत्त्वपूर्ण स्थान छ, त्यसैले यस श्लोकमा चन्द्रमाका अनेक विशेषणहरू बताइएका छन्। चन्द्रमाको पहिलो विशेषता भनेको कमललाई फुलाउन सक्नु हो, त्यसैले चन्द्रमालाई **कुमुद्वान्** भनिन्छ। कमललाई आत्माको र प्रेमको प्रतीक मानिन्छ। चन्द्रमाको किरणको मधुर स्पर्श पाएर चन्द्रकमल फुल्छ। चन्द्रमाको सौन्दर्यलाई हेरेका हरेक प्रेमीहरू आफ्ना प्रेमीलाई चन्द्रमासँग तुलना गर्दछन्। भगवान् श्रीकृष्ण पनि व्रजमण्डलमा प्रेमरूपी कमल फुलाउनुहुन्छ। त्यसैले श्रीकृष्ण चन्द्रसमान हुनुहुन्छ र रासमा सबभन्दा पहिले आफूसमानको चन्द्रमालाई नै उहाँले हेर्नुभएको छ। चन्द्रमा र कमलहरूको सम्बन्धले कृष्णका प्रेमीहरूलाई नयाँ शिक्षा पनि दिन्छ। भक्तहरूमा भक्तिको आवेशले भगवान् केवल आफ्नो मात्र भइरहनुहोस् र एक्लै आफूले मात्र उहाँको

रसास्वाद गर्न पाऊँ भन्ने इच्छा आउन सक्छ। भगवान् त सबैका हुनुहुन्छ, तर पनि सबैका लागि सम्पूर्ण एवं अखण्डित हुनुहुन्छ। एउटै भगवान्लाई सबैले पाउँदा उहाँको रसमा कमी या अपूर्णता आउँदैन। यसकै दृष्टान्तको रूपमा चन्द्रमाको प्रसङ्ग आएको छ। जसरी एउटै चन्द्रमाको प्रकाशले पृथिवीमा लाखौं चन्द्रकमलहरू फुल्न सक्छन्, त्यसै गरी परमात्माको प्रेमको प्रकाशले अनन्त भक्तहरूको हृदयकमल फुल्न सक्छ। कमलहरू चन्द्रमाभन्दा यताउति कहिल्यै फर्किदैंनन्, उनीहरूलाई आफ्नो प्रेमीसँग अरूको उपस्थितिको आभास पनि हुँदैन। उनीहरू त पूर्णरूपमा चन्द्रमासँग मात्र सम्बन्धित हुन्छन्। व्रजका गोपिनीहरूमा पनि श्रीकृष्णसँग यस्तो एकभाव भएन भने परस्पर आ–आफूलाई हेरी उनीहरूको प्रेमरस खण्डित हुने सम्भावना रहन्छ। त्यसैले एउटै चन्द्रबाट अनेक कमल फुल्नुले एउटै भगवान्बाट अनेक भक्तहरू रमाउन सक्छन् तर यसबाट भगवान् खण्डित हुनुहुन्न, अपि तु अखण्डित नै रहनुहुन्छ भन्ने सूचना दिन्छ। यही कुरा **कुमुद्वन्तं** र **अखण्डमण्डलं** यी दुई पदले बताएका छन्।

चन्द्रमाको प्रकाशद्वारा पूरा वनप्रदेश उज्यालिँदै थियो, यता श्रीकृष्णचन्द्रले पनि सबै प्राणीहरूभित्र आफ्नो रसलाई यसै गरी फैलाउने इच्छा गर्नुभयो। चन्द्रबाट बर्सिने शीतल किरणहरूद्वारा वनका कमलहरू जागे भने श्रीकृष्णचन्द्रको बाँसुरीबाट बर्सिने रसद्वारा के जाग्ला ? श्रीकृष्ण स्वयं रसरूप हुनुहुन्छ, उहाँले आफ्नो सारभूत अंश प्राणलाई जब बाँसुरीको माध्यमले फुक्नुहुन्छ, तब त्यसबाट रुन् अनौठो रस निस्कन्छ। उपनिषद्मा हे प्राण ! जब तिमी बर्सिन्छौ, तब तिम्रा प्रजाहरू अत्यन्त आनन्दित भइरहन्छन्– **यदा त्वमभिवर्षस्यथेमाः प्राण ते प्रजाः आनन्दरूपास्तिष्ठन्ति** (प्रश्नोपनिषद्, २।१०) भनी बताइएको छ। यो बाहिरी रस हो, भगवान्को बाँसुरीबाट निस्कने प्राणको रस त विशेष प्रकारको भएकाले यसका अधिकारी पनि विशेष व्यक्तिहरू हुन्छन्, सबै प्राणी हुँदैनन्। त्यसैले श्लोकमा **वामदृशां** अर्थात् टेढा आँखा भएका गोपसुन्दरीहरूका लागि मात्र प्रेमरसको प्रवाह भएको जनाइएको छ। श्रीशुकदेव भन्नुहुन्छ **कलं जगौ** अर्थात् मिठो घुनमा बाँसुरी बजाउनुभयो। **कं सुखं लाति इति कलः** अर्थात् सुख दिने मधुर धुनलाई कल भनिन्छ। यो बाँसुरीको धुनलाई नादब्रह्म भनिएको छ। यो मोहक ध्वनिले प्रेमयुक्त हृदय भएका गोपिनीहरूको हृदयकमललाई नै ब्युँझाइदिएको छ। यो धुनलाई **मनोहर** भनिएको छ। हर शब्दले हरण गर्ने वा आकर्षित गर्ने अर्थ बुझाउँछ भने यसले संहारका देवता रुद्रलाई पनि बुझाउँछ। यसरी मनोहर शब्दको अर्थ मनलाई आकृष्ट गरिदिने या नष्ट गरिदिने भन्ने हुन्छ। मन नै पाप–पुण्य आदि सबै बन्धनको कारण भएकाले त्यसैलाई हरण गरिदिएपछि गोपिनीहरूमा बन्धन रहँदैन भन्नका लागि भगवान्ले मन हरण गरिदिनुभयो भनिएको हो। नाश गर्ने अर्थमा भगवान्ले बाँसुरीको धुनद्वारा गोपिनीहरूका मनका संसारविषयक वासनात्मक संस्कारहरूलाई नष्ट गरिदिनुभयो।

श्रीकृष्णले कर्के नजर लगाउने गोपसुन्दरीहरूका लागि बाँसुरी बजाउनुको रहस्य के होला भनी सहजै जिज्ञासा हुन्छ। **वाम** शब्दको अर्थ बाङ्गो या टेढिएको भन्ने हुन्छ। **दृक्** अर्थात् ज्ञानका साधन इन्द्रियहरूको सीधा प्रवृत्ति बाहिरी विषयतर्फ नै हुने गर्दछ। सृष्टिकालमा नै इन्द्रियहरूलाई बाहिरी विषयहरूतर्फ जाने गरी बनाइएको छ भनी उपनिषद्मा बताइएको छ– **पराञ्चि खानि**

**व्यतृणत् स्वयम्भूः** (कठोपनिषद्, २/१/१)। तर परमानन्दको अमृत रसलाई त तिनैले मात्र चाख्न सक्छन्, जसका इन्द्रियहरू स्वाभाविक बहिर्मुखी वृत्तिलाई छाडी अन्तर्मुख भएका छन्। इन्द्रियहरू **वाम** अर्थात् बाङ्गो या टेढो हुनुको मतलब तिनीहरू बहिर्मुखी स्वभावबाट उल्टिई अन्तर्मुखी बन्नु हो। जसका इन्द्रिय, मन आदि प्रशान्त भएका छन्, तिनले मात्र परम सुखको आस्वाद पाउँछन् भनी भगवान्ले गीतामा भन्नुभएको छ– **प्रशान्तमनसं ह्येनं योगिनं सुखमुत्तमम्** (भगवद्गीता, ६/२७)। यसैले परमानन्दको रस पिउन अन्तर्मुखी व्यक्तिहरू मात्र योग्य हुन्छन्, जो विषयहरूका सामान्य आनन्दहरूलाई त्याग्न सक्छन् भनी यहाँ बताउन खोजिएको छ।

चन्द्रमा उदाएको वनमा भगवान्ले क्रीडा गर्नुको पनि रहस्य छ। **वन संविभक्तौ** भन्ने धातुबाट वन शब्द बन्दछ, जसको अर्थ भाग लगाइएको या छुट्याइएको भन्ने हुन्छ। भगवान्का लागि छुट्याइएको मन नै वन हो। भक्तिको परिभाषा गर्दा पनि **भागो भक्तिः** अर्थात् आफ्ना इन्द्रिय, मन आदिलाई भगवान्को भागमा लगाइदिनु या पूर्णरूपले समर्पित गरिदिनु नै भक्ति हो भनिएको छ। यसरी परमात्मामा मात्र समर्पित मन नै वृन्दावन हो, जसमा भगवान् क्रीडा गर्नुहुन्छ। वासनाको अँध्यारो फैलिएको मनमा परमात्मा क्रीडा गर्नुहुन्न, जसमा कृष्णचन्द्रको प्रेमरूपी प्रकाश फैलिएको छ, त्यही मनमा भगवान् क्रीडा गर्नुहुन्छ।

भगवान् श्रीकृष्ण **कान्त** अर्थात् सबै सुखका परम अवधि हुनुहुन्छ। **कस्य सुखस्य अन्तः पूर्णता यस्मिन्** अर्थात् सुखको सम्पूर्णता जहाँ छ, त्यही परमात्मा नै कान्त हुनुहुन्छ। अरू संसारका व्यक्ति एक-आपसमा कान्त जस्तै लागे तापनि तिनीहरूमा प्रेम र आनन्दको पूर्णता नभएकाले तिनीहरू असली कान्त हुन सक्दैनन्। यस्ता परमानन्दरूप भगवान्को गीत **अनङ्गवर्धनं** अर्थात् कृष्णमिलनकै आकाङ्क्षालाई तीव्र रूपमा बढाउने स्वभावको छ। त्यसलाई सुनी व्रजसुन्दरीहरू श्रीकृष्णतिर आकृष्ट भए भनी यहाँ बताइएको छ। सुबोधिनीकारले अमृत तीन प्रकारको हुन्छ भनी बताउनुभएको छ– एउटा पृथिवीका प्राणीहरूले, अर्को स्वर्गका देवताहरूले र अर्को स्वयं भगवान्ले भोग्ने अमृत। चन्द्रका शीतल अमृतमय किरणका कारण अन्न, फूल आदिमा आएको अमृतलाई साधारण प्राणीहरू भोग्छन् र तृप्त हुन्छन्। देवताहरूले भोग्ने दिव्य अमृत चाहिँ समुद्रमन्थनबाट निस्किएको अमृत हो र विधिपूर्वक गरिएका यज्ञहरूबाट पनि ती-ती देवतालाई अमृतको प्राप्ति हुन्छ। भगवान्ले भोग्ने अमृत यी दुबै अमृतभन्दा विलक्षण छ। भगवान् स्वयं रसरूप हुनुभएकाले उहाँले अरू कसैको रस भोग्न आवश्यक छैन। यदि अरू कसैको रसलाई उहाँ भोग्नुहुन्छ भने उहाँभन्दा पनि मधुर एवं आनन्दरूप कुनै अर्को वस्तु खडा हुन्छ, यसो हुँदा भगवान्को भगवत्ता नै नष्ट हुन्छ। यदि उहाँले रसको आस्वादन गर्नुभएन भने लीला चल्नै सक्दैन। यसको समाधानका लागि भगवान् आफूभित्र भएको स्वरूपभूत रसलाई पहिले भक्तहरूको हृदयभरि भर्नुहुन्छ अनि त्यसैको भोग या आस्वादन भगवान्ले गर्नुहुन्छ। जब भक्तका तन, मन एवं समस्त इन्द्रिय परमात्मरसले भरिन्छन्, तब त्यसको रसास्वादन गर्न परमात्मा अनेक लीला गर्नुहुन्छ। यहाँ पनि पहिले परमात्माले आफ्नो स्वरूपभूत रसलाई वंशीको माध्यमले फुकी व्रजवासी गोपिनीहरूमा फिँजाउनुभएको छ। परमात्माको स्वरूपभूत आनन्दरसलाई प्रेमी भक्तहरूको हृदयसम्म पुऱ्याउने माध्यमको काम गर्ने यो वंशी गुरुसमानको छ। भक्तहरू भन्दछन्–

गुरुले कानमा मन्त्र फुके झैँ वंशीरूपी गुरुद्वारा भगवान्‌ले पनि गोपिनीहरूलाई कल अर्थात् मिठो मोहन मन्त्र सुनाउनुभयो। **कल** शब्दको प्रयोग गरिएबाट भगवान्‌ले **क्लीं** बीज मन्त्र सुनाउनुभएको थियो भनिएको छ। **क्लीं** कामबीज हो, यसलाई मोहन मन्त्र पनि भनिन्छ। वंशीध्वनि सुनाई भगवान्‌ले गोपिनीहरूमाथि प्रेम अर्थात् कामको सञ्चार गर्नुभएको हो।

भगवान्‌ले वंशी बजाउनु उहाँले वंशीध्वनिद्वारा विश्वकै अङ्कमाल गर्नु हो। भनिएको छ— **जातहर्ष उपरम्भति विश्वम्** (भागवत, १०/३५/१२)। जब भगवान् प्राणीहरूको अङ्कमाल गर्नुहुन्छ त तिनले बाहिरी संसारलाई बिर्सन्छन्। उपनिषद्‌मा पनि सर्वज्ञ परमात्माद्वारा आलिङ्गित भएको जीव बाहिरी-भित्री कुनै पनि व्यवहारलाई जान्दैन भनिएको छ— **प्राज्ञेनात्मना सम्परिष्वक्तो न बाह्यं किञ्चन वेद नान्तरम्** (बृहदारण्यकोपनिषद्, ४/३/२१)। जीव जब आफ्नो प्रयासले परमात्मासँग आलिङ्गन गर्न खोज्छ तब त्यसका लागि उसले पहिले नै सम्पूर्ण विधि-व्यवहारहरूलाई त्यागिसकेको हुनुपर्दछ। यसको साटो जब परमात्माले नै जीवलाई अङ्कमाल गर्नुहुन्छ भने यसमा जीवले संसार छाड्न प्रयास नै गर्नुपर्दैन, आफैँ छुट्छ। गोपिनीहरूलाई भगवान्‌ले वंशीध्वनिको माध्यमले आफैँ अङ्कमाल गर्नुभएको थियो, त्यसैले गोपिनीहरूले घर-व्यवहार छाड्न प्रयास गर्नुपरेको छैन। श्रीकृष्णको अङ्कमाल यति बलिष्ठ छ कि, गोपिनीहरू त्यसबाट फुत्किन खोज्दा पनि समर्थ भएका छैनन्। प्रेमको यो विलक्षण स्थितिमा भक्त मूक दर्शक मात्र भएको हुन्छ, साधक या उपासक होइन। साधनाद्वारा संसार बिर्सनुभन्दा साध्य परमात्मामा डुबेर संसार बिर्सनु नै बढी रसमय गाढा एवं स्थिर हुन्छ। यसैले यहाँ गोपिनीहरूले घरायसी काम गर्दागर्दै त्यो सबै बिर्सिएको बताइएको छ।

श्रीकृष्णले मिठो बाँसुरीको धुन बजाउनुको अर्थ उपनिषद्‌का आत्मविषयक वाक्यहरू सुनाउनु हो। **वाम** अर्थात् परम सुन्दर परमात्माको **दृक्** अर्थात् ज्ञान हुन्छ जसबाट, ती उपनिषद्‌हरू नै **वामदृक्** हुन्। तिनको **कल** अर्थात् आत्मज्ञानमा अभिप्रेरित गर्ने प्रेरणापरक मधुर वाक्यहरूलाई सुन्नु बाँसुरीको गीत सुन्नु हो। यसलाई सुनिसकेपछि व्रजस्त्रीहरू अर्थात् अन्तःकरणका वृत्तिहरू भगवान् अर्थात् आत्मातिर अभिमुख हुन्छन्। तिनीहरू त्यही गीतकै अनुसरण गर्दै अर्थात् उपनिषद्‌को उपदेशकै मार्गले भगवान्‌कहाँ आइपुग्छन्। यसरी गोपिनी-कृष्णलीलाका अनेक तात्पर्य र उपपत्तिहरू छन्।

**दुहन्त्योऽभिययुः काश्चिद् दोहं हित्वा समुत्सुकाः।**
**पयोऽधिश्रित्य संयावमनुद्वास्यापरा ययुः॥ ५॥**

**पदार्थ–**
**समुत्सुकाः** = असाध्यै उत्सुक
**काश्चित्** = कोही गोपीहरू
**दुहन्त्यः** = दुध दुहुँदा दुहुँदै नै
**दोहं** = दुध दुहुन
**हित्वा** = छाडी
**अभिययुः** = आइपुगे
**अपराः** = कोही चाहिँ
**पयः** = दुधलाई
**अधिश्रित्य** = चुल्होमा बसालेर
**संयावं** = (पकाइरहेको) हलुवालाई
**अनुद्वास्य** = (चुल्होबाट) नउतारीकन नै
**ययुः** = (श्रीकृष्णकहाँ) पुगे

**वाक्यार्थ–** असाध्यै उत्सुक भएका कुनै गोपिनी दुध दुहुँदा दुहुँदै त्यसलाई छाडी श्रीकृष्णकहाँ आइपुगे, कुनै गोपिनी चुह्लोमा दुध बसालेर अनि कुनै गोपिनी पाकिसकेको हलुवालाई पनि चुह्लोबाट नउतारीकन नै श्रीकृष्णकहाँ पुगे।

**परिवेषयन्त्यस्तद्धित्वा पाययन्त्यः शिशून् पयः।**
**शुश्रूषन्त्यः पतीन् काश्चिदश्नन्त्योऽपास्य भोजनम्॥ ६॥**
**लिम्पन्त्यः प्रमृजन्त्योऽन्या अञ्जन्त्यः काश्च लोचने।**
**व्यत्यस्तवस्त्राभरणाः काश्चित् कृष्णान्तिकं ययुः॥ ७॥**

पदार्थ–
**काश्चित्** = कोही
**परिवेषयन्त्यः** = खाना पस्किरहेका
**शिशून्** = बच्चाहरूलाई
**पयः** = दुध
**पाययन्त्यः** = पियाइरहेका
**पतीन्** = पतिहरूलाई
**शुश्रूषन्त्यः** = सेवा गरिरहेकाहरू
**तत्** = त्यो सबै काम
**हित्वा** = छोडी
**अश्नन्त्यः** = भोजन गरिरहेकाहरू पनि
**भोजनं** = भोजनलाई
**अपास्य** = छाडी
**अन्याः** = कोही चाहिँ
**लिम्पन्त्यः** = अङ्गहरूमा चन्दन आदि लेप लगाइरहेका (घर लिपिरहेका)
**प्रमृजन्त्यः** = अङ्गहरू मालिस गरिरहेका (बढारिरहेका)
**काः च** = कोही चाहिँ
**लोचने** = दुबै आँखामा
**अञ्जन्त्यः** = गाजल लगाइरहेका
**काश्चित्** = कोही चाहिँ
**व्यत्यस्तवस्त्राभरणाः** = कपडा र गहना उल्टोपाल्टो हुँदै
**कृष्णान्तिकं** = श्रीकृष्णको नजिक
**ययुः** = गए

**वाक्यार्थ–** खाना पस्किरहेका, बच्चाहरूलाई दुध चुसाइरहेका, पतिहरूको सेवा गरिरहेका, भोजन गरिरहेका, अङ्गहरूमा चन्दनलेप र मालिस गरिरहेका अनि आँखामा गाजल लगाइरहेका गोपिनीहरू ती सबै कामलाई चटक्कै छाडी श्रीकृष्णकहाँ गए। कोही चाहिँ गहना–कपडा सबै उल्टो–पाल्टो लगाएरै श्रीकृष्णकहाँ पुगे।

**ता वार्यमाणाः पतिभिः पितृभिर्भ्रातृबन्धुभिः।**
**गोविन्दापहृतात्मानो न न्यवर्तन्त मोहिताः॥ ८॥**

पदार्थ–
**पतिभिः** = पतिहरूहरूद्वारा
**पितृभिः** = पिताहरूद्वारा
**भ्रातृबन्धुभिः** = भाइबन्धुहरूद्वारा
**वार्यमाणाः** = रोक्न खोजिएका तर
**गोविन्दापहृतात्मानः** = श्रीकृष्णद्वारा मनै हरिएका र
**मोहिताः** = मोहित भएका
**ताः** = ती गोपिनीहरू
**न न्यवर्तन्त** = फर्केनन्

**वाक्यार्थ–** आ–आफ्ना पतिहरूले, पिताहरूले एवं भाइबन्धुहरूले रोक्न खोजे तापनि श्रीकृष्णद्वारा

मन नै हरण गरिएकाले मोहित भइसकेका ती गोपिनीहरू घर फर्केनन्।

**विवरण—** माथिका श्लोकहरूमा बाँसुरीको मधुर नादलाई सुन्नेबित्तिकै गोपिनीहरूले सबै घरायसी कामलाई छाडी भगवान्को नजिक दौडिएको वर्णन गरिएको छ। गोपिनीहरूमा कृष्णमिलनको कामना तीव्र छँदै थियो, झन् भगवान्ले **अनङ्गवर्धनं** अर्थात् कामलाई बढाइदिने बाँसुरी बजाएको सुनेपछि त सबै गोपिनीहरूको मन कृष्णमा नै एकतान भइहाल्यो। श्रीशुकदेवले उनीहरू सबैको मनलाई श्रीकृष्णले समातिदिनुभयो भन्नुभएको छ। ग्रहण गर्ने या समाउने अर्थमा भक्तहरूले श्रीकृष्णलाई पनि ग्रह भनेका छन्। अरू ग्रहलाई त यज्ञ, पूजा आदि गरेर सन्तुष्ट पारी पन्छाउन सकिन्छ, तर कृष्णरूपी ग्रहले समातेपछि त्यसलाई कुनै उपायले पनि पन्छाउन सकिन्न। फेरि अरू ग्रहहरूको दुष्प्रभावले मानिसहरूको एक–दुई कुरामा मात्र हानि पुग्छ, तर कृष्णरूपी ग्रहले समातिसकेपछि त व्यक्ति संसारैलाई देख्न, सुन्न नसक्ने हुन्छ भनी प्रह्लादको चरित्रमा बताइएको छ— **कृष्णग्रहगृहीतात्मा न वेद जगदीदृशम्** (भागवत, ७/४/३७)। गोपिनीहरू पहिले पनि श्रीकृष्णलाई मन पराउँथे, बाँसुरीको नाद सुनिसकेपछि भने उनीहरू एक–अर्कालाई थाहा नै नदिईकन श्रीकृष्ण भएतिर दौडिए। प्रेमको माथिल्लो स्थितिमा स्वाभाविक रूपमा नै आफ्नो प्रेमीलाई केवल आफ्नो मात्र बनाउन पाए हुन्थ्यो भन्ने इच्छा हुन्छ। यद्यपि श्रीकृष्ण सबैका प्रिय हुनुहुन्छ भन्ने सबै गोपिनीहरूलाई थाहा छ, अनि गोपकुमारीहरूले श्रीकृष्णलाई पतिरूपमा पाउन सँगसँगै उपासना पनि गरेका थिए, तर ती सबै सामूहिक चेतनाहरूलाई श्रीकृष्णको बाँसुरीको धुनले तत्काल बिर्साइदियो। श्रीकृष्णले प्रेमपूर्वक आफैँलाई बोलाए झैँ भएपछि ती गोपिनीहरूले आफ्ना साथीहरूलाई सम्झाउने कहाँ होस पाउँथे। जन्म–जन्मसम्म चिरप्रतीक्षा गरिएका कृष्णले बोलाएपछि अरू कसैको प्रतीक्षामा रोकिनु या अबेर गर्नु पनि त भएन। यसैले ती सबै एक्लाएक्लै कृष्णकहाँ पुगे। श्रीधर स्वामी लेख्नुहुन्छ— **त्रैवर्गिककर्मनिवृत्तिं द्योतयन्त्यः** अर्थात् परम पुरुषार्थलाई पाइसकेपछि धर्म, अर्थ, काम यी सबै थरीका प्रयासहरू तत्काल छुट्दछन्। यहाँ गोपिनीहरूले बाँसुरी धुनलाई सुन्नेबित्तिकै गाई दुहुन, दुध तताउन, पति–पुत्रहरूको सेवा गर्न र आफैँले शृङ्गार गर्नसमेत भुली बीचैमा दौडिएका छन्। यो उनीहरूको त्याग आत्मज्ञानीले तीनैथरी एषणालाई छाडी सर्वकर्मसंन्यास गर्नु जत्तिकै रहेको देखिन्छ। व्यवहारबाट केही पाउने आशा हुँदासम्म मान्छे ती व्यावहारिक काममा लागिरहिन्छ। **पुत्रैषणायाश्च वित्तैषणायाश्च लोकैषणायाश्च व्युत्थाय** (बृहदारण्यकोपनिषद्, ३।५।१) अर्थात् पुत्र, सम्पत्ति र कीर्ति–सम्मान यी तीनै एषणा वा इच्छाहरूबाट ब्युँझेर ज्ञानीहरू हिँड्दछन् भनी उपनिषद्मा बताइएको छ। गोपिनीहरूले पनि श्रीकृष्णको प्रबल प्रेममा यी सबै मोहका बन्धनहरू चुँडालेका छन्। श्रीशुकदेव भन्नुहुन्छ— आफ्ना पति, पिता आदिले रोक्न खोज्दा–खोज्दै पनि ती गोपिनीहरू घरतिर फर्किएनन्, किनभने **गोविन्दापहृतात्मानः** गोविन्दले उनीहरूको चित्तलाई हरण गरिसक्नुभएको थियो। श्रीकृष्णले आफूलाई नै चोरिदिएपछि त्यसलाई भेट्टाउन जान खोज्दा कसैले रोकेर पनि रोकिइन्छ र ? उनीहरू **मोहिताः** अर्थात् श्रीकृष्णसँग मुग्ध भइसकेका थिए। उनीहरूको संसारमोह त कृष्णमोहमा बदलिइसकेको थियो त्यसैले आफन्तहरूले रोक्न खोज्दा पनि उनीहरू रोकिएनन्।

**अन्तर्गृहगताः काश्चिद् गोप्योऽलब्धविनिर्गमाः ।**

**कृष्णं तद्भावनायुक्ता दध्युर्मीलितलोचनाः ॥ ९॥**

**पदार्थ–**
**अन्तर्गृहगताः** = घरभित्रै थुनिएका
**अलब्धविनिर्गमाः** = निस्कने बाटो नै नपाएका
**तद्भावनायुक्ताः** = श्रीकृष्णको भावनाले युक्त भएका
**काश्चित्** = कोही कोही
**गोप्यः** = गोपिनीहरूले चाहिँ
**मीलितलोचनाः** = आँखा चिम्लिई
**कृष्णं** = श्रीकृष्णलाई नै
**दध्युः** = ध्यान गरे

**वाक्यार्थ–** कुनै कुनै गोपिनीले चाहिँ घरभित्रै थुनिएकाले निस्कने बाटो नै पाएनन्। श्रीकृष्णको भावनाले युक्त भएका ती गोपिनीहरूले चाहिँ आँखा चिम्लिएर श्रीकृष्णको ध्यान गरे।

**दुःसहप्रेष्ठविरहतीव्रतापधुताशुभाः ।**

**ध्यानप्राप्ताच्युताश्लेषनिर्वृत्या क्षीणमङ्गलाः ॥ १० ॥**

**तमेव परमात्मानं जारबुद्ध्यापि सङ्गताः ।**

**जहुर्गुणमयं देहं सद्यः प्रक्षीणबन्धनाः ॥ ११ ॥**

**पदार्थ–**
**जारबुद्ध्या अपि** = उपपतिको भावले भए पनि
**तं एव** = उनै
**परमात्मानं** = परमात्मा श्रीकृष्ण भगवान्सँग
**सङ्गताः** = आसक्ति गर्ने गोपिनीहरू
**दुःसहप्रेष्ठविरहतीव्रतापधुताशुभाः** = प्रियतमसँग वियोग भएको असह्य तीव्र तापद्वारा सम्पूर्ण अशुभ संस्कारहरू नष्ट भएका अनि
**ध्यानप्राप्ताच्युताश्लेषनिर्वृत्या** = ध्यानमा श्रीकृष्णसँग आलिङ्गन गर्दाको अनन्त आनन्दले
**क्षीणमङ्गलाः** = पुण्यका शुभ संस्कारहरू पनि क्षीण भएका
**प्रक्षीणबन्धनाः** = पुण्यपापको बन्धन नष्ट भएका गोपिनीहरूले
**सद्यः** = तत्काल नै
**गुणमयं** = तीन गुणमय
**देहं** = शरीरलाई
**जहुः** = त्यागिदिए

**वाक्यार्थ–** उपपतिको भावले भए पनि परमात्मा श्रीकृष्ण भगवान्सँग आसक्ति गर्ने गोपिनीहरूको प्रियतमसँग वियोग भएको असह्य तीव्र तापद्वारा सम्पूर्ण अशुभ संस्कारहरू नष्ट भए अनि ध्यानमा श्रीकृष्णसँग आलिङ्गन गर्दाको अनन्त आनन्दले उनीहरूका पुण्यका शुभ संस्कारहरू पनि क्षीण भए त्यसपछि उनीहरूले तीन गुणमय शरीरलाई तत्काल त्यागिदिए।

**विवरण–** यस श्लोकमा घरभित्र थुनिएका केही गोपिनीहरू चाहिँ शरीर छाडी झन् चाँडै श्रीकृष्णकहाँ पुगे भनी बताइएको छ। घरबाट बाहिर निस्कन नसकेपछि ती गोपिनीहरूको मनमा तीव्र वेदना भयो। जन्मौं-जन्मको साधना एवं परमात्माको कृपाको कारणले आफ्ना प्रियतम श्रीकृष्णसँग मिलन पाउने अवसर पनि आफूले गुमाउनु परेकोमा उनीहरूलाई असह्य पीडा भयो।

प्रियतमको विरह यसै त कष्टकारक हुन्छ भने श्रीकृष्ण त सबैका आत्मा नै हुनुहुन्थ्यो, उहाँको विरहले तिनीहरू असाध्यै दुःखी भए। अनि मनभित्र श्रीकृष्णको चिन्तन गरी उहाँलाई अङ्कमाल गरेको भावनामा उनीहरूले सबै थोक पाएको ठाने। पाप र पुण्य यी दुई नै शरीरका कारण हुन्। यसैद्वारा मानिसहरू प्रारब्धको बन्धनमा बाँधिएका छन्। तर गोपिनीहरूका पाप र पुण्यका बन्धन तत्काल नष्ट भए— **सद्यः प्रक्षीणबन्धनाः**। पाप र पुण्यलाई नभोगी कसरी प्रारब्ध नष्ट भयो ? भन्ने शङ्काको उत्तरमा श्रीशुकदेव भन्नुहुन्छ— **तीव्रतापधुताशुभाः**। भएभरको अशुभ कर्महरूले मिलेर जति दुःख या पीडा दिन सक्थे, त्यो भन्दा बढी पीडा गोपिनीहरूलाई श्रीकृष्णबाट छुट्टिएर रहनुपर्दा भयो। आफ्ना प्राणप्याराले बोलाउँदा उनीसँग मिल्न जान पनि नपाउने पीडा असाध्यै तीव्र थियो। त्यसको भोगले नै गोपिनीहरूका सबै पापकर्मका फलहरू भोगिएर सकिए। अनि भएभरका पुण्यकर्मले मिलेर जति सुख दिन सक्थे, त्यति सुख उनीहरूले मनभित्र श्रीकृष्णको अङ्कमाल गर्दा नै पाए। **आश्लेषनिर्वृत्या क्षीणमङ्गलाः** अर्थात् प्रियतमको अङ्कमाल गर्दाको आनन्दलाई भोगेर सम्पूर्ण पुण्यको फललाई पनि समाप्त गरेका गोपिनीहरू तत्काल बन्धनरहित भए। यसरी उनीहरूले तत्काल श्रीकृष्णलाई पाए।

यहाँ **जारबुद्ध्या सङ्गताः** अर्थात् उपपतिको भावले गोपिनीहरूले श्रीकृष्णलाई पाए भनिएको छ। श्रीकृष्णलाई गोपिनीहरूले पति या उपपति मान्नुको आशयको विषयमा चीरहरणको प्रसङ्गमा विशेष रूपले उल्लेख गरिएको छ। यहाँ सामान्य लोकव्यवहारमा भए झैं पति-उपपतिको अर्थमा यसलाई लिनुहुँदैन। श्रीकृष्ण सबै संसारका मालिक या रक्षक भएकाले सबैका पति हुनुहुन्छ, अनि लोकमा कसैले संसारका अरू कसैलाई भ्रमवश पति मानेका छन् भने चाहिँ तिनका लागि उहाँ उपपति हुनुहुन्छ। उपको अर्थ नजिक भन्ने हुन्छ। लोकमा व्यभिचारिणी स्त्रीहरूले भित्रबाट आफ्नो पतिसँग भन्दा उपपतिसँग नै नजिकको सम्बन्ध राखेका हुन्छन्। श्रीकृष्ण सबैका पति त हुनुहुन्छ नै, अरु लौकिक पतिभन्दा यस मानेमा उहाँ रुन् नजिक हुनुहुन्छ कि उहाँ त आत्मा नै हुनुहुन्छ। आफूभन्दा नजिकको कोही अर्को हुन्छ र ? पति-पुत्र आदि सबैसँग आफ्नो लागि नै प्रेम गरिन्छ। त्यसैले ती सबैभन्दा आफू नै आफ्नो नजिक हुन्छ। यही दृष्टिले श्रीकृष्णलाई **उपपति** मान्न सकिन्छ। यो भावसाधनाको क्षेत्र भएकाले यसलाई लौकिक व्यवहारका नियम-बन्धनको आधारमा विचार गर्नुहुँदैन, परमार्थ साधनाको अर्थमा विचार गर्नुपर्दछ। लौकिक व्यवहार स्वार्थी हुन्छ, बाहिर भने पनि नभने पनि यसमा कपट लुकेको हुन्छ, यो क्षणिक पनि हुन्छ। परमात्मासँगको सम्बन्ध नित्य छ, उहाँसँग गरिने प्रेम आफ्नै असली स्वरूपसँग गरिने प्रेम हो। व्यावहारिक प्रेम र सुखको परमात्मप्रेम र परमानन्दसँग के तुलना हुन सक्छ र ?

**राजोवाच** (महाराज परीक्षित्ले भन्नुभयो)

**कृष्णं विदुः परं कान्तं न तु ब्रह्मतया मुने।**
**गुणप्रवाहोपरमस्तासां गुणधियां कथम्॥ १२॥**

**पदार्थ–**
**मुने** = हे शुकदेव मुनि
**कृष्णं** = श्रीकृष्णलाई
**परं** = केवल
**कान्तं** = परम प्रिय रूपमा
**विदुः** = जान्दथे
**ब्रह्मतया तु** = ब्रह्मरूपले त
**न** = होइन
**गुणधियां** = प्राकृत गुणहरूमैं बुद्धि लागेका
**तासां** = तिनीहरूको
**गुणप्रवाहोपरमः** = गुणमय संसारचक्रको नाश
**कथम्** = कसरी भयो

**वाक्यार्थ–** हे शुकदेव मुनि ! गोपिनीहरूले श्रीकृष्णलाई केवल परम प्रिय भनेर मात्र जान्दथे, ब्रह्मरूपले होइन, यसप्रकार लौकिक गुणहरूमैं तिनको बुद्धि लागेको थियो भने तिनीहरू त्रिगुणमय संसारचक्रबाट कसरी मुक्त भए ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**उक्तं पुरस्तादेतत्ते चैद्यः सिद्धिं यथा गतः ।**

**द्विषन्नपि हृषीकेशं किमुताधोक्षजप्रियाः ॥ १३ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**चैद्यः** = शिशुपालले
**हृषीकेशं** = इन्द्रियहरूका मालिक श्रीकृष्णलाई
**द्विषन् अपि** = शत्रु ठानी द्वेष गर्दा पनि
**सिद्धिं** = मुक्ति
**गतः** = पायो
**एतत्** = यो कुरा
**ते** = तिमीलाई
**पुरस्तात्** = पहिल्यै
**उक्तं** = बताइसकियो
**अधोक्षजप्रियाः** = इन्द्रियातीत भगवान्सँग प्रेम गर्ने उहाँका प्रियहरू
**किम् उत** = मुक्त हुनुमा के सन्देह छ र

**वाक्यार्थ–** शिशुपालले श्रीकृष्णलाई शत्रु ठानी उहाँसँग द्वेष गर्दा पनि मुक्ति पायो भनी तिमीलाई पहिल्यै (सप्तम स्कन्धको पहिलो अध्यायमा) बताइसकियो। (यसरी श्रीकृष्णलाई शत्रु ठानी उहाँसँग द्वेष गर्दा त शिशुपाल मुक्त भयो भने) भगवान्सँग प्रेम गर्ने उहाँका प्रिय गोपिनीहरू मुक्त हुनुमा के सन्देह छ र ?

**नृणां निःश्रेयसार्थाय व्यक्तिर्भगवतो नृप ।**

**अव्ययस्याप्रमेयस्य निर्गुणस्य गुणात्मनः ॥ १४ ॥**

**कामं क्रोधं भयं स्नेहमैक्यं सौहृदमेव च ।**

**नित्यं हरौ विदधतो यान्ति तन्मयतां हि ते ॥ १५ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**नृणां** = मानिसहरूको
**निःश्रेयसार्थाय** = कल्याण गर्नको लागि नै
**अव्ययस्य** = नाशरहित
**अप्रमेयस्य** = प्रमाणद्वारा जान्न नसकिने
**निर्गुणस्य** = निर्गुण (भए पनि)
**गुणात्मनः** = गुणलाई स्वीकार गर्नुहुने
**भगवतः** = भगवान्को

**व्यक्तिः** = प्राकट्य भयो
**हि** = निश्चय नै
**हरौ** = यस्ता श्रीहरिमा
**कामं** = काम
**क्रोधं** = क्रोध
**भयं** = भय
**स्नेहं** = स्नेह
**ऐक्यं** = नातेदारी
**सौहृदम् एव च** = सौहार्द र (अरू पनि भाव)
**नित्यं** = निरन्तर
**विदधतः** = गरिरहने
**ते** = ती मानिसहरू
**तन्मयतां** = भगवद्भावलाई
**यान्ति** = प्राप्त गर्दछन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! मानिसहरूको कल्याणका लागि नै नाशरहित, अप्रमेय र निर्गुण परमात्मा गुणलाई स्वीकार गरी प्रकट हुनुहुन्छ। त्यसैले भगवान्सँग निरन्तर काम, क्रोध, भय, स्नेह, नातेदारी, सौहार्द्र र अरू जुन सम्बन्ध राखे पनि ती मानिसहरूले भगवद्भाव प्राप्त गर्दछन्।

**न चैवं विस्मयः कार्यो भवता भगवत्यजे।**
**योगेश्वरेश्वरे कृष्णे यत एतद् विमुच्यते ॥ १६ ॥**

**पदार्थ–**
**भवता** = तपाईंद्वारा
**योगेश्वरेश्वरे** = योगेश्वरहरूका पनि मालिक
**अजे** = अजन्मा
**भगवति** = भगवान्
**कृष्णे** = श्रीकृष्णमा
**एवं** = यस्तो
**विस्मयः** = आश्चर्य
**न कार्यः** = गर्नु आवश्यक छैन
**यतः** = जुन परमात्माबाट
**एतत्** = यो सम्पूर्ण जगत्ले
**विमुच्यते** = मुक्ति पाउँछ

**वाक्यार्थ–** तपाईंले योगेश्वरहरूका पनि मालिक अजन्मा भगवान् श्रीकृष्णको विषयमा यस्तो आश्चर्य गर्नुपर्दैन, किनभने उहाँ परमात्माबाट नै सम्पूर्ण जगत्ले मुक्ति प्राप्त गर्दछ।

**विवरण–** माथिका श्लोकहरूमा गोपिनीहरूले कृष्णलाई पतिरूपमा मान्दा पनि मुक्त भएको विषयमा शङ्का उठाई त्यसको समाधान गरिएको छ। राजाले गरेको शङ्काको आशय के छ भने कृष्णलाई गोपिनीहरू ब्रह्मरूपमा होइन, पतिरूपमा नै चिन्तन, प्रेम आदि गर्थे। लोक व्यवहारका आफ्ना पति-पुत्र आदि पनि त वस्तुतः ब्रह्म नै हुन्, तर ब्रह्मरूपले नभई व्यावहारिक रूपले चिन्तन गरिएकाले त्यो लोकव्यवहारबाट परमार्थ फल पाइँदैन। त्यसै गरी कृष्णलाई पनि व्यावहारिक रूपमा प्रेम गरिएकाले त्यसबाट पनि परमार्थ फल प्राप्त नहुनुपर्ने भन्ने राजाको शङ्काको आशय हो। यसको उत्तरमा श्रीशुकदेवले शिशुपालको दृष्टान्त दिँदै कृष्णसँग निरन्तर द्वेष गर्नाले शिशुपाल त कृष्णमा गई मिल्यो भने निरन्तर प्रेम गर्ने भगवान्का प्रिय गोपिनीहरू मुक्त हुनुमा के आश्चर्य छ र ? भन्नुभएको छ।

गीता (८/५)मा भगवान्ले अन्तकालमा जसले मलाई सम्झिँदै शरीर छोड्छ भने त्यो व्यक्ति मेरै भावमा प्राप्त हुन्छ, यसमा संशय छैन भनी बताउनुभएको छ। यदि व्यक्ति निरन्तर संसारका पदार्थहरूकै चिन्तन गरिरहन्छ भने ऊ फेरि–फेरि संसारमैं फर्किरहन्छ, यदि परमात्माको चिन्तन गर्दछ भने परमात्मामा नै पुग्दछ। स्वयं परमात्माले पनि आफ्नो चिन्तन या सङ्कल्प अनुसार नै जगत्को रचना गर्नुभएको हो। यसकारण यो सम्पूर्ण जगत् चिन्तनकै परिणाम हो। एउटै व्यक्ति चिन्तन या दृष्टिकोणको भेदले कसैको छोरो, कसैको पति त कसैको नाति बन्दछ र जीवनभरि

त्यसै गरी व्यवहार हुन्छ। यसैले सामान्य दृष्टिले हेर्दा पनि जसले जे चिन्तन गर्दछ, त्यसले त्यही पाउँछ भन्ने सिद्ध हुन्छ। गोपिनीहरूले श्रीकृष्णलाई परमात्माको रूपमा चिन्तन गरेका छैनन् नि त ? भन्ने शङ्का हुन सक्छ। पहिलो कुरा त यो शङ्का नै गलत छ, किनभने गोपिनीहरूले ठाउँ-ठाउँमा उहाँलाई संसारैका अन्तर्यामी, रमापति आदि भनेका छन्। अतिशय प्रेमको कारणले श्रीकृष्णलाई भगवान् भन्ने जान्दा जान्दै पनि उनीहरू उहाँलाई आफ्ना प्रियतम भन्न नै मन पराउँथे र यही भावको स्फुरण उनीहरूको मनमा भइरहन्थ्यो। यसकारण गोपिनीहरूले श्रीकृष्णलाई प्रियतम या पति आदि भनेको वेलामा उनीहरूको प्रेमको प्रवाहले श्रीकृष्णको ईश्वरीयतालाई पनि जितेको हुन्थ्यो। अर्को कुरा परमात्मा भनी चिन्तन नगरे पनि श्रीकृष्ण हुन त परमात्मा नै हुनुहुन्छ नि ? कामना, द्वेष आदि जे भावले चिन्तन गरे पनि ती सबै प्राणी भगवान्कहाँ पुग्छन्, किनभने तिनले भगवान्लाई नै चिन्तन गरेका थिए। अमृतलाई सामान्य वस्तु ठानी खाइयो भने पनि के त्यसले आफ्नो दिव्य प्रभाव देखाउँदैन र ? यही भएकाले शिशुपालले शत्रु ठानी द्वेषद्वारा पनि भगवान्लाई नै प्राप्त गरेको हो। आगोलाई पानी भन्ने सम्झेर छोए पनि पोल्छ, यो वस्तुमा स्वभावतः रहने शक्तिको परिणाम हो। वस्तुमा रहने शक्तिले चिन्तन-विचारको अपेक्षा गर्दैन— **न हि वस्तुशक्तिर्बुद्धिमपेक्षते।**

यहाँ फेरि शङ्का हुन सक्छ, वेदान्तले त सम्पूर्ण जगत् ब्रह्मरूप छ भनेको छ, उसो भए संसारका जे-जे पदार्थको चिन्तन गरे पनि ती सबै ब्रह्ममा पुग्छन् त ? यसको उत्तर दिँदै श्रीधर स्वामी लेख्नुहुन्छ— **जीवेषु आवृतं ब्रह्मत्वं कृष्णस्य तु अनावृतम्** अर्थात् जीवहरू ब्रह्म हुनु र श्रीकृष्ण ब्रह्म हुनुमा धेरै अन्तर छ। जीव ब्रह्म भए तापनि अज्ञान, अन्तःकरण आदि दोषको कारणले यसको ब्रह्मरूप ढाकिएको छ। ब्रह्मले आफूलाई बिर्सी शरीर, इन्द्रिय, मन आदिमा आत्मबुद्धि गर्नु नै जीवभाव हो। त्यसैले जीवको ब्रह्मरूप उपाधिद्वारा ढाकिएको छ। भगवान् श्रीकृष्ण त स्वयं मायापति परमात्मा हुनुहुन्छ। उहाँ आफूलाई परमात्मा भनेर नै जान्नुहुन्छ। श्रीकृष्णले आगो पिएको, कालियदमन गरेको र गोवर्धन धारण गरेको जस्ता लीलाहरूलाई थाहा पाइसकेपछि पनि के उहाँलाई साधारण जीवसँग तुलना गर्न सकिन्छ ? जो आफूलाई ब्रह्म भनी जान्दछ त्यस्तो ब्रह्मज्ञानीको निरन्तर चिन्तन गर्नाले पनि चित्त शुद्ध भई व्यक्ति मुक्त हुन सक्छ भनी योगसूत्रमा उल्लेख गरिएको छ— **वीतरागविषयं वा चित्तम्** (योगसूत्र, १/३७)। झन् स्वयं परमात्मकै चिन्तन गर्ने व्यक्तिले परमात्मालाई पाउन नसक्ला ? यसैले परमात्माको विषयमा सामान्य शङ्काहरू उठाउनु आफ्नै अज्ञान देखाउनु मात्र हुन्छ।

उपासनाको क्रममा परमात्मालाई पाँच भावले मान्न या सम्झिन सकिन्छ। यी पाँच भावहरू यसप्रकार छन्— शान्त, दास्य, वात्सल्य, सख्य र मधुर। शान्तभाव भनेको सबै जगत्लाई वासुदेवरूप देख्ने ब्रह्मज्ञानीहरूले सर्वगुणसम्पन्न परमात्माको रूपमा उहाँको चिन्तन गर्नु हो। शान्तभावका उपासक विदुर, भीष्म आदि हुन्। यसमा परमात्माका अनेक लीलाहरूको स्फुरण हुँदैन, केवल परमात्माको रूपमा उहाँको निरन्तर चिन्तन मात्र गरिन्छ। दास्यभावमा चाहिँ परमात्मालाई स्वामी र आफूलाई उहाँको सेवक ठानी सबै काम परमात्माकै आज्ञाले गरेको भावना गरिन्छ। यस भावमा परमात्माका ईश्वरीय पराक्रम आदिको स्फूर्ति रहन्छ। यसका

उदाहरण हनुमान्, उद्धव आदि हुन्। अर्को यो भन्दा अलि अन्तरङ्ग भाव हो, वात्सल्यभाव। यसमा भगवान्‌लाई आफ्नो छोरा मानी छोराकै दृष्टिले उहाँको लालन–पालन आदि गरिन्छ। यस भावको साधकले परमात्मामाथि पनि अधिकार जमाएको हुन्छ र उहाँलाई शिक्षा–दीक्षा दिई सन्मार्गमा लगाउने धारणा राखिरहन्छ। यो भावको बलले परमात्माको ईश्वरत्व पनि कुण्ठित भएको हुन्छ। यही भावको बलले यशोदाले श्रीकृष्णलाई ओखलमा बाँधिदिएकी थिइन्। योभन्दा पनि अर्को अन्तरङ्ग भाव छ, सख्यभाव। जसमा परमात्माका किशोर लीलाहरू अनि असामान्य एवं चञ्चले लाग्ने चोरी, उपद्रव आदि लीलाहरूको पनि प्रकाश हुन्छ। यस्ता उपासक भगवान्‌सँग आफ्ना भित्री मनका कुरा राख्छन् र भगवान् पनि त्यस्तासँग आफ्ना प्रेम, संवेदना जस्ता अन्तरङ्ग भावहरूलाई प्रकट गर्नुहुन्छ। यो कोटिमा श्रीदामा आदि साथी पर्दछन्। सबभन्दा अन्तरङ्ग भाव हो, मधुरभाव। यसमा परमात्मालाई आफ्नो प्रेमी ठानी सम्पूर्ण हृदयले उहाँसँग प्रेम गरिन्छ। यस्ता साधकको परमात्मासँग सबभन्दा नजिकको सम्बन्ध रहेको हुन्छ। एकले अर्कोलाई नदेख्दा बेचैन हुने र अनेक निहुँ पारी प्रियतमको साथ रहिरहने धुन यिनमा सधैँ रहेको हुन्छ। भावसाधनाको क्षेत्रमा अन्तरङ्ग मानिने वात्सल्य, सख्य र मधुरभावमध्ये मधुरभाव नै सबभन्दा बढी आनन्द दिने हुन्छ। पूरा जीवन प्रेमीको लागि समर्पित भई उनीबाट केवल प्रेम मात्र चाहने गोपिनीहरू यसै भावका उच्चतम उपासकहरू हुन्। गोपिनीहरूले श्रीकृष्णलाई पति भन्नु भावसाधनाको दृष्टिले मधुरभावद्वारा श्रीकृष्णको उपासना गर्नु हो, जुन सर्वथा उपयुक्त छ। यस्ता सबैभन्दा अन्तरङ्ग भक्तसँग स्वयं भगवान् समेत ऋणी बन्नुहुन्छ भने गोपिनीहरू मुक्त नहुने र उनले परमात्मालाई नपाउने शङ्कै छैन।

**ता दृष्ट्वान्तिकमायाता भगवान् व्रजयोषितः।**
**अवदद् वदतां श्रेष्ठो वाचः पेशैर्विमोहयन्॥ १७॥**

**पदार्थ–**
**वदतां** = वक्ताहरूमध्ये
**श्रेष्ठः** = सर्वश्रेष्ठ
**भगवान्** = श्रीकृष्णले
**ताः** = ती
**व्रजयोषितः** = व्रज सुन्दरीहरूलाई
**अन्तिकम्** = आफ्नो नजिक
**आयाताः** = आइपुगेका
**दृष्ट्वा** = देखेर
**वाचः पेशैः** = वाक्चातुरीद्वारा
**विमोहयन्** = मोहित बनाउँदै
**अवदत्** = भन्नुभयो

**वाक्यार्थ–** वक्ताहरूमध्ये सर्वश्रेष्ठ वक्ता भगवान्‌ले ती सबै व्रज सुन्दरीहरूलाई आफ्नो नजिक आइपुगेको देखेर वाक्चातुरीद्वारा मोहित बनाउँदै यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**स्वागतं वो महाभागाः प्रियं किं करवाणि वः।**
**व्रजस्यानामयं कच्चिद् ब्रूतागमनकारणम्॥ १८॥**

पदार्थ–
**महाभागाः** = हे सौभाग्यवतीहरू
**वः** = तिमीहरूलाई
**स्वागतं** = स्वागत छ
**वः** = तिमीहरूको
**किं** = के
**प्रियं** = प्रिय
**करवाणि** = गर्न सक्छु
**कच्चित्** = के
**व्रजस्य** = व्रजको
**अनामयं** = कुशल-मङ्गल नै छ
**आगमनकारणम्** = यहाँ आउनुको कारण
**ब्रूत** = बताओ

**वाक्यार्थ–** हे सौभाग्यवतीहरू ! तिमीहरूलाई स्वागत छ। म तिमीहरूको के प्रिय गर्न सक्छु ? के व्रजमा सबै कुशल-मङ्गल नै छन् ? यहाँ आउनुको कारण मलाई बताओ।

**रजन्येषा घोररूपा घोरसत्त्वनिषेविता।**
**प्रतियात व्रजं नेह स्थेयं स्त्रीभिः सुमध्यमाः॥ १९॥**

पदार्थ–
**सुमध्यमाः** = हे सुन्दरीहरू
**घोरसत्त्वनिषेविता** = भयङ्कर र हिंस्रक प्राणीहरूद्वारा सेवित
**एषा** = यो
**रजनी** = रात्रि
**घोररूपा** = डरलाग्दो छ
**इह** = यहाँ
**स्त्रीभिः** = स्त्रीहरूद्वारा
**न स्थेयं** = बस्नु हुँदैन
**व्रजं** = व्रजमा नै
**प्रतियात** = फर्क

**वाक्यार्थ–** हे सुन्दरीहरू ! भयङ्कर हिंस्रक प्राणीहरूले युक्त यो रात अत्यन्त डरलाग्दो छ। यहाँ स्त्रीहरूले बस्नु हुँदैन, त्यसैले व्रजमा नै फर्क।

**मातरः पितरः पुत्रा भ्रातरः पतयश्च वः।**
**विचिन्वन्ति ह्यपश्यन्तो मा कृढ्वं बन्धुसाध्वसम्॥ २०॥**

पदार्थ–
**वः** = तिमीहरूका
**मातरः** = आमाहरू
**पितरः** = बुबाहरू
**पुत्राः** = छोराहरू
**भ्रातरः** = भाइहरू
**पतयः च** = पतिहरू समेत
**हि** = निश्चय नै
**अपश्यन्तः** = तिमीहरूलाई नदेखी
**विचिन्वन्ति** = खोजिरहेका छन्
**बन्धुसाध्वसम्** = बन्धुहरूलाई भयभीत
**मा कृढ्वम्** = नगराओ

**वाक्यार्थ–** तिमीहरूका आमा, बुबा, छोरा, दाजुभाइ र पतिहरूले समेत तिमीहरूलाई नदेखी खोजिरहेका छन्, आफ्ना बन्धुहरूलाई भयभीत नगराओ।

**दृष्टं वनं कुसुमितं राकेशकररञ्जितम्।**
**यमुनानिललीलैजत्तरुपल्लवशोभितम्॥ २१॥**
**तद् यात मा चिरं गोष्ठं शुश्रूषध्वं पतीन् सतीः।**
**क्रन्दन्ति वत्सा बालाश्च तान् पाययत दुह्यत॥ २२॥**

**पदार्थ–**
**यमुनानिललीलैजत्तरुपल्लव-शोभितम्** = यमुनाको वायु मन्द बग्नाले हल्लिइरहेका रुखका पालुवाले सुशोभित
**राकेशकररञ्जितम्** = रातका मालिक चन्द्रमाका किरणद्वारा रङ्गिएको
**कुसुमितं** = फूल फुलेको
**वनं** = वन
**दृष्टं** = देखियो
**तत्** = त्यसैले
**सतीः** = हे सतीहरू
**मा चिरं** = ढिलो नगरी
**गोष्ठं** = व्रजमा
**यात** = जाओ
**पतीन्** = पतिहरूलाई
**शुश्रूषध्वं** = सेवा गर
**वत्साः** = बाच्छाहरू र
**बालाः च** = बालकहरू पनि
**क्रन्दन्ति** = रुँदैछन्
**तान्** = तिनीहरूलाई
**पाययत** = दुध पियाओ
**दुह्यत** = गाई दुहिहाल

**वाक्यार्थ–** यमुनालाई छुँदै मन्द बगिरहेको वायुद्वारा रुखका पालुवाहरू हल्लिरहेका छन् र रातका मालिक चन्द्रमाले आफ्ना किरणद्वारा वनलाई रङ्गाइरहेका छन्, यो तिमीहरूले देखिसक्यौ। त्यसैले, हे सतीहरू ! अब ढिलो नगरी व्रजमा जाओ, आफ्ना पतिहरूको सेवा गर। तिम्रा बाच्छा र बालकहरू सबै रोइरहेका होलान्, तिनलाई दुध पियाओ र गाई दुहिहाल।

**अथवा मदभिस्नेहाद् भवत्यो यन्त्रिताशयाः।**
**आगता ह्युपपन्नं वः प्रीयन्ते मयि जन्तवः॥ २३॥**

**पदार्थ–**
**अथवा** = अथवा
**भवत्यः** = तिमीहरू
**मदभिस्नेहात्** = मेरो प्रेमको कारणले
**यन्त्रिताशयाः** = चित्त खिँचिनाले
**आगताः** = आएका हौ भने
**हि** = निश्चय नै यो कुरा
**वः** = तिमीहरूका लागि
**उपपन्नं** = योग्य नै हो
**मयि** = ममाथि
**जन्तवः** = प्राणीहरू
**प्रीयन्ते** = प्रसन्न हुन्छन्

**वाक्यार्थ–** अथवा तिमीहरू मेरो प्रेमको कारणले चित्त खिँचिएर आएका हौ भने यो कुरा पनि ठिकै हो, किनभने मसँग सबै प्राणीहरू आफैँ प्रसन्न हुन्छन्।

**भर्तुः शुश्रूषणं स्त्रीणां परो धर्मो ह्यमायया।**
**तद्बन्धूनां च कल्याण्यः प्रजानां चानुपोषणम्॥ २४॥**

**पदार्थ–**
**कल्याण्यः** = हे कल्याणीहरू
**हि** = निश्चय नै
**भर्तुः** = आफ्ना पतिको
**तद्बन्धूनां च** = तिनका बन्धुहरूको पनि
**अमायया** = कपटरहित भई
**शुश्रूषणं** = सेवा-शुश्रूषा गर्नु
**प्रजानां** = सन्ततिहरूको
**अनुपोषणम् च** = पालन-पोषण गर्नुसमेत
**स्त्रीणां** = स्त्रीहरूको
**परः** = सर्वश्रेष्ठ
**धर्मः** = धर्म हो

**वाक्यार्थ–** हे कल्याणीहरू ! आफ्ना पति अनि उनका बन्धुहरूको निष्कपट भावले सेवा गर्नु र सन्ततिहरूको पालन-पोषण गर्नु नै स्त्रीहरूका लागि सर्वश्रेष्ठ धर्म हो।

**दुःशीलो दुर्भगो वृद्धो जडो रोग्यधनोऽपि वा।**
**पतिः स्त्रीभिर्न हातव्यो लोकेप्सुभिरपातकी ॥ २५ ॥**

**पदार्थ–**
**दुःशीलः** = नराम्रो शील भएको
**दुर्भगः** = भाग्यहीन
**वृद्धः** = बुढो
**जडः** = मूर्ख
**रोगी अपि** = रोगी र
**अधनः वा** = निर्धन भए पनि
**अपातकी** = महापातकी छैन भने
**पतिः** = पतिलाई
**लोकेप्सुभिः** = उत्तम लोक चाहने
**स्त्रीभिः** = स्त्रीहरूले
**न हातव्यः** = छाड्नु हुँदैन

**वाक्यार्थ–** उत्तम लोक चाहने स्त्रीहरूले आफ्नो पति नराम्रो शील भएको, भाग्यहीन, बुढो, मूर्ख, रोगी र निर्धन भए पनि महापातकी छैन भने त्यसलाई छाड्नु हुँदैन।

**अस्वर्ग्यमयशस्यं च फल्गु कृच्छ्रं भयावहम्।**
**जुगुप्सितं च सर्वत्र ह्यौपपत्यं कुलस्त्रियः ॥ २६ ॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**कुलस्त्रियः** = कुलीन स्त्रीहरूको लागि
**औपपत्यं** = परपुरुषको सेवा
**फल्गु** = तुच्छ
**कृच्छ्रं** = अनेक कष्टयुक्त
**अस्वर्ग्यम्** = स्वर्ग पनि नदिने
**अयशस्यं च** = अपयश फैलाउने
**भयावहम्** = भययुक्त (र)
**सर्वत्र** = सबैतिरबाट
**जुगुप्सितं च** = निन्दित पनि छ

**वाक्यार्थ–** कुलीन स्त्रीका लागि परपुरुषको सेवा गर्नु तुच्छ, अनेक कष्ट दिने, स्वर्ग पनि नदिने, अपयश फैलाउने र भययुक्त छ, त्यसैले यस्तो काम सबैतिरबाट निन्दित छ।

**श्रवणाद् दर्शनाद् ध्यानान्मयि भावोऽनुकीर्तनात्।**
**न तथा सन्निकर्षेण प्रतियात ततो गृहान् ॥ २७ ॥**

**पदार्थ–**
**श्रवणात्** = श्रवण गर्नाले
**दर्शनात्** = दर्शन गर्नाले
**ध्यानात्** = ध्यान गर्नाले
**अनुकीर्तनात्** = सबै मिली कीर्तन गर्नाले (जसरी)
**मयि** = म परमात्मामा
**भावः** = प्रेम लाग्छ
**तथा** = त्यसरी त
**सन्निकर्षेण** = नजिक रहनाले
**न** = लाग्दैन
**ततः** = त्यसैले
**गृहान्** = घरतिर
**प्रतियात** = फर्क

**वाक्यार्थ–** श्रवण गर्नाले, दर्शन गर्नाले, ध्यान गर्नाले र सबै मिली कीर्तन गर्नाले जसरी ममा प्रेम हुन्छ, त्यस्तो प्रेम मेरो नजिक रहनाले मात्र हुँदैन, त्यसैले तिमीहरू घर फर्क।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति विप्रियमाकर्ण्य गोप्यो गोविन्दभाषितम्।**

**विषण्णा भग्नसङ्कल्पाश्चिन्तामापुर्दुरत्ययाम्॥ २८॥**

**पदार्थ–**
**इति** = यस्तो
**विप्रियम्** = मन नपर्ने
**गोविन्दभाषितं** = श्रीकृष्णको भनाइ
**आकर्ण्य** = सुनेर
**भग्नसङ्कल्पाः** = चाहनाहरू टुटेका
**विषण्णाः** = अति दुःखी भएका
**गोप्यः** = गोपिनीहरूले
**दुरत्ययाम्** = पार पाइ नसक्ने
**चिन्ताम्** = चिन्तालाई
**आपुः** = पाए

**वाक्यार्थ–** श्रीकृष्णको यस्तो मन नपर्ने भनाइ सुनेपछि गोपिनीहरूका चाहनाहरू टुटे, उनीहरू असाध्यै दुःखी भए र ठुलो चिन्तामा परे।

**कृत्वा मुखान्यव शुचः श्वसनेन शुष्यद्**
**बिम्बाधराणि चरणेन भुवं लिखन्त्यः।**
**अस्त्रैरुपात्तमसिभिः कुचकुङ्कुमानि**
**तस्थुर्मृजन्त्य उरुदुःखभराः स्म तूष्णीम्॥ २९॥**

**पदार्थ–**
**शुचः** = शोकको कारणले
**श्वसनेन** = तातो सासद्वारा
**शुष्यद्बिम्बाधराणि** = पाकेका गोलकाँक्री जस्ता राता ओठ सुकेका (मलिन)
**मुखानि** = अनुहारलाई
**अव** = तलतिर
**कृत्वा** = निहुर्‍याएर
**चरणेन** = गोडाले
**भुवं** = पृथिवीलाई
**लिखन्त्यः** = कोरिरहेका
**उपात्तमसिभिः** = गाजल बगाउने
**अस्त्रैः** = आँसुहरूद्वारा
**कुचकुङ्कुमानि** = स्तनका कुङ्कुमलाई
**मृजन्त्यः** = पखाल्दै गरेका
**उरुदुःखभराः** = असह्य पीडाको भारी बोकेका तिनीहरू
**तूष्णीम्** = चुपचाप
**तस्थुः स्म** = उभिइरहे

**वाक्यार्थ–** शोकको कारणले उत्पन्न तातो सासद्वारा पाकेका गोलक्राँक्री समानका राता ओठ सुकेका, आफ्नो मलिन अनुहारलाई तलतिर निहुराई गोडाको बुढी औँलाले भुइँलाई कोट्याइरहेका, गाजलै बगाउने आफ्ना आँसुका धाराले स्तनमा लगाएका कुङ्कुम-चन्दनलाई पखाल्दै गरेका र असह्य पीडाको भारी बोकेका ती गोपिनीहरू चुपचाप भएर उभिइरहे।

**प्रेष्ठं प्रियेतरमिव प्रतिभाषमाणं**
**कृष्णं तदर्थविनिवर्तितसर्वकामाः।**

**नेत्रे विमृज्य रुदितोपहते स्म किञ्चित्**
**संरम्भगद्गदगिरोऽब्रुवतानुरक्ताः ॥ ३० ॥**

**पदार्थ–**
**अनुरक्ताः** = श्रीकृष्णमा नै आसक्त भएका (श्रीकृष्णरङ्गले नै रङ्गिएका)
**तदर्थविनिवर्तितसर्वकामाः** = उहाँकै लागि सबै कामनाहरू त्यागिदिएका गोपिनीहरूले
**रुदितोपहते** = रुँदा-रुँदा थाकेका
**नेत्रे** = दुबै आँखालाई
**विमृज्य** = पुछेर
**प्रेष्ठं** = प्रियतम भएर पनि
**प्रियेतरम् इव** = मन नपर्ने व्यक्ति झैं
**प्रतिभाषमाणं** = बोलिरहेका
**कृष्णं** = श्रीकृष्णलाई
**किञ्चित् संरम्भगद्गदगिरः** = केही रिसका कारण अकमकाएको वाणीले युक्त भई
**अब्रुवत स्म** = यसो भने

**वाक्यार्थ–** श्रीकृष्णमा नै आसक्त भएका र उहाँकै लागि भनेर सबै कामनाहरू त्यागिदिएका गोपिनीहरूले रुँदा-रुँदा थाकेका आफ्ना आँखा पुछेर आफ्नै प्रियतम भएर पनि मन नपर्ने व्यक्तिले जस्तो नमिठो वचन बोलिरहनुभएका श्रीकृष्णलाई केही रिसाएका कारण अकमकाएको वाणीले यसो भने।

**विवरण–** माथिका श्लोकहरूमा गोपिनीहरूले श्रीकृष्णप्रति गरेको प्रेमको नयाँ स्वरूप प्रकट भएको छ। प्रेमीले आफूअनुकूलको आचरण नगर्दा पनि वास्तविक प्रेमसम्बन्धमा विचलन आउँदैन भन्ने कुरा यहाँ देखाइएको छ। गोपिनीहरूको सम्पूर्ण जीवन कृष्णका लागि समर्पित थियो। **तदर्थविनिवर्तितसर्वकामाः** अर्थात् कृष्णकै लागि भनेर उनीहरूले संसारका सम्पूर्ण कामनाहरूलाई त्यागिदिएका थिए। व्यवहारमा रहँदा पनि उनीहरूको सम्पूर्ण प्रयास आफ्नो उद्देश्यले होइन, श्रीकृष्णकै उद्देश्यले हुन्थ्यो। गोपिनीहरूले आफ्ना शरीर, इन्द्रिय आदिलाई पनि आफ्नो भनेर होइन, अपि तु श्रीकृष्णको प्रिय ठानेर नै स्याहार र शृङ्गार गर्दथे। अहिलेसम्म जसको लागि भनेर गोपिनीहरूले लौकिक व्यवहार आदि गरे, अनि जसको लागि ती सबै व्यवहारहरूको त्याग पनि गरिदिए, तिनै श्रीकृष्णले घर फर्किन भनेपछि गोपिनीहरूलाई अपार कष्ट भयो। गोपिनीहरू श्रीकृष्णकै रङ्गमा रङ्गिइसकेका थिए। चीरहरणको प्रसङ्गमा श्रीकृष्णले निर्वस्त्र भएर आफ्ना अगाडि उपस्थित हुन आज्ञा दिँदा त्यसलाई समेत गोपिनीहरूले पालन गरिसकेका थिए। श्रीकृष्णले बारम्बार आफ्नो प्रेमको परीक्षा लिएको र मनभित्र बिझ्ने गरी व्यवहार गरेको पनि गोपिनीहरूलाई सह्य थियो। पूर्णरूपले समर्पित नभई श्रीकृष्णको अघि कोही टिक्न सक्दैन, किनभने उहाँको व्यवहार आफ्ना प्रेमीहरूप्रति अत्यन्त स्पष्ट, आन्तरिक, गहिरो र कठोर पनि हुन्छ भन्ने गोपिनीहरूले बुझिसकेका थिए। यसरी श्रीकृष्णमा नै पूर्णरूपले समर्पित भइसकेका गोपिनीहरू जब बाँसुरीको धुन सुनी श्रीकृष्णले बोलाएको सम्झिएर सारा व्यवहारलाई तत्काल त्यागी उहाँकै नजिक आइपुगे तब श्रीकृष्णकै मुखबाट उनीहरूले नमिठा वचनहरू सुन्नुपऱ्यो। आफ्नै प्रियतमले अप्रिय व्यक्तिले झैं दुःखदायक कठोर वचन बोलेको सुनेपछि असह्य पीडाको भारी बोकेर पनि गोपिनीहरू केही नभनी उभिइरहे। अहिलेसम्म गोपिनीहरूले श्रीकृष्णले आफ्नो प्रेमको अभिनन्दन

गरेको मात्र देखेका र भोगेका थिए। अहिले पनि त्यस्तै होला भन्ने उनीहरूको आशा थियो, तर घुमाउरो पाराले श्रीकृष्णले गोपिनीहरूलाई आ–आफ्ना पति छोडी आउने व्यभिचारिणी भएको आरोप समेत लगाउनुभयो। मानौँ आफूले गोपिनीहरूलाई कहिल्यै पनि चाहेकै होइन अनि बाँसुरी बजाई बोलाएकै होइन भने झैँ गरी श्रीकृष्णले घर फर्किई पतिको सेवा गर्न पो आदेश दिनुभयो। गोपिनीहरू यी सबै लौकिक मर्यादालाई नजान्ने थिएनन्, यो सबै सुन्न उनीहरू श्रीकृष्णकहाँ आएका पनि थिएनन्। पतिसेवाको उपदेश त कुनै सज्जनसँग सुने भइहाल्थ्यो, श्रीकृष्णकहाँ त उनीहरू विशुद्ध प्रेमको लागि आएका थिए, त्यसैले श्रीकृष्णको वचनले उनीहरू भग्नसङ्कल्प भए भनी श्लोकमा बताइएको छ।

श्रीकृष्णले आफूले सोच्दै नसोचेको व्यवहार देखाएपछि गोपिनीहरू केही बोल्नै सकेनन्, उनीहरूको मुन्टो निहुरियो, खुट्टाले भुइँ कोतर्दै अनि आँसुका धारा बगाउँदै उनीहरू चुपचाप बसिरहे। भागवतका अनेक टीकाकारहरूले गोपिनीहरूका यस्ता व्यवहारका अनेक आशय देखाउनुभएको छ। मुन्टो निहुर्‍याउनु लज्जाको सूचक हो, नङले भुइँ कोट्याउनु चिन्ताको सूचक हो भने आँसु बगाउनु सन्तापको सूचक हो। गोपिनीहरू चुप लाग्नुले उनीहरूभित्र अनेक भावहरू मडारिएको बुझिन्छ। प्रेममा अत्यन्त कोमल स्वभावका भएर पनि एकाएक यी आज कसरी कठोर बने, यिनलाई अनुनय–प्रार्थना गरी फकाऊँ अथवा यिनको वचनको कडा प्रत्युत्तर दिऊँ भनी मनमनै विचार गर्दा गोपिनीहरू मौन भएका हुन्। श्रीकृष्णले भित्रैबाट आफूलाई नचाहेकै हुन् भने यिनकै अघि प्राणत्याग गरौँ, यदि देखाओटी व्यवहार हो भने अहिल्यै रिसाउँदै व्रजतिर फर्के झैँ गरी यिनको भाव बुझौँ या केही क्षण प्रतीक्षा गरौँ भन्ने तर्क गर्दै गोपिनीहरू मौन भएका हुन् भनी सारार्थदर्शिनी र वंशीधरी टीकामा उल्लेख गरिएको छ। गोपिनीहरूले सबै लोक र लाजलाई त छाडिदिएका थिए, तर लोकमर्यादा छाडी जसको नजिक आइयो, तिनैले आफूलाई स्वीकार नगरेपछि भने उनीहरूलाई व्यर्थमा नै मर्यादा त्यागेकाले लाज लाग्यो, त्यसैले उनीहरूको मुन्टो निहुरियो। कतिपय टीकाकारहरूले नङले पृथिवीलाई कोतर्दा चाहिँ हे पृथिवी ! तिमी फाट, जसभित्र हामी पस्न सकौँ भन्ने भाव व्यक्त भएको छ भन्ने मानेका छन्। कतिपय टीकाकारहरूले हामीसँग कठोर वचन बोल्ने यी पक्कै श्रीकृष्ण होइनन् होला, त्यसैले परपुरुषको अनुहार हेर्नुहुँदैन भनी गोपिनीहरूले मुन्टो निहुर्‍याएका हुन् अथवा श्रीकृष्णको वाग्बाणले आफ्नो हृदय कति विदीर्ण भएछ भनी हेर्न उनीहरूले अनुहार तलतिर झुकाएका हुन् भनेका छन्।

गोपिनीहरूले चुप लागी मनमनै श्रीकृष्णलाई अनेक उत्तरहरू दिएका छन्। यहाँ श्रीहरिसूरिले गोपिनीहरूको मनोभावको विभिन्न रूपमा चित्रण गर्नुभएको छ। गोपिनीहरू भन्छन्– हे श्रीकृष्ण ! हामीले आफ्नो ज्ञानशक्ति र क्रियाशक्ति दुबै हजुरलाई समर्पित गरिसक्यौँ। अब घर फर्क भन्ने हजुरको वचनलाई हामीले कसरी जान्ने र त्यसलाई कसरी पालना गर्ने ? (**कैः श्राव्यं कैरनुष्ठेयं प्रतियातेति ते वचः**)। गोपिनीहरूको अर्को भावना छ– हे श्रीकृष्ण ! जब हामी हजुरलाई दही–मखन दिँदैनथ्यौँ, तब हजुर त्यसका लागि हुरुक्क हुनुहुन्थ्यो, अब हामीले आफ्नो सर्वस्व अर्पण गर्दा पनि यसलाई स्विकार्नुहुन्न। यसबाट वस्तु नपाउन्जेल त्यसलाई पाउन खोज्ने तर पाइसकेपछि त्यसलाई बेवास्ता गरिदिने हजुरको स्वार्थी प्रेम प्रकट हुन्छ। कुनै गोपिनी

सोध्छिन्— हे रमाकान्त श्रीकृष्ण ! लक्ष्मीसँग दिव्य लोकमा विहार गर्ने हजुरले व्रजको वनमा गोपिनीहरूसँग विहार गर्दा इज्जत जाला भनी सम्झिनुभएको होला, तर हेर्नुहोस् निम्नस्तरको व्यक्तिलाई पनि आफूसमान बनाउनेको नै लोकमा कीर्ति हुन्छ, जसरी अज्ञानी शिष्यलाई आफूसमान ज्ञानी बनाउँदा गुरुको महत्त्व झन् बढ्छ, त्यसैले नहिच्किचाउनुहोस्। कुनै गोपिनी श्रीकृष्णले पति, पुत्र, घर आदिको मर्यादा छाडी परपुरुषकहाँ आएको भनी लगाएको आरोपको खण्डन गर्दै मनमनै भन्छिन्— हे कृष्ण ! हामीले हाम्रा पतिलाई छाडेका छैनौं, हजुर नै हाम्रा असली पति हुनुहुन्छ। हजुरको हातमा रहेको वंशोत्तम अर्थात् सर्वश्रेष्ठ वंश बाँसुरी नै हाम्रो वंश अर्थात् सन्तान हो। यी वृक्षहरू हाम्रा लागि मान्यजनहरू हुन् भने यी लहराका समूह नै हाम्रा लागि दाजुभाइसमान हुन्। यो वन नै हाम्रो घर हो, हामीलाई मर्यादा उल्लङ्घन गरेको आरोप नलगाउनुहोस्। धैरै धर्मज्ञ नबन्नुहोस् भनी गोपिनीहरूले मनमनै उत्तर दिएका छन्। अर्की कुनै गोपिनीले चाहिँ यिनको वंशीको धुन सुन्नाले हाम्रो मन पनि तानियो भने हाम्रो यत्रो अनुनय सुन्दा पनि नपग्लिने यिनी चाहिँ कस्ता पुरुष हुन् भनी मनमनै विचार गरिरहिन्। यसरी गोपिनीहरू मौन बन्नुका अनेक उपपत्तिहरू रहेका छन्।

यस्तै विचार गरिरहँदा पनि गोपिनीहरूको श्रीकृष्णप्रेममा कुनै विचलन आएको छैन। उनीहरूमा **संरम्भ** अर्थात् प्रेमको कोप अवश्य छ, तर पनि उनीहरू **अनुरक्तः** अर्थात् श्रीकृष्णप्रति अनुरक्त नै छन् भनी श्रीशुकदेवले बताउनुभएको छ। परमात्मासँग गरिने प्रेम सामान्य संसारी सम्बन्धजस्तो हुँदैन। सामान्य संसारका वस्तु एवं सम्बन्धमा गरिएको प्रेम स्वार्थमा आधारित रहने हुनाले क्षणिक पनि हुन सक्छ। त्यो प्रेममा हृदय पूर्णतः पग्लिएको हुँदैन। मधुसूदन सरस्वतीले चित्तलाई लाहासँग तुलना गर्दै संसारको प्रेमले यसलाई पगाल्न नसक्ने केवल परमात्मप्रेमले मात्र पगाल्न सक्ने बताउनुभएको छ। सूर्यको किरणमा तताउँदा लाहा अलि-अलि पग्ले जैँ मात्र हुन्छ, त्यसलाई पूरै पगाल्न त आगोमैं तताउनुपर्दछ। त्यसै गरी संसारी प्रेमबाट पनि चित्त पग्लिएको र प्रेमीसँग एकाकार भई मिलेको भान हुन्छ, तर यसलाई पूरै पगाल्न त परमात्मप्रेमकै आवश्यकता पर्दछ। मधुसूदन सरस्वती भन्नुहुन्छ, लाहालाई पगाली पहिलो पटक त्यसमा जुन रङ्ग चढाइन्छ, त्यसलाई अनेकौं चोटि पगालेर पनि अर्को रङ्गमा रङ्गाउन सकिँदैन, त्यस्तै स्थिति चित्तको पनि हुन्छ। एकपटक परमात्माको रङ्ग चढिसकेपछि जुनसुकै कठिन परिस्थितिमा पनि त्यो चित्तबाट परमात्मालाई हटाउन या अलग गर्न सकिँदैन। संसारको प्रेम स्वार्थमा आधारित हुने हुनाले आफ्नो स्वार्थ या अनुकूलतामा थोरै मात्र विचलन आउँदा पनि त्यो प्रेममा नै आघात पुग्छ, तर परमात्मासँगको प्रेम आफ्नो लागि होइन, अपितु परमात्माकै लागि हुन्छ। यसमा परमात्माभन्दा व्यक्तिको छुट्टै अस्तित्व नै रहँदैन, ऊ पूरै परमात्मामा नै विलीन भइसकेको हुन्छ। जहाँ आफ्नै सत्ताको बोध पनि बाँकी रहँदैन भने त्यहाँ आफ्नो अनुकूलता र प्रतिकूलताको स्वार्थी विचार कसरी सम्भव हुन सक्छ। त्यसैले स्वयं परमात्माले कठिन परिस्थितिको सिर्जना गरी आफ्नो प्रेमको परीक्षा लिइरहेको वेलामा पनि गोपिनीहरू श्रीकृष्णप्रेमबाट विचलित भएनन्। उनीहरू श्रीकृष्णमा दोषदर्शन गरेर होइन, अपि तु प्रेमका कारणले नै उहाँसँग रिसाएका हुन्। त्यसैले उनीहरूले पछि श्रीकृष्णप्रति अनुरक्त भई उहाँको प्रार्थना गरेका हुन्।

**गोप्य ऊचुः** (गोपिनीहरूले भने)

**मैवं विभोऽर्हति भवान् गदितुं नृशंसं**
**सन्त्यज्य सर्वविषयांस्तव पादमूलम्।**
**भक्ता भजस्व दुरवग्रह मा त्यजास्मान्**
**देवो यथादिपुरुषो भजते मुमुक्षून्॥ ३१॥**

**पदार्थ–**
**दुरवग्रह** = हे दुःखले मात्र प्राप्त गर्न सकिने
**विभो** = सर्वव्यापक श्रीकृष्ण
**भवान्** = हजुर
**एवं** = यस्तो
**नृशंसं** = अत्यन्त कठोर
**गदितुं** = कुरा गर्न
**मा अर्हति** = योग्य हुनुहुन्न
**यथा** = जसरी
**आदिपुरुषः** = आदिपुरुष
**देवः** = भगवान् नारायणले
**मुमुक्षून्** = मुमुक्षुहरूलाई
**भजते** = स्वीकार गर्नुहुन्छ
**सर्वविषयान्** = सबै विषयहरूलाई
**सन्त्यज्य** = चटक्कै छोडी
**तव** = हजुरकै चरणलाई
**भक्ताः** = प्रेम गर्ने
**अस्मान्** = हामीहरूलाई
**भजस्व** = स्वीकार गर्नुहोस्
**मा त्यज** = (अलपत्र पारेर) नछोड्नुहोस्

**वाक्यार्थ–** दुःखले मात्र प्राप्त गर्न सकिने सर्वव्यापक हे श्रीकृष्ण ! हजुरले यस्तो अत्यन्त कठोर कुरा गर्न सुहाउँदैन। जसरी आदिपुरुष नारायण भगवान्ले मुमुक्षुहरूलाई स्विकार्नुहुन्छ, त्यसै गरी सबै विषयहरूलाई चटक्कै छाडी केवल हजुरकै चरणलाई मात्र प्रेम गर्ने हामीहरूलाई स्वीकार गर्नुहोस्, अलपत्र पारेर नछोड्नुहोस्।

**यत्पत्यपत्यसुहृदामनुवृत्तिरङ्ग**
**स्त्रीणां स्वधर्म इति धर्मविदा त्वयोक्तम्।**
**अस्त्वेवमेतदुपदेशपदे त्वयीशे**
**प्रेष्ठो भवांस्तनुभृतां किल बन्धुरात्मा॥ ३२॥**

**पदार्थ–**
**अङ्ग** = हे परमप्रिय
**धर्मविदा** = धर्मलाई जान्ने
**त्वया** = हजुरद्वारा
**पत्यपत्यसुहृदां** = पति, पुत्र र आफन्तहरूको
**अनुवृत्तिः** = सेवा-शुश्रूषा गर्नु
**स्त्रीणां** = स्त्रीहरूको
**स्वधर्मः इति** = स्वधर्म हो भनी
**यत्** = जुन कुरा
**उक्तम्** = भनियो
**एतत्** = यो
**उपदेशपदे** = सबै उपदेशको परम तात्पर्य
**ईशे** = अन्तर्यामी रूपले सबैका नियन्त्रक
**त्वयि एवम्** = हजुरमा नै (सार्थक)
**अस्तु** = होस्
**किल** = निश्चय नै
**भवान्** = हजुर

**तनुभृतां** = सबै प्राणीहरूका
**बन्धुः** = आफन्त
**आत्मा** = आत्मा र
**प्रेष्ठः** = परम प्रिय समेत हुनुहुन्छ

**वाक्यार्थ–** हे परमप्रिय श्रीकृष्ण ! धर्मज्ञ हजुरले पति, पुत्र र आफन्तहरूको सेवा-शुश्रूषा गर्नु नै स्त्रीको परम धर्म हो भनी उपदेश गर्नुभएको छ। तर धर्म सम्बन्धी यो उपदेश सबैथरी उपदेशहरूका एक मात्र तात्पर्य अन्तर्यामी हजुरमा नै सार्थक हुन्छ, किनभने हजुर नै सबै प्राणीहरूका आफन्त, आत्मा र प्रियतम हुनुहुन्छ।

**विवरण–** माथिका श्लोकमा गोपिनीहरूले श्रीकृष्णसँग आफूहरूलाई निःसङ्कोच स्वीकार गर्न प्रार्थना गर्दै आफूले पतिसेवा आदि धर्मलाई छाडेको भन्ने आरोपको खण्डन गरेका छन्। श्रीकृष्णको इच्छा या विचारमाथि अरू कसैको पनि जोड चल्दैन भन्ने गोपिनीहरूलाई थाहा छ। श्रीकृष्णले चाहनुभएन भने हामीले लाख प्रयास गर्दा पनि उहाँले हामीलाई स्वीकार गर्नुहुनेछैन, उहाँको इच्छाविपरीत जति प्रयास गरिन्छ, त्यति नै उहाँ झन् कठोर एवं दृढ बन्नुहुन्छ भन्ने सोची गोपिनीहरूले **विभो** अर्थात् हे सर्वव्यापक परमात्मा भनी श्रीकृष्णलाई फकाउने प्रयास गरेका छन्। गोपिनीहरूले श्रीकृष्णलाई प्रियतमको रूपमा नै प्रेम गरेका हुन्, त्यसैले श्रीकृष्ण ईश्वर हुनुहुन्छ भन्ने भाव उनीहरूमा हुँदैन। जहाँ ईश्वरसँग प्रेमसम्बन्ध हुन्छ, त्यहाँ ईश्वरत्वको स्फुरण हुनुलाई मात्र उत्कृष्ट मानिन्न, सर्वशक्तिमान् ईश्वरको ईश्वरत्वलाई पनि जित्ने गरी प्रेम हुनुलाई मात्र उत्कृष्ट मानिन्छ। यस प्रसङ्गमा टीकाकारहरूले लेखेका छन्– जहाँ प्रेमीसँग मिलन भएको हुन्छ, त्यो संयोगको अवस्थामा केवल मधुरभावको मात्र स्फुरण हुन्छ, प्रेमीमा रहेको ईश्वरीय दिव्य गुण, पराक्रम आदिको होइन। जहाँ प्रेमीसँग विरह भएको हुन्छ, त्यहाँ चाहिँ विरहको अग्निले प्रेमीका सम्पूर्ण दिव्य सद्गुण एवं पराक्रमहरूलाई पनि प्रकट गराइदिन्छ। सारार्थदर्शिनीकार लेख्नुहुन्छ– प्रेममा संयोगको अवस्था चन्द्रकिरण जस्तो आह्लादक एवं शीतल हुन्छ भने वियोग चाहिँ प्रखर सूर्यकिरणजस्तो सन्तापक। चन्द्रको प्रकाशमा सबै वस्तुहरूको स्पष्ट प्रकाश नभए झैँ संयोग अवस्थामा प्रेमीमा रहेका सबै गुणहरूको प्रकाश हुँदैन, तर वियोग चाहिँ सूर्यकिरणजस्तो प्रखर प्रकाशले युक्त हुने हुनाले त्यसमा प्रेमीका सबै सद्गुणहरूको प्रकाश हुन्छ। जहाँ संयोगमा पनि प्रेमीमा ईश्वरत्वको स्फुरण हुन्छ, त्यहाँ प्रेममा न्यूनता हुन्छ। यज्ञपत्नीहरूमा श्रीकृष्णप्रेमसँगै ईश्वरत्वको भान रहेकाले उनीहरूको प्रेम अपूर्ण थियो र त्यसैले उनीहरूलाई घरतिर नै फर्काइएको थियो। यहाँ चाहिँ श्रीकृष्णले आफूहरूलाई स्वीकार नगर्दा गोपिनीहरू प्रियविरहको भावमा डुबेका छन् र त्यही विरहद्वारा श्रीकृष्णको ईश्वरत्व स्फुरित भएको छ, उनीहरूको प्रेममा न्यूनता छैन भन्ने बुझिन्छ।

श्रीकृष्णले पतिसेवारूप धर्मको उपदेश गर्दा गोपिनीहरूले श्रीकृष्णलाई **धर्मज्ञ** भनी उपहास गरेका छन्। सुबोधिनीकार लेख्नुहुन्छ– पतिसेवाको उपदेश स्थूलदृष्टिले गरिएको उपदेश हो। पति-पत्नी आदि सम्बन्ध अनात्मा शरीरको हो, त्यही शरीरलाई आफू मान्नेहरूका लागि यस्ता लौकिक धर्महरू सार्थक हुन्छन्, वास्तवमा त जीवात्माको नित्य सम्बन्ध परमात्मासँग छ, यो आत्मसम्बन्ध मुख्य स्वधर्म हो। गोपिनीहरू धर्मलाई छाडी अधर्मतिर होइन, अपि तु परमधर्मतिर लागेका हुन्, जुन सर्वथा उचित छ। धर्मको सार्थकता परमधर्ममा पुऱ्याउनु नै हो। याज्ञवल्क्यस्मृति

(१/८)मा बताइएको छ— **अयं तु परमो धर्मो यद्योगेनात्मदर्शनम्** अर्थात् यज्ञ, दान, सत्कर्म, अहिंसा आदि धर्म हुन्, तर आत्मदर्शन गर्नु यी सबैको पनि प्रधान लक्ष्य एवं परमधर्म हो। असली स्वधर्मको उपदेश नगरी नक्कली धर्ममा प्रेरित गर्ने तर आफूलाई ठुलो धर्मज्ञ ठान्ने ? भनी गोपिनीहरूले श्रीकृष्णलाई व्यङ्ग्य गरेका हुन् भनी वंशीधरले उल्लेख गर्नुभएको छ। गोपिनीहरू भन्छन्— पतिसेवा गर्नुपर्छ भन्ने उपदेशको परम तात्पर्य पनि हजुरमा नै आई टुङ्गिन्छ। चेतन आत्माले सहित भएको शरीरलाई नै पति मानिन्छ र त्यसैको सेवा गरिन्छ। आत्मारहित जड शरीरलाई त केही क्षणमैं जलाइन्छ। यसरी पतिसेवा भनेको पनि शरीरको नभई आत्माकै सेवा हो। **तनुभृतां आत्मा** अर्थात् सबै प्राणीहरूका आत्मा हजुर नै हुनुहुन्छ। साक्षात् हजुरकै सेवा गरेपछि संसारभरका पति, पुत्र, पिता आदि सबै त्यसैद्वारा तृप्त भइहाल्छन्। जरामा पानी हालेपछि हाँगा, पात, फलफूल आदि सबै तृप्त भए जैँ हजुरको सेवाद्वारा हाम्रो पतिसेवा पनि पूर्ण हुन्छ। पतिभित्र रहने असली पति आत्मरूप हजुर नै हुनुहुन्छ, यसो गर्दा व्यभिचारको दोष पनि रहन्न। त्यसैले हामीलाई धर्मछाडा भनी धेरै कठोर वचन नबोल्नुहोस् भनी गोपिनीहरूले भनेका छन्।

वेदाध्ययन, यज्ञ, दान, तपस्या आदि सम्पूर्ण साधनहरूद्वारा परमात्मालाई नै जान्न खोज्नुपर्दछ भनी बृहदारण्यकोपनिषद् (४/४/२२)मा बताइएको छ। पति-पुत्रसेवा आदि धर्मद्वारा जसलाई पाउन सकिन्छ, त्यस्ता परमात्मालाई नै साक्षात् सेवा गर्न पाएपछि साधनहरूमा को अल्झिरहन्छ र ? त्यसैले गोपिनीहरू साधनभूत धर्महरूमा नभुली साक्षात् साध्य वस्तु परमात्माकै सेवामा समर्पित हुन चाहन्छन्। यसरी गोपिनीहरूले श्रीकृष्णकै शब्दलाई लिई उहाँका उपदेश वचनहरूलाई सतही सिद्ध गरिदिएका छन्।

**कुर्वन्ति हि त्वयि रतिं कुशलाः स्व आत्मन्**
**नित्यप्रिये पतिसुतादिभिरार्तिदैः किम्।**
**तन्नः प्रसीद परमेश्वर मा स्म छिन्द्या**
**आशां धृतां त्वयि चिरादरविन्दनेत्र॥ ३३॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**कुशलाः** = शास्त्रनिपुण व्यक्तिहरू
**स्वे** = आफ्नै
**आत्मन्** = आत्मरूप
**नित्यप्रिये** = निरन्तर प्रिय
**त्वयि** = हजुरमा नै
**रतिं** = प्रेम
**कुर्वन्ति** = गर्दछन्
**आर्तिदैः** = अनेक दुःख दिने
**पतिसुतादिभिः** = पति, पुत्र आदिबाट
**किम्** = के हुन्छ
**तत्** = त्यसैले
**परमेश्वर** = हे परमेश्वर
**नः** = हामीसँग
**प्रसीद** = प्रसन्न हुनुहोस्
**अरविन्दनेत्र** = हे कमलनयन श्रीकृष्ण
**चिरात्** = धेरै लामो समयदेखि
**त्वयि** = हजुरमाथि
**धृतां** = गरिएको
**आशां** = आशालाई
**मा स्म छिन्द्याः** = नछिनाउनुहोस्

**वाक्यार्थ–** निश्चय नै शास्त्रनिपुण व्यक्तिहरू सधैँ प्रिय हुने आफ्नै आत्मरूप हजुरमा नै प्रेम गर्दछन्, अनेक दुःख दिने पति-पुत्र आदि सम्बन्धले के हुन्छ र ? त्यसैले हे परमेश्वर ! हामीसँग प्रसन्न हुनुहोस्। हे कमलनयन श्रीकृष्ण ! धेरै समयदेखि हजुरमाथि गरिएको भरोसालाई यसरी चटक्क नछिनाउनुहोस्।

**विवरण–** यस श्लोकमा गोपिनीहरूले पति, पुत्र आदिलाई त्याग्नुमा सत्पुरुषहरूलाई दृष्टान्तको रूपमा बताएका छन्। **कुशलाः** अर्थात् शास्त्रनिपुण व्यक्तिहरू परमात्मामा नै प्रेम गर्दछन्, संसारमा होइन। संसारलाई सर्वस्व ठान्ने व्यक्तिहरू पदार्थहरूको सङ्ग्रह गर्दा आफूलाई सिपालु एवं सफल ठानिरहून्, तर वास्तविक सफलता त आफूलाई धेरैभन्दा धेरै सुखी बनाउन सक्नुमा नै छ। बाहिरी पदार्थहरूको भन्दा सुखको प्राप्तिद्वारा नै कुनै पनि सफलतालाई नाप्नु उपयुक्त हुन्छ। आत्मा परम सुखको आश्रय हो। यो नित्यप्रिय छ। अरू सबै पदार्थ एवं लौकिक सम्बन्धहरू यसकै लागि प्रिय हुन्छन्। आफ्नी पत्नी मैत्रेयीलाई उपदेश गर्ने क्रममा महर्षि याज्ञवल्क्यले पति, पत्नी, पिता आदि सबैले आ-आफ्ना लागि नै ती-ती सम्बन्धीहरूमा प्रेम गरेका हुन्छन्, अरू कसैका लागि होइन, अपितु आफ्ना लागि नै सम्पूर्ण संसार प्रिय हुन्छ भनी उपदेश गर्नुभएको छ– **आत्मनस्तु कामाय सर्वं प्रियं भवति** (बृहदारण्यकोपनिषद्, २/४/५)। जो परम प्रिय अनि परम आनन्दरूप छ, त्यसैलाई प्रेम गर्नु र त्यसैबाट शाश्वत सुख प्राप्त गर्नु नै कुशलता हो। त्यस्ता महापुरुषहरूको बाटोलाई नै आफूले पछ्याएको गोपिनीहरूको भनाइ छ। पति-पुत्र आदि बाहिरी लौकिक सम्बन्धले त सुखभन्दा बढी दुःख दिन्छन्। ती दुःखदायक सम्बन्धहरूबाट के पाउन सकिन्छ र ? संसारमा जति पनि वस्तुहरू छन्, ती सबै क्षणिक छन्। एक दिन नाश हुने हुनाले तिनमा जति बढी प्रेम गरिन्छ, त्यसबाट त्यति नै धेरै पीडा हुन्छ। बृहदारण्यकोपनिषद् (१/४/८)मा पनि जसले आफूलाई भन्दा अरू कुनै वस्तुलाई प्रिय मान्दछ, त्यसको प्रिय वस्तु एक दिन नष्ट हुन्छ र उसलाई रुवाइदिन्छ (**प्रियं रोत्स्यति**) भनिएको छ। यस्तै त्यहीँ नै **न हास्य प्रियं प्रमायुकं भवति** अर्थात् जसले आत्मालाई नै प्रिय मान्दछ, त्यो व्यक्तिले कहिल्यै दुःखी हुनुपर्दैन, किनभने त्यसले प्रेम गरेको आत्मवस्तु नित्य भएकाले त्यो कहिल्यै पनि हराउँदैन भनी बताइएको छ। यहाँ गोपिनीहरूले पनि नित्यप्रिय आत्मा श्रीकृष्णलाई छाडी दुःखदायक पति, पुत्र आदि अनात्मसम्बन्धमा प्रियबुद्धि नगर्ने बताएका छन्। यो शरीरलाई र यो लोकलाई सत्य मान्दाखेरि नै यसका सहयोगी या संरक्षक आदिका रूपमा पुत्र, पति आदि सम्बन्धीको अपेक्षा हुन्छ। जसलाई शरीरमा आत्मबुद्धि नै छैन, अनि यो लोक-परलोकको पनि चाहना छैन, त्यस्ता व्यक्तिहरूलाई पति, पुत्र आदिको के प्रयोजन हुन्छ र ? यही भावनाले गर्दा गोपिनीहरूले पति, पुत्र आदि सम्पूर्ण सम्बन्धहरू क्षणिक एवं व्यर्थ भएकाले तिनलाई छाडिदिएका हुन्। गोपिनीहरू भन्छन्– **आशां मा छिन्द्याः** अर्थात् हाम्रो आशालाई यसरी चटक्कै नचुँडाल्नुहोस्। गोपिनीहरूको मनमा कृष्णमिलनको आशारूपी लहरा झाङ्गिएको छ। धेरै समय अघिदेखि उनीहरूले यो इच्छालाई मनभित्र सजाएका छन्। बाल्यकालको चञ्चल क्रीडादेखि सुरु भई चीरहरणको प्रसङ्गसम्म आइपुग्दा उनीहरूको यो आशा धेरै बढिसकेको छ। आफ्ना विचित्र हँसाइ, बोलाइ, व्यवहार अनि वंशीवादन आदिद्वारा स्वयं श्रीकृष्णले पनि उनीहरूको इच्छालाई मल-जल गर्नुभएको छ। चीरहरणको क्रममा त उहाँले

आफ्नो प्रेम प्रकट पनि गरिसक्नुभएको छ। यसरी अहिलेसम्म **भृतां** अर्थात् भरण गर्दै जोगाउँदै आएको यो आशारूपी लहरालाई अहिले आएर एकाएक छिनाउन नहुने गोपिनीहरूको भनाइ छ। श्रीकृष्णलाई यहाँ परमेश्वर भनी सम्बोधन गरिएको छ। यहाँ परमा (पर-मा)हरूका ईश्वर नै परमेश्वर हुन्। मा अर्थात् लक्ष्मीभन्दा पनि प्रेम समर्पण आदि गुणका कारणले पर अर्थात् श्रेष्ठ भएका राधा आदि गोपिनीका ईश्वर भएकाले श्रीकृष्ण परमेश्वर हुनुहुन्छ। त्यस्ता श्रीकृष्णले आफ्नै प्रिय गोपिनीहरूको इच्छालाई कसरी चुँडाउन सक्नुहुन्छ र ? भन्ने भाव पनि यहाँ अभिव्यक्त भएको छ।

**चित्तं सुखेन भवतापहृतं गृहेषु**
**यन्निर्विशत्युत करावपि गृह्यकृत्ये ।**
**पादौ पदं न चलतस्तव पादमूलाद्**
**यामः कथं व्रजमथो करवाम किं वा ॥ ३४ ॥**

**पदार्थ–**
**गृह्यकृत्ये** = घरको काममा लागेका
**करौ** = हात
**उत** = अनि
**यत्** = जुन
**गृहेषु** = घरतिरै
**सुखेन** = आनन्दपूर्वक
**निर्विशति** = बस्दछ (त्यो)
**चित्तं अपि** = चित्त पनि
**भवता** = हजुरद्वारा
**अपहृतं** = चोरियो
**पादौ** = हाम्रा दुबै गोडा
**तव** = हजुरका
**पादमूलात्** = चरणनजिकबाट
**पदं** = एक पाइला पनि
**न चलतः** = चल्दैनन्
**अथो** = यसो भएपछि
**कथं** = कसरी
**व्रजम्** = व्रजमा
**यामः** = जाऔँ
**किं वा** = के चाहिँ
**करवामः** = गरौँ

**वाक्यार्थ–** घरका कामकाजमा लागेका हाम्रा हातहरू र हाम्रो चित्तलाई पनि हजुरले चोरिहाल्नुभयो, अब हाम्रा दुबै गोडा हजुरका चरणको नजिकबाट एक पाइला पनि सर्दैनन्, यसो भएपछि हामी व्रजमा कसरी जाऔँ र के चाहिँ गरौँ ?

**सिञ्चाङ्ग नस्त्वदधरामृतपूरकेण**
**हासावलोककलगीतजहृच्छयाग्निम् ।**
**नो चेद् वयं विरहजाग्न्युपयुक्तदेहा**
**ध्यानेन याम पदयोः पदवीं सखे ते ॥ ३५ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय
**नः** = हाम्रो
**हासावलोककलगीतज-**
**हृच्छयाग्निम्** = हजुरको हँसिलो हेराइ र सुमधुर सङ्गीतद्वारा

हृदयमा बलेको कामनारूपी अग्निलाई
**त्वदधरामृतपूरकेण** = हजुरकै अधरामृत भरिएको पात्रको
**सिञ्च** = सेचनद्वारा निभाउनुहोस्
**नो चेत्** = होइन भने
**सखे** = हे प्रिय सखा
**विरहजाग्न्युपयुक्तदेहाः** = विरहरूको आगोमा शरीर डढाएर
**वयं** = हामी
**ध्यानेन** = ध्यानद्वारा नै
**ते** = हजुरको
**पदयोः** = चरणको
**पदवीं** = शरणमा
**याम** = आइपुग्नेछौँ

**वाक्यार्थ–** हे प्रिय भगवान् ! हजुरको हँसिलो हेराइ र सुमधुर सङ्गीतको कारणले हाम्रो हृदयभित्र हजुरसँग मिलन हुने कामनारूपी अग्नि बलिरहेको छ, त्यसलाई आफ्नै अधरामृतरसले सेचन गरी निभाउनुहोस्। होइन भने हे प्रिय सखा ! हामी हजुरको विरहरूपी आगोमा आफ्नो शरीरलाई भस्म बनाई ध्यानद्वारा नै हजुरको चरणको शरणमा आइपुग्नेछौँ।

**यर्ह्यम्बुजाक्ष तव पादतलं रमाया**
**दत्तक्षणं क्वचिदरण्यजनप्रियस्य।**
**अस्प्राक्ष्म तत्प्रभृति नान्यसमक्षमङ्ग**
**स्थातुं त्वयाभिरमिता बत पारयामः॥ ३६ ॥**

**पदार्थ–**
**अम्बुजाक्ष** = हे कमलनयन
**अरण्यजनप्रियस्य** = वनवासी तपस्वीका प्रिय
**तव** = हजुरका
**रमायाः** = लक्ष्मीजीलाई पनि
**क्वचित्** = कहिलेकाँही मात्र
**दत्तक्षणं** = सेवा गर्ने अवसर प्राप्त हुने
**पादतलं** = चरणतललाई
**यर्हि** = जबदेखि
**अस्प्राक्ष्म** = स्पर्श गर्न पायौँ
**तत्प्रभृति** = त्यो वेलादेखि
**अङ्ग** = हे प्रिय भगवान्
**त्वया** = हजुरद्वारा
**अभिरमिताः** = स्वीकार गरी आनन्दित पारिएका हामी
**अन्यसमक्षम्** = अरू कसैको अघि
**स्थातुं** = बस्न
**बत** = निश्चय नै
**न पारयामः** = सक्दैनौँ

**वाक्यार्थ–** हे कमलनयन ! वनवासी तपस्वीहरूका प्रिय हजुरका स्वयं लक्ष्मीजीलाई पनि कहिलेकाँही मात्र सेवा गर्ने अवसरको रूपमा मिल्ने चरणतललाई हामीले जब स्पर्श गर्न पायौँ र हजुरद्वारा आनन्दित भयौँ तबदेखि हामीहरू अरू कसैको अघि बस्न पनि नसक्ने भयौँ।

**विवरण–** माथिका श्लोकहरूमा गोपिनीहरूले घर फर्किएर जान आफू असमर्थ भएको जनाएका छन्। जसको हृदय कृष्णप्रेममा मुग्ध भइसकेको छ, त्यही हृदय फेरि संसारका पदार्थहरूतिर तानिन सक्दैन। मन एउटै भएकाले त्यसले संसार र परमात्मा दुबैलाई एकै चोटि समात्न सक्दैन। गोपिनीहरू भन्छन्– जुन हाम्रो मन घरायसी व्यवहारमा सजिलैसँग लाग्दथ्यो, त्यो मनलाई त हजुरले हरण गरिहाल्नुभयो, अब फेरि त्यसलाई व्यवहारतिर फर्काउन भन्दै हुनुहुन्छ, यो कदापि सम्भव छैन। बुद्धि या विचारलाई व्यक्तिको चिन्तनद्वारा निर्देशित गर्न सकिन्छ, त्यसैले विचार गर्नु

व्यक्तिको अधीनमा हुन्छ, तर प्रेम या भावना कसैद्वारा निर्देशित हुँदैन र यसलाई बदल्न पनि सकिँदैन। प्रेम एउटै विषयमा हुन्छ, यसलाई विभाजित गर्न सकिँदैन। एकपटक भइसकेको प्रेमलाई स्वयं प्रेमीले चाहेर पनि हटाउन सक्दैन। त्यसैले स्वयं श्रीकृष्णले मलाई प्रेम नगर भन्दा पनि गोपिनीहरूको मनले श्रीकृष्णलाई आफूबाट अलग गर्न सकेको छैन। गोपिनीहरू भन्छन्– जहिलेदेखि हामीले श्रीकृष्णको चरणलाई छोयौँ, त्यही वेलादेखि हाम्रो मन अरू कसैमा लाग्दैन र कृष्णबाट हट्दा पनि हट्दैन। संसारका पदार्थ नाशवान् एवं दुःखदायी छन्, ती पदार्थहरूमा गरिएको प्रेमलाई त सजिलै हटाउन सकिन्न भने अनन्त आनन्दस्वरूप परमात्मामा मस्त भइसकेको चित्तलाई त्यसबाट कसरी हटाउन सकिन्छ र ? उपनिषद्मा बताइएको छ– **न च पुनरावर्तते** (छान्दोग्योपनिषद्, ८/१५/१) अर्थात् परमात्मालाई जानिसकेको मुक्त व्यक्ति फेरि संसारमा फर्किंदैन। स्वयं भगवान्ले **यद्गत्वा न निवर्तन्ते तद्धाम परमं मम** (श्रीमद्भगवद्गीता, १५/६) अर्थात् जहाँ गएपछि फर्किनुपर्दैन, त्यही मेरो परमपद हो भनी बताउनुभएको छ। यसैले श्रीकृष्णमा लागिसकेको मन अनि उहाँमा समर्पित भइसकेका शरीर–इन्द्रिय फेरि संसारमा नै फर्किनु असम्भव छ। यदि परमात्माबाट पनि फेरि संसारमैं फर्किनुपर्दछ भने मोक्षको मर्यादा नै समाप्त हुन्छ। गोपिनीहरू भन्छन् **त्वया अभिरमिताः** अर्थात् हजुरबाट रमाइएका हामीहरू अरू पदार्थहरूसँग रमाउन र उनीहरूको साथमा रहन सक्दैनौँ। के रमाउन या प्रसन्न हुन पनि कसैले यो वस्तुसँग रमाऊ भन्ने आदेश दिएर रमाइन्छ र ? कोहीसँग रमाउनु यो त मनको स्वतन्त्रता हो। स्वयं भगवान्ले पनि कुनै भक्तको मनलाई आफ्नो प्रेमबाट अलग बनाउन सक्नुहुन्न। प्रेमीको पाउ आफ्ना प्रियतमलाई छोडेर एक पाइला पनि यताउति सर्दैन। यहाँ श्रीकृष्णको चरणबाट हाम्रा पाउ एक पाइला पनि टाढा जान सक्दैनन् भन्ने वाक्यबाट के तात्पर्य पनि प्रकट भएको छ भने पाउका देवता भगवान् विष्णु हुनुहुन्छ, सजातीय वस्तुमा प्रेमसम्बन्ध हुनु स्वाभाविक नै छ, फेरि आफ्ना अधिष्ठान या अनुग्राहकलाई छाडी इन्द्रियहरू जतातते जान कहाँ समर्थ हुन्छन् र ? कुनै पनि व्यक्तिको पाउ संसारमा तबसम्म भड्किरहन्छ, जबसम्म उसले आफ्ना आधार परमात्मालाई भेट्टाउँदैन। जब स्वयं श्रीकृष्ण नजिक हुनुहुन्छ तब उहाँलाई छाडेर कसैको पनि पाउ संसारतिर लम्किन सक्दैन। भक्तिको उच्च स्थितिमा व्यक्तिका सम्पूर्ण इन्द्रियहरू परमात्मामा नै गई विलीन हुने भएकाले त्यो परमानन्द रसबाट ती इन्द्रियहरूलाई छुटाउनु प्रेमी भक्त र स्वयं भगवान्को पनि वशमा छैन। भक्तिको परिभाषा गर्दा पनि **हृषीकेण हृषीकेशसेवनं भक्तिरुत्तमा** इन्द्रियहरूद्वारा इन्द्रियहरूका स्वामी भगवान्को सेवन गर्नु नै उत्कृष्ट भक्ति हो भनी बताइएको छ। गोपिनीहरूले माथिका श्लोकहरूमा आफूले चाहेर पनि आफ्ना पाउ भगवान्बाट टाढा जान नसक्ने आफ्नो विवशतालाई बताएका छन्।

**श्रीर्यत्पदाम्बुजरजश्चकमे तुलस्या**

**लब्ध्वापि वक्षसि पदं किल भृत्यजुष्टम्।**

**यस्याः स्ववीक्षणकृतेऽन्यसुरप्रयास-**

**स्तद्वद् वयं च तव पादरजः प्रपन्नाः ॥ ३७ ॥**

**पदार्थ–**
**यस्याः** = जसको
**स्ववीक्षणकृते** = आफूप्रति हेराइ परोस् भनेर
**अन्यसुरप्रयासः** = अन्य देवताहरूको प्रयास रहन्छ
**श्रीः** = त्यस्ती लक्ष्मीले
**वक्षसि** = छातीमा नै
**पदं** = वास
**लब्ध्वा अपि** = पाएर पनि
**तुलस्याः** = तुलसीसँगै रही
**भृत्यजुष्टम्** = अनेक सेवकहरूद्वारा सेवित
**यत्पदाम्बुजरजः** = जुन हजुरको चरण कमलको धूलिलाई
**किल चकमे** = निश्चय नै चाहनुभयो
**तद्वत्** = त्यसै गरी
**वयं च** = हामी पनि
**तव** = हजुरकै
**पादरजः** = चरणरजमैं
**प्रपन्नाः** = समर्पित छौँ

**वाक्यार्थ–** जुन लक्ष्मीको हेराइ आफूतिर परोस् भनी अन्य देवताहरू प्रयास गर्दछन् अनि त्यस्ती लक्ष्मीले भगवान्‌को वक्षःस्थलमा एक्लै स्थान पाउँदा समेत तुलसीसँगै मिलेर भए पनि अनेक सेवकहरूद्वारा सेवित हजुरकै चरणलाई चाहनुभयो। त्यसै गरी हामी पनि हजुरकै चरणधूलिको शरणमा परेका छौँ।

**तन्नः प्रसीद वृजिनार्दन तेऽङ्घ्रिमूलं**

**प्राप्ता विसृज्य वसतीस्त्वदुपासनाशाः ।**

**त्वत्सुन्दरस्मितनिरीक्षणतीव्रकाम-**

**तप्तात्मनां पुरुषभूषण देहि दास्यम् ॥ ३८ ॥**

**पदार्थ–**
**वृजिनार्दन** = हे दुःखनाशक
**तत्** = त्यसैले
**नः** = हामीसँग
**प्रसीद** = प्रसन्न हुनुहोस्
**त्वदुपासनाशाः** = हजुरकै नजिक रहने आशा भएका हामी
**वसतीः** = घर-परिवारलाई
**विसृज्य** = छाडी
**ते** = हजुरको
**अङ्घ्रिमूलं** = चरणको शरणमा
**प्राप्ताः** = आइपुगेका छौँ
**पुरुषभूषण** = हे पुरुष शिरोमणि
**त्वत्सुन्दरस्मितनिरीक्षणतीव्रकाम-तप्तात्मनां** = हजुरको सुन्दर मुस्कान र हेराइको कारण उत्पन्न तीव्र कामनाद्वारा मन जलिरहेका हामीहरूलाई
**दास्यम्** = सेवा गर्ने अवसर
**देहि** = दिनुहोस्

**वाक्यार्थ–** त्यसैले, हे दुःखनाशक ! हामीसँग प्रसन्न हुनुहोस्। हामी हजुरकै नजिक रहने आशाले आफ्नो घर-परिवार सबैलाई छाडी हजुरकै चरणको शरणमा आइसकेका छौँ। हे पुरुष शिरोमणि ! हजुरको सुन्दर मुस्कान र हेराइले गर्दा उत्पन्न तीव्र कामनारूपी आगोले मन जलिरहेका हामीलाई हजुरको सेवा गर्ने अवसर दिनुहोस्।

**वीक्ष्यालकावृतमुखं तव कुण्डलश्री-**
**गण्डस्थलाधरसुधं हसितावलोकम्।**
**दत्ताभयं च भुजदण्डयुगं विलोक्य**
**वक्षः श्रियैकरमणं च भवाम दास्यः॥ ३९॥**

**पदार्थ–**
**तव** = हजुरको
**कुण्डलगण्डस्थलाधरसुधं** = कुण्डलद्वारा शोभित गण्डस्थल र सुधायुक्त अधर भएको
**हसितावलोकम्** = हँसिलो हेराइ भएको
**अलकावृतमुखं** = घुम्रिएको कपालद्वारा छोपिएको मुखलाई
**वीक्ष्य** = देखेर
**दत्ताभयं** = सबैलाई अभय दिने
**भुजदण्डयुगं च** = दुबै बलिष्ठ भुजालाई र
**श्रियैकरमणं** = लक्ष्मीको एक मात्र क्रीडास्थल भएको
**वक्षः च** = छातीलाई पनि
**विलोक्य** = देखेर
**दास्यः** = हजुरको दासी
**भवाम** = भएका छौँ

**वाक्यार्थ–** हजुरको घुम्रिएको कपालद्वारा छोपिएको हँसिलो हेराइले युक्त अनुहार, कुण्डलको चमकले सुशोभित गाला र अमृतले युक्त ओठ, सबैलाई अभय दिन सक्ने दुबै बलिष्ठ भुजाहरू र लक्ष्मीको क्रीडास्थल भएको विशाल छाती यी सबैलाई देखेर हामी हजुरका दासी भएका हौँ।

**विवरण–** यस श्लोकमा गोपिनीहरूले आफूहरू श्रीकृष्णप्रति मोहित हुनुका कारणहरू बताएका छन्। भगवान्‌को अप्रतिम सौन्दर्य, शरणागतवात्सल्य आदि गुण र अनन्त ऐश्वर्य नै उहाँमा मन लाग्नुका प्रमुख कारणहरू हुन्। यस श्लोकमा असीम सौन्दर्यले युक्त उहाँको अनुहारको, शरण पर्नेलाई रक्षा गर्न समर्थ उहाँका भुजाहरूको एवं लक्ष्मीको एक मात्र क्रीडास्थल भएको उहाँको वक्षस्थलको प्रशंसा गरिएको छ। भगवान्‌को मुखमण्डल घुम्रिएका कपालले सुन्दर देखिएको छ। कुण्डलको शोभाले उहाँका दुबै गाला चम्किरहेका छन् र उहाँको तल्लो ओठमा अमृत रस भरिएको छ। भगवान्‌को ओठमा रहेको अमृतलाई **अधरसुधा** भनिएको छ। यो **अधर** (न धरा) अर्थात् भूमण्डलभित्र पाइने सामान्य अमृत होइन, यो त धरा या पृथिवीको सीमाभन्दा बाहिरको दिव्य अमृत हो। देवताहरूको अमृत पनि भूमण्डलभित्रकै अमृत हो, तर भगवान्‌मा रहेको परमानन्दरूपी अमृत चिन्मय एवं अलौकिक हो। भगवान्‌को मुखको अर्को शोभा हो– हँसिलो हेराइ। यी सबै गुणहरूले भरिएकाले कुनै उपमा नै दिन नसकिने सुन्दरताले युक्त भगवान्‌को अनुहार कसैको पनि चित्तलाई वशवर्ती बनाउन समर्थ छ। गोपिनीहरूले **भुजदण्ड** अर्थात् बलिष्ठ पाखुराको पनि प्रशंसा गरेका छन्। संसारैलाई अभय दिन सक्ने त्यस्ता दुई हात पनि भगवान्‌का आकर्षण हुन्। भगवान्‌को विशाल वक्षःस्थल, जो शोभा र ऐश्वर्यकी देवी लक्ष्मीको एक मात्र मनपर्दो वासस्थान हो, त्यो पनि प्रमुख आकर्षण हो। यसरी मुख्यतया तीन थरी गुणहरूद्वारा आफूहरू श्रीकृष्णमा आसक्त भएको गोपिनीहरूको भनाइ छ। सुन्दरता, पराक्रम र ऐश्वर्य यी तीन थरीमा पनि मुख्य चाहिँ सुन्दरता नै लाग्छ भन्ने कुरा त्यसको बढी वर्णन गरिएबाट थाहा हुन्छ।

भगवान्‌का बलिष्ठ भुजाको दर्शनद्वारा वीर रसको आविर्भाव हुनुपर्ने हो, तर वीर रसको भावद्वारा पनि यहाँ शृङ्गार रस नै पुष्ट भएको छ भनी टीकाकारहरूले उल्लेख गरेका छन्। भगवान्‌का हातहरू संसारैलाई अभय दिन समर्थ छन् र अनेक पटक व्रजवासीहरूलाई अभय दिइसकेका पनि छन्। तिनै बलिष्ठ हातले अनेक दुष्टहरूको विनाश गरेका थिए। श्रीकृष्णका तिनै बलिष्ठ हात हुन्, जसले एक औँलामा नै सम्पूर्ण गोवर्धन पर्वतको बोझलाई सात दिनसम्म धारण गरेका थिए। यी सबै वीरताका घटनाहरू देखेर गोपिनीहरूको प्रेम श्रीकृष्णमा अझै बढेको थियो। पराक्रम यद्यपि वीर रसको उद्‌भावक एवं पोषक हो तर प्रेममार्गमा आफ्ना प्रेमीका पराक्रमहरू सबै शृङ्गारका नै पोषक एवं उद्‌भावक हुन्छन्। जुन व्यक्तिको मनमा प्रेम छैन, त्यो व्यक्तिले मात्र विचित्र पराक्रम देखेर वीर रसको आस्वादन गर्दछ। तर प्रेमी त त्यसद्वारा पनि प्रेमकै भावनाको आनन्द लिन्छ। पराक्रम देख्नाले आफ्नो प्रेमीमा भरोसा उत्पन्न हुन्छ। यो भरोसाले प्रेमलाई अटुट एवं झन् विश्वस्त बनाइदिन्छ। जतिसुकै बाधा-अड्चन एवं संसारैको विरोध आए तापनि मेरा प्रेमी त्यसको सामना गरी प्रेमको रक्षा गर्न सक्छन् भन्ने विश्वासको उदय नहुन्जेल प्रेमीको कोमल हृदयमा अनेक अनिष्टहरूको आशङ्का उब्जिरहन्छ। यसले अनेक शङ्कालु भावहरूद्वारा प्रेमको आनन्दलाई खण्डित एवं कमजोर तुल्याइदिन्छ। त्यसैले प्रेममा वीरता र पौरुषको ज्ञान हुनु आवश्यक छ। श्रीकृष्णका बलिष्ठ हातहरूबाट गोपिनीहरूलाई यही भरोसा एवं विश्वास प्राप्त भएको छ।

**का स्त्र्यङ्ग ते कलपदायतमूर्च्छितेन**
**सम्मोहितार्यचरितान्न चलेत् त्रिलोक्याम्।**
**त्रैलोक्यसौभगमिदं च निरीक्ष्य रूपं**
**यद् गोद्विजद्रुममृगाः पुलकान्यबिभ्रन्॥ ४०॥**

**पदार्थ–**
**अङ्ग** = हे परमप्रिय
**यत्** = जसबाट
**कलपदायतमूर्च्छितेन** = बाँसुरीको मधुर आलापले युक्त स्वरको आरोह अवरोहद्वारा
**गोद्विजद्रुममृगाः** = गाई, पक्षी, रुख र मृगहरू समेत
**पुलकानि** = रोमाञ्चलाई
**अबिभ्रन्** = धारण गर्दथे
**इदं** = यस्तो
**त्रैलोक्यसौभगं** = तीनै लोकलाई सौभाग्य दिने
**ते** = हजुरको
**रूपं च** = रूपलाई
**निरीक्ष्य** = देखेर अनि
**सम्मोहिता** = सम्मोहित भएकी
**त्रिलोक्याम्** = तीनै लोकभरिमा
**का** = कुन चाहिँ
**स्त्री** = स्त्री
**आर्यचरितात्** = मर्यादित चरित्रबाट
**न चलेत्** = विचलित नहोली

**वाक्यार्थ–** हे परमप्रिय ! हजुरको बाँसुरीको मधुर आलापले युक्त स्वरको आरोह अवरोहद्वारा वनमा गाई, पक्षी, रुख र मृगहरू समेत रोमाञ्चित हुन्थे भने बाँसुरीको त्यो धुन सुनेर अनि तीनै लोकलाई सौभाग्य दिने हजुरको यो रूपलाई देखेर सम्मोहित भएकी तीनै लोकभरिमा कुन चाहिँ

स्त्री होली जो मर्यादित चरित्रबाट विचलित नहोली ?

**व्यक्तं भवान् व्रजभयार्तिहरोऽभिजातो**
**देवो यथादिपुरुषः सुरलोकगोप्ता ।**
**तन्नो निधेहि करपङ्कजमार्तबन्धो**
**तप्तस्तनेषु च शिरःसु च किङ्करीणाम् ॥ ४१ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**आदिपुरुषः** = आदिपुरुष
**देवः** = नारायण
**सुरलोकगोप्ता** = देवलोकका रक्षक हुनुहुन्छ (त्यसै गरी)
**भवान्** = हजुर पनि
**व्रजभयार्तिहरः** = व्रजमण्डलको भय र दुःखलाई नष्ट गर्न
**अभिजातः** = जन्मिनुभएको हो भन्ने
**व्यक्तं** = स्पष्ट नै छ
**तत्** = त्यसैले
**आर्तबन्धो** = हे दुःखीका रक्षक
**किङ्करीणाम्** = दासी
**नः** = हामीहरूको
**तप्तस्तनेषु च** = जलिरहेका (स्तनहरूमा) वक्षःस्थलमा
**शिरःसु च** = शिरमा समेत
**करपङ्कजं** = करकमल
**निधेहि** = राखिदिनुहोस्

**वाक्यार्थ–** जसरी आदिपुरुष नारायणले देवलोकको रक्षा गर्नुहुन्छ त्यसै गरी हजुर पनि व्रजमण्डलको भय र दुःखलाई नष्ट गरी सबैको रक्षा गर्न नै उत्पन्न हुनुभएको हो भन्ने कुरो स्पष्ट नै छ। त्यसैले हे दुःखीहरूका रक्षक ! हामी दासीहरूको जलिरहेको छातीमा र शिरमा आफ्नो करकमल राखिदिनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति विक्लवितं तासां श्रुत्वा योगेश्वरेश्वरः ।**
**प्रहस्य सदयं गोपीरात्मारामोऽप्यरीरमत् ॥ ४२ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**तासां** = तिनीहरूको
**विक्लवितं** = व्याकुल वचनलाई
**श्रुत्वा** = सुनेपछि
**आत्मारामः अपि** = आत्माराम भए पनि
**योगेश्वरेश्वरः** = योगेश्वरहरूका पनि ईश्वर भगवान्ले
**सदयं** = दयापूर्वक
**प्रहस्य** = हाँसेर
**गोपीः** = गोपिनीहरूलाई
**अरीरमत्** = रमाइलो प्रदान गर्नुभयो

**वाक्यार्थ–** यसप्रकार गोपिनीहरूका व्याकुल वचनहरू सुनिसकेपछि आफैँमा रमाउने अनि योगेश्वरहरूका पनि ईश्वर भगवान्ले दयापूर्वक गोपिनीहरूलाई रमाइलो प्रदान गर्नुभयो।

**ताभिः समेताभिरुदारचेष्टितः प्रियेक्षणोत्फुल्लमुखीभिरच्युतः ।**
**उदारहासद्विजकुन्ददीधितिर्व्यरोचतैणाङ्क इवोडुभिर्वृतः ॥ ४३ ॥**

पदार्थ–
**प्रियेक्षणोत्फुल्लमुखीभिः** = प्रियतमको हेराइले गर्दा प्रफुल्लित अनुहार भएका
**समेताभिः** = वरिपरि आएका
**ताभिः** = ती गोपिनीहरूद्वारा (घेरिनुभएका)
**उदारचेष्टितः** = (गोपिनीको इच्छा अनुसार) उदार चेष्टा गर्ने
**उदारहासद्विजकुन्ददीधितिः** = मिठो हाँस्दा दाँतबाट कुन्द फूलको कोपिलाको जस्तो चमक फिँजाउनुहुने
**अच्युतः** = अच्युत भगवान्
**उडुभिः** = ताराहरूद्वारा
**वृतः** = घेरिएका
**एणाङ्कः इव** = चन्द्रमा झैँ
**व्यरोचत** = शोभित हुनुभयो

**वाक्यार्थ–** प्रियतमको हेराइले गर्दा प्रफुल्लित अनुहार भएका वरिपरि गोपिनीहरूद्वारा घेरिनुभएका, उनीहरूको इच्छा अनुसार उदार चेष्टा गर्नुहुने अनि मिठो हाँस्दा दाँतबाट कुन्द फूलको कोपिलाको जस्तो चमक फिँजाउनुहुने अच्युत भगवान् ताराहरूद्वारा घेरिएका चन्द्रमा झैँ सुशोभित हुनुभयो।

**उपगीयमान उद्गायन् वनिताशतयूथपः।**
**मालां बिभ्रद् वैजयन्तीं व्यचरन् मण्डयन् वनम्॥ ४४॥**

पदार्थ–
**वैजयन्तीं** = वैजयन्ती (पाँच रङ्गका फूलहरू र पाँच धातुले बनेको माला)
**मालां** = मालालाई
**बिभ्रत्** = धारण गर्दै
**उपगीयमानः** = गोपिनीहरूद्वारा कीर्ति गाइनुभएका
**वनिताशतयूथपः** = गोपिनीहरूका सयौँ समूहका मालिक श्रीकृष्ण
**उद्गायन्** = गाउँदै उनीहरूको पनि प्रशंसा गर्दै
**वनम्** = वनलाई
**मण्डयन्** = शोभित बनाउँदै
**व्यचरत्** = घुम्नुभयो

**वाक्यार्थ–** वैजयन्ती माला लगाउनुभएका, गोपिनीहरूद्वारा कीर्ति गाइनुभएका अनि आफूले पनि गाउँदै गोपिनीहरूको प्रशंसा गरिरहनुभएका भगवान् श्रीकृष्ण गोपिनीहरूका सयौँ समूहका मालिक भएर वनलाई सुशोभित बनाउँदै यताउति घुम्नुभयो।

**नद्याः पुलिनमाविश्य गोपीभिर्हिमवालुकम्।**
**रेमे तत्तरलानन्दकुमुदामोदवायुना॥ ४५॥**

पदार्थ–
**गोपीभिः** = गोपिनीहरूसँग
**नद्याः** = यमुना नदीको
**तत्तरलानन्दकुमुदामोदवायुना** = त्यसकै तरल तरङ्गस्पर्श अनि कमलपुष्पको सुगन्धले युक्त वायुद्वारा शोभित भएको
**हिमवालुकम्** = हिउँजस्तो चम्किलो बालुवा भएको
**पुलिनम्** = तीरमा
**आविश्य** = पसी
**रेमे** = क्रीडा गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण गोपिनीहरूसँगै यमुनाको तरल तरङ्गको स्पर्श र कमल पुष्पको सुगन्धले युक्त वायुद्वारा शोभित भएको अनि हिउँजस्तो चम्किलो बालुवाले युक्त नदीतिरमा पुगी क्रीडा गर्नुभयो।

**बाहुप्रसारपरिरम्भकरालकोरु-**
**नीवीस्तनालभननर्मनखाग्रपातैः ।**
**क्ष्वेल्यावलोकहसितैर्व्रजसुन्दरीणा-**
**मुत्तम्भयन् रतिपतिं रमयाञ्चकार ॥ ४६ ॥**

**पदार्थ–**
**बाहुप्रसारपरिरम्भकरालकोरुनीवीस्तनालभननर्मनखाग्रपातैः** = हात फैलाउने, अङ्कमाल गर्ने, गोपिनीहरूका हात, सिउँदो, तिघ्रा, नीवी (कटिवस्त्रको ग्रन्थि), स्तन आदि अङ्गमा स्पर्श गर्ने, ठट्टा गर्ने र अङ्गहरूमा नखक्षत गरिदिने आदि गर्दै
**क्ष्वेल्यावलोकहसितैः** = विनोदपूर्व हेराइ र हँसाइले समेत
**व्रजसुन्दरीणाम्** = व्रजसुन्दरीहरूको
**रतिपतिं** = कामभावलाई
**उत्तम्भयन्** = जगाउँदै
**रमयाञ्चकार** = रमण गराइदिनुभयो

**वाक्यार्थ–** श्रीकृष्णले हात फैलाउने, अङ्कमाल गर्ने, गोपिनीहरूको हात, सिउँदो, तिघ्रा, नीवी (कटिवस्त्रको ग्रन्थि), स्तन आदि अङ्गहरूलाई स्पर्श गर्ने, अङ्गहरूमा नखक्षत गरिदिने, ठट्टा गर्ने आदि गर्दै आफ्नो विनोदपूर्वक हेराइ र हँसाइद्वारा व्रजसुन्दरीहरूको कामभावलाई जगाउँदै रमण गराइदिनुभयो ।

**एवं भगवतः कृष्णाल्लब्धमाना महात्मनः ।**
**आत्मानं मेनिरे स्त्रीणां मानिन्योऽभ्यधिकं भुवि ॥ ४७ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**महात्मनः** = महात्मा
**भगवतः** = भगवान्
**कृष्णात्** = श्रीकृष्णबाट
**लब्धमानाः** = सम्मान पाएका
**मानिन्यः** = स्त्रीहरूले
**भुवि** = संसारैभरि
**स्त्रीणां** = स्त्रीहरूमध्ये
**आत्मानं** = आफूलाई
**अभ्यधिकं** = धेरै भाग्यशाली
**मेनिरे** = ठाने

**वाक्यार्थ–** यसप्रकार महात्मा भगवान् श्रीकृष्णबाट सम्मान पाएका ती गोपिनीहरूले आफूलाई संसारभरकै स्त्रीहरूमध्ये सबैभन्दा बढी भाग्यशाली ठाने।

**तासां तत्सौभगमदं वीक्ष्य मानं च केशवः ।**
**प्रशमाय प्रसादाय तत्रैवान्तरधीयत ॥ ४८ ॥**

**पदार्थ–**
**केशवः** = भगवान् केशव
**तासां** = ती गोपिनीहरूको
**तत्** = त्यो
**सौभगमदं** = सौभाग्यको गर्व र
**मानं च** = मानलाई पनि
**वीक्ष्य** = देखेर
**प्रशमाय** = घमन्ड शान्त गर्न
**प्रसादाय** = (तिनलाई) प्रसन्न बनाउन
**तत्र एव** = त्यहीँ
**अन्तरधीयत** = अन्तर्धान हुनुभयो

**वाक्यार्थ–** गोपिनीहरूको त्यो सौभाग्यको घमन्ड अनि मान खोज्ने चाला देखेर तिनीहरूको घमन्ड शान्त गर्न र तिनलाई प्रसन्न बनाउनका लागि भगवान् केशव त्यहाँबाट अन्तर्धान हुनुभयो ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे भगवतो रासक्रीडावर्णनं नामैकोनत्रिंशोऽध्यायः ॥ २९ ॥**

# अथ त्रिंशोऽध्यायः

## भगवान् श्रीकृष्णसितको वियोगमा गोपिनीहरूको अवस्था

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अन्तर्हिते भगवति सहसैव व्रजाङ्गनाः ।**

**अतप्यंस्तमचक्षाणाः करिण्य इव यूथपम् ॥ १ ॥**

**पदार्थ–**
**भगवति** = भगवान्
**सहसा एव** = अकस्मात् नै
**अन्तर्हिते** = अन्तर्धान भएपछि
**तम्** = उहाँलाई
**अचक्षाणाः** = नदेखिरहेका
**व्रजाङ्गनाः** = गोपिनीहरू
**यूथपम्** = हात्ती विना
**करिण्यः इव** = हत्तिनीहरू झैँ
**अतप्यन्** = दुःखी भए

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण अकस्मात् अन्तर्धान हुनुभएपछि उहाँलाई नदेख्नाले सबै गोपिनीहरू हात्तीको विरहमा हत्तिनीहरू दुःखी भए झैँ असाध्यै दुःखी भए।

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्णलाई नदेख्नाले गोपिनीहरू आत्तिए भनी वर्णन गरिएको छ। **अन्तर्हिते** यो पदको तात्पर्य बताउँदै अनेक टीकाकारहरूले भगवान् हराउनुभएको होइन अपितु शृङ्गार रसलाई आन्तरिक रूपमा पुष्ट गर्न गोपिनीहरूभित्रै पस्नुभएको हो भनेका छन्। भगवान् सम्पूर्ण ऐश्वर्यले युक्त हुनुहुन्छ, उहाँ सबैका परम हितैषी अन्तर्यामी आत्मा नै हुनुहुन्छ। **हित** अर्थात् परम कल्याणमय भगवान् श्रीकृष्ण जब **अन्तः** अर्थात् हृदयभित्र पस्नुभयो तब गोपिनीहरू आफूले देखिरहेको बाहिरी रूप नदेख्नाले ज्यादै आत्तिए। गोपिनीहरूले विचारपूर्वक हृदयभित्र परमात्माको अनुसन्धान गर्ने ख्याल नै पाएनन्। यसरी एकाएक भगवान्लाई नदेख्नाले गोपिनीहरूले श्रीकृष्ण हराउनुभएको भन्ने ठानेका थिए। अघिल्लो अध्यायमा बताइए अनुसार श्रीकृष्णसँग रहँदा गोपिनीहरूले आफूहरूलाई संसारैमा सबैभन्दा सौभाग्यशाली ठाने। सौभाग्यको अभिमानका कारणले उनीहरूले भगवान्सँग पनि मान खोज्न थाले। प्रेममा सर्वस्वत्याग हुनुपर्दछ। आफ्नो प्रेमी सधैँ आफ्नो नजिक आई अनुनय, विनय गरी आफूलाई मनाओस् भन्ने भावना स्वार्थ एवं अभिमानले युक्त भएको हुन्छ। प्रेम अत्यन्त कोमल हुने भएकाले त्यसले स्वार्थ एवं अभिमानको थोरै पनि भारलाई पटक्कै सहन सक्दैन। प्रेममा अभिमान गरिँदैन, अपितु आफ्नो सम्पूर्ण जीवन नै एक-आपसमा अर्पण गरिन्छ। एकअर्कामा हुने यस्तो पूर्ण समर्पणमा नै प्रेमको वास्तविक स्वरूप प्रकट हुन्छ। गोपिनीहरूले श्रीकृष्ण आफ्नो प्रेमको वशमा परेको र आफ्ना सम्पूर्ण इच्छा पूरा गर्न तयार भएको देखे र उहाँलाई सधैँ यसै गरी पछि लगाइरहन खोजे। उनीहरूको यो अभिमानलाई शमन गर्न र उनीहरूलाई वास्तविक प्रेमको अनुभूतिद्वारा पूर्णतः प्रसन्न पार्न भगवान् अन्तर्हित हुनुभएको थियो। गोपिनीहरूको अभिमान नाश गर्न भगवान्ले लुक्नु पनि उपयुक्त नै थियो, तर परम दयालु भएकाले उहाँ झन् आन्तरिक लीला क्षेत्रमा प्रवेश गर्नुभयो। यसद्वारा गोपिनीहरूको

परीक्षा पनि सजिलैसँग हुन सक्थ्यो। जो–जो भगवान्तिर भन्दा आफू अनि आफ्नो सौभाग्यतिर दृष्टि लगाउने बहिर्दृष्टि भएका थिए, तिनले श्रीकृष्णको भित्री अवस्थितिलाई पाउन सकेनन्।

जसले अहङ्कारलाई पुष्ट गर्न खोज्छ, त्यसले परमात्मदर्शन पाउँदैन। वेदान्तशास्त्रमा अहङ्कारलाई चिदाभास भनिन्छ, यो कल्पित जीवभाव हो, यसलाई हटाएपछि मात्र चित्स्वरूप परमात्माको दर्शन हुन्छ। सर्पको भ्रमका कारण डोरी छोपिए झैँ अहङ्कारभ्रमको कारण आत्माको वास्तविक रूप ढाकिएको हुन्छ। **अहं** अर्थात् म हुँ भनेर सामान्य व्यवहारको अवस्थामा यही अहङ्कारलाई नै आत्मरूपमा ग्रहण गरिएको हुन्छ। यसलाई बाधित गरेर शुद्ध आत्माको रूपमा आफूलाई बुझ्नु नै परमात्मदर्शन गर्नु हो। अहङ्कारको वृत्तिद्वारा ढाकिएका कारण नै गोपिनीहरूले भगवान् श्रीकृष्णलाई देख्न सकेनन् र उनीहरू विरहवेदनामा डुबे।

भगवान्ले गोपिनीहरूलाई अनुभव गराउनुभएको यो विरह प्रेम र संयोग शृङ्गारको पोषक हो, विरोधी होइन भन्ने बुझिन्छ। प्रेमको उचाइ विरहमा नै स्पष्टतः प्रकाशित हुन्छ। प्रेमीसँग संयोग भएको वेलामा उनको त्यति महत्त्वबोध हुँदैन, जति वियोगको वेला हुन्छ। संयोगको अवस्थामा त व्यक्ति प्रेमीसँगै आफूलाई पनि अनुभव गर्दछ र प्रेमको रसास्वाद पनि गर्दछ। यसप्रकार ऊ आत्मकेन्द्रित या आत्मगत भएको हुन्छ। प्रेमको रसास्वादन गर्ने आत्मकेन्द्रित भावलाई एकप्रकारको स्वार्थ नै मान्न सकिन्छ। तर विरहको अवस्थामा त व्यक्ति आफूलाई पूर्णरूपमा बिर्सेर प्रेमीको नै सम्झनामा डुबेको हुन्छ। यसको उच्च अवस्थामा व्यक्ति आफ्नो सम्पूर्ण अस्तित्वलाई प्रेमीकै अस्तित्वमा मिलेको देख्न थाल्छ। ऊ स्वयं आफूरूपमा नरही प्रेमीरूप नै बनिसकेको हुन्छ। त्यसैले विरहको भावनामा नै शृङ्गार रसको उत्कर्ष हुन्छ भनिन्छ। यस अध्यायमा पनि कृष्णविरहको अवस्थामा गोपिनीहरूले आफूलाई कृष्णरूपमा नै अनुभव गरेको देखाई यसकै पुष्टि गरिएको छ।

श्रीकृष्णको विरहमा प्रेममा मस्त भएर ती गोपिनीहरूले अभिमान एवं लौकिक चेतना सबैलाई पूर्णतः बिर्सिए। उनीहरूले वृक्ष, वनस्पतिहरूलाई अनि पृथिवीलाई पनि श्रीकृष्णको विषयमा सोधे। श्रीटिप्पणीकार लेख्नुहुन्छ– वियोगद्वारा संयोगको भाव पुष्ट हुन्छ। प्रेमीसँग संयोग भएको अवस्थामा हरेक नयाँ अनुभव पुराना अनुभवहरूलाई हटाउँदै उत्पन्न हुन्छन्, किनभने मनको नियम नै हरेक नयाँ वृत्ति पुरानो वृत्तिलाई हटाएर नै उत्पन्न हुन्छ। यसरी निरन्तरको संयोगमा प्रेमका अनेक पुराना अनुभवहरूलाई बिर्सनुपर्ने या उपेक्षा गर्नुपर्ने हुन्छ। विरहको वेलामा चाहिँ नयाँ प्रेमानुभव नहुने हुनाले पुराना अनुभवलाई नै बारम्बार सम्झिइन्छ। यसबाट पुराना अनुभवका भावहरू फेरि नयाँ रूपमा मूर्तिमान् भए झैँ स्पष्ट हुन्छन्। यसप्रकार वियोगद्वारा पुराना संयोगका अनुभवहरू पुष्ट हुन्छन्। यति मात्र होइन, वियोगद्वारा त आगामी संयोगका भावहरू पनि पुष्ट हुन्छन्। दुःखको बीचमा नै सुखको महत्त्व बढ्छ। एकपटक हराएको प्रेमीलाई पाउँदा त्यो पहिलेको संयोगभन्दा कैयौँ गुणा अधिक मनोरम हुन्छ। यसरी गोपिनीहरूको प्रेमलाई पुष्ट गर्न भगवान् अन्तर्हित हुनुभएको र गोपिनीहरूले प्रियविरहको अवस्थामा आफूलाई श्रीकृष्णकै रूपमा अनुभव गरी अनेक लीला गरेको वर्णन यो अध्यायमा छ।

**गत्यानुरागस्मितविभ्रमेक्षितैर्मनोरमालापविहारविभ्रमैः।**
**आक्षिप्तचित्ताः प्रमदा रमापतेस्तास्ता विचेष्टा जगृहुस्तदात्मिकाः॥ २॥**

**पदार्थ–**
**गत्या** = हिँडाइले
**अनुरागस्मितविभ्रमेक्षितैः** = प्रेमपूर्ण मुस्कान र चञ्चल हेराइले
**मनोरमालापविहारविभ्रमैः** = मनोहर बोलीचाली, क्रीडा र भावभङ्गिमाले पनि
**आक्षिप्तचित्ताः** = चित्त चोरिएका
**तदात्मिकाः** = श्रीकृष्णमय भएका
**प्रमदाः** = गोपिनीहरूले
**रमापतेः** = लक्ष्मीपति श्रीकृष्णका
**ताः ताः** = ती-ती
**विचेष्टाः** = अनेक लीलाहरूलाई
**जगृहुः** = अनुकरण गर्न थाले

**वाक्यार्थ–** श्रीकृष्णको हिँडाइ, प्रेमपूर्ण मुस्कान, चञ्चल हेराइ, मनोहर बोलीचाली, अनेक क्रीडा र भावभङ्गिमाले चित्त चोरिएका अनि असाध्यै प्रेमका कारण श्रीकृष्णमय भएका ती गोपिनीहरूले लक्ष्मीपति श्रीकृष्णका अनेक लीलाहरूको अनुकरण गर्न थाले।

**गतिस्मितप्रेक्षणभाषणादिषु प्रियाः प्रियस्य प्रतिरूढमूर्तयः।**
**असावहं त्वित्यबलास्तदात्मिका न्यवेदिषुः कृष्णविहारविभ्रमाः॥ ३॥**

**पदार्थ–**
**गतिस्मितप्रेक्षणभाषणादिषु** = हिँडाइ, हँसाइ, हेराइ र बोलाइ आदिमा
**प्रतिरूढमूर्तयः** = उस्तै भावभङ्गी चढेका
**कृष्णविहारविभ्रमाः** = श्रीकृष्णको झैँ लीला गरिरहेका
**तदात्मिकाः** = श्रीकृष्णमय
**प्रियस्य** = प्रियतम श्रीकृष्णका
**प्रियाः** = प्रिया गोपिनीहरूले
**अहं तु** = म त
**असौ** = उही श्रीकृष्ण नै हुँ
**इति** = यसो
**न्यवेदिषुः** = परस्पर भन्न थाले

**वाक्यार्थ–** हिँडाइ, हँसाइ, हेराइ र बोली आदिमा प्रियतम श्रीकृष्णको जस्तै भावभङ्गी चढेका, श्रीकृष्णको जस्तै लीला गरिरहेका, श्रीकृष्णमय भएका उहाँका प्रिया गोपिनीहरू आफू-आफूमा म त श्रीकृष्ण नै हुँ भन्न थाले।

**गायन्त्य उच्चैरमुमेव संहता विचिक्युरुन्मत्तकवद् वनाद् वनम्।**
**पप्रच्छुराकाशवदन्तरं बहिर्भूतेषु सन्तं पुरुषं वनस्पतीन्॥ ४॥**

**पदार्थ–**
**संहताः** = आपसमा मिलेर
**उच्चैः** = उच्च स्वरले
**अमुं एव** = उहाँ (श्रीकृष्ण)लाई नै
**गायन्त्यः** = (गीत गाएर) पुकार्दै
**उन्मत्तकवत्** = नशा लागेको व्यक्ति झैँ
**वनात् वनं** = एक वनबाट अर्को वन गरी
**विचिक्युः** = (श्रीकृष्णलाई) खोज्न थाले
**भूतेषु** = सबै प्राणीहरूभित्र
**आकाशवत्** = आकाश झैँ
**अन्तरं** = भित्र र
**बहिः** = बाहिर पनि
**सन्तं** = रहनुहुने
**पुरुषं** = परमात्मालाई
**वनस्पतीन्** = रुखबिरुवासँग
**पप्रच्छुः** = सोधे

**वाक्यार्थ–** उनीहरू सबै मिलेर उच्च स्वरले उहाँकै गीत गाएर श्रीकृष्णलाई पुकार्दै नशा लागेको व्यक्ति झैँ वन-वनमा घुम्दै उहाँलाई खोज्न थाले। सबै प्राणीहरूभित्र र बाहिर पनि आकाश झैँ व्यापक परमात्मालाई खोज्दै (श्रीकृष्ण कता जानुभयो भनी) उनीहरू रुखविरुवासँग सोध्न थाले।

**दृष्टो वः कच्चिदश्वत्थ प्लक्ष न्यग्रोध नो मनः।**
**नन्दसूनुर्गतो हृत्वा प्रेमहासावलोकनैः॥ ५॥**

**पदार्थ–**
**अश्वत्थ** = हे पिपल
**न्यग्रोध** = हे वर
**प्लक्ष** = हे पाखरी
**प्रेमहासावलोकनैः** = प्रेमपूर्ण हाँसो र हेराइले
**नः** = हाम्रो
**मनः** = मनलाई
**हृत्वा** = चोरेर
**गतः** = गएका
**नन्दसूनुः** = नन्दपुत्र श्रीकृष्ण
**कच्चित्** = के
**वः** = तिमीहरूद्वारा
**दृष्टः** = देखिनुभयो

**वाक्यार्थ–** हे पिपल ! हे वर ! हे पाखरी ! आफ्नो प्रेमपूर्ण हाँसो र हेराइले हाम्रो मनलाई चोरेर नन्दपुत्र श्रीकृष्ण जानुभयो, के तिमीहरूले उहाँलाई देख्यौ ?

**कच्चित् कुरबकाशोकनागपुन्नागचम्पकाः।**
**रामानुजो मानिनीनामितो दर्पहरस्मितः॥ ६॥**

**पदार्थ–**
**कुरबकाशोकनागपुन्नाग-चम्पकाः** = हे कुरबक (रातो कटसरैया), अशोक, नाग (नागकेशर), पुन्नाग (जाइफल) र चम्पक (चम्पा)हरू
**मानिनीनाम्** = घमन्डी (हामी गोपिनी)हरूको
**दर्पहरस्मितः** = घमन्ड तोड्ने मुस्कान भएका
**रामानुजः** = बलरामका भाइ
**इतः** = यहाँबाट (गएका)
**कच्चित्** = के (देखिनुभयो)

**वाक्यार्थ–** हे कुबरक, अशोक, नाग, पुन्नाग र चम्पकहरू ! घमन्डीहरूको घमन्ड तोड्ने मुस्कान भएका श्रीकृष्ण के यतैबाट गइरहेको देख्यौ ?

**कच्चित् तुलसि कल्याणि गोविन्दचरणप्रिये।**
**सह त्वालिकुलैर्बिभ्रद् दृष्टस्तेऽतिप्रियोऽच्युतः॥ ७॥**

**पदार्थ–**
**गोविन्दचरणप्रिये** = गोविन्दको चरणलाई मन पराउने
**कल्याणि** = कल्याणरूपिणी
**तुलसि** = हे तुलसी
**अलिकुलैः सह** = भँवराहरूसँगै
**त्वा** = तिमीलाई
**बिभ्रत्** = धारण गर्ने
**ते** = तिम्रा
**अतिप्रियः** = असाध्यै प्यारा
**अच्युतः** = अच्युत
**कच्चित्** = के
**दृष्टः** = देखिनुभयो

**वाक्यार्थ–** गोविन्दको चरणलाई मन पराउने कल्याणरूपिणी हे तुलसी ! अच्युतले तिमीलाई झुम्मिरहेका भँवराहरूले सहित नै धारण गर्नुहुन्छ, असाध्यै प्रिय उहाँलाई के तिमीले देख्यौ ?

**मालत्यदर्शि वः कच्चिन्मल्लिके जाति यूथिके ।**
**प्रीतिं वो जनयन् यातः करस्पर्शेन माधवः ॥ ८ ॥**

**पदार्थ–**
**मालति** = हे चमेली
**मल्लिके** = हे वेली
**जाति** = हे जाई
**यूथिके** = हे जुही
**वः** = तिमीहरूद्वारा
**कच्चित्** = के
**माधवः** = श्रीकृष्ण
**अदर्शि** = देखिनुभयो
**करस्पर्शेन** = हातले छोएर
**वः** = तिमीहरूको
**प्रीतिं** = प्रेम
**जनयन्** = उत्पन्न गर्दै
**यातः** = यतैबाट जानुभएको थियो

**वाक्यार्थ–** हे मालती ! हे वेली ! हे जाई ! हे जुही ! तिमीहरूले के श्रीकृष्णलाई देख्यौ ? आफ्ना हातले छोएर तिमीहरूमा प्रेम उत्पन्न गर्दै के श्रीकृष्ण यतैबाट जानुभएको थियो ?

**विवरण–** माथिका चार श्लोकहरूमा गोपिनीहरूले वृक्ष-वनस्पतिहरूलाई पनि श्रीकृष्णको विषयमा सोध्दै हिँडेको बताइएको छ। गोपिनीहरूले सबभन्दा पहिले वर, पिपल आदि ठुला रुखहरूलाई सोधेका छन्। पिपल, पाखरी र वरलाई क्रमशः विष्णु, ब्रह्मा र शिवको प्रतिरूप मानिन्छ। यी तीनै रुख अग्ला हुन्छन्। पूज्य भएकाले विश्वासयोग्य छन्, अनि अग्ला भएकाले टाढा-टाढासम्मका श्रीकृष्णलाई देख्न पनि सक्छन् भन्ने ठानी गोपिनीहरूले यिनलाई सोधेका हुन्। प्रेममा मुग्ध भएका गोपिनीहरूको भावनाले रुखहरूसँग पनि कुरा गरेको देखिन्छ।

ती ठुला रुखहरूले केही उत्तर नदिएकाले गोपिनीहरू अशोक, नागकेशर र पुन्नाग आदि सुगन्धित पुष्प भएका रुखहरूलाई श्रीकृष्णको विषयमा सोध्न पुग्छन्। अशोक आदि फूलहरू कामदेवका बाण हुन्। कामी श्रीकृष्णलाई यिनले पक्कै आकर्षित गरे होलान् अनि यिनले उनलाई देखे होलान् भन्ने कल्पना गरिएको छ। हामी मान खोज्ने गोपिनीहरूको अभिमानलाई नाश गर्न त उनले मुसुक्क हाँसिदिए पनि पुगिहाल्थ्यो। हामीलाई छाडेर नै जानुपर्ने आवश्यकता थिएन भन्ने भाव **दर्पहरस्मित** भन्ने पदबाट अभिव्यक्त भएको छ। यिनले पनि उत्तर नदिएपछि गोपिनीहरूले तुलसीलाई सोधेका छन्। तुलसी सधैँ भगवान्को चरणमा रहन्छिन्। उनमा सखीभावको कल्पना गर्दै गोपिनीहरूले उनलाई **कल्याणि !** भनी सम्बोधन गरेका छन्। श्रीकृष्णले वनमालामा तुलसीलाई धारण गर्नुहुन्छ। आफूले धारण गर्ने तुलसीको बोट नजिक उहाँ अवश्य नै आउनुभयो होला, त्यसैले तुलसी ! अरू कसैले नबताए पनि तिमीले श्रीकृष्णको विषयमा हामीलाई बताऊ भनी गोपिनीहरूले प्रार्थना गरेका छन्। तुलसीले पनि नबताएपछि गोपिनीहरूले मालती, मल्लिका आदि सामान्य फूलहरूलाई सोधेका छन्। तुलसीले भगवान्को चरणमा आफू मात्र रहनका लागि अरूलाई उहाँको स्थान नबताउन पनि सक्छिन्। आफू श्रेष्ठ भक्त भएको जनाउन यी नबोल्न पनि सक्छिन्, त्यसैले साधारण फूलहरूले त पक्कै बताउलान्, किनभने प्रेमीको चुल्ठो, कपाल आदिमा सिउरिइदिई प्रेम अभिव्यक्त गर्न यिनको आवश्यकता पर्छ भन्ने गोपिनीहरूको आशय रहेको छ।

यस श्लोकमा आएको **माधव** भन्ने शब्दले लक्ष्मीपति भन्ने अर्थ बुझाउँछ। श्रीकृष्णको विषयमा कुनै फूलले पनि नबताउँदा ती सबै फूल लक्ष्मीको पक्षमा भएको र आफूहरूले श्रीकृष्णको सेवा गरेको उनीहरूलाई मन नपरेको भन्ने शङ्का यो पदबाट अभिव्यक्त भएको छ। यदि हामीले श्रीकृष्णको सेवा गरेको कुरा यिनलाई मन परेको भए यिनले हामीलाई श्रीकृष्णको विषयमा बताउनुपर्ने हो। केही नबताएकाले यी हाम्रा विरोधी रहेछन् भन्ने दोषारोपण पनि गोपिनीहरूले गरेका छन्। यसपछिको अर्को श्लोकमा **यमुनोपकूलाः** अर्थात् यमुनाका तीरमा रहेका रुखहरूलाई सोधिएबाट यमुनानदीका किनारमा हुने वृक्षलताहरू हाम्रा प्रेमका साक्षी भएका हुनाले तिनीहरूसँग मात्र विश्वास गर्न सकिने गोपिनीहरूको धारणा देखिन्छ।

**चूतप्रियालपनसासनकोविदार-**
**जम्ब्वर्कबिल्वबकुलाम्रकदम्बनीपाः।**
**येऽन्ये परार्थभवका यमुनोपकूलाः**
**शंसन्तु कृष्णपदवीं रहितात्मनां नः॥ ९॥**

**पदार्थ–**
**चूतप्रियालपनसासनकोविदार-जम्ब्वर्कबिल्वबकुलाम्रकदम्ब-नीपाः** = विशेष प्रजातिको आँप, चिरौँजी, कटहर, विजयसाल, कोइराला, जामुन, आँक, बेल, मौलसिरी, आँप, कदम र विशेष प्रजातिको कदमहरूले
**ये** = जो
**यमुनोपकूलाः** = यमुनाको तीर नजिकै भएका
**परार्थभवकाः** = परोपकारकै लागि उत्पन्न हुने
**अन्ये** = अन्य रुखहरू (छन् तिनीहरूले)
**रहितात्मनां** = चित्त शून्य भएका
**नः** = हामीहरूलाई
**कृष्णपदवीं** = श्रीकृष्णको ठाउँ
**शंसन्तु** = बताऊन्

**वाक्यार्थ–** अनेक प्रजातिका आँप, चिरौँजी, कटहर, विजयसाल, कोइराला, जामुन, आँक, बेल, मौलसिरी, आँप, कदम र विशेष प्रजातिका कदमहरूले अनि यमुनाको तीर नजिकै भएका परोपकारकै लागि उत्पन्न भएका अरू रुखविरुवाहरूले पनि चित्त शून्य भएका हामीहरूलाई श्रीकृष्ण गएको ठाउँ बताऊन्।

**किं ते कृतं क्षिति तपो बत केशवाङ्घ्रि-**
**स्पर्शोत्सवोत्पुलकिताङ्गरुहैर्विभासि।**
**अप्यङ्घ्रिसम्भव उरुक्रमविक्रमाद् वा**
**आहो वराहवपुषः परिरम्भणेन॥ १०॥**

**पदार्थ–**
**क्षिति** = हे पृथिवी
**ते** = तिमीद्वारा

**बत** = निश्चय नै
**किं** = के
**तपः** = तपस्या
**कृतं** = गरियो
**केशवाङ्घ्रिस्पर्शोत्सवोत्पुलकिताङ्गरुहैः** = श्रीकृष्णचरणको स्पर्श भएको खुसीले रौँ ठाडिए झैँ भएका रुखहरूद्वारा
**विभासि** = सुहाएकी छ्यौ
**अपि** = के यो खुसी
**अङ्घ्रिसम्भवः** = भर्खर श्रीकृष्णचरणको स्पर्शको कारणबाट हो कि
**उरुक्रमविक्रमात् वा** = वामन भगवान्‌को चरणद्वारा नापिनाले हो कि
**आहो** = अथवा
**वराहवपुषः** = वराह अवतारसँग
**परिरम्भणेन** = अङ्कमाल गर्नाले भएको हो

**वाक्यार्थ–** हे पृथिवी ! तिमीले कुन चाहिँ त्यस्तो तपस्या गऱ्यौ, जसको कारणले तिमी श्रीकृष्णचरणको स्पर्श भएको खुसीले युक्त छ्यौ र रुखहरू ठड्याई आफ्नो रोमाञ्चलाई प्रकट गरिरहेकी छ्यौ ? यो तिम्रो खुसी भर्खरै श्रीकृष्णको चरणस्पर्श पाउनाले भएको हो, वामन भगवान्‌को चरणद्वारा नापिनाले भएको हो कि वा वराह अवतार भगवान्‌सँग अङ्कमाल गर्नाले भएको हो ?

**अप्येणपत्न्युपगतः प्रिययेह गात्रै-**
**स्तन्वन्दृशां सखि सुनिर्वृतिमच्युतो वः ।**
**कान्ताङ्गसङ्गकुचकुङ्कुमरञ्जितायाः**
**कुन्दस्रजः कुलपतेरिह वाति गन्धः ॥११ ॥**

**पदार्थ–**
**सखि** = हे सखि
**एणपत्नि** = हरिणी
**प्रियया** = (अन्य कुनै) प्रियासँग युक्त भई
**गात्रैः** = अङ्गावयवहरूद्वारा
**इह** = यहाँ
**वः दृशां** = तिम्रा आँखाहरूको
**सुनिर्वृतिम्** = आनन्दलाई
**तन्वन्** = सञ्चार गर्दै
**अच्युतः** = श्रीकृष्ण
**अपि उपगतः** = के नजिकै आउनुभएको थियो
**कुलपतेः** = कुलका पति श्रीकृष्णको
**कान्ताङ्गसङ्गकुचकुङ्कुमरञ्जितायाः** = प्रेयसीको अङ्गसँग छोइनाले उनको स्तनको कुङ्कुम लागेको
**कुन्दस्रजः** = कन्दफूलको मालाको
**गन्धः** = सुगन्ध
**इह** = यहाँ
**वाति** = बहँदैछ

**वाक्यार्थ–** हे सखि हरिणी ! आफ्नी कुनै प्रियासँगसँगै घुमिरहनुभएका श्रीकृष्ण सुन्दर अवयवहरूले तिम्रा आँखाहरूमा परम आनन्दको सञ्चार गर्दै के यता आउनुभएको थियो ? हेर त (साथी हो !), सम्पूर्ण गोपगोपिनीकुलका पति श्रीकृष्णले लगाएको कुन्द फूलको माला जुन मालामा उहाँको प्रेयसीको अङ्गमा छोइनाले स्तनको कुङ्कुम लागेको छ, त्यो मालाको मिठो सुगन्ध यहाँ फैलिरहेको छ।

**बाहुं प्रियांस उपधाय गृहीतपद्मो**
**रामानुजस्तुलसिकालिकुलैर्मदान्धैः।**
**अन्वीयमान इह वस्तरवः प्रणामं**
**किं वाभिनन्दति चरन् प्रणयावलोकैः॥ १२॥**

**पदार्थ–**
**तरवः** = हे वृक्षहरू
**प्रियांसे** = प्रियाको काँधमा
**बाहुं** = एक हात
**उपधाय** = राखेर
**गृहीतपद्मः** = अर्को हातमा कमल लिएर
**मदान्धैः** = मदले अन्ध भएका
**तुलसिकालिकुलैः** = तुलसीमाला वरिपरि झुम्मिएका भँवराहरूद्वारा
**अन्वीयमानः** = पछि लागिँदै
**इह** = यतै
**चरन्** = घुमिरहेका
**रामानुजः** = बलरामका भाइले
**किं** = के
**प्रणयावलोकैः** = प्रेमपूर्ण हेराइले
**वः** = तिमीहरूको
**प्रणामं** = प्रणाम (झुकाइ)लाई
**अभिनन्दति वा** = अभिनन्दन गर्नुभयो

**वाक्यार्थ–** हे वृक्षहरू ! एक हात प्रियाको काँधमा राखी अर्को हातमा कमल लिएर आफ्नो तुलसीमालामा झुम्मिने मदमत्त भँवराहरूद्वारा पिछा गरिनुभएका श्रीकृष्ण यतैबाट जानुभएको थियो ? तिमीहरूले झुकेर प्रणाम गर्दा के उहाँले प्रेमपूर्ण हेराइले त्यसको अभिनन्दन गर्नुभएको थियो ?

**पृच्छतेमा लता बाहूनप्याश्लिष्टा वनस्पतेः।**
**नूनं तत्करजस्पृष्टा बिभ्रत्युत्पुलकान्यहो॥ १३॥**

**पदार्थ–**
**इमाः** = यी
**लताः** = लहराहरू
**वनस्पतेः** = आफ्ना पति रुखरूको
**बाहून्** = हातहरूमा (हाँगाहरूमा)
**आश्लिष्टाः अपि** = अँगालिएका भएर पनि
**तत्करजस्पृष्टाः** = उहाँ (श्रीकृष्ण)को नङसँग छोइनाले नै
**उत्पुलकानि** = रोमाञ्चलाई
**बिभ्रति** = धारण गरिरहेछन्
**अहो** = आश्चर्य छ
**नूनं** = निश्चय नै (श्रीकृष्णको विषयमा)
**पृच्छत** = (यिनैलाई) सोध

**वाक्यार्थ–** हे साथी गोपिनीहरू ! आश्चर्य, यी लहराहरू आफ्ना पति रुखहरूको हातमा अँगालिएका भए तापनि यिनीहरूको शरीरमा रोमाञ्च भने श्रीकृष्णको नङद्वारा छोइनाले नै भएको छ। अतः श्रीकृष्णको विषयमा यिनैलाई सोध।

**विवरण–** यस प्रसङ्गमा नौ ओटा श्लोकहरूद्वारा श्रीकृष्णको विषयमा नौ प्रकारले प्रश्न गरिएको छ र यी श्लोकहरूमा नौ प्रकारका गोपिनीहरूको भावभङ्गी अभिव्यक्त भएको छ। वल्लभाचार्यका अनुसार सत्त्व, रजस् र तमोगुणको तारतम्यद्वारा ती सयौं गोपिनीहरूलाई नौ भागमा बाँडिएको छ। ती हुन्– सात्त्विकसात्त्विकी, सात्त्विकराजसी, सात्त्विकतामसी, राजससात्त्विकी, राजसराजसी,

राजसतामसी, तामससात्त्विकी, तामसराजसी र तामसतामसी। श्रुतिरूपा ज्ञानप्रधान गोपिनीहरू सत्त्वगुणप्रधान गोपिनीहरू हुन्। यसै गरी अनेक जन्मको साधनाको बलले गोपिनीभाव पाएका साधकहरू राजसी गोपिनी हुन् भने नित्यसिद्धा गोपिनीहरू चाहिँ तामसी गोपिनीहरू हुन्। यिनलाई पनि भावको तारतम्यका कारणले नौ भेदमा छुट्याइएको हो। जसले चाहिँ त्रिगुणमय यी सबै अवस्थालाई पार गरिसकेका छन्, ती चाहिँ गुणातीता गोपिनी हुन्। यसप्रकार जम्मा दश प्रकारका गोपिनीहरू हुन्छन्। यहाँ नौ श्लोकमा माथिल्ला नौ प्रकारका गोपिनीहरूको भनाइ प्रतिबिम्बित छ भने दसौँ गुणातीतालाई चाहिँ भगवान्ले आफ्नै साथमा लिएर जानुभएको छ।

**इत्युन्मत्तवचो गोप्यः कृष्णान्वेषणकातराः।**
**लीला भगवतस्तास्ता ह्यनुचक्रुस्तदात्मिकाः॥ १४॥**

**पदार्थ–**
**इति** = यसप्रकार
**उन्मत्तवचः** = नशामा मस्त भएको मान्छे जस्तै बोल्ने
**कृष्णान्वेषणकातराः** = श्रीकृष्णलाई खोज्दा-खोज्दै हैरान भइसकेका र
**तदात्मिकाः** = प्रगाढ प्रेमको कारणले श्रीकृष्णमय बनेका
**गोप्यः** = गोपिनीहरूले
**हि** = निश्चय नै
**भगवतः** = भगवान्को
**ताः ताः** = ती-ती
**लीलाः** = लीलाहरू
**अनुचक्रुः** = अनुकरण गरे

**वाक्यार्थ–** यसप्रकार नशामा मस्त भएको मान्छे जस्तै कुरा गर्दै श्रीकृष्णलाई खोज्दाखोज्दै हैरान भइसकेका र प्रगाढ प्रेमका कारण श्रीकृष्णमय बनेका ती गोपिनीहरूले श्रीकृष्णका अनेक लीलाहरूको अनुकरण गरे।

**कस्याश्चित् पूतनायन्त्याः कृष्णायन्त्यपिबत् स्तनम्।**
**तोकयित्वा रुदत्यन्या पदाहञ्छकटायतीम्॥ १५॥**

**पदार्थ–**
**कृष्णायन्ती** = श्रीकृष्ण जस्तै आचरण गर्ने गोपिनीले
**कस्याश्चित्** = कोही
**पूतनायन्त्याः** = पूतना जस्तै आचरण गर्ने गोपिनीको
**स्तनम्** = स्तन
**अपिबत्** = पिइन्
**अन्या** = अर्कीले चाहिँ
**रुदती** = रुँदै
**तोकयित्वा** = नवजात जस्तै भई
**शकटायतीम्** = गाडा जस्तै बनेकी गोपिनीलाई
**पदा** = लात्तीले
**अहन्** = हानिन्

**वाक्यार्थ–** एउटी श्रीकृष्ण जस्तै बनेकी गोपिनीले पूतना जस्तै बनेकी अर्की गोपिनीको स्तन पिउन थालिन् भने अर्कीले चाहिँ भर्खर जन्मेको श्रीकृष्ण जस्तै बनी गाडा बनेकी गोपिनीलाई लात्तीले हानिन्।

**दैत्यायित्वा जहारान्यामेका कृष्णार्भभावनाम्।**
**रिङ्गयामास काप्यङ्घ्री कर्षन्ती घोषनिःस्वनैः॥ १६॥**

**पदार्थ–**
**एका** = एउटीले
**दैत्यायित्वा** = तृणावर्त दैत्य झैँ बनी
**कृष्णार्भभावनाम्** = श्रीकृष्णको बालभावको नक्कल गर्ने
**अन्याम्** = अर्कीलाई
**जहार** = हरण गरिन्
**का अपि** = कुनै चाहिँ
**घोषनिःस्वनैः** = पाउजु बजिरहेका
**अङ्घ्री** = दुबै खुट्टालाई
**कर्षन्ती** = घिसार्दै
**रिङ्गयामास** = घुम्न लागिन्

**वाक्यार्थ–** एउटी गोपिनीले तृणावर्त दैत्य झैँ बनी श्रीकृष्णको बाल्यभावको नक्कल गरिरहेकी अर्कीलाई हरण गरिन् भने अर्की गोपिनी चाहिँ पाउजु बजिरहेका आफ्ना दुबै खुट्टालाई घिसार्दै घुम्न लागिन्।

**टिप्पणी–** यहाँ तेस्री पाउजु बजिरहेका आफ्ना दुबै खुट्टालाई घिसार्दै घुम्ने गोपिनीले भागवत १०/८/२२ मा बताइएको श्रीकृष्ण पाउजु बजाउँदै व्रजको हिलो बाटोमा बामे सरेको कार्यको अनुकरण गरेकी हुन्।

**कृष्णरामायिते द्वे तु गोपायन्त्यश्च काश्चन।**
**वत्सायतीं हन्ति चान्या तत्रैका तु बकायतीम्॥ १७॥**

**पदार्थ–**
**द्वे तु** = कुनै दुई गोपिनीहरू
**कृष्णरामायिते** = श्रीकृष्ण र बलराम झैँ बने
**काश्चन च** = कोही चाहिँ
**गोपायन्त्यः** = गोपबालकहरू बने
**तत्र च** = तीमध्ये नै
**एका** = एउटीले
**वत्सायतीं** = वत्सासुर बनेकीलाई र
**अन्या तु** = अर्कीले चाहिँ
**बकायतीम्** = बकासुर बनेकीलाई
**हन्ति** = मारे झैँ गरिन्

**वाक्यार्थ–** कुनै दुई गोपिनीहरू श्रीकृष्ण र बलराम बने भने अरू कोही गोपबालक बने। तीमध्ये एउटीले वत्सासुर बनेकी गोपिनीलाई र अर्कीले बकासुर बनेकी गोपिनीलाई मारे झैँ गरे।

**आहूय दूरगा यद्वत् कृष्णस्तमनुकुर्वतीम्।**
**वेणुं क्वणन्तीं क्रीडन्तीमन्याः शंसन्ति साध्विति॥ १८॥**

**पदार्थ–**
**यद्वत्** = जसरी
**कृष्णः** = श्रीकृष्ण गर्नुहुन्थ्यो (त्यसै गरी)
**दूरगाः** = टाढा पुगेका गाईहरूलाई
**आहूय** = बोलाएर
**वेणुं** = बाँसुरी
**क्वणन्तीं** = बजाए झैँ
**क्रीडन्तीम्** = खेल खेले झैँ
**तम्** = उहाँ (श्रीकृष्ण)कै
**अनुकुर्वतीम्** = अनुकरण गर्ने गोपिनीलाई
**अन्याः** = अरूले
**साधु इति** = राम्रो भनी
**शंसन्ति** = प्रशंसा गर्न थाले

**वाक्यार्थ–** श्रीकृष्णले जसरी नै टाढा गएका गाईहरूलाई बोलाए झैँ बाँसुरी बजाई खेल खेले झैँ गरिरहेकी कुनै गोपिनीलाई अरू गोपिनीहरूले राम्रो-राम्रो भनी प्रशंसा गर्न थाले।

**कस्याञ्चित् स्वभुजं न्यस्य चलन्त्याहापरा ननु।**

**कृष्णोऽहं पश्यत गतिं ललितामिति तन्मनाः॥ १९॥**

**पदार्थ–**
**कस्याञ्चित्** = कुनै गोपिनीमाथि
**स्वभुजं** = आफ्नो हात
**न्यस्य** = अड्याई
**चलन्ती** = हिँडिरहेकी
**तन्मनाः** = उनैमा मन लागेकी
**अपरा** = अर्की गोपिनीले
**ननु** = निश्चय नै
**अहं** = म
**कृष्णः** = श्रीकृष्ण हुँ
**ललिताम्** = मेरो मनोहर
**गतिं** = चाल
**पश्यत** = हेर
**इति** = यसो
**आह** = भनिन्

**वाक्यार्थ–** कुनै गोपिनीको काँधमा आफ्नो हात अड्याई हिँडिरहेकी गोपिनीले श्रीकृष्णमय भई 'हे गोपिनीहरू ! म श्रीकृष्ण हुँ, मेरो मनोहर चाललाई हेर' भनिन्।

**मा भैष्ट वातवर्षाभ्यां तत्त्राणं विहितं मया।**

**इत्युक्त्वैकेन हस्तेन यतन्त्युन्निदधेऽम्बरम्॥ २०॥**

**पदार्थ–**
**वातवर्षाभ्यां** = आँधी र पानीबाट
**मा भैष्ट** = नडराओ
**मया** = मद्वारा
**तत्त्राणं** = त्यसबाट रक्षा
**विहितं** = गरिसकियो
**इति** = यसो
**उक्त्वा** = भनेर
**एकेन** = एउटा
**हस्तेन** = हातले
**यतन्ती** = गोवर्धन उठाए झैँ प्रयास गर्दै
**अम्बरम्** = आफ्नै वस्त्र (पछ्यौरा)
**उन्निदधे** = माथि उठाइन्

**वाक्यार्थ–** हे गोपिनीहरू ! आँधी र पानीबाट नडराओ, मैले त्यसबाट जोगाउने उपाय गरिसकेँ। यति भनी एउटीले गोवर्धन उठाए झैँ प्रयास गर्दै एउटा हातले आफ्नै पछ्यौरा माथि उठाइन्।

**आरुह्यैका पदाक्रम्य शिरस्याहापरां नृप।**

**दुष्टाहे गच्छ जातोऽहं खलानां ननु दण्डधृक्॥ २१॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**एका** = एउटीले
**अपरां** = अर्कीलाई
**पदा** = गोडाले
**आक्रम्य** = टेकेर
**शिरसि** = शिरमाथि
**आरुह्य** = चढेर
**आह** = भनिन्
**दुष्टाहे** = हे दुष्ट नाग
**गच्छ** = जा
**ननु** = निश्चय नै
**खलानां** = दुष्टहरूलाई
**दण्डधृक्** = दण्ड दिने
**अहं** = म
**जातः** = जन्मिएँ

**वाक्यार्थ–** हे परीक्षित् ! कुनै गोपिनी गोडाले टेकी अर्कीको शिरमाथि चढिन् र (तिनलाई कालिय नागलाई झैँ गरी) भनिन्– हे दुष्ट नाग ! यहाँबाट गइहाल्, किनभने दुष्टहरूलाई दण्ड

दिने म जन्मिसकेँ।

**तत्रैकोवाच हे गोपा दावाग्निं पश्यतोल्बणम्।**
**चक्षूंष्याश्वपिदध्वं वो विधास्ये क्षेममञ्जसा॥ २२॥**

| पदार्थ– | उल्बणम् = भयङ्कर | अपिदध्वं = बन्द गर |
|---|---|---|
| तत्र = त्यहीँ | दावाग्निं = डढेलो | वः = तिमीहरूको |
| एका = एउटीले | पश्यत = हेर | अञ्जसा = सजिलैसँग |
| उवाच = भनिन् | आशु = छिट्टै | क्षेमम् = कल्याण |
| हे गोपाः = हे गोपहरू | चक्षूंषि = आँखालाई | विधास्ये = गरिदिनेछु |

**वाक्यार्थ–** त्यहीँ एउटी गोपिनीले भनिन्– हे गोपहरू ! अति भयङ्कर डढेलो हेर त, अब छिट्टै आँखा चिम्लिहाल, म सजिलै तिमीहरूको कल्याण गरिदिनेछु।

**बद्धान्यया स्रजा काचित् तन्वी तत्र उलूखले।**
**भीता सुदृक् पिधायास्यं भेजे भीतिविडम्बनम्॥ २३॥**

| पदार्थ– | बद्धा = बाँधिएकी | पिधाय = दुबै हातले छोपी |
|---|---|---|
| तत्र = त्यहीँ | भीता = डराएकी | भीतिविडम्बनम् = डराएको अभिनय |
| अन्यया = अर्की गोपिनीद्वारा | काचित् = कुनै | भेजे = गर्न थालिन् |
| उलूखले = ओखलमा श्रीकृष्णलाई बाँधे झैँ | तन्वी = सुन्दरी गोपिनी | |
| स्रजा = मालाद्वारा | सुदृक् = राम्रा आँखाले युक्त | |
| | आस्यं = मुखलाई | |

**वाक्यार्थ–** तीमध्ये नै एउटी गोपिनीलाई अर्कीले (श्रीकृष्णलाई यशोदाले) ओखलमा बाँधिदिए झैँ मालाले बाँधिदिइन्। ती श्रीकृष्ण झैँ बनेकी राम्रा आँखा भएकी गोपिनीले चाहिँ आफ्नो अनुहारलाई दुबै हातले छोपी डराएको अभिनय गर्न थालिन्।

**विवरण–** माथिको प्रसङ्गमा गोपिनीहरूको कृष्णभावनाको उत्कृष्ट रूप अभिव्यक्त भएको छ। प्रेम भनेको दुई आत्मालाई जोडेर एक बनाइदिने प्रक्रिया हो। प्रेमको माथिल्लो तहमा व्यक्ति छुट्टै व्यक्तित्वले युक्त नभई आफ्नो प्रेमीकै स्वरूप हुन्छ। वास्तविक प्रेम अखण्ड एवं असीम हुन्छ। त्यसैले जबसम्म आफू अनि आफ्नो प्रेमी भन्ने द्वैतभावको स्फुरण हुन्छ, तबसम्म वास्तविक प्रेम नै भएको छैन भन्ने बुझिन्छ। यस्तो प्रेम आफ्नै आत्मस्वरूप परमात्मासँग मात्र गर्न सकिन्छ। सामान्य संसारका पदार्थहरूमा हुने आसक्तिलाई यस्तो किसिमको प्रेम भन्ने ठान्नुहुन्न, यसो गर्नु अनुपयुक्त एवं आपत्तिजनक पनि हुन्छ। वेदमा परमात्मालाई हृदयभित्रको प्रेमभावलाई जान्ने साथी भनिएको छ– **सचिविदं सखायम्** (ऋग्वेद, १०/६/७१/६)। कसैले कसैलाई आफ्नो मित्र बनायो र ऊसँग प्रेम गर्‍यो भने ऊभित्रको भावनालाई कसले बुझ्न सक्छ ? जोसँग प्रेम गरिन्छ उसले पनि केवल

हाउभाउ र बोली–व्यवहारको आधारमा अड्कल काट्छ मात्र, हृदयभित्र कति प्रेम छ भन्ने थाहा पाउन सक्दैन, तर परमात्मा त अन्तर्यामी भएकाले उहाँ मित्रताको भावलाई भित्रैबाट बुझ्नुहुन्छ। त्यस्ता नित्यसखा परमात्मालाई छोडेर अरू पदार्थ एवं व्यक्तिमा प्रेम गर्नाले केवल दुःख मात्र पाइन्छ। यसबाट प्रेमस्नेहको विशुद्ध सम्बन्ध केवल परमात्मासँग मात्र छ भन्ने थाहा हुन्छ। गोपिनीहरूको जीवनमा प्रेमको यही उदात्तरूप प्रकट भएको छ।

निरन्तर चिन्तनद्वारा गोपिनीहरू श्रीकृष्णमय बनेका छन्। यद्यपि पहिले पनि गोपिनीहरूले दिनरात हरेक व्यवहारमा श्रीकृष्णलाई मात्र सम्झिरहेका हुन्थे, तर त्यो स्मरण मात्र थियो। यहाँ त गोपिनीहरू स्वयंलाई पनि श्रीकृष्णकै रूपमा अनुभव गर्ने अवस्थामा पुगिसकेका छन्। भगवत्प्रेमको अवस्थामा पहिला भगवान्का नाम एवं रूपको स्मरण गरिन्छ। निरन्तर यसको अभ्यास गर्दै गएपछि विनाप्रयास नित्य परमात्माको नै स्फुरण भइरहन्छ। गोपिनीहरूले अभ्यासपूर्वक परमात्माको स्मरण गरेको कहीँ पनि देखिँदैन। अभ्यासको अवस्थालाई अतिक्रमण गरिसकेकाले उनीहरूको जीवनमा प्राथमिक अवस्थामा पनि निरन्तर कृष्णस्फुरण भएको देखिन्छ। यो प्रेमभाव अझै प्रगाढ बन्दै गएपछि रूपको मात्र नभई लीलाको पनि स्फुरण हुन थाल्दछ। वेणुगीतको प्रसङ्गमा (२१ औँ अध्यायमा) गोपिनीहरूले श्रीकृष्णले निकुञ्जमा विहार गर्दै बाँसुरी बजाएको र त्यसद्वारा जडचेतनमय सम्पूर्ण सृष्टि वशीभूत भएको अनुभव गरेका छन्। श्रीकृष्णका लीलाहरूमध्ये सबैभन्दा मधुरलीला बाँसुरी बजाउने लीला नै हो। त्यसैको अनुभव गरेबाट गोपिनीहरू लीलास्फुरणको उच्च तहमा पुगेको सङ्केत पाइन्छ। लीलास्फुरणकै अवस्थामा प्रेमी व्यक्ति केवल द्रष्टा मात्र बनेको हुन्छ, स्वयं लीलामा उसको प्रवेश भएको हुँदैन। योभन्दा पनि माथिल्लो अवस्थामा व्यक्ति आफूलाई स्वयं प्रेमीकै रूपमा अनुभव गर्न थाल्दछ। यो सर्वोत्कृष्ट स्वरूप प्रकट हुने नियम अनुसार यहाँ गोपिनीहरूले पनि श्रीकृष्णको विरहको अवस्थामा नै यसको अनुभव गरेका छन्।

यहाँ माथिका श्लोकहरूमा पूतनामोक्षदेखि ओखलमा बाँधिनु र गोवर्धनधारणसम्म अनेक भावको स्फुरण भएको देखाइएको छ। यहाँ हरेक गोपिनीहरू एक–अर्काको श्रीकृष्णभावनामा सहयोगी बनेका देखिन्छन्। यस प्रसङ्गमा पनि १५ देखि १८ सम्मका चार श्लोकमा कृष्णलीलाको अनुकरणलाई देखाइएको छ भने अरू श्लोकहरूमा गोपिनीहरू कृष्णमय भएको देखाइएको छ। कृष्णभावना अभिव्यक्त हुँदा अरू सबै घटनाक्रम पहिले जस्तै मिल्नु भने आवश्यक छैन। अतः गोवर्धनधारण गरेको भावना गर्ने गोपिनीले आफ्नै कपडालाई उचालेकी छिन्, आगो पिएको अनुभव गर्ने गोपिनीले मुख मात्र बाएकी छिन्। सम्पूर्ण गोपिनीहरूमा यसरी पृथक्–पृथक् भावहरूको प्रकाश भइरहेको छ। सानोदेखि ठुलो भएसम्मका श्रीकृष्णका अनेक लीलास्वरूपहरू मानौँ एकै ठाउँमा जम्मा भई फेरि सम्पूर्ण लीलाहरू गरिरहे झैँ यहाँ विचित्र वातावरण तयार भएको छ। सबै श्रीकृष्णमय भए पनि कोही गोपगोपिनी, कोही गोपबालक त कोही पूतना आदि बनी गोपिनीहरूले एक अर्काको भावरसलाई पुष्ट गर्न सहयोग गरेका छन्। यसरी प्रियवियोगको अवस्थामा अभिव्यक्त हुने प्रेमको सर्वोच्च स्वरूप यहाँ प्रकट भएको देखिन्छ।

**एवं कृष्णं पृच्छमाना वृन्दावनलतास्तरून्।**
**व्यचक्षत वनोद्देशे पदानि परमात्मनः॥ २४॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**वृन्दावनलताः** = वृन्दावनका लहरा र
**तरून्** = रुखहरूसँग
**कृष्णं** = श्रीकृष्णलाई
**पृच्छमानाः** = सोधखोज गरिरहेका गोपिनीहरूले
**वनोद्देशे** = वनको एउटा भागमा
**परमात्मनः** = परमात्मा श्रीकृष्णका
**पदानि** = पदचिह्नहरू
**व्यचक्षत** = देखे

**वाक्यार्थ–** यसप्रकार वृन्दावनका लहरा र रुखहरूसँग श्रीकृष्णको विषयमा सोधखोज गरिरहेका ती गोपिनीहरूले वनको एउटा भागमा भगवान् श्रीकृष्णका पदचिह्नहरू देखे।

**पदानि व्यक्तमेतानि नन्दसूनोर्महात्मनः।**
**लक्ष्यन्ते हि ध्वजाम्भोजवज्राङ्कुशयवादिभिः॥ २५॥**

**पदार्थ–**
**एतानि** = यी
**पदानि** = पदचिह्नहरू
**महात्मनः** = उदारहृदय
**नन्दसूनोः** = नन्दपुत्र श्रीकृष्णका (नै हुन्)
**हि** = किनभने
**ध्वजाम्भोजवज्राङ्कुशयवादिभिः** = ध्वजा, कमल, वज्र, अङ्कुश र यव (जौ) आदि चिह्नहरूद्वारा
**व्यक्तम्** = स्पष्ट
**लक्ष्यन्ते** = चिनिन्छन्

**वाक्यार्थ–** यी पदचिह्नहरू निश्चय नै उदारहृदय भएका नन्दपुत्र श्रीकृष्णका हुन्, किनभने चरणमा ध्वजा, कमल, वज्र, अङ्कुश र यव (जौ) आदि चिह्नहरू यसमा स्पष्ट देखिन्छन्।

**तैस्तैः पदैस्तत्पदवीमन्विच्छन्त्योऽग्रतोऽबलाः।**
**वध्वाः पदैः सुपृक्तानि विलोक्यार्ताः समब्रुवन्॥ २६॥**

**पदार्थ–**
**तैः तैः** = ती-ती
**पदैः** = चरणचिह्नहरूद्वारा
**तत्पदवीम्** = उहाँ (श्रीकृष्ण)को बाटो
**अन्विच्छन्त्यः** = खोजिरहेका
**अबलाः** = अबला गोपस्त्रीहरूले
**अग्रतः** = केही अघि
**वध्वाः** = कुनै व्रजयुवतीको
**पदैः** = चरण (चिह्न)हरूद्वारा
**सुपृक्तानि** = जोडिएका श्रीकृष्णचरणलाई
**विलोक्य** = देखेर
**आर्ताः** = असाध्यै दुःखी भई
**समब्रुवन्** = भन्न थाले

**वाक्यार्थ–** ती-ती चरणचिह्नहरूद्वारा श्रीकृष्ण हिँड्नुभएको बाटो खोजिरहेका ती अबला गोपिनीहरूले केही अगाडि पुगेपछि श्रीकृष्णको चरणसँगै कुनै व्रजयुवतीको चरणचिह्न पनि देखेर असाध्यै दुःखी भई भन्न थाले।

**कस्याः पदानि चैतानि याताया नन्दसूनुना।**
**अंसन्यस्तप्रकोष्ठायाः करेणोः करिणा यथा॥ २७॥**

**पदार्थ**–
**करिणा** = हात्तीसँग हिँड्ने
**करेणोः यथा** = हत्तिनी झैं
**नन्दसूनुना** = नन्दपुत्र श्रीकृष्णसँग
**यातायाः** = हिँडेकी
**अंसन्यस्तप्रकोष्ठायाः च** = श्रीकृष्णको काँधमा पाखुरा राखेकी
**कस्याः** = कसका
**एतानि** = यी
**पदानि** = पदचिह्न होलान्

**वाक्यार्थ**– जसरी हत्तिनी हात्तीसँगै हिँड्छे, त्यसै गरी श्रीकृष्णको काँधमा आफ्नो पाखुरा अड्याई श्रीकृष्णसँग हिँड्ने कसका यी पदचिह्न होलान् ?

**अनयाराधितो नूनं भगवान् हरिरीश्वरः ।**
**यन्नो विहाय गोविन्दः प्रीतो यामनयद् रहः ॥ २८ ॥**

**पदार्थ**–
**नूनं** = निश्चय नै
**अनया** = यीद्वारा
**भगवान्** = सबै ऐश्वर्यले युक्त
**ईश्वरः** = सर्वसमर्थ
**हरिः** = श्रीकृष्ण
**आराधितः** = प्रसन्न पारिनुभएको रहेछ
**यत्** = किनभने
**प्रीतः** = प्रसन्न भएका
**गोविन्दः** = गोविन्दले
**नः** = हामीलाई
**विहाय** = छाडी
**याम्** = यिनैलाई
**रहः** = एकान्तमा
**अनयत्** = लानुभयो

**वाक्यार्थ**– निश्चय नै यिनले सबै ऐश्वर्यले युक्त सर्वसमर्थ श्रीकृष्णलाई प्रसन्न पारेकी रहिछन्, किनभने यिनीसँग प्रसन्न भएकैले गोविन्दले हामीलाई छाडी यिनैलाई एकान्तमा लानुभयो ।

**धन्या अहो अमी आल्यो गोविन्दाङ्घ्रयब्जरेणवः ।**
**यान् ब्रह्मेशो रमा देवी दधुर्मूर्ध्न्यघनुत्तये ॥ २९ ॥**

**पदार्थ**–
**आल्यः** = हे साथीहरू
**अहो** = आश्चर्य छ
**अमी** = यी
**गोविन्दाङ्घ्रयब्जरेणवः** = श्रीकृष्णको चरणकमलका धुलोहरू पनि
**धन्याः** = धन्य छन्
**यान्** = जसलाई
**ब्रह्मा** = ब्रह्माजी
**ईशः** = भगवान् शङ्कर
**रमा देवी** = लक्ष्मी देवीले पनि
**अघनुत्तये** = पाप नष्ट गर्न
**मूर्ध्नि** = शिरमाथि
**दधुः** = धारण गर्नुभयो

**वाक्यार्थ**– हे साथीहरू ! श्रीकृष्णको चरण कमलबाट निस्कने यी धुलोका कणहरू पनि धन्य छन्, किनभने ब्रह्मा, भगवान् शङ्कर र लक्ष्मी देवीले समेत आफ्नो पाप नष्ट गर्नको लागि शिरमाथि यिनैलाई धारण गर्नुभयो ।

**तस्या अमूनि नः क्षोभं कुर्वन्त्युच्चैः पदानि यत् ।**
**यैकापहृत्य गोपीनां रहो भुङ्क्तेऽच्युताधरम् ॥ ३० ॥**

**पदार्थ–**
**तस्याः** = तिनको (श्रीकृष्णको साथमा हिँडेकीका)
**अमूनि** = यी
**पदानि** = पदचिह्नहरूले
**नः** = हाम्रो मनमा
**उच्चैः** = तीव्र
**क्षोभं** = हलचल
**कुर्वन्ति** = मच्चाइरहेका छन्
**यत्** = किनभने
**या** = जसले
**गोपीनां** = हामी सबै गोपिनीका आराध्यलाई
**अपहृत्य** = खोसी
**रहः** = एकान्तमा
**एका** = एक्लै
**अच्युताधरम्** = श्रीकृष्णको अधरसुधालाई
**भुङ्क्ते** = पिइरहेकी छिन्

**वाक्यार्थ–** ती श्रीकृष्णका साथमा हिँडेकी स्त्रीका चरणचिह्नहरूले हाम्रो मनमा तीव्र हलचल मच्चाइरहेका छन्। किनभने तिनले हामी सबै गोपिनीका आराध्यलाई खोसेर एकान्तमा लगी एक्लै श्रीकृष्णको अधरसुधालाई पिइरहेकी छिन्।

**न लक्ष्यन्ते पदान्यत्र तस्या नूनं तृणाङ्कुरैः।**
**खिद्यत्सुजाताङ्घ्रितलामुन्निन्ये प्रेयसीं प्रियः॥ ३१॥**

**पदार्थ–**
**अत्र** = यहाँ
**तस्याः** = तिनका
**पदानि** = चरणचिह्नहरू
**न लक्ष्यन्ते** = देखिँदैनन्
**नूनं** = निश्चय नै
**तृणाङ्कुरैः** = घाँसका तिखा टुप्पाहरूद्वारा
**खिद्यत्सुजाताङ्घ्रितलां** = सुकुमार पैताला घोचिएकी
**प्रेयसीं** = आफ्नी प्रेयसीलाई
**प्रियः** = प्रेमी श्रीकृष्णले
**उन्निन्ये** = बोकेको हुनुपर्दछ

**वाक्यार्थ–** यहाँ तिनका चरणचिह्नहरू देखिँदैनन्। पक्कै घाँसका तिखा टुप्पाहरूद्वारा घोचिएकाले आफ्नी प्रेयसीका सुकुमार पैतला दुखेको थाहा पाई प्रियतमले उनलाई बोकेको हुनुपर्दछ।

**इमान्यधिकमग्नानि पदानि वहतो वधूम्।**
**गोप्यः पश्यत कृष्णस्य भाराक्रान्तस्य कामिनः॥ ३२॥**

**पदार्थ–**
**गोप्यः** = हे गोपिनीहरू
**वधूम्** = प्रेयसीलाई
**वहतः** = बोक्दा
**भाराक्रान्तस्य** = भारले थिचिएका
**कामिनः** = प्रेमी
**कृष्णस्य** = श्रीकृष्णका
**इमानि** = यी
**अधिकमग्नानि** = धेरै गहिरा भएका
**पदानि** = चरणचिह्नलाई
**पश्यत** = हेर त

**वाक्यार्थ–** हे गोपिनीहरू ! आफ्नी प्रेयसीलाई बोक्दा भारले थिचिएका कारण प्रेमी श्रीकृष्णका यी चरणचिह्नहरू धेरै गहिरा भएका छन्, यिनलाई हेर त।

**अत्रावरोपिता कान्ता पुष्पहेतोर्महात्मना ।**

**अत्र प्रसूनावचयः प्रियार्थे प्रेयसा कृतः ।**

**प्रपदाक्रमण एते पश्यतासकले पदे ॥ ३३ ॥**

**पदार्थ–**
**अत्र** = यहाँ
**पुष्पहेतोः** = फूल टिप्नका लागि
**महात्मना** = उदार मन भएका श्रीकृष्णद्वारा
**कान्ता** = प्रेयसी
**अवरोपिता** = उतारिएकी होलिन्
**अत्र** = यहाँ
**प्रियार्थे** = प्रियाको लागि
**प्रेयसा** = प्रेमीद्वारा
**प्रसूनावचयः** = फूल टिप्ने काम
**कृतः** = गरियो (होला)
**प्रपदाक्रमणे** = उफ्रिँदा खुट्टाको अघिल्लो भागले मात्र टेकिनाले
**एते** = यी
**असकले** = आधा-आधा भएका
**पदे** = दुई चरणचिह्नलाई
**पश्यत** = हेर त

**वाक्यार्थ–** उदार हृदय श्रीकृष्णले फूल टिप्नका लागि आफ्नी प्रेयसीलाई यहाँ उतार्नुभयो होला। यहाँ उहाँले प्रियाका लागि फूल टिप्नुभयो होला। हेर त, यहाँ उफ्री-उफ्री फूल टिप्दा खुट्टाको अघिल्लो भागले मात्र टेकिनाले श्रीकृष्णका दुबै चरणचिह्नहरू आधा मात्र देखिन्छन्।

**केशप्रसाधनं त्वत्र कामिन्याः कामिना कृतम् ।**

**तानि चूडयता कान्तामुपविष्टमिह ध्रुवम् ॥ ३४ ॥**

**पदार्थ–**
**अत्र तु** = यहाँ चाहिँ
**कामिना** = प्रेमी श्रीकृष्णद्वारा
**कामिन्याः** = आफ्नी प्रेयसीको
**केशप्रसाधनं** = कपाल मिलाउने काम
**कृतम्** = गरियो
**कान्ताम्** = प्रियाको लागि
**तानि** = ती फूलहरू
**चूडयता** = चुल्ठोमा सिँगार्दा
**ध्रुवम्** = निश्चय नै
**इह** = यहाँ
**उपविष्टम्** = बसेको हुनुपर्दछ

**वाक्यार्थ–** यहाँ चाहिँ प्रेमी श्रीकृष्णले आफ्नी प्रेयसीको कपाल मिलाइदिनुभयो होला। अघि टिपिएका फूलहरूलाई आफ्नी प्रेयसीको चुल्ठोमा सिँगार्न उहाँ निश्चय नै यहाँ बसेको हुनुपर्दछ।

**रेमे तया चात्मरत आत्मारामोऽप्यखण्डितः ।**

**कामिनां दर्शयन् दैन्यं स्त्रीणां चैव दुरात्मताम् ॥ ३५ ॥**

**पदार्थ–**
**आत्मरतः** = आफैँसँग खेल्ने
**आत्मारामः च** = आफैँमा रमाउने र
**अखण्डितः अपि** = आसक्तिशून्य भएर पनि
**कामिनां** = कामी पुरुषहरूको
**दैन्यं** = स्त्रीपरवशता र
**स्त्रीणां च** = स्त्रीहरूको पनि
**दुरात्मताम्** = कुटिलतालाई
**दर्शयन् एव** = देखाउनकै लागि
**तया** = ती स्त्रीसँग
**रेमे** = क्रीडा गर्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! भगवान् श्रीकृष्ण आफैंसँग खेल्नुहुन्छ, आफैंमा रमाउनुहुन्छ र आसक्तिले पनि शून्य हुनुहुन्छ, तर कामी पुरुषहरू कसरी स्त्रीको अधीनमा हुन्छन् र कामिनीहरू कति कुटिल हुन्छन् भन्ने देखाउनकै लागि उहाँले ती गोपिनीसँग क्रीडा गर्नुभयो।

**इत्येवं दर्शयन्त्यस्ताश्चेरुर्गोप्यो विचेतसः।**
**यां गोपीमनयत् कृष्णो विहायान्याः स्त्रियो वने॥ ३६॥**
**सा च मेने तदात्मानं वरिष्ठं सर्वयोषिताम्।**
**हित्वा गोपीः कामयाना मामसौ भजते प्रियः॥ ३७॥**

**पदार्थ–**
**इति एवं** = यसप्रकार
**दर्शयन्त्यः** = श्रीकृष्णका चरणचिह्नहरूलाई देखाउँदै
**विचेतसः** = अचेत झैं भएका
**ताः** = ती
**गोप्यः** = गोपिनीहरू
**चेरुः** = वन-वनमा भड्किए
**कृष्णः** = श्रीकृष्णले
**अन्याः** = अरू
**स्त्रियः** = स्त्रीहरूलाई
**विहाय** = छाडी
**यां** = जुन
**गोपीम्** = गोपिनीलाई
**वने** = वनमा
**अनयत्** = लिएर जानुभएको थियो
**सा च** = उनले पनि
**तदा** = त्यो वेलामा
**असौ** = यी
**प्रियः** = प्यारा श्रीकृष्ण
**कामयानाः** = आफूलाई असाध्यै चाहने
**गोपीः** = सबै गोपिनीहरूलाई
**हित्वा** = छोडी
**मां** = मलाई मात्र
**भजते** = प्रेम गर्नुहुन्छ भन्ने सम्झी
**आत्मानं** = आफूलाई
**सर्वयोषिताम्** = सबै गोपिनीहरूमध्ये
**वरिष्ठं** = श्रेष्ठ
**मेने** = मानिन्

**वाक्यार्थ–** यसप्रकार श्रीकृष्णका चरणचिह्नहरूलाई देखाउँदै अचेत झैं भएका ती गोपिनीहरू वन-वनमा भड्किए। श्रीकृष्णले अरू स्त्रीहरूलाई छाडी जसलाई एकान्त वनमा लिएर जानुभएको थियो ती गोपिनीले पनि त्यो वेलामा 'यी मेरा प्रेमी श्रीकृष्ण मलाई असाध्यै चाहनुहुन्छ र सबै गोपिनीहरूलाई छाडी मलाई मात्र प्रेम गर्नुहुन्छ' भन्ने सम्झी आफूलाई सबै गोपिनीहरूभन्दा श्रेष्ठ ठानिन्।

**ततो गत्वा वनोद्देशं दृप्ता केशवमब्रवीत्।**
**न पारयेऽहं चलितुं नय मां यत्र ते मनः॥ ३८॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**दृप्ताः** = सौभाग्यको घमन्डले युक्त भएकी गोपिनीले
**वनोद्देशं** = वनको कुनै भागमा
**गत्वा** = पुगेपछि
**केशवम्** = श्रीकृष्ण भगवान्लाई
**अब्रवीत्** = भनिन्
**अहं** = म
**चलितुं** = हिँड्न
**न पारये** = सक्दिनँ
**यत्र** = जहाँ

**ते** = हजुरको
**मनः** = मन छ (त्यहीँ)
**मां** = मलाई
**नय** = लैजाऊ

**वाक्यार्थ–** त्यसपछि सौभाग्यको घमन्डले युक्त भएकी ती गोपिनीले वनको कुनै भागमा पुगेपछि श्रीकृष्ण भगवान्लाई भनिन्– हे श्रीकृष्ण ! म हिँड्न सक्दिनँ, अब जता हजुरको मन छ, त्यतै मलाई लैजाउनुहोस्।

**एवमुक्तः प्रियामाह स्कन्ध आरुह्यतामिति।**
**ततश्चान्तर्दधे कृष्णः सा वधूरन्वतप्यत॥ ३९॥**

पदार्थ–
**एवम्** = यसप्रकार
**उक्तः** = भनिएका श्रीकृष्णले
**प्रियां** = आफ्नी प्रेयसीलाई
**स्कन्धे** = काँधमा
**आरुह्यतां** = चढ
**इति** = यसो
**आह** = भन्नुभयो
**ततः च** = त्यसपछि
**कृष्णः** = भगवान् श्रीकृष्ण
**अन्तर्दधे** = अन्तर्धान हुनुभयो
**सा** = ती
**वधूः** = व्रजयुवती
**अन्वतप्यत** = असाध्यै दुःखी भइन्

**वाक्यार्थ–** यसप्रकार प्रेयसीले भनेपछि भगवान् श्रीकृष्णले उनलाई काँधमा चढ भन्नुभयो र आफू अन्तर्धान हुनुभयो, त्यसपछि ती व्रजयुवती असाध्यै दुःखी भइन्।

**हा नाथ रमण प्रेष्ठ क्वासि क्वासि महाभुज।**
**दास्यास्ते कृपणाया मे सखे दर्शय सन्निधिम्॥ ४०॥**

पदार्थ–
**हा नाथ** = हे नाथ
**रमण** = हे रमण (आनन्ददाता)
**प्रेष्ठ** = हे प्रियतम
**महाभुज** = हे विशाल भुजा भएका श्रीकृष्ण
**क्व असि** = कहाँ हुनुहुन्छ
**क्व असि** = कहाँ हुनुहुन्छ
**सखे** = हे प्रिय साथी
**कृपणायाः** = दुःखी भएकी
**ते** = तिम्री
**दास्याः** = सेविका
**मे** = मेरो लागि
**सन्निधिम्** = आफ्नो सान्निध्य
**दर्शय** = देखाउनुहोस्

**वाक्यार्थ–** हे नाथ ! हे रमण ! हे प्रियतम ! हे विशाल भुजा भएका श्रीकृष्ण ! हजुर कहाँ हुनुहुन्छ ? असाध्यै दुःखी भएकी हजुरकी सेविका मलाई दर्शन दिनुहोस्।

**अन्विच्छन्त्यो भगवतो मार्गं गोप्योऽविदूरितः।**
**ददृशुः प्रियविश्लेषमोहितां दुःखितां सखीम्॥ ४१॥**

पदार्थ–
**भगवतः** = भगवान् श्रीकृष्णको
**मार्गं** = बाटोलाई
**अन्विच्छन्त्यः** = खोजिरहेका
**गोप्यः** = गोपिनीहरूले
**अविदूरितः** = केही टाढा
**प्रियविश्लेषमोहितां** = प्रियवियोगको कारणले मूर्च्छित भएकी

**दुःखितां** = असाध्यै दुःखी
**सखीम्** = आफ्नी सङ्गिनीलाई
**ददृशुः** = देखे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको बाटोलाई पछ्याउँदै उहाँलाई खोजिरहेका गोपिनीहरूले केही टाढा प्रियवियोगको कारणले मूर्च्छित भएकी आफ्नै सङ्गिनीलाई देखे।

**तया कथितमाकर्ण्य मानप्राप्तिं च माधवात्।**
**अवमानं च दौरात्म्याद् विस्मयं परमं ययुः॥ ४२॥**

पदार्थ–
**तया** = तीद्वारा
**कथितम्** = बताइएको
**माधवात्** = भगवान् श्रीकृष्णबाट
**मानप्राप्तिं** = सम्मानको प्राप्ति र
**दौरात्म्यात्** = आफ्नै कुटिलता र दम्भका कारणले
**अवमानं च** = (श्रीकृष्णद्वारा गरिएको) तिरस्कारको कुरा पनि
**आकर्ण्य** = सुनेर
**परमं** = असाध्यै
**विस्मयं च** = आश्चर्यमा
**ययुः** = परे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णबाट आफूलाई सम्मान मिलेको र आफ्नै कुटिलता र दम्भको कारणले श्रीकृष्णले आफूलाई छोडेर तिरस्कार गरेको कुरा पनि सुनेर ती सबै गोपिनीहरू आश्चर्यमा परे।

**ततोऽविशन् वनं चन्द्रज्योत्स्ना यावद् विभाव्यते।**
**तमः प्रविष्टमालक्ष्य ततो निववृतुः स्त्रियः॥ ४३॥**

पदार्थ–
**ततः** = त्यसपछि
**स्त्रियः** = गोपिनीहरू
**यावत्** = जहाँसम्म
**वनं** = वन
**चन्द्रज्योत्स्ना** = चन्द्रमाको किरणले
**विभाव्यते** = प्रकाशित थियो, त्यहाँसम्म
**अविशन्** = (भित्र-भित्र) पसे (त्यसपछि)
**तमः** = गाढा अन्धकार
**प्रविष्टम्** = छाएको
**आलक्ष्य** = देखेर
**ततः** = त्यहाँबाट
**निववृतुः** = फर्किए

**वाक्यार्थ–** त्यसपछि वनमा जहाँसम्म चन्द्रमाको उज्यालो थियो त्यहाँसम्म ती सबै गोपिनीहरू गए। त्यसभन्दा अगाडि चाहिँ गाढा अन्धकार भएको देखेर उनीहरू त्यताबाट फर्किए।

**तन्मनस्कास्तदालापास्तद्विचेष्टास्तदात्मिकाः।**
**तद्गुणानेव गायन्त्यो नात्मागाराणि सस्मरुः॥ ४४॥**

पदार्थ–
**तन्मनस्काः** = श्रीकृष्णमैं मन लागेका
**तदालापाः** = श्रीकृष्णकै चर्चा गरिरहेका
**तद्विचेष्टाः** = श्रीकृष्णकै समान लीला गरिरहेका
**तदात्मिकाः** = श्रीकृष्णमय भएका

**तद्गुणान् एव** = श्रीकृष्णका गुणहरूलाई नै
**गायन्त्यः** = गाइरहेका गोपिनीहरूले
**आत्मागाराणि** = आफू र आफ्ना घरपरिवारलाई पनि
**न सस्मरुः** = सम्झेनन्

**वाक्यार्थ–** श्रीकृष्णमैं मन लागेका, श्रीकृष्णकै चर्चा गरिरहेका, श्रीकृष्णकै समान लीला गरिरहेका, श्रीकृष्णमय भएका, श्रीकृष्णका गुणहरूलाई नै गाइरहेका गोपिनीहरूले आफू र आफ्ना घरपरिवारलाई पनि सम्झेनन्।

**पुनः पुलिनमागत्य कालिन्द्याः कृष्णभावनाः।**
**समवेता जगुः कृष्णं तदागमनकाङ्क्षिताः॥ ४५॥**

**पदार्थ–**
**कृष्णभावनाः** = श्रीकृष्णमय भाव भएका र
**तदागमनकाङ्क्षिताः** = उहाँको आगमनलाई पर्खिरहेका गोपिनीहरू
**पुनः** = फेरि
**कालिन्द्याः** = यमुनाको
**पुलिनम्** = तीरमा
**आगत्य** = आएर
**समवेताः** = एकसाथ
**कृष्णं** = श्रीकृष्णको विषयमा
**जगुः** = गाउन थाले

**वाक्यार्थ–** श्रीकृष्णमय भाव भएका र उहाँको आगमनलाई पर्खिरहेका गोपिनीहरू फेरि यमुनाकै तीरमा आएर बसे र एकसाथ श्रीकृष्णको विषयमा गाउन थाले।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**रासक्रीडायां कृष्णान्वेषणं नाम त्रिंशोऽध्यायः॥ ३०॥**

# अथ एकत्रिंशोऽध्यायः

## गोपिकागीत

श्रीकृष्णको विरहमा कृष्णमय भएका गोपिनीहरूले गरेको प्रार्थनालाई गोपिकागीत भनिन्छ। रासपञ्चाध्यायी भागवतको पाँच प्राणरूप हो भने त्यसमा पनि गोपिकागीतको प्रसङ्ग मुख्य प्राण हो। यो विरहगीतको प्रसङ्ग हो। असीम सुख या असीम दुःखको वेला नै हृदयबाट स्वतः गीत निस्कन्छ। प्रेममा पनि जब प्रियतमसँग मिलन हुन्छ, तब असीम सुखको अवस्थामा आनन्दगीत गाइन्छ भने वियोगबाट असीम दुःख भएको अवस्थामा विरहगीत गाइन्छ। विरह अवस्थामा नै प्रेमको उच्चतम स्वरूप प्रकट हुने भएकाले प्रेममा विरहगीतको नै ज्यादा महत्त्व हुन्छ, यो अत्यन्त मर्मस्पर्शी एवं हृदयविदारक पनि छ। यद्यपि प्रेमीसँगको संयोग पनि परमाह्लादक र हृदयस्पर्शी हुन्छ नै, तर विरहस्पर्शको सामु त्यसको कुनै तुलना हुन सक्दैन। विरहद्वारा नै प्रेम पुष्ट हुन्छ, त्यसैले प्रेममा विरह आवश्यक मात्र होइन, अनिवार्य पनि हुन्छ। प्रेमको सर्वोच्च स्थितिमा विरहको नै स्फूर्ति हुन्छ भन्ने कुरा अलङ्कार शास्त्रमा उल्लेख गरिएको छ। निकुञ्जमा श्रीकृष्णसँग विहार गर्दागर्दै त्यो प्रेमको आस्वादमा राधाले आफूलाई र श्रीकृष्णलाई समेत भुल्छिन् अनि उनी कृष्णविरहको कल्पना गरी तत्क्षण कृष्ण-कृष्ण भन्दै मूर्च्छित हुन्छिन्। उता श्रीकृष्ण पनि राधाको हृदयभित्र रहेको विरहलाई अनुभव गरी हाय राधे ! भन्दै उनको विरहमा मूर्च्छित हुनुहुन्छ। यसप्रकार नित्यनिकुञ्जमा क्षण-प्रतिक्षण प्रेमीसँगको नित्य संयोगमा पनि विरहको भाव स्फुरित भइरहन्छ भन्ने रसिक भक्तहरूको भाव पाइन्छ। संयोगले आत्मविस्मृतिद्वारा प्रेमीकै समेत विस्मृति गराइदिन्छ, तर जब प्रियविरहको भाव मनमा जाग्दछ, तब त्यसले निरन्तर प्रियतमको मात्र स्मृति गराइदिन्छ। आफैंलाई पनि बिर्सने गरी हुने प्रियतमको यही निरन्तर स्मरण नै प्रेमको वास्तविक स्वरूप हो। राधाकृष्णको लीलामा प्रेमको यही वास्तविक रूप अभिव्यक्त भएको पाइन्छ। गोपिनीहरू श्रीराधाकै अङ्गभूता हुन्, त्यसैले उनीहरूले भगवान्सँग विरह भएको भावमा डुबी गाएको गीत राधाकृष्णको नित्यलीलाकै एक विशिष्ट भाग हो, त्यसबाट स्वयं राधा र गोपिनीहरू समेतको प्रेम पुष्ट हुन्छ र आन्तरिक बन्दछ। त्यसैले गोपिकागीतको महत्त्व सर्वाधिक छ।

यस अध्यायमा गोपिनीहरूले उन्नाईस प्रकारले श्रीकृष्णसँग विरहवेदना व्यक्त गर्दै उहाँको पुकारा गरेका छन्। यी अनेक गोपिनीहरूको भावको स्तर उन्नाईस प्रकारका छन्, त्यसैले उनीहरूले गाएको एक-एक श्लोकमा छुट्टाछुट्टै भावको स्फूर्ति छ भन्ने टीकाकारहरूले लेखेका छन्। गोपिनीहरूको यो समूहमा मुख्यतया दुई प्रकारका गोपिनीहरू छन्— एक थरी अन्यपूर्वा अर्थात् विवाहित र अर्का अनन्यपूर्वा अर्थात् अविवाहित। तीमध्ये पहिलोदेखि चौथोसम्म अनि बाह्रौंदेखि सत्रौंसम्म गरी जम्मा दश श्लोक विवाहित गोपिनीहरूले गाएका हुन् भने अरू श्लोकहरू कुमारी गोपिनीहरूले गाएका हुन्। सत्त्व, रज र तमका अवान्तर भेद गरी नौ प्रकार अनि निर्गुण समेत विवाहिता गोपिनीहरू दशथरी रहेका छन्। त्यसमध्ये पहिलो, दोस्रो र तेस्रो

श्लोक क्रमशः सात्त्विकराजसी, सात्त्विकतामसी र सात्त्विकसात्त्विकीले अनि चौथो श्लोक निर्गुण गोपिनीले गाएका हुन्। बाह्रौं, तेह्रौं र चौधौं क्रमशः राजसतामसी, राजसराजसी एवं राजससात्त्विकी गोपिनीहरूले गाएका हुन्। यसै गरी पन्धौं, सोह्रौं र सत्रौं श्लोक चाहिँ तामसराजसी, तामसतामसी एवं तामससात्त्विकी गोपिनीहरूले गाएका हुन्। यसरी विवाहिता गोपिनीहरूको दशथरी प्रकार पूर्ण हुन्छ। कुमारीहरूमध्ये चाहिँ पाँचौं श्लोक गुणातीताको भनाइ हो, छैंटौ, सातौं र आठौं क्रमशः सात्त्विकसात्त्विकी, सात्त्विकतामसी र सात्त्विकराजसीको भनाइ हो। नवौं, दसौं र एघारौं श्लोकः क्रमशः राजससात्त्विकी, राजसतामसी र राजसराजसीको भनाइ हो भने अठारौं र उन्नाईसौं श्लोक क्रमशः तामससात्त्विकी र तामसराजसीको भनाइ हो। कुमारी गोपिनीहरूमा तामसतामसी कोही छैनन्। यसरी विवाहित र अविवाहित गरी जम्मा उन्नाईस प्रकारका गोपिनीहरूको भाव गोपिकागीतका श्लोकहरूमा अभिव्यक्त भएको छ।

**गोप्य ऊचुः** (गोपिनीहरूले भने)

**जयति तेऽधिकं जन्मना व्रजः श्रयत इन्दिरा शश्वदत्र हि।**
**दयित दृश्यतां दिक्षु तावकास्त्वयि धृतासवस्त्वां विचिन्वते॥ १॥**

**पदार्थ–**
**ते** = हजुरको
**जन्मना** = जन्मद्वारा
**व्रजः** = व्रज
**अधिकं** = धेरै
**जयति** = महिमायुक्त भएको छ
**अत्र हि** = यहाँ नै
**इन्दिरा** = लक्ष्मी
**शश्वत्** = नित्य
**श्रयते** = निवास गर्नुहुन्छ
**दयित** = हे प्रियतम
**त्वयि** = हजुरमा
**धृतासवः** = प्राण समर्पण गरेका
**तावकाः** = हजुरका गोपिनीहरू
**दिक्षु** = विभिन्न दिशाहरूमा
**त्वां** = हजुरलाई नै
**विचिन्वते** = खोज्दैछन्
**दृश्यतां** = हेर्नुहोस् त

**वाक्यार्थ–** हे श्रीकृष्ण ! हजुरको जन्म भएकाले व्रजको नै महिमा बढेको छ, किनभने लक्ष्मी यहाँ नित्य निवास गर्नुहुन्छ। हे प्रियतम ! हजुरमा जीवन नै समर्पण गरेका हजुरका गोपिनीहरू वनका विभिन्न दिशाहरूमा हजुरलाई नै खोज्दैछन्, हेर्नुहोस् त।

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्णको प्रार्थना गर्दै गोपिनीहरूले श्रीकृष्णको आविर्भावले व्रजमण्डलको महत्त्व अत्यन्त बढेको बताएका छन्। **अधिकं जयति** यस शब्दका अनेक अर्थहरू गरिएका छन्। अधिक यो शब्दको पहिलेभन्दा बढी भन्ने अर्थ गर्दा यसको तात्पर्य पहिले साधारण वस्ती रहेको व्रजभूमि श्रीकृष्णको आगमनपछि अत्यन्त महत्त्वशाली भएको छ भन्ने हुन्छ। **अधिक** शब्दको अर्थ सबैभन्दा बढी भन्ने गर्ने हो भने यसको तात्पर्य वैकुण्ठ आदि दिव्य धामहरूभन्दा पनि व्रजको महत्त्व बढी छ भन्ने हुन्छ। भगवान् नारायणमा भन्दा पनि भगवान् श्रीकृष्णमा भक्तवात्सल्य, प्रेम आदि गुणहरू बढी हुन्छन्। भगवान् नारायण सर्वगुणसम्पन्न हुनुभए तापनि उहाँमा बाँसुरी बजाउने, नाच्ने आदि मधुरताको स्फुरण छैन, त्यसैले बाँसुरीमाधुरी, नृत्यमाधुरी आदि गुणका कारण नारायणभन्दा पनि श्रीकृष्ण नै श्रेष्ठ हुनुहुन्छ भन्ने भक्तहरूको भनाइ छ। श्रीकृष्ण खेल्ने व्रजधाममा पनि वैकुण्ठमा भन्दा बढी मधुरिमा रहेको छ। नदीविहारका

लागि यमुना नदी, पर्वतविहारका लागि गोवर्धनपर्वत, वनविहारका लागि वृन्दावन अनि एकान्तमा अन्तरङ्ग लीला गर्न अनेक निकुञ्जहरू व्रजधाममा मात्र छन्, वैकुण्ठ आदि धाममा छैनन्। भगवान्‌ले लीला गर्नुभन्दा अगाडि यी पहाड, नदी आदिको कुनै विशेष महत्त्व थिएन, किनभने नदी, पहाड आदि सबैजसो ठाउँमा हुन्छन्। तर भगवल्लीलाका साधन नदी, पहाड आदि यहीँ भएकाले व्रजधामको विशेष महत्त्व छ। यो सबै श्रीकृष्णकै आविर्भावका कारणले भएको हो भनी गोपिनीहरूले श्रीकृष्णको महत्ता गाएका छन्। **अधिकं** शब्दको अर्को अर्थ हुन्छ– **अधि सर्वतः, कं सुखं यथा स्यात् तथा**, यसको तात्पर्य भगवान् श्रीकृष्णको आविर्भाव भएपछि व्रजमण्डल सबैतिरबाट सुखैसुखले परिपूर्ण भयो भन्ने हुन्छ। प्रियतमको आगमन एवं सान्निध्य भएपछि प्रेमी व्यक्तिलाई हरेक वस्तुहरूबाट आनन्द आउँछ। आफ्ना प्रियतमसँग सम्बन्धित हुनुभन्दा अगाडि ती वस्तुहरूमा खासै विशेषता नभए पनि प्रियतमको स्पर्शद्वारा त्यसमा प्रेमको सुवास भरिन्छ। यसरी व्रजमण्डलका हरेक ठाउँ, रुख, लहरा आदि सबै श्रीकृष्णद्वारा छोइएकाले ती सबैबाट आनन्दको उत्पत्ति भएको गोपिनीहरूको अनुभव रहेको छ। व्रजमण्डल सबैतिरबाट सुखैसुखले भरिनुको तात्पर्य यही नै हो।

भगवान् लोकोत्तर माधुर्यका साथ व्रजमा प्रकट हुनुभएकाले उहाँकी पत्नी लक्ष्मीजी पनि **शश्वत्** अर्थात् निरन्तर व्रजमैं आश्रित भएकी छिन् भनी बताइएको छ। कुनै पनि ठाउँको उत्कर्ष हुनका लागि त्यहाँ सम्पत्ति एवं शोभाकी अधिष्ठात्री देवी लक्ष्मीजीले वास गरेको हुनुपर्दछ। लक्ष्मीजीको वास भएपछि त्यहाँ शोभा एवं सौभाग्यमा वृद्धि हुन्छ र त्यो ठाउँको उत्कर्ष हुन्छ। व्रजमा पनि लक्ष्मीजीले त्यसको उत्कर्ष बढाउन वास गर्नुभएको हो कि ? भन्ने प्रश्नको उत्तरमा व्याख्याकारहरूले आफ्नो उत्कर्ष बढाउन नै लक्ष्मीजीले व्रजमा वास गर्नुभएको उल्लेख गरेका छन्। भगवान्‌को प्रादुर्भाव भइसकेपछि व्रजमण्डलको उत्कर्ष सर्वश्रेष्ठ भइसकेको छ। स्वयं भगवान्‌को माधुर्य एवं शोभाको अघि उहाँकी चरणसेविका लक्ष्मीको शोभाको के नै महत्त्व रहन्छ र ? त्यसैले लोकोत्तर महिमाले युक्त व्रजमण्डलमा बसी आफ्नो उत्कर्ष बढाउन नै लक्ष्मीजी त्यहाँ रहनुभएको बुझिन्छ। **श्रयते** यो आत्मनेपदको प्रयोग गरिएबाट पनि व्रजमण्डलमा आश्रय लिँदा हुने उत्कर्षरूपी फल स्वयं लक्ष्मीजीमा नै रहेको छ भन्ने सूचना मिल्छ, किनभने क्रियाको फल स्वयं कर्तामा रहेको छ भन्ने बुझाउन आत्मनेपदको प्रयोग गरिन्छ। **शश्वत्** शब्दले निरन्तर व्रजमण्डलमा आश्रित भएको भन्ने अर्थ दिएको छ। वैकुण्ठ धाममा लक्ष्मीजी केवल एउटै हुनुभएकाले उहाँले त्यहाँ भगवान्‌को सन्निधिमा रहन निरन्तर प्रयास गर्नुपर्दैन। उहाँ त्यो ठाउँमा स्वतः नै भगवत्साहचर्यकी अधिकारिणी हुनुहुन्छ। तर व्रजमण्डलमा त लक्ष्मीजीजस्ता अनेकौँ गोपिनीहरू छन् र उनीहरू नै श्रीकृष्णको लोकोत्तर माधुर्यका प्रमुख अधिकारी छन्। त्यो माधुर्यको आस्वाद आफूले कहिले गर्ने होला भनी सङ्कोच एवं हीनभावका साथ लक्ष्मीजीले व्रजको आश्रय लिनुभएको छ र एकक्षणको समय पनि व्यर्थ जाने डरले त्यसलाई कहिल्यै छाड्नुभएको छैन भन्ने यसको भाव हो।

गोपिनीहरूले आफ्नो प्राण पनि श्रीकृष्णकै अधिकारमा रहेको बताएका छन्। प्रियवियोगको कठिनतम परिस्थितिमा प्राण नै समाप्त हुनुपर्ने हो तर **त्वयि धृतासवः** अर्थात्

गोपिनीहरूको प्राण त उनीहरूको होइन, श्रीकृष्णको अधिकारमा पो छ। आफूसँग भएको वस्तुलाई मात्र आफूले चाहनेबित्तिकै छोड्न सकिन्छ, त्यसैले गोपिनीहरूले यस्तो दुःखमा पनि प्राण त्याग्न भने सकेका छैनन्। गोपिनीहरूले श्रीकृष्णलाई **दयित** अर्थात् हे प्रियतम ! भनी सम्बोधन गरेका छन्। हामी **तावकाः** अर्थात् केवल हजुरका भएकाले आफ्ना प्रेमीहरूलाई छिट्टै दर्शन दिनुहोस् भनी उनीहरूले प्रार्थना गरेका छन्। यी गोपिनीहरूको मनोभावनाको चित्रण गर्दै श्रीहरिसूरिले **दृश्यतां** अर्थात् प्रत्यक्ष देखा पर्नुहोस् भन्ने प्रार्थनालाई आधार मानी अनेक भावहरूको उद्भावन गर्नुभएको छ। गोपिनीहरू भन्छन्— हे श्रीकृष्ण ! योगासक्त अर्थात् योगमा चित्त लागेकाहरूका लागि म अत्यन्त सुलभ छु भनी हजुरले शास्त्रमा बताउनुभएको छ। हामी त **संयोगासक्तचित्त** छौं। झन् राम्रो योगमा लागेका हामीहरूलाई दर्शन नदिएपछि ती भनाइको के अर्थ भयो र ? गोपिनीहरू **संयोग** वा कृष्णमिलन चाहन्छन्, कृष्णमिलन हुनु नै सम्यक् योग हो। त्यसैले आफ्नो वचनको रक्षा गर्न पनि श्रीकृष्णले देखिनुपर्ने कुरा उनीहरूले बताएका छन्। गोपिनीहरूको अर्को भाव छ— हे कृष्ण ! हजुर गोकुललाई आनन्दित तुल्याउन र यसको उत्कर्ष बढाउन व्रजमण्डलमा जन्मनुभएको हो, यसैले हाम्रा गोकुलतिर पनि हेर्नुहोस्। हजुरले यसलाई सुखी गर्नुपर्नेमा झन् दुःख पो दिइरहनुभएको छ। यहाँ **गोकुल** भन्ने शब्दले गो अर्थात् इन्द्रियका कुल अर्थात् समूह भन्ने अर्थ पनि बुझाएको छ। **गोकुलानन्ददो भव** अर्थात् गोकुललाई आनन्दित गर्ने आफ्नो उद्देश्य पुऱ्याउन गोकुल अर्थात् हाम्रा इन्द्रियहरूलाई पनि आनन्दित पार्नुहोस्, हाम्रा सम्पूर्ण इन्द्रियसँग क्रीडा गरी त्यसको उत्कर्ष बढाउनुहोस् भन्ने गोपिनीहरूको भाव यस श्लोकमा रहेको छ।

**शरदुदाशये साधुजातसत्सरसिजोदरश्रीमुषा दृशा।**
**सुरतनाथ तेऽशुल्कदासिका वरद निघ्नतो नेह किं वधः॥ २॥**

**पदार्थ–**
**सुरतनाथ** = हे रतिक्रीडाका स्वामी
**वरद** = हे वरदाता
**शरदुदाशये** = शरत्कालीन पोखरीमा
**साधुजातसत्सरसिजोदरश्रीमुषा** = राम्ररी फक्रेको सुन्दर कमलको शोभालाई पनि हरण गर्ने
**दृशा** = आँखाद्वारा
**ते** = हजुरकै
**अशुल्कदासिका** = विना शुल्कका सेविकाहरूलाई
**निघ्नतः** = प्रहार गरिरहेका हजुरले
**इह** = यहाँ
**किं** = के
**वधः न** = वध गर्नुभएको होइन र

**वाक्यार्थ—** हे रतिक्रीडाका स्वामी ! हे वरदाता ! हामी हजुरको विना शुल्कका दासी झैं निष्काम सेवक हौं। शरत्कालीन पोखरीमा राम्ररी फक्रेका सुन्दर कमलको शोभालाई पनि हरण गर्ने ती आँखाद्वारा हजुरले हामीलाई प्रहार गरिरहनुभएको छ, के यो पनि वध नै होइन र ?

**विवरण—** यस श्लोकमा श्रीकृष्णले आफ्ना कमलभन्दा पनि सुन्दर आँखाद्वारा आफ्नो प्राणहरण गरेको गोपिनीहरूले बताएका छन्। कृष्णमिलनको उत्सुकतामा काम उत्पन्न भई उहाँलाई

सुरतनाथ भनी सम्बोधन गरिएकाले अनि श्रीकृष्णलाई पनि उपदेश दिएको भाव प्रकट भएकाले यो सात्त्विकतामसी गोपिनीहरूको भनाइ हो भनी बताइएको छ। उनीहरूले आफूलाई अशुल्कदासिका भनी बताएका छन्। भगवान्को सेवाबाट कुनै विषयको चाहना गर्ने व्यक्ति शुल्क अर्थात् तलब लिएर सेवा गर्ने तलबी नोकर जस्तो हुन्छ। त्यो प्रेमको नभई व्यापारको सम्बन्ध हो। यसलाई प्रह्लादले **न स भृत्यः स वै वणिक्** (भागवत, ७/१०/४) अर्थात् कुनै कामनाद्वारा भगवत्सेवा गर्ने व्यक्ति असली भक्त नभई व्यापारी हो, जो आफ्नो सेवाको बदलामा स्वामीबाट केही आशा राख्दछ भनी बताउनुभएको छ। कुनै पनि वस्तुको अपेक्षा नगरी निरपेक्ष भावले सेवा गर्ने व्यक्ति नै असली भक्त हो। यही अर्थ बुझाउन गोपिनीहरूले आफूलाई अशुल्कदासिका भनी बताएका छन्। यस्ता निरपेक्ष भक्तहरूमा साक्षात् मोक्षको पनि इच्छा हुँदैन। भगवत्सेवामा डुब्दा उनीहरूलाई त्योभन्दा बाहेक अरू कुनै कुराको पनि ख्याल हुँदैन। यस्ता भक्तहरूको योगक्षेम वहन गर्नु भगवान्को दायित्व हो। **तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम्** अर्थात् नित्य ममा मात्र युक्त भएका भक्तहरूको योगक्षेम म नै वहन गर्छु भनी भगवान्ले श्रीमद्भगवद्गीता (९/२२)मा प्रतिज्ञा गर्नुभएको छ। यसप्रकार हामी गोपिनीहरूको हित गर्नुपर्नेमा झन् हाम्रो सर्वस्व हरण गरी हामीलाई दुःखी बनाइदिनु उपयुक्त छैन भन्ने गोपिनीहरूको भावना रहेको छ।

यस श्लोकमा गोपिनीहरूले श्रीकृष्णलाई पापबाट डराउन सम्झाएका छन्। हजारौं राक्षसहरूको समूहलाई भगवान्ले कैयौँ पटक नष्ट गरिसक्नुभएको छ। राम आदि अवतारमा खर–दूषण आदि राक्षसहरूलाई एकैपटक संहार गर्नुभएको थियो। स्त्रीहरूको वध भने भगवान्ले धेरै गर्नुभएको छैन। पूर्वजन्ममा ताडका आदि र अहिले पूतना गरी केही स्त्रीहरूको मात्र वध भगवान्द्वारा भएको छ। आफ्नो शक्ति देखाउन हजुरले के हामी सबै गोपिनीहरूलाई एकै थलोमा मार्न खोज्नुभएको हो ? यदि यस्तै विचार हो भने, यो महाअधर्मदेखि डराउनुहोस् भनी गोपिनीहरूले सम्झाएका छन्। अर्काको सम्पत्ति चोर्नु राम्रो काम होइन, प्राणै चोरिदिनु त झनै नराम्रो काम हो। **दृशा** अर्थात् आफ्ना सुन्दर आँखाहरूद्वारा हजुरले हाम्रो प्राण नै चोर्नुभएको छ। यदि आफ्नो आँखाले चोरी गरेको थाहा छैन भने हाम्रो भनाइबाट त्यसलाई थाहा पाई तुरुन्त फिर्ता गर्नुहोस्। यदि पहिल्यै थाहा थियो भने चोरीको पाप हजुरमा पनि बढ्दै जान्छ, त्यसैले अविलम्ब त्यसलाई फिर्ता गर्नुहोस्। यहाँ गोपिनीहरूले श्रीकृष्णलाई **वरद** भनी सम्बोधन गरेका छन्। यो शब्दको स्तुतिपरक र उपहासपरक गरी दुई प्रकारको अर्थ हुन्छ। भगवान् वरदाताहरूमध्ये सर्वश्रेष्ठ हुनुहुन्छ। उहाँ आफ्ना भक्तहरूका लागि आफैँलाई पनि अर्पण गरिदिनुहुन्छ। त्यसैले हाम्रो अघि प्रकट हुनुहोस् भन्ने स्तुतिपरक अर्थ हो। उपहासपरक अर्थ गर्दा चाहिँ **वरद** शब्दको विग्रह **वरं द्यति खण्डयति** यसरी गुर्नपर्दछ। भगवान्ले अनेक शास्त्रहरूमा आफ्नो भक्तहरूको सदिच्छा पूरा गर्ने र उनीहरूलाई अभय दिने वचनबद्धता व्यक्त गर्नुभएको छ। **ये यथा मां प्रपद्यन्ते, तांस्तथैव भजाम्यहम्** (श्रीमद्भगवद्गीता ४/११) अर्थात् जसले जुन रूपले मलाई भज्दछन्, म पनि त्यही रूपले तिनलाई भज्दछु भनी भगवान्ले भन्नुभएको छ। भगवान्ले आफ्ना भक्तहरूलाई यस्ता अनेक वरहरू दिनुभएको छ। आफ्नो शरणमा आएकालाई अभय दिने त उहाँको व्रत नै रहेको छ। चीरहरणको प्रसङ्गमा पनि गोपिनीहरूको भावलाई बुझी श्रीकृष्णले **मयेमा रंस्यथ क्षपाः**

(भागवत, १०/२२/२७) अर्थात् मसँग तिमीहरूले रातहरूमा विहार गर्नेछौ भनी वर दिनुभएको थियो। ती सबै वचनहरूलाई चटक्कै बिर्सिएर हराउँदा आफैंले दिएको वर अपूर्ण भएको छ, यस्तो असत्यभाषण गर्ने दोधारे चरित्र हजुरलाई सुहाउँदैन भन्ने गोपिनीहरूको भनाइ छ।

यहाँ स्त्रीवधको प्रसङ्गलाई लिएर श्रीकृष्णभन्दा त बरु कंस नै असल भएको भावको उद्‌भावना गरिएको छ। कंसले देवकीभित्र आफ्नो शत्रु छ भन्ने थाहा पाउँदा पनि केवल स्त्री भएका कारणले **स्वसारं** अर्थात् आफ्नी बहिनी देवकीको वध गरेन। हामीभित्र त हजुरको शत्रु होइन, हजुर नै रहनुभएको छ। यो हजुरलाई पनि थाहा छ। देवकी त बरु **स्वसारम्** अर्थात् स्व-आफू नै आफ्नो सार-बल भएकी थिइन्, हामी त **त्वत्सारभूता** अर्थात् केवल हजुरकै सहारामा छौं, हाम्रो आफ्नो बल या सामर्थ्य केही पनि छैन। त्यसैले वास्तविक अबला अनि हजुरको प्रेमी हामीलाई के कारणले मार्न खोज्दै हुनुहुन्छ ? के यो कंसको भन्दा पनि बढी दुष्टता भएन र ? भन्ने गोपिनीहरूको प्रश्न रहेको छ।

**विषजलाप्ययाद् व्यालराक्षसाद् वर्षमारुताद् वैद्युतानलात्।**
**वृषमयात्मजाद् विश्वतोभयादृषभ ते वयं रक्षिता मुहुः॥ ३॥**

**पदार्थ–**
**ऋषभ** = हे पुरुषश्रेष्ठ
**विषजलाप्ययात्** = विषपूर्ण यमुनाजलबाट भएको विनाशबाट
**व्यालराक्षसात्** = अजिङ्गररूपी अघासुर दैत्यबाट
**वर्षमारुतात्** = वर्षा र हुरी-बतासबाट
**वैद्युतानलात्** = बिजुलीरूपी वज्रपातबाट
**वृषमयात्मजात्** = वृष (अरिष्टासुर) र मयपुत्र व्योमासुरबाट
**विश्वतोभयात्** = सबै डरहरूबाट पनि
**ते** = हजुरद्वारा नै
**वयं** = हामीहरू
**मुहुः** = बारम्बार
**रक्षिताः** = जोगाइएका छौं

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ ! विषपूर्ण यमुनाजलबाट भएको विनाशबाट, अजिङ्गररूपी अघासुर दैत्यबाट, वर्षा र हुरी-बतासबाट, बिजुलीरूपी वज्रपातबाट, अरिष्टासुर र व्योमासुरबाट अनि अरू सबै किसिमका डरहरूबाट पनि हामीलाई हजुरले बारम्बार रक्षा गर्नुभएको छ।

**विवरण–** यस श्लोकमा श्रीकृष्णका पुराना उपकार एवं सद्‌भावनाहरूको सम्झना गरिएको छ। अघिल्लो श्लोकमा श्रीकृष्णलाई आफन्तहरूकै वध गर्ने भनी उपहास गर्दा झन् कुरा बिग्रेला भन्ने सोची यी गोपिनीहरूले शान्तभावले श्रीकृष्णलाई सम्झाउन खोजेका छन्। गाली गर्दा या खिल्ली उडाउँदा त श्रीकृष्ण झन् निष्ठुर भई हराइरहन बेर छैन भनी डराएका गोपिनीहरूको यो समूहले उहाँका राम्रा गुणहरूको स्मरण दिलाई श्रीकृष्णलाई फकाउन खोजेका छन्। यदि अघिल्ला गोपिनीहरूको आशङ्का अनुसार वध गर्न नै खोजेको भए पहिले किन रक्षा गरेको त ? भन्ने प्रश्न पनि सोधेका छन्। **विषवृक्षोऽपि संवर्ध्य स्वयं छेत्तुमसाम्प्रतम्** अर्थात् विषको वृक्षलाई पनि आफैंले रोपेर काट्नु हुँदैन भन्ने गरिन्छ। हजुरले अनेक आपत्तिहरूबाट हामीलाई अहिलेसम्म जोगाउँदै आउनुभएको थियो। आज आएर एकाएक हामीलाई मार्न खोज्नु उपयुक्त छैन, यसो गर्दा हजुरकै

बदनाम हुन्छ। यदि आज मार्नु नै थियो भने पहिल्यै ती अनेक राक्षसहरूलाई नै मार्न दिएको भए भइहाल्थ्यो नि ? कमसेकम अबला स्त्रीहरूलाई अँध्यारो वनमा एक्लै पारी ती सबैलाई एकैपटक मार्ने भन्ने हजुरको दुर्नाम त हुँदैनथ्यो। त्यसैले किन यसो गर्न खोज्नुहुन्छ भनी प्रश्न गरिएको छ। यहाँ श्रीकृष्णलाई **ऋषभ** अर्थात् हे पुरुषश्रेष्ठ ! भनी सम्बोधन गरिएको छ। यहाँ श्रीकृष्णप्रति सद्भाव मात्र व्यक्त भएको अनि उहाँका अनेक अलौकिक पराक्रमहरूको ज्ञान पनि रहेकाले यो भनाइ विवाहितामध्ये सात्त्विकसात्त्विकी गोपिनीहरूको हो। श्रीकृष्णमा पहिले रहेको वात्सल्य एवं प्रेमको ठाउँमा आज अनौठो क्रूरता देख्दा गोपिनीहरूले यस्तो उल्टो भाव यिनमा कहाँबाट आयो भनी आश्चर्य पनि प्रकट गरेका छन्। सबभन्दा पहिले गोपिनीहरूले **विषजल** अर्थात् यमुनाको विषालु जल अनि कालिय नागलाई सम्झिएका छन्। विषालु जलमा डुबेकाले विषालु एवं क्रूर कालिय नागका शिरमाथि पाउ राख्नाले त्यसकै संसर्गले यिनमा पनि क्रूरता र विषालु स्वभाव सरेको हुन सक्छ भनी अड्कल काटेका छन्। गोपिनीहरूको मनोभाव के छ भने– कालिय क्रूरसत्त्व अर्थात् क्रूर प्राणी हो। शिरमाथि श्रीकृष्ण नाच्न थालेपछि घमन्ड नष्ट भएको त्यसले आफ्नो क्रूरता, मद जति सबै श्रीकृष्णमा नै चढाइदियो होला, अनि यिनी यति विषालु भएका होलान् भन्ने गोपिनीहरूको अड्कल देखिन्छ।

**न खलु गोपिकानन्दनो भवानखिलदेहिनामन्तरात्मदृक्।**
**विखनसार्थितो विश्वगुप्तये सख उदेयिवान् सात्वतां कुले ॥ ४ ॥**

**पदार्थ–**
**खलु** = निश्चय नै
**भवान्** = हजुर
**गोपिकानन्दनः** = गोपिनी (यशोदा)का छोरा मात्र
**न** = हुनुहुन्न
**अखिलदेहिनां** = सम्पूर्ण प्राणीहरूका
**अन्तरात्मदृक्** = हृदयभित्र रहने (अन्तर्यामी) साक्षी हुनुहुन्छ
**सखे** = हे साथी
**विखनसा** = ब्रह्माजीद्वारा
**विश्वगुप्तये** = संसारको रक्षा गर्न
**अर्थितः** = प्रार्थना गरिएका हजुर
**सात्वतां कुले** = यदुहरूको वंशमा
**उदेयिवान्** = उदाउनुभयो

**वाक्यार्थ–** श्रीकृष्ण ! हजुर केवल यशोदाका छोरा मात्र नभएर सम्पूर्ण प्राणीहरूका हृदयभित्र रहने (अन्तर्यामी) साक्षी हुनुहुन्छ। ब्रह्माजीले संसारको रक्षा गर्नका लागि अवतार लिन प्रार्थना गरेकाले हजुर यदुवंशमा जन्मिनुभएको हो।

**विवरण–** यस श्लोकमा श्रीकृष्णलाई अन्तर्यामी परमात्माको रूपमा स्तुति गरिएको छ। ब्रह्मा आदिद्वारा पनि स्तुति गरिने परमात्मरूप अनि सबैको हृदयभित्र रहने अन्तर्यामी रूपको पनि ज्ञान भएकाले यो भगवत्तालाई बुझ्ने गुणातीता गोपिनीहरूको भनाइ हो। भगवान्ले विश्वरक्षाका लागि अवतार लिनुभएको अनि उहाँ अन्तर्यामी भएको भन्ने विषयमा गोपिनीहरूका अनेक भित्री भावहरू प्रतिबिम्बित भएका देखिन्छन्। सबभन्दा पहिले गोपिनीहरूले श्रीकृष्णलाई गोपिकानन्दन नभएको बताएका छन्। गोपिकानन्दन शब्दका दुई अर्थ हुन्छन्– एउटा यशोदाको पुत्र, अनि अर्को चाहिँ व्रजवासी गोपिनीहरूलाई आनन्द दिन अनेक लीला गर्ने। भगवान् माधुर्यलीलालाई

प्रकट गर्न यशोदापुत्र पनि बन्नुभएकै हो, अनि उहाँ गोपिनीहरूलाई आनन्दित गर्ने स्वभावको पनि हुनुहुन्छ, तर यही स्वभावलाई निषेध गरी गोपिनीहरूले उहाँलाई निर्गुण-निष्क्रिय रहने गुणरहित आत्मा भनेका छन्। यसबाट गोपिनीहरूले श्रीकृष्णको अहिलेको निःस्पृहता र निर्गुणरूपतालाई नै उपहास गर्न खोजेका हुन्। हजुर यशोदापुत्र हुनुहुन्न किनभने अर्काको थोरै दुःखमा पनि पग्लिने यशोदाको पुत्र चाहिँ अनेक अबलाहरूको पुकार एवं पीडाबाट पनि नपग्लिने बानीको हुनै सक्दैन। संसारैको दुःखलाई पनि टुलुटुलु हेरिरहने अनि त्यसलाई हटाउन प्रयासै नगर्ने ? यो त अन्तर्यामी साक्षीको काम हो। भक्तवात्सल्य माधुर्य आदि सबै गुणहरू भएका हजुर त एकाएक कुनै पनि गुण नभएको त्यही साक्षी झैँ हुनुभएछ भनी श्रीकृष्णको स्वभाव बदलिएकोमा खेद प्रकट गरिएको छ।

ब्रह्माजीको प्रार्थना अनुसार विश्वरक्षाका लागि श्रीकृष्णको अवतार भएको भन्ने भनाइमा पनि धेरै कुराहरू लुकेको देखिन्छ। यसको पहिलो तात्पर्य यसप्रकार छ— ब्रह्माजीले आफ्नो सृष्टिको विस्तारमा भगवान्का विरक्त भक्तहरू बाधक हुने देखी भगवान्सँग ती विरक्त एवं भक्तहरूको विश्वासलाई नष्ट गरिदिन सल्लाह गरेछन्। **विश्व** अर्थात् संसारमा रहेका केही विश्वासी भक्तहरूमा प्रकट भएको आफ्नो विश्वस्त स्वरूपलाई पनि **गुप्ति** अर्थात् लुकाइदिइसकेपछि तिनीहरू पनि विश्वासबाट विचलित हुन्छन्। अनि संसार छाडी परमात्माको शरणमा जाने मान्छेहरू नहुँदा सबै मान्छेहरू ज्यानतोड परिश्रम गरी संसार बनाउनैतिर लाग्नेछन् भन्ने षड्यन्त्रपूर्ण प्रार्थना भएछ। यही कुरा सार्थक गर्न हजुर उत्तम व्यक्तिहरूको कुलमा जन्म लिएर हामीसँग यस्तो तुच्छ आचरण गर्दै हुनुहुन्छ। यो उचित छैन, किनभने यसबाट संसारको वास्तविक उन्नति हुँदैन भनी ब्रह्मा र भगवान्लाई उपदेश दिएको भाव यहाँ प्रकट भएको छ।

अर्को अर्थ चाहिँ **विश्वगुप्ति** अर्थात् संसारको रक्षाका लागि ब्रह्माजीले प्रार्थना गरेपछि हजुरको उत्पत्ति भएको हो भन्ने हुन्छ। दुष्टताको विनाश गरी सज्जनहरूको संरक्षण गर्नु हजुरको आगमनको मुख्य प्रयोजन हो। शरणमा आएका दुःखी र निर्बलहरूको रक्षा गर्नु पनि हजुरको कर्तव्यभित्रै पर्दछ। त्यसैले हामी अबलाको रक्षा गर्नुहोस्। रक्षणार्थक अव धातुबाट **अवन** शब्द बन्दछ। टीकाकारहरूले विश्वगुप्तिको ठाउँमा **विश्वअवन** शब्दको प्रयोग गर्नुभएको छ। विश्वको अवन वा रक्षा गर्न आएको व्यक्ति वनमा पस्नु विरोधी कुरा भएन र ? भन्ने तर्क पनि यहाँ गरिएको छ। अबला गोपिनीहरूको तिरस्कार गरी निर्गुण-निष्क्रिय बसेको विषयमा श्रीकृष्णलाई उपदेश पनि दिइएको छ।

**विरचिताभयं वृष्णिधूर्य ते चरणमीयुषां संसृतेर्भयात्।**
**करसरोरुहं कान्त कामदं शिरसि धेहि नः श्रीकरग्रहम्॥ ५॥**

पदार्थ–
**वृष्णिधूर्य** = हे यदुवंशश्रेष्ठ
**कान्त** = हे प्रियतम
**संसृतेः** = (जन्ममृत्युरूप) संसारको
**भयात्** = डरले गर्दा
**ते** = हजुरका
**चरणम्** = चरणमा
**ईयुषां** = शरण लिन आएका

प्राणीहरूलाई
**विरचिताभयं** = अभय प्रदान गर्ने
**कामदं** = चाहेको वस्तु दिने
**श्रीकरग्रहम्** = लक्ष्मीको हातलाई स्पर्श गरेका, त्यस्ता
**करसरोरुहं** = दुबै करकमल
**नः** = हाम्रो
**शिरसि** = शिरमाथि
**धेहि** = राखिदिनुहोस्

**वाक्यार्थ–** हे यदुवंशश्रेष्ठ ! जन्ममृत्युरूप संसारबाट डराई आफ्नो चरणको शरणमा आउने हरेक प्राणीलाई हजुरको हातले अभय दिन्छ। लक्ष्मीजीको हातलाई स्पर्श गरेका त्यस्ता चाहेको वस्तु दिन सक्ने हजुरका ती दुबै हातलाई हाम्रो शिरमाथि राखिदिनुहोस्।

**विवरण–** यस श्लोकमा गोपिनीहरूले श्रीकृष्णसँग आफ्नो शिरमाथि हात राखिदिन प्रार्थना गरेका छन्। यो कुमारी निर्गुणा गोपिनीहरूले गरेको प्रार्थना हो। यसलाई संवादको शैलीमा अर्थ गरिएको छ। म जगत्पति परमात्मा आफ्नै लोकमा रहन्छु। किन तिमीहरूसँग आऊँ ? भगवान्‌को यो प्रश्नको उत्तरमा गोपिनीहरूले **वृष्णिधुर्य** भन्ने शब्दको प्रयोग गरेका छन्। पृथिवीलोकका दुःखी भक्तहरूको दुःखलाई नष्ट गर्न नै हजुरले वृष्णिकुलमा जन्म लिनुभएको हो। त्यसैले अलौकिक ईश्वरीयताको कुरा बीचमा नल्याउनुहोस् भनी प्रार्थना गरिएको छ। परमात्माले स्त्रीहरूको स्पर्श गर्दै किन संसारी कामी व्यक्ति जस्तो आचरण गर्नुपर्‍यो भन्ने शङ्कामा गोपिनीहरूले लक्ष्मीको पाणिग्रहण गरेको कुरा सम्झाउन **श्रीकरग्रहम्** भन्ने पदको प्रयोग गरेका छन्। लक्ष्मीको हात समाउन हुने अनि स्त्रीस्पर्श नगर्ने धक्कु लगाउने ? भन्ने प्रश्न गरिएको छ। लक्ष्मी त पत्नी भएकाले उनीसँग शास्त्रीय रीतिले नै सम्बन्ध भएको हो, तिमीहरू त यसरी सम्बन्धित छैनौ भन्ने शङ्कामा गोपिनीहरूले आफूहरू पनि शरणमा आएकाले शास्त्र अनुसार शरणागतको इच्छा पूरा गर्नुपर्ने कर्तव्य भएको सम्झाएका छन्। लक्ष्मी पनि त शरणमा आएकीले नै हजुरले उनलाई स्वीकार गरी पत्नी बनाउनुभएको थियो। यही सोची हामी पनि हजुरको शरणमा आएका हौँ, हामीलाई किन स्वीकार नगर्ने ? भनी गोपिनीहरूले प्रश्न गरेका छन्। लक्ष्मीले झैँ आफूले पनि पतिरूपमा वरण गरिसकेको कुरालाई **कान्त** यस सम्बोधनद्वारा जनाइएको छ। भगवान् त लक्ष्मी या लक्ष्मीतुल्य श्रेष्ठगुणसम्पन्नहरूसँग मात्र विहार गर्नुहुन्छ, तिमीहरूसँग होइन भन्ने भनाइको उत्तरमा गोपिनीहरूले भगवान्‌का वरद हात शिरमाथि परे भने आफूहरू पनि साक्षात् लक्ष्मी त के, उनीभन्दा पनि सुन्दर र गुणसम्पन्न हुने विश्वास व्यक्त गरेका छन्। यही भएर यहाँ गोपिनीहरूले आफ्ना शिरमाथि हात राखिदिन प्रार्थना गरेका हुन्। भगवान्‌को हातलाई कमलतुल्य भनी करकमल भन्ने गरिन्छ। कमल पानीमा हुन्छ। पानीलाई क भनिन्छ र यो शब्दले शिरलाई पनि बुझाउँछ। त्यसैले नामसाम्य भएकाले पानीमा नभए पनि क अर्थात् शिरमाथि राखी करकमलको महत्त्व सुरक्षित राख्न यहाँ प्रार्थना गरिएको छ।

**व्रजजनार्तिहन् वीर योषितां निजजनस्मयध्वंसनस्मित।**
**भज सखे भवत्किङ्करीः स्म नो जलरुहाननं चारु दर्शय॥ ६॥**

**पदार्थ–**
**व्रजजनार्तिहन्** = व्रजवासीका पीडाहरूलाई नष्ट गर्ने
**निजजनस्मयध्वंसनस्मित** = आफ्ना प्रेमीजनको गर्वलाई नष्ट गर्ने मन्द मुस्कान भएका

**वीर** = हे परमवीर
**सखे** = हे साथी (हामीहरू)
**भवत्किङ्करीः** = हजुरका दासीहरू
**स्मः** = हौँ
**भज** = (हामीसँग) प्रेम गर्नुहोस्
**नः** = हामी
**योषितां** = स्त्रीहरूका लागि
**चारु** = सुन्दर
**जलरुहाननं** = कमल जस्तो अनुहार
**दर्शय** = देखाउनुहोस्

**वाक्यार्थ–** व्रजवासीका सम्पूर्ण पीडाहरूलाई हटाउने हे परमवीर ! हजुरको मन्द मुस्कानले मात्र हजुरका प्रेमीहरूको गर्वलाई नष्ट गरिदिन्छ। हे साथी ! हामी गोपिनीहरू हजुरका सेविका हौँ। हामीसँग प्रेम गर्नुहोस्। हामीलाई आफ्नो कमल जस्तो सुन्दर अनुहार चाँडै देखाउनुहोस्।

**विवरण–** यस श्लोकमा श्रीकृष्णलाई कमल जस्तो सुन्दर आफ्नो अनुहार देखाउन प्रार्थना गरिएको छ। यो कुमारी गोपिनीहरूमध्ये सात्त्विकसात्त्विकीले गरेको स्तुति हो। यहाँ सबभन्दा पहिला व्रजमण्डलका सबै व्यक्तिहरूका दुःखलाई नष्ट गर्न श्रीकृष्ण यहाँ आएको उद्देश्यलाई सम्झाइएको छ। **व्रजजन** अर्थात् सामान्य गाउँमा बस्ने साधारण व्यक्तिहरूको दुःखलाई नष्ट गर्नु श्रीकृष्णको कर्तव्य हो। हामी त श्रीकृष्णको लागि सम्पूर्ण विधिव्यवहारलाई चटक्कै छाडी प्रव्रजन गरेका विशेष व्यक्ति हौँ। हाम्रो दुःख नष्ट गर्नु उहाँको झन् मुख्य दायित्व हो। त्यसैले उहाँले यसबाट भाग्न हुँदैन भन्ने भाव यहाँ व्यक्त भएको छ। **भवत्किङ्करी** भन्ने शब्दले आफूहरू श्रीकृष्णमा नै पूर्णतया आश्रित रहेको भन्ने जनाइएको छ। आफ्नो सेवकको दुःख स्वामीले आफैँ नष्ट गर्नुपर्दछ। अरू कसैको शरणमा गई दुःख नष्ट गर्नुपर्‍यो भने त्यस्तो स्वामी भएको के काम भयो र ? फेरि श्रीकृष्णले श्रीमद्भगवद्गीता (६/३०)मा **तस्याहं न प्रणश्यामि स च मे न प्रणश्यति** अर्थात् मेरा भक्तहरूका लागि म अनि मेरा लागि उनीहरू कहिल्यै टाढा हुँदैनौँ भनी प्रतिज्ञा पनि त गर्नुभएको छ। त्यसैले भक्तरक्षाको आफ्नो प्रतिज्ञा पूरा गर्न सेविकाहरूमा दया गर्नुपर्ने भाव गोपिनीहरूले व्यक्त गरेका छन्। श्रीहरिसूरि श्रीभक्तिरसायन टीकामा लेख्नुहुन्छ– **वेतनं नान्यदिच्छामस्त्वन्मुखाब्जनिरीक्षणात्** अर्थात् हामी हजुरको मुखकमलको दर्शन गर्नुभन्दा अरू कुनै पनि शुल्क या तलब चाहदैनौँ। हामी त्यस्ता किङ्करी या सेविका हौँ, जो केवल स्वामीको प्रसन्न मुखकमलको दर्शनले मात्र सन्तुष्ट हुन्छन्, अरू कुनै वस्तुको चाहना गर्दैनन्। यस्ता प्रेमी सेवकहरूमाथि त स्वामीले कृपादृष्टि झन् बढी गर्नुपर्नेमा हजुर किन हामीलाई दर्शनै नदिई हराउनुहुन्छ भनी गोपिनीहरूले प्रश्न पनि गरेका छन्। यहाँ श्रीकृष्णलाई **वीर** भनी सम्बोधन गरिएको छ। वीरहरूले मात्र शूरवीर शत्रुहरूको सामना गरी तिनलाई हराउन सक्छन्। हामी त अबला छौँ, जगतैलाई जितेको कामदेवले हाम्रो मनको किल्लालाई पनि सजिलैसँग कब्जामा लिइहाल्यो। अब हजुर पनि छिट्टै प्रकट भई आँखाको माध्यमले हाम्रो हृदयभित्र पसी त्यो आफूलाई विश्वविजयी मान्ने कामदेवलाई परास्त गरिहाल्नुहोस्। नत्र त्यो शत्रुले हामीलाई धेरै दुःख दिनेछ भन्ने भाव यहाँ प्रकट भएको छ।

**प्रणतदेहिनां पापकर्शनं तृणचरानुगं श्रीनिकेतनम्।**
**फणिफणार्पितं ते पदाम्बुजं कृणु कुचेषु नः कृन्धि हृच्छयम्॥ ७॥**

**पदार्थ–**

**प्रणतदेहिनां** = शरणमा आएका प्राणीहरूको
**पापकर्शनं** = पाप नाश गरिदिने
**तृणचरानुगं** = घाँस खाने (गाई) सँगै पछि लाग्ने
**श्रीनिकेतनम्** = लक्ष्मीजीको वासस्थान भएका
**फणिफणार्पितं** = कालिय नागको फणामाथि राखिएका (नाचेका)
**ते** = हजुरका
**पदाम्बुजं** = चरणकमल
**नः** = हाम्रा
**कुचेषु** = स्तनहरूमाथि
**कृणु** = राखिदिनुहोस्
**हृच्छयम्** = हृदयको पीडा (कामवासना)लाई
**कृन्धि** = नष्ट गरिदिनुहोस्

**वाक्यार्थ–** आफ्ना शरणमा आएका प्राणीहरूको पापलाई नष्ट गर्ने हजुरका चरण लक्ष्मीजीको पनि वासस्थान हुन्। गाईहरूको पछि-पछि लाग्दै व्रजमण्डलमा घुम्ने अनि कालियनागका फणामाथि नाचेका तिनै चरणलाई हाम्रा स्तनमाथि राखिदिनुहोस् र हाम्रो हृदयको पीडा (कामवासना)लाई नष्ट गरिदिनुहोस्।

**विवरण–** यस श्लोकमा कुमारी गोपिनीहरूले आफ्ना स्तनहरूमा चरण राखिदिन श्रीकृष्णसँग प्रार्थना गरेका छन्। कृष्णमिलनको काम तीव्र रूपमा देखिएकाले अनि त्यो भावको तीव्रतामा सामान्य लौकिक बुद्धिलाई पूरै बिर्सिएकाले यो भनाइ सात्त्विकतामसी गोपिनीहरूको हो। हजुरका चरणकमल **फणिफण** अर्थात् कालिय नागका फणामाथि पनि चढिसकेका छन्। नागको शिरमाथि चढ्न पनि नहिच्किचाउने ती चरणलाई हाम्रो हृदयमाथि चढ्न के आपत्ति होला र? आफ्नो हृदयमा भगवान्को चरणलाई राखिहाल्न चाहने गोपिनीहरूले त्यही तीव्रतामा आफ्नो भावलाई नै भुली स्तनमाथि चरण राख्ने प्रार्थना गर्न पुगेका छन्। यो सम्पूर्ण प्रार्थना हृदयभित्रको कामलाई शान्त गर्ने प्रार्थना हो। कालिय नागको फणामा नाचेको सम्झना गर्दा त्यहाँभित्र गोपिनीहरूका अनेक मनोभावहरू प्रतिबिम्बित भएका छन्। कालियले कुनै प्रार्थना नगर्दा पनि हजुरले उसका शिरमाथि आफ्नो चरणलाई राख्नुभयो, हामीले यति प्रार्थना गर्दा पनि हाम्रो हृदयमा के आफ्ना चरणकमललाई राख्नुहुन्न? कालियको विषालु एवं कठोर शिरमा नाच्नुभन्दा त हाम्रो सरस एवं कोमल हृदय नै हजुरका सुकोमल चरणकमलको लागि उपयुक्त हुन्छ। त्यसैले हाम्रो हृदयभित्र आउनुहोस् भनी गोपिनीहरूले प्रार्थना गरेका छन्।

म अभिमानीहरूको मदलाई नष्ट गर्न मात्र आफ्ना चरणको प्रयोग गर्छु, जहाँसुकै होइन भन्ने श्रीकृष्णको भावको कल्पना गरी त्यसको उत्तरमा गोपिनीहरू भन्छन्– हाम्रो हृदयभित्र रहेको कामदेव पनि असाध्यै मदमत्त भएको छ। ऊ आफूलाई हजुरभन्दा ठुलो ठान्छ। हजुर केही योगयुक्तहरूको हृदयभित्र मात्र बस्नुहुन्छ, ऊ सम्पूर्ण प्राणीहरूको हृदयभित्र रही हजुरभन्दा व्यापक भएको धाक देखाउँछ। त्यही फुर्ती देखाउन यसले हामी हजुरका सेविकाको हृदयभित्र प्रवेश गरी मात्तिन थालेको छ। त्यसैले कालियलाई दण्ड दिए झैँ यसलाई पनि चरणदण्डको प्रहारले मदरहित बनाइदिनुहोस् भनी गोपिनीहरूले प्रार्थना गरेका छन्। कालियले त म नजिक हुँदा पनि मलाई प्रणाम नगरी घमन्डी भई बसेकाले त्यसलाई दण्ड दिएको हुँ, कामदेवले त मेरो अपमान गरेको छैन किन दण्ड दिने भन्ने श्रीकृष्णको भावको उत्तरमा गोपिनीहरू भन्छन्– यसले हजुरको अनादर पनि गरेको छ। हाम्रो मनभित्र केवल हजुरको चरणको मात्र वास छ भन्ने थाहा पाउँदा पाउँदै पनि यो घमन्डी कामदेव विश्वविजयी भएको धुनमा हजुरको चरणलाई प्रणाम नगरी हाम्रो

हृदयभित्र ढसमस्स बसेको छ र उत्पात मच्चाइरहेको छ। त्यसैले हजुरको अपमान गरी हाम्रो मनमा बस्ने कामदेवलाई हजुरले आफ्नो चरणको प्रहारले दण्ड दिई शिक्षा दिनुहोस् भनी गोपिनीहरूले प्रार्थना गरेका छन्।

**कृन्धि हृच्छयम्** अर्थात् हामीभित्रको कामलाई नष्ट गरिदिनुहोस् भन्नु नै प्रार्थनाको मुख्य विषय हो। यसमा गोपिनीहरूका अनेक मनोभावहरू प्रकट भएका छन्। कामदेवलाई परास्त गर्न बाहिरी अस्त्रले पक्कै काम गर्दैन। **दितिज** अर्थात् दितिबाट जन्मिएका दैत्यहरूलाई नष्ट गर्न त सुदर्शन अस्त्रलाई धारण गर्नुभएको छ भने **मनोज** अर्थात् मनबाट जन्मिने कामदेवलाई नष्ट गर्न कुन अस्त्र छ हजुरसँग ? त्यसको तयारी गरिहाल्नुहोस् भनी गोपिनीहरूले श्रीकृष्णलाई सम्झाएका छन्। कामरूपी राक्षसले एकपटक हरण गर्न भ्यायो भने हामीलाई स्वीकार गर्न पछि हजुरलाई धेरै झन्झट आउन सक्छ, त्यसैले पहिल्यै सावधान भइहाल्नुहोस् भनी रामावतारको प्रसङ्ग पनि यहाँ सम्झाइएको छ। रामावतारमा राक्षसले हरण गरेकी आफ्नी प्रेयसी सीतालाई स्वीकार गर्न श्रीरामलाई धेरै कठिन भएको थियो। अहिले हामीलाई पनि यो कामदेवरूपी राक्षसले हरण गर्न खोज्दैछ, यसको निवारण अहिले नै गरिहाल्नुहोस्। वन-वनमा नदौडनुहोस्, हाम्रो अघि सहायता गर्न उपस्थित हुनुहोस् भनी गोपिनीहरूले सम्झाएका छन्। कामलाई जित्न म समर्थ हुँला त ? भन्ने भगवान्ले शङ्का गरेको भावना गरी यही समूहका केही गोपिनीहरूले श्रीकृष्णलाई उहाँकै सामर्थ्य सम्झाउँदै भन्छन्। कामदेव पुष्पधन्वा हो, अर्थात् उसको धनु केवल फूलको रहेको छ। हजुर भने शार्ङ्गधन्वा हुनुहुन्छ। हजुरको धनुका अगाडि त्यो फूलको धनु टिक्नै सक्दैन। फेरि त्यसलाई पञ्चबाण भनिन्छ। त्यसका केवल पाँच ओटा मात्र बाण छन्, हजुरसँग भने अनन्त बाण छन्। त्यसैले हजुर बलशाली भएकाले कामविजयमा निःशङ्क बन्नुहोस्। बरु छिटो यसलाई परास्त गर्न हाम्रो हृदयभित्र आइहाल्नुहोस् भनी गोपिनीहरूले प्रार्थना गरेका छन्।

**मधुरया गिरा वल्गुवाक्यया बुधमनोज्ञया पुष्करेक्षण।**
**विधिकरीरिमा वीर मुह्यतीरधरसीधुनाप्याययस्व नः॥ ८॥**

**पदार्थ–**
**पुष्करेक्षण** = हे कमलनयन
**वीर** = हे वीर
**बुधमनोज्ञया** = विद्वान्हरूको मनलाई पनि जित्ने
**वल्गुवाक्यया** = मिठा वाक्य भएका
**मधुरया** = मधुर
**गिरा** = वाणीद्वारा
**मुह्यतीः** = मोहित भइरहेका
**इमाः** = यी
**विधिकरीः** = (हजुरको) आज्ञा पूरा गर्ने
**नः** = हामी स्त्रीहरूलाई
**अधरसीधुना** = अधरामृतद्वारा
**आप्याययस्व** = जीवित गराउनुहोस्

**वाक्यार्थ–** हे कमलनयन ! हे वीर ! मिठा वाक्यले युक्त हजुरको मधुर वाणीले विद्वान्हरूको मनलाई पनि आकर्षित गर्छ। हजुरका आज्ञापालन गर्ने यी हामी सबै स्त्रीहरू त्यसद्वारा मोहित भइरहेका छौँ। हामीलाई आफ्नो अधरामृत पियाएर जीवित बनाउनुहोस्।

**विवरण–** यस श्लोकमा गोपिनीहरूले आफूहरूलाई अधरामृतद्वारा उज्जीवित गर्न प्रार्थना गरेका

छन्। हजुरको विचित्र भनाइले युक्त मिठो स्वर **बुधमनोज्ञ** अर्थात् ठुला विद्वान्हरूलाई मन पर्ने र उनीहरूलाई वशमा पार्न सक्ने शक्तिले युक्त छ। हजुरका आँखा पनि कमलपुष्प झैं तापलाई नष्ट गर्ने खालका छन्। प्रियविरहको अवस्थामा पुराना संयोगका अनुभवहरू पनि असीम ताप दिने एवं मूर्च्छा गराउने हुन्छन्। हामी हजुरका तिनै विचित्र बोलीचाली सम्झँदै मोहित भइरहेका छौँ भनी गोपिनीहरूले बताएका छन्। श्रीकृष्णको मधुर वचनको विशेष प्रशंसा गरेर गोपिनीहरूले आफूले फेरि तिनै मधुर वचन सुन्न चाहेको कुरा व्यक्त गरेका छन्। **पुष्करेक्षण** अर्थात् हे कमलनयन ! भनी सम्बोधन गरेबाट उनीहरूले भगवान्को विचित्र हेराइलाई पनि चाहेका छन् भन्ने थाहा हुन्छ। यी दुबै हुँदाहुँदै पनि आफूलाई मोहको अवस्थाबाट बचाउन भने श्रीकृष्णको **अधरामृत** नै चाहिने गोपिनीहरूको ठहर रहेको छ। मोह भनेको मृत्युको पूर्वावस्था हो। अमृत पियाए मात्र त्यो अवस्थामा पुगिसकेको व्यक्तिलाई बचाउन सकिन्छ। अरू सामान्य उपचारले त्यहाँ काम गर्दैन। त्यसैले **अधरामृत** अर्थात् ओठमा रहेको दिव्य अमृतको नै पान गराई आफ्नो मोह छुटाउनुपर्ने गोपिनीहरूको भावना देखिन्छ। यो त अधरामृत अर्थात् पृथिवीमा पाइने अमृत होइन, अधरामृत अर्थात् अलौकिक अमृत हो। **वीर** भनी गरिएको सम्बोधनले कृष्णको सामर्थ्यलाई सूचित गरेको छ। शरणमा आएका दुःखीहरूको दुःखलाई हटाउन सक्नु नै असली वीरता हो। हामी हजुरको शरणमा छौँ, तर मूर्च्छावस्थामा पुग्न लागिसकेका छौँ। हजुरको वियोगको असह्य ज्वालाले भित्रभित्रै जली मृत्युको मुखमा पुग्न लागेका हामीलाई अधरामृतको शीतल रस नपियाई बचाउन सकिने अवस्था छैन। जति हजुरको वियोग बढ्छ, त्यति हजुरसँग बोलेका, हिँडडुल गरेका अनुभवहरू सम्झनामा आई हाम्रो ताप–ज्वालालाई बढाइरहेका छन्। त्यसैले शरणमा आएका हामीलाई रक्षा गरी आफ्नो वीरतालाई सार्थक गर्नुहोस् भनी गोपिनीहरूले प्रार्थना गरेका छन्।

यो श्लोकमा भगवान्सँग तीनथरी अनुरोध गरिएको छ। **वक्तव्याः** अर्थात् मिठो वचनले हामीसँग बोल्नुपर्दछ, **द्रष्टव्याः** अर्थात् आफ्ना कमलसमान नयनले हामीलाई हेर्नुपर्दछ र **पाययितव्याः** अर्थात् आफ्नो अधरामृतको पान पनि गराउनुपर्छ। यहाँ भगवान्का मधुर बोलीहरू सम्झिएर ती पुराना वचनको सत्यता सिद्ध गर्ने आग्रह पनि गरिएको छ। भगवान्को वचन भनी यहाँ दुई प्रकारका वचनहरूलाई बताउन खोजिएको छ। एउटा श्रुतिरूप वचन र अर्को यही जन्ममा पहिले बोलिएका वचनहरू। यी सबै ठाउँमा भगवान्ले आफ्ना भक्तहरूले दृढ भावना गरे या समर्पण गरे भने आफू अवश्य मिल्ने कुरा बताइरहनुभएको छ। कठोपनिषद् (१/२/२३)मा बताइएको छ— **यमेवैष वृणुते तेन लभ्यस्तस्यैष आत्मा विवृणुते तनूं स्वाम्** अर्थात् जुन व्यक्तिले पूर्णभावका साथ परमात्माको वरण गर्दछ या उसलाई स्विकार्दछ, त्यही व्यक्तिको लागि परमात्माले पनि आफ्नो यथार्थ स्वरूप प्रकट गरिदिनुहुन्छ। यसको सत्यताका लागि पनि हजुरमा पूर्ण समर्पित भएका हाम्रा अघि हजुरले प्रकट हुनुपर्ने बाध्यता छ। फेरि यही जन्ममा पनि पहिले हामीलाई फकाउँदै हजुरले आफूसँग मिलन हुने सपना देखाउँदै आउनुभएको हो। ती विचित्र एवं मधुर वचनहरूलाई सार्थक पार्नुहोस्। नत्र सम्पूर्ण शास्त्र अप्रामाणिक एवं व्यर्थ भए लोकको मर्यादा नै नष्ट होला नि भनी गोपिनीहरूले यहाँ सम्झाएका छन्। मैले तिमीहरूले भनेको कुरा किन मान्ने ? भन्ने भावको उत्तरमा गोपिनीहरूले आफूहरू **विधिकरीः** अर्थात् हजुरको आज्ञा

पालन गर्ने सेविका भएकाले हाम्रो इच्छा पनि पूरा गर्नुहोस् भन्ने आग्रह गरेका छन्।

**तव कथामृतं तप्तजीवनं कविभिरीडितं कल्मषापहम्।**
**श्रवणमङ्गलं श्रीमदाततं भुवि गृणन्ति ते भूरिदा जनाः॥ ९॥**

**पदार्थ–**
**कविभिः** = कविहरूद्वारा
**ईडितं** = प्रशंसा गरिएको
**कल्मषापहम्** = पापलाई नष्ट गर्ने
**तप्तजीवनं** = (आध्यात्मिक, आधिदैविक र आधिभौतिक तापद्वारा) तप्त भएकाहरूलाई जीवन दिने
**श्रवणमङ्गलं** = सुन्दा कल्याण गर्ने
**श्रीमत्** = परम शान्ति दिने
**तव** = हजुरको
**कथामृतं** = कथारूपी अमृतलाई
**भुवि** = संसारमा
**आततं** = फैलिने गरी
**गृणन्ति** = (जो) वर्णन गर्दछन्
**ते** = ती
**जनाः** = व्यक्तिहरू
**भूरिदाः** = ठुला दाता हुन्

**वाक्यार्थ–** हजुरको लीलाचरित्ररूपी अमृत आध्यात्मिक, आधिदैविक र आधिभौतिक तीन तापबाट पिल्सिएका हामीजस्ताको जीवन दिनका लागि अमृतस्वरूप छ। सम्पूर्ण पापहरूलाई नष्ट गर्ने, सुन्दा मात्र नै कल्याण गरिहाल्ने, परम शान्ति दिने र कविद्वारा प्रंशसित त्यो कथारूप अमृतलाई जो व्यक्तिहरू संसारभर फैलने गरी गाउँदै हिँड्दछन् ती व्यक्तिहरू (हामीजस्तालाई जीवन नै दिने हुनाले) सबैभन्दा ठुला दाता हुन्।

**विवरण–** मेरो वियोग असह्य भएको भए त्यसबाट मूर्च्छित या प्राणशून्य भइसक्नुपर्ने किन बाँचिरहेका र किन बोलिरहेका ? भन्ने भावको उत्तरमा गोपिनीहरूले भगवान्को कथामृतले नै उनीहरूलाई बँचाएको बताएका छन्। यहाँ भगवान्को कथामृत र सबैलाई कथाको अमृत बाँड्दै हिँड्ने सत्पुरुषहरूको कारणले नै आफूहरू जीवित रहेको बताइएको छ। यहाँ भगवत्कथालाई अमृत भनिएको छ, तर त्यो अमृत देवभोग्य साधारण अमृत नभई त्योभन्दा धेरै विशिष्ट भएको जनाउन अनेक विशेषणहरूको प्रयोग गरिएको छ। भगवान्को कथा अमृततुल्य छ, त्यसलाई पिउनाले दुःखीहरूका सम्पूर्ण दुःखहरू नष्ट हुन्छन्। **तप्तानां जीवनम्** अर्थात् संसारको तापले तप्त भएका मरणासन्न प्राणीहरूलाई पनि बचाउन भगवान्को कथा नै समर्थ छ। देवताहरूको अमृतले संसारको तापबाट कसैलाई पनि जोगाउन सक्दैन। त्यसैले त्योभन्दा भगवान्को कथा नै विशेष छ। ब्रह्मज्ञानी शुकदेवले कथारूपी अमृतको प्रशंसा यसरी गर्नुभएको छ– **श्रोतव्यः कीर्तितव्यश्च स्मर्तव्यश्चेच्छताभयम्** (भागवत २/१/५) अर्थात् अभय चाहने व्यक्तिले भगवत्कथा नै सुन्नुपर्छ, भन्नुपर्छ र सम्झिनुपर्छ। कथाको सामने अमृत त मणिको अघि सिसाको टुक्राजस्तै तुच्छ हुन्छ। पद्मपुराणोक्त भागवत माहात्म्य (१/१६)मा श्रीशुकदेवले देवताहरूले राजा परीक्षित्लाई 'हजुरले स्वर्गको अमृत लिनुहोस् र भगवान्को कथारूपी अमृत हामीहरूलाई दिनुहोस्' भन्दा 'कहाँ काँच जस्तो अमृत कहाँ मणिजस्तो भगवान्को कथा' भनी अमृतसँग भगवान्को कथाको विनिमय हुन सक्दैन भन्नुभएको छ। यसरी ज्ञानी महापुरुषहरूले देवताको अमृतभन्दा कथारूपी अमृतको प्रशंसा गरेका छन्। यसै गरी भगवत्कथाले **कल्मष** अर्थात् सम्पूर्ण पापहरूलाई पनि समूल नष्ट गरिदिन्छ।

यो यस अमृतको अर्को विशेषता हो। यसले सुन्नेबित्तिकै आफ्नो राम्रो प्रभाव देखाइहाल्दछ। यसलाई प्राप्त गर्न केवल सुनिदिए मात्र पुग्छ, तर देवताको अमृतलाई पाउन सुनेर मात्र पुग्दैन, यज्ञ आदिको अनुष्ठान पनि गर्नुपर्दछ। यो अमृत शान्तिदायक छ भने स्वर्गको अमृत मादक छ, त्यसले रूप, यौवन आदिको अभिमान बढाइदिन्छ। कथारूपी अमृतलाई सबै लोकमा फैलाउँदै रहने भगवद्भक्त आत्मज्ञ महापुरुषहरू महाज्ञानी छन्, उनीहरूले नै मरणासन्न भएका हामीहरूलाई जीवन नै दान दिएका छन् भनी गोपिनीहरू भन्दछन्। तिनीहरूबाट कथा सुनी त्यो अमृतको पान गर्नाले नै विरहको तीव्र तापको बीचमा पनि हामी बाँचिरहेका छौँ भन्ने गोपिनीरूको आशय रहेको छ।

यहाँ केही टीकाकारहरूले मोक्षरूपी अमृतभन्दा पनि कथारूपी अमृत अरु विशिष्ट रहेको भनी व्याख्या गरेका छन्। यद्यपि मोक्षरूपी अमृतले पनि संसारको तापबाट जलेका प्राणीहरूलाई शान्ति दिई जीवित गराइदिन्छ र सम्पूर्ण कल्मषहरूलाई नष्ट पनि गर्दछ। तर कथारूपी अमृतमा त्यसभन्दा पनि बढी विशेषताहरू रहेका छन्। **कविभिः** अर्थात् भगवान्का विशेष भक्त ध्रुव, प्रह्लाद आदिले मोक्षभन्दा पनि विशेष रूपमा भगवत्कथाको आनन्दलाई **ईडितम्** अर्थात् प्रशंसा गरेका छन्। भगवान्को कथाश्रवण अनि ध्यानचिन्तनबाट जुन **निर्वृत्ति** अर्थात् परम सुख प्राप्त हुन्छ, त्यो सुख स्वप्रकाश ब्रह्ममा पनि प्राप्त हुँदैन भने समय समाप्त भएपछि आफ्नो भोगबाट खस्नुपर्ने देवलोकका निवासीहरूलाई के प्राप्त हुन्थ्यो र ? **सा ब्रह्मणि स्वमहिमन्यपि नाथ मा भूत्, किन्त्वन्तकासिलुलितात् पततां विमानात्** (भागवत ४/९/१०)। मोक्षको सुख भनेको परमानन्दरूप आत्मामा गई पूरै मिल्नु हो, यसमा सुखको आस्वादन गर्ने छुट्टै व्यक्ति बाँकी रहँदैन। यसरी मुक्त व्यक्ति स्वयं अखण्ड सुखरूप नै भइहाल्छ। भक्तहरूका अनुसार भने सुखरूप हुनुभन्दा त्यसभन्दा छुट्टै रही त्यसको आस्वादन गर्नु असल हो। यही आस्वाद लिने दृष्टिले नै मोक्षसुखभन्दा भजनको सुखलाई श्रेष्ठ भनिएको हो। भगवत्कथारूपी अमृतले प्रेमलाई फिँजाउन पनि सक्छ। यसरी यहाँ कथारूपी अमृत मोक्षसुखभन्दा पनि विशिष्ट रहेको भाव निस्कन्छ। कथामृतमा रहेको अर्को मुख्य विशेषता चाहिँ के हो भने यसलाई प्राप्त गर्न सजिलो छ। मोक्षसुख पाउनका लागि व्यक्तिले सम्पूर्ण संसारलाई चटक्क छाडी आत्मचिन्तन गरी साधना गर्नुपर्दछ। यो एकान्तमा गएर एक्लाएक्लै पाइने सुख हो। कथा या नामसङ्कीर्तनको अमृत पाउन त संसारलाई छाडी जानुपर्दैन। सामूहिक रूपमा पनि पाउन सकिने अनि त्यति परिश्रम पनि गर्न नपर्ने भएकाले पनि यो कथामृतको महत्त्व भएको छ।

यस पद्यको अर्को प्रकारले अर्थ गर्दा गोपिनीहरूले भगवान्को कथारूपी अमृत अनावश्यक एवं निन्दित भएको भाव व्यक्त गरेका छन्। गोपिनीहरू श्रीकृष्णसँग प्रकट भई देखिनका लागि प्रार्थना गर्दैछन्। उनीहरूले कृष्णविना आफूहरूको मृत्यु नै हुन सक्ने बताइसकेपछि मानौँ भगवान्ले म अलि पछि प्रकट हुन्छु, त्यतिञ्जेल मेरो कथारूपी अमृत पिएर बाँच भन्नुभयो। यसको तत्काल उत्तर दिँदै गोपिनीहरू आफूहरूलाई श्रीकृष्णका विषयमा गफ या कहानीहरू नचाहिएको बरु श्रीकृष्ण नै चाहिएको बताउँदैछन्। यो अर्थ लाग्नका लागि **कथामृतं** नभनी **कथा मृतं** भन्नुपर्छ। **तव कथा** अर्थात् हजुरको कथा **मृतं** अर्थात् मृत्युकारक महाविषसमान छ। हामी उँ

भ्रममा परी जसले एकपटक पनि यो विष पिउँछ भने त्यसको सम्पूर्ण जीवन **तप्त** हुन्छ अर्थात् प्रियविरहको अग्निमा जलिरहन्छ। जब प्रियसँग वियोग हुन्छ, तब उनीसँग संयोग भएका पुराना घटना-कथाहरू सबै झन् मूर्च्छाकारक हुन्छन्। त्यसको सम्झना हुँदा व्यक्तिहरू झन् तड्पिन्छन्। गोपिनीहरूमा पनि ती पुराना मिलनका यादहरूले असह्य वेदना उत्पन्न गरिरहेका छन्। त्यसैले त्यही वेदनाको प्रकाश उनीहरू गरिरहेका छन्। मेरो कथा यस्तो पीडाकारक भए महापुरुषहरूले किन प्रशंसा गरेका त ? भन्दा गोपिनीहरू ती सबै मूर्ख भएको आरोप लगाउँछन्। यहाँ यस प्रसङ्गमा व्यास आदि सबै कथाप्रशंसकहरू घुस्याहा भएको आरोपको उद्भावन पनि गरिएको छ। व्यास आदिले भगवान्‌को चरित्र चन्द्रभन्दा पनि सुशीतल एवं सम्पूर्ण तापलाई नष्ट गर्न समर्थ छ भनी बताए तापनि हजुरले आफ्नो असली चरित्र त हामी अघि प्रकट गरिहाल्नुभयो। यस्ता निर्दयी हजुरको त्यतिविधि प्रशंसा गर्ने तिनीहरूले हजुरबाट राम्रै पुरस्कार लिएको हुनुपर्दछ। नत्र किन यस्तो उल्टो कुरा बताए भनी प्रश्न सोधिएको भाव पनि अभिव्यक्त भएको छ। यदि शास्त्र अनुसार भगवान्‌को कथा **कल्मषापहं** वा पापनाशक छ भने पनि आफूहरू पापी नभएकाले आफ्ना लागि त्यो अनावश्यक भएको गोपिनीहरूको ठहर छ। फेरि श्रीकृष्णको चरित्र **श्रवणमङ्गलम्** अर्थात् केवल कुरै कुरामा सुन्दा मात्र मङ्गलयुक्त छ, त्यसको कुनै पनि परिणाम मङ्गलकारक छैन। आफ्नै प्रेमीहरूलाई पनि पीडित गर्ने यस्तो कथालाई पनि **श्रीमत्** अर्थात् कल्याणमय भनी संसारभर **आततम्** अर्थात् फिँजाउने व्यक्तिहरू निश्चय नै परपीडक हुन्। यो अर्थ गर्दा **भूरिद** शब्दको व्युत्पत्ति **भूरि-सर्वस्वं प्राणमपि, द्यति-खण्डयति** भनी गर्नुपर्दछ। हाम्रो सर्वस्व अनि प्राणसम्मैं हरण गर्नका लागि नै विरहको ज्वाला झन् झन् फैलाउने कृष्णकथा फिँजाइएको हो, यस्तो कथा हामीलाई चाहिँदैन भन्ने गोपिनीहरूको निश्चय छ। यसरी यस श्लोकको दुई प्रकारले अर्थ गर्न सकिने भए पनि पहिलो अर्थ नै बढी ग्राह्य छ। यसप्रकार राजससात्त्विकी कुमारी गोपिनीहरूले गरेको यो प्रार्थनामा अनेक भावहरू रहेका छन्।

**प्रहसितं प्रिय प्रेमवीक्षणं विहरणं च ते ध्यानमङ्गलम्।**
**रहसि संविदो या हृदिस्पृशः कुहक नो मनः क्षोभयन्ति हि ॥ १० ॥**

**पदार्थ–**
**प्रिय** = हे प्यारा
**ते** = हजुरको
**प्रहसितं** = हँसाइ
**प्रेमवीक्षणं** = प्रेमपूर्ण हेराइ र
**विहरणं च** = विहार पनि
**ध्यानमङ्गलम्** = चिन्तन गर्नेलाई मङ्गल दिने खालका छन्
**कुहक** = हे छल गर्न सिपालु
**रहसि** = एकान्तमा
**याः** = जुन-जुन हजुरले गरेका
**हृदिस्पृशः** = मन छुने किसिमका
**संविदः** = हाँसखेल आदि ठट्टाहरू छन् (तिनले)
**नः** = हाम्रो
**मनः** = मनलाई
**हि** = निश्चय नै
**क्षोभयन्ति** = विचलित बनाइरहेका छन्

**वाक्यार्थ–** हे प्यारा ! हजुरको मन्द मुस्कान, प्रेमपूर्ण हेराइ र हिँडाइ यी सबै नै चिन्तन गर्दा मङ्गल दिने खालका छन्। हे छल गर्न सिपालु श्रीकृष्ण ! वनको एकान्त प्रदेशमा हजुरले हामीसँग

मनलाई छुने किसिमका हाँसखेल आदि ठट्टाहरू गर्नुभएको थियो, ती सबैले अहिले हाम्रो मनलाई चञ्चल बनाइरहेका छन्।

**विवरण–** यो राजसराजसी गोपिनीहरूले गरेको प्रार्थना हो। यसमा गोपिनीहरूले श्रीकृष्णलाई स्पष्टतः **कुहक** अर्थात् छलकारी ! भनी सम्बोधन गरेका छन्। श्रीकृष्णको हँसाइ, प्रेमपूर्ण हेराइ र मस्त चालको हिँडाइ तीन ओटै ध्यानका लागि मङ्गलमय भएको पनि बताएका छन्। यस प्रसङ्गबाट भगवान्को कसरी ध्यान गर्नुपर्दछ भन्ने रहस्य पनि प्रकट भएको छ। भगवान्को चिन्तन गर्दा स्थिर एवं जडमूर्तिको रूपमा उहाँको चिन्तन गर्नु त्यति लाभदायक छैन। भगवान् त सजीव चञ्चल हुनुहुन्छ। भगवान्को चरण, मुहार आदि जेको चिन्तन गरे पनि त्यसमा प्राणको प्रवाहको अनुभव गर्नुपर्दछ। सजीव भएका ईश्वरले नै हाम्रो कल्याण गर्नुहुन्छ। यसरी चलमलाउँदो रूपमा चिन्तन गरेपछि त्यहाँ मन पनि अडिइरहन्छ। गोपिनीहरूकै भनाइको क्रम अनुसार भगवान् मुसुक्क हाँसिरहनुभएको छ, उहाँ प्रेमपूर्ण आँखाले एकटक आफूतिर नै हेर्दै हुनुहुन्छ अनि बिस्तारै हिँड्दै आफूनजिक आइरहनुभएको पनि छ। गोपिनीहरू भन्छन्– हामीलाई त हजुरको विचित्र व्यवहारको स्मृतिले एकटक भई ध्यान गर्न पनि दिँदैन। एकान्तमा हजुर **हृदिस्पृशः** अर्थात् भित्री हृदयलाई नै स्पर्श गर्ने **संविदः** अर्थात् विचित्र सङ्केतहरू गर्नुहुन्थ्यो। केही समयमैं तिमीहरूको मसँग मिलन हुन्छ भनी हजुरले बताएका कुराहरूलाई सम्झिँदा हामीहरू हजुरको त्यो वचन पूरा नभएकाले छट्पटिन्छौँ। छलकारी हजुरको असत्य व्यवहारलाई सम्झिएर हाम्रो मन क्षुब्ध भइरहन्छ, शान्त हुन सक्दैन। श्रीकृष्णकै चिन्तनमा छट्पटिई अशान्त भएको चित्त उहाँकै स्थिर रूपले चिन्तन गर्न पनि नसक्ने रूपले क्षुब्ध भइरहनु ध्यानको स्थिरताभन्दा पनि विचित्र एवं माथिल्लो तहको स्थिति हो। यहाँ गोपिनीहरूले आफ्नो यही अवस्था बताएका छन्।

मन क्षुब्ध भएको भन्ने भनाइमा अनेक भावहरू लुकेका छन्। गोपिनीहरू भन्छन्, हे कृष्ण ! आफ्ना विचित्र हेराइ, हँसाइ आदिद्वारा हजुर हाम्रा हृदयभित्र सजिलै प्रवेश गर्नुभयो। हाम्रो हृदयभित्र एकछत्र रूपमा हजुरको नै विहार भयो। प्रेमद्वारा भित्र छिर्नुभएका हजुरले **रहसि** अर्थात् हृदयका एकान्त प्रदेशमा हामीलाई प्रियमिलनका धेरै सपनाहरू देखाउनुभयो। यस्ता विचित्र सपनाहरूबाट जब हामी मख्ख भई आत्मविस्मृत भयौँ, तब हजुरले आफ्नो छली स्वरूप प्रकट गर्नुभयो। हाम्रो मनको विवेकरूपी अमूल्य धनलाई हजुरले हरण गर्नुभयो। त्यसपछि आजसम्म हाम्रो मन आफ्नो सम्पत्ति हराएकाले क्षुब्ध एवं उद्विग्न भइरहेको छ। बाहिरी चोरले त केवल बाहिरी वस्तु मात्र चोर्न सक्छ, तर विवेकरूपी अमूल्य धनलाई नै चोरिदिने हजुर पक्कै पनि चोरहरूमा अग्रगण्य हुनुहुन्छ होला। यसमा गोपिनीहरूको अर्को भाव पनि लुकेको छ। श्रीकृष्ण चन्द्रवंशी हुनुहुन्छ। **चन्द्रमा मनसो जातः** (ऋग्वेद १०/९०/ १३/१) अर्थात् चन्द्रमा पनि मनबाट उत्पन्न भएका हुन् भन्ने वेदवचन अनुसार चन्द्रमाको पनि बाबु मन हो। यसरी मन श्रीकृष्णको वंशप्रवर्तक चन्द्रमाको पनि पिता सिद्ध हुन्छ। सन्तानहरूको प्रमुख कर्तव्य के हुन्छ भने उनीहरूले आफ्ना पूर्वजहरूलाई सन्तुष्ट एवं सुखी राख्नुपर्दछ, चिन्तित एवं उदास राख्नुहुन्न। आफ्ना पूर्वजलाई सन्तुष्ट पार्ने सन्तान कुलभूषण हुन्छ भने दुःखी पार्ने सन्तान कुलकलङ्क हुन्छ। हाम्रो मनलाई क्षुब्ध गर्दा हजुर पनि कुलकलङ्क बन्नुहुन्छ भनी गोपिनीहरूले श्रीकृष्णको उपहास गरेको

भाव पनि यहाँ प्रकट भएको छ।

**चलसि यद् व्रजाच्चारयन् पशून् नलिनसुन्दरं नाथ ते पदम्।**
**शिलतृणाङ्कुरैः सीदतीति नः कलिलतां मनः कान्त गच्छति ॥ ११ ॥**

**पदार्थ–**
**नाथ** = हे रक्षक
**कान्त** = हे प्रियतम
**यत्** = जब
**व्रजात्** = व्रजबाट
**पशून्** = पशु (गाई)हरूलाई
**चारयन्** = चराउँदै
**चलसि** = हिँड्नुहुन्छ (त्यस वेला)
**ते** = हजुरको
**नलिनसुन्दरं** = कमल जस्तै सुन्दर
**पदं** = चरण
**शिलतृणाङ्कुरैः** = तिखा ढुङ्गा र घाँसका अङ्कुरहरूद्वारा
**सीदति इति** = पीडित हुन्छ (घोचिँदो हो) भनेर
**नः** = हाम्रो
**मनः** = मन
**कलिलतां** = छटपटीमा
**गच्छति** = पुगिरहेको छ

**वाक्यार्थ–** हे नाथ ! हे प्रियतम ! जब हजुर व्रजबाट गाईहरू चराउँदै हिँड्नुहुन्छ तब हजुरका कमल झैँ सुन्दर र कोमल चरणहरूलाई वनका तिखा ढुङ्गा र घाँसका अङ्कुरहरूले घोच्दा हुन् भनेर हाम्रो मनमा छटपटी भइरहेको छ।

**विवरण–** यस श्लोकमा गोपिनीहरूले श्रीकृष्णले खाली पैताला नै गाई चराउन जाँदा उहाँको पाउमा काँडा बिझ्ने कल्पनामा आफ्नो मन छट्पटिएको भाव व्यक्त गरेका छन्। यो राजसराजसी कुमारीहरूले गरेको पुरानो घटनाको सम्झना हो। अहिले रातमा वनभित्र लुक्नुपर्दा श्रीकृष्णका चरणमा त्यस्तै अनेक काँडा बिझेका होलान् भन्ने कल्पना गर्दै दुःखको अनुभव भएको भाव यहाँ लुकेको छ। दिउँसोको उज्यालोमा आफ्ना सबै साथीसहित हजुर गाई चराउन जाँदा त हामीलाई हजुरको कोमल पाउमा वनका काँडा आदि बिझ्ने हुन् कि भन्ने शङ्का हुन्थ्यो भने अहिले त रातको समय छ। हजुर आफ्ना सबै हितैषीलाई छाडी एक्लै असहाय हुनुभएको छ। हामीले वन–वन खोजिरहँदा वनभित्र पनि अवश्य नै यताउता भाग्नुभयो होला। यो अँध्यारो रातमा वनभित्र अनेक काँडा र घाँसका अङ्कुरहरू बिझ्दा आफ्नो दुःखमा साथ दिने अनि सहायता गर्ने हितैषी नपाउँदा हजुरलाई कति दुःख भइरहेको होला। यो सम्झिँदा हे प्रियतम श्रीकृष्ण ! हामीहरूको मन असाध्यै छट्पटिएको छ भन्ने भाव गोपिनीहरूले व्यक्त गरेका छन्। यो भावनामा गोपिनीहरूको कृष्णप्रेमको विशिष्ट पक्ष प्रकाशित भएको छ।

सामान्यतया प्रियविरहमा जोसुकै व्यक्ति पनि दुःखी हुन्छ, तर त्यो दुःखको अनुभवभित्र प्रियको भन्दा बढी आफ्नै चिन्ता रहेको हुन्छ। आफूले मन पराएको मान्छे नभएपछि आफूलाई कसले माया गर्ला, आफूलाई सुखदुःखमा कसले साथ देला ? भन्ने सोचेर नै सबै व्यक्ति दुःखी हुन्छन्। तिमीविना मेरो प्राण कसरी रहला र ? भन्ने चिन्ता पनि आफ्नो प्राण जोगाउने विषयकै चिन्ता हो र एक प्रकारको स्वार्थ नै हो। प्रियमिलनमा असीम सुखको अनुभूति हुन्छ, त्यसैले व्यक्ति प्रियमिलन चाहन्छ। प्रियको वियोगमा आफूलाई दुःख हुने भएकाले नै त्यो चाहँदैन। यी सबै प्रेमव्यवहारमा आफ्नो हितको चिन्ता नै प्रमुख भएको देखिन्छ। तर गोपिनीहरूको विशुद्ध

प्रेममा भने आफ्नो भन्दा श्रीकृष्णको नै हितको चिन्ता बढी भएको देखिन्छ। गोपिनीहरू आफूसँग टाढा हुँदा श्रीकृष्णसँग यसकारणले रिसाउँछन् कि आफूविना उहाँलाई शान्ति हुँदैन। प्रेमीविना आफूलाई सुख नहुने भावले होइन, अपितु आफूलाई छाडी टाढा गएपछि श्रीकृष्णलाई नै दुःख हुने भावनामा नै गोपिनीहरू श्रीकृष्णसँग रिसाउँछन्। यो पूर्ण प्रेम र पूर्ण समर्पणको स्थिति हो। गोपिनीहरूको प्रेम यही तहको हो। यहाँ आफूबाट छुटेकाले आफूलाई होइन, अपि तु श्रीकृष्णलाई नै कष्ट हुने आशङ्काले उहाँसँग गोपिनीहरू असन्तुष्ट बनेका छन्।

यस प्रसङ्गमा गोपिनीहरूका अनेक मनोभावहरूको उद्भावन गरिएको छ। सम्पूर्ण सत्पुरुषहरूले आश्रय लिने हजुरको पाउ सर्वश्रेष्ठ छ। त्यस्तो पाउमा पनि दया नगरी हजुर काँडा बिझाउँदै वनवनै हिँड्नुहुन्छ। यस्तो दुष्टता खलसमागम नभई आउदैँन, अतः के हजुरमा पनि उलूखलको समागमपछि यस्तो निर्दयता आएको हो ? भन्ने एउटा भाव रहेको छ। अर्को, हे श्रीकृष्ण ! शत्रुले पनि क्षतविक्षत भएको शत्रुलाई पीडित गर्दैन। हजुरको आफ्नै पाउ काँडा, शरका अङ्कुर आदिद्वारा विक्षत भएको छ। त्यसलाई अब धेरै पीडित नगर्नुहोस्। चाँडै हाम्रा अघि प्रकट भइहाल्नुहोस् भन्ने भाव रहेको छ।

जुन चरणको सान्निध्य पाउन लक्ष्मीजी पनि सधैँ उत्सुक हुनुहुन्छ, अनि जसलाई प्राप्त गर्न भनी घरव्यवहार सर्वस्व छाडी आउँदा पनि हामीले त्यसलाई प्राप्त गर्न सकेका छैनौँ, त्यस्ता चरणलाई घाँसका अङ्कुर, काँडा र ढुङ्गाका धारिला चुच्चाहरूले पाएका मात्र छैनन्, त्यहींभित्र घुसेका पनि छन्। परम पद प्राप्त गर्न चाहनेले सबै प्राणीलाई समान व्यवहार गर्नुपर्छ, कसैलाई पनि बिझ्ने गरी व्यवहार गर्नुहुदैन भनी शास्त्रमा बताइएको छ, तर अरूलाई बिझाउने या घोच्ने स्वभाव हुँदा पनि यी काँडाहरूले श्रीकृष्णको पदलाई कसरी प्राप्त गर्न सके होलान् ? आफ्नो सर्वस्व त्याग्ने हामीहरूले चाहिँ नपाउने अनि आफ्नो घोच्ने स्वभावलाई नछोड्दा पनि काँडाले चाहिँ पाउने यो कस्तो भाग्य हो काँडाको ? भनी काँडाप्रति ईर्ष्या गरिएको भाव पनि यहाँ व्यक्त हुन्छ। यसप्रकार यहाँ पनि गोपिनीहरूका अनेक भावहरू व्यक्त भएका छन्।

**दिनपरिक्षये नीलकुन्तलैर्वनरुहाननं बिभ्रदावृतम्।**
**घनरजस्वलं दर्शयन् मुहुर्मनसि नः स्मरं वीर यच्छसि ॥ १२ ॥**

**पदार्थ–**
**वीर** = हे वीर
**दिनपरिक्षये** = दिन सकिन लाग्दा
**नीलकुन्तलैः** = काला केशहरूद्वारा
**आवृतम्** = ढाकिएका
**घनरजस्वलं** = बाक्लो धुलोले ढाकिएको
**वनरुहाननं** = वनमा फुल्ने (कमलको फूल जस्तो) अनुहारलाई
**बिभ्रत्** = धारण गर्दै
**दर्शयन्** = (त्यो अनुहार, हामीलाई) देखाउँदै
**नः** = हाम्रो
**मनसि** = मनमा
**स्मरं** = कामभावलाई
**मुहुः** = बारम्बार
**यच्छसि** = बढाइदिनुहुन्छ

**वाक्यार्थ–** हे वीर ! सन्ध्याकालमा काला कपालले छोपिएको, बाक्लो धुलोले ढाकिएको अनि

वनमा फुल्ने कमल जस्तो अनुहार देखाएर हाम्रो मनमा बारम्बार कामभावलाई बढाइदिनुहुन्छ।

**विवरण–** यो विवाहिता राजसतामसी गोपिनीहरूले गरेको प्रार्थना हो। यसमा दिउँसोभरि गाई चराउन गएका श्रीकृष्ण साँझपख घरतिर फर्कने अनि आफूहरू चाहिँ उहाँको अनुहार हेरी–हेरी प्रसन्न हुने गरेको पहिलाको अनुभव बताएका छन्। श्रीकृष्णको अनुहार यसै पनि परमसुन्दर छ, त्यही अनुहार जब दिनभरि गाई चराएर थकित भई रातो वर्णको हुन्छ, तब त्यसमा झन् सुन्दरता थपिन्छ। रातो रजोगुणको प्रतीक हो, सेता चम्किला सूर्य मध्य आकाशबाट पश्चिमतिर सर्दै जाँदा जब उनमा रातोपन बढ्दै जान्छ, तब श्रीकृष्णको अनुहार पनि रातो हुन थाल्दछ। यसरी जब रजोगुणका सामग्री जम्मा हुन थाल्दछन्, तब व्रजतिर फर्कने वेलामा गाईका खुरबाट पनि **रजः** अर्थात् धुलो उड्न थाल्दछ। श्रीकृष्णको अनुहार रजोगुणसँग सम्बन्धित भएकाले त्यो **रज** अर्थात् धुलो पनि उनकै मुहारमा गई टाँसिन्छ र श्रीकृष्ण **घनरजस्वल** बन्नुहुन्छ। सन्ध्याकालको लालिमा, रातो–रातो भएको श्रीकृष्णको अनुहार अनि त्यसमा टाँसिएको धुलो यी सबै रजोगुणसँग सम्बन्धित पर्याप्त सामग्री लिई श्रीकृष्ण व्रजतिर आउनुहुन्छ। गाउँतिर बास बस्नु यो पनि त रजोगुण नै हो, किनभने वनको बसाइलाई सात्त्विक र गाउँको बसाइलाई राजस भनिएको छ– **वने हि सात्त्विको वासो ग्रामे राजस उच्यते**। यता कामलाई पनि रजोगुणकै कार्य भनिएको छ। **काम एष क्रोध एष रजोगुणसमुद्भवः"** अर्थात् यो काम र क्रोध रजोगुणको कार्य हो भनी श्रीमद्भगवद्गीता (३/३७)मा बताइएको छ। रजोगुणले भरिएका श्रीकृष्णलाई हेर्दाहेर्दै आफूमा पनि रजोगुण सरेको र त्यसकै प्रभावका कारणले श्रीकृष्णप्रति काम उत्पन्न भएको गोपिनीहरूको भनाइ छ।

यो विवाहिता गोपिनीहरूले गरेको प्रार्थना हो र यसमा उनीहरूले श्रीकृष्णप्रति उनीहरूमा कसरी कामको उदय भयो भनी बताएका छन्। सामान्यतया विवाहित भई सन्तानसमेत भइसकेका गोपिनीहरूलाई श्रीकृष्णसँग सम्बन्ध गाँस्न यशोदा आदिको जस्तै वात्सल्य भाव नै उपयुक्त हुन्थ्यो, तर उनीहरूले पनि कुमारीहरूले जस्तै श्रीकृष्णलाई मधुर भावले पति नै मानी उहाँसँग भावसम्बन्ध गाँसेका छन्। प्रस्तुत श्लोकमा यसको कारण प्रस्ट्याउने प्रयास भएको छ। गोपिनीहरूको भनाइको भङ्गिमाबाट के तात्पर्य निस्कन्छ भने गोपिनीहरू पहिले त सामान्य स्नेहकै भावनाले श्रीकृष्णलाई हेर्थे, तर उनीहरूले कृष्णलाई हेर्ने वेला रजोगुणी सन्ध्याकाल हुन्थ्यो। जब श्रीकृष्ण आकाशलाई सूर्यको लालिमाबाट र पृथिवीलाई गाईका खुरका धुलोबाट रजोगुणले भरिपूर्ण पार्दै अनि आफ्ना अनुहारमा पनि लाली र धुलो दुबैको अंशलाई स्वीकार गर्दै आउनुहुन्थ्यो, तब स्वभावतः गोपिनीहरूको हृदयमा पनि रजोगुणको सञ्चार हुन्थ्यो र सात्त्विक दया, स्नेहको भाव हराई राजसी कामको भाव भरिन्थ्यो। दिनप्रतिदिन यही श्रीकृष्णको **रजस्वल** अर्थात् रजोव्याप्त मुख देख्नाले नै आफूमा **स्मर** अर्थात् रजोगुणी कामको सञ्चार भएको हो भन्ने गोपिनीहरूको भनाइ रहेको छ। श्रीकृष्णको अनुहारलाई **घनरजस्वल** भनिएको छ। यसबाट अरू पनि तात्पर्यहरू निस्कन्छन्। गोपिनीहरूले श्रीकृष्णलाई आफ्नो अघि प्रकट हुन प्रार्थना गरिरहँदा श्रीकृष्णले मानौँ भन्नुभएछ, म सात्त्विक हृदय भएका निष्कामहरूका लागि मात्र देखिन्छु, तिमीहरू रजोगुणी कामयुक्त छौ, त्यसैले म देखिन्नँ। यसको उत्तरमा गोपिनीहरू श्रीकृष्णको

अनुहार **घनरजस्वल** अर्थात् झन् बढी गाढा रजले ढाकिएको बताउँछन्। हजुर आफैँ निर्दोष हुनुहुन्न, त्यसैले हामीमा मात्र दोषदर्शन नगर्नुहोस्। फेरि जुन रोग जहाँबाट निस्कन्छ, त्यसको उपचार पनि त्यहीँ रहेको हुन्छ। हजुरको रजस्वल अनुहार देखेर नै हाम्रो मनमा कामरोग उत्पन्न भएकाले त्यसको विनाशका लागि पनि त्यही अनुहार फेरि देखाउनुहोस् भन्ने भाव पनि यहाँ रहेको छ।

साँझमा श्रीकृष्णको अनुहार देख्दा गोपिनीहरूलाई त्यसमा चन्द्रमाकै स्मरण हुन्छ। चन्द्रमा मनको पुत्र हो, त्यसैले श्रीकृष्णचन्द्रको अनुहार हेर्नु गोपिनीहरूको मनको दोष होइन, किनभने सबै पिताहरू आफ्नो छोराको अनुहार हेर्दा परम प्रसन्न हुन्छन् र त्यसलाई हेरिरहन्छन्— **पितृमुदे स्वसुतास्यवीक्षा**। गोपिनीहरू आकाशको चन्द्रभन्दा सुन्दर श्रीकृष्णचन्द्रको विशेषता बताउँछन्। **नीलकुन्तल** अर्थात् कालो केशराशिले ढाकिँदा कृष्णचन्द्रको मुखकान्ति फिका भएको छैन, बरु त्यसको सान्निध्यका कारण झनै चम्किए झैँ देखिएको छ। आकाशको चन्द्र त राहुको कालिमाद्वारा ढाकिँदा अँध्यारै हुन्छ, त्यसैले त्यसमा भन्दा श्रीकृष्णचन्द्रमा नै वैशिष्ट्य छ। कृष्णचन्द्रको अनुहार **घनरजस्वल** अर्थात् धुलोले युक्त हुँदा पनि त्यसको शोभा घटेको छैन, परन्तु आकाशको चन्द्रमामा लागेको कालो दागलाई चाहिँ त्यसको कलङ्कको रूपमा लिइन्छ। त्यसैले गोपिनीहरू आफ्नो मनले श्रीकृष्णचन्द्रकै दर्शन गर्न चाहेको बताउँछन्। **नीलकुन्तल** यो शब्दबाट गोपिनीहरूले काला केशसँग ईर्ष्या गरेको भाव पनि प्रकट भएको छ। कपाल कालो छ र कुटिल अर्थात् घुम्रिएको छ। त्यस्तो घुम्रिएको कपाल जसको शिरमा रहन्छ त्यसले त्यसकै अनुहारलाई छोपिदिन्छ। यसरी अनेक दुर्गुणले युक्त भएको कपाललाई चाहिँ शिरमाथि स्थान दिने अनि हामी सोझा-साझा गोपिनीहरूलाई चाहिँ चरणको वरिपरि पर्न पनि नदिने। गोपिनीहरू भन्छन्, हामी सोझा छौँ, अनि जसको आश्रयमा रहन्छौँ, त्यसलाई आफैँ छोप्दैनौँ, बरु त्यसकै शोभालाई अझ बढाइदिन्छौँ। हजुरले आफूसमान कालो एवं कुटिल भएकाले आफ्नो स्वभावसँग मिल्ने देखी त्यो कपाललाई टाउकैमा ठाउँ दिनुभएको होला। दुर्गुणी कपाललाई त्यहीँ ठाउँ दिए पनि हामीलाई चरणसम्ममा त ठाउँ दिनुहोस् भनी गोपिनीहरूले भनेको भाव यहाँ प्रकट हुन्छ।

**प्रणतकामदं पद्मजार्चितं धरणिमण्डनं ध्येयमापदि ।**
**चरणपङ्कजं शन्तमं च ते रमण नः स्तनेष्वर्पयाधिहन् ॥ १३ ॥**

**पदार्थ**–
**रमण** = हे आनन्ददाता
**आधिहन्** = हे सबै दुःख नाश गर्ने श्रीकृष्ण
**प्रणतकामदं** = शरणमा आउनेलाई चाहेको वस्तु दिने
**पद्मजार्चितं** = कमलबाट जन्मेका ब्रह्माजीद्वारा पूजित
**धरणिमण्डनं** = पृथिवीकै गहनासमान भएको
**आपदि** = आपत्कालमा
**ध्येयम्** = ध्यान गर्न योग्य
**शन्तमं च** = अत्यन्त कल्याणकारी
**ते** = हजुरको
**चरणपङ्कजं** = चरणकमललाई
**नः** = हाम्रा
**स्तनेषु** = स्तनहरूमा
**अर्पय** = अर्पित गरिदिनुहोस् (राखिदिनुहोस्)

**वाक्यार्थ–** सबै दुःखलाई नष्ट गरी आनन्द दिने हे श्रीकृष्ण ! शरणमा आउनेलाई चाहेको वस्तु दिने, ब्रह्माजीद्वारा पूजित एवं आपत्तिमा ध्यान गर्न योग्य हजुरका चरणकमल पृथिवीकै गहनास्वरूप अनि सर्वश्रेष्ठ कल्याणकारी छन्। त्यस्ता चरणकमललाई हाम्रा स्तनहरूमा राखिदिनुहोस्।

**विवरण–** यो विवाहिता राजसराजसी गोपिनीहरूले गरेको प्रार्थना हो। यसमा भगवान्का चरणको प्रशंसा गरी त्यसलाई आफ्नो स्तनमा राखिदिन गोपिनीहरूले प्रार्थना गरेका छन्। यहाँ भगवान्का चरणको विशेषता बताइएको छ। टीकाकारहरू लेख्नुहुन्छ– **भगवदपेक्षयापि चरणो महान्** अर्थात् भगवान्भन्दा पनि उहाँको चरण महान् छ। यहाँ श्रीकृष्णलाई **आधिहन्** अर्थात् हे आधिनाशक भनी सम्बोधन गरिएको छ। आधि भनेको मानसिक ताप या व्यथा हो। तापहरूमध्ये प्रियविरह भएको ताप सबैभन्दा बढी हुन्छ, त्यसलाई नष्ट गरी प्रकट हुन श्रीकृष्णसँग प्रार्थना गरिएको छ। मेरो चरण तापनाशक भए त्यो तिमीहरूको हृदयभित्र छँदैछ, किन बाहिर स्तनमा त्यसलाई राख्नुपऱ्यो ? भन्ने श्रीकृष्णको शङ्कामा गोपिनीहरू उत्तर दिँदै भन्छन्– भित्र भएको चरणले मात्र नपुगेकाले बाहिर पनि चरण राख्नु आवश्यक छ। जसरी जरोको कारणले असाध्यै तातेको व्यक्तिलाई औषधि खुवाएर मात्र पुग्दैन, बाहिरबाट चिसो पानीपट्टि पनि लगाउनुपर्दछ, त्यसै गरी विरहको तापले हामी यति तातिसकेका छौं कि हाम्रो मनभित्र भएको हजुरको चरण त्यो तापलाई शान्त गर्न पर्याप्त छैन। यसैले बाहिरबाट पनि ताप शान्त पार्न हाम्रो स्तनमा चरण राखिदिनुहोस्। यहाँ श्रीकृष्णको कारणले उत्पन्न भएको विरहज्वाला श्रीकृष्णचरणद्वारा शान्त हुन्छ भन्ने बताइएबाट श्रीकृष्णमा भन्दा उहाँको चरणमा बढी प्रभाव रहेको रहस्य पनि अभिव्यक्त भएको छ। यहाँ श्रीकृष्णका चरणमा पनि श्रीकृष्णमा जस्तै छ ओटा गुणहरू रहेको बताइएको छ। **प्रणतकामद** यो पदबाट आफ्नो शरणमा आउनेलाई चिताएको वस्तु दिन सक्ने ऐश्वर्य छ भन्ने ऐश्वर्य गुण देखाइएको छ। **पद्मजार्चित** अर्थात् ब्रह्मा, लक्ष्मी आदिद्वारा पनि पूजा गरिएको भनाइबाट त्यो चरण धर्मरूप छ, त्यसैले सबैले त्यसैको सेवा गर्छन् भन्ने भाव झल्किन्छ। **धरणिमण्डन** यो पदबाट भगवान्को चरण पृथिवीकै अलङ्कार या श्रीरूप छ भनी बताइएको छ। **आपदि ध्येयं** अर्थात् आपत्ति परेको वेलामा ध्यान गर्न योग्य छ। यसबाट भगवान्को चरणमा शरणागतलाई रक्षा गर्ने कीर्ति प्रसिद्ध भएको थाहा हुन्छ। **चरणपङ्कज** यो शब्दबाट भगवान्को चरणमा वैराग्य गुण रहेको सूचित भएको छ। जसरी कमल हिलोमा रहेर पनि त्यसमा टाँसिँदैन, त्यसै गरी भगवान्को चरण संसारमा टाँसिदैन भन्ने भाव झल्किन्छ। **शन्तम** शब्दको अर्थ हुन्छ– परम कल्याणमय। यसबाट भगवान्को चरण कल्याणमय ज्ञानरूप भएको सूचित हुन्छ।

यहाँ चरणस्तुति गरिएको प्रसङ्गबाट उपहासको भाव पनि ध्वनित भएको छ। सम्पूर्ण शास्त्रहरूले हजुरको चरणलाई भक्तहरूको इच्छा पूरा गर्ने भनेका छन्। आपत्तिमा पनि त्यसले तुरुन्त सहायता गर्दछ र त्यो चरण जगद्वन्द्य छ भनी शास्त्रमा बताइएको छ। तर हजुरका चरणले हामीलाई वन–वनमा भड्काइदिएका छन्। आफ्नो शरणमा आएकाको इच्छा पूरा गर्नु भनेको के यही हो ? हजुरका चरण यति कल्याणकारक छन् कि शरणमा आएकाहरूलाई शरण दिन छाडी घाँसका अङ्कुर अनि काँडाहरूसँग मिलेर बसेका छन्। सोझा–साझाहरूलाई लिन छोडी परपीडक

काँडाहरूलाई अँगाल्ने हजुर के कल्याणकारक हुनुहुन्छ र भनी व्यङ्ग्य गरिएको भाव पनि यस श्लोकमा रहेको मानिन्छ।

**सुरतवर्धनं शोकनाशनं स्वरितवेणुना सुष्ठु चुम्बितम्।**
**इतररागविस्मारणं नृणां वितर वीर नस्तेऽधरामृतम्॥ १४॥**

**पदार्थ–**
**वीर** = हे वीर !
**सुरतवर्धनं** = रतिसुखलाई बढाउने
**शोकनाशनं** = शोकलाई हटाइदिने
**स्वरितवेणुना** = बजिरहेको बाँसुरीद्वारा
**सुष्ठु** = राम्रोसँग
**चुम्बितम्** = चुम्बन गरिएको अनि
**नृणां** = मानिसहरूको
**इतररागविस्मारणं** = अन्य सबैथरी रागलाई बिर्साइदिने
**ते** = हजुरको
**अधरामृतम्** = अधरामृत
**नः** = हामीहरूलाई
**वितर** = दिनुहोस्

**वाक्यार्थ–** हे वीर ! रतिसुखलाई बढाउने, शोकलाई हटाइदिने, बजिरहेको बाँसुरीद्वारा चुम्बन गरिएको अनि मानिसका अन्य सबैथरी रागलाई बिर्साइदिने हजुरको अधरामृत हामीहरूलाई दिनुहोस्।

**विवरण–** यो विवाहिता राजससात्त्विकी गोपिनीले गरेको प्रार्थना हो। यसमा भगवान्‌लाई **अधरामृत** दिनको लागि प्रार्थना गरिएको छ। यहाँ भगवान्‌लाई **वीर** भनी सम्बोधन गरिएको छ। यसको अर्थ दयावीर या दानवीर भन्ने गर्नुपर्दछ। यसबाट दया गरी हामीलाई अधरामृत दिनुहोस् भन्ने तात्पर्य निस्कन्छ। यहाँ अधरामृतलाई महौषधिको रूपमा बताई आफ्ना मनका ताप आदि सबै रोगलाई नष्ट गर्न त्यो औषधि आवश्यक भएको भाव व्यक्त गरिएको छ। यो अमृत **सुरतवर्धन** अर्थात् कृष्णमिलनको इच्छालाई तीव्र रूपमा बढाउने स्वभावको छ। यसबाट यो अमृतमा रहेको पुष्टि गर्ने क्षमता सूचित हुन्छ। औषधिले रोग या पीडालाई नष्ट गर्नुपर्दछ भन्ने भावनाले **शोकनाशन** भन्ने विशेषणको प्रयोग गरिएको छ। शोक अर्थात् पीडालाई पनि यो अमृत औषधिले नष्ट गरिदिन्छ। भगवान्‌ले मानौँ भन्नुभयो, यस्तो दिव्य अमृत अमूल्य हुन्छ, म सामान्य मूल्यमा सबैलाई दिन सक्दिनँ। यसको उत्तरमा गोपिनीहरू त्यो अमृतलाई बाँसुरीले पनि पाइसकेको बताउँछन्। बाँसुरी निष्प्राण जड छ, तर त्यसले पनि जब श्रीकृष्णको ओठमा अडिई त्यहाँ अमृतरस पिउन थाल्छ, तब त्यो पनि चेतन भई मिठो शब्दमा बोल्न थाल्दछ। त्यसमा सबै प्राणीको चेतनालाई हरण गर्न सक्ने सामर्थ्य आउँछ। यसबाट अधरामृतको अपूर्व महत्त्व झल्किन्छ। श्रीकृष्णको कृपा भए विना मूल्य नै सबैले यो रस पाउन सक्छन् भन्ने भाव पनि यहाँ प्रकट हुन्छ। गोपिनीहरू उल्टै श्रीकृष्णलाई सोध्छन्, त्यस्तो आफूभित्र केही पनि सार नभएको रित्तो बाँसुरीले के दियो र हजुरले त्यसलाई आफ्नो अधरामृत दिनुभयो ? यदि कृपाका कारणले निष्प्राण त्यसलाई प्राणयुक्त बनाउन यत्तिकै दिनुभएको हो भने हामी पनि निष्प्राण हुन लागेका छौँ, हामीलाई पनि त्यो अमृतरस दिनुहोस्। मानौँ गोपिनीहरूको यो प्रार्थनापछि श्रीकृष्ण भन्नुहुन्छ– बाँसुरीभित्र केही थिएन, त्यसैले मेरो अमृतले काम गर्ने हुनाले मैले दिएँ, तिमीहरूभित्र

त अनेक राग आदि दोष छन्। यी सबै कुपथ्य हुन्, यो रहुन्जेल मेरो औषधिले काम नगर्ने हुनाले मैले तिमीहरूलाई नदिएको हुँ। यसको उत्तरमा गोपिनीहरू **इतरराग** अर्थात् संसारको आसक्तिरूपी कुपथ्यलाई पनि यही रसको पानले **विस्मारण** अर्थात् बिर्साइदिन्छ भनी यसको महत्त्व बताउँछन्।

बाँसुरीले अधरामृतको रस पिएको भन्ने भनाइमा गोपिनीहरूका अनेक मनोभावहरू अभिव्यक्त भएका छन्। शास्त्रहरूमा भगवान्‌ले साधुहरूको इच्छा पूरा गरी उनीहरूको रक्षा गर्न अनि दुष्टहरूको विनाश गर्न अवतार लिएको बताउनुभएको छ— **परित्राणाय साधूनां विनाशाय च दुष्कृताम्** (भगवद्‌गीता ४/८)। साधुहरूभित्र खोट या प्वाल हुँदैन। यो बाँसुरी **रन्ध्रचित्त** अर्थात् भित्र पूरै प्वाल परेको छ, यस्ता खोटी स्वभाव भएकालाई हजुर आफूमा ठाउँ दिनुहुन्छ। हामी **अरन्ध्रचित्ता** छौँ। हाम्रो मनमा कुनै प्वाल वा खोट छैन। हामीलाई भने दर्शन पनि दिनुहुन्न। अनि हजुरको प्रतिज्ञा कसरी पूरा हुन्छ ? यो सत्पुरुषमा अनुग्रह गर्नुको साटो झन् दण्ड भएन र ? भन्ने प्रश्न गोपिनीहरूले गरेको देखिन्छ। हामीलाई एकपटक अधरामृत पनि नदिने यस्ता कन्जुसबाट सोझा योगी-मुनिहरूले परमानन्दको आशा गर्नु पनि व्यर्थ नै छ भनी उपहास गरिएको भाव पनि यहाँ छ। गोपिनीहरूले बाँसुरीलाई नै उपदेश दिएको भाव पनि यहाँ प्रकट भएको छ। गोपिनीहरू भन्छन्— हे बाँसुरी ! श्रीकृष्णले मलाई आफूसँगै अङ्गालोमा राख्नुहुन्छ, ओठमाथि अड्याई अधरामृत पियाउनुहुन्छ, त्यसैले म संसारमा सर्वाधिक भाग्यशाली छु भन्ने घमन्ड तिमी गर्दै नगर। किनभने हामी पनि पहिले उहाँले फुक्र्याए अनुसार आफूहरूमाथि उहाँको असीम प्रेम छ भन्ने सोची मख्ख पर्थ्यौं। आज हेर त हामीलाई उहाँले कुन अवस्थामा पुऱ्याउनुभएको छ। रस पिइसकेपछि हामीलाई लात मारे झैँ उहाँले रस पिइसकेपछि तिमीलाई पनि चटक्कै छाडिदिनुहुनेछ। **नैव गर्वं वहस्व** अर्थात् अलिकति पनि सौभाग्यको गर्व नगर है भनी बाँसुरीलाई सम्झाएको भाव पनि यहाँ अभिव्यक्त भएको छ।

अर्को भावमा चाहिँ श्रीकृष्णलाई नै उपदेश दिइएको छ। यो भावमा **दानवीर** भनी श्रीकृष्णको उपहास गरिएको छ। गोपिनीहरू भन्छन्— हेर श्रीकृष्ण आफूसँग कोही केही माग्न आयो भने त्यसलाई रित्तो हात पठाउनुहुन्न। समुद्रमन्थनको वेलामा देव-दानव सबै मिली समुद्रकहाँ अमृत माग्न पुगे। समुद्र जडाधिपति हो अर्थात् जड नदीहरूको अधिपति अनि स्वयं पनि जड हो। तर उसले पनि आफ्नो शरणमा आएकाहरूको प्रार्थना खेर नजाओस् भन्ने उद्देश्यले तिनीहरूलाई अमृत दियो। हजुर त चेतन हुनुहुन्छ र परम आनन्दरूप हुनुहुन्छ। आफूनजिक अधरामृतको प्रार्थना गर्दै आएका हामीलाई के त्यो चाहेको वस्तु दिनुहुन्नँ **जडराशिरपि प्रादादमृतं त्वं तु चित्सुखः** भनी श्रीकृष्णलाई नै सम्झाएको भाव पनि यहाँ अभिव्यक्त भएको छ।

**अटति यद् भवानह्नि काननं त्रुटिर्युगायते त्वामपश्यताम्।**
**कुटिलकुन्तलं श्रीमुखं च ते जड उदीक्षतां पक्ष्मकृद् दृशाम्॥ १५॥**

**पदार्थ–**
**यत्** = जब
**भवान्** = हजुर
**अह्नि** = दिउँसो
**काननं** = वनमा
**अटति** = (गाई चराउँदै) हिँड्नुहुन्छ (त्यस वेला)
**त्वाम्** = हजुरलाई
**अपश्यताम्** = नदेख्ने हामीलाई

**त्रुटिः** = एकै छिन पनि
**युगायते** = युगौं बराबर लादछ
**ते** = हजुरको
**कुटिलकुन्तलं** = घुम्रिएका
कपालले युक्त
**श्रीमुखं** = सुन्दर अनुहारलाई
**उदीक्षतां** = हेरिरहेका
**दृशाम्** = (हाम्रा) आँखाहरूमा
**पक्ष्मकृत् च** = झिम्किरहने परेला बनाउने विधाता चाहिँ (पक्कै पनि)
**जडः** = मूर्ख रहेछन्

**वाक्यार्थ–** हजुर जब दिउँसो गाई चराउँदै वनमा हिँड्नुहुन्छ त्यस वेला हजुरलाई नदेख्दा हामीलाई एकै छिन पनि युगौं समान लामो लाग्छ। (साँझ जब हजुर व्रज फर्किनुहुन्छ त्यस वेला) हजुरको घुम्रिएका कपालले युक्त सुन्दर अनुहारलाई हामी (आँखै नझिम्क्याई) हेरिरहन चाहन्छौं, तर परेला बारम्बार झिम्किरहन्छन्, यस्ता झिम्किरहने परेला बनाउने विधाता पक्कै पनि मूर्ख रहेछन्।

**विवरण–** यस श्लोकमा विवाहिता तामससात्त्विकी गोपिनीहरूले श्रीकृष्णसँगको क्षणभरको विरह पनि आफूलाई असह्य हुने भाव व्यक्त गरेका छन्। श्रीकृष्ण गाई चराउन वनमा जाँदा दिउँसोभरि उहाँलाई देख्न नपाएका गोपिनीहरूलाई त्यो समय अति कष्टकर एवं युगौं समानको हुन्थ्यो भन्ने कुरा यहाँ प्रकट भएको छ। त्रुटि अर्थात् एक निमेष पनि श्रीकृष्णलाई नदेख्दा त्यो समय एक युग जति लामो लाग्ने गोपिनीहरूको अनुभव छ। यस प्रसङ्गमा गोपिनीहरूका अनेक भावहरू प्रकट भएका छन्। समयको व्यवस्था जहाँसुकै बराबर हुनुपर्दछ। त्रुटि, लव, पला, घडी आदिको समान नापमा समयको गति निरन्तर छ। यो सबैको लागि लागु हुने अनिवार्य व्यवस्था हो, तर गोपिनीहरूलाई भने विधाताले पक्षपात गरेको उनीहरूको आरोप छ। जब श्रीकृष्ण गाई चराउन जानुहुन्छ तब व्रजवासीहरू उहाँलाई तीन प्रहरको समयसम्म देख्न पाउँदैनन्। अरू सामान्य व्रजवासीहरूलाई श्रीकृष्णसँग केवल तीन प्रहर मात्र छुट्नुपरेको अनुभव छ, त्यसैले उनीहरूमा कृष्णविरहको दुःख पनि केवल तीन प्रहरसम्मको मात्र हुन्छ, तर हामीलाई चाहिँ **शतकोटियुगप्रमाणं तत्** अर्थात् त्यही समय सय करोड युगसमान भई बित्दछ। के हामीलाई बढी दुःख दिन नै विधाताले यो प्रपञ्च रचेका हुन्? अर्को कुरा विधाता जड अर्थात् महामूर्ख छन्। दिनभरि श्रीकृष्णलाई देख्न नपाए पनि साँझमा उहाँ फर्किएपछि हामीले उहाँलाई मनभरी हेरौंला भनी सोचिरहेका हुन्छौं। तर त्यतिवेला हामीलाई झन् अपार कष्ट हुन्छ, जुन वेला श्रीकृष्ण अगाडि रहँदा पनि हाम्रा आँखाका परेला बीच-बीचमा बन्द भइरहन्छन्, आँखा झिम्किइरहन्छन्। श्रीकृष्णको दर्शन पनि राम्रोसँग गर्न नदिने यस्तो परेला नै विधाताले किन बनाए होलान्? के उहाँलाई यिनले बीच-बीचमा झिम्किएर प्रियदर्शनमा बाधा उत्पन्न गर्नेछन् भन्ने कुरा थाहै थिएन? यदि यत्ति पनि थाहा थिएन भने यिनी के ज्ञानका आधारमा सृष्टिकर्ता भए त? भनी गोपिनीहरूले विधाताप्रति नै आक्रोश पोखेका छन्। परेलाकै प्रसङ्गमा त्यो वेला विधाताको बुद्धि चक्कराएको हुन सक्ने भावको समेत उद्भावन गरिएको छ। जब विधाता सबै प्राणीहरूलाई बनाई उनीहरूका आँखामा परेला हाल्दैथिए, तब उनको बुद्धि धेरै काम गर्नाले हो वा के भएर हो चक्कराउन थालेछ। यिनले निरन्तर श्रीकृष्णको दर्शन गरिरहन चाहन्छन् भन्ने थाहा हुँदा पनि बुद्धि घुमेकाले हामीमा चाहिँ **पक्ष्म** अर्थात् झिम्किरहने परेला हालिदिएछन्। अनि देवताहरूलाई श्रीकृष्णदर्शन गर्नु थिएन, तर तिनीहरूमा चाहिँ नझिम्कने परेला हालेछन्। यहाँ गोपिनीहरूद्वारा देवताहरूसँग ईर्ष्या गरिएको भाव प्रकट भएको छ।

यस श्लोकमा गोपिनीहरूले श्रीकृष्ण गाई चराउन वनमा गएको घटना सम्झिइएका छन्। यसबाट अहिले श्रीकृष्ण वनवनै घुम्दै हिँडेको र आफूले उहाँको दर्शन नपाउँदा अपार कष्ट भएको अनुभव प्रकट हुन्छ। यहाँ श्रीकृष्णलाई नै उपदेश गरेको भाव पनि व्यञ्जित भएको छ। गोपिनीहरू भन्छन्, हे श्रीकृष्ण ! हजुरले अनेक शास्त्रहरूमा बारम्बार के भन्नुभएको छ भने अज्ञानरूपी रातमा संसाररूपी वनमा भ्रान्त भई डुल्ने प्राणीहरू अज्ञानी एवं महामूर्ख हुन्। तर आज हजुर आफैं नै यस्तो घोर महानिशामा वन-वनभित्र डुलिरहनुभएको छ। के यो आफ्नै उपदेश अनुसार भयो र ?

यसरी यस श्लोकमा गोपिनीहरूको श्रीकृष्णलाई हेरिरहने इच्छा प्रकट भएको छ।

**पतिसुतान्वयभ्रातृबान्धवानतिविलङ्घ्य तेऽन्त्यच्युतागताः।**
**गतिविदस्तवोद्गीतमोहिताः कितव योषितः कस्त्यजेन्निशि ॥ १६ ॥**

**पदार्थ–**
**कितव** = हे कपटी
**अच्युत** = हे कहिल्यै च्युत नहुने श्रीकृष्ण
**पतिसुतान्वयभ्रातृबान्धवान्** = पति, पुत्र, कुल र भाइबन्धुहरूलाई
**अतिविलङ्घ्य** = नाघेर
**तव** = हजुरको
**उद्गीतमोहिताः** = गीतबाट मोहित भई
**गतिविदः** = हाम्रो आगमनको कारण जान्ने
**ते** = हजुरको
**अन्ति** = नजिक
**आगताः** = आएका
**योषितः** = स्त्रीहरूलाई
**निशि** = रातमा
**कः** = कसले
**त्यजेत्** = छोड्ला

**वाक्यार्थ–** हे कपटी श्रीकृष्ण ! पति, पुत्र, कुल, भाइबन्धु यी सबैलाई नाघी हजुरकै गीतबाट मुग्ध भई हामी हजुरको नजिक आएका हौँ। हजुर हाम्रो आगमनको कारण पनि जान्नुहुन्छ। (हजुर बाहेक) कसले हामी जस्ता स्त्रीहरूलाई रातमा एक्लै छोडिदिन सक्ला ?

**विवरण–** यस श्लोकमा तामसतामसी गोपिनीहरूले भगवान् श्रीकृष्णलाई कपटी भनी गाली गरेका छन् र सारा सम्बन्ध र व्यवहारलाई पनि त्यागी हजुरको शरणमा आएका हामीलाई यसरी बीच वनमा नत्याग्नुहोस् भनी प्रार्थना गरेका छन्। यहाँ श्रीकृष्णलाई **अच्युत** भनी सम्बोधन गरिएको छ। यसमा गोपिनीहरूका अनेक भावहरू रहेका छन्। गोपिनीहरू भन्छन्– हे श्रीकृष्ण ! संसारका सम्पूर्ण सम्बन्धहरू **च्युतपद** अर्थात् आफ्नो स्थितिबाट एक दिन झर्ने र नष्ट हुने स्वभावका छन्। तर विनाशी संसारभित्र बस्ने आत्मा चाहिँ अविनाशी छ भनी सम्पूर्ण शास्त्रहरूले बताएका छन्। कठोपनिषद् (१/२/२२)मा **अशरीरं शरीरेष्वनवस्थेष्ववस्थितम्** अर्थात् आत्मा शरीररहित छ, अनि अनित्य शरीरहरूभित्र रहे तापनि स्वयं अविनाशी छ भनी बताइएको छ। यसैले भगवान्लाई **अच्युतपद** भनिन्छ। उहाँ आफ्नो स्वरूपबाट कहिल्यै च्युत हुनुहुन्न अनि जुन व्यक्ति उहाँको चरणको शरणमा जान्छ, त्यस्ता व्यक्ति पनि त्यहाँबाट च्युत हुँदैनन्। **न च पुनरावर्तते** अर्थात् परमपदमा पुगेको व्यक्ति फेरि संसारमा फर्किँदैन भनी छान्दोग्योपनिषद् (८/१५/१)मा बताइएको छ। यदि भगवत्पदमा पुगिसकेका व्यक्तिहरू पनि फेरि संसारमा फर्के भने

उहाँलाई अच्युतपद भन्नु व्यर्थ भयो। उहाँ पनि संसारका सामान्य वस्तुहरू झैँ आगमापायी अर्थात् आउने-जाने स्वभावको हुनुभयो। त्यसैले त्यसको मर्यादा सुरक्षित राख्न पनि आफूहरूलाई फर्काउन नहुने गोपिनीहरूको भावना रहेको छ। यहाँ गोपिनीहरूले श्रीकृष्णलाई उपदेश दिएको भाव पनि प्रकट भएको छ। गोपिनीहरू भन्छन्— त्यागी एवं दानीहरूको जहाँसुकै सम्मान गरिन्छ। कैवल्योपनिषद् (३)मा पनि **न कर्मणा न प्रजया धनेन, त्यागेनैकेऽमृतत्वमानशुः** अर्थात् त्यागको प्रशंसा गर्दै कर्मले, सन्तानको कारणले अनि धनसम्पत्तिले पनि मोक्ष पाइदैन, किन्तु त्यागद्वारा नै मोक्ष पाइन्छ भनिएको छ। त्यागीहरूको जहाँसुकै सम्मान हुन्छ, हजुर चाहिँ घरपरिवार सबै छाडेर आएका हमीहरूलाई त्यागी अपयश कमाउन किन खोज्नुहुन्छ ? भनी गोपिनीहरूले सम्झाएका छन्।

गोपिनीहरूले श्रीकृष्णको **उद्गीत** अर्थात् बाँसुरीको धुनलाई सुनेर नै आफूहरू मुग्ध भई आएको बताएका छन्। यस प्रसङ्गमा पनि अनेक भावहरू अभिव्यक्त भएका छन्। मानौँ श्रीकृष्णले गोपिनीहरूलाई भन्नुभयो— म त सधैँ बाँसुरी बजाइरहन्छु। मैले बाँसुरी बजाएको सुनेर तिमीहरू पागल झैँ दौडी आउँछौ भने यसमा मेरो के दोष भयो त ? यसको उत्तरमा गोपिनीहरू भन्छन्— हजुर **गतिविद्** अर्थात् हाम्रा सबै मनोभाव र व्यवहारलाई पनि राम्ररी जान्नुहुन्छ। हाम्रो हजुरप्रति प्रेम छ भन्ने हजुरलाई थाहा छ, यसकै लागि हामीले कात्यायनीव्रत पनि गरेका थियौँ, त्यो वेलामा हाम्रो गति अर्थात् क्रियाकलाप एवं उद्देश्यलाई समेत जान्ने हजुरले हामीलाई मिलनको आशा पनि देखाउनुभएकै हो। हजुरद्वारा नै मिलनको आश्वासन पाएर त्यत्तिबेलै हामी यहाँ आयौँ। यहाँ **उद्गीत** शब्दको प्रयोग गरेर गोपिनीहरूले श्रीकृष्णले नै आफूहरूलाई बोलाएको पनि सिद्ध गरेका छन्। **उच्चैः गीतं उद्गीतम्** अर्थात् उच्च स्वरले गाइएको गीतलाई **उद्गीत** भनिन्छ। अथवा **उद्दिश्य गीतं उद्गीतम्** अर्थात् कसैको उद्देश्यले (त्यसलाई लक्षित गरी) गाइएको गीतलाई उद्गीत भनिन्छ। हजुरले सधैँ बजाउने बाँसुरी र आज बजाएको बाँसुरीधुनमा विशेष अन्तर रहेको छ। हजुर सधैँ बाँसुरी बजाउनुहुन्थ्यो, तर आज हजुरले उच्चस्वरले बाँसुरी बजाउनुभयो। त्यसमा पनि हामीलाई नै उद्देश्य गरी एक-एकको नामले बोलाए झैँ बाँसुरीको आवाज सुनियो। जसलाई प्राप्त गर्न जन्म-जन्मान्तरदेखि तीव्र इच्छा थियो, अनि जसको स्पष्ट स्वीकृति आजसम्म प्राप्त नभएकाले नै हामी मन नभए पनि घरव्यवहारमा लागे झैँ गरी रहेका थियौँ, उनै प्रियले आफ्नो नामले नै बोलाए झैँ गरी प्रेमपूर्ण आह्वान गरेको सुनेपछि हामी घरमा टिक्न सकेनौँ र हतार गरेर आयौँ। यसरी हामीलाई फकाएर बोलाउने अनि वन-वनमा घुमाउने यो काम राम्रो भएन।

**कितव** भन्ने सम्बोधनबाट श्रीकृष्ण कपटी एवं छली स्वभावको भएको बताइएको छ। यहाँ पनि अनेक भावहरू रहेका छन्। मानौँ श्रीकृष्णले भन्नुभयो— म छली हृदय भएकाहरूका सामु देखिन्नँ, किनभने मलाई प्राप्त गर्न **ऋजुता** अर्थात् सोझोपन पनि एउटा साधन हो। तिमीहरू छली हृदय भएका छौ, त्यसैले म तिमीहरूको अघि प्रकट हुन्नँ। यसको उत्तरमा गोपिनीहरू भन्छन्— कसको हृदय बाङ्गो अनि को सोझो भन्ने कुराको निर्णय त आजै भइहाल्यो नि। हामी सरल अन्तःकरण भएकाहरू हजुरको दर्शन चाहँदै प्रार्थना गरिरहेका छौँ। हजुरको बाँसुरीको धुन

सुनेर हामी घर छोडी यतातिर हान्निएर आएका हौँ। हामी छल या देखाओटी गर्न पनि जान्दैनौँ। बरु हजुर नै छल गरी वन-वन घुमिरहनुभएको छ। हजुरको हृदय पनि बाङ्गो छ। त्यही जनाउन होला, हजुरले आफ्नो हृदयमा श्रीवत्स चिह्न धारण गर्नुभएको हो। भुमरी परेका सुनौला रौँको त्यो चिह्नले हजुरभित्र रहेको बाङ्गोपनलाई जनाएको छ।

**रहसि संविदं हृच्छयोदयं प्रहसिताननं प्रेमवीक्षणम्।**
**बृहदुरः श्रियो वीक्ष्य धाम ते मुहुरतिस्पृहा मुह्यते मनः॥ १७॥**

**पदार्थ–**
**रहसि** = एकान्तमा
**हृच्छयोदयं** = कामभावलाई जगाउने
**संविदं** = (हजुरले गरेको) ठट्टालाई
**प्रहसिताननं** = हँसिलो अनुहारलाई
**प्रेमवीक्षणम्** = प्रेमपूर्ण हेराइलाई अनि
**श्रियः** = लक्ष्मीको
**धाम** = निवासस्थान भएको
**ते** = हजुरको
**बृहदुरः** = विशाल वक्षस्थललाई
**वीक्ष्य** = देख्दा
**अतिस्पृहा** = (मिलनको) तीव्र इच्छाले (सताउँथ्यो, अहिले तिनैलाई सम्झी)
**मुहुः** = बारम्बार
**मनः** = मन
**मुह्यते** = मोहित भइरहेको छ

**वाक्यार्थ–** एकान्तमा कामभावलाई जगाउने खालको हजुरले गरेको ठट्टा, हजुरको हँसिलो अनुहार, प्रेमपूर्ण हेराइ अनि लक्ष्मीको निवासस्थानका रूपमा रहेको हजुरको विशाल वक्षस्थललाई देख्दा हजुरको मिलनको तीव्र इच्छाले हामीलाई सताउँथ्यो। अहिले त्यसैलाई बारम्बार सम्झी हाम्रो मन मोहित भइरहेको छ।

**विवरण–** यस श्लोकमा तामसराजसी गोपिनीहरूले श्रीकृष्णप्रति आफ्नो मन मुग्ध भएको जनाएका छन्। जो बाङ्गो-टेढो स्वभावको हुन्छ, त्यसलाई कसैले पनि मन पराउँदैन। तिमीहरू बाङ्गो भए पनि मलाई किन मन पराउँछौ त भन्ने शङ्काको उत्तरमा गोपिनीहरू यो श्लोकमा आफ्नो मन मुग्ध भई त्यसमा विवश भइसकेको बताउँछन्। यस श्लोकको तात्पर्यलाई हेर्दा यसमा गोपिनीहरूले आफ्नै मनलाई धिक्कारेको या आत्मनिन्दा गरेको भाव प्रकट भएको छ। हजुरको स्वभाव हेर्दा हजुरलाई मन पराउन नहुने हो, तर के गर्नु ? मन मोहित भइसकेपछि कसको के लाग्छ र ? हामीले हजुरलाई छोड्न खोजे पनि हाम्रो मन मोहित भएकाले हजुरलाई छोड्न सक्दैनौँ। हाम्रो मनले पनि दुर्गुणी हजुरलाई छाडेको छैन। हजुरमा हाम्रो मन व्यर्थमा नै मोहित भयो। यहाँ गोपिनीहरूले कृष्णप्रति आफ्नो मन मोहित हुनुमा मुख्य तीन कारणहरू बताएका छन्– एउटा श्रीकृष्णका विचित्र र रहस्यमय भनाइहरू, अर्को उहाँको हँसिलो र प्रसन्न अनुहार, अनि अर्को उहाँको सुन्दर वक्षःस्थल। **रहसि संविदं** अर्थात् एकान्त निकुञ्ज आदिमा श्रीकृष्णले विचित्र सङ्केतहरू गर्नुहुन्थ्यो। उहाँका प्रेमपूर्ण सङ्केतहरूबाट अनि आफूसँग मिलन हुने आश्वासनबाट हामी पूरै मोहित हुन्थ्यौँ। यसरी उहाँले आजसम्म आफ्नो मिठो वचनको जालमा हामीलाई फसाइरहनुभएको थियो। स्वभाव जतिसुकै नराम्रो भए पनि उहाँको बोलीबाट नै हामी मोहित भइहाल्यौँ। उहाँमा मोहित हुनुको अर्को कारण हो, उहाँको सुन्दर मुहार। प्रेमपूर्ण हेराइ र

मधुर हास्यले युक्त भएको त्यो सुन्दर अनुहारभित्र यति कपटपूर्ण चरित्र पनि लुकेको हुनसक्छ भनी कसले अनुमान गरेको थियो र ? गोपिनीहरूको अनुभवमा उनीहरूलाई श्रीकृष्णको हेराइ **प्रेमवीक्षण** अर्थात् हामीलाई नै प्रेमदृष्टिले हेरिरहनुभएको छ भन्ने लाग्थ्यो। उहाँको हँसिलो अनुहार देख्दा पनि उनीहरूलाई कृष्ण हाम्रो उद्देश्यले नै हाँसिरहनुभएको छ भन्ने लाग्थ्यो। गोपिनीहरू जब श्रीकृष्णका चौडा छातीलाई हेर्थे तब उनीहरूलाई त्यो **श्रियःधाम** अर्थात् सौभाग्य एवं शोभाकी अधिष्ठात्री देवी लक्ष्मीकै निवासस्थान झैँ लाग्थ्यो। त्यसमा उनीहरूले आफ्नो पनि ठाउँ भएको कल्पना गर्थे। यसरी आजसम्मका हरेक अनुभवहरूले परिपुष्ट हुँदै गइरहेकाले नै आफ्नो मन श्रीकृष्णमा मुग्ध भएको गोपिनीहरूको भाव छ।

श्लोकमा धाम शब्दको प्रयोग गरिएको छ। यसबाट पनि अनेक भावहरू प्रकट भएका छन्। गोपिनीहरू भन्छन्– हजुरको धाम अर्थात् स्वरूप शान्त, भयरहित छ भनी बताइएको छ। हजुर आफैँले पनि गीता (८/२१)मा **तद् धाम परमं मम** अर्थात् त्यो मेरो परम धाम हो अर्थात् स्वरूप हो भनी त्यो स्वरूपमा अरू कसैको प्रकाश आदि नपुग्ने बताउनुभएको छ। त्यही अभयरूप हजुरको स्वरूप आज हामी गोपिनीहरूसँग डराउँदै अँध्यारो वनमा एक्लै भागिरहेको छ। के हजुर साँच्चै अभयरूप हुनुहुन्छ र भनी प्रश्न सोधिएको भाव पनि यहाँ प्रकट भएको छ। यही विषयमा अर्की गोपिनी भन्छिन्– हे श्रीकृष्ण ! संसारमा पुरुषबाट स्त्रीहरू डराउँछन् भन्नेसम्म सुनिएको थियो, झन् हजुर त आफूलाई परमपुरुष या उत्तम पुरुष भन्नुहुन्छ। हजुर झन् स्त्रीहरूबाट डराई भाग्न मिल्दछ ? यसो गर्नुभयो भने पछिका पुरुषहरूले आफ्ना यस्ता डरपोक भगुवालाई कति खिसी गर्लान् ? अर्को कुरा छ– वेदहरूले परमात्माको स्वरूपले मोह आदि अन्धकारलाई नष्ट गर्दछ भनी बताएका छन्, तर त्यही स्वप्रकाश परमतत्त्व हाम्रा लागि भने मोहजनक भयो। यस्तो मोह जन्माउनेलाई पनि किन ज्ञानी महापुरुषहरूले प्रशंसा गरेका होलान् भनी प्रश्न सोधिएको छ।

सबैलाई शरण दिने श्रीकृष्णका विषयमा अर्को भाव छ– जो व्यक्ति भगवान्को चरणको शरणमा जान्छ त्यसले सबैलाई तापरहित बनाउन सक्छ भन्ने प्रसिद्धि छ तर यो भनाइ असत्य रहेछ, किनभने हजुरको चरणमा गरिएको प्रेमले हामीलाई तापयुक्त बनाइरहेको छ। हजुरमा लगाइएको मनले मोहमा पार्दैछ। कुनै गोपिनी भन्छिन्– जसले एकपटक मात्र भए पनि परमात्माको पद चिन्तन गर्दछ, त्यो व्यक्ति तापमुक्त हुन्छ भने हामी हजुरको सम्पूर्ण स्वरूपको दर्शन पाउने गोपिनीहरू चाहिँ झन् तापयुक्त भएका छौँ। यो कसरी सम्भव भयो ? यसरी अनेक भावहरू यहाँ भित्र रहेका छन्।

**व्रजवनौकसां व्यक्तिरङ्ग ते वृजिनहन्त्र्यलं विश्वमङ्गलम्।**
**त्यज मनाक् च नस्त्वत्स्पृहात्मनां स्वजनहृद्रुजां यन्निषूदनम्॥ १८॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय श्रीकृष्ण
**ते** = हजुरको
**व्यक्तिः** = प्रादुर्भाव
**विश्वमङ्गलम्** = संसारको कल्याण र

**व्रजवनौकसां** = व्रजवासीहरूका
**अलं** = सम्पूर्ण
**वृजिनहन्त्री** = पापलाई नष्ट गरिदिने किसिमको छ
**स्वजनहृद्रुजां** = आफ्ना प्रेमीहरूको हृदयरोगको
**निषूदनम्** = नाशक (औषधि)
**यत्** = जे हो (त्यो हजुरलाई नै थाहा छ, त्यो)
**त्वत्स्पृहात्मनां** = हजुरलाई भित्रैदेखि चाहने
**नः** = हाम्रा लागि
**मनाक् च** = अलिकति भए पनि
**त्यज** = दिनुहोस्

**वाक्यार्थ–** हे प्रिय श्रीकृष्ण ! हजुरको प्रादुर्भावले संसारैको कल्याण गर्छ, यसले नै व्रजवासीहरूको सबै पापहरूलाई पनि नष्ट गरिदिन्छ। हजुरका प्रेमीहरूको हृदयरोगको नाश गर्ने जे औषधि हो त्यो हजुरलाई नै थाहा छ, हजुरलाई भित्रैदेखि चाहने हामीलाई त्यो औषधि अलिकति मात्र भए पनि प्रदान गर्नुहोस्।

**विवरण–** यो तामससात्त्विकी कुमारी गोपिनीहरूले गरेको स्तुति हो। यसमा उनीहरूले श्रीकृष्णको जन्म व्रजवासीहरूको दुःखलाई नष्ट गर्नकै लागि भएको हो भनी उहाँलाई फकाउन खोजेका छन्। यहाँ भगवान्लाई **अङ्ग** अर्थात् हे प्रिय ! भनी सम्बोधन गरिएको छ। श्रेष्ठ व्यक्तिहरू संसारैको रक्षा गर्न तत्पर हुन्छन्, झन् सर्वश्रेष्ठ परमपुरुष परमात्माको त यो मुख्य कर्तव्य नै हो। **विश्वमङ्गलं** अर्थात् विश्वकै कल्याणका लागि भगवान्को आविर्भाव हुने गर्दछ। यदि भगवान्को चरित्रबाट कुनै पनि व्यक्ति दुःखमा पऱ्यो भने त्यो भगवान्को असफलता हो र भगवान्कै लागि चुनौती हो। संसारकै ताप नाश गर्न हजुर आउनुभएको हो भने के हजुरले हाम्रो उपेक्षा गर्न मिल्छ ? के हामी संसारभित्र नै पर्दैनौं ? भगवान्सँग भक्तहरूले यस्ता अनेकौं प्रार्थना गरेको प्रसङ्ग भक्तिग्रन्थहरूमा अन्यत्र पनि पाइन्छ। यस्तै भावमा एक भक्तले भगवान्लाई प्रार्थना गर्दै उहाँ विश्वम्भर हुनुभएको भए आफूलाई दुःखबाट जोगाउन चुनौती दिएका छन्–

**विश्वम्भर भर त्वं मां विश्वतो वा बहिष्कुरु।**
**एतद् द्वयं न शक्नोसि त्यज विश्वम्भराभिधाम्।।**

अर्थात् हे विश्वम्भर ! हजुर साँच्चै विश्वम्भर हुनुहुन्छ भने विश्वभित्रै पर्ने मलाई पनि रक्षा गर्नुहोस्। यदि मेरो रक्षा गर्न चाहनुहुन्न भने मलाई विश्वबाट बाहिर गर्नुहोस्, जो कि मलाई रक्षा नगर्दा पनि हजुरको विश्वम्भरत्वमा कुनै कमी नआओस्। यदि मेरो रक्षा पनि गर्नुहुन्न या मलाई विश्वबाट बाहिर पनि गर्नुहुन्न भने आफ्नो यो विश्वम्भर नाम छाडिदिनुहोस्। यहाँ भक्तले आफूलाई रक्षा गर्न या विश्वबाट बाहिर गरिदिन प्रार्थना गर्दा दुबै रूपमा नै ऊ संसारबन्धनबाट जोगिन चाहेको देखिन्छ। गोपिनीहरू पनि मोहबन्धनबाट छुट्न चाहन्छन्, त्यसैले उनीहरू श्रीकृष्णलाई विश्वपालन गर्नुपर्ने कर्तव्य सम्झाइरहेका छन्।

मानौं भगवान्ले भन्नुभयो– हे गोपिनीहरू ! म त संसारमा पापरहित शुद्ध व्यक्तिहरूलाई मात्र दर्शन दिन्छु, कल्याण गर्दछु, सबैलाई कल्याण गर्ने मेरो जिम्मा होइन। यसको उत्तरमा गोपिनीहरू भन्छन्– पहिल्यै पाप नष्ट गरिरहनु पनि पर्दैन। यदि हामीमा केही पाप आदि बाँकी रहेका छन् भने हजुरको दर्शनले नै त्यो समूल नष्ट भइहाल्छ किनभने हजुरको अभिव्यक्ति नै **वृजिनहन्त्री** अर्थात् सम्पूर्ण पापलाई नष्ट गर्न समर्थ छ। यहाँ गोपिनीहरूका अरू पनि अनेकौं मनोभाव रहेका छन् । कुनै गोपिनी सोध्छिन्– यदि हजुरलाई हाम्रो हृदय राम्रो–नराम्रो के छ भन्ने

विषयमा सन्देह रहेको छ भने त्यसको समाधान पनि हामी बताइदिन्छौँ। हाम्रो हृदयभित्र हजुरको मिलनको कामना पहिलेदेखि नै रहेको छ। यदि हाम्रो हृदय दुष्ट भएको भए उसलाई त्यो सबै भाव थाहा हुन्छ। फेरि कामदेव त हजुरको पुत्र भएकाले हजुरको लागि सत्यवक्ता आप्त पनि हुँदै हो। त्यही साक्षी कामदेवलाई सोधी हाम्रो हृदयको अवस्था पत्ता लगाउन सक्नुहुन्छ। मानौँ श्रीकृष्णले भन्नुभयो— तिमीहरूमा पापको आशङ्का भएर होइन, अपि तु आफ्नै सङ्कोचका कारणले म तिमीहरूको अघि नआएको हुँ। म परपुरुष हुँ। परपुरुषले स्त्रीहरूको बीचमा जाँदा ती स्त्रीहरूको मर्यादामा धक्का पुग्छ, त्यसैले म तिमीहरूको अघि नआएको हुँ। यसको प्रत्युत्तरमा गोपिनी भन्छन्— यदि स्त्रीहरूबीच आउन लाज लागेको हो भने आफूमा रहेको करुणालाई पठाउनुहोस्, या आफ्नी सहचारिणी करुणालाई साथ लिई आउनुहोस्। आफ्नी स्त्रीलाई साथ लिई स्त्रीको समूहमा आउँदा केही फरक पर्दैन।

**यत्ते सुजातचरणाम्बुरुहं स्तनेषु**
**भीताः शनैः प्रिय दधीमहि कर्कशेषु।**
**तेनाटवीमटसि तद् व्यथते न किं स्वित्**
**कूर्पादिभिर्भ्रमति धीर्भवदायुषां नः॥ १९॥**

| पदार्थ– | **कर्कशेषु** = कठोर | **किं स्वित्** = के |
|---|---|---|
| **प्रिय** = हे प्रिय श्रीकृष्ण | **स्तनेषु** = स्तनहरूमा | **न व्यथते** = दुख्दैन |
| **यत्** = जुन | **दधीमहि** = राख्दथ्यौँ | **भवदायुषां** = हजुरका लागि |
| **ते** = हजुरका | **तेन** = त्यही चरणले | जिउने |
| **सुजातचरणाम्बुरुहं** = सुकोमल | **अटवीम्** = वन-वनमा | **नः** = हाम्रो |
| चरणकमललाई | **अटसि** = हिँड्नुहन्छ | **धीः** = बुद्धि |
| **भीताः** = डराउँदै | **तत्** = ती चरणकमललाई | **भ्रमति** = चक्कराउँदैछ |
| **शनैः** = बिस्तारै (आफ्ना) | **कूर्पादिभिः** = तिखा ढुङ्गा आदिले | |

**वाक्यार्थ—** हे प्रिय श्रीकृष्ण ! हजुरका चरणकमल यति कोमल छन् कि हामी डराउँदै बिस्तारै मात्र आफ्ना कठोर स्तनमा तिनलाई राख्दथ्यौँ। अहिले हजुर तिनै चरणले वन-वनमा हिँड्दै हुनुहुन्छ। के हजुरका चरणहरूलाई तिखा ढुङ्गाहरूले घोच्दा दुख्दैन होला र ? यो सम्झी हजुरकै लागि जिउने हामी सबै गोपिनीहरूको बुद्धि चक्कराउँदैछ।

**विवरण—** यस श्लोकमा तामसराजसी गोपिनीहरूले आफ्नो मनको पीडा व्यक्त गरेका छन्। उनीहरूले श्रीकृष्णका कोमल चरणमा वनका काँडा, घाँसका अङ्कुर आदि बिज्दा कति पीडा भयो होला भनी कल्पना गर्दा आफ्नो बुद्धि नै घुमेको जनाएका छन्। यहाँ अरू पनि अनेक भावहरू अभिव्यक्त भएका छन्। भगवान् वन-वन घुम्नुभएको विषयलाई लिएर एउटा जिज्ञासाको भाव प्रकट भएको छ। संसार पनि वन हो, यसलाई **भवाटवी** भनिएको छ। सम्पूर्ण प्राणीहरू

प्रारब्ध कर्मको कारणले यो वनमा घुम्छन्, यो उनीहरूको बाध्यता हो, तर श्रीकृष्णमा त कुनै कर्मको बन्धन छैन। श्रीकृष्णको जन्म र कर्म सामान्य प्राणीहरूको फैं देखिए तापनि त्यो ती प्राणीहरूको जन्म कर्मभन्दा भिन्न र दिव्य छ। गीता (४/९)मा बताइएको छ— **जन्म कर्म च मे दिव्यम्** अर्थात् मेरा जन्म र कर्महरू दिव्य छन्। प्रारब्धवश प्राणीहरू यो वनमा घुमेको कुरा त बुझ्न सकिन्छ, तर प्रारब्ध नहुँदा पनि श्रीकृष्ण यो दुःखमय वनमा किन भड्किनुभएको होला ? आफ्नै छट्टु स्वभावको कारणले उहाँले दुःख पाउनुभएको हो नत्र दुःख पाउनुपर्ने कुनै कारण नै नभएको गोपिनीहरूको भनाइ छ। यहाँ गोपिनीहरूले आफूहरूलाई श्रीकृष्णमा नै आयु भएका भनी बताएका छन्। गोपिनीहरूको भनाइ अनुसार उनीहरूको आयु आफूमा नभई श्रीकृष्णमा रहेको छ। यस विषयमा पनि गोपिनीहरूका अनेक मनोभावहरू प्रतिबिम्बित भएका छन्।

गोपिनीहरू भन्छन्— हाम्रो आफ्नो आयु आफैंमा रहनुपर्ने हो। अरू सबैको आयु ती-ती व्यक्तिहरूमैं रहने अनि हाम्रो आयु चाहिँ हामीमा नभई श्रीकृष्णमा हुने चालबाजी गरिएको छ। यो भावनामा गोपिनीहरूले विधातालाई षड्यन्त्रकारी भएको आरोप लगाएका छन्। विधाताले विचार गरेछन्— यदि गोपिनीहरूको आयु पनि यिनीहरूकै नियन्त्रणमा यिनीहरूभित्रै राखिदिने हो भने त प्रियविरहको असीम दुःखको वेगले त्यसलाई एकैपटक समाप्त गरिदिइहाल्छ। अनि यदि यिनीहरू पहिलो चोटमा नै समाप्त भए भने धेरै दुःख भोगाउन पाइँदैन। सृष्टिभरि दुःख भोगाउन फेरि मैले अरू कुन चाहिँ सोझा-साझालाई तयार गरूँ ? यसैले यिनीहरूलाई नै अपार कष्ट दिई सृष्टिमा रहेको दुःख भोग्ने जिम्मा यिनीहरूकै लागि छुट्याइदिन्छु। यस्तो विचार गरी उनले हाम्रो आयु श्रीकृष्णलाई दिएछन्, जसबाट उहाँ छलकारी श्रीकृष्णले हाम्रो आयु आफ्नो मुट्ठीमा लिई हामीलाई बचाउँदै अनन्त समयसम्म दुःख भोगाउन सक्नुहोस्। **भवदायुषां** यो शब्दबाट अर्को भाव पनि अभिव्यक्त हुन्छ। अब धेरै समय विरह सहियो भने आफ्नो प्राण समाप्त हुने ठान्दै गोपिनीहरूले श्रीकृष्णलाई अन्तिम चेतावनी दिन यो शब्द प्रयोग गरेका हुन्। अब पनि प्रकट हुनुहुन्न भने हाम्रो आयु हजुर नै स्वीकार गर्नुहोस्। अब हामी मरेपछि हाम्रो शेष आयुलाई लिई यो व्रजको वनमा हामी विना एक्लै रमाइरहनुहोस्। यसरी हजुर लामो समय बाँच्नुहोस् भन्ने भावना गोपिनीहरूले पोखेका छन्। **भवदायुषां** यो शब्दबाट श्रीकृष्णको र आफूहरूको आयु एउटै भएको भाव पनि गोपिनीहरूले व्यक्त गरेका छन्। हे श्रीकृष्ण ! हजुर र हामी बाहिरी रूपमा देखिन मात्र दुई या अनेक छौं, तर हजुरको आयु र हाम्रो आयु एउटै छ। आयु एउटै भइसकेपछि हामीलाई परेको दुःख हजुरलाई अनि हजुरलाई परेको दुःख हामीलाई प्राप्त हुन्छ। हामी विरहवेदनामा मूर्च्छित हुँदा हजुर पनि मूर्च्छित हुनुहुनेछ अनि हजुर वन-वनमा डुली भ्रमित भई दुःख पाइरहुन्जेल हामी पनि भ्रमित एवं दुःखी भइरहनेछौं। त्यसैले धेरै हठ नगर्नुहोस्, हजुर र हामी अलग हुन सक्दैनौं। अब हाम्रा लागि छिट्टै प्रकट भइहाल्नुहोस्, जसबाट हामीलाई पाएर हजुर अनि हजुरलाई पाएर हामी प्रसन्न हुन सकौं। यो भावमा गोपिनीहरू र श्रीकृष्ण अलग अस्तित्व नभई एउटै अस्तित्ववाला हुन् भन्ने उच्चतम रहस्य प्रकट भएको छ। प्रेम भनेकै दुई हृदयलाई जोडी एउटै बनाइदिने प्रक्रिया हो। प्रेमको माथिल्लो स्तरमा दुबैका एउटै प्राण, एउटै मन र एउटै इन्द्रिय हुन्छन्। एउटाको सानो भाव पनि अर्काको मनमा गई ठोक्किन्छ। यसरी मन र प्राणको एकात्मता नभईकन प्रेमको असली

स्वरूप प्रकाशमा आउँदैन पनि। जबसम्म प्रेमीलाई आफ्नो भाव मुखले या इसाराले बताउनुपर्ने हुन्छ, तबसम्म त्यहाँ प्रेमको वास्तविक रूप प्रकट भएकै छैन भन्ने बुझ्नुपर्दछ। सांसारिक प्रेम यस्तै तल्लो स्तरको प्रेम हुन्छ। परमात्मा आफ्नै आत्मा भएकाले उहाँसँग मात्र एउटै प्राण र एउटै मन भई मिल्न सकिन्छ। यसरी एउटै भई मिलिसकेपछि मात्र व्यक्ति असली भक्त एवं प्रेमी हुन्छ। यहाँ गोपिनीहरूले आफ्नो आयु श्रीकृष्ण नै भएको बताई प्रेमको यही उच्चतम स्वरूपको अभिव्यक्ति गरेका छन्। **धीः भ्रमति** भन्ने शब्दबाट अब आफूहरू स्तुति आदि केही गर्न पनि असमर्थ छौँ भन्ने भाव पनि प्रकट भएको छ। हजुरको अनन्त महिमा छ। त्यसलाई व्यास, वाल्मीकि आदि अनेक ऋषिहरूले पनि बताउन सकेका छैनन्। हामीले अब हजुरको स्तुति गरेर के नै हुन्छ र ? अब हाम्रो बल सकिएको छ। विरहको व्यथाले गर्दा हाम्रो मन भ्रमित पनि भइसक्यो। अब देखिने भए आफैँ देखा पर्नुहोस् भनी गोपिनीहरूले पूर्ण आत्मसमर्पण गरेको भाव यहाँ झल्किन्छ। साधक जब साधनाको बललाई पनि छाडी पूर्ण आत्मसमर्पण गर्दछ, तब परमात्माको कृपाबलले नै परमात्मा प्राप्त हुनुहुन्छ भन्ने रहस्य यहाँ लुकेको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**रासक्रीडायां गोपीगीतं नामैकत्रिंशोऽध्यायः॥ ३१ ॥**

# अथ द्वात्रिंशोऽध्यायः

## गोपिनीहरूलाई भगवान्‌को सान्त्वना

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति गोप्यः प्रगायन्त्यः प्रलपन्त्यश्च चित्रधा ।**

**रुरुदुः सुस्वरं राजन् कृष्णदर्शनलालसाः ॥ १ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**इति** = यसप्रकार
**चित्रधा** = अनेक प्रकारले
**प्रगायन्त्यः** = गाइरहेका र
**प्रलपन्त्यः च** = प्रलाप गरिरहेका
**कृष्णदर्शनलालसाः** = श्रीकृष्णलाई देख्ने तीव्र चाहना भएका
**गोप्यः** = गोपिनीहरू
**सुस्वरं** = ठुलो स्वरले
**रुरुदुः** = रोए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! गोपिनीहरू यसप्रकार अनेक प्रकारले गाउन र प्रलाप गर्न लागे। श्रीकृष्णलाई देख्ने तीव्र चाहना भएका उनीहरू ठुलो स्वरले रुन थाले।

**तासामाविरभूच्छौरिः स्मयमानमुखाम्बुजः ।**

**पीताम्बरधरः स्रग्वी साक्षान्मन्मथमन्मथः ॥ २ ॥**

**पदार्थ–**
**तासाम्** = उनीहरूको अघि
**स्मयमानमुखाम्बुजः** = हँसिलो मुखकमल भएका
**साक्षात्** = साक्षात्
**मन्मथमन्मथः** = कामदेवलाई पनि मोहित गर्ने रूपवाला
**स्रग्वी** = वनमाला लगाएका
**पीताम्बरधरः** = पीताम्बरधारी
**शौरिः** = शूरका नाति भगवान् श्रीकृष्ण
**आविरभूत्** = प्रकट हुनुभयो

**वाक्यार्थ–** यसपछि गोपिनीहरूको अघि कमलजस्तो हँसिलो मुख र कामदेवलाई पनि मोहित गर्ने रूप भएका एवं वनमाला र पीताम्बर धारण गर्नुभएका भगवान् श्रीकृष्ण प्रकट हुनुभयो।

**विवरण–** माथिका दुई श्लोकमा गोपिनीहरूको विलाप सुनिसकेपछि भगवान् श्रीकृष्ण उनीहरूका सामने प्रकट हुनुभएको बताइएको छ। यस प्रसङ्गबाट भगवान्‌लाई प्राप्त गर्न दीनता नै प्रमुख साधन भएको पनि जनाइएको छ। परमात्मालाई प्राप्त गर्न मुख्य दुई कुराहरू चाहिन्छन्– एउटा प्रबल पुरुषार्थ र अर्को भगवान्‌को कृपा। परमात्मालाई प्राप्त गर्न व्यक्ति पुरुषार्थी हुनु नै पर्दछ। यसैलाई बताउँदै मुण्डकोपनिषद् (३/२/४)मा भनिएको छ– **नायमात्मा बलहीनेन लभ्यो, न च प्रमादात्** अर्थात् यो आत्मतत्त्वलाई आत्मबल नभएको व्यक्तिले र आलस्य गर्ने प्रमादीले पनि पाउन सक्दैन। सामान्य संसारी व्यक्तिहरू संसारैलाई बनाउन चाहिँ कठोर परिश्रम गर्छन् तर परमात्मालाई पाउन चाहिँ प्रयासै गर्दैनन्। जीवको अल्पसामर्थ्यले परमात्मालाई पाउन नसक्ने जनाउँदै त्यसका लागि परमात्मकृपा नै चाहिने उनीहरू बताउँछन्। तर यो आलस्यको भावले परमात्मालाई पाउन सकिँदैन। यही तामसी मोह हटाउनका लागि नै शास्त्रहरूमा प्रबल पुरुषार्थको

उपदेश गरिएको हो। यो जीव अनादि कालदेखि संसारका अनेक कर्ममा लागिरहेको छ। अवसर मिल्नेबित्तिकै जीवले तिनै पुराना नराम्रा संस्कारहरू खेलाइरहन्छ। त्यसलाई हटाउन शास्त्रमा अनेक साधना या उपासना पद्धतिहरू बताइएका छन्। यिनीहरूको निरन्तर अनुष्ठानद्वारा जीव पुराना दुष्कर्महरूको दासताबाट मुक्त हुन्छ। यसकै लागि अनेक साधनाविधिहरू बताइएका हुन्। यसको तात्पर्य केवल आफ्नै बलले या पुरुषार्थले परम तत्त्वको प्राप्ति हुन्छ भन्ने होइन। परम तत्त्वको प्राप्ति भनेको जीव र परमात्मा अभिन्न भई मिल्नु हो, यसका लागि जीव अनि परमात्मा दुबै नै सक्रिय हुनुपर्दछ। जीव अल्पज्ञ एवं अपूर्ण भएकाले उसको प्रयास पनि अपूर्ण नै रहेको हुन्छ। यसलाई पूर्ण बनाउन भगवान्को कृपाको आवश्यकता पर्दछ। यसरी पुरुषार्थ एवं कृपा दुबै मिलेर नै जीवको उद्धार सम्भव छ भन्ने शास्त्रको निर्णय रहेको पाइन्छ। यी दुईमध्ये पनि ज्ञानको साधनामा पुरुषार्थ प्रधान अनि कृपा गौण हुन्छ भने भक्तिको साधनामा कृपा प्रधान र पुरुषार्थ गौण हुन्छ। यो भक्ति साधनाको प्रसङ्ग भएकाले यहाँ जीवको प्रयासभन्दा भगवान्को कृपा नै प्रमुख हुन्छ भनी बताइएको छ।

परमात्मा वस्तुतः निर्गुण र निष्क्रिय भए पनि भक्तका लागि सगुण र सक्रिय हुनुहुन्छ। भक्तहरूको कल्याण गर्न उहाँ पग्लिनुभएको छ र निरन्तर करुणाको रूपमा सबैतिर समानरूपले बर्सिरहनुभएको छ। सबैतिर समानरूपले बर्सिने भगवान्को करुणा भक्तहरूमा चाहिँ विशेष फलोत्पादक हुन्छ, अरूमा हुँदैन। यो कुरा वृष्टिको दृष्टान्तबाट स्पष्ट हुन्छ। जसरी वर्षा सबैतिर समान नै हुन्छ, तर वर्षाको पानी होचो-गलेको स्थानमा गई स्थिर हुन्छ, त्यसै गरी सबैतिर बर्सिने भगवत्करुणा पनि नम्र एवं विनयी भक्तहरूमा नै गई स्थिर हुन्छ। जब व्यक्ति साधना समेत त्यागी पूर्णतः समर्पित एवं अनन्य बन्दछ, तब मात्र भगवान्को कृपा त्यसमा फलीभूत हुन्छ। यसैले यहाँ गोपिनीहरूले भगवान्को खोजी गर्न छाडी दीनतापूर्वक रोएपछि मात्र भगवान् प्रकट हुनुभएको देखाइएको छ। तर यो अवस्था प्राप्त हुन पनि गोपिनीहरूले पहिले परमात्माको अन्वेषण गर्ने साधना गरेकै थिए भन्ने बुझिन्छ। भक्तिको क्षेत्रमा साधनाको महत्त्व परमात्मालाई प्राप्त गराउन होइन, अपि तु संसारका पुराना दुर्वासना छुटाउनसम्म मात्र रहेको छ। जब व्यक्ति संसारबाट पूर्णतः छुट्दछ र पछि आफ्नो साधनालाई पनि छाडी केवल निरुपाय बन्दछ, तब त्यसलाई सर्वशक्तिमान् परमात्माको कृपापूर्ण सहायता प्राप्त हुन्छ। अनन्तलाई पाउन अन्तवान् पदार्थहरूको भरोसालाई पूर्णतः त्याग्नै पर्दछ। यही रहस्य प्रस्तुत प्रसङ्गमा व्यक्त भएको देखिन्छ। यसैलाई टीकाकारहरूले **भक्तानां दैन्यमेवैकं हरितोषणसाधनम्** अर्थात् भक्तहरूका लागि भगवान्लाई प्रसन्न बनाउने साधन भनेको दीनता नै हो भनी बताउनुभएको छ।

यहाँ गोपिनीहरूको रुवाइलाई **सुस्वर** अर्थात् मधुर स्वरयुक्तको भनिएको छ, रुवाइ सामान्यतया राम्रो हुँदैन, तर भगवान्लाई आफ्ना लागि भक्तहरू रोएको खुब मिठो लाग्दछ। त्यसैले भगवान्को अनुभवलाई नै लिई यहाँ रुवाइको लागि **सुस्वर** शब्दको प्रयोग गरिएको हो। संसारका लागि रुने व्यक्तिहरू भगवान्को लागि रुनु के हो र यो कति मधुर हुन्छ भन्ने जान्दैनन्, तर दीनतापूर्वकको यही रुवाइबाट पग्लेर नै मङ्गलमय परमात्मा प्रकट हुने हुनाले भक्तहरूलाई यो परमप्रिय भएको हो। संसारका पदार्थहरूको होइन अपितु कृष्णदर्शनको लालसाले रुनु असाध्यै

रमणीय हुन्छ। त्यसैले भक्तहरूको अनुभवबाट पनि यसलाई **सुस्वर** अर्थात् मिठो स्वरको भनिएको हो।

यहाँ भगवान्लाई **शौरिः** भनिएको छ। **शूरस्य अपत्यं शौरिः** अर्थात् शूरका नाति भएकाले भगवान् शौरि हुनुहुन्छ। भगवान् यति शूर हुनुभयो कि आफूलाई प्रेम गर्नेहरूलाई रक्षा गर्न छाडी वन–वनमा एक्लै भाग्दै हिँड्नुभयो भन्ने उपहासको भाव पनि यहाँ छ। भगवान् अहिलेसम्म प्रकट नहुनुभएकाले भक्तहरूले रिसाई यो भाव प्रकट गरेका हुन्। भगवान्को स्वरूपको वर्णन गर्दै शुकदेवले **मन्मथमन्मथ** भन्नुभएको छ। **मनः मथ्नाति इति मन्मथः** यस्तो व्युत्पत्ति अनुसार मन्मथ भनेका कामदेव हुन्। आफ्नो अद्वितीय सुन्दरताको कारणले कामदेवको चित्तलाई पनि विक्षिप्त पारिदिने भएकाले भगवान् **मन्मथमन्मथ** हुनुहुन्छ। यो शब्दबाट प्रियविरहपछिको संयोगमा उनमा अनन्त आनन्द एवं सौन्दर्यको प्रतीति हुने भाव पनि प्रकट भएको छ। एकपटक विरह भइसकेपछि फेरि प्रियसंयोग भयो भने सामान्य अवस्थाभन्दा त्यो अत्यन्तै आनन्ददायक हुन्छ। श्रीकृष्ण यद्यपि सर्वदा सुन्दर हुनुहुन्थ्यो, तर विरहपछिको मिलन भएकाले गोपिनीहरूले उहाँमा अनन्त सौन्दर्यको अनुभव गरेको भाव यहाँ प्रकट भएको छ। **पीताम्बरधर, स्रग्वी** आदि शब्दको अर्थ बताउँदै टीकाकारहरूले लेख्नुभएको छ– यसमा भगवान् श्रीकृष्ण गोपिनीहरूकहाँ आउन ढिलो गर्नुभयो भन्ने बताइएको छ। यहाँबाट हराई लक्ष्मीलाई सन्तुष्ट गर्न जाँदा उनले दिएको वनमाला, पीताम्बर आदि शृङ्गार ग्रहण गर्दा गर्दै धेरै अबेर भयो भनी भगवान्ले स्पष्टीकरण दिनुभएको भाव यहाँ प्रकट भएको छ। **आविः अभूत्** भन्ने शब्दबाट भगवान् गोपिनीहरूबाट कहिल्यै हराउनुभएको थिएन भन्ने भाव प्रकट भएको छ। अहिलेसम्म गोपिनीहरूको हृदयभित्र भगवान् पस्नुभएको थियो। श्रीकृष्णसँग विहार गर्दागर्दै जब गोपिनीहरूको हृदयमा मान या गर्वको भाव उदायो, तब भगवान्ले लीलारसको आस्वादनमा बाधक हुने देखी त्यस गर्वलाई नष्ट गर्न उनीहरूको हृदयभित्र पस्नुभयो। जब भगवान् भित्र पस्नुभयो तब यो भित्री रहस्य नबुझी गोपिनीहरूले श्रीकृष्ण हराएको भन्ने विचार गरी उहाँलाई निर्दयी भएको आरोप लगाइरहे। भगवान् सर्वशक्तिमान् भए पनि जुन हृदय आफूमा पूर्ण रूपले समर्पित भएको छैन, त्यसभित्र पसी त्यहाँका दुर्भावहरूलाई नष्ट गर्नुहुन्न। यसका लागि त हृदयलाई पूर्ण रूपमा भगवान्मा समर्पित गरिदिनुपर्दछ। गोपिनीहरूले आफ्नो हृदय भगवान्मा पूर्ण रूपले समर्पित गरेनन् उनीहरूले त श्रीकृष्णलाई छली भएको दोष लगाउँदै झन् भगवद्विरोधी वृत्तिहरूले त्यसलाई भरिरहे। यसरी भगवान् भित्रै रहन बाध्य हुनुभयो। जब आफ्नो सम्पूर्ण बललाई छाडी गोपिनीहरूले पूर्ण आत्मसमर्पण गरे तब हृदयको दुर्भावलाई नष्ट गरी भगवान् **आविः** अर्थात् उनीहरूकै अघि पहिले जस्तै प्रकट हुनुभयो। यो दृष्टिले विचार गर्दा रासलीलाको बीचमा हराउनु भगवान्को निर्दयता नभई परम कृपालुपन नै हो भन्ने सिद्ध हुन्छ।

**तं विलोक्यागतं प्रेष्ठं प्रीत्युत्फुल्लदृशोऽबलाः।**
**उत्तस्थुर्युगपत्सर्वास्तन्वः प्राणमिवागतम्॥ ३॥**

पदार्थ–
**प्रेष्ठं** = परम प्रिय
**तं** = उहाँ श्रीकृष्णलाई
**आगतं** = आउनुभएको
**विलोक्य** = देखेर
**प्रीत्युत्फुल्लदृशः** = प्रेमका कारण आँखा ठुला भएका
**सर्वाः** = सबै
**अबलाः** = स्त्रीहरू (गोपिनीहरू)
**प्राणम्** = प्राण
**आगतम्** = आएपछि
**तन्वः इव** = शरीर (हात, खुट्टा आदि) जस्तै
**युगपत्** = एकै पटक
**उत्तस्थुः** = उठे

**वाक्यार्थ–** ती परमप्यारा श्रीकृष्ण आउनुभएको देखेपछि प्रेमका कारण गोपिनीहरूका आँखा ठुला-ठुला भए। जसरी प्राण आएपछि शरीर उठ्छ, त्यसै गरी भगवान् आउनुभएपछि सबै गोपिनीहरू एकै पटक जर्‍याकजुरुक उठे।

**काचित् कराम्बुजं शौरेर्जगृहेऽञ्जलिना मुदा।**
**काचिद् दधार तद्बाहुमंसे चन्दनरूषितम्॥ ४॥**

पदार्थ–
**काचित्** = कुनै गोपिनीले
**मुदा** = प्रेमपूर्वक
**अञ्जलिना** = दुबै हातको अञ्जलिले
**शौरेः** = श्रीकृष्णको
**कराम्बुजं** = करकमललाई
**जगृहे** = समातिन्
**काचित्** = कुनैले चाहिँ
**चन्दनरूषितम्** = चन्दनलेप लगाइएको
**तद्बाहुम्** = उहाँको हातलाई
**अंसे** = आफ्नो काँधमाथि
**दधार** = राखिन्

**वाक्यार्थ–** कुनै गोपिनीले प्रेमपूर्वक आफ्ना दुबै हातले श्रीकृष्णको करकमललाई समातिन्। अर्कीले चाहिँ चन्दनको लेप लगाइएको श्रीकृष्णको हात समातेर आफ्नो काँधमाथि राखिन्।

**काचिदञ्जलिनागृह्णात् तन्वी ताम्बूलचर्वितम्।**
**एका तदङ्घ्रिकमलं सन्तप्ता स्तनयोरधात्॥ ५॥**

पदार्थ–
**काचित्** = कुनै एउटी
**तन्वी** = सुन्दरीले
**ताम्बूलचर्वितम्** = श्रीकृष्णद्वारा चपाइएको पानलाई
**अञ्जलिना** = अञ्जलिद्वारा
**अगृह्णात्** = लिइन्
**सन्तप्ता** = (वियोगले) तातेकी
**एका** = एउटीले चाहिँ
**तदङ्घ्रिकमलं** = उहाँको चरणकमललाई
**स्तनयोः** = आफ्ना स्तनमा
**अधात्** = राखिन्

**वाक्यार्थ–** कुनै एउटी गोपिनीले श्रीकृष्णद्वारा चपाइएको पानलाई आफ्नो अञ्जलिमा लिइन् भने अर्की वियोगले पीडित भएकी गोपिनीले श्रीकृष्णको चरणलाई आफ्ना स्तनमा राखिन्।

**एका भ्रुकुटिमाबध्य प्रेमसंरम्भविह्वला।**
**घ्नन्तीवैक्षत् कटाक्षेपैः सन्दष्टदशनच्छदा॥ ६॥**

**पदार्थ–**
**प्रेमसंरम्भविह्वला** = प्रणयकोपले विह्वल भएकी
**सन्दष्टदशनच्छदा** = दाँतले ओठ टोकिरहेकी
**एका** = एउटीले
**भ्रुकुटिम्** = आँखीभौँ
**आबध्य** = (बाँधेर) टेढो पारी
**कटाक्षेपैः** = आँखाको कुना–कुनाको कर्के हेराइले
**घ्नन्ती इव** = प्रहार गरे झैँ
**ऐक्षत्** = एकटक हेरिरहिन्

**वाक्यार्थ–** प्रणयकोपले विह्वल भएकी एउटी गोपिनीले चाहिँ दाँतले ओठ टोक्दै आँखीभौँलाई टेढो बनाई आफ्ना कर्के हेराइले प्रहार गरे झैँ श्रीकृष्णलाई एकटक हेरिरहिन्।

**अपरानिमिषद्दृग्भ्यां जुषाणा तन्मुखाम्बुजम्।**
**आपीतमपि नातृप्यत् सन्तस्तच्चरणं यथा ॥ ७ ॥**

**पदार्थ–**
**अनिमिषद्दृग्भ्यां** = झिमिक्क पनि नगरिएका दुई आँखाद्वारा
**आपीतम् अपि** = पूरै पिए झैँ गरी हेरिएको
**तन्मुखाम्बुजम्** = ती श्रीकृष्णको मुखकमललाई
**जुषाणा** = सेवन गरिरहेकी
**अपरा** = अर्की
**तच्चरणं** = श्रीकृष्णको चरणलाई सम्झिने
**सन्तः यथा** = सत्पुरुषहरू झैँ
**न अतृप्यत्** = तृप्त भइनन्

**वाक्यार्थ–** जसरी सत्पुरुषहरू भगवान्‌को चरणलाई सम्झेर कहिल्यै अघाउँदैनन् त्यसै गरी अर्की गोपिनी आँखा झिमिक्क नगरीकन भगवान्‌को मुखकमललाई पिउँला झैँ गरी हेरिरहँदा पनि तृप्त भइनन्।

**तं काचिन्नेत्ररन्ध्रेण हृदिकृत्य निमील्य च।**
**पुलकाङ्ग्युपगुह्यास्ते योगीवानन्दसम्प्लुता ॥ ८ ॥**

**पदार्थ–**
**काचित्** = कुनै गोपिनी
**योगी इव** = योगीले झैँ
**तं** = ती श्रीकृष्णलाई
**नेत्ररन्ध्रेण** = आँखाको प्वालबाट
**हृदिकृत्य** = हृदयभित्र पुऱ्याई
**निमील्य** = आँखा चिम्लिएर
**उपगुह्य च** = (हृदयभित्रै) अँगालो मारेर
**आनन्दसम्प्लुता** = आनन्दमा डुबुल्की लगाउँदै
**पुलकाङ्गी** = रोमाञ्चित
**आस्ते** = भइन्

**वाक्यार्थ–** कुनै गोपिनीले चाहिँ योगीले झैँ श्रीकृष्णलाई आँखाको बाटोबाट हृदयभित्र पुऱ्याइन् र आँखा चिम्ली हृदयभित्रै अँगालो मारिन्। यसरी परम आनन्दमा डुबुल्की लगाउँदै उनी रोमाञ्चित भइन्।

**विवरण–** माथिका श्लोकहरूमा सात प्रकारका गोपिनीहरूले सात प्रकारले भगवान्‌सँग व्यवहार गरेको देखाइएको छ। टीकाकारहरूले कुन भाव प्रकट गर्ने कुन गोपिनी हुन् भनी छुट्याउनुभएको छ। पहिली गोपिनीले भगवान्‌को दाहिने हातलाई अँजुलिले समातेकी छिन्। यिनले यसो गरेर श्रीकृष्णलाई सपथ खुवाएकी हुन्। हे प्रिय! अबदेखि म अभिमान गर्दिनँ, अनि हजुर पनि लीलाको बीचमैँ हराउन पाउनुहुन्न भनी आपसमा प्रतिज्ञा गरिएको भाव यहाँ देखिन्छ। अर्की

गोपिनीले भगवान्को देब्रे हातलाई आफ्नो काँधमा राखेकी छिन्। तेस्री गोपिनीले भगवान्ले चपाइरहेको पानलाई झिकी आफूले लिएकी छिन् भने चौथीले उहाँको चरणलाई हृदयमा लगाएकी छिन्। पाँचौ गोपिनीले आँखीभौं खुम्च्याई तीव्र दृष्टिले भगवान्लाई नयनबाणले प्रहार गरेकी छिन् भने छैटौंले निर्निमेष नयनले भगवान्लाई पिए झैं गरी हेरेकी छिन् अनि सातौंले चाहिँ भगवान् भाग्ने भयले हृदयभित्र थुनिदिएकी छिन्। जीवगोस्वामीका अनुसार यी गोपिनीहरूको नाम क्रमशः चन्द्रावती, श्यामला, शैव्या, पद्मा, राधा, ललिता र विशाखा रहेको छ। यसरी सात गोपिनीहरूको अनुभव यहाँ प्रकाशित भएको छ।

अर्को व्याख्या अनुसार यी सबै श्रुतिरूपा गोपिनीहरू हुन् भनी यिनको भेदोपभेद छुट्याइएको छ। भगवान्को हात समाउने दुईथरी गोपिनीहरू कर्म एवं यज्ञपरक कर्मकाण्डका श्रुतिहरू हुन्। भगवान्ले खानुभएको पान लिने र चरण समाउने दुई गोपिनीले भगवान्को प्रसाद लिएको र चरणसेवा गरेको भाव प्रकाशित गरेकाले यी उपासना काण्डका श्रुतिहरू हुन्। अरू तीन गोपिनीले भगवान्लाई तीव्रदृष्टिले हेरेको या हृदयभित्र चिन्तन गरेको बताइएकाले यी ज्ञानकाण्डका श्रुतिहरू हुन्।

**सर्वास्ताः केशवालोकपरमोत्सवनिर्वृताः ।**
**जहुर्विरहजं तापं प्राज्ञं प्राप्य यथा जनाः ॥ ९ ॥**

**पदार्थ–**
**केशवालोकपरमोत्सवनिर्वृताः** = श्रीकृष्णको दर्शनरूपी महोत्सवद्वारा आनन्दित भएका
**ताः** = ती
**सर्वाः** = सबै गोपिनीहरू
**यथा** = जसरी
**प्राज्ञं** = सुषुप्ति अवस्थाको चेतनालाई
**प्राप्य** = पाएर
**जनाः** = मानिसहरू (आनन्दित हुन्छन् त्यसै गरी)
**विरहजं** = श्रीकृष्णविरहको
**तापं** = तापलाई
**जहुः** = त्यागिदिए

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको दर्शनरूपी महोत्सवद्वारा ती सबै गोपिनीहरू सुषुप्ति अवस्थाको चेतनालाई पाएर मानिसहरू आनन्दित भए झैं आनन्दित भए र उनीहरूले श्रीकृष्णविरहको सबै असह्य दुःखलाई त्यागिदिए।

**ताभिर्विधूतशोकाभिर्भगवानच्युतो वृतः ।**
**व्यरोचताधिकं तात पुरुषः शक्तिभिर्यथा ॥ १० ॥**

**पदार्थ–**
**तात** = हे प्रिय परीक्षित्
**विधूतशोकाभिः** = शोक हटेका
**ताभिः** = ती गोपिनीहरूद्वारा
**वृतः** = घेरिनुभएका
**भगवान्** = भगवान्
**अच्युतः** = श्रीकृष्ण
**यथा** = जसरी
**पुरुषः** = परमात्मा
**शक्तिभिः** = आफ्ना स्वरूपभूत शक्तिहरूले (युक्त हुन्छ, त्यसै गरी)
**अधिकं** = झन् धेरै
**व्यरोचत** = सुशोभित हुनुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! विरहको शोक नष्ट भएका ती गोपिनीहरूद्वारा घेरिनुभएका भगवान् श्रीकृष्ण आफ्ना स्वरूपभूत शक्तिहरूले युक्त परमात्मा शोभित भए झैँ झन् धेरै शोभित हुनुभयो।

**विवरण–** यस श्लोकमा गोपिनीहरूद्वारा घेरिनुभएका भगवान् अत्यन्त सुशोभित हुनुहुन्थ्यो भनी बताइएको छ। सबै गोपिनीहरू **विधूतशोक** अर्थात् शोकमोह नष्ट भएका वीतराग तपस्वी झैँ थिए। **तरति शोकमात्मवित्** (छान्दोग्योपनिषद्, ७।१।१) अर्थात् आत्मज्ञानी शोकबाट मुक्त हुन्छ भनी उपनिषद्मा बताइएको छ। आत्मज्ञानको यो स्थिति प्राप्त गर्न श्रवण, मनन, निदिध्यासन आदि अनेक उपाय गर्नुपर्दछ, यसबाट परमात्मतत्त्वको साक्षात्कार प्राप्त गर्न सकिन्छ। त्यस्ता व्यक्तिहरू संसारमा विरलै हुन्छन्। यसैलाई भगवान्ले गीता (७/३)मा **यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्त्वतः** अर्थात् आत्मज्ञानका लागि प्रयास गर्नेहरूमध्ये पनि कसै-कसैले मात्र मलाई यथार्थ रूपमा बुझ्न सक्दछन् भनी बताउनुभएको छ। यस्ता आत्मज्ञानी भक्तसँग रहँदा भगवान्को प्रसन्नता, शोभा-सौन्दर्य नै अलग हुन्छ। व्रजलीलाको विशेषता चाहिँ के हो भने यहाँ भगवान्ले यस्ता वीतराग भक्तहरूको खोजी गर्नुपर्दैन। यहाँ घर-घरपिच्छे हरेक व्यक्ति भगवान्का श्रेष्ठ भक्तहरू छन्। जहाँ श्रेष्ठ भक्तहरू छन्, त्यहाँ भगवान्को विशेष प्रसन्नता हुनु स्वाभाविकै देखिन्छ। यसैले व्रजमण्डलको प्रेममा भगवान् बढी पग्लिनुभएको छ। हजारौँ गोपिनीहरू जो **वासुदेवः सर्वम्** अर्थात् जगत्भरि वासुदेव श्रीकृष्णलाई नै देख्ने सुदुर्लभ अवस्थामा पुगेका थिए, तिनीहरूको समूहमा रहन पाउनु भगवान्को लागि पनि सुदुर्लभ नै थियो। **अधिकं व्यरोचत** यो शब्दले भगवान् विशेष रूपले सुशोभित हुनुभयो भन्ने जनाएको छ। **अधिकं** शब्दको अर्थ पहिलेभन्दा बढी या सबैभन्दा बढी भनी गर्ने हो भने यसको तात्पर्य श्रीकृष्ण गोपिनीहरूको समूहमा घेरिएर बस्दा वैकुण्ठवासी नारायण आदि सबै स्वरूपहरूभन्दा पनि धेरै गुणा बढी शोभित हुनुभयो भन्ने हुन्छ। वैकुण्ठ इत्यादि लोकमा भगवान्का अनेकौँ भक्तहरू त छन्, तर तिनीहरूमा प्रेमको माधुर्य त्यति अभिव्यक्त छैन। दिव्य लोकमा दिव्य ऐश्वर्यले सम्पन्न भगवान्लाई देख्दा भक्तहरू उहाँलाई केवल सम्मान एवं श्रद्धा गर्न सक्छन्। हृदयको भित्री प्रेम त्यहाँ प्रकट हुँदैन। केवल लक्ष्मी मात्र त्यहाँ भगवान्सँग अन्तरङ्ग प्रेम गर्न सक्नुहुन्छ, तर व्रजमा त भगवान्लाई लक्ष्मीभन्दा पनि बढी प्रेम गर्ने गोपिनीहरू छन्। लक्ष्मीमा पनि भगवान्को ऐश्वर्यको स्फुरण भएकाले त्यहाँ पूर्ण प्रेम अभिव्यक्त हुँदैन, तर गोपिनीहरूको प्रेमद्वारा त भगवान्को ऐश्वर्य नै ढाकिएको छ। यसरी अरू दिव्य नारायण आदि स्वरूपभन्दा पनि भगवान् श्रीकृष्णको शोभा नै बढी भएको देखिन्छ। लीलाधाममा भगवान्का साथ विहार गर्ने यी गोपिनीहरू हजारौँको संख्यामा थिए र यिनका सोह्र ओटा समूह थिए भनी टीकाकारहरूले निर्दिष्ट गर्नुभएको छ। स्कन्दपुराण अनुसार सोह्र ओटा समूहमा हजारौँ गोपिनीहरू थिए। ती गोपिनीमध्ये सर्वश्रेष्ठ दुई गोपिनीहरू थिए– चन्द्रावती र राधा अनि ती दुईमा पनि नित्यनिकुञ्जेश्वरी राधा नै सर्वश्रेष्ठ थिइन् र यी भगवान्की अन्तरङ्गशक्तिरूपा हुन्।

**ताः समादाय कालिन्द्या निर्विश्य पुलिनं विभुः।**
**विकसत्कुन्दमन्दारसुरभ्यनिलषट्पदम्॥ ११॥**

**शरच्चन्द्रांशुसन्दोहध्वस्तदोषातमः शिवम् ।**
**कृष्णाया हस्ततरलाचितकोमलवालुकम् ॥ १२ ॥**

**पदार्थ–**
**विभुः** = सर्वव्यापक श्रीकृष्णले
**ताः** = ती गोपिनीहरूलाई
**समादाय** = लिएर
**विकसत्कुन्दमन्दारसुरभ्यनिलषट्पदम्** = फुलेका कुन्द (चमेली), मन्दार (बकाइना) आदि फूलको बास्नाले हावा मग्मगाएको र भँवरा झुम्मिएको
**शरच्चन्द्रांशुसन्दोहध्वस्तदोषातमः** = शरत्कालीन पूर्णचन्द्रको प्रकाशछटाले रात्रिको अन्धकार पनि हराएको
**कृष्णायाः** = कालिन्दीका
**हस्ततरलाचितकोमलवालुकम्** = लहररूपी हातहरूद्वारा मसिनो बालुवा जम्मा पारिएको (अनि)
**शिवम्** = सुखकर भएको
**कालिन्द्याः** = यमुनाको
**पुलिनं** = तिरमा
**निर्विश्य** = पुगेर (भगवान् झन् शोभित हुनुभयो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण ती सबै गोपिनीहरूलाई लिई यमुनाको तिरमा पुग्नुभयो। त्यहाँ ढकमक्क फुलेका कुन्द (चमेली), मन्दार (बकाइना) आदि फूलको बास्नाले हावा मग्मगाएको थियो अनि भँवराहरू खुब झुम्मिएका थिए। शरत्कालीन पूर्णचन्द्रको प्रकाश छरिनाले रात्रिको अन्धकार पनि हराएको त्यो सुखकर तटमा यमुना नदीले आफ्ना लहररूपी हातले मसिनो बालुवा जम्मा पारेकी थिइन्। त्यहाँ पुग्दा भगवान् श्रीकृष्णको शोभा झन् बढ्यो।

**तद्दर्शनाह्लादविधूतहृद्रुजो मनोरथान्तं श्रुतयो यथा ययुः ।**
**स्वैरुत्तरीयैः कुचकुङ्कुमाङ्कितैरचीक्लृपन्नासनमात्मबन्धवे ॥ १३ ॥**

**पदार्थ–**
**तद्दर्शनाह्लादविधूतहृद्रुजः** = उहाँ श्रीकृष्णको दर्शनको आनन्दले हृदयका सबै शोक मेटिएका गोपिनीहरू
**श्रुतयः यथा** = वेदमन्त्रहरू झैँ (कर्मप्रतिपादन गरेपछि परमात्मालाई प्रतिपादन गरी कृतकृत्य भए झैँ)
**मनोरथान्तं** = आफूले चाहेको आनन्दको चरम अवस्थामा
**ययुः** = पुगे
**आत्मबन्धवे** = आफ्ना प्याराका लागि
**कुचकुङ्कुमाङ्कितैः** = स्तनको कुङ्कुमलेप लागेका
**स्वैः** = आ-आफ्ना
**उत्तरीयैः** = पछ्यौराहरूद्वारा
**आसनम्** = आसन
**अचीक्लृपन्** = बनाए

**वाक्यार्थ–** श्रीकृष्णको दर्शनको आनन्दले गोपिनीहरूको हृदयका सबै शोक मेटिए। पहिले कर्मप्रतिपादन गर्ने वेदमन्त्रहरू पछि परमात्मालाई प्रतिपादन गरी कृतकृत्य भए झैँ गोपिनीहरूको पनि मनको सम्पूर्ण इच्छा पूर्ण भयो र उनीहरूले चरम आनन्द पाए। उनीहरूले आफ्ना प्यारा श्रीकृष्णलाई बस्नका लागि स्तनका कुङ्कुमलेप लागेका आ-आफ्ना पछ्यौराहरूले नै आसन बनाए।

**तत्रोपविष्टो भगवान् स ईश्वरो योगेश्वरान्तर्हृदि कल्पितासनः।**
**चकास गोपीपरिषद्गतोऽर्चितस्त्रैलोक्यलक्ष्म्येकपदं वपुर्दधत्॥ १४॥**

| | | |
|---|---|---|
| पदार्थ– | **तत्र** = त्यहाँ | **वपुः** = शरीरलाई |
| **योगेश्वरान्तर्हृदि** = महायोगीहरूको हृदयभित्र | **उपविष्टः** = बस्नुभएका | **दधत्** = धारण गर्नुभएका |
| **कल्पितासनः** = आसन बनाउनुहुने | **अर्चितः** = (उनीहरूद्वारा) पूजा गरिनुभएका | **ईश्वरः** = सर्वसमर्थ |
| **गोपीपरिषद्गतः** = गोपिनीहरूको समूहमा जानुभएका (र) | **त्रैलोक्यलक्ष्म्येकपदं** = त्रिलोककै शोभाको एक मात्र आश्रय भएको | **सः** = उहाँ |
| | | **भगवान्** = भगवान् श्रीकृष्ण |
| | | **चकास** = शोभित हुनुभयो |

**वाक्यार्थ–** महायोगीहरूको हृदयभित्र निवास गर्नुहुने, तीनै लोकको एक मात्र सुन्दर शरीर धारण गर्नुभएका सर्वसमर्थ भगवान् श्रीकृष्ण गोपिनीहरूको समूहमा उनीहरूद्वारा पूजित भएर रहँदा झन् शोभित हुनुभयो।

**सभाजयित्वा तमनङ्गदीपनं सहासलीलेक्षणविभ्रमभ्रुवा।**
**संस्पर्शनेनाङ्ककृताङ्घ्रिहस्तयोः संस्तुत्य ईषत्कुपिता बभाषिरे॥ १५॥**

| | | |
|---|---|---|
| पदार्थ– | **अङ्ककृताङ्घ्रिहस्तयोः** = काखमा राखिएका (भगवान् श्रीकृष्णका) चरण र हातहरूमा | वियोगका कारण) अलि-अलि रिसाएका गोपिनीहरूले |
| **सहासलीलेक्षणविभ्रमभ्रुवा** = मन्द मुस्कानयुक्त विचित्र हेराइ र कर्के आँखीभौँद्वारा (भगवान् श्रीकृष्णलाई) | **संस्पर्शनेन** = स्पर्शद्वारा | **अनङ्गदीपनं** = कामभावलाई बढाइदिने |
| **सभाजयित्वा** = सत्कार गरी | **संस्तुत्य** = प्रशंसा गरेर | **तम्** = उहाँ श्रीकृष्णलाई |
| | **ईषत्कुपिताः** = (पहिले भएको | **बभाषिरे** = (यसो) भने |

**वाक्यार्थ–** मन्द मुस्कानले भरिएको विचित्र हेराइ र कर्के आँखीभौँद्वारा भगवान् श्रीकृष्णलाई सम्मान गरेर आफ्नो काखमा राखिएका उहाँका हात र पाउलाई मुसार्दै गोपिनीहरूले भन्दै ती हात र पाउको प्रशंसा गरे। अनि पहिले भएको वियोगका कारण केही रिसाएका उनीहरूले कामभावलाई बढाइदिने श्रीकृष्णसँग यसो भने।

**गोप्य ऊचुः** (गोपिनीहरूले भने)

**भजतोऽनुभजन्त्येक एक एतद्विपर्ययम्।**
**नोभयांश्च भजन्त्येक एतन्नो ब्रूहि साधु भोः॥ १६॥**

| | | |
|---|---|---|
| पदार्थ– | **भोः** = हे श्रीकृष्ण | **एके** = कोही |

**भजतः** = आफूलाई मन पराउनेहरूलाई
**अनुभजन्ति** = पछि प्रेम गर्दछन्
**एके** = कोही
**एतद्विपर्ययम्** = यसको उल्टो गर्दछन्
**एके च** = कोही चाहिँ
**उभयान्** = दुबै थरीलाई
**न भजन्ति** = प्रेम गर्दैनन्
**एतत्** = यसको रहस्य
**नः** = हामीहरूलाई
**साधु** = राम्ररी
**ब्रूहि** = बताउनुहोस्

**वाक्यार्थ–** हे श्रीकृष्ण ! कोही व्यक्ति आफूलाई मन पराउनेलाई मात्र प्रेम गर्दछन् अनि कोही आफूलाई मन नपराउनेलाई पनि प्रेम गर्दछन्। कोही भने आफूलाई मन पराउने-नपराउने दुबैलाई प्रेम गर्दैनन्। यसको रहस्य के हो ? राम्ररी बताउनुहोस्।

**विवरण–** यस श्लोकमा गोपिनीहरूले भगवान् श्रीकृष्णसँग प्रेम सम्बन्धी प्रश्न गरेका छन्। गोपिनीहरूको हृदयमा श्रीकृष्णको ठाउँ सर्वदा उच्च र परम प्रेमयुक्त थियो। रातमा आफूहरूलाई वनमा एक्लै छाडिदिँदा पनि उनीहरूको श्रीकृष्णप्रतिको प्रेममा कुनै न्यूनता आएको थिएन। त्यसैले श्रीकृष्ण प्रकट हुनुभएपछि सबभन्दा पहिले गोपिनीहरूले उहाँको सम्मान-सत्कार आदि गरे र **ईषत्कुपिताः** अर्थात् अलि-अलि रिसाएका गोपिनीहरूले श्रीकृष्णलाई सोधे। सामान्य लौकिक प्रेममा प्रेमीहरू अविश्वासका कारणले एक-आपसमा रिसाउँछन्, तर गोपिनी र श्रीकृष्णको प्रेममा अविश्वास कहिल्यै पनि सम्भव छैन। त्यसैले कृष्णको स्वागत गरिसकेपछि मात्र रिसाएको वर्णन गरिएको छ। प्रेमजिज्ञासाको प्रसङ्गमा पनि श्रीकृष्णले आफूसँग कस्तो प्रकारको प्रेम गर्नुभएको हो भन्ने आश्चर्यको भाव प्रकट भएको छ। यहाँ गोपिनीहरूले तीन विकल्पमध्ये श्रीकृष्णको प्रेम कस्तो खालको हो भन्ने जिज्ञासा व्यक्त गरेका छन्।

संसारमा तीन थरी व्यक्तिहरू हुन्छन्— प्रिय, उपेक्ष्य र द्वेष्य। आफूसँग सम्बन्धित या हितकर वस्तु या व्यक्तिहरू **प्रिय** हुन्छन्, सम्बन्धित नभएकाहरू **उपेक्ष्य** हुन्छन् भने आफूलाई अहित गर्नेहरू **द्वेष्य** हुन्छन्। पहिला प्रकारका व्यक्तिहरूसँग प्रेमकै सम्बन्ध राखिन्छ, दोस्रा प्रकारका व्यक्तिहरूसँग कुनै सम्बन्ध राखिँदैन, तिनको उपेक्षा गरिन्छ भने तेस्रा प्रकारका व्यक्तिहरूसँग द्वेष या शत्रुताको सम्बन्ध हुने गर्दछ। प्रेम पनि दुई प्रकारको हुन्छ, एउटा सोपाधिक प्रेम र अर्को निरुपाधिक प्रेम। सोपाधिक प्रेम भनेको आफ्नो उद्देश्य वा स्वार्थ पूरा हुँदा अरूसँग गरिने प्रेम हो। यसमा कोहीसँग निरपेक्ष रूपमा प्रेम गरिँदैन अपितु त्यसबाट फाइदा भए वा उसले आफूलाई प्रेम गर्ने भए मात्र प्रेम गरिन्छ। त्यसैले यो सापेक्ष या सोपाधिक प्रेम हो। अर्को प्रकारको प्रेम छ— निरुपाधिक वा निरपेक्ष प्रेम। यसमा अरूले आफूसँग प्रेम गर्छ कि गर्दैन या त्यसबाट आफूलाई फाइदा हुन्छ कि हुँदैन केही विचार गरिँदैन। यो स्वार्थरहित प्रेमसम्बन्ध हो, त्यसैले यसलाई निरुपाधिक प्रेम भनिन्छ। गोपिनीहरूले गरेको प्रश्नमध्ये पहिलो प्रेमविकल्पले सोपाधिक प्रेमलाई बताएको छ। **भजतः अनुभजन्ति** यो पदावलीले आफूलाई जसले प्रेम या हित गर्दछ, तिनैलाई मात्र प्रेम गर्ने भन्ने अर्थ बताएको छ। अनु उपसर्गको पछि भन्ने अर्थ हुन्छ। **भजनस्य पश्चात् भजनं अनुभजनम्** अर्थात् एउटा भजनपछि गरिने भजन नै अनुभजन हो। सेवा गर्ने अर्थको भज् धातुबाट बनेको **भजन** शब्दको तात्पर्य सेवा-सम्मान भन्ने हुन्छ। यसरी कसैले आफूलाई सेवा-सम्मान गर्दछ र असल मान्दछ भने मात्र उसलाई प्रेम गर्ने आत्मप्रशंसा या स्वार्थको भाव यहाँ देखिन्छ।

यसको विपरीत आफूलाई प्रेम नगर्नेहरूलाई पनि प्रेम गर्नु निरुपाधिक प्रेम हो। **उभयान् न भजन्ति** अर्थात् दुबैलाई प्रेम नगर्ने भन्ने तेस्रो विकल्पले चाहिँ उपेक्षा या द्वेषको भावलाई बताएको छ। आफूलाई प्रेम गर्ने-नगर्ने कसैलाई पनि वास्ता नगर्ने व्यक्तिहरू कि द्वेष, कि त उपेक्षाकै कारणले यसो गर्दछन्। कसैले कसैलाई प्रेम गर्छ भने त्यसमा गुणदर्शन हुनै पर्दछ। गुणदर्शनको विरोधी भाव दोषदर्शन हो। द्वेषी व्यक्ति यही दोषदर्शनको भावले युक्त हुने हुँदा उसले प्रेम गर्दैन। उपेक्षा गर्ने व्यक्तिमा दोषदर्शनको भाव नरहे पनि गुणदर्शनको भाव पनि रहन्न। यसैले कुनै गुणदर्शन नगरेका कारण यस्तो व्यक्ति पनि कसैसँग प्रेम गर्दैन। यसरी स्वार्थी प्रेम गर्नु, निःस्वार्थी प्रेम गर्नु, द्वेष गर्नु र उपेक्षा गर्नुमध्ये कुन चाहिँ राम्रो हो र हजुर कस्ता खालका हुनुहुन्छ भनी यहाँ गोपिनीहरूद्वारा प्रश्न गरिएको छ।

गोपिनीहरूको मनमा श्रीकृष्ण यीमध्ये प्रेम गर्ने कोटिमा त पक्कै पर्नुहुन्न, बरु द्वेष या उपेक्षा गर्ने कोटिमा नै पर्नुहुन्छ होला भन्ने उपहासात्मक मनोभाव रहेको बुझ्न सकिन्छ। त्यसैले प्रश्नको जालमा श्रीकृष्णलाई निष्ठुर सिद्ध गरी निरुत्तर पारिदिने उनीहरूको विचार छ। आफूसँग प्रेम गर्नेलाई प्रेम गर्ने भन्ने विकल्प श्रीकृष्णमा मिल्दैन, किनभने हामीले यति प्रेम गर्दा पनि उहाँले हामीसँग प्रेम नगरी लुकेर हिँड्नुभयो। स्वार्थकै लागि प्रेम गर्नेले पनि आफ्नो प्रेमीसँग एकान्तमा आरामसँग विहार गर्न पाउँदा त्यसलाई छाडी भाग्दैन। आफूसँग प्रेम नगर्नेलाई पनि प्रेम गर्ने भन्ने निःस्वार्थ प्रेम त श्रीकृष्णमा सम्भव नै छैन, किनभने उहाँले आफ्नै प्रेमीलाई पनि दुःख दिनुभएको छ। श्रीकृष्णले द्वेष या उपेक्षा गरेको भन्न मिलिहाल्ने पनि देखिन्न किनभने उहाँले पहिले अनेक आपत्तिहरूमा हामीलाई बचाउँदै आउनुभएको हो। त्यसैले उहाँ कस्ता व्यक्ति हुनुहुन्छ भन्ने जिज्ञासा गोपिनीहरूमा देखिन्छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**मिथो भजन्ति ये सख्यः स्वार्थैकान्तोद्यमा हि ते।**
**न तत्र सौहृदं धर्मः स्वार्थार्थं तद्धि नान्यथा ॥ १७ ॥**

**पदार्थ–**
**सख्यः** = हे सङ्गिनीहरू
**ये** = जो
**मिथः** = एक-आपसमा
**भजन्ति** = (प्रेम गर्नेसँग मात्र) प्रेम गर्दछन्
**हि** = निश्चय नै
**ते** = तिनीहरू
**स्वार्थैकान्तोद्यमाः** = स्वार्थको लागि मात्र प्रयास गर्नेवाला हुन्
**तत्र** = त्यहाँ
**सौहृदं** = असली मित्रता र
**धर्मः** = धर्म पनि
**न** = छैन
**तत्** = त्यो प्रेम
**हि** = निश्चय नै
**स्वार्थार्थं** = स्वार्थको लागि हो
**अन्यथा** = अरू केहीका लागि
**न** = होइन

**वाक्यार्थ–** हे सङ्गिनीहरू ! आफूलाई प्रेम गर्नेसँग मात्र प्रेम गर्ने मानिसहरू स्वार्थको लागि मात्र प्रेम गर्ने खालका हुन्। त्यहाँ न असली मित्रता छ, न धर्म नै। त्यो प्रेम केवल स्वार्थपूर्तिका लागि

हो, त्यसको अरू केही प्रयोजन छैन।

**भजन्त्यभजतो ये वै करुणाः पितरो यथा।**
**धर्मो निरपवादोऽत्र सौहृदं च सुमध्यमाः ॥ १८ ॥**

**पदार्थ–**
**सुमध्यमाः** = हे सुन्दरीहरू
**ये** = जो-जो
**वै** = निश्चय नै
**अभजतः** = प्रेम नगर्नेलाई पनि
**भजन्ति** = प्रेम गर्दछन्
(तिनीहरू)
**पितरः** = मातापिताहरू
**यथा** = झैं
**करुणाः** = दयालु हुन्छन्
**अत्र** = यिनीहरूमा
**निरपवादः** = कपटरहित
**धर्मः** = धर्म र
**सौहृदं च** = असली मित्रता पनि हुन्छ

**वाक्यार्थ–** हे सुन्दरीहरू ! जो व्यक्तिहरू आफूलाई प्रेम नगर्नेलाई पनि प्रेम गर्दछन् तिनीहरू मातापिता झैं दयालु हुन्छन्। यस्ता व्यक्तिहरूमा नै कपटरहित धर्म र असली मित्रता पनि हुन्छ।

**भजतोऽपि न वै केचिद् भजन्त्यभजतः कुतः।**
**आत्मारामा ह्याप्तकामा अकृतज्ञा गुरुद्रुहः ॥ १९ ॥**

**पदार्थ–**
**केचित्** = कोही चाहिँ
**वै** = निश्चय नै
**भजतः अपि** = प्रेम गर्नेहरूलाई पनि
**न भजन्ति** = प्रेम गर्दैनन्
**अभजतः** = प्रेम नगर्नेहरूको
**कुतः** = के कुरा ?
**हि** = निश्चय नै (तिनीहरूमध्ये कोही)
**आत्मारामाः** = आफैंमा रमाउने ज्ञानीहरू हुन् (कोही)
**आप्तकामाः** = सम्पूर्ण विषयभोग पूरा भएका व्यक्तिहरू हुन् (कोही)
**अकृतज्ञाः** = प्रेम र उपकारको मूल्य नबुझ्ने अकृतज्ञहरू हुन् (कोही)
**गुरुद्रुहः** = मान्यजनमाथि द्रोह गर्ने दुष्टहरू हुन्

**वाक्यार्थ–** कोही चाहिँ आफूलाई प्रेम गर्नेहरूलाई पनि प्रेम गर्दैनन्, नगर्नेहरूलाई त के कुरा ? ती व्यक्तिहरूमध्ये आफैंमा रमाउने ज्ञानीहरू, सम्पूर्ण विषयभोग पूरा भएका सन्तुष्ट व्यक्तिहरू, अकृतज्ञहरू र मान्यजनमाथि पनि द्रोह गर्ने दुष्टहरू पर्दछन्।

**नाहं तु सख्यो भजतोऽपि जन्तून् भजाम्यमीषामनुवृत्तिवृत्तये।**
**यथाधनो लब्धधने विनष्टे तच्चिन्तयान्यन्निभृतो न वेद ॥ २० ॥**

**पदार्थ–**
**सख्यः** = हे सङ्गिनीहरू
**अहं तु** = म चाहिँ
**भजतः** = प्रेम गरिरहेका
**जन्तून् अपि** = प्राणीहरूलाई पनि
**अमीषाम्** = यिनीहरूकै
**अनुवृत्तिवृत्तये** = चित्तवृत्ति निरन्तर बनाइराख्नका लागि
**न भजामि** = प्रेम प्रकट गर्दिनँ
**यथा** = जसरी
**अधनः** = गरिब व्यक्तिले
**लब्धधने** = भेट्टाएको सम्पत्ति
**विनष्टे** = हरायो भने
**तच्चिन्तया** = त्यसकै चिन्ताले

**निभृतः** = व्याप्त भई | **अन्यत्** = अरू केही पनि | **न वेद** = जान्दैन

**वाक्यार्थ–** हे सङ्गिनीहरू ! म चाहिँ आफूलाई प्रेम गर्ने व्यक्तिहरूप्रति पनि उनीहरूको चित्तवृत्ति निरन्तर ममा लागिरहोस् भन्ने उद्देश्यले प्रेम प्रकट गर्दिनँ। जसरी गरिब व्यक्तिले कतैबाट भेट्टाएको सम्पत्ति हरायो भने ऊ त्यसैको चिन्तामा डुबिरहन्छ, अरू केही पनि थाहा पाउँदैन। (त्यसै गरी मेरो वियोगबाट यी मेरा प्रेमीहरूको चित्तवृत्ति पनि झन् ममा मात्र लागिरहन्छ अन्यत्र जाँदैन।)

**विवरण–** माथिका चार श्लोकमा आएका प्रश्नका विकल्पहरूमध्ये भगवान्ले आफू कतै पनि नपर्ने उत्तर दिनुभएको छ। भगवान् भन्नुहुन्छ– हे गोपिनीहरू ! आफूसँग प्रेम गर्नेलाई मात्र प्रेम गर्ने व्यक्ति स्वार्थी हो। ती दुबैको प्रेम सम्बन्ध स्वार्थका लागि मात्र गरिएको प्रयास हो। यो संसारी वासनात्मक प्रेम हो, यसमा स्वार्थबाहेक न धर्म छ, न त हितैषी भाव। आफूलाई नमान्नेहरूलाई पनि प्रेम गर्ने माता-पिता र गुरुहरू हुन्। यसमा धर्म र स्नेह दुबै भाव हुन्छन्। जो व्यक्ति कसैलाई पनि प्रेम गर्दैनन्, तिनीहरू दुई थरी हुन्छन्। एउटा **आप्तकाम** महापुरुषहरू अनि अर्का मूर्ख एवं दुष्ट व्यक्तिहरू। परमानन्दरूप आत्मालाई बुझिसकेपछि व्यक्ति संसारका सबै पदार्थ र सम्बन्धहरूबाट निःस्पृह बन्दछ र ऊ **समदुःखसुखः स्वस्थः समलोष्टाश्मकाञ्चनः। तुल्यप्रियाप्रियो धीरस्तुल्यनिन्दात्मसंस्तुतिः** (भगवद्गीता, १४/२४) अर्थात् सुख र दुःखमा समान भएको, माटोको डल्लो र सुनलाई पनि बराबर देख्ने, आफूलाई प्रशंसा र निन्दा गरेकोमा पनि बराबर भाव राख्ने, प्रिय र अप्रिय दुबै समान भएको ज्ञानी पुरुष हुन्छ। यस्ता आत्मनिष्ठ व्यक्तिहरू संसारका कुनै पनि कुराहरूसँग प्रभावित एवं सम्बन्धित हुँदैनन्। बृहदारण्यकोपनिषद् (३/९/२६)मा बताइएको छ– **असङ्गो न हि सज्जते** अर्थात् आत्मा असङ्ग भएकाले उसको कतै पनि संसर्ग हुँदैन। अर्का थरी मूर्ख व्यक्तिहरू चाहिँ आफूलाई उपकार गर्ने या अपकार गर्नेबीचको भेद छुट्याउन पनि सक्दैनन्। यसैले यिनीहरू कसैलाई पनि प्रेम गर्दैनन्।

भगवान् श्रीकृष्ण आफूलाई योभन्दा पृथक् रूपमा रहेको बताउँदै भन्नुहुन्छ– म त प्राणीहरूलाई प्रेम गर्दागर्दै पनि **न भजामि** अर्थात् सर्वदा त्यो प्रेमलाई प्रकट गर्दिनँ। भगवान्ले आफू हराउनुपर्ने कारण बताउँदै भन्नुभएको छ– जसरी धनी व्यक्ति धन हराउँदा सर्वदा त्यसकै चिन्तन गरिरहन्छ, त्यसै गरी प्रेममा पनि विरहको अवस्थामा प्रेमीको निरन्तर चिन्तन भइरहन्छ। त्यही निरन्तर चिन्तनद्वारा प्रेम अझ प्रगाढ होस् भन्नका लागि म अदृश्य भएको हुँ, मैले तिमीहरूलाई प्रेम नगरेको होइन।

**एवं मदर्थोज्झितलोकवेदस्वानां हि वो मय्यनुवृत्तयेऽबलाः।**
**मया परोक्षं भजता तिरोहितं मासूयितुं मार्हथ तत्प्रियं प्रियाः॥ २१॥**

**पदार्थ–**
**अबलाः** = हे गोपस्त्रीहरू
**हि** = निश्चय नै
**मदर्थोज्झितलोकवेदस्वानाम्** = मेरा लागि लोक, वेद र आफन्तहरू पनि त्यागिदिने
**वः** = तिमीहरूको
**मयि** = ममा
**अनुवृत्तये** = अझै प्रगाढ वृत्ति बनाउनकै लागि
**परोक्षं** = अप्रत्यक्ष रहेर
**भजता** = प्रेम गरिरहने

**मया** = मद्वारा
**एवं** = यसप्रकार
**तिरोहितं** = लुकियो
**तत्** = त्यसैले
**प्रियाः** = हे प्यारी गोपिनीहरू
**प्रियं** = प्रिय
**मा** = मलाई
**असूयितुं** = दोषदृष्टिले हेर्न
**मा अर्हथ** = योग्य छैनौ

**वाक्यार्थ–** हे गोपिनीहरू ! मेरा लागि लोक-वेदको मर्यादा र आफन्तहरूलाई पनि त्यागिदिने तिमीहरूको मप्रति अझै प्रगाढ चित्तवृत्ति बनाउनकै लागि म यसरी हराएको हुँ। तर अप्रत्यक्ष रहेर पनि मैले तिमीहरूप्रति प्रेम भने गरिरहेकै थिएँ। त्यसैले हे प्यारी गोपिनीहरू ! तिमीहरूले आफ्ना प्रिय मलाई दोष दिन मिल्दैन।

**न पारयेऽहं निरवद्यसंयुजां स्वसाधुकृत्यं विबुधायुषापि वः।**
**या माभजन् दुर्जरगेहशृङ्खलाः संवृश्च्य तद्वः प्रतियातु साधुना ॥ २२ ॥**

पदार्थ–
**अहं** = म
**निरवद्यसंयुजां** = निर्मल भावले मसँग संयुक्त भएका
**वः** = तिमीहरूको लागि
**विबुधायुषा अपि** = देवताहरूको दिव्य आयुद्वारा पनि
**स्वसाधुकृत्यं** = तिमीहरूको प्रेमको राम्ररी प्रत्युपकार गर्न
**न पारये** = सक्दिनँ
**याः** = जो (तिमीहरूले)
**दुर्जरगेहशृङ्खलाः** = टुटाउनै नसकिने घरपरिवारको बन्धनलाई
**संवृश्च्य** = चुँडाई
**मा** = मलाई
**अभजन्** = प्रेम गऱ्यौ
**वः** = तिमीहरूको
**तत्** = त्यो प्रेम
**साधुना** = मप्रतिको स्नेहको कारणले नै
**प्रतियातु** = जाओस् (चुक्ता होस्)

**वाक्यार्थ–** हे गोपिनीहरू ! तिमीहरू मसँग निर्मल प्रेमभावले जोडिएका छौ। म देवताहरूको दिव्य आयु लिएर पनि तिमीहरूको निश्छल प्रेमलाई प्रत्युपकार गरी चुकाउन सक्दिनँ। तिमीहरूले छोड्नै नसकिने घरपरिवारको बन्धनलाई समेत चुँडाली मलाई प्रेम गरेका छौं। त्यसैले त्यो प्रेमव्यवहारको ऋण तिमीहरूको मप्रतिको स्नेहकै कारणले चुक्ता होस्।

**विवरण–** यस प्रसङ्गमा भगवान्ले गोपिनीहरूप्रति आफ्नो कति अगाध प्रेम रहेको छ भन्ने भाव प्रकट गर्नुभएको छ। यसबाट भक्तहरूप्रति भगवान्को कस्तो प्रेमदृष्टि हुन्छ भन्ने रहस्य पनि खुलेको छ। आफू हराउनुको कारण बताउँदै भगवान् भन्नुहुन्छ– **मयि अनुवृत्तये** अर्थात् तिमीहरूको प्रेम ममा अझ दृढ होस् भन्नका लागि नै म अन्तर्निहित भएको हुँ। विरहको अवस्थामा नै कसको कति प्रेम छ भन्ने थाहा हुन्छ। संयोगको अवस्थामा त प्रेमीको अघि मेरो धेरै प्रेम छ भनी सिधै भन्न पनि मिल्छ, तर विरहको अवस्थामा व्यक्ति कति दुःखी र पीडित हुन्छ, यसबाट मात्रै वास्तविक प्रेमको गहिराइलाई अनुमान गर्न सकिन्छ। गोपिनीहरूमा रहेको प्रेमको गहिराइ संसारको सामु अभिव्यक्त गर्न पनि भगवान्ले उनीहरूलाई विरहको अनुभव गराउनुभएको हो। फेरि वियोगपछि नै प्रेमीमा रहेको स्वाभाविक प्रेम झन् बढेर आउँछ। यी सबै कारणले गर्दा भगवान्ले गोपिनीहरूलाई आफ्नो विरहको अनुभव गराउनुभयो। क्षमा मागेको भाषामा भगवान् भन्नुहुन्छ– **असूयितुं मा अर्हथ** अर्थात् ममा दोषदृष्टि नगर। म दोषी छैन, म त

तिमीहरूलाई प्रेम गर्नकै लागि अन्तर्निहित भएको थिएँ, बाहिर तिमीहरूबाट हराए पनि भित्र प्रेमशून्य भएको थिइन।

यस श्लोकमा भगवान्ले गोपिनीको विशुद्ध प्रेमबाट आफू नै ऋणी भएको जनाउनुभएको छ। भगवान् परम दयालु हुनुहुन्छ, उहाँले पात, फल, जल आदि जे चढाए पनि आफू प्रसन्न हुने जनाउनुभएको छ। जब सामान्य वस्तुहरूको अर्पणबाट पनि भगवान् प्रसन्न हुनुहुन्छ भने हृदयको विशुद्ध प्रेम समर्पण गर्दा उहाँ झन् कति प्रसन्न हुनुहोला। श्रद्धापूर्वक भगवान्को नाम लिइन्छ भने पहिलो पटकको नाम उच्चारणबाटै भगवान् ज्यादै प्रसन्न भएर त्यो व्यक्तिलाई मोक्ष दिनुहुन्छ, अरू दोस्रो-तेस्रो पटक गरिएको नामको उच्चारणले त भगवान् स्वयं ऋणी बन्नुहुन्छ। प्रेमको कारणले भगवान् स्वयं ऋणी बन्नु यो नै विशुद्ध प्रेमको विशेषता हो। यहाँ पनि भगवान्ले देवताको आयुलाई लिएर पनि यदि आफूले गोपिनीहरूको प्रेमलाई चुकाउन खोज्ने हो भने त्यसमा समर्थ नहुने बताउनुभएको छ। यसरी आफू गोपिनीहरूको ऋणी रहने कुरा बताउँदै भगवान्ले यहाँ विशुद्ध प्रेमको माहात्म्य प्रकट गर्नुभएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**रासक्रीडायां गोपीसान्त्वनं नाम द्वात्रिंशोऽध्यायः॥ ३२॥**

# अथ त्रयस्त्रिंशोऽध्यायः

## महारास

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्थं भगवतो गोप्यः श्रुत्वा वाचः सुपेशलाः।**

**जहुर्विरहजं तापं तदङ्गोपचिताशिषः॥ १॥**

**पदार्थ–**
**इत्थं** = यसप्रकार
**तदङ्गोपचिताशिषः** = भगवान्को अङ्गस्पर्शले सबै इच्छा पूरा भएका
**गोप्यः** = गोपिनीहरूले
**भगवतः** = भगवान् श्रीकृष्णको
**सुपेशलाः** = सुमधुर
**वाचः** = वचनहरूलाई
**श्रुत्वा** = सुनेर
**विरहजं** = विरहबाट उत्पन्न
**तापं** = शोकलाई
**जहुः** = छाडिदिए

**वाक्यार्थ–** यसप्रकार परमप्रिय भगवान्को अङ्गस्पर्शद्वारा गोपिनीहरूका सबै इच्छा पूरा भए। उनीहरूले श्रीकृष्णका सुमधुर वचनहरू सुनी विरहबाट उत्पन्न भएको शोकलाई छाडिदिए।

**तत्रारभत गोविन्दो रासक्रीडामनुव्रतैः।**

**स्त्रीरत्नैरन्वितः प्रीतैरन्योन्याबद्धबाहुभिः॥ २॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ
**प्रीतैः** = प्रसन्न भएका
**अन्योन्याबद्धबाहुभिः** = एक-आपसमा हातमा हात बाँधेका
**अनुव्रतैः** = आफ्ना अनुगामिनी
**स्त्रीरत्नैः** = ती श्रेष्ठ स्त्रीहरूले
**अन्वितः** = युक्त भएका
**गोविन्दः** = गोविन्दले
**रासक्रीडां** = रासलीला
**आरभत** = सुरु गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि असाध्यै प्रसन्न भएका र एउटाको हातले अर्काको हात समातेका ती आफ्ना अनुगामिनी स्त्रीरत्नहरूसहित भई गोविन्दले रासलीला सुरु गर्नुभयो।

**रासोत्सवः सम्प्रवृत्तो गोपीमण्डलमण्डितः।**

**योगेश्वरेण कृष्णेन तासां मध्ये द्वयोर्द्वयोः।**

**प्रविष्टेन गृहीतानां कण्ठे स्वनिकटं स्त्रियः॥ ३॥**

**यं मन्येरन् नभस्तावद् विमानशतसङ्कुलम्।**

**दिवौकसां सदाराणामौत्सुक्यापहृतात्मनाम्॥ ४॥**

**पदार्थ–**
**यं** = जसलाई
**स्त्रियः** = सबै गोपिनीहरूले
**स्वनिकटं** = आफ्नै नजिकमा
**मन्येरन्** = मानिरहेका थिए
**कण्ठे** = घाँटीमा
**गृहीतानां** = अँगालो मारिएका
**तासां** = ती गोपिनीहरूको
**द्वयोः द्वयोः मध्ये** = हरेक दुई दुई गोपिनीको बीचमा
**प्रविष्टेन** = पस्नुभएका
**योगेश्वरेण** = योगेश्वर
**कृष्णेन** = श्रीकृष्णद्वारा
**गोपीमण्डलमण्डितः** = गोपिनीहरूको समूहद्वारा शोभित भएको
**रासोत्सवः** = रास उत्सव
**सम्प्रवृत्तः** = सुरु गरियो
**तावत्** = त्यो वेला
**नभः** = आकाश
**औत्सुक्यापहृतात्मनाम्** = उत्सुकताका कारणले चित्त हरिएका
**सदाराणाम्** = पत्नीसहित भएका
**दिवौकसां** = देवताहरूको
**विमानशतसङ्कुलम्** = सयौँ विमानले व्याप्त भएको (थियो)

**वाक्यार्थ–** योगेश्वर भगवान् श्रीकृष्ण दुई–दुई गोपिनीको बीचमा आफ्ना दुई हातले दुबै गोपिनीको गलामा अँगालो मार्दै सबैका सामने प्रकट हुनुभयो। सबै स्त्रीहरूले उहाँलाई आफूसँगै रहेको मानिरहेका थिए। यसरी गोपिनीहरूको समूहद्वारा सुशोभित भएको रासउत्सव सुरु भयो। त्यस वेला रास उत्सव हेर्न असाध्यै उत्सुक भएर पत्नीसहित आएका देवताहरूका सयौँ विमानले आकाश व्याप्त भयो।

**ततो दुन्दुभयो नेदुर्निपेतुः पुष्पवृष्टयः।**
**जगुर्गन्धर्वपतयः सस्त्रीकास्तद्यशोऽमलम्॥ ५॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**दुन्दुभयः** = दुन्दुभिहरू
**नेदुः** = बजे
**पुष्पवृष्टयः** = पुष्पवर्षा
**निपेतुः** = बर्सिन थाले
**सस्त्रीकाः** = पत्नीले सहित
**गन्धर्वपतयः** = श्रेष्ठ गन्धर्वहरूले
**अमलम्** = निर्मल
**तद्यशः** = श्रीकृष्णको यशलाई
**जगुः** = गाए

**वाक्यार्थ–** त्यसपछि दुन्दुभिहरू बजे र पुष्पको वर्षा हुन थाल्यो। आ–आफ्ना पत्नीले सहित श्रेष्ठ गन्धर्वहरूले श्रीकृष्णको निर्मल यश गाउन थाले।

**वलयानां नूपुराणां किङ्किणीनां च योषिताम्।**
**सप्रियाणामभूच्छब्दस्तुमुलो रासमण्डले॥ ६॥**

**पदार्थ–**
**रासमण्डले** = रासमण्डलमा
**सप्रियाणां** = प्रियतमले सहित भएका
**योषिताम्** = स्त्री (गोपिनी) हरूको
**वलयानां** = बाला
**नूपुराणां** = पाउजु र
**किङ्किणीनां च** = (कन्धनीका) घुँगुरुहरूको समेत
**तुमुलः** = ठुलो
**शब्दः** = ध्वनि
**अभूत्** = भयो

**वाक्यार्थ–** रासमण्डलमा आफ्ना प्रियतमले सहित भएका गोपिनीहरूले पहिरेका बाला, पाउजू र

कन्धनीका घुँगुरुहरू एकसाथ बज्नाले ठुलो आवाज पैदा भयो।

**तत्रातिशुशुभे ताभिर्भगवान् देवकीसुतः।**
**मध्ये मणीनां हैमानां महामरकतो यथा॥ ७॥**

**पदार्थ–**
**यथा** = जसरी
**हैमानां** = सुनका
**मणीनां** = मणिहरूको
**मध्ये** = बीचमा
**महामरकतः** = महानीलमणि (चम्कन्छ, त्यसै गरी)
**तत्र** = त्यहाँ
**भगवान्** = भगवान्
**देवकीसुतः** = देवकीपुत्र श्रीकृष्ण
**ताभिः** = ती गोपिनीहरूद्वारा
**अतिशुशुभे** = असाध्यै सुशोभित हुनुभयो

**वाक्यार्थ–** जसरी सुनका गोला मणिहरूका बीचमा महानीलमणिको शोभा हुन्छ, त्यसै गरी ती गोपिनीहरूको बीचमा देवकीपुत्र भगवान् श्रीकृष्ण ज्यादै सुशोभित हुनुभयो।

**पादन्यासैर्भुजविधुतिभिः सस्मितैर्भ्रूविलासै-**
**र्भज्यन्मध्यैश्चलकुचपटैः कुण्डलैर्गण्डलोलैः।**
**स्विद्यन्मुख्यः कवररसनाग्रन्थयः कृष्णवध्वो**
**गायन्त्यस्तं तडित इव ता मेघचक्रे विरेजुः॥ ८॥**

**पदार्थ–**
**पादन्यासैः** = (ठम-ठम) पाउ चलाउनाले
**भुजविधुतिभिः** = हातका अनेक (नृत्यमुद्राअनुसारका) इसाराहरूले
**सस्मितैः** = मुस्कानसहित
**भ्रूविलासैः** = आँखीभौं टेढो पार्नाले
**भज्यन्मध्यैः** = भाँचिएला कि झैं कम्मर मर्काइले
**चलकुचपटैः** = स्तन र वस्त्रको चञ्चलताले
**गण्डलोलैः** = गालामा ठोक्किँदै हल्लिरहेका
**कुण्डलैः** = कुण्डलहरूले युक्त भई
**तं** = ती श्रीकृष्णलाई (ती श्रीकृष्णकै गीत)
**गायन्त्यः** = गीत गाइरहेका
**स्विद्यन्मुख्यः** = अनुहार पसिनाले लथपथ भएका
**कवररसनाग्रन्थयः** = चुल्ठो र कम्मरमा कसिएका बन्धनहरू खुकुलिएका
**ताः** = ती
**कृष्णवध्वः** = श्रीकृष्णका प्रेयसीहरू
**मेघचक्रे** = मेघमण्डलको बीच-बीचमा
**तडितः इव** = बिजुली चम्किए झैं
**विरेजुः** = सुशोभित भए

**वाक्यार्थ–** नाच्दा ठम-ठम पाउ चलाइरहेका, (नृत्यमुद्रा अनुसार) हातले अनेक इसाराहरू गरिरहेका, मन्दमुस्कानसहित आँखीभौंलाई टेँढो पार्दै हेरिरहेका, भाँचिएला कि झैं गरी कम्मर मर्काइरहेका गोपिनीहरूका स्तन र वस्त्रहरू चञ्चल भइरहेका थिए। उनीहरूका गालामा ठोक्किई कुण्डलहरू हल्लिरहेका थिए, उनीहरू श्रीकृष्णकै विषयमा गीत गाइरहेका थिए, उनीहरूको चुल्ठो

र कम्मरमा कसिएका बन्धनहरू बिस्तारै खुकुलिँदै गएका थिए अनि उनीहरूको अनुहार पसिनाले लथपथ भएको थियो। यसरी नाचिरहेका ती श्रीकृष्णका प्रेयसीहरू मेघमण्डलको बीचमा चम्किएका बिजुली झैं सुशोभित भए।

**उच्चैर्जगुर्नृत्यमाना रक्तकण्ठ्यो रतिप्रियाः।**
**कृष्णाभिमर्शमुदिता यद्गीतेनेदमावृतम्॥ ९॥**

**पदार्थ–**
**नृत्यमानाः** = नाचिरहेका
**कृष्णाभिमर्शमुदिताः** = श्रीकृष्णले सुम्सुम्याउँदा मख्ख परेका
**रतिप्रियाः** = श्रीकृष्णरतिलाई असाध्यै चाहने
**रक्तकण्ठ्यः** = अनेक रागहरूले युक्त कण्ठ भएका गोपिनीहरूले
**उच्चैः** = उच्च स्वरले
**जगुः** = गीत गाए
**यद्गीतेन** = जुन गीतद्वारा
**इदं** = यो संसार
**आवृतम्** = ढाकियो

**वाक्यार्थ–** श्रीकृष्णको सुम्सुम्याइले मख्ख परी नाचिरहेका ती गोपिनीहरूले ठुलो स्वरले गीत गाए। गलाबाट अनेक राग-स्वरहरू निकालिरहेका श्रीकृष्ण रतिलाई चाहने तिनीहरूको गीतद्वारा यो संसार नै ढाकियो।

**काचित् समं मुकुन्देन स्वरजातीरमिश्रिताः।**
**उन्निन्ये पूजिता तेन प्रीयता साधु साध्विति।**
**तदेव ध्रुवमुन्निन्ये तस्यै मानं च बह्वदात्॥ १०॥**

**पदार्थ–**
**काचित्** = कुनै गोपिनीले
**मुकुन्देन समं** = श्रीकृष्णसँग
**अमिश्रिताः** = नमिसिएका (अलग्गै वैशिष्ट्य भएका)
**स्वरजातीः** = अनेक स्वरका आलापहरू
**उन्निन्ये** = बेस्सरी अलाप्न लागिन्
**प्रीयता** = प्रसन्न भएका
**तेन** = ती श्रीकृष्णद्वारा
**साधु साधु इति** = राम्रो छ, राम्रो छ भनी
**पूजिता** = प्रशंसित भइन्
**तत् एव** = त्यही रागलाई कुनैले
**ध्रुवम्** = ध्रुवपदमा
**उन्निन्ये** = झन् बेस्सरी अलापिन्
**तस्यै च** = तिनलाई पनि
**बहु** = धेरै
**मानं** = सम्मान
**अदात्** = दिनुभयो

**वाक्यार्थ–** कुनै गोपिनीले श्रीकृष्णसँगै नमिसिएका झन् विशिष्ट प्रकारका रागहरू अलापिन्, यसबाट प्रसन्न हुनुभएका श्रीकृष्णले 'राम्रो छ राम्रो छ' भनी उनको प्रशंसा गर्नुभयो। त्यही रागलाई अर्कीले ध्रुवपदमा झन् ठुलो स्वरले अलापिन्, तिनलाई पनि श्रीकृष्णले धेरै सम्मान दिनुभयो।

**काचिद् रासपरिश्रान्ता पार्श्वस्थस्य गदाभृतः।**
**जग्राह बाहुना स्कन्धं श्लथद्वलयमल्लिका॥ ११॥**

पदार्थ–
**रासपरिश्रान्ता** = रासनृत्यबाट थाकेकी
**श्लथद्वलयमल्लिका** = बाला र बेली फूल खसाइरहेकी
**काचित्** = कुनै गोपिनीले
**पार्श्वस्थस्य** = आफ्ना नजिकै रहनुहुने
**गदाभृतः** = गदाधारी श्रीकृष्णको
**स्कन्धं** = काँधलाई
**बाहुना** = दुबै हातले
**जग्राह** = समातिन् (अँगालोमा बाँधिन्)

**वाक्यार्थ–** रासनृत्य गर्दागर्दै थाकेकी एवं हातबाट बाला र चुल्ठोबाट बेली फूल खसाइरहेकी कुनै गोपिनीले आफ्ना नजिकै रहनुभएका श्रीकृष्णको काँधलाई दुबै हातले अँगालोमा बाँधिन्।

**तत्रैकांसगतं बाहुं कृष्णस्योत्पलसौरभम्।**
**चन्दनालिप्तमाघ्राय हृष्टरोमा चुचुम्ब ह ॥ १२ ॥**

पदार्थ–
**तत्र** = त्यहाँ
**ह** = निश्चय नै
**एका** = एउटी गोपिनीले
**एकांसगतं** = आफ्नो एउटा काँधमा रहेको
**कृष्णस्य** = श्रीकृष्णको
**चन्दनालिप्तम्** = बेसरी चन्दनलेपन गरिएको
**उत्पलसौरभम्** = कमल झैं सुगन्धित
**बाहुं** = हातलाई
**आघ्राय** = सुँघी
**हृष्टरोमा** = रोमाञ्चित भएकाले
**चुचुम्ब** = चुम्बन गरिन्

**वाक्यार्थ–** त्यहाँ एउटी गोपिनीले आफ्नो एउटा काँधमा रहेको भगवान् श्रीकृष्णको चन्दनलेपन गरिएको कमल झैं सुगन्धित हातलाई सुँघेर रोमाञ्चित भइन् र त्यसलाई चुम्बन गरिन्।

**कस्याश्चिन्नाट्यविक्षिप्तकुण्डलत्विषमण्डितम्।**
**गण्डं गण्डे सन्दधत्याः प्रादात् ताम्बूलचर्वितम् ॥ १३ ॥**

पदार्थ–
**नाट्यविक्षिप्तकुण्डलत्विष-मण्डितम्** = नाच्दा हल्लिएका कुण्डलको कान्तिले उज्यालिएको
**गण्डं** = गालालाई
**गण्डे** = श्रीकृष्णको गालामा
**सन्दधत्याः** = जोड्ने
**कस्याश्चित्** = कुनै गोपिनीलाई
**ताम्बूलचर्वितम्** = चपाइरहेको पान
**प्रादात्** = दिनुभयो

**वाक्यार्थ–** कुनै गोपिनीले नाच्दानाच्दै हल्लिरहेका कुण्डलको कान्तिले उज्यालिएको आफ्नो गालालाई श्रीकृष्णको गालामा जोडिन्। उनलाई श्रीकृष्णले आफूले चपाइरहेको पान दिनुभयो।

**नृत्यती गायती काचित् कूजन्नूपुरमेखला।**
**पार्श्वस्थाच्युतहस्ताब्जं श्रान्ताधात् स्तनयोः शिवम् ॥ १४ ॥**

पदार्थ–
**नृत्यती** = नाचिरहेकी
**गायती** = गाइरहेकी
**कूजन्नूपुरमेखला** = पाउजु र कन्धनी (का घुँगुरुहरू) बजाइरहेकी र

**श्रान्ता** = थाकेकी
**काचित्** = कुनै गोपिनीले
**स्तनयोः** = आफ्ना दुबै स्तनमा
**शिवं** = कल्याणमय
**पार्श्वस्थाच्युतहस्ताब्जं** = नजिकै रहेका श्रीकृष्णका करकमललाई
**अधात्** = राखिन्

**वाक्यार्थ–** कुनै गोपिनी पाउजु र कन्धनीका घुँगुरुहरू बजाउँदै नाच्दै-गाउँदै थिइन्। त्यसबाट थाकेपछि उनले आफ्ना नजिकै रहेका श्रीकृष्णका कल्याणमय करकमललाई आफ्ना स्तनमा राखिन्।

**गोप्यो लब्ध्वाच्युतं कान्तं श्रिय एकान्तवल्लभम्।**
**गृहीतकण्ठ्यस्तद्दोर्भ्यां गायन्त्यस्तं विजह्रिरे ॥ १५ ॥**

**पदार्थ–**
**तद्दोर्भ्यां** = ती श्रीकृष्णका दुई हातद्वारा
**गृहीतकण्ठ्यः** = गलामा अँगालो मारिएका
**गोप्यः** = गोपिनीहरूले
**श्रियः** = लक्ष्मीका
**एकान्तवल्लभम्** = एक मात्र प्यारा
**अच्युतं** = भगवान् विष्णुलाई नै
**कान्तं** = प्रियतमको रूपमा
**लब्ध्वा** = पाएर
**तं** = उहाँलाई नै
**गायन्त्यः** = गाउँदै
**विजह्रिरे** = विहार गरे

**वाक्यार्थ–** श्रीकृष्णले सबै गोपिनीहरूका घाँटीमा आफ्ना दुबै हातले अँगालो मार्नुभएको थियो। उनीहरूले पनि लक्ष्मीजीका एक मात्र प्यारा भगवान्लाई आफ्ना प्रियतमको रूपमा पाएर उहाँकै विषयमा गाउँदै विहार गरे।

**कर्णोत्पलालकविटङ्ककपोलघर्म-**
**वक्त्रश्रियो वलयनूपुरघोषवाद्यैः।**
**गोप्यः समं भगवता ननृतुः स्वकेश-**
**स्रस्तस्रजो भ्रमरगायकरासगोष्ठ्याम् ॥ १६ ॥**

**पदार्थ–**
**भ्रमरगायकरासगोष्ठ्याम्** = भँवरा गायक (पृष्ठस्वर दिनेवाला) भएको रासनृत्यको गोष्ठीमा
**वलयनूपुरघोषवाद्यैः** = बाला र पाउजुको छमछम ध्वनिलाई नै बाजा बजाउँदै
**स्वकेशस्रस्तस्रजः** = आफ्नै केशबाट पुष्पवर्षा गरिरहेका
**कर्णोत्पलालकविटङ्ककपोलघर्म-वक्त्रश्रियः** = गालामा कानका कमलाकार कुण्डल र घुम्रिएका कपाल फुन्डिनाले मुख शोभित भएका
**गोप्यः** = गोपिनीहरू
**भगवता समं** = भगवान्सँग
**ननृतुः** = नाचे

**वाक्यार्थ–** त्यो रासनृत्यमा भँवराहरू गायक (पृष्ठ स्वर दिनेवाला) थिए र गोपिनीहरूले पहिरेका पाउजु, बाला आदि बाजा झैं बजिरहेका थिए। नाच्दा गोपिनीहरूको केशबाट पुष्पको वर्षा हुँदै थियो। गालामा कमलाकार कानका कुण्डल र घुम्रिएका केश फुन्डिनाले मुखको शोभा झन्

बढेको थियो। यस्ता गोपिनीहरू भगवान् श्रीकृष्णसँग नाचे।

**एवं परिष्वङ्गकराभिमर्शस्निग्धेक्षणोद्दामविलासहासैः।**
**रेमे रमेशो व्रजसुन्दरीभिर्यथार्भकः स्वप्रतिबिम्बविभ्रमः॥ १७॥**

**पदार्थ–**
**यथा** = जसरी
**अर्भकः** = बच्चा
**स्वप्रतिबिम्बविभ्रमः** = भ्रमका कारणले आफ्नै प्रतिबिम्बसँग खेल्छ
**एवं** = यसै गरी
**रमेशः** = रमापति भगवान् पनि
**परिष्वङ्गकराभिमर्शस्निग्धेक्षणोद्दामविलासहासैः** = अङ्कमाल, हातको स्पर्श, प्रेमपूर्ण हेराइ, लीलामय उन्मुक्त हाँसो आदिले
**व्रजसुन्दरीभिः** = व्रजका युवतीहरूसँग
**रेमे** = खेल्नुभयो

**वाक्यार्थ–** जसरी सानो बच्चा भ्रमका कारण अर्को व्यक्ति ठानी आफ्नै प्रतिबिम्बसँग खेल्छ त्यसै गरी रमापति भगवान् श्रीकृष्ण पनि (आफ्नै स्वरूपभूत) व्रज युवतीहरूलाई अङ्कमाल गरेर, हात मुसारेर, प्रेमपूर्ण नयनले हेरेर, लीलामय उन्मुक्त हाँसो हाँसेर उनीहरूसँग खेल्नुभयो।

**तदङ्गसङ्गप्रमुदाकुलेन्द्रियाः केशान् दुकूलं कुचपट्टिकां वा।**
**नाञ्जः प्रतिव्योढुमलं व्रजस्त्रियो विस्रस्तमालाभरणाः कुरूद्वह॥ १८॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुवंशी परीक्षित्
**तदङ्गसङ्गप्रमुदाकुलेन्द्रियाः** = ती श्रीकृष्णको अङ्गस्पर्श पाएको खुसीले इन्द्रियहरूमा उथलपुथल मच्चिएका
**विस्रस्तमालाभरणाः** = माला र गहनाहरू यता–उता भई छरिएका
**व्रजस्त्रियः** = व्रजयुवतीहरूले
**केशान्** = आफ्ना कपाललाई
**दुकूलं** = रेसमी वस्त्रलाई
**कुचपट्टिकां वा** = स्तन छोप्ने वस्त्रलाई पनि
**अञ्जः** = ठिकसँग
**प्रतिव्योढुं** = समाल्न
**न अलम्** = समर्थ भएनन्

**वाक्यार्थ–** हे परीक्षित्! श्रीकृष्णको अङ्गस्पर्श पाएको खुसीले ती व्रजयुवतीहरूका इन्द्रियहरूमा उथलपुथल मच्चियो। तिनले यता–उता भई छरिएका आफ्नै माला, गहना, कपाल, अन्य वस्त्रहरू र स्तन छोप्ने वस्त्रलाई पनि राम्ररी समाल्न सकेनन्।

**कृष्णविक्रीडितं वीक्ष्य मुमुहुः खेचरस्त्रियः।**
**कामार्दिताः शशाङ्कश्च सगणो विस्मितोऽभवत्॥ १९॥**

**पदार्थ–**
**कृष्णविक्रीडितं** = श्रीकृष्णको रासक्रीडालाई
**वीक्ष्य** = देखेर
**कामार्दिताः** = कामले पीडित भएका
**खेचरस्त्रियः** = आकाशमा हिँड्ने देवताका पत्नीहरू
**मुमुहुः** = मुग्ध (लठ्ठ) भए
**सगणः** = तारा र ग्रहगणले सहित
**शशाङ्कः च** = चन्द्रमा समेत
**विस्मितः** = आश्चर्यचकित
**अभवत्** = भए

**वाक्यार्थ–** श्रीकृष्णको रासक्रीडालाई देखेर सम्पूर्ण देवपत्नीहरू कामले पीडित भई मुग्ध (लठ्ठ) भए। तारा र ग्रहगणले सहित चन्द्रमा पनि आश्चर्यचकित भए।

**कृत्वा तावन्तमात्मानं यावतीर्गोपयोषितः।**

**रेमे स भगवांस्ताभिरात्मारामोऽपि लीलया॥ २०॥**

**पदार्थ–**
**आत्मारामः अपि** = आफैँमा रमाउने भएर पनि
**सः** = ती
**भगवान्** = भगवान् श्रीकृष्णले
**यावतीः** = जति ओटा
**गोपयोषितः** = गोपस्त्रीहरू छन्
**तावन्तम्** = त्यति ओटा नै
**आत्मानं** = आफूलाई
**कृत्वा** = बनाएर
**ताभिः** = तिनीहरूसँग
**लीलया** = लीला गरेर
**रेमे** = रमाउनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण आफैँमा रमाउने भएर पनि उहाँले जति गोपिनी छन्, आफूलाई पनि त्यति ओटा नै बनाई तिनीहरूसँग लीला गरेर रमाउनुभयो।

**तासामतिविहारेण श्रान्तानां वदनानि सः।**

**प्रामृजत् करुणः प्रेम्णा शन्तमेनाङ्ग पाणिना॥ २१॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**करुणः** = दयालु
**सः** = उहाँले
**अतिविहारेण** = धेरै लामो विहारको कारणले
**श्रान्तानां** = थाकेका
**तासाम्** = तिनीहरूका
**वदनानि** = अनुहारहरूलाई
**प्रेम्णा** = प्रेमपूर्वक
**शन्तमेन** = कल्याणमय
**पाणिना** = हातले
**प्रामृजत्** = पुछिदिनुभयो

**वाक्यार्थ–** हे प्रिय परीक्षित्! दयालु श्रीकृष्ण भगवान्ले धेरै समयसम्म विहार गर्दा थाकेका ती गोपिनीहरूका अनुहारहरूलाई आफ्ना कल्याणमय हातले पुछिदिनुभयो।

**गोप्यः स्फुरत्पुरटकुण्डलकुन्तलत्विड्-**

**गण्डश्रिया सुधितहासनिरीक्षणेन।**

**मानं दधत्य ऋषभस्य जगुः कृतानि**

**पुण्यानि तत्कररुहस्पर्शप्रमोदाः॥ २२॥**

**पदार्थ–**
**तत्कररुहस्पर्शप्रमोदाः** = उहाँ (श्रीकृष्ण)को नखस्पर्शका कारणले असाध्यै खुसी भएका
**गोप्यः** = गोपिनीहरूले
**स्फुरत्पुरटकुण्डलकुन्तलत्विड्-गण्डश्रिया** = चम्किला सुवर्णमय कुण्डल र घुम्रिएका कपालको कान्तिले उज्यालिएको गालाको शोभाले
**सुधितहासनिरीक्षणेन** = अमृतमय हाँसोले युक्त मिठो हेराइद्वारा

समेत
**ऋषभस्य** = पुरुषश्रेष्ठ श्रीकृष्णको
**मानं** = सम्मान
**दधत्यः** = गर्दै
**कृतानि** = उहाँले गर्नुभएका
**पुण्यानि** = पवित्र लीलाहरूलाई
**जगुः** = गाए

**वाक्यार्थ–** श्रीकृष्णको नखस्पर्श पाएर असाध्यै खुसी भएका गोपिनीहरूका गाला चम्किला सुवर्णमय कुण्डल र घुम्रिएका कपालको कान्तिले उज्यालिएका थिए। त्यसको शोभा अनि अमृतमय हाँसोले युक्त मिठो हेराइद्वारा समेत उनीहरूले पुरुषश्रेष्ठ श्रीकृष्णको सम्मान गर्दै उहाँले गर्नुभएका पवित्र लीलाहरू गाए।

**ताभिर्युतः श्रममपोहितुमङ्गसङ्ग-**
**घृष्टस्रजः स कुचकुङ्कुमरञ्जितायाः।**
**गन्धर्वपालिभिरनुद्रुत आविशद् वाः**
**श्रान्तो गजीभिरिभराडिव भिन्नसेतुः॥ २३॥**

**पदार्थ–**
**श्रान्तः** = थाकेको
**इभराट्** = गजराज
**गजीभिः** = हथिनीहरूसँग
**भिन्नसेतुः इव** = बाँधहरूलाई भत्काउँदै नदीभित्र पसे झैँ
**कुचकुङ्कुमरञ्जितायाः** = गोपिनीका स्तनका कुङ्कुम लागेका र
**अङ्गसङ्गघृष्टस्रजः** = अँगालो मार्ने आदि गर्दा माडिएका मालाका
**गन्धर्वपालिभिः** = गन्धर्वपतिहरू झैँ गाइरहेका भँवराहरूद्वारा
**अनुद्रुतः** = पछि पछि घेरिँदै
**श्रमम्** = लामो विहारको थकाइलाई
**अपोहितुम्** = हटाउन
**ताभिः** = ती गोपिनीहरूद्वारा
**युतः** = युक्त हुनुभएका
**सः** = उहाँ श्रीकृष्ण पनि
**वाः** = जलभित्र
**आविशत्** = पस्नुभयो

**वाक्यार्थ–** जसरी खेल्दाखेल्दै थाकेको गजराज थकाइ मेट्न हथिनीहरूसहित भई बाँधहरूलाई भत्काउँदै नदीभित्र पस्छ त्यसै गरी गोपिनीका स्तनका कुङ्कुम लागेका र अँगालो मार्दा माडिएका मालामा रहेका गन्धर्वपतिहरूले गीत गाए झैँ भुन्भुनाइरहेका भँवराहरूद्वारा पिछा गरिनुभएका भगवान् श्रीकृष्ण पनि लामो समयसम्म गोपिनीहरूसँग विहार गर्नाले लागेको थकाइलाई मेटाउनका लागि उनीहरूसँगै (यमुनाको) जलभित्र पस्नुभयो।

**सोऽम्भस्यलं युवतिभिः परिषिच्यमानः**
**प्रेम्णेक्षितः प्रहसतीभिरितस्ततोऽङ्ग।**
**वैमानिकैः कुसुमवर्षिभिरीड्यमानो**
**रेमे स्वयं स्वरतिरत्र गजेन्द्रलीलः॥ २४॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित् !
**अम्भसि** = (यमुनाको) जलमा
**प्रहसतीभिः** = हाँसिरहेका
**युवतिभिः** = व्रजयुवतीहरूद्वारा
**प्रेम्णा** = प्रेमपूर्वक
**ईक्षितः** = हेरिनुभएका र
**इतस्ततः** = जतातत्तैबाट
**अलं** = पर्याप्त मात्रामा
**परिषिच्यमानः** = पानी छ्यापिनुभएका
**वैमानिकैः** = विमानमा चढ्ने
**कुसुमवर्षिभिः** = पुष्पवर्षा गर्ने देवगणहरूद्वारा
**ईड्यमानः** = स्तुति गरिनुभएका
**सः** = उहाँ भगवान् श्रीकृष्ण
**स्वयं** = आफैँमा
**स्वरतिः अपि** = आत्माराम भए पनि
**अत्र** = यहाँ (गोपिनीहरूको बीचमा)
**गजेन्द्रलीलः** = गजेन्द्रले झैँ लीला गर्दै
**रेमे** = खेल्नुभयो

**वाक्यार्थ–** हे प्रिय परीक्षित् ! यमुनाजलमा पसेपछि ती व्रजयुवतीहरूले श्रीकृष्णलाई प्रेमपूर्वक हेरे र हाँस्दै जतातत्तैबाट बेसरी पानी छ्यापाछ्याप गरे। विमानमा चढी पुष्पवर्षा गर्ने देवगणहरूद्वारा स्तुति गरिनुभएका श्रीकृष्ण स्वयंमा आत्माराम भए पनि गोपिनीहरूको बीचमा उहाँले गजेन्द्रले हथिनीहरूसँग खेले झैँ खेल्नुभयो।

**ततश्च कृष्णोपवने जलस्थलप्रसूनगन्धानिलजुष्टदिक्तटे ।**
**चचार भृङ्गप्रमदागणावृतो यथा मदच्युद् द्विरदः करेणुभिः ॥ २५ ॥**

**पदार्थ–**
**ततः च** = त्यसपछि
**यथा** = जसरी
**मदच्युत्** = मदजल बगाइरहेको
**द्विरदः** = हात्ती
**करेणुभिः** = हथिनीहरूद्वारा
(घेरिई हिँड्दछ, त्यसै गरी)
**जलस्थलप्रसूनगन्धानिलजुष्ट-दिक्तटे** = जल र स्थलमा फुलेका फूलका सुगन्धले युक्त भई वहने वायुले दिशा-विदिशा ढाकिएको
**कृष्णोपवने** = यमुनाको उपवनमा
**भृङ्गप्रमदागणावृतः** = भँवरा र व्रजयुवतीहरूद्वारा घेरिनुभएका श्रीकृष्ण
**चचार** = घुम्नुभयो

**वाक्यार्थ–** त्यसपछि जसरी मदजल बगाइरहेको हात्ती हथिनीहरूले घेरिई घुम्दछ त्यसै गरी भगवान् श्रीकृष्ण पनि भँवरा र व्रजयुवतीहरूद्वारा घेरिई जल र स्थल सबैतिर फूल फुलेकाले त्यसको सुगन्ध फैलाउँदै दिशा-विदिशासम्म वायु वहेको त्यो यमुनाको उपवनमा घुम्नुभयो।

**एवं शशाङ्कांशुविराजिता निशाः स सत्यकामोऽनुरताबलागणः ।**
**सिषेव आत्मन्यवरुद्धसौरतः सर्वाः शरत्काव्यकथारसाश्रयाः ॥ २६ ॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**आत्मनि** = आफैँमा
**अवरुद्धसौरतः** = कामभावलाई रोकिदिनुभएका
**अनुरताबलागणः** = गोपिनीहरू-द्वारा अनुरक्त भएका
**सत्यकामः** = सत्यसङ्कल्प
**सः** = उहाँ श्रीकृष्णले
**शरत्काव्यकथारसाश्रयाः** = काव्यमा शरत्कालमा बताइने (शृङ्गार रसका) उद्दीपक सबै सामग्रीले युक्त
**शशाङ्कांशुविराजिताः** = चन्द्रका किरणले सुशोभित

**सर्वाः** = सबै
**निशाः** = रात्रिहरूलाई
**सिषेव** = सेवन गर्नुभयो

**वाक्यार्थ–** गोपिनीहरू श्रीकृष्णमाथि असाध्यै अनुरक्त थिए, तर पनि सत्यसङ्कल्प भगवान्ले भने कामभावलाई आफैँमा रोकिदिनुभएको थियो र उहाँले काव्यमा शरत्कालमा शृङ्गार रसका उद्दीपक जति सामग्री बताइन्छन् ती सबै सामग्रीले युक्त र चन्द्रका किरणले उज्यालिएका रात्रिहरूको सेवन गर्नुभयो।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**संस्थापनाय धर्मस्य प्रशमायेतरस्य च।**
**अवतीर्णो हि भगवानंशेन जगदीश्वरः॥ २७॥**
**स कथं धर्मसेतूनां वक्ता कर्ताभिरक्षिता।**
**प्रतीपमाचरद् ब्रह्मन् परदाराभिमर्शनम्॥ २८॥**

पदार्थ–
**हि** = निश्चय नै
**धर्मस्य** = धर्मको
**संस्थापनाय** = स्थापना गर्नका लागि र
**इतरस्य च** = अर्को (अधर्म)को
**प्रशमाय** = नाश गर्नका लागि
**जगदीश्वरः** = जगदीश्वर
**भगवान्** = भगवान्
**अंशेन** = आफ्नो विभूतिद्वारा
**अवतीर्णः** = अवतीर्ण हुनुभएको हो
**ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेवजी
**धर्मसेतूनां** = धर्मका मर्यादाहरूका
**वक्ता** = व्याख्याता
**कर्ता** = तिनलाई बनाउने र
**अभिरक्षिता** = रक्षा गर्ने
**सः** = तिनै भगवान्ले
**प्रतीपं** = धर्मप्रतिकूल
**परदाराभिमर्शनं** = परस्त्रीलाई स्पर्श गर्ने काम
**कथं** = कसरी
**आचरत्** = गर्नुभयो

**वाक्यार्थ–** हे शुकदेवजी ! जगदीश्वर धर्मको स्थापना र अधर्मको नाशका लागि नै आफ्नो योगैश्वर्यद्वारा श्रीकृष्णको रूपमा अवतीर्ण हुनुभएको हो। धर्मका मर्यादाहरूको व्याख्या गर्ने, तिनलाई बनाउने र रक्षा समेत गर्ने तिनै परमात्माले धर्मप्रतिकूल परस्त्रीको स्पर्श गर्ने काम कसरी गर्नुभयो ?

**आप्तकामो यदुपतिः कृतवान् वै जुगुप्सितम्।**
**किमभिप्राय एतं नः शंशयं छिन्धि सुव्रत॥ २९॥**

पदार्थ–
**सुव्रत** = हे नियमनिष्ठ शुकदेव
**वै** = निश्चय नै
**आप्तकामः** = आप्तकाम (कामना पूर्ण) हुनुभएका
**यदुपतिः** = यदुपति श्रीकृष्णले
**जुगुप्सितं** = निन्दित कर्म
**कृतवान्** = गर्नुभयो
**किम् अभिप्रायः** = यसमा के अभिप्राय छ
**नः** = हाम्रो
**एतं** = यो
**शंशयं** = शङ्कालाई
**छिन्धि** = नष्ट गरिदिनुहोस्

**वाक्यार्थ–** हे शुकदेव ! निश्चय नै भगवान् श्रीकृष्ण आप्तकाम हुनुहुन्छ, तर उहाँले के अभिप्रायले यस्तो निन्दित कर्म गर्नुभयो ? यो मेरो सन्देहलाई हटाइदिनुहोस्।

**विवरण–** रासलीलामा धर्मको अतिक्रमण भयो कि ? भगवान्ले परस्त्रीस्पर्श जस्तो यस्तो निन्दित कर्म किन गर्नुभयो ? भन्ने विषयमा परीक्षित् शुकदेवसँग प्रश्न गर्दछन्। श्रीशुकदेवले पनि यस शङ्कालाई तीन, चार रूपले उत्तर दिनुभएको छ। रासको रहस्य नबुझ्नेहरूले शङ्का गर्दछन्– भगवान् श्रीकृष्ण धर्ममार्गका प्रतिष्ठापक भएर पनि उहाँले रातको समयमा वनमा परस्त्रीहरूसँग किन विहार गर्नुभयो ? अनि गोपिनीहरूले आफ्नो घर-परिवार छाडी किन वन-वनमा परपुरुषसँग नाच्दै हिँडे ? श्रीशुकदेवले सबभन्दा पहिले भगवान् श्रीकृष्णको ईश्वरीयतालाई सम्झाउनुभएको छ। भगवान्को लीलाको सम्बन्धमा विचार गर्दा के बिर्सन हुन्न भने यो भगवान्को लीलाको विचार हो, सामान्य व्यक्तिका चरित्रको होइन। सर्वसमर्थ एवं नित्यतृप्त प्रभुमा आनन्दभोग गर्न अरू व्यक्ति या वस्तुको सहायता चाहिँदैन, किनभने उहाँमा कुनै कुराको कमी छैन। उहाँ स्वयं परमानन्दरूप हुनुहुन्छ। यदि भगवान् श्रीकृष्णलाई ईश्वर नमान्ने हो भने उहाँका दिव्य लीलाहरूको सम्बन्धमा विचार गर्ने आवश्यकता नै छैन। स्वयं भगवान्लाई नमान्ने तर उहाँका लीलाहरूलाई सत्य मानी त्यसको गुणदोष विचार गर्ने आवश्यकता नै किन पर्छ र ? यदि श्रीकृष्ण भगवान् हुनुहुन्छ भने उहाँ जीवहरूभन्दा विशिष्ट हुनुहुन्छ र जीवहरूका चरित्र एवं नीति-नियममा उहाँलाई दाँज्न या जाँच्न मिल्दैन। शास्त्रहरूमा जीव र परमात्माका पनि अनेक धर्म र स्वाभाविक गुणहरू बताइएका छन्। जीवहरूको परम धर्म सांसारिक विषयलाई छाडी परमात्माको शरणमा जानु हो भने जुन भावले उनीहरू आफूकहाँ आएका छन्, त्यो तिनीहरूको इच्छालाई पूरा गर्नु र उनीहरूको श्रद्धालाई अटुट बनाइरहनु भगवान्को कर्तव्य हो। यसैलाई भगवान्ले **ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्** अर्थात् जसले जुन जुन भावले मलाई भजन गर्दछन्, तिनलाई म त्यसै गरी प्राप्त हुन्छु भनी प्रतिज्ञाको रूपमा गीता (४/११)मा बताउनुभएको छ। भक्ति बाह्य व्यवहारभन्दा विलक्षण हुन्छ, यसमा व्यक्तिले सर्वरूप परमात्मासँग नै पति, पुत्र, पिता, मित्र आदि सम्बन्ध राख्दछ ती जीवात्माका पति, पिता, मित्र आदि पनि भगवान् नै हुनुहुन्छ। यसरी जीवले जुन सम्बन्ध या भावलाई मुख्य बनाई परमात्मचिन्तन गर्दछ भगवान् त्यही भाव अनुसार त्यसलाई प्राप्त हुनुहुन्छ, यो भगवान्को नियम हो। गोपिनीहरूले पतिरूपमा भगवान्को उपासना गरेका थिए त्यसैले भगवान् श्रीकृष्णले पतिको रूपमा नै ती अनेक गोपिनीहरूलाई आफू नायक बनी वनविहार, जलविहार, नृत्य आदि गराउनुभयो। यो उहाँको भगवद्धर्मको पालन थियो, धर्मको अतिक्रमण थिएन।

गोपिनीहरूले धर्मको अतिक्रमण गरे भन्ने कुरा पनि वास्तविक होइन। गोपिनीहरू आफ्ना पतिलाई छाडी परपुरुषसँग किन क्रीडा गरे ? यसको उत्तर हो– श्रीकृष्ण आफूभन्दा भिन्न अलग व्यक्ति हुनुहुन्न, उहाँ त उत्तमपुरुष स्वयं आफू नै हुनुहुन्छ, परपुरुष होइन। परमात्मा सबैका आत्मा हुनुहुन्छ। जसका लागि सम्पूर्ण संसार एवं लौकिक सम्बन्धहरूमा प्रेम गरिन्छ, ती परमात्मा स्वयं उपस्थित भएपछि फेरि ती नक्कली वस्तुमा नै प्रेम गरिरहनुपर्दछ र ? श्रीकृष्ण पति, पुत्र, बन्धुबान्धव आदि सबैका आत्मा भएको कुरा गोपिनीहरूले स्पष्ट रूपले बताएका छन्– **प्रेष्ठो**

**भवांस्तनुभृतां किल बन्धुरात्मा** (भागवत, १०/२९/३२) अर्थात् सम्पूर्ण प्राणीहरूका आत्मा परम हितैषी बन्धु र परम प्रियतम पनि हजुर नै हुनुहुन्छ। यसरी जसले श्रीकृष्णलाई आत्मा भनी बुझेको छ, उसले सामान्य कामदृष्टिले विहार गर्न कसरी सम्भव छ ? गोपिनीहरूले पति आदिलाई त्यागी वनमा गएको धर्मको अतिक्रमण गरेको होइन, परम धर्मलाई अँगालेको हो भन्ने बुझिन्छ। पतिसेवा, पुत्रसेवा आदि लौकिक सामान्य धर्महरूको एक मात्र लक्ष्य परमात्मप्राप्ति नै हो। हुन त पति आदिभित्र पनि आत्मरूपले पसी तिनलाई पति बनाउने परमात्मा नै हुनुहुन्छ, त्यसैले पति आदिको सन्तुष्टि पनि परमात्माकै प्रीति हो, तर पति आदिभित्र शरीर, मन आदि उपाधिका कारणले परमात्माको रूप ढाकिएको छ। तर श्रीकृष्ण चाहिँ साक्षात् परमात्मा हुनुहुन्छ, त्यसैले पति आदिको प्रीतिभन्दा साक्षात् परमात्माकै प्रीति प्रमुख हुन पुग्दछ। यसैलाई श्रीधर स्वामीले **जीवेषु आवृतं ब्रह्मत्वं कृष्णे तु अनावृतम्** अर्थात् जीवहरूमा रहेको परमात्मरूपता उपाधिद्वारा ढाकिएको छ, श्रीकृष्णमा चाहिँ त्यो परमात्मरूपता ढाकिएका छैन भनी बताउनुभएको छ। यसैले साधनधर्महरूको पालनामा भन्दा साध्य परमधर्मको पालनामा गोपिनीहरूको रुचि हुनु स्वाभाविक भएको हो, जो परम आवश्यक पनि छ। यदि गोपिनीहरू पतिसेवा आदि लौकिक धर्ममा नै अडिएका भए के तिनीहरू परमात्मप्रेमका उच्चतम दृष्टान्त बन्न सक्थे ? त्यसैले उनीहरूले घर, परिवार आदि त्यागेर ज्यादै प्रशंसनीय कार्य गरेका छन्। गोपिनीहरूले घरबार त्याग्नु जीवन्मुक्त यतिले पुत्रैषणा, वित्तैषणा र लोकैषणालाई त्यागी वनमा रहनुजत्तिकै उच्च कोटिको रहेको छ। अझ गोपिनीहरूले परिश्रम एवं विचारपूर्वक घर छाडेका छैनन् किन्तु परमात्मप्रेमको प्रवाहमा सामान्यधर्मका बाधाहरू उनीहरूबाट स्वयं टाढा भएका छन्। गोपिनीहरूको प्रेम एउटा सानो बच्चाले अरू कुनै वस्तुलाई नभई आमाको काखलाई पाएपछि मात्र शान्त हुने आतुरता देखाए जस्तो छ। वास्तवमा यस्तो परमात्मप्रेमको आतुरता नआउञ्जेल परमधर्मरूप परमात्मा कसैलाई पनि भेटिनुहुन्न र त्यस्तो परमात्मप्रेमको आतुरता उत्पन्न नगर्ने धर्मको केही अर्थ पनि छैन। **स वै पुंसां परो धर्मो यतो भक्तिरधोक्षजे** अर्थात् जसद्वारा परमात्मामा भक्ति लाग्छ, त्यही नै परमधर्म हो भनी भागवतमा नै (१/२/६) बताइएको छ। रासलीलाको क्रममा कृष्णकहाँ जान नपाउँदा **जहुर्गुणमयं देहं** (भागवत, १०/२९/११) अर्थात् गोपिनीहरूले प्राण नै छाडिदिएको वर्णन श्रीशुकदेवले गर्नुभएको छ। यसरी त्रिगुणमय शरीरको बन्धनलाई नै समाप्त गरिदिने विशुद्ध प्रेममा मोहात्मकताको आशङ्का गर्नु आफ्नै मोह भगवान् र भक्तहरूमा थोपर्नु हो। के तामस लौकिक प्रेमद्वारा त्रिगुणमय शरीरबन्धनबाट छुट्न सम्भव छ ? यसरी रासलीलामा श्रीकृष्ण र गोपिनीहरू दुबै दोषरहित भएको कुरा स्पष्ट हुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**धर्मव्यतिक्रमो दृष्ट ईश्वराणां च साहसम्।**

**तेजीयसां न दोषाय वह्नेः सर्वभुजो यथा ॥ ३० ॥**

पदार्थ– | **ईश्वराणां** = ईश्वरहरूका | (समर्थहरूका)

**साहसम्** = हठी कार्यहरू र
**धर्मव्यतिक्रमः च** = धर्मको उल्लङ्घन भएको
**दृष्टः** = देखिएको छ
**यथा** = जसरी
**सर्वभुजः** = सबै खाइदिने
**वह्नेः** = आगोको (त्यसबाट दोष भएको छैन, त्यसै गरी)
**तेजीयसां** = तेजस्वीहरूमा
**न दोषाय** = यी कर्महरू दोषकारक हुँदैनन्

**वाक्यार्थ–** ईश्वरहरूले हठी कामहरू र कहीँ–कहीँ धर्मको उल्लङ्घन पनि गरेको देखिन्छ, तर यसबाट ती तेजस्वीहरूमा दोष लाग्दैन। जसरी आगोले सबै खाइदिन्छ तर पनि उसलाई दोष लाग्दैन।

**नैतत् समाचरेज्जातु मनसापि ह्यनीश्वरः।**
**विनश्यत्याचरन् मौढ्याद् यथारुद्रोऽब्धिजं विषम्॥ ३१॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**अनीश्वरः** = असमर्थले
**एतत्** = यसलाई
**जातु** = एक पटक पनि
**मनसा अपि** = मनले मात्र पनि
**न समाचरेत्** = नगरोस्
**यथा** = जसरी
**रुद्रः** = भगवान् रुद्रले
**अब्धिजं** = समुद्रबाट निस्किएको
**विषम्** = विषलाई पिउनुभयो
**मौढ्यात्** = मूर्खताको कारणले
**आचरन्** = (त्यस्तै) गर्ने व्यक्ति
**विनश्यति** = नष्ट हुन्छ

**वाक्यार्थ–** असमर्थ व्यक्तिले यस्तो काम एक पटक पनि मनले मात्र पनि गर्नुहुन्न। भगवान् रुद्रले समुद्रबाट निस्किएको विष पिउनुभएको थियो, मूर्खतावश कसैले यस्तो गर्न थाल्यो भने ऊ नष्ट हुन्छ।

**ईश्वराणां वचः सत्यं तथैवाचरितं क्वचित्।**
**तेषां यत्स्ववचोयुक्तं बुद्धिमांस्तत्समाचरेत्॥ ३२॥**

**पदार्थ–**
**ईश्वराणां** = ईश्वर (समर्थ व्यक्ति)हरूको
**वचः** = उपदेश नै
**सत्यं** = सत्य हुन्छ
**तथा** = त्यसै गरी
**आचरितं** = आचरण चाहिँ
**क्वचित् एव** = कहिलेकाहीँ मात्र
**तेषां** = तिनीहरूको
**स्ववचोयुक्तं** = आफ्नै उपदेश अनुसारको
**यत्** = जुन आचरण छ
**तत्** = त्यसलाई मात्र
**बुद्धिमान्** = बुद्धिमान्ले
**समाचरेत्** = आचरण गर्नुपर्दछ

**वाक्यार्थ–** ईश्वर (समर्थ व्यक्ति)हरूले दिएको उपदेश नै हाम्रा लागि सत्य हुन्छ, आचरण भने कहिलेकाहीँ मात्र सत्य हुन्छ। तिनीहरूले आफ्नै उपदेश अनुसार जुन आचरण गरेका छन् त्यसलाई मात्र बुद्धिमान् व्यक्तिहरूले आचरण गर्नुपर्दछ।

**कुशलाचरितेनैषामिह स्वार्थो न विद्यते।**
**विपर्ययेण वानर्थो निरहङ्कारिणां प्रभो॥ ३३॥**

**किमुताखिलसत्त्वानां तिर्यङ्मर्त्यदिवौकसाम्।**
**ईशितुश्चेशितव्यानां कुशलाकुशलान्वयः॥ ३४॥**

**पदार्थ–**
**प्रभो** = हे राजा परीक्षित्
**निरहङ्कारिणां** = अहङ्कारहीन
**एषाम्** = यी ईश्वर (समर्थ)हरूको लागि
**इह** = यो संसारमा
**कुशलाचरितेन** = राम्रो आचरणद्वारा
**स्वार्थः** = स्वार्थसिद्धि र
**विपर्ययेण** = नराम्रो आचरणद्वारा
**अनर्थः वा** = अनर्थ भन्ने पनि
**न विद्यते** = हुँदैन भने
**ईशितव्यानां** = शासन गर्न योग्य
**तिर्यङ्मर्त्यदिवौकसाम्** = पशुपक्षी, मानिस र देवताहरू समेतका
**अखिलसत्त्वानां** = सबै प्राणीहरूका
**ईशितुः** = नियन्त्रक परमात्मामा
**कुशलाकुशलान्वयः** = शुभ र अशुभको योग
**किम् उत** = केका लागि हुन्थ्यो

**वाक्यार्थ–** हे राजा परीक्षित्! अहङ्कारहीन ईश्वर (समर्थ)हरूको लागि यो संसारमा राम्रो कामले कुनै स्वार्थसिद्धि हुने र नराम्रो कामले अनर्थ हुने भन्ने हुँदैन। झन् संसारभरिका सम्पूर्ण प्राणी पशुपक्षी, मानिस र देवताहरूका समेत शासक भगवान्का लागि राम्रो नराम्रो काम भन्ने के हुन्थ्यो?

**यत्पादपङ्कजपरागनिषेवतृप्ता**
**योगप्रभावविधुताखिलकर्मबन्धाः।**
**स्वैरं चरन्ति मुनयोऽपि न नह्यमाना-**
**स्तस्येच्छयात्तवपुषः कुत एव बन्धः॥ ३५॥**

**पदार्थ–**
**यत्पादपङ्कजपरागनिषेवतृप्ताः** = जुन भगवान्को चरणकमलको परागलाई सेवन गरेर तृप्त हुने
**योगप्रभावविधुताखिलकर्मबन्धाः** = योगको प्रभावले सम्पूर्ण कर्मबन्धनलाई छिनाएका
**मुनयः अपि** = मुनिहरू पनि
**न नह्यमानाः** = बन्धनमा नपरी
**स्वैरं** = यथेच्छ
**चरन्ति** = हिँड्दछन् भने
**इच्छया** = आफ्नै इच्छाले
**आत्तवपुषः** = शरीर स्वीकार गर्ने
**तस्य एव** = त्यही परमात्माकै
**बन्धः** = कर्मबन्धन
**कुतः** = कसरी हुन सक्छ

**वाक्यार्थ–** जुन भगवान्को चरणकमलको परागको सेवा गरेर तृप्त भएका भक्त अनि योगका कारणले सम्पूर्ण कर्मबन्धनलाई छिनाएका ज्ञानी मुनिहरू पनि बन्धनमा नपरी यथेच्छ हिँड्दछन् भने आफ्नै इच्छाले मायाद्वारा अवतार लिनुहुने परमात्मामा कर्मबन्धन कसरी हुन सक्छ?

**गोपीनां तत्पतीनां च सर्वेषामेव देहिनाम्।**
**योऽन्तश्चरति सोऽध्यक्षः क्रीडनेनेह देहभाक्॥ ३६॥**

**पदार्थ**–
**गोपीनां** = गोपिनीहरूको
**तत्पतीनां** = तिनका पतिहरूको
**सर्वेषाम् एव** = सबै
**देहिनाम् च** = प्राणीहरूको पनि
**यः** = जुन परमात्मा
**अन्तः** = हृदयभित्र (अन्तर्यामीरूपले)
**चरति** = रहनुहुन्छ
**अध्यक्षः** = बुद्धिवृत्तिका साक्षी
**सः** = ती परमात्मा
**क्रीडनेन** = खेलखेलमै
**इह** = यहाँ
**देहभाक्** = शरीरधारी बन्नुभएको छ

**वाक्यार्थ**– सबै गोपिनी, तिनका पतिहरू र सम्पूर्ण प्राणीहरूमा पनि हृदयभित्र अन्तर्यामीरूपले रहने जुन परमात्मा हुनुहुन्छ, उहाँ नै यहाँ खेलखेलमैं शरीर धारण गरी आउनुभएको छ।

**अनुग्रहाय भूतानां मानुषं देहमास्थितः।**
**भजते तादृशीः क्रीडा याः श्रुत्वा तत्परो भवेत्॥ ३७॥**

**पदार्थ**–
**मानुषं** = मनुष्यको
**देहं** = शरीरलाई
**आस्थितः** = स्वीकार गरेका परमात्माले
**भूतानां** = प्राणीहरूको
**अनुग्रहाय** = कल्याणका लागि
**तादृशीः** = त्यस्ता
**क्रीडाः** = लीलाहरू
**भजते** = गर्नुहुन्छ
**याः** = जसलाई
**श्रुत्वा** = सुनेर (प्राणी)
**तत्परः** = भगवत्परायण
**भवेत्** = हुन्छ

**वाक्यार्थ**– मनुष्यको शरीरलाई स्वीकार गरी परमात्माले प्राणीहरूको अनुग्रहका लागि त्यस्ता विचित्र लीलाहरू गर्नुहुन्छ, जुन लीलालाई सुनेर प्राणी भगवान्मा समर्पित हुन्छ।

**नासूयन् खलु कृष्णाय मोहितास्तस्य मायया।**
**मन्यमानाः स्वपार्श्वस्थान् स्वान् स्वान् दारान् व्रजौकसः॥ ३८॥**

**पदार्थ**–
**खलु** = निश्चय नै
**तस्य** = ती श्रीकृष्णको
**मायया** = मायाद्वारा
**मोहिताः** = मोहित भएका
**स्वान् स्वान्** = आ-आफ्ना
**दारान्** = पत्नीहरूलाई
**स्वपार्श्वस्थान्** = आफ्नै नजिक रहेका
**मन्यमानाः** = मानिरहेका
**व्रजौकसः** = व्रजवासीहरूले
**कृष्णाय** = श्रीकृष्णसँग
**न असूयन्** = डाह गरेनन्

**वाक्यार्थ**– सम्पूर्ण व्रजवासीहरू श्रीकृष्णको मायाद्वारा मोहित भएका थिए, उनीहरूलाई आ-आफ्ना पत्नीहरू आफैंसँग भए झैं लाग्यो। त्यसैले उनीहरूले (रासक्रीडापछि पनि) श्रीकृष्णसँग डाह गरेनन्।

**ब्रह्मरात्र उपावृत्ते वासुदेवानुमोदिताः।**
**अनिच्छन्त्यो ययुर्गोप्यः स्वगृहान् भगवत्प्रियाः॥ ३९॥**

पदार्थ–
**ब्रह्मरात्रे** = ब्राह्म मुहूर्त (ब्रह्माजीको एक रात बराबरको समय, एक हजार युग)
**उपावृत्ते** = प्राप्त भएपछि (बितेपछि)
**वासुदेवानुमोदिताः** = श्रीकृष्णबाट आज्ञा पाएका
**भगवत्प्रियाः** = भगवान्का प्रिय
**गोप्यः** = गोपिनीहरू
**अनिच्छन्त्यः** = नचाहेर पनि
**स्वगृहान्** = आ–आफ्ना घरमा
**ययुः** = गए

**वाक्यार्थ–** ब्रह्माजीको एक रात बराबरको समय (एक हजार युग) बितेर ब्राह्ममुहूर्त भएपछि भगवान् श्रीकृष्णले फर्किन आज्ञा दिनुभयो र सबै गोपिनीहरू नचाहँदा नचाहँदै पनि आ–आफ्ना घर फर्किए।

**विक्रीडितं व्रजवधूभिरिदं च विष्णोः**
**श्रद्धान्वितोऽनुशृणुयादथ वर्णयेद् यः।**
**भक्तिं परां भगवति प्रतिलभ्य कामं**
**हृद्रोगमाश्वपहिनोत्यचिरेण धीरः॥ ४०॥**

पदार्थ–
**इदं** = यो
**विष्णोः** = श्रीकृष्णको
**व्रजवधूभिः** = व्रजयुवतीहरू–सँगको
**विक्रीडितं** = क्रीडालाई
**यः** = जसले
**श्रद्धान्वितः** = श्रद्धापूर्वक
**अनुशृणुयात्** = सुन्ला र
**अथ च** = त्यसै गरी
**वर्णयेत्** = सुनाउला
**धीरः** = त्यो धीर व्यक्ति
**आशु** = चाँडै नै
**भगवति** = भगवान्मा
**परां** = सर्वश्रेष्ठ (प्रेमरूपा)
**भक्तिं** = भक्तिलाई
**प्रतिलभ्य** = पाएर
**अचिरेण** = तत्काल नै
**हृद्रोगम्** = हृदयको रोग
**कामं** = कामभावलाई
**अपहिनोति** = छाडिदिन्छ

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले व्रजयुवतीहरूसँग क्रीडा गर्नुभएको यो प्रसङ्गलाई जो धीर व्यक्तिले श्रद्धापूर्वक सुन्छ र अरूलाई पनि सुनाउँछ भने त्यसले चाँडै नै भगवान्मा सर्वश्रेष्ठ प्रेम भक्ति पाउँछ र तत्काल नै कामवासनारूप हृदयको रोगबाट मुक्त हुन्छ।

## राससार

श्रीमद्भागवतका २९ देखि ३३ सम्मका यी पाँच अध्यायलाई **रासपञ्चाध्यायी** भनिन्छ। श्रीमद्भागवत भगवान् श्रीकृष्णको प्रत्यक्ष वाङ्मयी मूर्ति हो भने दशमस्कन्ध त्यसको हृदय हो। त्यसमा पनि रासलीलाका यी पाँच अध्यायहरू पाँच प्राण समान छन्। यी अध्यायहरूमा भगवान् र उहाँका सर्वश्रेष्ठ भक्तहरूबीच भएको प्रेमको उत्कर्ष प्रकाशित भएको छ। रास शब्दको व्युत्पत्ति गर्दै आचार्यहरूले बताउनुभएको छ– **रसानां समूहः रासः** अर्थात् रसहरूको समूहको नाम नै रास हो। रस भनेका साक्षात् आनन्दस्वरूप परमात्मा नै हुनुहुन्छ, **रसो वै सः** भनी तैत्तिरीयोपनिषद् (२/७/१)मा बताइएको छ। आनन्दस्वरूप परमात्माको रसलाई प्राप्त गरेर नै सम्पूर्ण प्राणीहरू

आनन्दित हुन्छन् भनी त्यहीँ नै बताइएको छ— **रसं ह्येवायं लब्ध्वानन्दीभवति**। यो सम्पूर्ण संसार नै रसमय परमात्माको लीलाविलास हो र यहाँ परमात्माबाहेक अरू कुनै पनि तत्त्व छैन। **विज्ञानमानन्दं ब्रह्म** (बृहदारण्यकोपनिषद्, ३/९/२८/७) अर्थात् परमात्मा नित्य ज्ञान एवं आनन्दस्वरूप हुनुहुन्छ भन्दा त्यही आनन्दरूप तत्त्वबाट नै जगत्‌को उत्पत्ति भएको हो भन्ने कुरा तैत्तिरीयोपनिषद् (३/६)मा बताइएको छ— **आनन्दाद् ह्येव खल्विमानि भूतानि जायन्ते, आनन्देन जातानि जीवन्ति, आनन्दं प्रयन्त्यभिसंविशन्ति** अर्थात् सम्पूर्ण प्राणीहरू आनन्दबाट नै उत्पन्न हुन्छन्, त्यहीँ टिक्दछन् र अन्त्यमा त्यहीँ गई लीन हुन्छन्। यसरी आनन्दबाट उत्पन्न भएको हुनाले नै सबै प्राणीहरूलाई त्यो परम आनन्द प्राप्त गर्ने स्वाभाविक चाहना हुन्छ। त्यही परम आनन्दको मात्रा या थोरै अंशलाई पाएर संसारमा आनन्द अंश रहेको छ। त्यसैले जिज्ञासु, विरक्त एवं ज्ञानी भक्तहरू साक्षात् परमानन्दलाई नै प्राप्त गर्न खोज्दछन्। यो परमानन्द निरन्तरको साधनाबाट आफ्नो हृदयभित्र प्रकट हुने पूर्णताको अनुभूति हो। यसै आनन्दलाई कहिलेकाहीँ भगवान् आफ्ना भक्तहरूको इच्छा अनुसार लीलाको माध्यमले पृथिवीतलमा प्रकट गर्नुहुन्छ। परमात्मामय भएका अनेक भक्तहरूको हृदयमा रहँदा त्यो एउटै परमानन्द पनि सामूहिक या विस्तृत भए झैँ हुन्छ, त्यसैले अद्वैत रसतत्त्वलाई पनि समूहमा धेरैको रूपमा कल्पना गरी रास शब्दद्वारा बताइएको छ। हरेक भक्तको हृदयभित्र पूर्ण रूपमा रहेको परमात्मरसलाई अभिव्यक्त गर्न या भगवान्‌मा रहेको परम रसलाई आस्वादन गर्न भक्त एवं भगवान् मिली एक हुने लीलालाई नै रासलीला भनिन्छ।

शास्त्रहरूमा भक्तिसाधनाका दुई प्रकारहरू छन्, एउटा वैधी वा मर्यादामूलक साधना र अर्को अवैधी वा रागात्मिका प्रेमसाधना। यसैलाई भक्तिका आचार्यहरूले वैधी भक्ति र रागात्मिका भक्ति भनी बताउनुभएको छ। वैधी भक्तिमा सम्पूर्ण शास्त्रीय एवं लौकिक मर्यादाहरूको पालन अनिवार्य हुन्छ तर रागात्मिका भक्तिमा मर्यादा एवं नियमका भावहरू आन्तरिक प्रेमसम्बन्धका बाधक हुन पुग्दछन्। वैधी भक्तिका साधकले ईश्वरलाई सर्वगुणसम्पन्न परमात्माको रूपमा चिन्दछ र उहाँको पाउमा समर्पित हुन्छ भने रागात्मिका भक्तिको साधक चाहिँ परमात्मालाई केवल आफ्नो आन्तरिक प्रेमीको रूपमा चिन्दछ र उहाँलाई आफ्नो अङ्गालोमा कस्न खोज्दछ। यसमा परमात्मामा रहेको ईश्वरीयताको स्फुरण हुँदैन केवल प्रेमको मात्र स्फुरण हुन्छ। गोपिनीहरू यस्तै रागात्मिका भक्तिका साधक थिए। गोपिनीहरूको प्रेमसाधनालाई हेर्दा उनीहरूमा रागात्मिका भक्तिको प्रकाश वेणुगीतको प्रसङ्गदेखि सुरु भएको देखिन्छ। भागवतको दशम स्कन्धको एक्काईसौँ अध्यायमा वेणुगीतको माध्यमबाट गोपिनीहरूभित्र रहेको श्रीकृष्णप्रेम प्रकट भएको छ। भगवान्‌का लीलाहरूलाई सुन्दा एवं अनुभव गर्दा जसमा जुन भावका साधक हुने योग्यता एवं संस्कार छ, त्यसमा त्यही भावको प्रकाश हुन्छ। गोपिनीहरूमा श्रीकृष्णको बाँसुरीको ध्वनि सुनेपछि कृष्णमिलनको तीव्र कामनाको सञ्चार भएको थियो भनी श्रीशुकदेवले एक्काईसौँ अध्यायको सुरुमैँ बताउनुभएको छ। उनीहरूमा श्रीकृष्णलाई अङ्कमाल गर्ने भाव थियो भन्ने कुरा **अभिरेभिरे** यो पदको प्रयोगबाट स्पष्ट भएको छ। यसरी यही प्रेमभावको बीज गोपिनीहरूको हृदयभित्र झाङ्गिँदै–फैलिँदै गएको देखिन्छ। यसपछिको बाईसौँ अध्यायमा आफ्नो प्रेमलाई सार्थक एवं सफल पार्न गोपिनीहरूले महामाया कात्यायनी भगवतीको आराधना गरेका छन्। यो

उपासनाले उनीहरूको रागात्मिका भक्ति अझै पुष्ट भएको छ भने यसले उनीहरूका प्रियतम श्रीकृष्णलाई पनि गोपिनीहरूप्रति आफू प्रेमयुक्त रहेको रहस्य अभिव्यक्त गर्न बाध्य पारेको छ। वैधी उपासनाले रागात्मिका भक्ति पुष्ट भएको प्रसङ्गबाट अनेक तात्पर्यहरू निस्कन्छन्। यसको एउटा तात्पर्य वैधी भक्तिको पर्यवसान रागात्मिका भक्तिमा पुगेर हुन्छ भन्ने रहस्य देखाउनु हो भने गोपिनीहरूको प्रेमसाधनाको अर्थमा भने यो प्रसङ्गले उनीहरूको जीवनमा अब वैधी भक्तिको आवश्यकता एवं प्रयोजन पूर्ण भएको र उनीहरूले त्योभन्दा माथिको प्रेमको पूर्णतामा प्रवेश गरेको रहस्य स्पष्ट भएको छ। प्रेमको साम्राज्यमा प्रवेश गर्ने द्वार चीरहरणद्वारा स्वयं प्रियतम श्रीकृष्णले नै हटाइदिनुभएको छ। चीरहरणको प्रसङ्गलाई हेर्दा यहाँ गोपिनीहरूमा रहेको मर्यादाको अवसान देखिन्छ। आफूलाई स्त्री भएको सम्झी भगवान्लाई आफूभन्दा अलग पुरुषरूपमा देखेर उहाँको अघि आवरणरहित भएर जान लजाइरहेका गोपिनीहरूलाई भगवान्ले चीरहरणद्वारा आवरण हटाइदिनुभएको छ। हुन पनि एउटै परमतत्त्व स्त्री-पुरुष, बाल-वृद्ध आदि सबै रूपमा देखिएको हुनाले त्यसमा यी अनेक औपाधिक भेदहरूको सम्बन्ध छैन। यसैलाई श्वेताश्वतरोपनिषद् (४/३)मा **त्वं स्त्री त्वं पुमानसि त्वं कुमार उत वा कुमारी** अर्थात् तिमी स्त्री एवं पुरुष हौ अनि कुमार र कुमारी पनि हौ भनी बताइएको छ। यस्तो स्त्री-पुरुषको भेदबाट अगल रहेको सर्वरूप परमतत्त्वलाई पाउन जीवले आफूलाई पनि यी शारीरिक भेदमूलक धारणाहरूबाट माथि लैजान सक्नुपर्दछ। लौकिक मर्यादाहरू त्रिगुणमय संसारका काल्पनिक मर्यादा हुन्। शास्त्रहरूले पनि त्रिगुणमय संसारकै व्यवस्थापनलाई बताउँछन्। त्यसैले गीता (२/४५)मा भगवान्ले अर्जुनलाई **त्रैगुण्यविषयाः वेदाः निस्त्रैगुण्यो भवार्जुन** अर्थात् हे अर्जुन ! वेदहरू त्रिगुणमय संसारलाई नै विषय गर्छन्, तर तिमीले गुणसम्बन्धले रहित आत्मामा स्थित भई निस्त्रैगुण्य बन्नुपर्दछ भनी उपदेश गर्नुभएको छ। निरपेक्ष आत्माको तहमा पुगेपछि संसारका व्यावहारिक अपेक्षाहरू स्वतः छुट्दछन्। नारद भक्तिसूत्र (४९)मा पनि परमात्मप्रेमको माथिल्लो तहमा पुगेपछि वेदहरूबाट छुट्कारा मिल्ने कुरा स्पष्टतः बताइएको छ– **यो वेदानपि संन्यस्यति केवलमविच्छिन्नानुरागं लभते** अर्थात् वेदहरूलाई पनि छोडिदिन्छ र केवल अविच्छिन्न प्रेममा मात्र स्थिर रहन्छ। **अत्र ... वेदा अवेदा** (बृहदारण्यकोपनिषद्, ४/३/२२) यो शास्त्रमर्यादाको त्याग त्यसको प्रयोजन पूरा भएकाले गरिएको हो, जसरी नदी तरेपछि नाउलाई छाडिन्छ। यस्तो उच्च प्रेमसम्बन्धमा केवल परमात्मा र भक्त हुन्छन्, अरू लौकिक सम्बन्ध आदिको कल्पना पनि हुँदैन। ती दुई पनि प्रेममा पग्लिएका हुन्छन्, द्वैतभावको स्फुरण रहँदैन। यसरी वेणुगीत र चीरहरणबाट सुरु भएको गोपिनीहरूको प्रेम रासलीलाको प्रसङ्गमा आइपुग्दा सफल भएको छ अनि यो भक्त र भगवान्को अद्वैत मिलनले प्रेमको पराकाष्ठालाई देखाएको छ। यसरी यहाँ भक्त र भगवान् दुबै पग्लेर एउटै भई मिली दुबैले आ-आफ्नो परमधर्मलाई पालना गरेका छन्। यो लीलामा प्रेमी र प्रियतम अलग नभई एउटै अस्तित्वका दुई प्रतिरूप हुन्। त्यसैले लीलाको क्रममा भगवान्ले आफ्नै प्रतिबिम्बसँग खेले झैँ गोपिनीहरूसँग खेल्नुभयो भनी बताइएको छ– **रेमे रमेशो व्रजसुन्दरीभिः यथार्भकः स्वप्रतिबिम्बविभ्रमः** (भागवत, १०/३३/१७)। यो सम्पूर्ण संसार नै परमात्माको लीलाविलास हो, तर यहाँ जीवहरूको परमानन्दरस आवृत भएको छ। जो अज्ञानमुक्त एवं

अनावृत हुन्छ, त्यससँग परमात्मा निरावरण भई परमानन्दलीला प्रकट गर्नुहुन्छ। रासलीला यस्तै परमानन्दको प्राकट्यलीला हो। रासलीलामा भगवान् श्रीकृष्ण आत्मा हुनुहुन्छ भने गोपिनीहरू र विशेष गरी श्रीराधा आत्माकार वृत्तिरूपमा हुनुहुन्छ। आत्माकार वृत्तिमा चम्केको आत्मप्रकाश ती वृत्तिहरूसँग खेले जैँ नाचे जैँ हुन्छ। गोपिनीहरूको बीचमा चम्किँदै भगवान्ले नाच्नु यही रहस्यको प्रकटीकरण हो। हरेक गोपिनीपिच्छे एउटा श्रीकृष्ण अनि हरेक आत्माकार वृत्तिपिच्छे एउटा आत्मचैतन्यको लीलाविलासले रासलीलाको रहस्यलाई उजागर गरेको छ। यसैले रासलीला हरेक दृष्टिले सान्दर्भिक एवं रहस्यमय छ भन्ने बुझिन्छ।

केही आचार्यहरूले रासलीलालाई कामविजय लीला पनि भन्नुभएको छ। ब्रह्मा आदि देवतालाई जितेकाले अत्यन्त घमन्डी भएको कामदेवले भगवान्सँग पनि लड्न चाह्यो। हुन त भगवान् शङ्करसँगको जम्काभेटमा नै उसले आफ्नो सामर्थ्यलाई थाहा पाइसकेको थियो, तर कामदेवको धारणा के थियो भने त्यो वेला भगवान् शङ्कर तपोबलले युक्त भएको हुनाले मैले हार्नुपरेको हो। तपस्यामा विघ्न गरेको पापले आफूलाई कमजोर बनाएकाले पनि आफ्नो हार भएको हो भन्ने कामदेवलाई लागेको थियो। श्रीकृष्ण तपस्वी होइनन्, गोपिनीहरूसँग जिस्किँदै हिँड्ने यिनलाई त म सजिलै वशमा पारिहाल्छु भन्ने सोचिरहेको कामदेवको अभिमानलाई शान्त गर्न भगवान्ले एकान्त रातमा स्त्रीहरूसँग विहार गर्नुभयो। श्रीशुकदेवकै भनाइ अनुसार **आत्मनि अवरुद्धसौरतः** (भागवत १०/३३/२६) अर्थात् कामको भावलाई भने उहाँले आफैंभित्र अवरुद्ध गरिदिनुभएको थियो त्यसैले उहाँलाई कामदेवले छुनै सकेन। यसरी स्त्रीहरूको समूहमा एकान्त रातमा वनविहार गरिरहेको अवस्थामा पनि आफूले जित्न नसकेको देखी कामदेवको अभिमान पूर्णतः नष्ट भयो। जुन लीला देख्नाले कामदेवको अभिमान नष्ट भयो, त्यो लीलाको चिन्तनले भक्तहरूको हृदयमा रहेको काम पनि निर्बल हुन्छ र यसको चिन्तन गर्ने व्यक्ति **हृद्रोगं आशु अपहिनोति** (भागवत १०/३३/४०) अर्थात् कामरोगबाट चाँडै नै मुक्त हुन्छ भनी फलश्रुतिमा बताइएको छ। रासलीलाको क्रममा भगवान्ले कामलाई जित्न तपस्या आदि कुनै पनि साधनको अवलम्बन गर्नुभएको छैन। उहाँले त कामी व्यक्तिको जस्तो आचरण गर्दागर्दै पनि सहजतापूर्वक त्यसलाई जितिदिनुभएको छ। यसरी यो लीलामा भगवान्को स्वाभाविक सामर्थ्यको लोकोत्तर महिमा प्रकाशित भएको छ।

रासलीला कुन ठाउँमा र कुन दिन भएको थियो भनी विचार गर्ने हो भने पनि यसको अलौकिकता स्पष्ट हुन्छ। रासका गोपिनीहरू सोह्र ओटा समूहमा थिए र हरेक समूहमा हजारौँ गोपिनीहरू थिए अनि तिनीहरूसँग एक-एक श्रीकृष्ण हुनुहुन्थ्यो। यो विराट् लीला लौकिक वृन्दावनको सीमित क्षेत्रमा नभई नित्यधामको अनन्त प्रदेशमा भएको थियो। वृन्दावनमा नित्यधामको प्रवेश गराई त्यही अनन्त धाममा रचिएको लीला हो यो। त्यसैले रासलीलाका सम्पूर्ण उपादानहरू प्राकृतिक होइनन्, स्वयं श्रीकृष्णमय नै हुन्। आकाशमा उदाउने चन्द्रमा, यमुनाको किनार, वृन्दावन, रुख, लहरा आदि सबै श्रीकृष्णका नै अभिव्यक्ति हुन् यहाँ। श्रीकृष्णसँग नाच्ने गोपिनीहरू पनि श्रीकृष्णका नै प्रतिरूप थिए। **मन्यमानाः स्वपार्श्वस्थान् स्वान् स्वान् दारान् व्रजौकसः** (भागवत १०/३३/३८) अर्थात् लौकिक रूपमा गोपिनीका पतिहरूले

उनीहरूलाई आफूसँग रहिरहेको देखेका थिए भनी श्रीशुकदेवले नै बताउनुभएको छ। नित्यधाममा प्राकृत लौकिक शरीरको प्रवेश नहुने भएकाले त्यहाँ क्रीडा गर्न गोपिनीहरूको कृष्णप्रेममय भावशरीर नै मूर्त भएको देखिन्छ। रासलीला पूर्णिमाको एक रातभित्र भएको थिएन, यो त ब्रह्मरात्र अर्थात् ब्रह्माजीको एक रातको समयसम्म चलेको थियो। भगवान्ले शरत्पूर्णिमाको एउटै रात्रिभित्र ब्रह्माजीको रात समान समय (एक हजार युग) घुसाई त्यही समयमा लीला गर्नुभएको थियो। यसरी अलौकिक रासलीलामा लौकिक स्थान, लौकिक समय अनि लौकिक शरीरको प्रवेश भएको होइन। उपनिषद्को सिद्धान्त अनुसार संसारमा लौकिक भनिने सबै पदार्थहरू वास्तवमा परमात्माकै अभिव्यक्ति या स्वरूप हुन्। वेदान्त अनुसार जगत्मा पदार्थ भनिने कुनै अलग वस्तु छैन, केवल सच्चिदानन्दमय परमात्माको सङ्कल्पका कारण देखिएको मात्र छ। सम्पूर्ण संसार परमात्माको लीलाविलास हो। जगत्को लीला एउटा यस्तो नाटक हो, जसलाई परमात्मा आफ्नो सङ्कल्पद्वारा मायाको पर्दामा प्रक्षेपित गरिरहनुभएको छ। पर्दामा प्रकाशमय आकृतिहरू हिँडडुल गरेको देखिन्छ, तर त्यहाँ केही भएको हुँदैन, त्यसै गरी संसारलीलामा पनि स्वप्रकाश परमात्मा आफ्नै प्रकाशद्वारा अनेक प्रतिरूपहरू बनाई तिनलाई प्रक्षिप्त गरी सञ्चालित गर्नुहुन्छ। यसरी जगत्को नियमित शृङ्खला नै अनादि अनन्त रासलीला हो, जहाँ एउटै स्वप्रकाश श्रीकृष्ण अनेक आकृति एवं प्रतिबिम्बको रूपमा प्रकट भई आफैँ मायाको पर्दामा प्रक्षिप्त भई देखिनुहुन्छ। **यथार्भकः स्वप्रतिबिम्बविभ्रमः** (भागवत, १०/३३/१७) भन्ने उक्तिले पनि बच्चाले आफ्नो प्रतिबिम्बसँग खेले झैँ श्रीकृष्णले आफ्नै प्रतिबिम्ब गोपिनीहरूसँग खेल्नुभयो भन्ने बताई यही रहस्यतर्फ सङ्केत गरेको छ। यसरी श्रीकृष्णले आफैँ नै भक्त र भगवान्को भेदमा प्रकट भई आफैँमा गर्नुहुने नित्यविहार नै रासलीला हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**रासक्रीडावर्णनं नाम त्रयस्त्रिंशोऽध्यायः॥ ३३॥**

# अथ चतुस्त्रिंशोऽध्यायः

## सुदर्शन र शङ्खचूडको सद्गति

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एकदा देवयात्रायां गोपाला जातकौतुकाः।**

**अनोभिरनडुद्युक्तैः प्रययुस्तेऽम्बिकावनम्॥ १॥**

**पदार्थ–**
**एकदा** = एकपटक
**देवयात्रायां** = देवताको (भगवान् पशुपतिको पूजाका) लागि भएको यात्रामा
**जातकौतुकाः** = कुतूहल जागेका
**ते** = ती
**गोपालाः** = गोपालहरू
**अनडुद्युक्तैः** = गोरु नारिएका
**अनोभिः** = गाडाहरूद्वारा
**अम्बिकावनम्** = अम्बिकावनमा
**प्रययुः** = गए

**वाक्यार्थ–** एकपटक भगवान् पशुपतिको पूजाको अवसरमा कौतूहलवश गोपालहरू गोरु नारिएका गाडाहरूमाथि चढी अम्बिकावनमा गए।

**तत्र स्नात्वा सरस्वत्यां देवं पशुपतिं विभुम्।**

**आनर्चुरर्हणैर्भक्त्या देवीं च नृपतेऽम्बिकाम्॥ २॥**

**पदार्थ–**
**नृपते** = हे राजा परीक्षित्
**तत्र** = त्यहाँ
**सरस्वत्यां** = सरस्वती नदीमा
**स्नात्वा** = स्नान गरेर
**अर्हणैः** = पूजा सामग्रीद्वारा
**विभुम्** = सर्वव्यापक
**पशुपतिं देवं** = सबै जीवहरूका पति भगवान्लाई र
**अम्बिकाम्** = जगदम्बिका
**देवीं च** = पार्वतीलाई पनि
**भक्त्या** = भक्तिपूर्वक
**आनर्चुः** = पूजा गरे

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यहाँ गई उनीहरूले सरस्वती नदीमा स्नान गरे र अनेक पूजा सामग्रीद्वारा सर्वव्यापक भगवान् पशुपति अनि जगदम्बिका पार्वतीलाई भक्तिपूर्वक पूजा गरे।

**गावो हिरण्यं वासांसि मधु मध्वन्नमादृताः।**

**ब्राह्मणेभ्यो ददुः सर्वे देवो नः प्रीयतामिति॥ ३॥**

**ऊषुः सरस्वतीतीरे जलं प्राश्य धृतव्रताः।**

**रजनीं तां महाभागा नन्दसुनन्दकादयः॥ ४॥**

**पदार्थ–**
**महाभागाः** = महाभाग्यशाली
**सर्वे** = ती सबै

**नन्दसुनन्दकादयः** = नन्द, सुनन्द आदि गोपहरूले
**नः** = हामीसँग
**देवः** = भगवान् पशुपति
**प्रीयताम्** = प्रसन्न हुनुहोस्
**इति** = यस्तो इच्छाले
**आदृताः** = आदरभावले युक्त भएका उनीहरूले
**ब्राह्मणेभ्यः** = ब्राह्मणहरूलाई
**गावः** = गाईहरू
**हिरण्यं** = सुन
**वासांसि** = कपडाहरू
**मधु** = मह
**मध्वन्नम्** = मिठाइहरू
**ददुः** = दिए (अनि)
**धृतव्रताः** = व्रत धारण गरेका उनीहरू
**जलं** = पानी मात्र
**प्राश्य** = पिएर
**तां** = त्यो
**रजनीं** = रात
**सरस्वतीतीरे** = सरस्वती नदीकै तिरमा
**ऊषुः** = बसे

**वाक्यार्थ–** ती महाभाग्यशाली नन्द, सुनन्द आदि गोपहरूले भगवान् पशुपति हामीसँग प्रसन्न हुनुहोस् भन्ने इच्छाले ब्राह्मणहरूलाई गाई, सुन, कपडा, मह र मिठाइहरू पनि दान गरे। अनि उनीहरू व्रत लिई जल मात्र पिएर त्यो रात त्यहीँ सरस्वती नदीकै तिरमा बसे।

**कश्चिन्महानहिस्तस्मिन् विपिनेऽतिबुभुक्षितः।**
**यदृच्छयागतो नन्दं शयानमुरगोऽग्रसीत्॥ ५॥**

**पदार्थ–**
**तस्मिन्** = त्यही
**विपिने** = वनमा
**कश्चित्** = कुनै
**अतिबुभुक्षितः** = असाध्यै भोकाएको
**महान्** = ठुलो
**अहिः** = अजिङ्गर (थियो)
**यदृच्छया** = संयोगवश
**आगतः** = आइपुगेको
**उरगः** = त्यो अजिङ्गरले
**शयानम्** = सुतिरहेका
**नन्दं** = नन्दलाई
**अग्रसीत्** = समात्यो

**वाक्यार्थ–** त्यही वनमा असाध्यै भोकाएको ठुलो एउटा अजिङ्गर थियो। संयोगले नन्दनजिक आइपुगेको त्यो अजिङ्गरले नन्दलाई समात्यो।

**स चुक्रोशाहिना ग्रस्तः कृष्ण कृष्ण महानयम्।**
**सर्पो मां ग्रसते तात प्रपन्नं परिमोचय॥ ६॥**

**पदार्थ–**
**अहिना** = अजिङ्गरद्वारा
**ग्रस्तः** = समातिएका
**सः** = ती नन्द
**तात** = हे बाबु
**कृष्ण कृष्ण** = हे कृष्ण, हे कृष्ण
**मां** = मलाई
**अयम्** = यो
**महान्** = ठुलो
**सर्पः** = अजिङ्गरले
**ग्रसते** = समात्यो
**प्रपन्नं** = शरणमा आएको मलाई
**परिमोचय** = छुटाऊ (भनी)
**चुक्रोश** = कराए

**वाक्यार्थ–** अजिङ्गरले समातेपछि नन्दले हे बाबु कृष्ण ! मलाई ठुलो अजिङ्गरले समात्यो, शरणमा आएको मलाई यसबाट छुटाऊ भनी कराए।

**तस्य चाक्रन्दितं श्रुत्वा गोपालाः सहसोत्थिताः।**
**ग्रस्तं च दृष्ट्वा विभ्रान्ताः सर्पं विव्यधुरुल्मुकैः॥ ७॥**

**पदार्थ–**
**तस्य** = ती नन्दको
**आक्रन्दितं** = चिच्याहट
**श्रुत्वा च** = सुनेर
**सहसा** = झटपट
**उत्थिताः** = उठेका
**गोपालाः** = गोपहरूले
**ग्रस्तं** = (नन्द अजिङ्गरद्वारा) समातिएको
**दृष्ट्वा च** = देखेर
**विभ्रान्ताः** = हडबडाएका (तिनीहरूले)
**सर्पं** = अजिङ्गरलाई
**उल्मुकैः** = अगुल्टाहरूले
**विव्यधुः** = हिर्काए

**वाक्यार्थ–** नन्दको चिच्याहट सुनेर झटपट उठेका गोपहरू उनलाई अजिङ्गरले समातेको देखेर हडबडाए र उनीहरूले त्यो अजिङ्गरलाई अगुल्टै-अगुल्टाले हिर्काए।

**अलातैर्दह्यमानोऽपि नामुञ्चत् तमुरङ्गमः।**
**तमस्पृशत् पदाभ्येत्य भगवान् सात्वतां पतिः॥ ८॥**
**स वै भगवतः श्रीमत्पादस्पर्शहताशुभः।**
**भेजे सर्पवपुर्हित्वा रूपं विद्याधरार्चितम्॥ ९॥**

**पदार्थ–**
**अलातैः** = अगुल्टोहरूद्वारा
**दह्यमानः अपि** = पोलिरहे तापनि
**उरङ्गमः** = अजिङ्गरले
**तम्** = ती नन्दलाई
**न अमुञ्चत्** = छोडेन
**सात्वतां** = यदुहरूका
**पतिः** = रक्षक
**भगवान्** = भगवान् श्रीकृष्णले
**अभ्येत्य** = आई
**तम्** = त्यो अजिङ्गरलाई
**पदा** = पाउले
**अस्पृशत्** = छुनुभयो
**वै** = निश्चय नै
**भगवतः** = भगवान्को
**श्रीमत्पादस्पर्शहताशुभः** = श्रीयुक्त चरणसँग छोइनाले पाप नष्ट भएको
**सः** = त्यसले
**सर्पवपुः** = अजिङ्गरको शरीरलाई
**हित्वा** = छोडी
**विद्याधरार्चितम्** = विद्याधरहरूद्वारा सेवा गरिएको
**रूपं** = दिव्य रूपलाई
**भेजे** = प्राप्त गर्‍यो

**वाक्यार्थ–** अगुल्टोहरूले पोलिरहेको भए तापनि अजिङ्गरले नन्दलाई छाडेन। त्यही वेला यदुहरूका रक्षक भगवान् श्रीकृष्ण आई त्यसलाई आफ्नो पाउले छोइदिनुभयो। भगवान्को श्रीयुक्त दिव्य चरणको स्पर्श भएपछि सबै पाप नष्ट भएको त्यसले तत्काल नै अजिङ्गरको शरीरलाई छोडी विद्याधरहरूद्वारा सेवा गरिएको दिव्य रूप प्राप्त गर्‍यो।

**तमपृच्छद्धृषीकेशः प्रणतं समवस्थितम्।**
**दीप्यमानेन वपुषा पुरुषं हेममालिनम्॥ १०॥**

**पदार्थ–**
**हृषीकेशः** = हृषीकेश (इन्द्रियहरूका ईश्वर) श्रीकृष्णले
**दीप्यमानेन** = झल्झलाकार
**वपुषा** = शरीरले
**प्रणतं** = निहुरिई
**समवस्थितम्** = आफ्नो अगाडि उपस्थित
**हेममालिनम्** = सुनको हार लगाएको
**तम्** = त्यो
**पुरुषं** = पुरुषलाई
**अपृच्छत्** = सोध्नुभयो

**वाक्यार्थ–** झल्झलाकार शरीर लिई निहुँरिदै आफ्नो अगाडि रहेको त्यो सुनको हार लगाएको पुरुषलाई हृषीकेश भगवान् श्रीकृष्णले सोध्नुभयो।

**को भवान् परया लक्ष्म्या रोचतेऽद्भुतदर्शनः।**
**कथं जुगुप्सितामेतां गतिं वा प्रापितोऽवशः॥ ११॥**

**पदार्थ–**
**अद्भुतदर्शनः** = आश्चर्यमय देखिनुभएका
**भवान्** = तपाईं
**परया** = सर्वश्रेष्ठ
**लक्ष्म्या** = शोभाले सहित
**रोचते** = प्रकाशित हुने
**कः** = को हुनुहुन्छ ?
**कथं वा** = के कारणले
**अवशः** = विवश भई
**एतां** = यो
**जुगुप्सिताम्** = निन्दित
**गतिं** = अवस्थामा
**प्रापितः** = पुऱ्याइनुभयो

**वाक्यार्थ–** सर्वश्रेष्ठ शोभाद्वारा युक्त अनि आश्चर्यमय देखिनुहुने तपाईं को हुनुहुन्छ ? के कारणले विवश भई यो निन्दित योनिमा पुऱ्याइनुभयो ?

**सर्प उवाच** (अजिङ्गर (पुरुष)ले भन्यो)

**अहं विद्याधरः कश्चित् सुदर्शन इति श्रुतः।**
**श्रिया स्वरूपसम्पत्त्या विमानेनाचरं दिशः॥ १२॥**

**पदार्थ–**
**अहं** = म
**सुदर्शनः** = सुदर्शन
**इति** = यो नामले
**श्रुतः** = प्रसिद्ध
**कश्चित्** = कुनै
**विद्याधरः** = विद्याधर हुँ
**श्रिया** = वैभव र
**स्वरूपसम्पत्त्या** = सुन्दर रूपले युक्त भई
**विमानेन** = विमानद्वारा
**दिशः** = दिशा-विदिशाहरूमा
**अचरं** = घुम्थेँ

**वाक्यार्थ–** म सुदर्शन नाम गरेको विद्याधर हुँ। म आफ्नो सुन्दर रूप र वैभवले युक्त भई विमानमा चढी दिशा-विदिशामा घुम्थेँ।

**ऋषीन् विरूपानङ्गिरसः प्राहसं रूपदर्पितः।**
**तैरिमां प्रापितो योनिं प्रलब्धैः स्वेन पाप्मना॥ १३॥**

पदार्थ–
**रूपदर्पितः** = सुन्दर रूपको घमन्डले युक्त भएको मैले
**विरूपान्** = नराम्रा
**अङ्गिरसः** = अङ्गिरागोत्रीय
**ऋषीन्** = ऋषिहरूलाई
**प्राहसं** = गिज्याएँ
**प्रलब्धैः** = रिसाएका
**तैः** = तिनीहरूद्वारा
**स्वेन** = आफ्नै
**पाप्मना** = दुष्कर्मको कारणले
**इमां** = यो
**योनिं** = योनिमा
**प्रापितः** = पुऱ्याइएँ

**वाक्यार्थ–** सुन्दर रूपको घमन्ड भएकाले मैले अङ्गिरागोत्रीय नराम्रा ऋषिहरूलाई गिज्याएँ। यसबाट रिसाएका तिनीहरूद्वारा आफ्नै दुष्कर्मको कारणले म यो योनिमा पुऱ्याइएँ।

**शापो मेऽनुग्रहायैव कृतस्तैः करुणात्मभिः।**
**यदहं लोकगुरुणा पदा स्पृष्टो हताशुभः॥ १४॥**

पदार्थ–
**करुणात्मभिः** = दयालु स्वभाव भएका
**तैः** = ती ऋषिहरूद्वारा
**मे** = मेरो
**अनुग्रहाय एव** = अनुग्रहकै लागि
**शापः** = श्राप
**कृतः** = दिइएको रहेछ
**यत्** = किनभने
**अहं** = म
**लोकगुरुणा** = संसारका गुरु परमात्माद्वारा
**पदा** = पाउद्वारा
**स्पृष्टः** = छोइएर
**हताशुभः** = पाप नष्ट भएको भएँ

**वाक्यार्थ–** करुणापूर्ण स्वभाव भएका ऋषिहरूले मेरो अनुग्रहकै लागि श्राप दिएका रहेछन्। किनभने संसारका गुरु भगवान्को पाउद्वारा छोइएर म पापबाट मुक्त भएको छु।

**तं त्वाहं भवभीतानां प्रपन्नानां भयापहम्।**
**आपृच्छे शापनिर्मुक्तः पादस्पर्शादमीवहन्॥ १५॥**

पदार्थ–
**अमीवहन्** = हे पापनाशक प्रभु
**पादस्पर्शात्** = चरणस्पर्श भएकाले
**शापनिर्मुक्तः** = श्रापबाट छुटेको
**अहं** = म
**भवभीतानां** = संसारबाट डराएका
**प्रपन्नानां** = शरणमा आएका भक्तहरूको
**भयापहम्** = भय नाश गरिदिनुहुने
**तं** = त्यस्ता
**त्वा** = हजुरसँग
**आपृच्छे** = जान अनुमति माग्छु

**वाक्यार्थ–** हे पापनाशक प्रभु ! हजुरको चरणस्पर्श भएकाले श्रापबाट छुटेको म संसारबाट डराई शरणमा आउने भक्तहरूको सबै भयलाई नष्ट गरिदिनुहुने हजुरसँग बिदा माग्छु।

**प्रपन्नोऽस्मि महायोगिन् महापुरुष सत्पते।**
**अनुजानीहि मां देव सर्वलोकेश्वरेश्वर॥ १६॥**

| पदार्थ– | | |
|---|---|---|
| **महायोगिन्** = हे महायोगी | **प्रपन्नः** = शरणमा | **देव** = हे परमात्मा |
| **महापुरुष** = हे महापुरुष | **अस्मि** = छु | **मां** = मलाई |
| **सत्पते** = हे सज्जनका मालिक | **सर्वलोकेश्वरेश्वर** = सबै लोकपालहरूका पनि स्वामी | **अनुजानीहि** = अनुमति दिनुहोस् |

**वाक्यार्थ–** हे महायोगी ! हे महापुरुष ! हे सज्जनका मालिक प्रभु ! म हजुरको शरणमा आएको छु। हे सबै लोकपालहरूका पनि स्वामी परमात्मा ! अब मलाई जाने अनुमति दिनुहोस्।

**ब्रह्मदण्डाद् विमुक्तोऽहं सद्यस्तेऽच्युत दर्शनात्।**

**यन्नाम गृह्णन्नखिलान् श्रोतॄनात्मानमेव च।**

**सद्यः पुनाति किं भूयस्तस्य स्पृष्टः पदा हि ते॥ १७॥**

| पदार्थ– | | |
|---|---|---|
| **अच्युत** = हे अच्युत भगवान् | **यन्नाम** = जसको नामलाई | **तस्य** = त्यस्ता |
| **अहं** = म | **गृह्णन्** = लिँदै | **ते** = हजुरको |
| **ते** = हजुरको | **अखिलान्** = सबै | **पदा** = पाउले |
| **दर्शनात्** = दर्शनबाट | **श्रोतॄन्** = श्रोताहरू र | **स्पृष्टः** = छोइएको (म मुक्त हुनु) |
| **सद्यः** = तत्काल नै | **आत्मानम् च** = आफूलाई समेत | **किं भूयः** = के नै ठुलो कुरा भयो र |
| **ब्रह्मदण्डात्** = ब्रह्मदण्डबाट पनि | **सद्यः** = तत्काल नै | |
| **विमुक्तः** = छुटेँ | **पुनाति** = पवित्र पार्छ भने | |
| | **हि** = निश्चय नै | |

**वाक्यार्थ–** हे भगवान् ! हजुरको दर्शन पाउनाले म तत्काल ब्रह्मदण्डबाट मुक्त भएँ। हुन त जसको नाम मात्र लिँदा पनि त्यो व्यक्तिले आफूलाई र सबै श्रोताहरूलाई पवित्र पार्दछ भने त्यस्ता परमात्माका साक्षात् पाउद्वारा छोइएको मेरो मुक्ति हुनु कुन ठुलो कुरा भयो र ?

**इत्यनुज्ञाप्य दाशार्हं परिक्रम्याभिवन्द्य च।**

**सुदर्शनो दिवं यातः कृच्छ्रान्नन्दश्च मोचितः॥ १८॥**

| पदार्थ– | | |
|---|---|---|
| **इति** = यसप्रकार | **अभिवन्द्य च** = अभिवादनसमेत गरी | **नन्दः च** = नन्द पनि |
| **दाशार्हं** = यदुवंशी श्रीकृष्णलाई | **सुदर्शनः** = सुदर्शन | **कृच्छ्रात्** = भयङ्कर सङ्कटबाट |
| **अनुज्ञाप्य** = बिन्ती गरी | **दिवं** = आकाशमा | **मोचितः** = मुक्त गराइए |
| **परिक्रम्य** = परिक्रमा गरी | **यातः** = गए | |

**वाक्यार्थ–** यसरी भगवान् श्रीकृष्णलाई बिन्ती गरेर उहाँको परिक्रमा र अभिवादनसमेत गरेर ती सुदर्शन आकाशतिर गए र नन्द पनि त्यो भयङ्कर सङ्कटबाट मुक्त भए।

**निशाम्य कृष्णस्य तदात्मवैभवं व्रजौकसो विस्मितचेतसस्ततः ।**
**समाप्य तस्मिन् नियमं पुनर्व्रजं नृपाययुस्तत् कथयन्त आदृताः ॥ १९ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**कृष्णस्य** = श्रीकृष्णको
**तत्** = त्यो
**आत्मवैभवं** = आत्मविभूतिलाई
**निशाम्य** = देखेर
**विस्मितचेतसः** = आश्चर्यचकित भएका
**व्रजौकसः** = व्रजवासीहरू
**तस्मिन्** = त्यो ठाउँमा लिएको
**नियमं** = व्रतलाई
**समाप्य** = पूरा गरी
**ततः** = त्यहाँबाट
**आदृताः** = आदरपूर्वक
**तत्** = त्यही कुरा
**कथयन्तः** = भन्दै
**पुनः** = फेरि
**व्रजं** = व्रजमै
**आययुः** = फर्किए

**वाक्यार्थ–** हे परीक्षित् ! यसरी श्रीकृष्णको त्यो आत्मविभूतिलाई देखेर सम्पूर्ण व्रजवासीहरू आश्चर्यचकित भए। उनीहरू त्यस ठाउँबाट सबै व्रत-नियमलाई पूरा गरी त्यही घटनाको विषयमा कुरा गर्दै फेरि व्रजमैं फर्किए।

**कदाचिदथ गोविन्दो रामश्चाद्भुतविक्रमः ।**
**विजह्रतुर्वने रात्र्यां मध्यगौ व्रजयोषिताम् ॥ २० ॥**

**पदार्थ–**
**अथ** = यसै गरी
**कदाचित्** = कुनै दिन
**गोविन्दः** = गोविन्द (श्रीकृष्ण) र
**अद्भुतविक्रमः** = अद्भुत पराक्रमी
**रामः च** = बलराम समेत
**रात्र्यां** = राति
**व्रजयोषिताम्** = व्रजयुवतीहरूका
**मध्यगौ** = बीचमा रही घुम्दै
**वने** = वनमा
**विजह्रतुः** = विहार गर्न लाग्नुभयो

**वाक्यार्थ–** त्यस्तै कुनै दिन श्रीकृष्ण र अद्भुत पराक्रमी बलराम व्रजयुवतीहरूलाई साथ लिई उनीहरूको बीचमा रहेर राति वनमा विहार गर्न लाग्नुभयो।

**उपगीयमानौ ललितं स्त्रीजनैर्बद्धसौहृदैः ।**
**स्वलङ्कृतानुलिप्ताङ्गौ स्रग्विणौ विरजोऽम्बरौ ॥ २१ ॥**
**निशामुखं मानयन्तावुदितोडुपतारकम् ।**
**मल्लिकागन्धमत्तालिजुष्टं कुमुदवायुना ॥ २२ ॥**
**जगतुः सर्वभूतानां मनःश्रवणमङ्गलम् ।**
**तौ कल्पयन्तौ युगपत् स्वरमण्डलमूर्च्छितम् ॥ २३ ॥**

**पदार्थ–**
**कुमुदवायुना** = रात्रिकमलको बास्ना छर्ने वायुद्वारा र
**मल्लिकागन्धमत्तालिजुष्टं** = बेली फूलको सुगन्धले मात्तिएका भँवराहरूले युक्त
**उदितोडुपतारकम्** = चन्द्रमा र ताराहरू सबै उदाइसकेको
**निशामुखं** = साँझको समयलाई
**मानयन्तौ** = सम्मानित गर्दै
**युगपत्** = एकै पटक
**स्वरमण्डलमूर्च्छितम्** = स्वरसमूहको मूर्च्छनालाई
**कल्पयन्तौ** = अलापिरहेका
**बद्धसौहृदैः** = प्रेमले युक्त
**स्त्रीजनैः** = गोपिनीहरूद्वारा
**ललितं** = मधुरतासँग
**उपगीयमानौ** = गुण गाइएका
**स्वलङ्कृतानुलिप्ताङ्गौ** = सुन्दर अलङ्कार र चन्दनलेप आदि लगाएका
**स्रग्विणौ** = वनमाला धारण गरेका
**विरजोऽम्बरौ** = स्वच्छ पीताम्बर र नीलाम्बर लगाएका
**तौ** = ती दुईले
**सर्वभूतानां** = सबै प्राणीहरूको
**मनःश्रवणमङ्गलम्** = मन र कानलाई आनन्द दिने गीत
**जगतुः** = गाउनुभयो

**वाक्यार्थ–** साँझपख रात्रिकमलको बास्ना छर्दै वायु बहिरहेको थियो र बेली फूलको सुगन्धले मात्तिएका भँवराहरू उडिरहेका थिए, चन्द्रमा र ताराहरू पनि सबै उदाइसकेका थिए। त्यो साँझको समयको सम्मान गर्दै श्रीकृष्ण र बलरामले स्वरको आरोह-अवरोहसहित मूर्च्छना राग अलाप्न लाग्नुभयो। प्रेमभावले युक्त गोपिनीहरूले पनि उहाँहरूकै गुण गाइरहेका थिए। श्रीकृष्ण र बलराम दुबैले सुन्दर अलङ्कार, चन्दनलेप, वनमाला निर्मल पीताम्बर र नीलाम्बर पनि लगाउनुभएको थियो। उहाँहरूले सबै प्राणीहरूको कानलाई र मनलाई पनि आनन्दित गर्ने गीत गाउनुभयो।

**गोप्यस्तद्गीतमाकर्ण्य मूर्च्छिता नाविदन् नृप।**
**स्रंसद्दुकूलमात्मानं स्रस्तकेशस्रजं ततः॥ २४॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**ततः** = त्यसपछि
**तद्गीतम्** = उहाँहरू (श्रीकृष्ण र बलराम)ले गाएको गीत
**आकर्ण्य** = सुनेर
**मूर्च्छिताः** = लठ्ठ परेका
**गोप्यः** = गोपिनीहरूले
**स्रंसद्दुकूलम्** = दोपट्टा लत्रिएको र
**स्रस्तकेशस्रजं** = चुल्ठो फुस्किनाले त्यहाँबाट फूल खसिरहेको
**आत्मानं** = आफ्नै शरीरलाई समेत
**न अविदन्** = थाहा पाएनन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! श्रीकृष्ण र बलरामले गाएको गीत सुनेर लठ्ठ परेका गोपिनीहरूलाई आफ्नो शरीरबाट दोपट्टा लत्रिरहेको र चुल्ठो फुस्किनाले त्यहाँबाट फूल खसिरहेको अनि आफ्नै शरीरको समेत ख्याल भएन।

**एवं विक्रीडतोः स्वैरं गायतोः सम्प्रमत्तवत्।**
**शङ्खचूड इति ख्यातो धनदानुचरोऽभ्यगात्॥ २५॥**

**पदार्थ–**
**एवं** = यसप्रकार (उहाँहरू दुईजना)

**स्वैरं** = स्वच्छन्द
**विक्रीडतोः** = खेलिरहेका र
**सम्प्रमत्तवत्** = उन्मत्त झैं भई
**गायतोः** = गाइरहेकै वेलामा
**शङ्खचूडः इति** = शङ्खचूड नामले
**ख्यातः** = प्रख्यात
**धनदानुचरः** = कुबेरको अनुचर
**अभ्यगात्** = आइपुग्यो

**वाक्यार्थ–** यसप्रकार उहाँहरू दुईजना स्वतन्त्र रूपमा खेल्दै र उन्मत्त झैं भई गाइरहँदा कुबेरको शङ्खचूड नाम गरेको अनुचर त्यहाँ आइपुग्यो।

**तयोर्निरीक्षतो राजंस्तन्नाथं प्रमदाजनम्।**

**क्रोशन्तं कालयामास दिश्युदीच्यामशङ्कितः॥ २६॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**अशङ्कितः** = शङ्कारहित (निर्भीक) त्यो शङ्खचूड
**निरीक्षतोः** = हेरिरहेका
**तयोः** = उहाँहरू दुई जनाकै अघि
**क्रोशन्तं** = कराइरहेका (रोइरहेका)
**तन्नाथं** = श्रीकृष्ण, बलराम नै रक्षक भएका
**प्रमदाजनम्** = व्रजयुवतीहरूलाई
**उदीच्याम्** = उत्तर
**दिशि** = दिशातर्फ
**कालयामास** = लैजान थाल्यो

**वाक्यार्थ–** हे परीक्षित्! निर्भीक त्यस शङ्खचूडले श्रीकृष्ण र बलरामलाई आफ्ना रक्षक मान्ने रोइरहेका व्रजयुवतीहरूलाई उहाँहरू दुई जनाले हेर्दाहेर्दै नै उत्तर दिशातर्फ लैजान थाल्यो।

**क्रोशन्तं कृष्ण रामेति विलोक्य स्वपरिग्रहम्।**

**यथा गा दस्युना ग्रस्ता भ्रातरावन्वधावताम्॥ २७॥**

पदार्थ–
**यथा** = जसरी
**दस्युना** = डाँकूद्वारा
**ग्रस्ताः** = लुटिएका
**गाः** = गाईहरू (कराउँछन् त्यसै गरी)
**कृष्ण** = हे श्रीकृष्ण
**राम** = हे राम
**इति** = यसो भन्दै
**क्रोशन्तं** = चिच्याइरहेका
**स्वपरिग्रहम्** = प्रियाका रूपमा स्विकारिएका गोपिनीहरूलाई
**विलोक्य** = देखेर
**भ्रातरौ** = दाजुभाइ श्रीकृष्ण र बलराम
**अन्वधावताम्** = पछि-पछि दौडनुभयो

**वाक्यार्थ–** जसरी डाँकाद्वारा लुटिएका गाईहरू कराउँछन् त्यसै गरी श्रीकृष्ण र बलरामका प्रिया गोपिनीहरू पनि हे कृष्ण! हे बलराम! भन्दै चिच्यारहेका थिए। यो देखी ती दुबै दाजुभाइ झटपट त्यो शङ्खचूडको पछि-पछि दौडनुभयो।

**मा भैष्टेत्यभयारावौ शालहस्तौ तरस्विनौ।**

**आसेदतुस्तं तरसा त्वरितं गुह्यकाधमम्॥ २८॥**

पदार्थ–
**मा भैष्ट** = नडराओ
**इति** = यस्तो

**अभयारावौ** = अभयवचन दिँदै
**शालहस्तौ** = शालको रुखलाई हातमा लिई
**तरस्विनौ** = वेगिला उहाँहरू दुबैले
**तरसा** = वेगपूर्वक दौडी
**त्वरितं** = छिट्टै नै
**तं** = त्यो
**गुह्यकाधमम्** = अधम यक्ष शङ्खचूडलाई
**आसेदतुः** = भेट्टाउनुयो

**वाक्यार्थ–** वेगवान् श्रीकृष्ण र बलराम दुबै नडराओ भन्ने अभयवचन दिँदै शालको रुखलाई हातमा लिई वेगपूर्वक दौडनुभयो र छिट्टै नै त्यो अधम यक्षलाई भेट्टाउनुभयो।

**स वीक्ष्य तावनुप्राप्तौ कालमृत्यू इवोद्विजन्।**
**विसृज्य स्त्रीजनं मूढः प्राद्रवज्जीवितेच्छया ॥ २९ ॥**

**पदार्थ–**
**मूढः** = मूर्ख
**सः** = त्यो शङ्खचूडले
**कालमृत्यू इव** = काल र मृत्यु झैँ (एकै पटक)
**अनुप्राप्तौ** = आइपुगेका
**तौ** = ती श्रीकृष्ण र बलरामलाई
**वीक्ष्य** = देखेर
**उद्विजन्** = चिन्तित हुँदै
**स्त्रीजनं** = गोपिनीहरूलाई
**विसृज्य** = छाडी
**जीवितेच्छया** = बाँच्ने इच्छाले
**प्राद्रवत्** = दौड्यो

**वाक्यार्थ–** त्यो मूर्ख शङ्खचूडले काल र मृत्यु आए झैँ श्रीकृष्ण र बलरामलाई एकै पटक आएको देख्यो। यसबाट चिन्तित हुँदै ती सबै गोपिनीहरूलाई छाडी बाँच्ने इच्छाले ऊ भाग्यो।

**तमन्वधावद् गोविन्दो यत्र यत्र स धावति।**
**जिहीर्षुस्तच्छिरोरत्नं तस्थौ रक्षन् स्त्रियो बलः ॥ ३० ॥**

**पदार्थ–**
**सः** = त्यो
**यत्र यत्र** = जहाँ-जहाँ
**धावति** = दौडिन्छ (त्यहाँ-त्यहाँ)
**तच्छिरोरत्नं** = त्यसको शिरको मणिलाई
**जिहीर्षुः** = हरण गर्न खोज्ने
**गोविन्दः** = गोविन्द (श्रीकृष्ण)ले
**तम्** = त्यसलाई
**अन्वधावात्** = लखेट्नुभयो
**बलः** = बलराम
**स्त्रियः** = गोपिनीहरूलाई
**रक्षन्** = रक्षा गर्दै
**तस्थौ** = बस्नुभयो

**वाक्यार्थ–** शिरको मणि हर्ने इच्छाले भगवान् श्रीकृष्ण त्यो दुष्ट जता-जता भाग्छ त्यतै-त्यतै त्यसलाई पछ्याउँदै जानुभयो। बलराम चाहिँ गोपिनीहरूको रक्षा गर्दै त्यहीँ बसिरहनुभयो।

**अविदूर इवाभ्येत्य शिरस्तस्य दुरात्मनः।**
**जहार मुष्टिनैवाङ्ग सहचूडामणिं विभुः ॥ ३१ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**विभुः** = सर्वव्यापक परमात्माले
**अविदूरे इव** = नजिकै नै
**अभ्येत्य** = गएर
**दुरात्मनः** = दुष्टात्मा

**तस्य** = त्यसको
**सहचूडामणिं** = चूडामणि सहितको
**शिरः** = शिरलाई
**मुष्टिना एव** = एकै मुक्कामा
**जहार** = खसाइदिनुभयो (हरण गर्नुभयो)

**वाक्यार्थ–** हे परीक्षित् ! सर्वव्यापक परमात्माले नजिकै गएर त्यो दुरात्माको चूडामणि सहित शिरलाई एकै मुक्कामा खसाइदिनुभयो।

**शङ्खचूडं निहत्यैवं मणिमादाय भास्वरम्।**
**अग्रजायाददात् प्रीत्या पश्यन्तीनां च योषिताम्॥ ३२॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**शङ्खचूडं** = शङ्खचूडलाई
**निहत्य** = मारेर
**भास्वरम्** = चम्किलो
**मणिम्** = मणिलाई
**आदाय** = लिएर
**पश्यन्तीनां** = हेरिरहेका
**योषिताम् च** = गोपिनीहरूको अघि
**प्रीत्या** = प्रीतिपूर्वक
**अग्रजाय** = दाजु बलरामलाई
**अददात्** = दिनुभयो

**वाक्यार्थ–** यसप्रकार शङ्खचूडलाई मारेर चम्किलो मणि ल्याई श्रीकृष्णले गोपिनीहरूले हेर्दाहेर्दै नै त्यो मणि प्रीतिपूर्वक आफ्ना दाजु बलरामलाई दिनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**शङ्खचूडवधो नाम चतुस्त्रिंशोऽध्यायः॥ ३४॥**

# अथ पञ्चत्रिंशोऽध्यायः

## युगलगीत

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**गोप्यः कृष्णे वनं याते तमनुद्रुतचेतसः।**

**कृष्णलीलाः प्रगायन्त्यो निन्युर्दुःखेन वासरान्॥ १॥**

पदार्थ–
**कृष्णे** = श्रीकृष्ण
**वनं** = वनमा
**याते** = जानुभएपछि
**तम्** = उहाँलाई नै
**अनुद्रुतचेतसः** = पछ्याइरहने चित्त भएका
**गोप्यः** = गोपिनीहरूले
**कृष्णलीलाः** = श्रीकृष्णका लीलाहरूलाई
**प्रगायन्त्यः** = गाउँदै
**दुःखेन** = दुःखपूर्वक
**वासरान्** = दिनहरू
**निन्युः** = बिताउँथे

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण वनमा जानुभएपछि उहाँलाई नै पछ्याउने चित्त भएका गोपिनीहरू श्रीकृष्णका लीलाहरू गाउँदै दुःखपूर्वक दिनहरू बिताउँथे।

**विवरण–** यस अध्यायमा भगवान् श्रीकृष्ण वनमा गाई चराउन गइसकेपछि गोपिनीहरूले कसरी समय बिताउँथे भनी बताइएको छ। भगवान्ले रातमा गोपिनीहरूसँग गर्नुभएको क्रीडा अनि भगवत्संयोगबाट तिनीहरूलाई भएको अपरिमित आनन्दको विषय अघिल्ला अध्यायहरूमा बताइयो। महारासको आस्वादनपछि गोपिनीहरूको प्रेम सकियो अथवा झन् बढेर आयो, यो कुरा यस अध्यायमा बताइएको छ। यहाँ गोपिनीहरूको प्रेम कुनै पनि अवसरमा कमी नभएको कुरा स्पष्ट पारिएको छ। यसको रहस्य बताउँदै आचार्यहरूले भनेका छन्– प्रेम दुई प्रकारको हुन्छ, एउटा संयोग र अर्को वियोग। प्रियको संयोग हुँदा पनि प्रेमको अनुभव गरिन्छ अनि प्रियविरह हुँदा पनि उनीप्रति कति प्रेम गरिएको छ, त्यसको अनुभव गरिन्छ। प्रेममा प्रियतमसँग संयोग हुनु शीतल एवं आह्लादकारक छ भने वियोग हुनु सन्तापकारक। यसलाई सूर्यको तापयुक्त प्रकाश र चन्द्रको शीतल प्रकाशसँग तुलना गर्न सकिन्छ। रातको शीतल वातावरणमा गोपिनीहरूले प्रियमिलन भएको शीतलक्षण बिताउँथे भने दिनको समयमा प्रियविरह भएको तापयुक्त समय बिताउँथे। यसरी प्रेमरूप श्रीकृष्णले ती गोपिनीहरूलाई रात र दिनमा क्रमशः संयोग र वियोगका अनुभव गराउँदै तिनीहरूको प्रेमलाई पुष्ट गर्नुभयो। महारासको रातमा प्रियमिलनको इच्छा पूर्ण भइसकेपछि गोपिनीहरूको मन फेरि संसारतिर फर्किएन। दिनको वियोगको समयमा पनि श्रीकृष्णको गुणवर्णनको माध्यमले उनीहरू श्रीकृष्णकै विषयमा विचार गर्न प्रवृत्त भए, संसारतिर होइन भन्ने कुरा यो अध्यायमा दिउँसो उनीहरूले कृष्णकथा गरेको प्रसङ्गबाट स्पष्ट हुन्छ।

यस प्रसङ्गमा गोपिनीहरूले श्रीकृष्णले वनमा बाँसुरी बजाउँदा जडचेतनमय प्रकृतिमा त्यसको कस्तो प्रभाव पर्‍यो भनी बताएका छन्। उनीहरू गाउँमा भए पनि श्रीकृष्णले बाँसुरी

बजाउनुभएको लीला उनीहरूको हृदयभित्र स्पष्टतः प्रतिबिम्बित भएको देखिन्छ। हरेक गोपिनीहरूले श्रीकृष्णका अनेक स्वरूपहरूको अनुभव गरिरहका थिए। आ-आफ्नो अनुभव अनुसार तिनले श्रीकृष्णको छुट्टाछुट्टै वर्णन गरेको बताइएको छ। यहाँ हरेक गोपिनीले दुई श्लोकहरूमा आफ्नो मनोभाव बताएका छन्। पहिलो श्लोकमा श्रीकृष्णको स्वरूप अनि उहाँले बाँसुरी बजाउनुभएको प्रकार बताइएको छ भने दोस्रो श्लोकमा चाहिँ त्यसबाट प्रकृतिमा कस्तो प्रभाव पर्‍यो भनी बताइएको छ। यसरी २ देखि २५ सम्मका २४ ओटा श्लोकहरूमा प्रत्येक दुईओटा श्लोकमा एउटा विषयको प्रतिपादन गरी १२ जोडी लीलास्वरूपको वर्णन गरिएको छ। अध्यायका सुरु अनि अन्तिमका दुई अनुष्टुप् छन्दका श्लोक चाहिँ उनीहरूको अनुभवको अनुवाद गर्दै श्रीशुकदेवले बताउनुभएको हो। १२ जोडी श्लोकमा श्रीकृष्णचरित्र बताउनुको तात्पर्य गोपिनीहरू बाह्रै महिना (निरन्तर) कृष्णाचिन्तन गरिरहन्थे भन्ने सूचना पनि हो। यसलाई युगलगीत भनिन्छ। यसमा युगल अर्थात् १ जोडी श्लोकहरूबाट मात्र एउटा घटनाको वर्णन गरिएको छ। यसको रहस्य एउटै मात्र हुँदा प्रेमको आस्वादन गर्न सकिँदैन, प्रेमरसको आस्वादन गर्न प्रेमी र आफू यो भेद अनिवार्य रूपमा चाहिन्छ भन्ने हो। आफू र आफ्ना प्रेमी यी दुई एक भई मिल्दा नै प्रेमको आस्वादन हुन्छ। रासलीलाको प्रसङ्गमा यो कुरा स्पष्ट अनुभव गरिसकेका गोपिनीहरूले यही प्रेमरसको आस्वादनका लागि नै युगल अर्थात् २-२ श्लोकको प्रयोग गरेका हुन्। गीत गाई आफ्नो प्रेम अभिव्यक्त गर्नुको आवश्यकता के हो भने हृदयभित्र भगवान् रहिरहनुभयो भने उहाँ निर्द्वन्द्व, निःस्पन्द साक्षी रूपमा रहनुहुन्छ। चलमलाउँदो प्रेमरसको आस्वादनका लागि प्रियतम परमात्मा हृदयभित्रै रहिरहेर मात्र पुग्दैन, केवल संयोग मात्र भइरह्यो अथवा अत्यन्त निकट भइरहियो भने पनि प्रेमीको महत्त्व कम हुन्छ अनि प्रेमको रस पनि। यसै कारणले प्रेमलाई निरन्तर बढाइरहनका लागि निरन्तर प्रियतमसँग वियोग र संयोग भइरहनुपर्दछ। हरेक वियोगपछिको संयोगमा प्रियमिलनको आनन्द प्रगाढ बन्दै जान्छ भने हरेक संयोगपछिको वियोगमा प्रेमीका लागि आफू पूरै समर्पित हुने भाव जाग्दछ।

यसरी संयोग र वियोगद्वारा नै प्रेम परिपुष्ट हुन्छ। यहाँ पनि गीत गाउने निहुँले गोपिनीहरूले हृदयभित्र भएका भावरूप श्रीकृष्णलाई मुखबाट बाहिर निकालेका छन् अनि आफूले नै गाएको गीतरूप श्रीकृष्णलाई कानको माध्यमले हृदयभित्र फेरि प्रतिष्ठित गरिरहेका छन्। यसरी गोपिनीहरूको हरेक श्वास-प्रश्वासमा श्रीकृष्ण नै भित्र-बाहिर गरी लीला गर्नुहुन्छ भनी यहाँ बताउन खोजिएको छ। यो अर्थ गर्दा यसको भित्री तात्पर्य के निस्कन्छ भने गोपिनीहरूले श्रीकृष्णका लागि जुन गीत गाउँथे, त्यो केवल उनीहरूको अनुभवलाई बताउने शब्द मात्र हुँदैनथ्यो, त्यो शब्दको रूपमा त भित्रबाट स्वयं श्रीकृष्ण नै पग्लिई बाहिर निस्कनुहुन्थ्यो अनि फेरि कानको मार्गबाट छिरी हृदयभित्र प्रतिष्ठित हुनुहुन्थ्यो। गोपिनीहरूले गाएको गीत र कृष्ण भिन्न वस्तु होइनन्, अपि तु एकै हुन्। अनुभूतिको रूपमा हृदयभित्र रहेका श्रीकृष्ण विरहको कारणले पग्लिई शब्दरूपमा बाहिर निस्कनु नै गोपिनीहरूको विरहगीत हो। श्रीहरिसूरि लेख्नुहुन्छ— 'यसरी शब्दको रूपमा बाहिर निस्की फेरि कानको माध्यमले हृदयभित्र प्रतिष्ठित भएपछि नै भगवान् त्यहाँ सुस्थिर रूपले रहनुभएको थाहा हुन्छ।' यसरी भक्तहरूको हृदयभित्र मात्र नरही श्रीकृष्ण

सम्पूर्ण इन्द्रियले आस्वादन गर्न मिल्ने गरी अनन्त रूपमा अभिव्यक्त हुनुहुन्छ। अनन्त रूपमा अभिव्यक्त हुनुभएका श्रीकृष्णलाई ती-ती इन्द्रियको माध्यमले अनुभव गरी भक्तका इन्द्रियहरू तृप्त हुन्छन् या भक्तका इन्द्रियहरूमा रहेको कृष्णमिलनको आतुरतालाई अनुभव गरी श्रीकृष्ण तृप्त रहनुहुन्छ, यो अनन्त रहस्यको विषय हो। जे होस्, भक्तले सम्पूर्ण इन्द्रियद्वारा भगवान्को अनि भगवान्ले अनन्त विषयका रूपले भक्तका इन्द्रियहरूको आस्वादन गरेबाट प्रेमको उज्ज्वल महिमा प्रकाशित हुन्छ।

तलका प्रत्येक जोडी श्लोकको अन्त्यमा यस्ता श्रीकृष्णसँगको विरह हामी कसरी सहौँ भन्ने गोपिनीहरूको भाव रहेको छ।

**गोप्य ऊचुः** (गोपिनीहरूले भने)

**वामबाहुकृतवामकपोलो वल्गितभ्रुरधरार्पितवेणुम्।**
**कोमलाङ्गुलिभिराश्रितमार्गं गोप्य ईरयति यत्र मुकुन्दः॥ २॥**
**व्योमयानवनिताः सह सिद्धैर्विस्मितास्तदुपधार्य सलज्जाः।**
**काममार्गणसमर्पितचित्ताः कश्मलं ययुरपस्मृतनीव्यः॥ ३॥**

**पदार्थ–**
**गोप्यः** = हे गोपिनीहरू
**यत्र** = जुन वनमा
**वामबाहुकृतवामकपोलः** = देब्रे गालालाई देब्रे काँधतिर झुकाई
**वल्गितभ्रुः** = आँखीभौँ घुमाइरहेका
**मुकुन्दः** = श्रीकृष्णले
**कोमलाङ्गुलिभिः** = आफ्ना कोमल औँलाहरूले
**अधरार्पितवेणुम्** = ओठमा राखिएको बाँसुरीलाई
**आश्रितमार्गं** = प्वालहरूमा औँला चलाउँदै
**ईरयति** = बजाउनुहुन्छ
**तत्** = त्यो मधुर ध्वनि
**उपधार्य** = सुनेर
**विस्मिताः** = चकित भएका
**काममार्गणसमर्पितचित्ताः** = कामबाण प्रहार गर्नेवाला (श्रीकृष्ण)को खोजीमा चित्त लगाएका
**सलज्जाः** = लजाइरहेका
**अपस्मृतनीव्यः** = कम्मरमा बाँधिएको वस्त्रको ग्रन्थि खुकुलिएको पनि पत्तो नपाएका
**सिद्धैः सह** = सिद्धहरूसँग रहने
**व्योमयानवनिताः** = आकाशमा विमानमा रहेका देवाङ्गनाहरू
**कश्मलं** = मोहमा
**ययुः** = पुगे

**वाक्यार्थ–** हे गोपिनीहरू ! वनमा जानुभएका श्रीकृष्णले आफ्नो देब्रे गालालाई देब्रे काँधतिर झुकाई आँखीभौँ नचाउँदै बाँसुरीलाई ओठमा लगाएर त्यसका प्वालहरूमा आफ्ना कोमल औँलाहरू चलाउँदै जब मधुर ध्वनिमा बाँसुरी बजाउनुभयो त्यसलाई सुनेर आकाशमा विमानमा रहेका देवाङ्गनाहरू चकित भए र कामबाण प्रहार गर्ने (श्रीकृष्ण)को खोजीमा उनीहरूको चित्त समर्पित भयो। आफ्ना पतिहरूका साथमा रहेका हुनाले उनीहरू लजाए र कम्मरमा बाँधिएको वस्त्रको ग्रन्थि खुकुलिएको पनि पत्तो नपाएका तिनीहरू मोहित भए।

**हन्त चित्रमबलाः शृणुतेदं हारहास उरसि स्थिरविद्युत्।**
**नन्दसूनुरयमार्तजनानां नर्मदो यर्हि कूजितवेणुः ॥ ४ ॥**
**वृन्दशो व्रजवृषा मृगगावो वेणुवाद्यहृतचेतस आरात्।**
**दन्तदष्टकवला धृतकर्णा निद्रिता लिखितचित्रमिवासन्॥ ५ ॥**

पदार्थ–
**हन्त** = खुसीको कुरो
**अबलाः** = हे गोपिनीहरू
**इदं** = यो
**चित्रम्** = आश्चर्यलाई
**शृणुत** = सुन
**उरसि** = वक्षःस्थलमा
**स्थिरविद्युत्** = स्थिर बिजुली झैँ (श्रीवत्सको शोभा भएका)
**हारहासः** = हाँस्दा हारहरू पनि हाँसेको देखिने
**अयं** = यी
**आर्तजनानां** = दुःखी व्यक्तिहरूका
**नर्मदः** = कल्याणकर्ता
**नन्दसूनुः** = नन्दपुत्र श्रीकृष्ण
**यर्हि** = जुन वेला
**कूजितवेणुः** = बाँसुरी बजाउनुहुन्छ (त्यस वेला)
**वेणुवाद्यहृतचेतसः** = बाँसुरी बजाएको सुनेर चित्त हरिएका
**आरात्** = नजिकै आई
**धृतकर्णाः** = कान ठाडो पारिरहेका
**दन्तदष्टकवलाः** = दाँतले घाँसको बुजो च्यापिरहेका
**निद्रिताः** = निदाएका (जस्ता)
**वृन्दशः** = झुन्डका झुन्ड
**व्रजवृषाः** = व्रजमण्डलका गोरु
**मृगगावः** = मृग र गाईहरू
**लिखितचित्रम् इव** = लेखिएको चित्र झैँ
**आसन्** = भए

**वाक्यार्थ–** हे गोपिनीहरू ! यो आश्चर्यको कुरा सुन। श्रीकृष्णको वक्षःस्थलमा चम्किलो स्थिर बिजुली जस्तो श्रीवत्सको शोभा छ। उहाँले हाँस्दा लगाइएका हारहरू पनि हाँसे झैँ उज्यालिन्छन्। दुःखीहरूको कल्याण गर्ने यस्ता नन्दपुत्रले जब बाँसुरी बजाउनुभयो, तब त्यसको ध्वनिद्वारा चित्त हरिएका व्रजका गोरुहरू, गाई र मृगहरू झुन्डका झुन्ड त्यो ध्वनि सुनेर श्रीकृष्णको नजिक आए र कान ठाडो पारी घाँसको बुजोलाई दाँतले च्यापेको च्याप्यै भएर निदाए जस्तो हुँदा ती पशुहरू चित्रमा लेखिएका जस्ता भए।

**बर्हिणस्तबकधातुपलाशैर्बद्धमल्लपरिबर्हविडम्बः।**
**कर्हिचित् सबल आलि स गोपैर्गाः समाह्वयति यत्र मुकुन्दः ॥ ६ ॥**
**तर्हि भग्नगतयः सरितो वै तत्पदाम्बुजरजोऽनिलनीतम्।**
**स्पृहयतीर्वयमिवाबहुपुण्याः प्रेमवेपितभुजाः स्तिमितापः ॥ ७ ॥**

पदार्थ–
**आलि** = हे सखी
**यत्र** = जुन वनमा
**कर्हिचित्** = कुनै वेला
**बर्हिणस्तबकधातुपलाशैः** = मयूरको प्वाँख, फूलका गुच्छा, गेरु आदि धातु र अनेक पालुवाहरूद्वारा
**बद्धमल्लपरिबर्हविडम्बः** = मल्ल युद्ध गर्नेले झैँ शृङ्गार गरेका
**सबलः** = बलरामले सहित
**गोपैः** = गोपहरूद्वारा घेरिएका

**सः** = उहाँ
**मुकुन्दः** = मुकुन्दले (जुन वेला)
**गाः** = गाईहरूलाई
**समाह्वयति** = बोलाउनुहुन्छ
**तर्हि** = त्यही वेला
**वै** = निश्चय नै
**भग्नगतयः** = गति रोकिएका
**अनिलनीतं** = वायुले उडाएर ल्याउने
**तत्पदाम्बुजरजः** = श्रीकृष्णको चरणरजलाई
**स्पृहयतीः** = चाहँदै
**प्रेमवेपितभुजाः** = प्रेमका कारण तरङ्गरूपी हात हल्लाइरहेका
**स्तिमितापः** = पानीको बगाइ रोकिएका
**सरितः** = नदीहरू
**वयम् इव** = हामीहरू झैं
**अबहुपुण्याः** = धेरै भाग्य नभएका हुन्छन्

**वाक्यार्थ–** वनमा जब श्रीकृष्णले मल्ल युद्ध गर्ने पहलमानले झैं मयूरको प्वाँख, फूलका गुच्छा, गेरु आदि धातु र अनेक पालुवाहरूले आफूलाई सिँगारी बलराम र गोपहरूले सहित भई गाईहरूलाई बोलाउँदै बाँसुरी बजाउनुहन्छ, तब अचेतन नदीहरूको प्रवाह पनि रोकिन्छ। उनीहरूले वायुले उडाएर श्रीकृष्णको चरणरज ल्याउला भन्ने चाहना गर्दै प्रेमपूर्वक तरङ्गरूपी हात हल्लाउँछन्, तर उनीहरू पनि हामीजस्तै मन्दभाग्यवाला भएकाले त्यसलाई पाउन भने सक्दैनन्।

**अनुचरैः समनुवर्णितवीर्य आदिपूरुष इवाचलभूतिः।**
**वनचरो गिरितटेषु चरन्तीर्वेणुनाह्वयति गाः स यदा हि ॥ ८॥**
**वनलतास्तरव आत्मनि विष्णुं व्यञ्जयन्त्य इव पुष्पफलाढ्याः।**
**प्रणतभारविटपा मधुधाराः प्रेमहृष्टतनवो ससृजुः स्म ॥ ९॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**यदा** = जुन समयमा
**अनुचरैः** = आफ्ना पछि लाग्ने साथीहरूद्वारा
**समनुवर्णितवीर्यः** = पराक्रमको वर्णन गरिएका
**आदिपूरुषः इव** = आदिपुरुष नारायण झैं
**अचलभूतिः** = अचल ऐश्वर्यसम्पन्न
**वनचरः** = वनमा (गाई चराउँदै) हिँड्ने
**सः** = उहाँ श्रीकृष्णले
**गिरितटेषु** = पहाडको फेदीमा
**चरन्तीः** = चरिरहेका
**गाः** = गाईहरूलाई
**वेणुना** = बाँसुरीद्वारा
**आह्वयति** = बोलाउनुहुन्छ
**आत्मनि** = आफूमा
**विष्णुं** = विष्णुलाई
**व्यञ्जयन्त्यः इव** = अभिव्यक्त गरे झैं
**पुष्पफलाढ्याः** = फलफूलले भरिएका
**प्रेमहृष्टतनवः** = प्रेमका कारण अङ्ग–अङ्ग हर्षित भएका
**प्रणतभारविटपाः** = प्रणाम गर्नका लागि लिइएको सामान (फलफूल)को भारले हाँगा नुगेका
**वनलताः** = वनका लहरा र
**तरवः** = रुखहरूले
**मधुधाराः** = रसका धाराहरू
**ससृजुः स्म** = बगाउन थाले

**वाक्यार्थ–** आफ्ना साथीहरूद्वारा अनेक पराक्रमको वर्णन गरिएका, गाई चराउन वनमा हिँडिरहेका र आदिपुरुष नारायण जस्तो अचल ऐश्वर्यसम्पन्न श्रीकृष्णले पहाडका फेदीमा चरिरहेका गाईहरूलाई जब बाँसुरीको धुनले बोलाउनुहुन्छ तब श्रीकृष्णप्रेमको कारणले वनका सबै

रुख-लहराहरूका अङ्ग-अङ्ग हर्षित हुन्छन्, लटरम्म फलफूल भएका र उहाँलाई प्रणाम गर्नका लागि लिइएको सामान (फलफूल)को भारले नुगेका ती रुख-लहराहरू आफूभित्र विष्णु भगवान् रहेको कुरा अभिव्यक्त गरिरहे झैं रसको धारा बगाउन थाल्दछन्।

**दर्शनीयतिलको वनमालादिव्यगन्धतुलसीमधुमत्तैः।**
**अलिकुलैरलघुगीतमभीष्टमाद्रियन्यर्हि सन्धितवेणुः॥ १०॥**
**सरसि सारसहंसविहङ्गाश्चारुगीताहृतचेतस एत्य।**
**हरिमुपासत ते यतचित्ता हन्त मीलितदृशो धृतमौनाः॥ ११॥**

**पदार्थ**–
**दर्शनीयतिलकः** = हेरिरहूँ जस्तो तिलक लगाउनुहुने
**वनमालादिव्यगन्धतुलसी-मधुमत्तैः** = वनमालामा उनिएको तुलसीको दिव्य सुगन्ध र मधुर रसद्वारा मत्त भएका
**अलिकुलैः** = भँवराहरूद्वारा
**अलघु** = ठुलो स्वरमा गाइएको
**अभीष्टम्** = आफ्ना अनुकूलको
**गीतम्** = गीतलाई
**आद्रियन्** = आदर गर्दै भगवान् श्रीकृष्ण
**यर्हि** = जब
**सन्धितवेणुः** = (मुखमा) बाँसुरी लगाउनुहुन्छ (त्यस वेला)
**चारुगीताहृतचेतसः** = मधुर सङ्गीतद्वारा चित्त खिचिएका
**यतचित्ताः** = एकाग्रचित्त भएका
**मीलितदृशः** = आँखा चिम्लेका
**धृतमौनाः** = चुप लागेका
**सरसि** = पोखरीमा बस्ने
**ते** = ती
**सारसहंसविहङ्गाः** = सारस, हाँस आदि चराहरू
**हरिम्** = भगवान् श्रीकृष्णको (नजिक)
**एत्य** = आएर (उहाँको)
**उपासते** = उपासना गर्दछन्
**हन्त** = आश्चर्यको कुरा छ

**वाक्यार्थ**– हेरिरहूँ जस्तो तिलक लगाउनुहुने भगवान् श्रीकृष्ण जब आफ्नो वनमालामा उनिएको तुलसीको दिव्य सुगन्ध र मधुर रसद्वारा मत्त भएका भँवराहरूले मन पर्ने गरी ठुलो स्वरमा गरेको भुनभुनलाई आदर गर्दै आफू पनि सँगसँगै बाँसुरी बजाउन थाल्नुहुन्छ, त्यस वेला उहाँको यो मधुर सङ्गीतद्वारा पोखरीमा बस्ने सारस, हाँस आदि चराहरूको चित्त नै हरिन्छ र उनीहरू श्रीकृष्णको नजिक आउँछन्। मधुर धुनमैं मन एकाग्र भएकाले आँखा चिम्लिएका र चुप लागेका ती सबै चराहरू श्रीकृष्णकै वरिपरि उहाँकै उपासना गरिरहे झैं लाग्छन्, यही आश्चर्य छ।

**सहबलः स्रगवतंसविलासः सानुषु क्षितिभृतो व्रजदेव्यः।**
**हर्षयन् यर्हि वेणुरवेण जातहर्ष उपरम्भति विश्वम्॥ १२॥**
**महदतिक्रमणशङ्कितचेता मन्दमन्दमनुगर्जति मेघः।**
**सुहृदमभ्यवर्षत्सुमनोभिश्छायया च विदधत् प्रतपत्रम्॥ १३॥**

**पदार्थ**–
**व्रजदेव्यः** = हे व्रजका देवीहरू (गोपिनीहरू)

**यर्हि** = जुन वेलामा
**स्रगवतंसविलासः** = फूलका कर्णकुण्डलले शोभित
**सहबलः** = बलरामसहित श्रीकृष्णले
**क्षितिभृतः** = पहाडका
**सानुषु** = चुचुराहरूमा
**जातहर्षः** = हर्षपूर्वक घुम्दै
**वेणुरवेण** = बाँसुरीको आवाजद्वारा
**विश्वम्** = संसारैलाई
**हर्षयन्** = हर्षित गराउँदै
**उपरम्भति** = अङ्कमाल गर्नुहुन्छ
**महदतिक्रमणशङ्कितचेताः** = महापुरुषको अपमान होला कि भनी चित्त शङ्कित भएको
**मेघः** = बादल
**मन्दमन्दम्** = बिस्तारै-बिस्तारै
**अनुगर्जति** = (बाँसुरीको आवाजको) पछिपछि गर्जन्छ
**छायया** = छायाद्वारा
**प्रतपत्रम्** = छाता
**विदधत्** = ओढाउँदै उसले
**सुमनोभिः च** = (मन्द जलकणरूपी) फूलले पनि
**सुहृदम्** = आफ्ना साथीलाई
**अभ्यवर्षत्** = वर्षा गर्दछ

**वाक्यार्थ–** हे व्रजका देवीहरू (गोपिनीहरू) ! फूलका कर्णकुण्डलले सुशोभित श्रीकृष्ण बलरामले सहित भई पहाडका चुचुराहरूमा हर्षपूर्वक घुम्दै सबैलाई हर्षित बनाउँदै जब बाँसुरीको आवाजद्वारा संसारैलाई अङ्कमाल गर्नुहुन्छ तब (गर्जना गरिरहेको) बादलले पनि महापुरुषको अपमान होला कि भनी डराउँदै बिस्तारै बाँसुरीको आवाजको पछिपछि गर्जन्छ। त्यो कालो मेघले आफ्ना मित्र श्रीकृष्णलाई आफ्नो छायाद्वारा छाता ओढाउँछ अनि हल्का जलकणद्वारा बर्साई पुष्पवर्षा गर्छ।

**विविधगोपचरणेषु विदग्धो वेणुवाद्य उरुधा निजशिक्षाः।**
**तव सुतः सति यदाधरबिम्बे दत्तवेणुरनयत् स्वरजातीः॥ १४॥**
**सवनशस्तदुपधार्य सुरेशाः शक्रशर्वपरमेष्ठिपुरोगाः।**
**कवय आनतकन्धरचित्ताः कश्मलं ययुरनिश्चिततत्त्वाः॥ १५॥**

**पदार्थ–**
**सति** = हे सती यशोदा
**विविधगोपचरणेषु** = अनेक प्रकारका गोपका खेलमा र
**उरुधा** = अनेक प्रकारले
**वेणुवाद्ये** = बाँसुरी बजाउन पनि
**विदग्धः** = निपुण भएका
**तव** = तपाईंका
**सुतः** = छोराले
**यदा** = जब
**अधरबिम्बे** = तल्लो ओठमा
**दत्तवेणुः** = बाँसुरी राखी
**निजशिक्षाः** = आफैं सिकेका
**स्वरजातीः** = अनेक रागहरूलाई
**अनयत्** = लानुभयो (बजाउनुभयो, तब)
**सवनशः** = मन्द, मध्यम र तार स्वरले युक्त
**तत्** = त्यो वेणुवादनलाई
**उपधार्य** = सुनेर
**अनिश्चिततत्त्वाः** = त्यसको सूक्ष्म भेद थाहा पाउन नसकेका
**आनतकन्धरचित्ताः** = शिर झुकेका र मन त्यतै तानिएका
**कवयः** = सर्वज्ञ
**शक्रशर्वपरमेष्ठिपुरोगाः** = इन्द्र, शङ्कर, ब्रह्मा आदि
**सुरेशाः** = श्रेष्ठ देवताहरू पनि
**कश्मलं ययुः** = मोहित भए

**वाक्यार्थ–** हे यशोदा ! गोपालहरूको विभिन्न खेलमा र बाँसुरी बजाउन पनि असाध्यै सिपालु तपाईंका छोरा श्रीकृष्णले जब तल्लो ओठमा बाँसुरी अड्याई आफैं सिकेका बाँसुरीका अनेक

रागहरूलाई बजाउनुहुन्थ्यो तब मन्द, मध्यम र तार सबै स्वरले युक्त त्यो बाँसुरीको धुनलाई सुनेर सर्वज्ञ भए तापनि त्यो बाँसुरी धुनको सूक्ष्म भेद थाहा पाउन नसकेका इन्द्र, शङ्कर, ब्रह्मा आदि श्रेष्ठ देवताहरूको समेत मन त्यतैतिर तानिन्थ्यो र शिर झुक्थ्यो, यसरी उनीहरू पनि मोहित हुन्थे।

**निजपदाब्जदलैर्ध्वजवज्रनीरजाङ्कुशविचित्रललामैः।**
**व्रजभुवः शमयन् खुरतोदं वर्ष्मधुर्यगतिरीडितवेणुः॥ १६॥**
**व्रजति तेन वयं सविलासवीक्षणार्पितमनोभववेगाः।**
**कुजगतिं गमिता न विदामः कश्मलेन कवरं वसनं वा॥ १७॥**

**पदार्थ–**
**वर्ष्मधुर्यगतिः** = गजराजको जस्तो शरीरको चालढाल भएका
**ध्वजवज्रनीरजाङ्कुशविचित्र-ललामैः** = ध्वजा, वज्र, कमल, अङ्कुश यी विचित्र चिह्नहरूले युक्त
**निजपदाब्जदलैः** = आफ्ना चरणकमलद्वारा
**व्रजभुवः** = व्रजभूमिको
**खुरतोदं** = (गाईले) खुरले खोस्रिँदा भएको पीडालाई
**शमयन्** = शान्त पार्दै
**ईडितवेणुः** = बाँसुरी बजाउँदै श्रीकृष्ण (जब)
**व्रजति** = हिँड्नुहुन्छ
**तेन** = त्यसद्वारा र
**सविलासवीक्षणार्पितमनोभव-वेगाः** = उल्लासमय उहाँको हेराइद्वारा मिलनको कामना झन्-झन् बढिरहेका
**कुजगतिं** = वृक्षहरू झैँ जडतामा
**गमिताः** = पुगेका
**वयं** = हामी (सबै गोपीहरू)
**कश्मलेन** = मोहका कारण
**कवरं** = चुल्ठो (फुकेको र)
**वसनं वा** = कपडा (लत्रिएको समेत)
**न विदामः** = थाहा पाउँदैनौँ

**वाक्यार्थ–** शरीरको चालढाल गजराज झैँ भएका भगवान् श्रीकृष्ण जब ध्वजा, वज्र, कमल, अङ्कुश जस्ता विचित्र चिह्नहरूले युक्त आफ्ना चरणकमलद्वारा गाईहरूको खुरले खोस्रिँदा भएको व्रजभूमिको पीडालाई शान्त पार्दै, बाँसुरी बजाउँदै त्यहाँ विचरण गर्नुहुन्छ, त्यसैसाथ उहाँको उल्लासमय विचित्र हेराइद्वारा मिलनको कामना झन्-झन् बढिरहेका हामीहरू मोहका कारण वृक्षहरू झैँ जड भई आफ्नो चुल्ठो फुकेको र कपडा लत्रिएको समेत थाहा पाउँदैनौँ।

**मणिधरः क्वचिदागणयन् गा मालया दयितगन्धतुलस्याः।**
**प्रणयिनोऽनुचरस्य कदांसे प्रक्षिपन् भुजमगायत यत्र॥ १८॥**
**क्वणितवेणुरववञ्चितचित्ताः कृष्णमन्वसत कृष्णगृहिण्यः।**
**गुणगणार्णमनुगत्य हरिण्यो गोपिका इव विमुक्तगृहाशाः॥ १९॥**

**पदार्थ–**
**यत्र क्वचित्** = जहाँकहीँ
**कदा** = कुनै पनि समयमा
**मणिधरः** = मणिहरू धारण गर्ने श्रीकृष्णले
**गाः** = गाईहरूलाई

**आगणयन्** = (मणिद्वारा) गन्दै
**दयितगन्धतुलस्याः** = प्यारो सुगन्ध भएको तुलसीको
**मालया** = मालाले युक्त भई
**प्रणयिनः** = आफ्नो प्रेमी
**अनुचरस्य** = साथीको
**अंशे** = काँधमा
**भुजम्** = एउटा हातलाई
**प्रक्षिपन्** = अड्याई
**अगायत** = गाउनुभयो (बाँसुरी बजाउनुभयो)
**क्वणितवेणुरववञ्चितचित्ताः** = बजिरहेको बाँसुरीको आवाजद्वारा मन चोरिएका
**कृष्णगृहिण्यः** = कृष्णसारकी पत्नी
**हरिण्यः** = हरिणीहरू
**विमुक्तगृहाशाः** = घरपरिवारका आशा छाडेका हामी
**गोपिकाः इव** = गोपीहरू झैँ
**गुणगणार्णम्** = अनेक गुणहरूका समुद्र
**कृष्णम्** = श्रीकृष्णलाई
**अनुगत्य** = पछि लागी
**अन्वसत** = वरिपरि बसे

**वाक्यार्थ–** आफ्नो मन पर्ने सुगन्धित तुलसीको माला र गाईहरूलाई गन्न मणिको माला लगाउनुभएका श्रीकृष्णले त्यसैद्वारा गाईहरूलाई गन्दै, आफ्नो प्रेमी साथीको काँधमा एउटा हातलाई अड्याई जहाँकहीँ कुनै पनि समयमा बाँसुरी बजाउनुहुने उहाँले जब बाँसुरी बजाउनुभयो, बजिरहेको त्यस बाँसुरीको आवाजले मन चोरिएका कृष्णसारका पत्नी हरिणीहरू पनि हामी गोपीहरू झैँ सारा घर-परिवारको आशालाई छाडी अनेक गुणहरूका समुद्र श्रीकृष्णको पछि लागे र उहाँको वरिपरि गएर बसे।

**कुन्ददामकृतकौतुकवेषो गोपगोधनवृतो यमुनायाम्।**
**नन्दसूनुरनघे तव वत्सो नर्मदः प्रणयिणां विजहार ॥ २० ॥**
**मन्दवायुरुपवात्यनुकूलं मानयन् मलयजस्पर्शेन ।**
**वन्दिनस्तमुपदेवगणा ये वाद्यगीतबलिभिः परिवव्रुः ॥ २१ ॥**

पदार्थ–
**अनघे** = हे निष्पाप यशोदा
**प्रणयिणां** = प्रेमीहरूलाई
**नर्मदः** = ठट्टाद्वारा खुसी पार्ने
**कुन्ददामकृतकौतुकवेषः** = कुन्द फूलका कोपिलाहरूद्वारा विचित्र भेष बनाउनुभएका
**तव** = तपाईंका
**वत्सः** = प्रिय छोरा
**नन्दसूनुः** = नन्दकुमार
**गोपगोधनवृतः** = गोप र गाईहरूले युक्त भई
**यमुनायां** = यमुनाको जलमा
**विजहार** = (जब) विहार गर्नुभयो (तब)
**मन्दवायुः** = मन्द-मन्द हावा
**मलयजस्पर्शेन** = मलय पर्वतमा उत्पन्न चन्दन जस्तै शीतल हावाको स्पर्शद्वारा
**मानयन्** = आदर गर्दै
**तम्** = उहाँ श्रीकृष्णलाई
**अनकूलं** = अनुकूल हुने गरी
**उपवाति** = बग्दछ
**ये** = जो
**वन्दिनः** = स्तुतिपाठकहरू झैँ
**उपदेवगणाः** = उपदेव (गन्धर्व, यक्ष, किन्नर आदि) समूहहरूले
**वाद्यगीतबलिभिः** = सङ्गीत, गीत र उपहारहरूद्वारा
**परिवव्रुः** = वरिपरिबाट सेवा गरे

**वाक्यार्थ–** हे निष्पाप यशोदा ! अनेक हाँस-ठट्टा गरी आफ्ना प्रेमीहरूलाई खुसी पार्ने तपाईंका प्रिय छोरा नन्दकुमारले कुन्दफूलका कोपिलाहरूले सजाई विचित्र भेष बनाएर जब गोप र

गाईहरूको साथमा यमुनाको नजिक विहार गर्नुभयो तब मलय पर्वतमा उत्पन्न चन्दन जस्तै शीतल र सुगन्धित स्पर्श भएको वायु उहाँलाई अनुकूल हुने गरी आदरपूर्वक मन्द-मन्द बग्न थाल्यो अनि गन्धर्व आदिले चाहिँ स्तुतिपाठकहरूले झैं सङ्गीत, गीत र उपहारहरूद्वारा वरिपरिबाट उहाँको सेवा गर्न थाले।

**वत्सलो व्रजगवां यदगध्रो वन्द्यमानचरणः पथि वृद्धैः।**

**कृत्स्नगोधनमुपोह्य दिनान्ते गीतवेणुरनुगेडितकीर्तिः॥ २२॥**

**उत्सवं श्रमरुचापि दृशीनामुन्नयन् खुररजश्छुरितस्रक्।**

**दित्सयैति सुहृदासिष एष देवकीजठरभूरुडुराजः॥ २३॥**

**पदार्थ–**
**व्रजगवां** = व्रजमण्डल र त्यहाँका गाईहरूका
**वत्सलः** = प्यारा
**यत्** = किनभने (यिनकै लागि)
**अगध्रः** = गोवर्धन पर्वत धारण गर्ने
**पथि** = (आउँदा-आउँदै) बाटोमा
**वृद्धैः** = पितामह ब्रह्मा आदिद्वारा
**वन्द्यमानचरणः** = चरणको वन्दना गरिएका
**खुररजश्छुरितस्रक्** = जसको मालामा गाईको खुरबाट उडेको धुलो लागेको छ
**एषः** = यी
**देवकीजठरभूः** = देवकीका गर्भबाट उत्पन्न
**उडुराजः** = (सबैलाई आनन्द दिने) चन्द्रमा जस्ता
**गीतवेणुः** = बाँसुरी बजाउँदै
**अनुगेडितकीर्तिः** = पछि लागेका साथीहरूद्वारा कीर्ति गाइँदै
**दिनान्ते** = साँझमा
**कृत्स्नगोधनम्** = सम्पूर्ण गाईहरूलाई
**उपोह्य** = एकत्रित गरी
**श्रमरुचा अपि** = श्रमका कारण पसिना निस्किएको मुखको कान्तिद्वारा
**दृशीनाम्** = हाम्रा आँखाको
**उत्सवं** = उत्सवलाई
**उन्नयन्** = बढाउँदै
**सुहृदासिषः** = सुहृत् (स्वच्छ हृदय भएका)हरूको इच्छालाई
**दित्सया** = पूरा गरिदिने इच्छाले
**एति** = आउनुहुन्छ

**वाक्यार्थ–** व्रजमण्डल र सम्पूर्ण गाईहरूका प्यारा श्रीकृष्ण भगवान्ले यिनकै रक्षाका लागि गोवर्धन धारण गर्नुभयो। देवकीको गर्भबाट उत्पन्न भएका उहाँ श्रीकृष्णचन्द्र बाँसुरी बजाउँदै आफ्ना पछि लागेका साथीहरूद्वारा प्रशंसित हुँदै साँझमा सम्पूर्ण गाईहरूलाई एकत्रित गरी व्रजतिर आउनुहन्छ। गाईका खुरबाट उडेको धुलोले उहाँको माला मैलिएको हुन्छ। व्रजतिर आउँदै गर्दा बाटोमा पितामह ब्रह्मा आदिले उहाँको चरणको वन्दना गर्दछन्। दिनभर परिश्रम गरेका कारण पसिना लत्पतिएको आफ्नो अनुहारको विलक्षण कान्तिद्वारा हाम्रा आँखाहरूलाई ज्यादै हर्षित बनाउँदै हामी सुहृत्हरूको इच्छालाई पूरा गरिदिन उहाँ साँझमा आइपुग्नुहुन्छ।

**मदविघूर्णितलोचन ईषन्मानदः स्वसुहृदां वनमाली।**

**बदरपाण्डुवदनो मृदुगण्डं मण्डयन् कनककुण्डललक्ष्म्या॥ २४॥**

**यदुपतिर्द्विरदराजविहारो यामिनीपतिरिवैष दिनान्ते ।**
**मुदितवक्त्र उपयाति दुरन्तं मोचयन् व्रजगवां दिनतापम् ॥ २५ ॥**

**पदार्थ–**
**ईषत्** = थोरै
**मदविघूर्णितलोचनः** = मदले भरिएर आँखा केही लोलाएका
**वनमाली** = वनमाला धारण गर्ने
**कनककुण्डललक्ष्म्या** = सुवर्ण कुण्डलको शोभाद्वारा
**मृदुगण्डं** = कोमल गालालाई
**मण्डयन्** = शोभित गर्दै
**बदरपाण्डुवदनः** = बयरजस्ता पाण्डु (सेतो-सेतो पहेँलो) रङ्गको अनुहार भएका
**द्विरदराजविहारः** = गजराजको झैँ चाल भएका
**स्वसुहृदां** = आफ्ना साथीहरूको
**मानदः** = सम्मान गर्ने
**एषः** = उहाँ
**यदुपतिः** = यदुपति श्रीकृष्ण
**व्रजगवां** = व्रजमण्डल र सम्पूर्ण गाईहरूको
**दुरन्तं** = असह्य
**दिनतापम्** = दिनभरि विरह भएको तापलाई
**मोचयन्** = नष्ट गर्दै
**दिनान्ते** = साँझमा
**यामिनीपतिः इव** = चन्द्रमा उदाए झैँ
**मुदितवक्त्रः** = हँसिलो अनुहार लिई
**उपयाति** = आउनुहुन्छ

**वाक्यार्थ–** वनमाला धारण गर्नुहुने श्रीकृष्णका आँखा मदका कारण केही लोलाएका छन्। सुवर्णकुण्डलको शोभाद्वारा उहाँका दुबै गाला उज्यालिएकाले उहाँको अनुहार बयरजस्तो सेतो-सेतो पहेँलो रङ्गको देखिएको छ। गजराजको जस्तो चाल भएका यदुपति श्रीकृष्ण आफ्ना साथीहरूलाई सम्मान गर्नुहुन्छ। दिनभरि उहाँको विरहको असह्य तापले पीडित भएका हामी व्रजवासी र सम्पूर्ण गाईहरूको समेत तापलाई नष्ट गर्दै साँझमा चन्द्रमा उदाए झैँ हँसिलो अनुहार लिई यस्ता श्रीकृष्ण टुप्लुक्क आइपुग्नुहुन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवजीले भन्नुभयो)

**एवं व्रजस्त्रियो राजन् कृष्णलीला नु गायतीः ।**
**रेमिरेऽहःसु तच्चित्तास्तन्मनस्का महोदयाः ॥ २६ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**एवं नु** = यसै गरी
**अहःसु** = दिनहरूमा
**कृष्णलीलाः** = श्रीकृष्णका चरित्रहरू
**गायतीः** = गाइरहने
**तच्चित्ताः** = उहाँमैं चित्त लगाएका
**तन्मनस्काः** = श्रीकृष्णमय मन भएका
**महोदयाः** = महाभाग्यशालिनी
**व्रजस्त्रियः** = व्रजस्त्रीहरू
**रेमिरे** = रमाए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसप्रकार श्रीकृष्णमा चित्त लागेका र श्रीकृष्णमय मन भएका ती महाभाग्यशाली व्रजस्त्रीहरू दिनमा पनि श्रीकृष्णकै अनेक चरित्रहरूलाई गाउँदै रमाउँथे।

**विवरण–** यस श्लोकमा श्रीकृष्णसँग विरह भए तापनि गोपिनीहरू कृष्णलीला गाउँदै रमाउँथे भनी बताइएको छ। **अहःसु** अर्थात् सधैँ दिनभरि जब भगवान् श्रीकृष्ण वनमा गाई चराउन

जानुहुन्थ्यो तब गोपिनीहरू श्रीकृष्णलाई बाहिर नदेखी उहाँलाई आन्तरिक रूपमा हृदयभित्र अनुभव गर्दथे, अनि त्यही आन्तरिक मिलनमा उनीहरू ज्यादै रमाउँथे। **तच्चित्ताः** अथवा **तस्मिन् एव चित्तं मनः यासां ताः** अर्थात् चित्त श्रीकृष्णमय भएका गोपिनीहरू श्रीकृष्णमा मन नलगाई एक क्षण पनि बस्न सक्दैनथे। यदि कृष्णसँग भित्री–बाहिरी दुबै रूपमा वियोग हुने हो भने गोपिनीहरूको जीवन असम्भव थियो। त्यसैले प्रियविरहको क्षणमा पनि गोपिनीहरू कृष्णकथाको माध्यमले आन्तरिक रूपमा श्रीकृष्णसँग नै संयुक्त भएर बाँचिरहन्थे।

यो युगलगीतको प्रसङ्गमा सबैभन्दा पहिले गोपिनीले श्रीकृष्णको बाँसुरीको ध्वनिलाई सुनेर देवस्त्रीहरू पनि छट्पटिएको वर्णन गरेकी छिन्। देवताहरू मनुष्यभन्दा माथिल्ला योनि भएकाले मानिसका क्रियाकलापले उनीहरू आकर्षित र मोहित हुनु नपर्ने तर श्रीकृष्णको माधुरीद्वारा मोहित भएकाले त्यसको विलक्षण विशेषता हुनै पर्ने भाव यहाँ व्यक्त भएको छ। अर्की गोपिनीले उछिन्दै भनेकी छिन्— यो त ज्ञानसम्पन्न देवयोनिको कुरा भयो। अज्ञानी गाई, गोरु आदि त श्रीकृष्णको बाँसुरीनादबाट जड झैँ हुन्छन् भने देवताहरू मोहित हुनु के आश्चर्य भयो ? भन्ने उनको भाव रहेको छ। अर्की गोपिनीले चाहिँ गाई, गोरु त बरु चेतन प्राणी भएको तर श्रीकृष्णको बाँसुरीको धुनलाई सुनेर त अचेतन नदीहरूको पनि वेग रोकिएको कुरा बताएकी छिन्। श्रीकृष्णको बाँसुरीनादबाट चलमलाउँदा नदीको वेग पनि रोकिई तिनीहरू स्थिर भएको सुनिसकेपछि अर्की गोपिनी श्रीकृष्णको बाँसुरीनादले स्थिर वृक्षवनस्पतिहरूलाई चलायमान गराएको वर्णन गर्दछिन्। वृन्दावनका रुखहरूमा श्रीकृष्णप्रेमको कारणले रोमहर्ष हुन्थ्यो अनि तिनका हाँगाहरूबाट मधुर रसका धाराहरू बग्न थाल्दथे। यसरी अनेक रूपमा यहाँ श्रीकृष्ण सम्बन्धी अनुभव अभिव्यक्त भएको छ। यहाँ अन्तिम गोपिनीले श्रीकृष्ण गोपिनीहरूको विरहतापलाई नष्ट गर्नकै लागि व्रजमा फर्किनुहुन्छ भनी बताएकी छिन्। श्रीकृष्णविना वृन्दावनका हरेर रुख, लहरा, मृग, पक्षी, गोप, गोपिनी आदि सबै छट्पटिन्थे। तिनीहरू सबैको तापलाई नष्ट गर्न भगवान् यताउति डुलिरहनुहुन्थ्यो। भगवान् गाई चराउनका लागि होइन अपितु वनमा भएका रुख, लहरा, मृग, पक्षी आदिको रातभरिको विरहलाई हटाउनका लागि नै वनमा जानुहुन्थ्यो। यसरी बाँसुरी बजाउँदै ती सबैको विरहलाई नष्ट गरेपछि भगवान् साँझमा फेरि व्रजवासी गोपिनीहरूको विरहलाई हटाउनका लागि व्रजमण्डलमा फर्किनुहुन्थ्यो। यही अनुभवलाई **व्रजगवां दिनतापं मोचयन्** भन्ने पदावलीले प्रकट गरेको छ। **व्रजगवां** यो शब्दभित्र गोपिनीहरूका अनेक भावहरू लुकेका छन्। **व्रजगवां** अर्थात् व्रजमा गाई समान बाँधिएका हामीहरू भन्ने अर्थ गर्दा गोपिनीहरूले आफैँलाई धिक्कारेको भाव प्रकट भएको छ। गाईहरू त श्रीकृष्णसँग जता जान पनि स्वतन्त्र छन्, तर वास्तवमा गाई त हामीहरू हौँ किनभने हामी नै व्रजमा आसक्तिद्वारा बाँधिएकाले घरबार छाडी वन जान सक्दैनौँ भन्ने भाव प्रकट भएको छ। **गो** शब्दको अर्थ इन्द्रिय भन्ने हो भने व्रजवासी सम्पूर्ण जीवहरूका इन्द्रियहरूलाई तापमुक्त गर्न श्रीकृष्ण व्रजमा आउनुभएको हो भन्ने अर्थ हुन्छ। अर्को प्रकारले गाईलाई जनावर मान्दा **व्रजगवां** अर्थात् व्रजमण्डलका गाईहरूको **दिनतापं** अर्थात् दिनभरि चरेर थाकेको तापलाई हटाउन विश्रामका लागि भगवान् तिनलाई व्रजमण्डलमा लिई आउनुहुन्थ्यो भन्ने सामान्य तात्पर्य पनि निस्कन्छ। **व्रजगवां** शब्दले गोपिनीहरूले आफैँलाई लिँदा त्यो अर्थ विशिष्ट

प्रेमपरक हुन पुग्छ। यसरी यहाँ श्रीकृष्ण वन गएदेखि आफूहरूको तापलाई नष्ट गर्न फेरि व्रजमा नफर्कुन्जेलसम्मका घटनाहरूलाई बताइएकाले गोपिनीहरूले सम्पूर्ण दिन श्रीकृष्णकै चिन्तनमा बिताउने कुरा स्पष्ट भएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे वृन्दावनक्रीडायां गोपिकायुगलगीतं नाम पञ्चत्रिंशोऽध्यायः॥ ३५॥**

# अथ षट्त्रिंशोऽध्यायः

## अरिष्टासुरको वध र कंसले अक्रूरलाई व्रजमा पठाउनु

दशम स्कन्धको ३६ देखि ६३ सम्मका २८ अध्यायहरूलाई राजसनिरोध प्रकरण भनी छुट्याइएको छ। यस प्रकरणमा कंस आदि अनेक दुष्ट राजाहरूलाई भगवान्ले मार्नुभएको र भगवान्को विवाह भएको प्रसङ्ग बताइएको छ। यहाँ सम्पूर्ण राजाहरू, आफ्ना पत्नीहरू एवं नगरवासी सम्पूर्ण प्रजाहरूको मन भगवान्ले आफूमा निरुद्ध गर्नुभएको छ। सत्त्व, रज र तमोगुणका स्वरूप एवं कार्यहरूको विषयमा बताउँदै भगवान्ले श्रीमद्भगवद्गीता (१४/९)मा **रजः कर्मणि** अर्थात् रजोगुणले कर्ममा प्रवृत्त गर्ने कुरा बताउनुभएको छ। एकादश स्कन्धमा उद्धवलाई उपदेश गर्ने क्रममा पनि भगवान्ले **कर्मश्रद्धा तु राजसी** (भागवत, ११/२५/२७) अर्थात् कर्ममा श्रद्धा र प्रवृत्ति हुनु रजोगुणको कार्य हो भनी बताउनुभएको छ। वल्लभाचार्यले अरिष्टासुरलाई कर्ममा प्रवृत्तिरूप मान्नुभएको छ त्यसैले राजस निरोधको प्रसङ्गमा सबैभन्दा पहिले कर्मश्रद्धा या कर्ममा प्रवृत्तिरूप राजस अरिष्टासुरको नाश गरिएको छ। यसरी यहाँ कर्मप्रवृत्तिरूपी रजोगुणको कार्यलाई आफूमा लीन गरी राजसनिरोधको प्रसङ्गको आरम्भ गरिएको छ।

श्रीहरिसूरिले चाहिँ शङ्खचूडलाई लोभ अनि अरिष्टासुरलाई रोषरूप मान्नुभएको छ। रोष अर्थात् क्रोध सधैँ अरिष्ट हो, यसलाई नष्ट गरेपछि मात्र क्रूरभाव नष्ट हुन्छ। यही अर्थ बताउन यो अध्यायमा अरिष्टासुर नाशपछि अक्रूरसँग मिलन भएको देखाइएको हो भन्ने उहाँको मत रहेको छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ तर्ह्यागतो गोष्ठमरिष्टो वृषभासुरः।**
**महीं महाककुत्कायः कम्पयन् खुरविक्षताम्॥ १॥**

**पदार्थ–**
**अथ** = यसपछि (भगवान् श्रीकृष्ण व्रजमा आउनुभएपछि)
**तर्हि** = त्यही वेला
**महाककुत्कायः** = ठुलो जुरो र शरीर भएको
**अरिष्टः** = अरिष्ट नाम गरेको
**वृषभासुरः** = गोरुको रूप धारण गरेको दैत्य
**खुरविक्षताम्** = खुरले थिचिएकी
**महीं** = पृथिवीलाई
**कम्पयन्** = कपाउँदै
**गोष्ठम्** = व्रजमा
**आगतः** = आइपुग्यो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण व्रजमा प्रवेश गर्नुभएपछि गोरुको रूप धारण गरेको, ठुलो जुरो र शरीर भएको अरिष्ट नाम गरेको दैत्य आफ्नो खुरले थिचिएकी पृथिवीलाई कपाउँदै व्रजमा प्रवेश गऱ्यो।

**रम्भमाणः खरतरं पदा च विलिखन् महीम्।**
**उद्यम्य पुच्छं वप्राणि विषाणाग्रेण चोद्धरन्॥ २॥**
**किञ्चित् किञ्चिच्छकृन्मुञ्चन् मूत्रयन् स्तब्धलोचनः।**
**यस्य निर्ह्रादितेनाङ्ग निष्ठुरेण गवां नृणाम्॥ ३॥**
**पतन्त्यकालतो गर्भाः स्रवन्ति स्म भयेन वै।**
**निर्विशन्ति घना यस्य ककुद्यचलशङ्कया॥ ४॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**खरतरं** = ज्यादै रुखो आवाजमा
**रम्भमाणः** = गर्जना गरिरहेको (त्यो असुर)
**पदा** = खुट्टाले
**महीम्** = जमिनलाई
**विलिखन्** = खोस्रँदै
**पुच्छं च** = पुच्छर चाहिँ
**उद्यम्य** = ठाडो पारेर
**विषाणाग्रेण** = सिङ्को टुप्पाले
**वप्राणि च** = माटाका ढिस्काहरूलाई
**उद्धरन्** = भत्काउँदै
**किञ्चित् किञ्चित्** = अलिकति अलिकति
**शकृत्** = गोबर
**मुञ्चन्** = त्यागदै
**मूत्रयन्** = पिसाब गर्दै (आयो)
**स्तब्धलोचनः** = (क्रोधका कारण) निश्चल आँखा भएको
**यस्य** = जुन अरिष्टासुरको
**निष्ठुरेण** = भयङ्कर
**निर्ह्रादितेन** = गर्जनाद्वारा
**गवां** = गाईहरूको र
**नृणाम्** = मानिसहरूको
**गर्भाः** = (पाँच-छ महिनाका) गर्भहरू
**भयेन** = भयका कारण
**अकालतः** = असामयिक (प्रसूतिसमयपूर्व नै)
**पतन्ति** = खस्दथे
**स्रवन्ति स्म** = (चार महिना-सम्मका गर्भहरू) तुहिन्थे
**यस्य** = जुन अरिष्टासुरको
**ककुदि** = जुरोमा
**वै** = निश्चय नै
**अचलशङ्कया** = पहाडको भ्रमले
**घनाः** = बादलहरू
**निर्विशन्ति** = बस्दथे

**वाक्यार्थ–** हे प्रिय परीक्षित्! अत्यन्त रुखो आवाजमा गर्जना गरिरहेको त्यो अरिष्टासुर खुट्टाले जमिन खोस्रँदै थियो भने पुच्छरलाई ठाडो पारेर सिङ्को टुप्पोले माटाका ढिस्काहरू भत्काउँदै थियो। कहिलेकाहीँ ऊ अलिअलि गोब्याउने र पिसाब गर्ने गरिरहेको थियो। क्रोधले गर्दा निश्चल आँखा भएको त्यो अरिष्टासुरको भयङ्कर गर्जना सुनेर असमयमा नै कतिपय गाईहरूको र नारीहरूको गर्भ तुहिन्थ्यो भने कतिपयको गर्भपात हुन्थ्यो। त्यो गोरुको अग्लो जुरोलाई पहाड भन्ठानेर त्यहाँ बादलहरू बस्दथे।

**तं तीक्ष्णशृङ्गमुद्वीक्ष्य गोप्यो गोपाश्च तत्रसुः।**
**पशवो दुद्रुवुर्भीता राजन् सन्त्यज्य गोकुलम्॥ ५॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**तीक्ष्णशृङ्गम्** = तिखो सिङ्

भएको
**तं** = त्यो गोरुलाई
**उद्वीक्ष्य** = देखेर
**गोपाः** = गोठाला
**गोप्यः च** = गोपिनीहरू पनि
**तत्रसुः** = डराए
**पशवः** = पशुहरू
**भीताः** = डराएर
**गोकुलम्** = गोठ
**सन्त्यज्य** = छाडेर
**दुद्रुवुः** = भागे

**वाक्यार्थ–** तिखा-तिखा सिङ् भएको त्यो गोरुलाई देखेर सबै गोप-गोपिनीहरू ज्यादै डराए, पशुहरू त डराएर गोठ नै छाडेर भागे।

**कृष्ण कृष्णेति ते सर्वे गोविन्दं शरणं ययुः।**
**भगवानपि तद्वीक्ष्य गोकुलं भयविद्रुतम्॥ ६॥**
**मा भैष्टेति गिराश्वास्य वृषासुरमुपाह्वयत्।**
**गोपालैः पशुभिर्मन्द त्रासितैः किमसत्तम॥ ७॥**

**पदार्थ–**
**ते** = ती
**सर्वे** = सबै व्रजवासीहरू
**कृष्ण कृष्ण इति** = हे श्रीकृष्ण ! हे श्रीकृष्ण ! भन्दै
**गोविन्दं** = गोविन्दको
**शरणं** = शरणमा
**ययुः** = गए
**भगवान् अपि** = भगवान्ले पनि
**भयविद्रुतम्** = भयविह्वल भएको
**तद्** = त्यो
**गोकुलं** = गोकुललाई
**वीक्ष्य** = देखेर
**मा भैष्ट** = नडराओ
**इति** = यस्तो
**गिरा** = वाणीद्वारा
**आश्वास्य** = आश्वस्त पारेर
**वृषासुरम्** = वृषासुरलाई
**उपाह्वयत्** = आफ्नो नजिकमा बोलाउनुभयो
**मन्द** = हे मूर्ख
**असत्तम** = हे दुष्ट
**त्रासितैः** = भयभीत गराइएका
**गोपालैः** = गोठाला र
**पशुभिः** = पशुहरूद्वारा पनि
**किम्** = के (प्राप्त हुन्छ)

**वाक्यार्थ–** त्यसपछि सबै व्रजवासीहरू 'हे श्रीकृष्ण ! हे श्रीकृष्ण !' भन्दै गोविन्दको शरणमा गए। भगवान्ले पनि सम्पूर्ण गोकुल भयविह्वल भएको देखेर भगवान्ले भयभीत व्रजवासीहरूलाई 'नडराओ नडराओ' भन्दै आश्वस्त पार्नुभयो र दैत्य वृषासुरलाई आफ्नो अगाडि बोलाएर भन्नुभयो– हे दुष्ट ! हे मूर्ख ! यी गोपाल र पशुहरूलाई डर देखाएर तँलाई के प्राप्त हुन्छ ?

**बलदर्पहाहं दुष्टानां त्वद्विधानां दुरात्मनाम्।**
**इत्यास्फोट्याच्युतोऽरिष्टं तलशब्देन कोपयन्॥ ८॥**
**सख्युरंसे भुजाभोगं प्रसार्यावस्थितो हरिः।**
**सोऽप्येवं कोपितोऽरिष्टः खुरेणावनिमुल्लिखन्।**
**उद्यत्पुच्छभ्रमन्मेघः क्रुद्धः कृष्णमुपाद्रवत्॥ ९॥**

पदार्थ–
**अहं** = म
**त्वद्विधानां** = तँजस्ता
**दुरात्मनाम्** = खराब बुद्धि भएका
**दुष्टानां** = दुष्टहरूको
**बलदर्पहा** = बलको घमन्डलाई नष्ट गर्नेवाला हुँ
**इति** = यसप्रकार
**आस्फोट्य** = हातले काँधमा धाप मार्दै
**तलशब्देन** = ताली बजाएर
**अरिष्टं** = अरिष्टासुरलाई
**कोपयन्** = क्रोधित गराउँदै
**भुजाभोगं** = सर्पाकार आफ्नो लामो बाहुलाई
**सख्युः** = एउटा साथीको
**अंसे** = काँधमा
**प्रसार्य** = राखेर
**हरिः** = दुःखहर्ता
**अच्युतः** = श्रीकृष्ण
**अवस्थितः** = रोकिनुभयो (उभिनुभयो)
**एवं** = (भगवान्को) यस्तो क्रिया (देखेर)
**सः** = त्यो वृषरूपधारी
**अरिष्टः अपि** = अरिष्टासुर पनि
**कोपितः** = क्रुद्ध भई
**खुरेण** = खुरले
**अवनिम्** = पृथिवीलाई
**उल्लिखन्** = खोस्रँदै
**उद्यत्पुच्छभ्रमन्मेघः** = ठाडो पारेको पुच्छरले आकाशका बादलहरूलाई छिन्न-भिन्न पार्दै
**क्रुद्धः** = रिसाएको वृषासुर
**कृष्णम्** = श्रीकृष्णको
**उपाद्रवत्** = नजिकमा आइपुग्यो

**वाक्यार्थ–** 'तँजस्ता दुष्टहरूको बलको घमन्डलाई नष्ट गर्ने मै हुँ' भनेर दुःखहर्ता भगवान् श्रीकृष्णले हातले काँधमा धाप मार्दै ताली बजाउनुभयो र आफ्नो सर्पजस्तो लामो बाहुलाई एउटा साथीको काँधमा राख्नुभयो। उहाँका यस्ता क्रियाकलाप देखेर वृषरूपधारी अरिष्टासुर झन् क्रुद्ध भयो र आफ्नो खुरले भुइँ खोस्रँदै पुच्छर ठाडो पारेर आकाशका बादलहरूलाई छिन्न-भिन्न पार्दै अत्यन्त रिसाएको त्यो अरिष्टासुर झम्टिँदै भगवान् श्रीकृष्णको छेउमा आइपुग्यो।

**अग्रन्यस्तविषाणाग्रः स्तब्धासृग्लोचनोऽच्युतम्।**
**कटाक्षिप्याद्रवत् तूर्णमिन्द्रमुक्तोऽशनिर्यथा॥ १०॥**

पदार्थ–
**अग्रन्यस्तविषाणाग्रः** = सिङ्को टुप्पो अगाडि पारेको
**स्तब्धासृग्लोचनः** = रगत जस्तै राता-राता र स्थिर आँखा बनाएर हेरिरहेको वृषभासुरले
**कटा** = वक्रदृष्टिले
**आक्षिप्य** = भगवान्लाई हेरेर
**इन्द्रमुक्तः** = इन्द्रले छाडेको
**अशनिः यथा** = वज्रले झैँ
**अच्युतम्** = भगवान्लाई
**तूर्णम्** = वेगपूर्वक
**आद्रवत्** = आक्रमण गर्‍यो

**वाक्यार्थ–** सिङ्को टुप्पो अगाडि तेर्स्याएको, रगत जस्तै राता-राता आँखा बनाएको त्यस वृषभासुरले टेढो आँखाले भगवान्लाई हेरेर इन्द्रले प्रहार गरेको वज्रले झैँ वेगपूर्वक भगवान् श्रीकृष्णलाई आक्रमण गर्‍यो।

**गृहीत्वा शृङ्गयोस्तं वा अष्टादश पदानि सः।**
**प्रत्यपोवाह भगवान् गजः प्रतिगजं यथा॥ ११॥**

पदार्थ–
**सः** = उहाँ
**भगवान्** = भगवान् श्रीकृष्णले
**तं** = त्यो वृषभासुरको
**शृङ्गयोः** = दुई ओटै सिङ्मा
**गृहीत्वा** = समातेर
**गजः** = हात्तीले
**प्रतिगजं यथा** = प्रतिद्वन्द्वी अर्को हात्तीलाई झैँ
**वै** = निश्चय नै
**अष्टादश पदानि** = अठार पाइला
**प्रत्यपोवाह** = पछाडितिर धकेलिदिनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले वृषभासुरको दुई ओटा सिङ् समातेर बलियो हात्तीले आफ्नो प्रतिद्वन्द्वी हात्तीलाई धकेले झैँ गरी त्यस वृषभासुरलाई अठार पाइला पछाडितिर धकेलिदिनुभयो।

**सोऽपविद्धो भगवता पुनरुत्थाय सत्वरः।**
**आपतत् स्विन्नसर्वाङ्गो निःश्वसन् क्रोधमूर्च्छितः॥ १२॥**

पदार्थ–
**भगवता** = भगवान्द्वारा
**अपविद्धः** = धकेलिएर लडेको
**क्रोधमूर्च्छितः** = क्रोधले मूर्च्छित
**स्विन्नसर्वाङ्गः** = पसिनाले सम्पूर्ण अङ्गहरू भिजेको
**सः** = त्यो वृषासुर
**निःश्वसन्** = लामो सास फेर्दै
**पुनः** = फेरि
**उत्थाय** = उठेर
**सत्वरः** = वेगले सहित भएर
**आपतत्** = झम्ट्यो

**वाक्यार्थ–** भगवान्ले धकेल्नाले लडेको त्यो वृषभासुर अत्यन्तै रिसायो, पसिनै-पसिनाले उसको शरीरका सम्पूर्ण अङ्गहरू भिजेका थिए। लामो-लामो सास फेर्दै ऊ उठ्यो र फेरि पनि उसले तीव्र वेगले श्रीकृष्णलाई झम्ट्यो।

**तमापतन्तं स निगृह्य शृङ्गयोः पदा समाक्रम्य निपात्य भूतले।**
**निष्पीडयामास यथार्द्रमम्बरं कृत्वा विषाणेन जघान सोऽपतत्॥ १३॥**

पदार्थ–
**सः** = उहाँ भगवान्ले
**आपतन्तं** = आइलागेको
**तम्** = त्यो वृषभासुरको
**शृङ्गयोः** = सिङ्मा
**निगृह्य** = समातेर
**भूतले** = भुइँमा
**निपात्य** = लडाएर
**पदा** = गोडाले
**समाक्रम्य** = कुल्चिएर
**आर्द्रम्** = भिजेको
**अम्बरं यथा** = कपडालाई झैँ
**निष्पीडयामास** = निचोर्नुभयो
**कृत्वा** = (त्यसको सिङ्) उखेलेर
**विषाणेन** = त्यो सिङ्ले
**जघान** = प्रहार गर्नुभयो
**सः** = त्यो वृषासुर
**अपतत्** = (जमिनमा) पसारियो

**वाक्यार्थ–** आफूमाथि आइलागेको वृषासुरको सिङ्मा समातेर भगवान्ले त्यसलाई फेरि पनि भुइँमा लडाउनुभयो र गोडाले कुल्चिएर भिजेको कपडालाई निचोरे झैँ निचोर्नुभयो। त्यसपछि उहाँले त्यसको सिङ् उखेलेर त्यही सिङ्ले वृषासुरलाई प्रहार गर्नुभयो। त्यसपछि वृषासुर भुइँमा पसारियो।

**असृग् वमन् मूत्रशकृत् समुत्सृजन् क्षिपंश्च पादाननवस्थितेक्षणः।**
**जगाम कृच्छ्रं निर्ऋतेरथ क्षयं पुष्पैः किरन्तो हरिमीडिरे सुराः॥ १४॥**

**पदार्थ–**
**असृक्** = रगत
**वमन्** = छाद्दै
**मूत्रशकृत्** = पिसाब र गोबर
**समुत्सृजन्** = त्याग्दै
**पादान् च** = खुट्टाहरू
**क्षिपन्** = फ्याँक्तै (यताउता हल्लाउँदै)
**अनवस्थितेक्षणः** = आँखा घुमाइरहेको वृषभासुर
**निर्ऋतेः** = मृत्युको
**कृच्छ्रं** = कष्टदायी
**क्षयं** = विनाश अवस्थामा
**जगाम** = पुग्यो
**अथ** = त्यसपछि
**सुराः** = देवताहरूले
**पुष्पैः** = फूलहरूद्वारा
**किरन्तः** = वर्षा गर्दै
**हरिम्** = भगवान् श्रीकृष्णलाई
**ईडिरे** = स्तुति गरे

**वाक्यार्थ–** (भुइँमा लम्पसार परेर) मुखबाट रगत छादिरहेको, पिसाब र गोबर त्यागिरहेको र खुट्टाहरू यताउता फ्याँकिरहेको त्यस वृषासुरले आँखा घुमाइरहेको थियो। बडो कष्टपूर्वक ऊ मृत्युको अवस्थामा पुग्यो। त्यसपछि देवताहरूले पुष्पवृष्टि गर्दै भगवान्‌को स्तुति गर्न लागे।

**एवं कुकुद्मिनं हत्वा स्तूयमानः स्वजातिभिः।**
**विवेश गोष्ठं सबलो गोपीनां नयनोत्सवः॥ १५॥**

**पदार्थ–**
**गोपीनां** = गोपिनीहरूका
**नयनोत्सवः** = आँखाका उत्सव (खुसी) भगवान् श्रीकृष्ण
**एवं** = यसप्रकार
**कुकुद्मिनं** = (जुरोवाला) वृषभासुरलाई
**हत्वा** = मारेर
**स्वजातिभिः** = आफ्नो जाति (गोपहरू)द्वारा
**स्तूयमानः** = स्तुति गरिनुभएका
**सबलः** = बलरामले सहित भएर
**गोष्ठं** = गोठ (व्रज)मा
**विवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** गोपिनीहरूका आँखाका खुसी हुनुभएका भगवान् श्रीकृष्ण यसप्रकार वृषभासुरलाई मारेपछि गोपहरूद्वारा स्तुति गरिँदै दाजु बलरामले सहित भएर व्रजमा प्रवेश गर्नुभयो।

**अरिष्टे निहते दैत्ये कृष्णेनाद्भुतकर्मणा।**
**कंसायाथाह भगवान् नारदो देवदर्शनः॥ १६॥**

**पदार्थ–**
**अद्भुतकर्मणा** = अद्‌भुत कर्म (लीला) गर्नुहुने
**कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा
**दैत्ये** = दैत्य
**अरिष्टे** = अरिष्टासुर
**निहते** = मारिएपछि
**अथ** = त्यसपछि
**देवदर्शनः** = देवताको जस्तो साक्षात् ज्ञान भएका अथवा आफ्नो हृदयमा श्रीकृष्णको दर्शन गरिरहने (भागवत, १/६/३४)
**भगवान्** = भगवान्
**नारदः** = देवर्षि नारदले
**कंसाय** = कंसलाई
**आह** = भन्नुभयो

**वाक्यार्थ–** अत्यन्त अद्‌भुत कर्म गर्ने भगवान् श्रीकृष्णद्वारा वृषभरूपधारी अरिष्टासुरको वध गरिएपछि देवताको जस्तो साक्षात् ज्ञान भएका भगवान् नारदले कंसलाई भन्नुभयो।

**यशोदायाः सुतां कन्यां देवक्याः कृष्णमेव च ।**

**रामं च रोहिणीपुत्रं वसुदेवेन बिभ्यता ॥ १७ ॥**

**न्यस्तौ स्वमित्रे नन्दे वै याभ्यां ते पुरुषा हताः ।**

**निशम्य तद् भोजपतिः कोपात् प्रचलितेन्द्रियः ॥१८ ॥**

**पदार्थ–**
**कन्यां** = (देवकीको आठौँ गर्भकी) कन्या भनिएकी
**यशोदायाः** = यशोदाकी
**सुतां** = छोरी (हुन्)
**कृष्णम् एव च** = (यशोदापुत्र भनिएका) श्रीकृष्ण चाहिँ
**देवक्याः** = देवकीका (पुत्र हुन्)
**रामं च** = बलराम पनि
**रोहिणीपुत्रं** = रोहिणीका पुत्र हुन्
**याभ्यां** = जो दुई श्रीकृष्ण र बलरामद्वारा
**वै** = निश्चय नै
**ते** = तपाईंका
**पुरुषाः** = व्यक्तिहरू (अरिष्टासुर, पूतना आदि)
**हताः** = मारिए
**बिभ्यता** = (तपाईंसँग) डराएका
**वसुदेवेन** = वसुदेवद्वारा (राम र श्रीकृष्ण)
**स्वमित्रे** = आफ्नो स्नेही मित्र
**नन्दे** = नन्दको घरमा
**न्यस्तौ** = राखिए
**तत्** = त्यो नारदको कुरा
**निशम्य** = सुनेर
**कोपात्** = क्रोधका कारण
**भोजपतिः** = भोजपति कंस
**प्रचलितेन्द्रियः** = इन्द्रिय विचलित भएको भयो

**वाक्यार्थ–** 'हे कंस ! देवकीको आठौँ गर्भबाट उत्पन्न भनिएकी कन्या यशोदाकी छोरी हुन्। यशोदापुत्र भनिएका श्रीकृष्ण चाहिँ देवकीका छोरा हुन्। बलराम वसुदेवपत्नी रोहिणीका छोरा हुन्। यिनै श्रीकृष्ण र बलरामले अरिष्टासुर, पूतना आदि तपाईंका अनुचरहरूलाई मारेका हुन्। तपाईंको डरका कारण वसुदेवले आफ्ना अनन्य प्रेमी मित्र नन्दको घरमा यिनीहरूलाई राखेका थिए।' नारदले भनेको यो कुरा सुनेर भोजपति कंसका सम्पूर्ण इन्द्रियहरू रिसले काँप्न थाले।

**निशातमसिमादत्त वसुदेवजिघांसया ।**

**निवारितो नारदेन तत्सुतौ मृत्युमात्मनः ॥ १९ ॥**

**ज्ञात्वा लोहमयैः पाशैर्बबन्ध सह भार्यया ।**

**प्रतियाते तु देवर्षौ कंस आभाष्य केशिनम् ॥ २० ॥**

**प्रेषयामास हन्येतां भवता रामकेशवौ ।**

**ततो मुष्टिकचाणूरशलतोशलकादिकान् ॥ २१ ॥**

**अमात्यान् हस्तिपांश्चैव समाहूयाह भोजराट् ।**

**भो भो निशम्यतामेतद् वीरचाणूरमुष्टिकौ ॥ २२ ॥**

**पदार्थ–**
**वसुदेवजिघांसया** = वसुदेवलाई मार्ने इच्छाले (कंसले)
**निशातम्** = बेसरी उद्याइएको (अति धारिलो)
**असिम्** = तरबार
**आदत्त** = लियो
**नारदेन** = नारदद्वारा
**निवारितः** = (वसुदेवलाई मार्नबाट) रोकिएको कंसले
**तत्सुतौ** = ती वसुदेवका छोराहरूलाई
**आत्मनः** = आफ्नो
**मृत्युम्** = मृत्यु हो भन्ने
**ज्ञात्वा** = बुझेर
**लोहमयैः** = फलामको
**पाशैः** = डोरीले
**भार्यया सह** = पत्नीले सहित वसुदेवलाई
**बबन्ध** = बाँधिदियो
**देवर्षौ** = देवर्षि नारद
**प्रतियाते तु** = जानेबित्तिकै
**कंसः** = कंसले
**केशिनम्** = केशीलाई
**आभाष्य** = सम्बोधन गरेर
**भवता** = तिमीले
**रामकेशवौ** = बलराम र श्रीकृष्णलाई
**हन्येतां** = मार्नू (भनेर गोकुलमा)
**प्रेषयामास** = पठायो
**ततः** = त्यसपछि (केशीलाई पठाएपछि)
**भोजराट्** = भोजहरूको राजा कंसले
**अमात्यान्** = मन्त्रीहरू
**हस्तिपान् च एव** = माउतेहरू
**मुष्टिकचाणूरशलतोशलकादिकान्** = मुष्टिक, चाणूर, शल, तोशल आदिलाई
**समाहूय** = बोलाएर
**आह** = भन्यो
**भो भो वीरचाणूरमुष्टिकौ** = हे वीर चाणूर र मुष्टिक
**एतत्** = मेरो यो कुरा
**निशाम्यताम्** = सुन

**वाक्यार्थ–** कंसले वसुदेवलाई मार्न भनेर धारिलो तरबार हातमा लियो तर नारदले उसलाई रोक्नुभयो। त्यसपछि कंसले आफ्नो मृत्युको कारण वसुदेवका दुई ओटा छोरा हुन् भन्ने बुझेर फलामका साङ्लाहरूले देवकी र वसुदेवलाई बाँध्यो। नारदजी गएपछि कंसले केशीलाई बोलाएर 'ए केशी ! तिमीले गोकुलमा गएर श्रीकृष्ण र बलरामलाई मार्नू' भनेर पठायो। केशी गएपछि कंसले मन्त्री, माउते, मुष्टिक, चाणूर, शल, तोशल आदिलाई बोलाएर भन्यो– 'हे वीर मुष्टिक र चाणूर ! तिमीहरू सबैले मेरो कुरा ध्यान दिएर सुन।'

**नन्दव्रजे किलासाते सुतावानकदुन्दुभेः।**
**रामकृष्णौ ततो मह्यं मृत्युः किल निदर्शितः ॥२३॥**
**भवद्भ्यामिह सम्प्राप्तौ हन्येतां मल्ललीलया।**
**मञ्चाः क्रियन्तां विविधा मल्लरङ्गपरिश्रिताः।**
**पौरा जानपदाः सर्वे पश्यन्तु स्वैरसंयुगम् ॥ २४ ॥**

**पदार्थ–**
**रामकृष्णौ** = बलराम र कृष्ण नामका
**आनकदुन्दुभेः** = वसुदेवका
**सुतौ** = दुई ओटा छोराहरू
**किल** = निश्चय नै
**नन्दव्रजे** = नन्दको व्रजभूमिमा
**आसाते** = बस्दछन्
**ततः** = ती दुईबाट
**मह्यं** = मेरा लागि
**मृत्युः** = मृत्यु
**किल** = निश्चय नै

**निदर्शितः** = (नारदद्वारा) देखाइएको छ (त्यसैले)
**इह** = यहाँ
**सम्प्राप्तौ** = आएका (ती दुई)
**भवद्भ्याम्** = तिमी दुईबाट
**मल्ललीलया** = मल्लयुद्धद्वारा
**हन्येतां** = मारियून्
**मल्लरङ्गपरिश्रिताः** = मल्लयुद्ध हुने परिसरमा
**विविधाः** = विविध किसिमका
**मञ्चाः** = मञ्च
**क्रियन्तां** = बनाइयून्
**पौराः** = नगरवासीहरू
**जानपदाः** = जनपदका निवासीहरू (गाउँलेहरू)
**सर्वे** = सबैले
**स्वैरसंयुगम्** = स्वतन्त्ररूपले चलेको मल्लयुद्ध
**पश्यन्तु** = हेरून्

**वाक्यार्थ–** 'गोकुलमा नन्दको घरमा वसुदेवका दुई पुत्र श्रीकृष्ण र बलराम बसेका छन्। ती दुई जनाबाट मेरो मृत्यु हुन्छ भन्ने कुरा नारदद्वारा बताइएको छ। त्यसैले जब ती दुई जना यहाँ आउँछन्, तब तिमीहरू दुई जनाले मल्लयुद्ध गरी तिनीहरूलाई मारिदिनू।' (त्यसपछि कंसले मन्त्रीहरूलाई भन्यो) 'मल्लयुद्ध हुने परिसरमा तिमीहरूले विविध किसिमका मञ्चहरू बनाउनू, जसमा नगरवासीहरू र गाउँलेहरू सबैले स्वतन्त्ररूपले मल्लयुद्ध हेरून्।'

**महामात्र त्वया भद्र रङ्गद्वार्युपनीयताम्।**
**द्विपः कुवलयापीडो जहि तेन ममाहितौ॥ २५॥**

**पदार्थ–**
**भद्र महामात्र** = हे सज्जन माउते
**त्वया** = तिमीद्वारा
**कुवलयापीडः** = कुवलयापीड नामक
**द्विपः** = हात्ती
**रङ्गद्वारि** = रङ्गमञ्चको ढोकामा
**उपनीयताम्** = ल्याइयोस्
**तेन** = त्यही हात्तीद्वारा
**मम** = मेरो
**अहितौ** = शत्रु श्रीकृष्ण र बलरामलाई
**जहि** = मार्नू

**वाक्यार्थ–** 'हे सज्जन माउते ! तिमीले रङ्गमञ्चको ढोकामा कुवलयापीड हात्तीलाई राख्नू। मेरा शत्रु कृष्ण र बलरामलाई त्यो हात्तीद्वारा मार्नू।

**आरभ्यतां धनुर्यागश्चतुर्दश्यां यथाविधि।**
**विशसन्तु पशून् मेध्यान् भूतराजाय मीढुषे॥ २६॥**

**पदार्थ–**
**चतुर्दश्यां** = चतुर्दशी तिथिमा
**धनुर्यागः** = धनुर्याग
**यथाविधि** = विधिपूर्वक
**आरभ्यतां** = आरम्भ गरियोस्
**मीढुषे** = मनोरथप्रदाता
**भूतराजाय** = भैरवरूपका रुद्रलाई
**मेध्यान्** = पवित्र
**पशून्** = पशुहरू
**विशसन्तु** = बलि चढाउनू

**वाक्यार्थ–** (कंसले मन्त्रीहरूलाई भन्यो) चतुर्दशी तिथिमा विधिपूर्वक धनुर्यागको प्रारम्भ गर्नू। त्यो यज्ञमा मनोरथप्रदाता भैरवरूप रुद्रका लागि यज्ञोचित पवित्र पशुहरूको बलि चढाउनू।

**टिप्पणी–** शैवतन्त्रमा धनुर्याग शत्रुमाथि विजय गराउने याग भनी प्रसिद्ध छ। धनुर्यागमा धनुमा

रुद्रको आवाहन गरी पूजा गरिन्छ।

**इत्याज्ञाप्यार्थतन्त्रज्ञ आहूय यदुपुङ्गवम्।**
**गृहीत्वा पाणिना पाणिं ततोऽक्रूरमुवाच ह ॥ २७ ॥**

**पदार्थ–**
**इति** = यसप्रकार (मन्त्रीहरूलाई)
**आज्ञाप्य** = आज्ञा दिएर
**अर्थतन्त्रज्ञः** = आफ्नो स्वार्थ सिद्ध गर्न जान्ने कंसले
**यदुपुङ्गवम्** = यदुश्रेष्ठ
**अक्रूरम्** = अक्रूरलाई
**आहूय** = बोलाएर
**पाणिना** = (आफ्नो) हातले
**पाणिं** = (अक्रूरको) हातलाई
**गृहीत्वा** = समाएर
**ततः** = त्यसपछि
**ह** = निश्चय नै
**उवाच** = भन्यो

**वाक्यार्थ–** यसप्रकार मन्त्रीहरूलाई आज्ञा दिएर आफ्नो स्वार्थसिद्ध गर्न जान्ने कंसले यदुवंशीहरूमा श्रेष्ठ अक्रूरलाई बोलायो र उनको हातलाई आफ्नो हातले समाउँदै भन्न लाग्यो।

**भो भो दानपते मह्यं क्रियतां मैत्रमादृतः।**
**नान्यस्त्वत्तो हिततमो विद्यते भोजवृष्णिषु ॥ २८ ॥**

**पदार्थ–**
**भो भो दानपते** = हे परमदानी अक्रूर
**मह्यं** = मेरा लागि
**मैत्रम्** = मित्रोचित कार्य
**क्रियतां** = गर्नुहोस् (किनभने)
**भोजवृष्णिषु** = भोजवंशी र वृष्णिवंशीहरूमा
**त्वत्तः** = तपाईंभन्दा
**अन्यः** = अर्को
**आदृतः** = आदरणीय र
**हिततमः** = परम हितकारी
**न विद्यते** = छैन

**वाक्यार्थ–** हे परमदानी अक्रूर ! तपाईंले मेरो लागि मित्रोचित कार्य गरिदिनुहोस्, भोजवंशी र वृष्णिवंशी यादवहरूमा तपाईं बाहेक अर्को कुनै पनि व्यक्ति मेरो लागि आदरणीय र परम हितकारी छैन।

**अतस्त्वामाश्रितः सौम्य कार्यगौरवसाधनम्।**
**यथेन्द्रो विष्णुमाश्रित्य स्वार्थमध्यगमद् विभुः ॥ २९ ॥**

**पदार्थ–**
**अतः** = त्यसकारण
**सौम्य** = हे प्रिय
**कार्यगौरवसाधनम्** = अति नै ठुलो र महत्त्वपूर्ण कार्य सिद्ध गर्न सक्षम
**त्वाम्** = तपाईंलाई
**आश्रितः** = आश्रय लिएको छु
**यथा** = जसरी
**विभुः** = शक्तिशाली
**इन्द्रः** = इन्द्रले
**विष्णुं** = विष्णुलाई
**आश्रित्य** = आश्रय मानेर
**स्वार्थम्** = आफ्नो प्रयोजनलाई
**अध्यगमत्** = प्राप्त गरेका थिए

**वाक्यार्थ–** त्यसैले हे अक्रूर ! मेरो यो अति नै ठुलो र महत्त्वपूर्ण कार्य सिद्ध गर्न तपाईं नै सक्षम

हुनुहुन्छ। अतः मैले तपाईंको आश्रय लिएको छु, जसरी शक्तिशाली इन्द्रले विष्णुको आश्रय लिएर आफ्नो प्रयोजन सिद्ध गरेका थिए।

**गच्छ नन्दव्रजं तत्र सुतावानकदुन्दुभेः।**
**आसाते ताविहानेन रथेनानय मा चिरम्॥ ३०॥**

**पदार्थ–**
**नन्दव्रजं** = नन्दको व्रजमा
**गच्छ** = जानुहोस्
**तत्र** = त्यहाँ
**आनकदुन्दुभेः** = वसुदेवका
**सुतौ** = दुई ओटा छोराहरू
**आसाते** = बसेका छन्
**तौ** = ती दुई जनालाई
**अनेन** = यो
**रथेन** = रथद्वारा
**इह** = यहाँ
**मा चिरम्** = ढिलो नगरी
**आनय** = ल्याउनुहोस्

**वाक्यार्थ–** तपाईं नन्दको व्रजमा जानुहोस्। त्यहाँ वसुदेवका दुई ओटा छोरा छन्, ती दुबैलाई यो रथमा राखेर यहाँ ल्याउनुहोस्, अब यस काममा ढिलो नगर्नुहोस्।

**निसृष्टः किल मे मृत्युर्देवैर्वैकुण्ठसंश्रयैः।**
**तावानय समं गोपैर्नन्दाद्यैः साभ्युपायनैः॥ ३१॥**

**पदार्थ–**
**वैकुण्ठसंश्रयैः** = विष्णुको आश्रयमा बस्ने
**देवैः** = देवताहरूद्वारा
**मे** = मेरो
**मृत्युः** = मृत्यु
**किल** = निश्चय नै
**निसृष्टः** = निश्चय गरिएको छ (त्यसैले)
**साभ्युपायनैः** = उपहारहरू साथमा लिएका
**नन्दाद्यैः** = नन्द आदि
**गोपैः** = गोपहरू
**समं** = सहित
**तौ** = ती श्रीकृष्ण र बलरामलाई
**आनय** = ल्याउनुहोस्

**वाक्यार्थ–** (श्रीकृष्ण र बलरामको हातबाट) मेरो मृत्यु हुन्छ भनी भगवान् विष्णुको आश्रयमा बाँच्ने देवताहरूले मेरो मृत्यु निश्चित गरेका छन् रे। त्यसैले उपहार साथमा लिएका नन्द आदि गोपहरू सहित ती श्रीकृष्ण र बलरामलाई यहाँ लिएर आउनुहोस्।

**घातयिष्य इहानीतौ कालकल्पेन हस्तिना।**
**यदि मुक्तौ ततो मल्लैर्घातये वैद्युतोपमैः॥ ३२॥**

**पदार्थ–**
**इह** = यहाँ
**आनीतौ** = ल्याइएका श्रीकृष्ण र बलरामलाई
**कालकल्पेन** = काल जस्तो
**हस्तिना** = हात्तीद्वारा
**घातयिष्ये** = मार्न लगाउनेछु
**यदि** = कथञ्चित्
**ततः** = त्यो हात्तीबाट
**मुक्तौ** = मुक्त भए भने (बाँचेका ती दुईलाई)
**वैद्युतोपमैः** = वज्रजस्ता कठोर
**मल्लैः** = पहलवान्हरूद्वारा
**घातये** = मार्न लगाउनेछु

**वाक्यार्थ–** यहाँ ल्याइएका श्रीकृष्ण र बलरामलाई म कालजस्तो हात्तीद्वारा मार्न लगाउँछु। कथञ्चित् हात्तीबाट बाँचे भने पनि म वज्रजस्ता कठोर पहलवान्‌हरूद्वारा तिनीहरूलाई मार्नेछु।

**तयोर्निहतयोस्तप्तान् वसुदेवपुरोगमान्।**
**तद्बन्धून् निहनिष्यामि वृष्णिभोजदशार्हकान्॥ ३३॥**

**पदार्थ–**
**तयोः** = ती दुई श्रीकृष्ण र बलराम
**निहतयोः** = मारिएपछि
**तप्तान्** = (तिनीहरूको मृत्युले) शोकाकुल बनेका
**वसुदेवपुरोगमान्** = वसुदेव आदि
**वृष्णिभोजदशार्हकान्** = वृष्णि, भोज र दशार्हवंशी
**तद्बन्धून्** = वसुदेवका बन्धुबान्धवहरूलाई
**निहनिष्यामि** = मार्नेछु

**वाक्यार्थ–** श्रीकृष्ण र बलराम मारिएपछि शोकाकुल बनेका वसुदेव आदि वृष्णि, भोज र दशार्हवंशी यादवहरू अनि वसुदेवका बन्धुबान्धवहरूलाई मार्नेछु।

**उग्रसेनं च पितरं स्थविरं राज्यकामुकं।**
**तद्भ्रातरं देवकं च ये चान्ये विद्विषो मम॥ ३४॥**

**पदार्थ–**
**स्थविरं** = बुढो भइसकेको (तर)
**राज्यकामुकं** = राज्य गर्ने इच्छा गरिरहेका
**पितरं** = मेरो पिता
**उग्रसेनं च** = उग्रसेनलाई
**तद्भ्रातरं** = उनका भाइ
**देवकं च** = देवकलाई
**ये च अन्ये** = जो अरू पनि
**मम** = मेरा
**विद्विषः** = रिस गर्नेहरू छन् (ती सबैलाई मार्नेछु)

**वाक्यार्थ–** बुढा भइसके पनि राज्य गर्ने इच्छा गरिरहेका मेरा पिता उग्रसेनलाई, तिनका भाइ देवकलाई तथा जो जो मेरो रिस गर्दछन्, ती सबैलाई म मार्नेछु।

**ततश्चैषा मही मित्र भवित्री नष्टकण्टका।**
**जरासन्धो मम गुरुर्द्विविदो दयितः सखा॥३५॥**
**शम्बरो नरको बाणो मय्येव कृतसौहृदाः।**
**तैरहं सुरपक्षीयान् हत्वा भोक्ष्ये महीं नृपान्॥ ३६॥**

**पदार्थ–**
**मित्र** = हे मित्र (अक्रूर)
**ततः च** = त्यसपछि त
**एषा** = यो
**मही** = पृथिवी
**नष्टकण्टका** = शत्रुरहित (काँडाहरू नासिएको)
**भवित्री** = हुनेछ
**मम** = मेरो
**गुरुः** = पूज्य (ससुरा)
**जरासन्धः** = जरासन्ध पनि
**दयितः** = प्रिय
**सखा** = मित्र
**द्विविदः** = द्विविद (वानर जातिको)

**शम्बरः** = शम्बरासुर
**नरकः** = नरकासुर
**बाणः** = बाणासुर (यिनीहरूले पनि)
**मयि एव** = मसँग नै
**कृतसौहृदाः** = मित्रता गरेका छन्
**अहं** = म
**तैः** = तिनीहरूद्वारा
**सुरपक्षीयान्** = देवताहरूको पक्ष लिने
**नृपान्** = राजाहरूलाई
**हत्वा** = मारेर
**महीं** = सम्पूर्ण पृथिवीलाई
**भोक्ष्ये** = भोग गर्नेछु

**वाक्यार्थ–** हे मित्र अक्रूर ! त्यसपछि यो सम्पूर्ण पृथिवी मेरो शत्रुले रहित हुनेछ। मेरा पूज्य ससुरा जरासन्ध, प्रिय मित्र द्विविद, शम्बरासुर, नरकासुर र बाणासुरले पनि मसँग मित्रता गरेका छन्। यिनीहरूको मद्दतले म देवताका पक्षपाती अन्य राजाहरूलाई पनि मारेर सम्पूर्ण पृथिवीको भोग गर्नेछु।

**एतज्ज्ञात्वानय क्षिप्रं रामकृष्णाविहार्भकौ।**
**धनुर्मखनिरीक्षार्थं द्रष्टुं यदुपुरश्रियम्॥ ३७॥**

पदार्थ–
**एतत्** = यो कुरा (मेरो योजनाको रहस्यलाई)
**ज्ञात्वा** = बुझेर
**धनुर्मखनिरीक्षार्थं** = धनुर्यज्ञ हेर्नको लागि (तथा)
**यदुपुरश्रियम्** = यदुपुर (मथुरा नगरी)को शोभालाई
**द्रष्टुं** = हेर्नका लागि
**अर्भकौ** = बालक
**रामकृष्णौ** = बलराम र कृष्णलाई
**इह** = यहाँ
**क्षिप्रं** = चाँडो
**आनय** = ल्याउनुहोस्

**वाक्यार्थ–** मेरो योजनाको रहस्य बुझेर तपाईं व्रजभूमिमा जानुहोस् र बालक बलराम र कृष्णलाई धनुर्यज्ञ र मथुरा नगरीको शोभा हेर्नका लागि भनेर यहाँ लिएर आउनुहोस्।

**अक्रूर उवाच** (अक्रूरले भने)

**राजन् मनीषितं सम्यक् तव स्वावद्यमार्जनम्।**
**सिद्ध्यसिद्ध्योः समं कुर्याद् दैवं हि फलसाधनम्॥ ३८॥**

पदार्थ–
**राजन्** = हे राजा
**स्वावद्यमार्जनम्** = आफ्नो मृत्युको परिहार गर्ने विषयमा
**तव** = तपाईंले
**मनीषितं** = गर्नुभएको विचार
**सम्यक्** = राम्रो हो (तापनि)
**सिद्ध्यसिद्ध्योः** = फलको सिद्धि र असिद्धिमा (मनलाई)
**समं** = समभाव
**कुर्यात्** = गर्नुपर्दछ
**हि** = किनभने
**दैवं** = दैवको अधीनमा नै
**फलसाधनम्** = फलको सिद्धि रहन्छ

**वाक्यार्थ–** हे राजा ! आफ्नो मृत्युको परिहारका लागि तपाईंले जो विचार गर्नुभयो त्यो राम्रो हो, तर मान्छेले चाहेको फलको प्राप्ति हुँदा होस् या नहुँदा, आफ्नो मनलाई समभावमा राख्नुपर्दछ, किनभने फलको सिद्धि आफ्नो अधीनमा नभएर दैवको अधीनमा रहन्छ।

**मनोरथान् करोत्युच्चैर्जनो दैवहतानपि ।**
**युज्यते हर्षशोकाभ्यां तथाप्याज्ञां करोमि ते ॥ ३९ ॥**

**पदार्थ–**
**जनः** = मनुष्य
**दैवहतान् अपि** = (प्रारब्धकर्मका फलदाता) दैवद्वारा नष्ट भइसकेको भए पनि
**उच्चैः** = ठुला-ठुला
**मनोरथान्** = इच्छाहरू
**करोति** = गर्दछ (अनि)
**हर्षशोकाभ्यां** = हर्ष र शोकद्वारा
**युज्यते** = युक्त हुन्छ
**तथा अपि** = तापनि
**ते** = तपाईंको
**आज्ञां** = आज्ञाको पालन
**करोमि** = गर्दछु

**वाक्यार्थ–** दैवद्वारा उसको मनोरथ नष्ट गरिएको भए पनि मान्छे आफ्नो इच्छाको पूर्णताका लागि विभिन्न उपायहरू गर्दछ अनि चाहेको वस्तु (प्रारब्ध कर्म अनुसार) प्राप्त हुँदा खुसी र नहुँदा दुःखी बन्दछ, तापनि हे महाराज ! म तपाईंको आज्ञाको पालन गर्दछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमादिश्य चाक्रूरं मन्त्रिणश्च विषृज्य सः ।**
**प्रविवेश गृहं कंसस्तथाक्रूरः स्वमालयम् ॥ ४० ॥**

**पदार्थ–**
**एवम्** = यसप्रकार
**अक्रूरं** = अक्रूरलाई
**मन्त्रिणः च** = मन्त्रीहरूलाई पनि
**आदिश्य** = आदेश दिएर
**विसृज्य च** = बिदा पनि दिएर
**सः** = त्यो
**कंसः** = कंसले
**गृहं** = आफ्नो महलमा
**तथा** = त्यसै गरी
**अक्रूरः** = अक्रूरले
**स्वम्** = आफ्नो
**आलयम्** = घरमा
**प्रविवेश** = प्रवेश गरे

**वाक्यार्थ–** यसप्रकार अक्रूरलाई र आफ्ना मन्त्रीहरूलाई आदेश दिएर कंसले उनीहरूलाई बिदा दियो। त्यसपछि कंस आफ्नो महलमा प्रवेश गऱ्यो र अक्रूर पनि आफ्नो घरमा प्रवेश गरे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**पूर्वार्धेऽक्रूरसम्प्रेषणं नाम षट्त्रिंशोऽध्यायः ॥ ३६ ॥**

# अथ सप्तत्रिंशोऽध्यायः

## व्योमासुर वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**केशी तु कंसप्रहितः खुरैर्महीं महाहयो निर्जरयन् मनोजवः।**

**सटावधूताभ्रविमानसङ्कुलं कुर्वन्नभो हेषितभीषिताखिलः॥ १॥**

**विशालनेत्रो विकटास्यकोटरो बृहद्गलो नीलमहाम्बुदोपमः ।**

**दुराशयः कंसहितं चिकीर्षुर्व्रजं स नन्दस्य जगाम कम्पयन्॥२॥**

**पदार्थ–**
**कंसप्रहितः** = (श्रीकृष्णलाई मार्न) कंसद्वारा पठाइएको
**दुराशयः** = दुष्ट मनसाय भएको
**केशी तु** = केशीले चाहिँ
**मनोजवः** = मनको गतिमा दौडने
**महाहयः** = ठुलो घोडाको रूप धारण गरी
**खुरैः** = टापद्वारा
**महीं** = पृथिवीलाई
**निर्जरयन्** = जीर्ण बनाउँदै
**नभः** = आकाशलाई
**सटावधूताभ्रविमानसङ्कुलं** = जगर (गर्दनका रौँ)हरूको फट्काद्वारा बादल र विमानहरू तितरबितर भएको
**कुर्वन्** = बनाउँदै
**हेषितभीषिताखिलः** = आफ्नो हिनहिनाहट आवाजले सम्पूर्ण जगत्लाई त्रस्त बनाएको
**बृहद्गलः** = लामो मोटो घाँटी भएको
**नीलमहाम्बुदोपमः** = कालो ठुलो बादलजस्तो
**कंसहितं** = कंसको हित
**चिकीर्षुः** = गर्न चाहने
**सः** = त्यो केशी
**नन्दस्य** = नन्दको
**व्रजं** = व्रजभूमिलाई
**कम्पयन्** = कपाउँदै
**जगाम** = गयो

**वाक्यार्थ–** कंसले श्रीकृष्णलाई मार्न पठाएको दुष्ट केशीले मनको गतिमा कुद्न सक्ने, लामो र मोटो घाँटी भएको, कालो ठुलो बादल जस्तो देखिने विशाल घोडाको रूप धारण गर्‍यो र ऊ आफ्ना टाप बजारेर पृथिवीलाई जीर्ण बनाउँदै, जगरको फट्काले आकाशका बादल र विमानहरूलाई तितरबितर बनाउँदै र आफ्नो हिनहिनाहट आवाजले सम्पूर्ण जगत्लाई त्रस्त बनाउँदै कंसको हित गर्नका लागि नन्दको व्रजभूमिलाई कपाउँदै त्यहाँ पुग्यो।

**तं त्रासयन्तं भगवान् स्वगोकुलं तद्धेषितैर्वालविघूर्णिताम्बुदम्।**

**आत्मानमाजौ मृगयन्तमग्रणीरुपाह्वयत् स व्यनदन्मृगेन्द्रवत्॥ ३॥**

**पदार्थ–**
**तद्धेषितैः** = त्यो हिनहिनाहट आवाजले
**स्वगोकुलं** = आफ्ना गोकुलनिवासी जनहरूलाई
**त्रासयन्तं** = भयभीत गराइरहेको

**वालविघूर्णिताम्बुदम्** = पुच्छरका रौँहरूले बादलहरूलाई तितरबितर गरिहेको
**आजौ** = युद्धका लागि
**आत्मानम्** = आफूलाई
**मृगयन्तम्** = खोजिरहेको
**तं** = त्यो केशी दैत्यलाई
**अग्रणीः** = सबैको अगाडि हिँड्नुभएका
**भगवान्** = भगवान्ले
**उपाह्वयत्** = आफ्नो अगाडि बोलाउनुभयो
**सः** = त्यो दैत्यले पनि
**मृगेन्द्रवत्** = सिंहले झैँ
**व्यनदत्** = गर्जना गऱ्यो

**वाक्यार्थ–** कठोर हिनहिनाहटले गोकुलका वासिन्दाहरूलाई भयभीत गरिरहेको, पुच्छरका रौँहरूले आकाशका बादलहरूलाई तितरबितर बनाइरहेको र युद्ध गर्नका लागि आफूलाई नै खोजिरहेको त्यो घोडालाई भगवान्ले देख्नुभयो र उहाँले त्यसलाई आफ्नो अगाडि बोलाउनुभयो। त्यसपछि त्यो दैत्य केशीले सिंहले झैँ गर्जना गऱ्यो।

**स तं निशाम्याभिमुखो मुखेन खं पिबन्निवाभ्यद्रवदत्यमर्षणः।**
**जघान पद्भ्यामरविन्दलोचनं दुरासदश्चण्डजवो दुरत्ययः॥ ४॥**

पदार्थ–
**दुरासदः** = नजिकै जान नसकिने
**चण्डजवः** = अति वेगशाली
**दुरत्ययः** = जित्न नसकिने
**सः** = त्यो केशीले
**तं** = ती श्रीकृष्णलाई
**निशाम्य** = देखेर
**अत्यमर्षणः** = अत्यन्त क्रुद्ध भई
**अभिमुखः** = (भगवान्को) सामुन्ने भएर
**मुखेन** = मुखद्वारा
**खं** = आकाशलाई
**पिबन् इव** = पिउँला झैँ गरी
**अभ्यद्रवत्** = दौडिएर आयो
**अरविन्दलोचनं** = कमलनयन भगवान्लाई
**पद्भ्याम्** = आफ्नो लात्तीले
**जघान** = प्रहार गऱ्यो

**वाक्यार्थ–** नजिकै जान पनि नसकिने, दुर्विजेय र महावेगशाली त्यो केशीले भगवान् श्रीकृष्णलाई देखेपछि रुन् क्रुद्ध भई उहाँको सामुन्ने भएर मुखले आकाशलाई पिउँला झैँ गरी दौडिएर आई उहाँ कमलनयन भगवान्लाई लात्तीले हिर्कायो।

**तद् वञ्चयित्वा तमधोक्षजो रुषा प्रगृह्य दोर्भ्यां परिविध्य पादयोः।**
**सावज्ञमुत्सृज्य धनुःशतान्तरे यथोरगं तार्क्ष्यसुतो व्यवस्थितः॥ ५॥**

पदार्थ–
**अधोक्षजः** = इन्द्रियातीत भगवान्ले
**तद्** = त्यो केशीको प्रहारलाई
**वञ्चयित्वा** = छलेर
**रुषा** = रिसले
**तम्** = त्यो केशीलाई
**पादयोः** = (हान्नलाई उठाएका) खुट्टामा
**दोर्भ्यां** = दुई हातले
**प्रगृह्य** = च्याप्प समाएर
**तार्क्ष्यसुतः** = कश्यपपुत्र गरुडले
**उरगं यथा** = सर्पलाई झैँ
**परिविध्य** = घुमाएर
**सावज्ञम्** = अपमानका साथ
**धनुःशतान्तरे** = सय धनु (चारसय हात) बराबर टाढा
**उत्सृज्य** = फ्याँकेर
**व्यवस्थितः** = ढुक्कसँग रहनुभयो

**वाक्यार्थ–** इन्द्रियातीत भगवान्ले पनि केशीले हानेको लात्तीलाई छलेर रिसाउँदै आफूलाई हान्न उठाएको खुट्टामा दुबै हातले च्याप्प समात्नुभयो र कश्यपपुत्र गरुडले सर्पलाई घुमाए जैँ घुमाएर केशीलाई तिरस्कारपूर्वक चार सय हात टाढा फ्याँकिदिनुभयो अनि ढुक्कसँग रहनुभयो।

**सः लब्धसंज्ञः पुनरुत्थितो रुषा व्यादाय केशी तरसापतद्धरिम्।**
**सोऽप्यस्य वक्त्रे भुजमुत्तरं स्मयन् प्रवेशयामास यथोरगं बिले ॥ ६ ॥**

पदार्थ–
**लब्धसंज्ञः** = चेतना प्राप्त गरेर
**पुनः** = फेरि पनि
**उत्थितः** = उठेको
**सः** = त्यो
**केशी** = केशीले
**रुषा** = क्रोधका कारण
**व्यादाय** = मुख बाएर
**तरसा** = वेगपूर्वक
**हरिम्** = भगवान् श्रीहरिलाई (निल्न)
**आपतत्** = आयो
**सः अपि** = उहाँले पनि
**स्मयन्** = मुस्कुराउँदै
**बिले** = दुलोमा
**उरगं यथा** = सर्पलाई जैँ
**अस्य** = यो केशीको
**वक्त्रे** = मुखमा
**उत्तरं** = देब्रे
**भुजम्** = हात
**प्रवेशयामास** = छिराउनुभयो

**वाक्यार्थ–** (फ्याँकिएको केशी मूर्छित भयो, त्यसपछि) जब चेतना प्राप्त गऱ्यो तब फेरि लडाइँ गर्नका लागि त्यो केशी उठ्यो र क्रोधपूर्वक भगवान्लाई निल्न भनेर मुख बाएर तीव्र गतिमा दौडिएर आयो। त्यो देखेर भगवान्ले मुस्कुराउँदै उसको मुखमा आफ्नो देब्रे हात छिराउनुभयो।

**दन्ता निपेतुर्भगवद्भुजस्पृशस्ते केशिनस्तप्तमयः स्पृशो यथा।**
**बाहुश्च तद्देहगतो महात्मनो यथामयः संववृधे उपेक्षितः ॥ ७ ॥**

पदार्थ–
**भगवद्भुजस्पृशः** = भगवान्को हातले छोइएका
**ते** = ती
**केशिनः** = केशीका
**दन्ताः** = दाँतहरू
**तप्तम्** = तातेको
**अयः स्पृशः** = फलामलाई स्पर्श गर्ने प्राणीहरू
**यथा** = जैँ
**निपेतुः** = झरे
**महात्मनः** = भगवान्को
**तद्देहगतः** = केशीको मुखभित्र छिरेको
**बाहुः च** = हात पनि
**उपेक्षितः** = उपेक्षा गरिएको
**आमयः यथा** = रोगहरू जैँ
**संववृधे** = बढ्न थाल्यो

**वाक्यार्थ–** जसरी तातेको फलामको स्पर्शले प्राणीहरू मरेर झर्छन्, त्यसै गरी भगवान्को हातले छुनासाथ केशीका मुखबाट दाँतहरू झरे। केशीको मुखभित्र छिरेको भगवान्को हात पनि उपचार नगरिएको रोग बढे जैँ गरी बढ्न थाल्यो।

**समेधमानेन स कृष्णबाहुना निरुद्धवायुश्चरणांश्च विक्षिपन्।**
**प्रस्विन्नगात्रः परिवृत्तलोचनः पपात लेण्डं विसृजन् क्षितौ व्यसुः ॥८ ॥**

**पदार्थ–**
**समेधमानेन** = बढ्दै गएको
**कृष्णबाहुना** = श्रीकृष्णको बाहुका कारण
**निरुद्धवायुः** = सास रोकिएको
**चरणान् च** = खुट्टालाई
**विक्षिपन्** = फ्याँक्दै
**प्रस्विन्नगात्रः** = पसिनाले शरीर भिजेको
**परिवृत्तलोचनः** = आँखा पल्टाएको
**लेण्डं** = लिदी (मल)
**विसृजन्** = त्यागिरहेको
**सः** = त्यो केशी
**व्यसुः** = निष्प्राण भई
**क्षितौ** = भुइँमा
**पपात** = पल्टियो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको बढदैगरेको हातले उसको सास रोकियो। ऊ आफ्ना खुट्टाहरू यताउता फाल्दै फट्फटाउन थाल्यो। पसिनाले पूरै शरीर भिजेको, आँखा पल्टाइरहेको र लिदी त्यागिरहेको त्यो केशी दैत्य निष्प्राण भई भुइँमा पसारियो।

**तद्देहतः कर्कटिकाफलोपमाद् व्यसोरपाकृष्य भुजं महाभुजः।**
**अविस्मितोऽयत्नहतारिरुत्स्मयैः प्रसूनवर्षैर्दिविषद्भिरीडितः॥ ९॥**

**पदार्थ–**
**महाभुजः** = महाबाहु भगवान्ले
**व्यसोः** = निष्प्राण भएको
**कर्कटिकाफलोपमात्** = (पाकेको) काँक्रो जस्तो गलेको
**तद्देहतः** = त्यो केशीको शरीरबाट
**भुजं** = आफ्नो हातलाई
**अपाकृष्य** = निकालेर
**अयत्नहतारिः** = मेहनत नगरीकन नै शत्रुलाई मार्नुभएका
**अविस्मितः** = विस्मयरहित (गर्वरहित) भगवान्
**उत्स्मयैः** = आश्चर्यचकित भई
**प्रसूनवर्षैः** = पुष्पवृष्टि गरिरहेका
**दिविषद्भिः** = स्वर्गमा रहने देवताहरूद्वारा
**ईडितः** = स्तुति गरिनुभयो

**वाक्यार्थ–** मेहनत नगरीकन नै शत्रुलाई मार्नुभएका महाबाहु भगवान् श्रीकृष्णले पाकेको काँक्रो झैं गलेको त्यो केशीको शरीरबाट आफ्नो हात निकाल्नुभयो। (त्यस्तो महापराक्रमी दैत्यलाई सजिलै मारेको देखेर) आश्चर्यचकित भएका स्वर्गका देवताहरूले विस्मयरहित भगवान् श्रीकृष्णमाथि पुष्पवृष्टि गरे र उहाँको स्तुति गरे।

**देवर्षिरुपसङ्गम्य भागवतप्रवरो नृप।**
**कृष्णमक्लिष्टकर्माणं रहस्येतदभाषत॥ १०॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**भागवतप्रवरः** = भगवान्का भक्तहरूमा श्रेष्ठ
**देवर्षिः** = देवर्षि नारदले
**अक्लिष्टकर्माणं** = क्लेश विना नै कर्महरू गर्ने
**कृष्णं** = भगवान् श्रीकृष्णको
**उपसङ्गम्य** = नजिक गएर
**रहसि** = एकान्तमा
**एतत्** = यसो
**अभाषत** = भन्नुभयो

**वाक्यार्थ–** हे महाराज परीक्षित्! भगवान्का भक्तहरूमा श्रेष्ठ देवर्षि नारद एक दिन सजिलै कर्महरू गर्नुहुने भगवान् श्रीकृष्णको नजिकमा जानुभयो र उहाँलाई एकान्तमा भन्नुभयो।

**कृष्ण कृष्णाप्रमेयात्मन् योगेश जगदीश्वर।**
**वासुदेवाखिलावास सात्वतां प्रवर प्रभो॥ ११॥**
**त्वमात्मा सर्वभूतानामेको ज्योतिरिवैधसाम्।**
**गूढो गुहाशयः साक्षी महापुरुष ईश्वरः॥ १२॥**

**पदार्थ–**
**कृष्ण कृष्ण** = हे श्रीकृष्ण हे श्रीकृष्ण
**अप्रमेयात्मन्** = मन र इन्द्रियहरूको विषय नहुने हे परमात्मा
**योगेश** = हे योगेश्वर
**जगदीश्वर** = हे जगत्‌का मालिक
**वासुदेव** = हे वासुदेव
**अखिलावास** = सम्पूर्ण प्राणीहरूको हृदयमा निवास गर्ने
**सात्वतां** = यदुवंशीहरूमा
**प्रवर** = श्रेष्ठ
**प्रभो** = हे भगवान्
**त्वम्** = हजुर
**एकः** = एक मात्र
**सर्वभूतानाम्** = सम्पूर्ण प्राणीहरूको
**आत्मा** = आत्मा हुनुहुन्छ
**एधसाम्** = काठहरूमा
**ज्योतिः इव** = अग्नि झैँ
**गूढः** = ढाकिएर रहनुहुन्छ
**गुहाशयः** = (पञ्चकोशरूपी) गुफामा बस्ने
**साक्षी** = सर्वद्रष्टा
**महापुरुषः** = पुरुषोत्तम
**ईश्वरः** = सर्वनियन्ता पनि हुनुहुन्छ

**वाक्यार्थ–** हे श्रीकृष्ण ! हजुर मन र इन्द्रियहरूको विषयभन्दा पनि टाढा हुनुहुन्छ। हे योगेश्वर !, हे वासुदेव ! हजुर नै सम्पूर्ण जगत्‌को मालिक हुनुहुन्छ र उनीहरूका हृदयमा निवास गर्नुहुन्छ। यदुवंशीहरूमा श्रेष्ठ हजुर नै सम्पूर्ण प्राणीहरूको हृदयमा अन्तर्यामीरूपले काठमा अग्नि झैँ ढाकिएर रहनुभएको छ। पञ्चकोशरूपी गुफामा निवास गर्ने सर्वद्रष्टा हे पुरुषोत्तम ! सम्पूर्ण जगत्‌को नियन्ता पनि हजुर नै हुनुहुन्छ।

**आत्मनात्माश्रयः पूर्वं मायया ससृजे गुणान्।**
**तैरिदं सत्यसङ्कल्पः सृजस्यत्स्यवसीश्वरः॥ १३॥**

**पदार्थ–**
**आत्माश्रयः** = आफैँमा अवस्थित (स्वतन्त्र)
**सत्यसङ्कल्पः** = सङ्कल्प मात्रले सृष्टि आदि गर्ने
**ईश्वरः** = सर्वसमर्थ हजुरले
**आत्मना** = आफूले नै
**मायया** = (आफूदेखि अभिन्न) माया शक्तिद्वारा
**पूर्वं** = पहिला
**गुणान्** = (सत्त्व आदि) गुणहरूलाई
**ससृजे** = सृष्टि गर्नुहुन्छ (अनि)
**तैः** = तिनै गुणहरूद्वारा
**इदं** = यो सम्पूर्ण विश्वलाई
**सृजसि** = सृष्टि गर्नुहुन्छ
**अवसि** = रक्षा गर्नुहुन्छ
**अत्सि** = संहार गर्नुहुन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुर आफैँमा अवस्थित सर्वस्वतन्त्र हुनुहुन्छ। सर्वसमर्थ हजुरले आफ्नो सङ्कल्पले नै (विना कुनै कारण) आफूदेखि अभिन्न मायाशक्तिद्वारा पहिला सत्त्व, रज र तमोगुणको

सृष्टि गर्नुहुन्छ अनि तिनै गुणहरूद्वारा यो सम्पूर्ण जगत्को सृष्टि, रक्षा र संहार गर्नुहुन्छ।

**स त्वं भूधरभूतानां दैत्यप्रमथरक्षसाम्।**
**अवतीर्णो विनाशाय सेतूनां रक्षणाय च॥ १४॥**

पदार्थ–
**सः त्वं** = त्यस्ता हजुर नै
**भूधरभूतानां** = राजाको रूप धारण गरेका
**दैत्यप्रमथरक्षसाम्** = दैत्य, प्रमथ र राक्षसहरूको
**विनाशाय** = विनाशका लागि
**सेतूनां** = धर्ममर्यादाका परिपालन गर्ने साधुहरूको
**रक्षणाय च** = रक्षा गर्नका लागि पनि
**अवतीर्णः** = अवतीर्ण हुनुभएको छ

**वाक्यार्थ–** त्यही परमेश्वर हजुर नै अहिले राजा बनेर बसेका दैत्य, प्रमथ र राक्षसहरूको विनाश गर्न र धर्ममर्यादाको परिपालन गर्ने साधुहरूको रक्षा गर्नका लागि अवतीर्ण हुनुभएको छ।

**दिष्ट्या ते निहतो दैत्यो लीलयायं हयाकृतिः।**
**यस्य हेषितसन्त्रस्तास्त्यजन्त्यनिमिषा दिवम्॥ १५॥**

पदार्थ–
**दिष्ट्या** = खुसीको कुरो हो
**यस्य** = जुन दैत्यको
**हेषितसन्त्रस्ताः** = हिनहिनाहटबाट डराएका
**अनिमिषाः** = देवताहरू
**दिवम्** = स्वर्गलाई नै
**त्यजन्ति** = छोडेर भाग्दछन्
**अयं** = त्यही यो
**हयाकृतिः** = घोडाको रूप लिने
**दैत्यः** = दैत्य केशी
**ते** = हजुरद्वारा
**लीलया** = खेल–खेलमै
**निहतः** = मारियो

**वाक्यार्थ–** हे भगवान्! घोडाको रूप लिने केशी दैत्यको हिनहिनाहटबाट डराएर देवताहरू स्वर्ग छाडेर भाग्दथे। त्यही दैत्यलाई हजुरले सजिलै मारिदिनुभयो, यो खुसीको कुरो हो।

**चाणूरं मुष्टिकं चैव मल्लानन्यांश्च हस्तिनम्।**
**कंसं च निहतं द्रक्ष्ये परश्वोऽहनि ते विभो॥ १६॥**

पदार्थ–
**विभो** = हे प्रभु
**परश्वः अहनि** = पर्सिको दिनमा
**चाणूरं** = चाणूर
**मुष्टिकं** = मुष्टिक
**अन्यान्** = अरू
**मल्लान् च एव** = पहलवान्हरू-लाई पनि
**हस्तिनम् च** = हात्तीलाई पनि
**कंसं च** = कंसलाई र
**ते** = हजुरद्वारा
**निहतं** = मारिएको
**द्रक्ष्ये** = देख्नेछु

**वाक्यार्थ–** हे प्रभु! अब म पर्सि हजुरद्वारा चाणूर, मुष्टिक समेतका अन्य पहलवान्हरूलाई, हात्तीलाई र कंसलाई पनि मारिएको देख्नेछु।

**तस्यानु शङ्खयवनमुराणां नरकस्य च ।**

**पारिजातापहरणमिन्द्रस्य च पराजयम् ॥ १७ ॥**

**पदार्थ–**
**तस्य अनु** = त्यसपछि
**शङ्खयवनमुराणां** = शङ्ख, यवन, मुर नामका असुरहरूको र
**नरकस्य च** = नरकको पनि (वध देख्नेछु)
**पारिजातापहरणम्** = पारिजातको अपहरण (र)
**इन्द्रस्य च** = इन्द्रको पनि
**पराजयम्** = पराजय (देख्नेछु)

**वाक्यार्थ–** त्यसपछि शङ्ख, यवन (कालयवन), मुर र नरक यी असुरहरू मरेको पनि देख्नेछु। त्यसै गरी हजुरले पारिजातको हरण गरेको र इन्द्रको पराजय भएको पनि देख्नेछु।

**उद्वाहं वीरकन्यानां वीर्यशुल्कादिलक्षणम् ।**

**नृगस्य मोक्षणं पापाद् द्वारकायां जगत्पते ॥ १८ ॥**

**पदार्थ–**
**जगत्पते** = हे जगत्का मालिक
**वीर्यशुल्कादिलक्षणम्** = पराक्रम प्रदर्शन नै शुल्क भएको
**वीरकन्यानां** = वीरहरूका कन्याहरूको
**उद्वाहं** = विवाह (देख्नेछु)
**पापात्** = (ब्राह्मणको गाई हर्दा छेपारो हुनुपरेको) पापबाट
**द्वारकायां** = द्वारकामा
**नृगस्य** = नृगको
**मोक्षणं** = मुक्ति पनि (देख्नेछु)

**वाक्यार्थ–** आफ्नो पराक्रम नै शुल्क (विवाहमा कन्यालाई दिइने वस्तु) दिएर हजुरले वीरहरूका कन्याहरूसँग विवाह गरेको देख्नेछु। हे जगदीश्वर ! (भुलवश ब्राह्मणको गाई हरण गरेका कारण छेपारोको जन्म प्राप्त गरेका) राजा नृगलाई पापबाट हजुरले मुक्ति दिनुभएको पनि म देख्नेछु।

**स्यमन्तकस्य च मणेरादानं सह भार्यया ।**

**मृतपुत्रप्रदानं च ब्राह्मणस्य स्वधामतः ॥ १९ ॥**

**पदार्थ–**
**भार्यया सह** = पत्नी जाम्बवतीका साथ
**स्यमन्तकस्य** = स्यमन्तक
**मणेः** = मणिलाई
**आदानं च** = ल्याएको र
**स्वधामतः** = आफ्नो धाम (यमपुरी)बाट (ल्याएर)
**ब्राह्मणस्य** = ब्राह्मणका
**मृतपुत्रप्रदानं च** = मरेका छोराहरू पनि दिएको (पनि देख्नेछु)

**वाक्यार्थ–** हजुरले आफ्नी पत्नी जाम्बवतीका साथ जाम्बवान्बाट स्यमन्तक मणि ल्याउनुभएको र ब्राह्मणका मरेका छोराहरूलाई यमपुरीबाट फर्काएर ल्याउनुभएको पनि म देख्नेछु।

**पौण्ड्रकस्य वधं पश्चात् काशिपुर्याश्च दीपनम् ।**

**दन्तवक्त्रस्य निधनं चैद्यस्य च महाक्रतौ ॥ २० ॥**

पदार्थ–
**पौण्ड्रकस्य** = पौण्ड्रक दैत्यको
**वधं** = वध (देख्नेछु)
**पश्चात्** = त्यसपछि
**काशिपुर्याः** = काशी नगरीको
**दीपनम् च** = दहन पनि (देख्नेछु)
**दन्तवक्त्रस्य** = दन्तवक्त्रको
**महाक्रतौ** = (युधिष्ठिरको) राजसूय यज्ञमा
**चैद्यस्य च** = चेदिराज शिशुपालको पनि
**निधनं** = वध (देख्नेछु)

**वाक्यार्थ–** हजुरद्वारा गरिएको पौण्ड्रकको वध, काशीनगरीको दहन एवं राजसूय यज्ञमा चेदिराज शिशुपाल र दन्तवक्त्रको वध पनि देख्नेछु।

**यानि चान्यानि वीर्याणि द्वारकामावसन् भवान्।**
**कर्ता द्रक्ष्याम्यहं तानि गेयानि कविभिर्भुवि ॥ २१ ॥**

पदार्थ–
**भवान्** = हजुरले
**द्वारकाम्** = द्वारकामा
**आवसन्** = बसेर
**भुवि** = पृथिवीमा
**यानि** = जे-जे
**अन्यानि च** = अरू पनि
**कविभिः** = विद्वान्हरूद्वारा
**गेयानि** = प्रशंसा गर्न योग्य
**वीर्याणि** = पराक्रमहरू
**कर्ता** = गर्नुहुनेछ
**तानि** = ती सबै
**अहं** = म
**द्रक्ष्यामि** = देख्नेछु

**वाक्यार्थ–** हजुरले द्वारकामा बसेर पृथिवीमा अरू पनि जे-जति पराक्रमहरू गर्नुहुनेछ, विद्वान्हरूद्वारा प्रशंसा गर्न योग्य ती सबै पराक्रमहरू म देख्नेछु।

**अथ ते कालरूपस्य क्षपयिष्णोरमुष्य वै।**
**अक्षौहिणीनां निधनं द्रक्ष्याम्यर्जुनसारथेः ॥ २२ ॥**

पदार्थ–
**अथ** = यसपछि
**कालरूपस्य** = कालरूप भई
**अर्जुनसारथेः** = अर्जुनको सारथि बनेर
**अमुष्य** = यो पृथिवीको भार
**क्षपयिष्णोः** = नष्ट गर्न चाहने
**ते** = हजुरले (गर्ने)
**अक्षौहिणीनां** = कैयौँ अक्षौहिणी सेनाहरूको
**निधनं** = संहार
**वै** = निश्चय नै
**द्रक्ष्यामि** = देख्नेछु

**वाक्यार्थ–** यसपछि हजुर कालरूप भएर महाभारतको युद्धमा अर्जुनको सारथि बनेर यो पृथिवीको भारलाई हरण गर्न कैयौँ अक्षौहिणी सेनाहरूको संहार गर्नुहुनेछ, त्यो पनि म देख्नेछु।

**विशुद्धविज्ञानघनं स्वसंस्थया समाप्तसर्वार्थममोघवाञ्छितम्।**
**स्वतेजसा नित्यनिवृत्तमायागुणप्रवाहं भगवन्तमीमहि ॥ २३ ॥**

पदार्थ–
**विशुद्धविज्ञानघनं** = (अविद्यावृत्ति रूप उपाधिले रहित) विशुद्ध

पूर्ण विज्ञान स्वरूपले रहेका
**स्वसंस्थया** = (चिन्मय निरतिशय आनन्दरूप) आफ्नो स्वरूप स्थितिद्वारा
**समाप्तसर्वार्थम्** = सम्पूर्ण पदार्थहरूमा नित्य प्राप्त भएका
**अमोघवाञ्छितम्** = सत्यसङ्कल्प भएका
**स्वतेजसा** = आफ्नो तेज (चित् शक्ति)द्वारा
**नित्यनिवृत्तमायागुणप्रवाहं** = मायाको कार्यरूप संसारको चक्रबाट नित्य निवृत्त भएका
**भगवन्तम्** = भगवान् हजुरको
**ईमहि** = शरणमा पर्दछौँ

**वाक्यार्थ–** हे भगवान् ! हजुर विशुद्ध र पूर्ण विज्ञानस्वरूप हुनुहुन्छ। हजुर सधैँ चिन्मय निरतिशय आनन्दरूप आफ्नो प्रत्यक्‌रूपमा अवस्थित हुनुहुन्छ। सत्यसङ्कल्प हजुरलाई सम्पूर्ण पदार्थहरू नित्य प्राप्त छन्। आफ्नो चित्शक्तिका कारण माया र त्यसको कार्यरूप संसारचक्र हजुरको लागि नित्य निवृत्त छ। हामी यस्ता हजुरको शरणमा पर्दछौँ।

**विवरण–** माथिको श्लोकमा नारदजीले परमात्मालाई **विशुद्धविज्ञानघन** भन्नुभएको बताइएको छ। विज्ञानघन शब्दको अर्थ ज्ञान मात्र भन्ने हुन्छ। विशुद्ध पदको अर्थ चाहिँ अविद्या सम्बन्धले रहित भन्ने हुन्छ। यद्यपि विज्ञानघन यो शब्दले ज्ञानस्वरूप आत्मालाई बुझाउँछ, तर कहीँ–कहीँ विज्ञानघन शब्दले सुषुप्ति, मूर्च्छा आदिमा अविद्या वृत्तिद्वारा हुने ज्ञानले युक्त प्राज्ञलाई लिइने गरिन्छ। **प्रज्ञानघन एवानन्दमयो ह्यानन्दभुक् प्राज्ञस्तृतीय पादः** (माण्डूक्योपनिषद्, ५) अर्थात् विज्ञानघन आनन्दमय एवं आनन्दभोक्ता प्राज्ञ आत्माको तेस्रो पाउ हो भनी उपनिषद्मा यही अर्थमा प्रज्ञानघन शब्दको प्रयोग गरिएको छ। यसको भाष्य गर्दै शङ्कराचार्य भन्नुहुन्छ– **सेयमवस्था अविवेकरूपत्वात् प्रज्ञानघन उच्यते** अर्थात् सुषुप्तिमा कुनै पनि पदार्थको स्फुरण हुँदैन, सबै एकनाश भइरहन्छन्, त्यसैले अविवेकरूप ज्ञानभन्दा अरू बाह्य पदार्थ नभएकाले यसलाई प्रज्ञानघन भनिएको हो। व्याकरणशास्त्र अनुसार मात्र भन्ने अर्थमा घन प्रत्यय हुन्छ। त्यसैले परमात्मा सद्घन, चिद्घन हुनुहुन्छ भनेर उहाँ सन्मात्र, चिन्मात्र हुनुहुन्छ भन्ने अर्थ नै बुझ्नुपर्दछ। त्यसैले यहाँ विज्ञानघनको अर्थ विज्ञान मात्र भन्ने हुन्छ। **स्वसंस्थया** अर्थात् आफ्नो परमानन्दरूप स्वरूपस्थितिद्वारा नै **समाप्तसर्वार्थम्** अर्थात् सम्पूर्ण पदार्थहरूमा नित्य प्राप्त हुनुभएका परमात्मा सत्यसङ्कल्प हुनुहुन्छ भन्ने जनाउन यहाँ **अमोघवाञ्छितम्** पदको प्रयोग गरिएको छ। इच्छा या कामना भएपछि त संसारसम्बन्धको प्राप्ति भइहाल्ला नि भन्ने शङ्का हुँदा त्यसलाई हटाउन **निवृत्तमायागुणप्रवाहम्** यो पदको प्रयोग गरिएको छ। परमात्मा **स्वतेजसा** अर्थात् आफ्नो नित्यज्ञानरूप चित्शक्तिद्वारा मायाको कार्य त्रिगुणमय संसारको प्रवाहदेखि सधैँ टाढै हुनुहुन्छ। यसरी यहाँ नारदजीद्वारा शुद्ध ज्ञानरूप परमात्माको स्तुति गरिएको छ।

**त्वामीश्वरं स्वाश्रयमात्ममायया विनिर्मिताशेषविशेषकल्पनम्।**
**क्रीडार्थमद्यात्तमनुष्यविग्रहं नतोऽस्मि धुर्यं यदुवृष्णिसात्वताम्॥ २४॥**

**पदार्थ–**
**ईश्वरं** = जगत्का नियन्ता
**स्वाश्रयम्** = आफ्नै आश्रयमा रहने
**आत्ममायया** = आफ्नो मायाद्वारा

**विनिर्मिताशेषविशेषकल्पनम्** = सम्पूर्ण महत् आदि तत्त्वहरूको निर्माण गरी सम्पूर्ण सृष्टि गर्ने
**अद्य** = अहिले
**क्रीडार्थम्** = लीला गर्नका लागि
**आत्तमनुष्यविग्रहं** = मनुष्यको शरीरलाई स्वीकार गर्नुभएका
**यदुवृष्णिसात्वतां** = यदु, वृष्णि र सात्वत वंशीहरूमा
**धुर्यं** = श्रेष्ठ
**त्वाम्** = हजुरमा
**नतः** = विनत (पूरै झुकेको)
**अस्मि** = छु

**वाक्यार्थ–** जगत्का नियन्ता हजुर आफ्नै आश्रयमा रहेर आफ्नो मायाशक्तिद्वारा सम्पूर्ण महदादि तत्त्वहरूको निर्माण गरी त्यसद्वारा सम्पूर्ण सृष्टि गर्नुहुन्छ। लीला गर्नका लागि अहिले मनुष्य शरीर धारण गर्नुहुने हजुर यदुवंशी, वृष्णिवंशी र सात्वतवंशीहरूमा श्रेष्ठ हुनुहुन्छ। हे भगवान् ! म हजुरलाई प्रणाम गर्दछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं यदुपतिं कृष्णं भागवतप्रवरो मुनिः।**
**प्रणिपत्याभ्यनुज्ञातो ययौ तद्दर्शनोत्सवः॥ २५॥**

**पदार्थ–**
**तद्दर्शनोत्सवः** = उहाँ (भगवान्) को दर्शन गरेर आनन्दित भएका
**भागवतप्रवरः** = भगवान्का श्रेष्ठ भक्त
**मुनिः** = मुनि नारदले
**एवं** = यसप्रकार
**यदुपतिं** = यदुपति
**कृष्णं** = श्रीकृष्णलाई
**प्रणिपत्य** = प्रणाम गरेर
**अभ्यनुज्ञातः** = (बिदाइका लागि) अनुमति लिएर
**ययौ** = जानुभयो

**वाक्यार्थ–** यसप्रकार भगवान् श्रीकृष्णको दर्शन गरेर आनन्दित भएका भगवान्का परमभक्त नारद मुनिले उहाँलाई प्रणाम गरेर बिदाइका लागि अनुमति लिई त्यहाँबाट जानुभयो।

**भगवानपि गोविन्दो हत्वा केशिनमाहवे।**
**पशूनपालयत् पालैः प्रीतैर्व्रजसुखावहः॥ २६॥**

**पदार्थ–**
**व्रजसुखावहः** = व्रजवासीहरूका सुखदाता
**भगवान्** = भगवान्
**गोविन्दः अपि** = गोविन्दले पनि
**आहवे** = युद्धमा
**केशिनं** = केशीलाई
**हत्वा** = मारेर
**प्रीतैः** = अति प्रसन्न भएका
**पालैः** = गोपहरूका साथ
**पशून्** = पशु (गाई)हरूलाई
**अपालयत्** = पालन गर्नुभयो

**वाक्यार्थ–** व्रजवासीहरूका सुखदाता भगवान् गोविन्दले युद्धमा दैत्य केशीलाई मारिसकेपछि अति प्रसन्न गोपहरूको साथमा गाईहरूको रक्षा गर्नुभयो।

**एकदा ते पशून् पालाश्चारयन्तोऽद्रिसानुषु।**
**चक्रुर्निलायनक्रीडाश्चोरपालापदेशतः॥ २७॥**

**पदार्थ–**
**एकदा** = एक दिन
**ते** = ती (श्रीकृष्ण, बलराम आदि)
**पालाः** = गोठालाहरू
**अद्रिसानुषु** = पहाडको समथल भूभागहरूमा
**पशून्** = गाईहरूलाई
**चारयन्तः** = चराउँदै
**चोरपालापदेशतः** = चोर र रक्षक बनेर
**निलायनक्रीडाः** = लुकामारी
**चक्रुः** = खेल्दै थिए

**वाक्यार्थ–** एक दिन श्रीकृष्ण, बलरामलगायत गोठालाहरू मिलेर गाई चराउँदै गोवर्धन पर्वतको समथल भूभागमा कोही चोर र कोही रक्षक बनेर लुकामारी खेलिरहेका थिए।

**तत्रासन् कतिचिच्चोराः पालाश्च कतिचिन्नृप।**
**मेषायिताश्च तत्रैके विजह्रुरकुतोभयाः॥ २८॥**

**पदार्थ–**
**नृप** = हे राजा
**तत्र** = त्यस वेलामा
**कतिचित्** = कतिपय
**चोराः** = चोरहरू
**आसन्** = भएका थिए
**कतिचित्** = कतिपय
**पालाः च** = रक्षकहरू र
**एके** = अरू चाहिँ
**मेषायिताः च** = भेडाहरू (भएर)
**तत्र** = त्यो पहाडमा
**अकुतोभयाः** = निर्भय भई
**विजह्रुः** = (खेलमा) रमाएका थिए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! ती गोठालाहरूमध्ये कोही चोर, कोही रक्षक र कोही चाहिँ भेडा भएर त्यस गोवर्धन पहाडमा निर्भय भई खेलमा रमाइरहेका थिए।

**मयपुत्रो महामायो व्योमो गोपालवेषधृक्।**
**मेषायितानपोवाह प्रायश्चोरायितो बहून्॥ २९॥**

**पदार्थ–**
**महामायः** = महामायावी
**मयपुत्रः** = मय दैत्यको छोरो
**व्योमः** = व्योमासुरले
**गोपालवेषधृक्** = गोरक्षकको रूप धारण गरेर
**प्रायः** = प्रायशः खेलमा
**चोरायितः** = चोर बनेको उसले
**बहून्** = धेरै
**मेषायितान्** = भेडा बनेका गोठालाहरूलाई
**अपोवाह** = चोरेर लग्यो

**वाक्यार्थ–** मय दैत्यको छोरो महामायावी व्योमासुरले गोठालोको रूप धारण गरी खेलमा चोर बनेर सहभागी भई भेडा बनेका धेरै गोठालाहरूलाई चोरेर लग्यो।

**गिरिदर्यां विनिक्षिप्य नीतं नीतं महासुरः।**
**शिलया पिदधे द्वारं चतुःपञ्चावशेषिताः॥ ३०॥**

**पदार्थ–**
**महासुरः** = महासुर व्योमले
**नीतं नीतं** = प्रत्येक पटक

लगिएका गोठालालाई
**गिरिदर्यां** = पहाडको गुफामा
**विनिक्षिप्य** = राखेर
**द्वारं** = (गुफाको) ढोका
**शिलया** = ढुङ्गाले
**पिदधे** = ढाकिदिन्थ्यो
(त्यसपछि)
**चतुःपञ्च** = चार-पाँच जना
गोठाला मात्र
**अवशेषिताः** = बाँकी रहे

**वाक्यार्थ–** त्यस व्योमासुरले बारम्बार चोरेर लगेका गोपहरूलाई पहाडको गुफामा लगेर राखी त्यो गुफाको ढोका ठुलो ढुङ्गाले ढाक्थ्यो। यसरी जम्मा चार पाँच जना गोठाला मात्र बाँकी रहे।

**तस्य तत्कर्म विज्ञाय कृष्णः शरणदः सताम्।**
**गोपान् नयन्तं जग्राह वृकं हरिरिवौजसा॥ ३१॥**

**पदार्थ–**
**तस्य** = त्यो व्योमासुरको
**तत्** = त्यो
**कर्म** = (गोपहरूलाई चोर्ने) काम
**विज्ञाय** = थाहा पाएर
**गोपान्** = गोपहरूलाई
**नयन्तं** = लगिरहेको
व्योमासुरलाई
**सताम्** = आफ्ना भक्तहरूलाई
**शरणदः** = शरण दिने
**कृष्णः** = श्रीकृष्णले
**हरिः** = सिंहले
**वृकं इव** = ब्वाँसोलाई झैँ
**ओजसा** = बलपूर्वक
**जग्राह** = समात्नुभयो

**वाक्यार्थ–** त्यो व्योमासुरको त्यस्तो काम थाहा पाएपछि भक्तहरूका रक्षक भगवान्ले सिंहले ब्वाँसोलाई समाते झैँ बलपूर्वक त्यसलाई च्याप्प समात्नुभयो।

**स निजं रूपमास्थाय गिरीन्द्रसदृशं बली।**
**इच्छन् विमोक्तुमात्मानं नाशक्नोद् ग्रहणातुरः॥ ३२॥**

**पदार्थ–**
**गिरीन्द्रसदृशं** = विशाल पर्वत जस्तो
**निजं** = आफ्नो
**रूपम्** = रूप
**आस्थाय** = बनाएर
**ग्रहणातुरः** = समातिएकाले व्याकुल भएको
**बली** = बलशाली
**सः** = त्यो व्योमासुरले
**आत्मानं** = आफूलाई
**विमोक्तुम्** = (भगवान्को हातबाट) फुत्काउन
**इच्छन्** = इच्छा गरे तापनि
**न अशक्नोत्** = सकेन

**वाक्यार्थ–** भगवान्द्वारा समातिएपछि विशाल पहाडजस्तो आफ्नो वास्तविक रूप धारण गरेको र भगवान्बाट समातिएकाले व्याकुल भएको बलशाली त्यो व्योमासुरले भगवान्को हातबाट फुत्कन धेरै कोसिस गर्‍यो तापनि फुत्किन सकेन।

**तं निगृह्याच्युतो दोर्भ्यां पातयित्वा महीतले।**
**पश्यतां दिवि देवानां पशुमारममारयत्॥ ३३॥**

**पदार्थ–**
**अच्युतः** = भगवान् श्रीकृष्णले
**तं** = त्यो व्योमासुरलाई

**दोर्भ्यां** = दुबै हातले
**निगृह्य** = च्याप्प समातेर
**महीतले** = पृथिवीमा
**पातयित्वा** = लडाएर
**दिवि** = स्वर्गमा बसेका
**देवानां** = देवताहरूले
**पश्यतां** = हेर्दा–हेर्दै
**पशुमारम्** = पशुलाई मारे झैँ
**अमारयत्** = मारिदिनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले आफ्ना दुबै हातले व्योमासुरलाई च्याप्प समातेर भुइँमा पछार्नुभयो र स्वर्गमा बसेका देवताहरूले हेर्दाहेर्दै त्यसलाई पशु मारे झैँ मार्नुभयो।

**गुहापिधानं निर्भिद्य गोपान्निःसार्य कृच्छ्रतः।**
**स्तूयमानः सुरैर्गोपैः प्रविवेश स्वगोकुलम्॥ ३४॥**

**पदार्थ–**
**गुहापिधानं** = गुफालाई ढाकेको ढुङ्गालाई
**निर्भिद्य** = फुटाएर
**कृच्छ्रतः** = (गुफावासको) दुःखबाट
**गोपान्** = गोपहरूलाई
**निःसार्य** = निकालेर
**सुरैः** = (स्वर्गका) देवता
**गोपैः** = (पृथिवीमा बसेका) गोपहरूबाट पनि
**स्तूयमानः** = स्तुति गरिनुभएका भगवान्
**स्वगोकुलम्** = आफ्नो गोकुलमा
**प्रविवेश** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** त्यसपछि गुफालाई ढाकेर राखेको ढुङ्गालाई फुटाएर भगवान्ले गुफावासको दुःखबाट गोपहरूलाई निकाल्नुभयो। त्यसपछि देवताहरू र गोपहरूद्वारा स्तुति गरिनुभएका भगवान् आफ्नो निवासस्थान गोकुलमा प्रवेश गर्नुभयो।

**अध्याय-विवरण–** यस अध्यायमा भगवान्ले केशी र व्योमासुरको वध गर्नुभएको प्रसङ्ग बताइएको छ। घोडाको रूप लिएको केशीलाई दुष्ट मनसँग तुलना गरिएको छ। मन दुष्ट हुनु भनेको विषयहरूमा आसक्त हुनु हो। जब मनले विषयहरूमा सुखबुद्धि गर्दछ, तब इन्द्रियहरूमा खलबल मच्चिन्छ। इन्द्रियहरूमा खलबल मच्चिनु भनेको विषयहरूको भोग गर्न तिनीहरू बाहिरतिर तानिनु हो। यसरी विषयासक्त मन र इन्द्रियहरू मिलेर मानिसलाई संसारको अँध्यारोमा जाकिदिन्छन्। कठोपनिषद् (१/३/५)मा बाहिरी विषयहरूमा आसक्त मनलाई अयुक्त मन भनिएको छ (**अयुक्तेन मनसा सदा**) अयुक्त अर्थात् अनियन्त्रित मनको इसारा पाएर नै इन्द्रियहरू विषयदेशमा जान खलबल गर्दछन्। मनको वेग अत्यन्त चञ्चल र निग्रह गर्नै नसकिने घोडाको वेग समान छ भनी शास्त्रमा बताइएको छ। त्यसैले यहाँ घोडाको रूप भएको केशीलाई दुष्ट मनको प्रतीक मानिएको हो। जब केशी व्रजमण्डलमा आइपुग्यो, तब गोकुलमा त्रास र हलचल मच्चियो। विषयासक्त मनको संसर्गपछि गोकुल अर्थात् सबै इन्द्रियहरूमा हुने हलचललाई यसले सूचित गरेको छ।

व्योमासुर मय दानवको पुत्र थियो। यसले गोपालको वेष बनाएर तिनीहरूको अपहरण गर्दै गुफामा लगेर थुनिदियो। यो कुरा थाहा पाएपछि भगवान्ले त्यसको वध गर्नुभयो। यहाँ व्योमासुरले गरेको कामलाई मायाको प्रभावको रूपमा चित्रण गरिएको छ। मायाले सम्पूर्ण जीवहरूलाई मोहित बनाई संसाररूपी गुफामा थुनिदिन्छ। यो अन्धकारमय प्रपञ्चरूप गुफामा

छिरेपछि प्राणीहरू त्यसबाट बाहिर निस्कन सक्दैनन्। यसबाट निकाल्न केवल भगवान् मात्र समर्थ हुनुहुन्छ। उहाँले मायाको प्रभावलाई नष्ट गरी आफ्ना भक्तहरूको संसारबन्धनलाई पनि ध्वस्त गरिदिनुहुन्छ। यसरी व्योमासुर मारी आफ्ना साथीहरूलाई उद्धार गरेबाट भगवान्ले मायाको प्रभाव नष्ट गरी आफ्ना भक्तहरूलाई आफ्नो परमानन्दमय सान्निध्य प्रदान गर्नुहुन्छ भन्ने स्पष्ट भएको छ।

यहाँ केशीको मृत्युपछि व्योमासुरको वध गरिएको तात्पर्य बताउँदै टीकाकारहरूद्वारा व्योमासुरलाई शून्यस्थितिको प्रतीक मानिएको छ। व्योम अर्थात् आकाश शून्यता या खालीपनको प्रतीक हो। जब साधकले साधनाको बलले वासनामय दुष्ट मनको विनाश गर्दन्छ, तब कुनै पनि वस्तु बाँकी नरहेको अनि हृदयभित्र परमात्माको प्रकाश पनि नभइसकेको स्थितिमा भित्री-बाहिरी कुनै पनि आलम्बन नपाउँदा चित्तको जुन दशा हुन्छ, त्यसैलाई शून्यताको अवस्था भनिन्छ। व्योमासुरले गोपालहरूलाई गुफाभित्र थुनिदिनु योगीहरू शून्यताको स्थितिमा हराउनु हो। यो स्थितिमा कुनै पनि वस्तुको प्रकाश हुँदैन। यो अज्ञानात्मक तामस अवस्था हो। सुषुप्तिकालमा मन हराउँदा जस्तो अज्ञानात्मक अवस्था हुन्छ, यो शून्यावस्था पनि त्यस्तै खालको हुन्छ। यसमा रहँदा सच्चिदानन्द परमात्माको प्रकाश हुँदैन। त्यसैले यसबाट बाहिर निस्कनुपर्दछ, तर भक्तहरूको भनाइ अनुसार यसबाट निस्कन जीवको होइन, परमात्माकै बल चाहिन्छ। प्राणायाम, ध्यान, समाधि आदिद्वारा चित्तवृत्तिको निरोध गर्नुसम्म योगीको आफ्नै हातमा भए पनि चित्तमा अखण्डाकारले परमात्मप्रकाश हुन चाहिँ भगवान्को कृपा चाहिन्छ। त्यसैले भगवद्भक्त बाहेक अर्को कुनै पनि व्यक्ति यो वृत्तिनिरोधको अवस्थाबाट निस्कन सम्भव छैन। केवल सांसारिक वृत्तिको निरोध मात्र पुरुषार्थ होइन, अपितु त्यस वृत्तिमा परमात्मप्रकाश हुनु मुख्य पुरुषार्थ हो। योगको मुख्य अर्थ पनि परमात्मासँग जोडिनु नै हो, संसारबाट छुट्टिनु मात्र होइन। त्यसैले भगवान् आफ्ना भक्तहरूलाई यो वृत्तिनिरोध या शून्यताको स्थितिबाट उठाई आफ्नो साक्षात्कार या परमानन्दमय सान्निध्य प्रदान गर्नुहुन्छ। व्योमासुरलाई मारी गोपालहरूलाई आफ्नो साथमा लिनु यसकै प्रतीक हो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**व्योमासुरवधो नाम सप्तत्रिंशोऽध्यायः॥ ३७॥**

# अथ अष्टात्रिंशोऽध्यायः

## अक्रूरको भगवान् श्रीकृष्णसँग भेट

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अक्रूरोऽपि च तां रात्रिं मधुपुर्यां महामतिः।**

**उषित्वा रथमास्थाय प्रययौ नन्दगोकुलम्॥ १॥**

**पदार्थ–**
**महामतिः** = ज्यादै बुद्धिमान्
**अक्रूरः अपि** = अक्रूर पनि
**तां च** = त्यो (श्रीकृष्णलाई लिन जान कंसले आज्ञा दिएको)
**रात्रिं** = रात
**मधुपुर्यां** = मधु (मथुरा) नगरीमा
**उषित्वा** = बसेर (अर्को दिन)
**रथं** = रथमा
**आस्थाय** = चढेर
**नन्दगोकुलम्** = नन्दको गोकुलतिर
**प्रययौ** = गए

**वाक्यार्थ–** कंसले श्रीकृष्ण र बलरामलाई लिएर आउन आज्ञा दिएको रात ज्यादै बुद्धिमान् अक्रूर त्यही मथुरा नगरीमा बसेर अर्को दिन रथमा चढेर नन्दको निवासस्थान गोकुलतिर लागे।

**गच्छन् पथि महाभागो भगवत्यम्बुजेक्षणे।**

**भक्तिं परामुपगत एवमेतदचिन्तयत्॥ २॥**

**पदार्थ–**
**पथि** = बाटोमा
**गच्छन्** = गइरहँदा
**अम्बुजेक्षणे** = कमलनयन
**भगवति** = भगवान् श्रीकृष्णमा
**पराम् भक्तिं** = परम भक्तिमा
**उपगतः** = प्राप्त भएका
**महाभागः** = महाभाग्यवान् अक्रूरले
**एवम्** = यसप्रकार
**एतत्** = यी कुराहरू
**अचिन्तयत्** = चिन्तन गर्न लागे

**वाक्यार्थ–** गोकुलतिर गइरहँदा बाटोमा श्रीकृष्णको परम भक्तिमा निमग्न भएका महाभाग्यवान् अक्रूरले मन-मनै यसरी विचार गर्न लागे।

**किं मयाचरितं भद्रं किं तप्तं परमं तपः।**

**किं वाथाप्यर्हते दत्तं यद् द्रक्ष्याम्यद्य केशवम्॥ ३॥**

**पदार्थ–**
**मया** = मद्वारा
**किं** = के
**भद्रं** = शुभ कर्म
**आचरितं** = गरियो
**किं** = के कुनै
**परमं** = परम
**तपः** = तपस्या
**तप्तं** = गरियो
**अथ अपि** = अथवा
**किं वा** = के
**अर्हते** = योग्य पात्रलाई

**दत्तं** = दान दिइयो
**यत्** = जसका कारण
**अद्य** = आज
**केशवम्** = भगवान् केशवलाई
**द्रक्ष्यामि** = दर्शन गर्नेछु

**वाक्यार्थ–** मैले आफ्नो जीवनमा कुन यस्तो शुभ कर्म गरेछु, कुन त्यस्तो श्रेष्ठ तपस्या गरेछु अथवा योग्य पात्रलाई कुन त्यस्तो दान दिएछु ? जसको फलस्वरूप आज म साक्षात् भगवान् केशवको दर्शन गर्न पाउनेछु।

**ममैतद् दुर्लभं मन्य उत्तमश्लोकदर्शनम्।**
**विषयात्मनो यथा ब्रह्मकीर्तनं शूद्रजन्मनः॥ ४॥**

**पदार्थ–**
**शूद्रजन्मनः** = शूद्र कुलमा उत्पन्न व्यक्तिको लागि
**ब्रह्मकीर्तनं यथा** = वेदको उच्चारण झैं
**विषयात्मनः** = विषयासक्त चित्त भएको
**मम** = मेरा लागि
**एतत्** = यो
**उत्तमश्लोकदर्शनम्** = पवित्र कीर्ति भएका भगवान्को दर्शन
**दुर्लभं** = दुर्लभ छ भन्ने
**मन्ये** = ठान्दछु

**वाक्यार्थ–** जसरी शूद्र कुलमा उत्पन्न भएको व्यक्तिका लागि वेदका मन्त्रहरूको उच्चारण गर्नु दुर्लभ छ, त्यसै गरी विषयमा आसक्त चित्त भएको मेरा लागि पवित्र कीर्ति भएका भगवान्को दर्शन पनि दुर्लभ छ भन्ने मलाई लागेको छ।

**मैवं ममाधमस्यापि स्यादेवाच्युतदर्शनम्।**
**ह्रियमाणः कालनद्या क्वचित् तरति कश्चन॥ ५॥**

**पदार्थ–**
**मा एवं** = तर त्यसो होइन (किनभने)
**अधमस्य अपि** = (विषयासक्त भएकाले) नीच भए पनि
**मम** = मेरो लागि
**अच्युतदर्शनम्** = भगवान् श्रीकृष्णको दर्शन
**स्यात् एव** = हुन्छ नै (किनभने)
**कालनद्याः** = समयको प्रवाहरूप नदीद्वारा
**ह्रियमाणः** = बगाइएको
**कश्चन** = कुनै व्यक्तिले
**क्वचित्** = कहिलेकाहीँ
**तरति** = (त्यो प्रवाहलाई) तर्न सक्छ

**वाक्यार्थ–** तर त्यसो होइन, म आफू नीच (विषयासक्त) नै भए पनि मलाई भगवान्को दर्शन अवश्य हुन्छ। किनभने समयको प्रवाहरूप नदीद्वारा बगाइएको व्यक्तिले कहिलेकाँही त्यो प्रवाह तर्न सक्छ।

**ममाद्यामङ्गलं नष्टं फलवांश्चैव मे भवः।**
**यन्नमस्ये भगवतो योगिध्येयाङ्घ्रिपङ्कजम्॥ ६॥**

**पदार्थ–**
**अद्य** = मेरो
**मम** = आज
**अमङ्गलं** = अमङ्गल
**नष्टं** = नष्ट भयो
**मे** = मेरो
**भवः च एव** = जन्म पनि
**फलवान्** = सफल भयो
**यत्** = किनभने
**भगवतः** = भगवान्को
**योगिध्येयाङ्घ्रिपङ्कजम्** = योगीहरूद्वारा ध्यान गरिने चरणकमललाई
**नमस्ये** = नमस्कार गर्नेछु

**वाक्यार्थ–** आज मेरो अमङ्गल नष्ट भयो, मेरो जन्म पनि आज सफल भयो। किनभने भगवान् श्रीकृष्णको योगीहरूले ध्यान गर्ने चरणकमललाई आज म नमस्कार गर्नेछु।

**कंसो बताद्याकृत मेऽत्यनुग्रहं द्रक्ष्येऽङ्घ्रिपद्मं प्रहितोऽमुना हरेः।**
**कृतावतारस्य दुरत्ययं तमः पूर्वेऽतरन् यन्नखमण्डलत्विषा ॥ ७ ॥**

**पदार्थ–**
**बत** = अहो
**अद्य** = आज
**कंसः** = कंसले पनि
**मे** = मेरो
**अत्यनुग्रहं** = ठुलो अनुग्रह
**अकृत** = गऱ्यो
**यन्नखमण्डलत्विषा** = जुन भगवान्को नखमण्डलको कान्तिद्वारा
**पूर्वे** = पहिलेका भक्तहरूले
**दुरत्ययं** = दुस्तर
**तमः** = अज्ञानान्धकाररूप संसारलाई
**अतरन्** = तरे
**कृतावतारस्य** = मनुष्यरूपले अवतीर्ण
**हरेः** = (तिनै) हरिको (भगवान् श्रीकृष्णको)
**अङ्घ्रिपद्मं** = चरणकमललाई
**अमुना** = यही कंसद्वारा
**प्रहितः** = पठाइएको मैले
**द्रक्ष्ये** = दर्शन गर्नेछु

**वाक्यार्थ–** अहो ! कंसले त आज ममाथि ठुलो अनुग्रह गऱ्यो। पहिलेका भक्तहरूले जुन भगवान्को नखमण्डलको कान्तिद्वारा अज्ञानमय अन्धकाररूप दुस्तर संसारसागरलाई पार गरे, उहाँ नै अहिले मनुष्यरूपमा अवतार लिनुभएका भगवान् श्रीहरिको चरणकमलको आज मैले दर्शन गर्नेछु।

**यदर्चितं ब्रह्मभवादिभिः सुरैः श्रिया च देव्या मुनिभिः ससात्वतैः।**
**गोचारणायानुचरैश्चरद् वने यद् गोपिकानां कुचकुङ्कुमाङ्कितम् ॥ ८ ॥**

**पदार्थ–**
**ब्रह्मभवादिभिः** = ब्रह्मा, शङ्कर आदि
**सुरैः** = देवताहरूद्वारा
**श्रिया देव्या** = भगवती लक्ष्मीद्वारा
**ससात्वतैः** = भगवान्का भक्तहरू सहित भएका
**मुनिभिः च** = ऋषिहरूद्वारा पनि
**यत्** = भगवान्को जुन चरणकमल
**अर्चितं** = पूजित छ
**यत्** = जुन चरणकमल
**गोचारणाय** = गाई चराउनका लागि
**अनुचरैः** = साथीहरूका साथ
**वने** = वनमा
**चरत्** = विहार गर्दथ्यो (अनि)
**गोपिकानां** = गोपिनीहरूको
**कुचकुङ्कुमाङ्कितम्** = वक्षःस्थलमा लेपन गरिएको कुङ्कुमद्वारा

रङ्गिएको थियो (त्यो चरणको
दर्शन गर्नेछु)

**वाक्यार्थ–** ब्रह्मा, शङ्कर आदि देवताहरूले, भगवती लक्ष्मीले र भगवान्‌का अन्य भक्तहरूले सहित भएका ऋषिहरूले जुन चरणकमलको पूजा गर्दछन्, गाई चराउनका लागि आफ्ना गोप मित्रहरूका साथ जुन चरणकमल वन–वनमा घुमेको छ र गोपिनीहरूको वक्षःस्थलमा लेपन गरिएको कुङ्कुमद्वारा जुन चरणकमल रङ्गिएको छ, भगवान्‌को त्यो चरणकमलको म दर्शन गर्नेछु।

**द्रक्ष्यामि नूनं सुकपोलनासिकं स्मितावलोकारुणकञ्जलोचनम्।**
**मुखं मुकुन्दस्य गुडालकावृतं प्रदक्षिणं मे प्रचरन्ति वै मृगाः॥ ९॥**

**पदार्थ–**
**मृगाः** = मृगहरू
**मे** = मेरो
**प्रदक्षिणं** = दाहिनेतिर
**प्रचरन्ति** = हिँडिरहेका छन्
(अतः)
**वै** = निश्चय नै
**मुकुन्दस्य** = भगवान्
श्रीकृष्णको
**सुकपोलनासिकं** = सुन्दर गाला
र नाक भएको
**स्मितावलोकारुणकञ्जलोचनम्** = मुस्कान सहितको दृष्टिले युक्त कमलको फूलजस्ता मन्द राता
आँखा भएको
**गुडालकावृतं** = घुम्रिएको केशले
छेकिएको
**मुखं** = अनुहारलाई पनि
**नूनं** = निश्चय नै
**द्रक्ष्यामि** = देख्नेछु

**वाक्यार्थ–** मेरो दाहिनेतिरबाट मृगहरू हिँडिरहेका छन् (यो शुभसङ्केत हो)। त्यसैले भगवान् श्रीकृष्णको सुन्दर गाला र नाक भएको, मुस्कान सहितको दृष्टिले युक्त कमलको फूलजस्ता मन्द राता आँखा भएको र घुम्रिएको केशले छेकिएको अनुहारको पनि म दर्शन गर्नेछु।

**अप्यद्य विष्णोर्मनुजत्वमीयुषो भारावताराय भुवो निजेच्छया।**
**लावण्यधाम्नो भवितोपलम्भनं मह्यं न न स्यात् फलमञ्जसा दृशः॥१०॥**

**पदार्थ–**
**भुवः** = पृथिवीको
**भारावताराय** = भार हरण गर्न
**निजेच्छया** = आफ्नै इच्छाले
**मनुजत्वम्** = मनुष्यको रूप
**ईयुषः** = स्वीकार गर्नुभएका
**लावण्यधाम्नः** = अतिशय
सौन्दर्यका आश्रय
**विष्णोः** = भगवान् विष्णुको
**अपि** = यदि
**अद्य** = आज
**उपलम्भनं** = दर्शन
**भविता** = हुनेछ (यो)
**मह्यं** = मेरो
**दृशः** = आँखाको
**फलम्** = फल प्राप्ति
**अञ्जसा** = सजिलै
**न स्यात्** = भएन भन्ने कुरा
**न** = होइन

**वाक्यार्थ–** पृथिवीको भार हरण गर्नका लागि स्वेच्छाले मनुष्यको रूप धारण गर्नुभएका अतिशय सौन्दर्यका आश्रय भगवान् विष्णुको आज दर्शन हुनेछ। जो मेरा आँखाले आँखा हुनुको फल सजिलैसँग प्राप्त गरेनन् भन्ने कुरा होइन (मेरा आँखाले सजिलैसँग फल प्राप्त गरे)।

**य ईक्षिताहंरहितोऽप्यसत्सतोः स्वतेजसापास्ततमोभिदाभ्रमः।**
**स्वमाययात्मन् रचितैस्तदीक्षया प्राणाक्षधीभिः सदनेष्वभीयते॥ ११॥**

पदार्थ–
**य** = जो परमात्मा
**असत्सतोः** = कार्य र कारणको
**ईक्षिता अपि** = हेराइ मात्रले कर्ता भए तापनि
**अहंरहितः** = कर्तृत्वाभिमानले शून्य हुनुभएका
**स्वतेजसा** = आफ्नो चित्शक्तिद्वारा
**अपास्ततमोभिदाभ्रमः** = अविद्याका कारण अनात्ममा हुने आत्मबुद्धिलाई नष्ट गर्नुभएका भए पनि
**तदीक्षया** = आफ्नै हेराइ मात्रले
**प्राणाक्षधीभिः** = प्राण, इन्द्रिय र बुद्धिहरूले सहित
**स्वमायया** = आफ्नै मायाद्वारा
**आत्मन्** = आफैंमा
**रचितैः** = रचिएका वस्तुहरूद्वारा
**सदनेषु** = घरहरूमा (वृन्दावनका निकुञ्ज र गोपिनीगृहहरूमा)
**अभीयते** = प्रत्यक्ष रूपमा देखिनुहुन्छ

**वाक्यार्थ–** जो परमात्मा आफ्नो हेराइ मात्रले कार्यकारणात्मक संसारको सृष्टि गर्नुहुन्छ तापनि जसमा कर्तृत्वको अलिकति पनि अभिमान छैन, जसले आफ्नो चित्शक्तिद्वारा अविद्याका कारण अनात्मामा हुने आत्मबुद्धिलाई नष्ट गर्नुभएको छ त्यस्तो भए पनि उहाँ आफ्नै हेराइ मात्रले प्राण, इन्द्रिय र बुद्धिहरूले सहित आफ्नै मायाद्वारा आफैंमा रचित वस्तुहरूद्वारा वृन्दावनका निकुञ्ज र गोपिनीगृहहरूमा प्रत्यक्ष रूपले देखिनुहुन्छ।

**विवरण–** सामान्य जीव जस्तै कर्ता-भोक्ताको रूपमा प्रतीत हुनुहुने श्रीकृष्णलाई कसरी ईश्वर मान्न सकिन्छ भन्ने शङ्कालाई हटाउँदै अक्रूरले यहाँ श्रीकृष्णलाई मायाले रहित परमात्मा भनी बताएका छन्। परमात्मा **अहंरहितः** अर्थात् अहङ्कारले रहित हुनुहुन्छ। समष्टि एवं सर्वव्यापक आत्मचैतन्यले सीमित शरीर आदिमा आत्मबुद्धि गर्नु नै अहङ्कार हो। यही अहङ्कारद्वारा प्राणीहरू मानिस, पशु, देवता आदि शरीरहरूमा मात्र आत्मचेतनाको अनुभव गर्दछन्। सर्वव्यापक आत्मतत्त्वको रूपमा आत्मानुभव गर्ने श्रीकृष्णमा त्यस्तो परिच्छेदन गर्ने अहङ्कार छैन। श्रीकृष्ण नै असत्-कार्य र सत्-कारणरूप पदार्थको **ईक्षिता** अर्थात् द्रष्टा, साक्षी या प्रेरक हुनुहुन्छ। सामान्य प्राणीहरूमा **तमः** अर्थात् आफ्नो स्वरूपको अज्ञान हुन्छ। अज्ञानद्वारा जगत् प्रपञ्चको भेद खडा हुन्छ, त्यसपछि उनीहरू त्यसमा **भ्रम** या आत्मबुद्धि गर्दछन्, तर परमात्मामा भने अज्ञानको सम्भावना छैन। उहाँमा आफ्नो स्वरूपको स्फुरण सर्वदा विद्यमान छ। अज्ञान नभएपछि उहाँको लागि न द्वैतप्रपञ्चको अस्तित्व छ, न उहाँ त्यसका कार्य शरीर, इन्द्रिय आदिमा आत्मबुद्धि गर्नुहुन्छ। त्यसैले उहाँलाई **अपास्ततमोभिदाभ्रमः** भनिएको हो। **तदीक्षया** अर्थात् आफ्नै हेराइ मात्रले **स्वमायया** अर्थात् आफ्नो मायाद्वारा **आत्मन् रचितैः** आफूमा रचना गरिएका **प्राणाक्षधीभिः** अर्थात् प्राण, इन्द्रिय र बुद्धिले सहित जीवको रूपमा, **सदनेषु** अर्थात् अनेक मनुष्य, पशु आदि शरीरहरूभित्र **अभीयते** अर्थात् प्रतीत हुनुहुन्छ। यसरी जीवात्माको रूपमा सबै शरीरभित्र प्रतीत हुने परमात्मा नै हुनुहुन्छ।

अर्को अर्थ अनुसार **सदनेषु**को तात्पर्य गोकुल-वृन्दावन आदिमा भन्ने लाग्छ। परमात्माको

मायाको कारणले जीवहरू मूर्च्छित हुन्छन्, अनि **तदीक्षया** अर्थात् उनीहरूको आ–आफ्नै संस्कार या सङ्कल्प अनुसार प्राण, इन्द्रिय, बुद्धि आदिको साथ उनीहरूको उत्पत्ति हुन्छ। **आत्मन् रचितैः** अर्थात् आफैँमा रचिएका ती गोप आदिको साथमा भगवान् व्रजमण्डलमा **अभीयते** अर्थात् देखिनुहुन्छ या विहार गर्नुहुन्छ भन्ने अर्थ पनि हुन्छ। यहाँ पहिलो अर्थमा आफ्नो मायाद्वारा त्यसकै प्रेरणाले या गुणहरूको क्षोभको कारणले परमात्माले जीवरूप धारण गर्नुहुन्छ भन्ने तात्पर्य हुन्छ। जसमा ईश्वरलाई नै द्वैतप्रपञ्चको कल्पना गर्ने रूपमा स्वीकार गरिएको छ। दोस्रो अर्थमा भने परमात्माको मायाद्वारा मोहित भएको जीव आफ्नै सङ्कल्प या पूर्वपूर्व संस्कार अनुसार द्वैतप्रपञ्चको कल्पना गर्दछ। परमात्मा यो द्वैत कल्पनामा सम्बन्धित हुनुहुन्न। यो त अविद्याग्रस्त जीवको काम हो भन्ने तात्पर्य रहेको छ। दुबै प्रकारले विचार गर्दा परमात्मा मायापति एवं अविद्यारहित नै हुनुहुन्छ भन्ने सिद्ध हुन्छ।

**यस्याखिलामीवहभिः सुमङ्गलैर्वाचो विमिश्रा गुणकर्मजन्मभिः।**
**प्राणन्ति शुम्भन्ति पुनन्ति वै जगद् यास्तद्विरक्ताः शवशोभना मताः ॥१२॥**

**पदार्थ–**
**यस्य** = जुन भगवान्का
**अखिलामीवहभिः** = सम्पूर्ण पापहरूका नाशक
**सुमङ्गलैः** = मङ्गलमय
**गुणकर्मजन्मभिः** = (दया आदि) गुण, (गोवर्द्धनोद्धारण आदि) कर्म र जन्मद्वारा
**विमिश्राः** = युक्त भएका
**वाचः** = वाणीहरूले
**जगत्** = जगत् (वक्ता, श्रोता आदि प्राणीहरू)लाई
**वै** = निश्चय नै
**प्राणन्ति** = प्राणको सञ्चार गराउँछन्
**शुम्भन्ति** = (सज्जनहरूको सभामा) शोभित गराउँछन्
**पुनन्ति** = पवित्र गराउँछन्
**याः** = जुन वाणीहरू
**तद्विरक्ताः** = भगवान्को गुणकथनबाट विमुख भएका
**शवशोभनाः** = मुर्दालाई सिँगारिएका गहना जस्ता
**मताः** = मानिन्छन्

**वाक्यार्थ–** भगवान्का सम्पूर्ण पापहरूलाई नाश गर्ने मङ्गलमय गुण, कर्म र जन्महरूले युक्त भएका वाणीहरू जसले उच्चारण गर्दछ वा सुन्दछ भने त्यस्ता वक्ता र श्रोताहरूको हृदयमा प्राणको सञ्चार हुन्छ (उनीहरूको जीवन सफल हुन्छ)। सज्जनहरूको सभामा उनीहरू शोभायमान बन्दछन् र उनीहरूको जीवन पवित्र बन्दछ, तर भगवान्को गुणकीर्तनबाट विमुख भएका वाणीहरू भने मुर्दालाई लगाइएका गहना झैँ शोभाहीन बन्दछन्।

**स चावतीर्णः किल सात्वतान्वये स्वसेतुपालामरवर्यशर्मकृत्।**
**यशो वितन्वन् व्रज आस्त ईश्वरो गायन्ति देवा यदशेषमङ्गलम् ॥ १३ ॥**

**पदार्थ–**
**स्वसेतुपालामरवर्यशर्मकृत्** = आफूले बनाएको अनुशासनलाई पालना गर्ने श्रेष्ठ देवताहरूको कल्याणकर्ता
**ईश्वरः** = सर्वसमर्थ
**सः** = उहाँ परमात्मा
**व्रजे** = व्रजमा
**सात्वतान्वये** = यदुवंशमा

**अवतीर्णः च** = अवतार लिएर
**यशः** = कीर्ति
**वितन्वन्** = फैलाउँदै
**किल** = निश्चय नै
**आस्ते** = बस्नुभएको छ
**देवाः** = देवताहरू
**अशेषमङ्गलम्** = सम्पूर्ण मङ्गलमय फल प्रदान गर्ने
**यत्** = जुन भगवान्को कीर्ति
**गायन्ति** = गाउँदछन्

**वाक्यार्थ–** आफूले बनाएको अनुशासनलाई पालना गर्ने श्रेष्ठ-श्रेष्ठ देवताहरूको कल्याण गर्ने सर्वसमर्थ उहाँ परमात्मा यदुवंशमा अवतार लिएर आफ्नो कीर्ति फैलाउँदै व्रजभूमिमा बस्नुभएको छ। देवताहरू मङ्गलमय फल प्रदान गर्ने उहाँको कीर्तिलाई बारम्बार गाउँदछन्।

**तं त्वद्य नूनं महतां गतिं गुरुं त्रैलोक्यकान्तं दृशिमन्महोत्सवम्।**
**रूपं दधानं श्रिय ईप्सितास्पदं द्रक्ष्ये ममासन्नुषसः सुदर्शनाः॥ १४॥**

**पदार्थ–**
**त्रैलोक्यकान्तं** = तीनै लोकमा सुन्दर
**दृशिमन्महोत्सवम्** = दृष्टिमान्हरूको आँखाका एक मात्र आनन्दका विषय भएका
**श्रियः** = भगवती लक्ष्मीले
**ईप्सितास्पदं** = इच्छा गरेको
**रूपं** = रूप
**दधानं** = धारण गर्नुहुने
**महतां** = सज्जनहरूको
**गतिं** = प्राप्तव्य
**गुरुं** = गुरु
**तं तु** = उहाँ भगवान्लाई
**अद्य** = आज
**नूनं** = निश्चय पनि
**द्रक्ष्ये** = देख्नेछु (किनभने)
**उषसः** = प्रातःकालीन समय
**मम** = मेरा
**सुदर्शनाः** = कल्याणसूचक
**आसन्** = थिए

**वाक्यार्थ–** तीनै लोकमा सर्वाधिक सुन्दर भएकाले दृष्टिमान् व्यक्तिहरूको आँखाको आनन्दको एक मात्र विषय हुनुभएका, भगवती लक्ष्मीले चाहे अनुसारको सुन्दर रूप लिनुभएका, सज्जनहरूका प्राप्तव्य हुनुभएका गुरुरूप भगवान्को आज म निश्चय पनि दर्शन गर्नेछु, किनभने आज प्रातःकालदेखिकै मेरा समयहरू कल्याणसूचक भइरहेका छन् (प्रातः कालदेखि नै शुभसङ्केतहरूको दर्शन भइरहेको छ)।

**अथावरूढः सपदीशयो रथात् प्रधानपुंसोश्चरणं स्वलब्धये।**
**धिया धृतं योगिभिरप्यहं ध्रुवं नमस्य आभ्यां च सखीन् वनौकसः॥ १५॥**

**पदार्थ–**
**अथ** = यसपछि (भगवान्को दर्शनपछि)
**सपदि** = चाँडो-चाँडो
**रथात्** = रथबाट
**अवरूढः** = ओर्लिएको
**अहं** = मैले
**स्वलब्धये** = स्वरूपभूत ज्ञानको प्राप्तिका लागि
**योगिभिः अपि** = योगीहरूद्वारा पनि
**धिया** = हृदयद्वारा
**धृतं** = धारण गरिएको
**ईशयोः** = सर्वसमर्थ
**प्रधानपुंसोः** = पुरुषोत्तम श्रीकृष्ण र बलरामको
**चरणं** = चरणलाई (र)
**आभ्यां** = यी दुईका
**वनौकसः** = वन (व्रज)वासी
**सखीन् च** = साथीहरूलाई पनि
**ध्रुवं** = निश्चय नै

**नमस्ये** = नमस्कार गर्नेछु

**वाक्यार्थ–** टाढैबाट भगवान्को दर्शन गरेपछि म चाँडो-चाँडो रथबाट ओर्लिनेछु। त्यसपछि ठुला-ठुला योगीहरूले पनि स्वरूपज्ञानको प्राप्तिका लागि हृदयद्वारा ध्यान गरिएका पुरुषोत्तम भगवान् श्रीकृष्ण र बलरामका चरणमा प्रणाम गर्नेछु र उहाँका व्रजवासी गोप साथीहरूलाई पनि नमस्कार गर्नेछु।

**अप्यङ्घ्रिमूले पतितस्य मे विभुः शिरस्यधास्यन्निजहस्तपङ्कजम्।**
**दत्ताभयं कालभुजङ्गरंहसा प्रोद्वेजितानां शरणैषिणां नृणाम्॥ १६॥**

**पदार्थ–**
**अङ्घ्रिमूले** = चरणतलमा
**पतितस्य** = लत्रिएको
**मे** = मेरो
**शिरसि** = शिरमा
**विभुः** = सर्वव्यापक भगवान्ले
**कालभुजङ्गरंहसा** = कालरूपी सर्पको वेगद्वारा
**प्रोद्वेजितानां** = अत्यन्त डराएका
**शरणैषिणां** = रक्षाका लागि शरणमा आएका
**नृणाम्** = मनुष्यहरूलाई
**दत्ताभयं** = अभयदान दिने
**निजहस्तपङ्कजम्** = आफ्नो करकमल
**अपि** = के
**अधास्यत्** = राखिदिनुहोला

**वाक्यार्थ–** सर्वव्यापक भगवान्ले आफ्नो चरणतलमा लत्रिएको मेरो शिरमा कालरूपी सर्पको वेगद्वारा अत्यन्त डराएर रक्षाका लागि शरणमा आएका मनुष्यहरूलाई अभयदान दिने आफ्नो करकमल के राखिदिनुहोला त ?

**समर्हणं यत्र निधाय कौशिकस्तथा बलिश्चाप जगत्त्रयेन्द्रताम्।**
**यद्वा विहारे व्रजयोषितां श्रमं स्पर्शेन सौगन्धिकगन्ध्यपानुदत्॥ १७॥**

**पदार्थ–**
**कौशिकः** = कौशिक गोत्रीय कुनै इन्द्रले र
**तथा** = त्यस्तै
**बलिः च** = बलिले पनि
**यत्र** = जुन करकमलमा
**समर्हणं** = पूजा (को जल)
**निधाय** = चढाएर
**जगत्त्रयेन्द्रताम्** = तीनै लोकको स्वामित्व
**आप** = प्राप्त गरे
**वा** = अहो
**यत्** = जुन करकमल (द्वारा)
**विहारे** = रासक्रीडामा
**सौगन्धिकगन्धि** = कमलको पुष्प झैं सुगन्धमय
**व्रजयोषितां** = व्रजकुमारीहरूको
**श्रमं** = (विहारजन्य) थकाइलाई
**स्पर्शेन** = स्पर्शद्वारा
**अपानुदत्** = हटाइदिनुभयो

**वाक्यार्थ–** कौशिक गोत्रमा उत्पन्न इन्द्र र दानवराज बलिले भगवान्को करकमलमा केवल जल चढाएर पूजा गर्दा मात्र पनि तीनै लोकको स्वामित्व (इन्द्रपद) प्राप्त गरे। कमलको फूल झैं सुगन्धमय जुन करकमलको स्पर्शले रासक्रीडाको समयमा थाकेका व्रजकुमारीहरूको थकाइलाई भगवान्ले हटाइदिनुभयो।

**न मय्युपैष्यत्यरिबुद्धिमच्युतः कंसस्य दूतः प्रहितोऽपि विश्वदृक्।**
**योऽन्तर्बहिश्चेतस एतदीहितं क्षेत्रज्ञ ईक्षत्यमलेन चक्षुषा ॥ १८ ॥**

**पदार्थ–**
**कंसस्य** = कंसको
**दूतः** = दूतका रूपमा
**प्रहितः अपि** = पठाइएको भए पनि
**मयि** = मप्रति
**अच्युतः** = भगवान् अच्युतले
**अरिबुद्धिम्** = शत्रुबुद्धि
**न उपैष्यति** = गर्नुहुनेछैन
**विश्वदृक्** = सबैको साक्षी
**क्षेत्रज्ञः** = क्षेत्रज्ञ
**यः** = जुन भगवान्ले
**अमलेन** = शुद्ध
**चक्षुषा** = चक्षु (ज्ञानशक्ति)द्वारा
**चेतसः** = मनको
**अन्तः** = भित्र
**बहिः** = बाहिर रहेको (प्राणी मात्रको)
**एतत्** = यो सबै
**ईहितं** = चेष्टालाई
**ईक्षति** = देख्नुहुन्छ

**वाक्यार्थ–** कंसको दूतका रूपमा आएको भए पनि भगवान्ले मप्रति शत्रुबुद्धि गर्नुहुनेछैन। उहाँ सर्वसाक्षी क्षेत्रज्ञ हुनुहुन्छ यसैले उहाँ आफ्नो शुद्ध ज्ञानशक्तिद्वारा सम्पूर्ण प्राणीहरूको मनको भित्र र बाहिर रहेका सबै चेष्टाहरूलाई देख्न सक्नुहुन्छ।

**अप्यङ्घ्रिमूलेऽवहितं कृताञ्जलिं मामीक्षिता सस्मितमार्द्रया दृशा।**
**सपद्यपध्वस्तसमस्तकिल्बिषो वोढा मुदं वीतविशङ्क ऊर्जिताम् ॥ १९ ॥**

**पदार्थ–**
**अपि** = यदि
**अङ्घ्रिमूले** = चरणतलमा
**अवहितं** = संयमित भई
**कृताञ्जलिं** = नमस्कार गरेको
**मां** = मलाई
**सस्मितम्** = मुस्कानले सहित
**आर्द्रया** = कृपाले पूर्ण स्निग्ध
**दृशा** = दृष्टिद्वारा
**ईक्षिता** = हेर्नुभयो भने
**सपदि** = तत्काल
**अपध्वस्तसमस्तकिल्बिषः** = सम्पूर्ण पापहरू नष्ट भई
**वीतविशङ्कः** = (आनन्दको प्राप्तिको विषयमा) शङ्कारहित भएको मैले
**ऊर्जिताम्** = प्रशस्त
**मुदं** = हर्ष
**वोढा** = धारण गर्नेछु

**वाक्यार्थ–** चरणकमलमा संयमित भई नमस्कार गरिरहेको मलाई भगवान्ले मुस्कुराउँदै कृपापूर्ण स्निग्ध दृष्टिले हेर्नुभयो भने मेरा सम्पूर्ण पापहरू तत्काल नष्ट हुनेछन् अनि म निःशङ्क भएर परम खुसीको अनुभव गर्नेछु।

**सुहृत्तमं ज्ञातिमनन्यदैवतं दोर्भ्यां बृहद्भ्यां परिरप्स्यतेऽथ माम्।**
**आत्मा हि तीर्थीक्रियते तदैव मे बन्धश्च कर्मात्मक उच्छ्वसित्यतः ॥२०॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**सुहृत्तमं** = अत्यन्त हितैषी
**ज्ञातिम्** = स्वजन (काका)
**अनन्यदैवतं** = उहाँ अतिरिक्त कुनै अर्को देवता नभएको
**माम्** = मलाई
**बृहद्भ्यां** = विशाल
**दोर्भ्यां** = बाहुद्वारा

**परिरप्स्यते** = आलिङ्गन गर्नुहुनेछ
**तदा एव** = त्यही वेलामा नै
**मे** = मेरो
**आत्मा** = शरीर
**हि** = निश्चय नै
**तीर्थीक्रियते** = पवित्र गराइन्छ
**अतः** = त्यही आलिङ्गनका कारण
**कर्मात्मकः** = कर्ममूलक
**बन्धः च** = बन्धन पनि
**उच्छ्वसिति** = शिथिल हुनेछ

**वाक्यार्थ–** म भगवान्‌को हितैषी र उहाँको स्वजन (काका) पनि हुँ। उहाँ सिवाय मेरो कुनै अर्को इष्टदेव छैन। त्यसैले उहाँले मलाई आफ्नो विशाल बाहुद्वारा जब आलिङ्गन गर्नुहुनेछ, तब त्यसबाट मेरो शरीर पवित्र हुनेछ र कर्मबन्धन पनि शिथिल हुनेछ।

**लब्धाङ्गसङ्गं प्रणतं कृताञ्जलिं मां वक्ष्यतेऽक्रूर ततेत्युरुश्रवाः।**
**तदा वयं जन्मभृतो महीयसा नैवादृतो यो धिगमुष्य जन्म तत्॥ २१॥**

**पदार्थ–**
**उरुश्रवाः** = महान् यशस्वी भगवान्‌ले
**लब्धाङ्गसङ्गं** = आलिङ्गन प्राप्त गरेको
**प्रणतं** = झुकेर
**कृताञ्जलिं** = नमस्कार गरेको
**मां** = मलाई
**तत** = हे काका
**अक्रूर इति** = अक्रूर भनेर
**वक्ष्यते** = सम्बोधन गर्नुहुन्छ
**तदा** = त्यस समयमा
**वयं** = म
**जन्मभृतः** = सफल जन्मवाला हुनेछु
**यः** = जुन व्यक्ति
**महीयसा** = सर्वपूज्य भगवान्‌द्वारा
**न एव आदृतः** = (आत्मीय-रूपले) आदर गरिएन भने
**अमुष्य** = त्यस व्यक्तिको
**तत्** = त्यो
**जन्म** = जन्मलाई
**धिक्** = धिक्कार छ

**वाक्यार्थ–** महायशस्वी भगवान् श्रीकृष्णले जब मलाई आलिङ्गन गर्नुहुनेछ, तब म उहाँको चरणमा झुकेर नमस्कार गर्नेछु। त्यसपछि उहाँले मलाई हे अक्रूर काका ! भनेर सम्बोधन गर्नुहुनेछ अनि मेरो जन्म पनि सफल हुनेछ। भगवान्‌ले यसरी जसलाई स्वीकार गर्नुहुन्न, त्यस व्यक्तिको जन्मलाई धिक्कार छ।

**न तस्य कश्चिद् दयितः सुहृत्तमो न चाप्रियो द्वेष्य उपेक्ष्य एव वा।**
**तथापि भक्तान् भजते यथा तथा सुरद्रुमो यद्वदुपाश्रितोऽर्थदः॥ २२॥**

**पदार्थ–**
**तस्य** = उहाँ (भगवान्)को
**कश्चित्** = कोही पनि
**दयितः** = प्रिय
**सुहृत्तमः** = हितैषी
**न** = छैन
**अप्रियः** = अप्रिय
**द्वेष्यः** = द्वेष्य
**वा** = अथवा
**उपेक्ष्यः एव च** = उपेक्ष्य पनि
**न** = छैन
**तथा अपि** = तापनि
**उपाश्रितः** = आश्रयमा रहिएको
**सुरद्रुमः** = कल्पवृक्ष
**यद्वत्** = जसरी
**अर्थदः** = इच्छित वस्तु प्रदाता बन्दछ (त्यसै गरी)
**यथा** = जसरी (जसले भजन गर्दछ)
**भक्तान्** = ती भक्तहरूलाई
**तथा** = त्यसै गरी

**भजते** = कृपा गर्नुहुन्छ

**वाक्यार्थ–** भगवान्को कोही पनि प्रिय हितैषी छैन, कोही अप्रिय पनि छैन र कोही उपेक्ष्य पनि छैन। तापनि जसरी कल्पवृक्षले आफ्नो आश्रयमा रहेकाहरूलाई इच्छा गरेको वस्तु प्रदान गर्दछ, त्यसै गरी भगवान् पनि आफूमा आश्रित भक्तहरूलाई कृपा गर्नुहुन्छ।

**विवरण–** यस श्लोकमा अक्रूरले भगवान्ले भक्तहरूलाई प्रेम गर्नु उहाँको पक्षपात होइन भनी बताएका छन्। अक्रूरले मनमनै व्रजमा पुग्दा श्रीकृष्णको दर्शन हुने, झटपट रथबाट ओर्लिई वन्दना गर्दा उहाँले अङ्कमाल गर्ने र आफ्नो जन्म सफल हुने कल्पना गरिरहेका थिए। यहाँ शङ्का हुन्छ– परमात्मामा सामान्य जीवहरूमा जस्तो सम्बन्ध कहाँ हुन्छ र ? यसको समाधान गर्दै उनी भन्छन्– भगवान्ले भक्तहरूलाई अङ्कमाल, प्रेम आदि गर्नु उहाँको करुणारूपी गुण हो। त्यसो गर्दा उहाँमा विषमताको दोष पनि आउँदैन। भक्त र भगवान्को सम्बन्धलाई लिएर के शङ्का हुने गर्दछ भने भगवान्ले भक्तलाई कृपा गर्दा उहाँले पक्षपात या विषमता गरेको ठहर्छ अनि नगर्दा भक्तिको परम्परा नै लुप्त हुन्छ। त्यसको समाधानमा यहाँ उद्धवले भगवान्लाई कल्पवृक्षसँग तुलना गरेका छन्। कल्पवृक्षले आफ्नो नजिक गएकालाई चाहेको वस्तु दिन्छ, अनि नजानेलाई दिँदैन। यसबाट उसमा विषमताको दोष आउँदैन। यसै गरी आफ्नो नजिक आउनेलाई कृपा गर्ने स्वभाव भएका परमात्माले भक्तलाई कृपा गर्दा उहाँमा विषमता आउँदैन। जो उहाँको नजिक जान्छ, उसले उहाँको कृपा प्राप्त गर्दछ, जो नजिक जाँदैन उसले कृपा प्राप्त गर्दैन भन्ने कुरा यहाँ बताइएको छ।

**किं चाग्रजो मावनतं यदूत्तमः स्मयन् परिष्वज्य गृहीतमञ्जलौ।**
**गृहं प्रवेश्याप्तसमस्तसत्कृतं सम्प्रक्ष्यते कंसकृतं स्वबन्धुषु॥ २३॥**

**पदार्थ–**
**किं च** = यसै गरी
**यदूत्तमः** = यदुहरूमा श्रेष्ठ
**अग्रजः** = दाजु बलरामले
**स्मयन्** = मुस्कुराउँदै
**अवनतं** = झुकेर नमस्कार गरिरहेको
**मा** = मलाई
**परिष्वज्य** = आलिङ्गन गरेर
**अञ्जलौ** = मेरो अँजुलीमा
**गृहीतम्** = समाएर (मलाई)
**गृहं** = घरमा
**प्रवेश्य** = प्रवेश गराएर
**आप्तसमस्तसत्कृतं** = समस्त सत्कारहरू पाएको मलाई
**स्वबन्धुषु** = आफ्नो आत्मीयजनहरूप्रति
**कंसकृतं** = कंसले गरेका कार्यहरू
**सम्प्रक्ष्यते** = सोध्नुहुनेछ

**वाक्यार्थ–** म जब झुकेर नमस्कार गर्दै भगवान्को अगाडि बस्नेछु, तब यदुहरूमा श्रेष्ठ बलरामजी मेरो सामु मुस्कुराउँदै आउनुहुनेछ र मलाई आलिङ्गन गरेर मेरो अँजुलीमा समाएर मलाई घरभित्र प्रवेश गराउनुहुनेछ। अनि मेरो सत्कार गरिसकेपछि उहाँले आत्मीयजनहरूप्रति कंसले के कस्तो व्यवहार गरिरहेको छ भनी सोध्नुहुनेछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति सञ्चिन्तयन् कृष्णं श्वफल्कतनयोऽध्वनि ।**
**रथेन गोकुलं प्राप्तः सूर्यश्चास्तगिरिं नृप ॥ २४ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**इति** = यसप्रकार
**श्वफल्कतनयः** = श्वफल्कका छोरा अक्रूर
**अध्वनि** = बाटोमा
**कृष्णं** = श्रीकृष्णलाई
**सञ्चिन्तयन्** = चिन्तन गर्दै
**रथेन** = रथद्वारा
**गोकुलं** = गोकुल
**प्राप्तः** = पुगे
**सूर्यः च** = सूर्य पनि
**अस्तगिरिं** = अस्ताचलमा (पुगे)

**वाक्यार्थ–** हे राजा परीक्षित् ! यसरी श्वफल्कका छोरा अक्रूर बाटोमा रथ चढेर भगवान् श्रीकृष्णको चिन्तन गर्दै गोकुल पुगे भने सूर्य पनि अस्ताउन लागे।

**पदानि तस्याखिललोकपालकिरीटजुष्टामलपादरेणोः ।**
**ददर्श गोष्ठे क्षितिकौतुकानि विलक्षितान्यब्जयवाङ्कुशाद्यैः ॥ २५ ॥**

**पदार्थ–**
**गोष्ठे** = गोठ (व्रज)मा
**अब्जयवाङ्कुशाद्यैः** = कमल, जौ, अङ्कुश आदि चिह्नहरूद्वारा
**विलक्षितानि** = अङ्कित
**अखिललोकपालकिरीटजुष्टामलपादरेणोः** = सम्पूर्ण लोकपालहरूको शिरको मुकुटद्वारा निर्मल चरणरजको सेवन गरिएका
**तस्य** = ती भगवान्को
**क्षितिकौतुकानि** = पृथिवीको अलङ्कार भएका
**पदानि** = चरणचिह्नहरू
**ददर्श** = देखे

**वाक्यार्थ–** जसको चरणचिह्नका रजलाई सम्पूर्ण लोकपालहरूले आफ्नो शिरको मुकुटमा लगाउँछन् त्यस्ता भगवान्को पृथिवीको अलङ्कार भएका अनि कमल, जौ, अङ्कुश आदिको चिह्नद्वारा अङ्कित पदचिह्नहरूको अक्रूरले व्रजमा दर्शन गरे।

**तद्दर्शनाह्लादविवृद्धसम्भ्रमः प्रेम्णोर्ध्वरोमाश्रुकलाकुलेक्षणः ।**
**रथादवस्कन्द्य स तेष्वचेष्टत प्रभोरमून्यङ्घ्रिरजांस्यहो इति ॥ २६ ॥**

**पदार्थ–**
**तद्दर्शनाह्लादविवृद्धसम्भ्रमः** = उहाँ (भगवान्)को पदचिह्नको दर्शनद्वारा उत्पन्न आनन्दले विह्वल भएका
**प्रेम्णा** = प्रेमका कारण
**ऊर्ध्वरोमाश्रुकलाकुलेक्षणः** = रौँहरू ठाडा-ठाडा भएका र आँसुका थोपाहरूले आँखा भिजेका
**सः** = ती अक्रूरले
**रथात्** = रथबाट
**अवस्कन्द्य** = ओर्लिएर
**अहो** = अहो
**अमूनि** = यी
**प्रभोः** = भगवान् श्रीकृष्णका
**अङ्घ्रिरजांसि इति** = चरणरजहरू हुन् भन्दै

**तेषु** = ती चरणरजहरूमा
**अचेष्टत** = लडिबुडी गर्न लागे

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको पदचिह्नहरूको दर्शन गरिसकेपछि अक्रूर आनन्दले विह्वल भए। प्रेमका कारण उनको शरीरका सम्पूर्ण रौँहरू ठाडा–ठाडा भए भने आँसुका थोपाहरूले उनका आँखा भिजे। उनी रथबाट ओर्लिएर 'अहो ! यी भगवान्का चरणरजहरू' भन्दै भगवान्का चरणरजहरू भएको ठाउँमा लडिबुडी गर्न लागे।

**देहम्भृतामियानर्थो हित्वा दम्भं भियं शुचम्।**
**सन्देशाद् यो हरेर्लिङ्गदर्शनश्रवणादिभिः॥ २७॥**

**पदार्थ–**
**सन्देशात्** = (कंसको) सन्देश लिएर आएपछि (अक्रूरले)
**हरेः** = भगवान् श्रीकृष्णका
**लिङ्गदर्शनश्रवणादिभिः** = चिह्नहरूको दर्शन र गुणको श्रवण आदिद्वारा
**दम्भं** = अभिमान
**भियं** = भय
**शुचम्** = शोकलाई
**हित्वा** = त्यागेर
**यः** = यो (जुन अक्रूरले गरेको भगवान्को चरणरजमा लडिबुडी प्रकर्ष भक्ति छ)
**इयान्** = यत्ति नै
**देहम्भृताम्** = शरीरधारीहरूको
**अर्थः** = पुरुषार्थ हो

**वाक्यार्थ–** कंसको सन्देश लिएर आएपछि अक्रूरले भगवान्का चिह्नहरूको दर्शन, गुणको श्रवण र लीलाचरित्रहरूको स्मरण आदिद्वारा आफ्नो अभिमान, भय र शोकलाई त्यागेर भगवान्को चरणरजमा लडिबुडी गरी प्रकृष्ट भक्ति गरे। शरीरधारीहरूको पुरुषार्थ भनेकै यही हो।

**विवरण–** यस श्लोकमा शरीरधारी जीवहरूको मुख्य पुरुषार्थ भनेको भगवान्मा समर्पित हुनुमा नै छ भनी बताइएको छ। अक्रूर व्रजमा आउँदा बाटोभरि भगवान्को चिन्तन गर्दै आए। उनी गोकुल पुग्दा सूर्य पनि अस्ताचलमा पुगिसकेका थिए भनी बताइएको छ। यसरी बिहानै मथुराबाट हिँडेका उनी साँझमा मात्र गोकुल पुग्नुको कारण के होला ? अक्रूर बाटोभरि भगवान्को सम्झना गर्दै रोकिँदै आएका थिए, यही नै त्यसको कारण हो। अक्रूर जहाँ भगवान्का चरणचिह्न देख्थे, त्यहीँ तत्काल रथबाट ओर्लिएर त्यहाँ लुटुपुटु गर्थे। यी भगवान् श्रीकृष्णका चरणचिह्न हुन् भनी तिनीहरूमा लुटुपुटु गर्दै भगवान्सँग मिलन हुने कल्पनामा छट्पटिँदै गोकुल आउँदा त्यहाँ पुग्न दिनभरि लागेको देखिन्छ। अक्रूरलाई त कंसले रामकृष्णलाई लिई आउन खटाएको थियो। लौकिक कर्तव्य पनि भुली यसरी भक्तिमा मस्त बन्नु राम्रो हो त भन्ने शङ्का हुँदा श्रीशुकदेवले अक्रूरको चरित्रलाई समर्थन गर्दै यहाँ शरीरधारीहरूको पुरुषार्थको कुरा बताउनुभएको छ। जीवहरूले गर्ने सबभन्दा महत्त्वपूर्ण पुरुषार्थ भनेको भगवान्को चिन्तन र दर्शन नै हो। त्यसभन्दा बाहेक अरू सबै लौकिक कर्तव्य एवं धर्म आदि खास पुरुषार्थ होइनन्। अज्ञानका कारणले प्राणीहरूले संसार बढाउनुलाई नै मुख्य पुरुषार्थ एवं कर्तव्य ठानेका छन्, तर विनाशी संसारलाई जति बढाए पनि त्यो एक दिन नष्ट भइहाल्छ। त्यसैले बुद्धिमान् व्यक्तिले संसार बढाउनमा होइन, परमात्मचिन्तनमा नै समय बिताउनुपर्दछ। परमात्मा वास्तविक वस्तु हुनुहुन्छ, जगत् काल्पनिक

वस्तु हो। यथार्थ वस्तुलाई छाडी काल्पनिक वस्तुको पछि लाग्नु पुरुषार्थ हुन सक्दैन। त्यसैले प्राणीहरूले आफ्नो सम्पूर्ण समय परमात्माकै लागि खर्च गर्नुपर्दछ।

यहाँ अक्रूरको चरित्रलाई हेर्दा उनमा मथुरामा रहुन्जेल श्रीकृष्णप्रति त्यति प्रेम भएको देखिँदैन। अक्रूर अत्याचारी कंसकै साथ दिई बसिरहेका देखिन्छन्। दुष्टसंसर्गलाई त्याग्न नसकेकाले उनको चरित्रमा त्यति उच्चता देखिँदैन। अक्रूर एउटा संसारी व्यक्ति झैं लाग्दछन्। वास्तवमा संसारी व्यक्तिहरूलाई पनि भगवत्प्रेमको दृष्टान्त दिनको लागि नै अक्रूरको चरित्र बताइएको हो। संसारको संसर्गमा रहँदा संसारी नै भए तापनि जब परमात्मातर्फ फर्किने वेला हुन्छ, तब जीवले सम्पूर्ण भावले परमात्मामा समर्पित हुन सक्नुपर्दछ। शरीर, इन्द्रिय आदिमा आत्मबुद्धि गर्ने आसक्त व्यक्तिहरूको पनि **अर्थः** अर्थात् कर्तव्य यही हो कि उनीहरूले पनि भगवान्को नजिक जानुपर्ने भयो भने दम्भ, भय आदि सबैलाई हटाई पूर्णरूपले समर्पित हुनुपर्दछ। अक्रूर जब मथुराबाट गोकुलतिर अभिमुख भए, तब उनमा भगवत्प्रेमको सञ्चार भएको देखाइएको छ। यसरी संसारी व्यक्तिहरूले पनि भगवान्तिर अभिमुख भएपछि पूर्णरूपमा समर्पित हुनुपर्छ भन्ने शिक्षा दिइएको छ।

**ददर्श कृष्णं रामं च व्रजे गोदोहनं गतौ।**
**पीतनीलाम्बरधरौ शरदम्बुरुहेक्षणौ ॥ २८ ॥**
**किशोरौ श्यामलश्वेतौ श्रीनिकेतौ बृहद्भुजौ।**
**सुमुखौ सुन्दरवरौ बालद्विरदविक्रमौ ॥ २९ ॥**

**पदार्थ–**
**व्रजे** = व्रजमा पुगेपछि
**गोदोहनं** = गाई दुहुन
**गतौ** = जानुभएका
**पीतनीलाम्बरधरौ** = पहेँलो र नीलो वस्त्र लगाउनुभएका
**शरदम्बुरुहेक्षणौ** = शरत्कालीन कमलजस्तो आँखा भएका
**श्यामलश्वेतौ** = श्याम र श्वेत वर्ण भएका
**श्रीनिकेतौ** = सौन्दर्यको आश्रय भएका
**बृहद्भुजौ** = ठुला-ठुला हात भएका
**सुमुखौ** = सुन्दर अनुहार भएका
**सुन्दरवरौ** = सुन्दर पुरुषहरूमा श्रेष्ठ
**बालद्विरदविक्रमौ** = हात्तीको बच्चाको जस्तो गति भएका
**किशोरौ** = किशोर
**कृष्णं** = श्रीकृष्ण र
**रामं च** = बलरामलाई पनि
**ददर्श** = देखे

**वाक्यार्थ–** व्रजमा पुगेका अक्रूरले गाई दुहुने गोठमा जानुभएका श्रीकृष्ण र बलरामलाई देखे। श्रीकृष्णले पीताम्बर र बलरामले नीलाम्बर लगाउनुभएको थियो। भगवान् श्रीकृष्ण श्यामवर्णको र बलराम गौरवर्णको हुनुहुन्थ्यो। उहाँहरूका आँखा शरत्कालीन कमल झैं प्रफुल्लित थिए। सुन्दर अनुहार भएका उहाँ किशोरहरू सुन्दरपुरुषहरूमैं सर्वश्रेष्ठ हुनुहुन्थ्यो। ठुला-ठुला हात भएका उहाँहरू हात्तीको बच्चाको झैं मन्द र ललित गतिले हिँड्दै हुनुहुन्थ्यो।

**ध्वजवज्राङ्कुशाम्भोजैश्चिह्नितैरङ्घ्रिभिर्व्रजम् ।**
**शोभयन्तौ महात्मानावनुक्रोशस्मितेक्षणौ ॥ ३० ॥**
**उदाररुचिरक्रीडौ स्रग्विणौ वनमालिनौ ।**
**पुण्यगन्धानुलिप्ताङ्गौ स्नातौ विरजवाससौ ॥ ३१ ॥**

**पदार्थ–**
**ध्वजवज्राङ्कुशाम्भोजैः** = ध्वजा, वज्र, अङ्कुश र कमलहरूले
**चिह्नितैः** = अङ्कित
**अङ्घ्रिभिः** = चरणहरूद्वारा
**व्रजं** = व्रजलाई
**शोभयन्तौ** = शोभायमान गराइरहेका
**महात्मानौ** = विशाल हृदय भएका
**अनुक्रोशस्मितेक्षणौ** = दयापूर्ण मुस्कान र दृष्टि भएका
**उदाररुचिरक्रीडौ** = उदार र सुन्दर क्रीडा गर्ने
**स्नातौ** = स्नान गरेका
**स्रग्विणौ** = रत्नहरूको माला लगाएका
**वनमालिनौ** = वनमाला धारण गरेका
**पुण्यगन्धानुलिप्ताङ्गौ** = पवित्र वासनादार चन्दनले अङ्गमा लेप लगाएका
**विरजवाससौ** = पवित्र वस्त्र लगाएका (श्रीकृष्ण र बलरामलाई देखे)

**वाक्यार्थ–** ध्वजा, वज्र, अङ्कुश र कमलहरूले अङ्कित चरणहरूद्वारा व्रजलाई शोभायमान गराइरहनुभएका, दयापूर्ण मुस्कान र दृष्टि भएका, उदार र सुन्दर क्रीडा गरिहनुभएका, स्नानपूर्वक रत्नहरूको हार र वनमाला लगाउनुभएका एवं अङ्गमा पवित्र वासनादार चन्दन लेपन गर्नुभएका र पवित्र वस्त्र लगाउनुएका श्रीकृष्ण र बलरामलाई अक्रूरले देखे।

**प्रधानपुरुषावाद्यौ जगद्धेतू जगत्पती ।**
**अवतीर्णौ जगत्यर्थे स्वांशेन बलकेशवौ ॥ ३२ ॥**
**दिशो वितिमिरा राजन् कुर्वाणौ प्रभया स्वया ।**
**यथा मारकतः शैलो रौप्यश्च कनकाचितौ ॥ ३३ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**प्रधानपुरुषौ** = पुरुषोत्तम
**आद्यौ** = आद्य
**जगद्धेतू** = जगत्का कारण
**जगत्पती** = जगत्का मालिक
**जगत्यर्थे** = जगत्को पालन गर्न
**स्वांशेन** = आफ्नो अंशसहित
**अवतीर्णौ** = अवतीर्ण हुनुभएका
**कनकाचितौ** = सुनले मोडेका
**मारकतः शैलः** = इन्द्रनील पर्वत
**रौप्यः च यथा** = रौप्य पर्वतले झैं
**स्वया** = आफ्नो
**प्रभया** = शरीरको कान्तिद्वारा
**दिशः** = दिशाहरूलाई
**वितिमिराः** = अन्धकाररहित
**कुर्वाणौ** = बनाइरहेका
**बलकेशवौ** = श्रीकृष्ण र बलरामलाई (देखे)

**वाक्यार्थ–** हे राजा परीक्षित् ! जगत्का आदिकारण, जगत्का मालिक पुरुषोत्तम भगवान् नै जगत्को पालन गर्नका लागि आ-आफ्नो अंशद्वारा भगवान् श्रीकृष्ण र बलरामको रूपमा अवतार लिएर धर्तीमा अवतीर्ण हुनुभएको छ। जसरी सुनले युक्त भएका इन्द्रनीलपर्वत र रौप्यपर्वतले (आसपासको अन्धकारलाई नष्ट गराएको) झैँ आफ्नो शरीरको कान्तिद्वारा पूर्व आदि दिशाहरूलाई उज्यालो बनाइरहेका श्रीकृष्ण र बलरामलाई अक्रूरले देखे।

**रथात् तूर्णमवप्लुत्य सोऽक्रूरः स्नेहविह्वलः।**
**पपात चरणोपान्ते दण्डवद् रामकृष्णयोः॥ ३४॥**

**पदार्थ–**
**स्नेहविह्वलः** = स्नेहले व्याकुल भएका
**सः** = ती
**अक्रूरः** = अक्रूर
**तूर्णम्** = तुरुन्तै
**रथात्** = रथबाट
**अवप्लुत्य** = ओर्लिएर
**रामकृष्णयोः** = बलराम र श्रीकृष्णको
**चरणोपान्ते** = चरणतलमा
**दण्डवत्** = दण्ड झैँ
**पपात** = पसारिए

**वाक्यार्थ–** (भगवान् श्रीकृष्ण र बलरामलाई देख्नासाथ) ती अक्रूर स्नेहले व्याकुल भए र रथबाट तुरुन्त ओर्लिएर श्रीकृष्ण र बलरामको चरणतलमा दण्डवत् प्रणाम गरे।

**भगवद्दर्शनाह्लादबाष्पपर्याकुलेक्षणः।**
**पुलकाचिताङ्ग औत्कण्ठ्यात् स्वाख्याने नाशकन्नृप॥ ३५॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**भगवद्दर्शनाह्लादबाष्पपर्याकुलेक्षणः** = भगवान्को दर्शनद्वारा उत्पन्न भएको हर्षका आँसुद्वारा आँखा भरिएका
**पुलकचिताङ्गः** = शरीरका रौँहरू ठाडा भएका अक्रूरले
**औत्कण्ठ्यात्** = आँसुका कारण गला अवरुद्ध भएको हुनाले
**स्वाख्याने** = आफ्नो कुरा गर्न
**न अशकत्** = सकेनन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भगवान्को दर्शन गर्दा खुसीले आएको आँसुद्वारा अक्रूरका आँखा भरिए। उनको शरीरका प्रत्येक अङ्गका रौँहरू ठाडा-ठाडा भए। आँसु धेरै बगेको हुनाले उनको गला पनि अवरुद्ध भएको थियो। त्यसैले उनले आफ्नो विषयमा केही बताउन पनि सकेनन्।

**भगवांस्तमभिप्रेत्य रथाङ्गाङ्कितपाणिना।**
**परिरेभेऽभ्युपाकृष्य प्रीतः प्रणतवत्सलः॥ ३६॥**

**पदार्थ–**
**प्रणतवत्सलः** = शरणमा आउने भक्तहरूका प्रेमी
**प्रीतः** = प्रसन्न हुनुभएका
**भगवान्** = भगवान्ले
**तं** = ती अक्रूरको अभिप्रायलाई
**अभिप्रेत्य** = बुझेर
**रथाङ्गाङ्कितपाणिना** = रथको चक्रले अङ्कित आफ्नो हातले
**अभ्युपाकृष्य** = आफ्नो सम्मुख तानेर
**परिरेभे** = अङ्कमाल गर्नुभयो

**वाक्यार्थ–** शरणमा आएका भक्तहरूका प्रेमी भगवान् श्रीकृष्णले अक्रूर आउनुको कारण बुझ्नुभयो र अत्यन्त प्रसन्न भएर रथचक्र अङ्कित आफ्नो हातले अक्रूरलाई आफ्नो सम्मुख तानेर अङ्कमाल गर्नुभयो।

**सङ्कर्षणश्च प्रणतमुपगुह्य महामनाः।**
**गृहीत्वा पाणिना पाणी अनयत् सानुजो गृहम्॥ ३७॥**

**पदार्थ–**
**महामनाः** = महामनस्वी
**सानुजः** = भाइ श्रीकृष्ण सहित
**सङ्कर्षणः च** = बलरामले पनि
**प्रणतम्** = (आफ्नो अगाडि आएर) नमस्कार गरिरहेका अक्रूरलाई
**उपगुह्य** = अङ्कमाल गरेर
**पाणिना** = आफ्नो हातले
**पाणी** = अक्रूरको दुबै हातलाई
**गृहीत्वा** = समाएर
**गृहम्** = घर
**अनयत्** = लानुभयो

**वाक्यार्थ–** महामनस्वी बलरामले पनि आफ्नो अगाडि आएर नमस्कारपूर्वक उभिएका अक्रूरलाई अङ्कमाल गर्नुभयो। त्यसपछि दुबै दाजुभाइले अक्रूरको दुबै हात समातेर उनलाई घरतिर लिएर जानुभयो।

**पृष्ट्वाथ स्वागतं तस्मै निवेद्य च वरासनम्।**
**प्रक्षाल्य विधिवत् पादौ मधुपर्कार्हणमाहरत्॥ ३८॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**स्वागतं** = स्वागतपूर्वक
**पृष्ट्वा** = कुशलताका प्रश्नहरू सोधेर
**तस्मै** = ती अक्रूरलाई
**वरासनम् च** = उत्तम आसन पनि
**निवेद्य** = दिएर
**विधिवत्** = विधिपूर्वक
**पादौ** = चरण
**प्रक्षाल्य** = धोएर
**मधुपर्कार्हणम्** = मधुपर्क (दुध र मह मिसाएर बनाइएको द्रव्य, अथवा दही, नौनी र मह मिसाएर बनाइएको द्रव्य) का लागि उचित सामग्री
**आहरत्** = समर्पण गर्नुभयो

**वाक्यार्थ–** घर लगेर भगवान्ले अक्रूरको भव्य स्वागत गर्नुभयो। त्यसपछि कुशलताका विषयमा प्रश्न गरेर अक्रूरलाई बस्नका लागि उत्तम आसन प्रदान गर्नुभयो अनि विधिवत् चरण धोएर मधुपर्क आदि सामग्रीहरू समर्पण गर्नुभयो।

**निवेद्य गां चातिथये संवाह्य श्रान्तमादृतः।**
**अन्नं बहुगुणं मेध्यं श्रद्धयोपाहरद् विभुः॥ ३९॥**

**पदार्थ–**
**आदृतः** = आदरभावनाले युक्त
**विभुः** = सर्वव्यापक भगवान्ले
**अतिथये** = अतिथि अक्रूरलाई
**गां च** = गाई पनि
**निवेद्य** = प्रदान गरेर

**श्रान्तम्** = थाकेका अक्रूरलाई
**संवाह्य** = चरण दबाएर (उनको थकाइ हटाई)
**श्रद्धया** = श्रद्धापूर्वक
**मेध्यं** = पवित्र
**बहुगुणं** = धेरै गुण (षड्रस)ले युक्त
**अन्नं** = खाद्यान्न
**उपाहरत्** = दिनुभयो

**वाक्यार्थ–** भगवान्ले अतिथि अक्रूरलाई आदरपूर्वक गाई प्रदान गर्नुभयो अनि थाकेका उनको चरण दबाएर थकाइलाई हटाइदिनुभयो। त्यसपछि षड्रसले युक्त पवित्र बहुगुणयुक्त अन्नहरू पनि भोजनका लागि दिनुभयो।

**तस्मै भुक्तवते प्रीत्या रामः परमधर्मवित्।**
**मुखवासैर्गन्धमाल्यैः परां प्रीतिं व्यधात् पुनः॥ ४०॥**

**पदार्थ–**
**परमधर्मवित्** = परमधर्मका ज्ञाता
**रामः** = बलरामले
**भुक्तवते** = भोजन गरिसकेका
**तस्मै** = ती अक्रूरलाई
**प्रीत्या** = प्रेमपूर्वक
**मुखवासैः** = (पान, सुपारी, सुकमेल) मुखवास र
**गन्धमाल्यैः** = वासनादार मालाहरूद्वारा
**पुनः** = फेरि पनि
**परां** = अत्यन्त
**प्रीतिं** = प्रसन्नता
**व्यधात्** = उत्पन्न गराउनुभयो

**वाक्यार्थ–** अक्रूरले भोजन गरिसकेपछि परमधर्मका ज्ञाता बलरामले उनलाई प्रेमपूर्वक मुखवास (पान, सुपारी, सुकमेल आदि) र वासनादार मालाहरू दिनुभयो र अक्रूरलाई ज्यादै खुसी गराउनुभयो।

**पप्रच्छ सत्कृतं नन्दः कथं स्थ निरनुग्रहे।**
**कंसे जीवति दाशार्ह सौनपाला इवावयः॥ ४१॥**

**पदार्थ–**
**सत्कृतं** = (भोजन आदिद्वारा) सत्कार गरिएका अक्रूरलाई
**नन्दः** = नन्दले
**पप्रच्छ** = सोधे
**दाशार्ह** = हे अक्रूर
**निरनुग्रहे** = अत्यन्त क्रूर
**कंसे** = कंस
**जीवति** = बाँचिरहेको अवस्थामा
**सौनपालाः** = पशुघाती (कसाई)ले पालेको
**अवयः इव** = भेडा जैँ
**कथं** = कसरी (तपाईंहरू)
**स्थ** = रहनुभएको छ

**वाक्यार्थ–** भोजन आदिद्वारा सत्कार गरिसकेपछि नन्दले सोधे– हे अक्रूर! त्यो अत्यन्त क्रूर कंस बाँचिरहेको अवस्थामा उसको समीपमा कसाईले पालेका भेडाहरू जैँ भएर तपाईंहरू कसरी रहनुभएको छ ?

**योऽवधीत् स्वस्वसुस्तोकान् क्रोशन्त्या असुतृप् खलः।**
**किं नु स्वित् तत्प्रजानां वः कुशलं विमृशामहे॥ ४२॥**

**पदार्थ**–
**असुतृप्** = आफ्नै प्राणको रक्षा गर्ने
**यः** = जुन
**खलः** = दुष्ट कंसले
**क्रोशन्त्याः** = चिच्याइरहेकी
**स्वस्वसुः** = आफ्नी बहिनी देवकीका
**स्तोकान्** = शिशुहरूलाई
**अवधीत्** = मार्‍यो
**तत्प्रजानां** = त्यही पापीका प्रजा
**वः** = तपाईंहरूको
**कुशलं** = कुशल
**किं नु स्वित्** = कसरी
**विमृशामहे** = सोच्न सक्छौं र

**वाक्यार्थ**– आफ्नै प्राणको मात्र रक्षा गर्न चाहने दुष्ट कंसले चिच्याइरहेकी आफ्नी बहिनी देवकीका शिशुहरूलाई खोसेर मार्‍यो। तपाईंहरू यस्तो दुष्टको प्रजा हुनुहुन्छ भने हामी तपाईंहरूलाई सुख होला भनेर कसरी सोच्न सक्छौं र ?

**इत्थं सूनृतया वाचा नन्देन सुसभाजितः।**
**अक्रूरः परिपृष्टेन जहावध्वपरिश्रमम्॥ ४३॥**

**पदार्थ**–
**परिपृष्टेन** = (कुशलताको विषयमा पहिल्यै) सोधिएका
**नन्देन** = नन्दद्वारा
**इत्थं** = यसरी
**सूनृतया** = मधुर
**वाचा** = वाणीले (सोधिएका)
**सुसभाजितः** = सत्कार गरिएका
**अक्रूरः** = अक्रूरले
**अध्वपरिश्रमम्** = बाटोको थकाइलाई
**जहौ** = त्याग गरे

**वाक्यार्थ**– अक्रूरले कुशलताको बारेमा नन्दलाई पहिल्यै सोधिसकेका थिए। त्यसपछि नन्दले पनि मधुर वाणीले कुशलताको विषयमा सोधेर यथायोग्य सत्कार गरेपछि अक्रूरको सम्पूर्ण थकाइ नष्ट भयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे-**
**ऽक्रूरागमनं नामाष्टात्रिंशोऽध्यायः॥ ३८॥**

# अथ एकोनचत्वारिंशोऽध्यायः

## श्रीकृष्ण र बलरामको मथुरागमन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**सुखोपविष्टः पर्यङ्के रामकृष्णोरुमानितः ।**

**लेभे मनोरथान् सर्वान् पथि यान् स चकार ह ॥ १ ॥**

पदार्थ–
**रामकृष्णोरुमानितः** = श्रीकृष्ण र बलरामद्वारा अत्यधिक सम्मानित
**पर्यङ्के** = पलङमा
**सुखोपविष्टः** = आरामपूर्वक बसेका
**सः** = ती अक्रूरले
**ह** = निश्चय नै
**पथि** = बाटोमा
**यान्** = जे-जे
**मनोरथान्** = इच्छा
**चकार** = गरेका थिए
**सर्वान्** = ती सबै
**लेभे** = प्राप्त गरे

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण र बलरामद्वारा अत्यन्त सम्मान गरिएका र आरामसँग पलङमा बसेका अक्रूरले बाटोमा जे-जस्ता इच्छा गरेका थिए ती सबै प्राप्त गरे।

**किमलभ्यं भगवति प्रसन्ने श्रीनिकेतने ।**

**तथापि तत्परा राजन्न हि वाञ्छन्ति किञ्चन ॥ २ ॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित् !
**श्रीनिकेतने** = लक्ष्मीजीको आश्रय
**भगवति** = भगवान्
**प्रसन्ने** = प्रसन्न भएपछि
**किम्** = कुन वस्तु
**अलभ्यं** = अप्राप्य हुन्छ
**तथा अपि** = तापनि
**तत्पराः** = भगवान्का भक्तहरू
**हि** = निश्चय नै
**किञ्चन** = केही पनि
**न वाञ्छन्ति** = चाहँदैनन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! लक्ष्मीजीको आश्रय भएका भगवान् प्रसन्न भएपछि भक्तहरूका लागि नपाइने वस्तु केही पनि हुन सक्दैन, तापनि भगवान्का भक्तहरू केही पनि चाहँदैनन्।

**सायन्तनाशनं कृत्वा भगवान् देवकीसुतः ।**

**सुहृत्सु वृत्तं कंसस्य पप्रच्छान्यच्चिकीर्षितम् ॥ ३ ॥**

पदार्थ–
**देवकीसुतः** = देवकीका छोरा
**भगवान्** = भगवान् श्रीकृष्णले
**सायन्तनाशनं** = सायङ्कालिक भोजन
**कृत्वा** = गरेर
**सुहृत्सु** = आफ्ना मित्र यदुवंशीहरूका साथमा
**कंसस्य** = कंसको
**वृत्तं** = व्यवहार र
**अन्यत्** = अरू पनि
**चिकीर्षितम्** = उसले गर्न

रूपमा आत्मालाई जान्नु हो। मनले निरन्तर सङ्कल्प-विकल्प आदि गरिरहेको छ, इन्द्रियहरू अनादि कालदेखि आ-आफ्ना विषयदेशमा गइरहेका छन्, कहीँ कतै पनि तलमाथि भएको छैन। के यो नियमित प्रवृत्तिमा कोही साक्षी या प्रेरकको आवश्यकता होला ? पक्कै पनि **अनेन उपस्मरति** अर्थात् यही आत्माको प्रकाशद्वारा नै मन निरन्तर सङ्कल्प आदि गरिरहन्छ। यसरी शरीरभित्रको प्रेरक चेतनको रूपमा परमात्मालाई बुझ्नु अध्यात्म दर्शन हो। अधिदैव दर्शनमा उपास्य ईश्वरको स्वरूप या प्रतीक आदिको अपेक्षा हुन्छ भने अध्यात्मदर्शनमा शरीर, इन्द्रिय आदिभित्र नै परमात्मदर्शन हुन्छ, कुनै बाहिरी साधनको अपेक्षा पर्दैन।

**त्रय्या च विद्यया केचित् त्वां वै वैतानिका द्विजाः।**
**यजन्ते विततैर्यज्ञैर्नानारूपामराख्यया ॥ ५॥**

**पदार्थ–**
**केचित्** = केही
**वैतानिकाः** = कर्मयोगी
**द्विजाः** = ब्राह्मणहरू
**त्रय्या** = त्रयी (वेदरूप)
**विद्यया** = विद्याद्वारा (प्रतिपादित)
**विततैः** = फैलिएका
**यज्ञैः** = यज्ञहरूद्वारा
**वै** = निश्चय पनि
**नानारूपामराख्यया** = विभिन्न रूप र विभिन्न देवताहरूको नामले
**त्वां च** = हजुरलाई नै
**यजन्ते** = आराधना गर्दछन्

**वाक्यार्थ–** केही कर्मयोगी ब्राह्मणहरू वेदप्रतिपादित यज्ञहरूद्वारा विभिन्न रूप र विभिन्न देवताहरूको नामले हजुरकै आराधना गर्दछन्।

**एके त्वाखिलकर्माणि संन्यस्योपशमं गताः।**
**ज्ञानिनो ज्ञानयज्ञेन यजन्ति ज्ञानविग्रहम् ॥ ६॥**

**पदार्थ–**
**एके** = एकथरी
**ज्ञानिनः** = ज्ञानीहरू
**उपशमं** = वैराग्यमा
**गताः** = प्राप्त भएर
**अखिलकर्माणि** = सम्पूर्ण (लौकिक र वैदिक) कर्महरू
**संन्यस्य** = त्यागेर
**ज्ञानयज्ञेन** = समाधिरूप ज्ञानयज्ञद्वारा
**ज्ञानविग्रहम्** = ज्ञानस्वरूप
**त्वा** = हजुरलाई
**यजन्ति** = ध्यान (आराधना) गर्दछन्

**वाक्यार्थ–** अरू ज्ञानीहरू चाहिँ विषयहरूबाट वैराग्य लिई लौकिक-वैदिक सम्पूर्ण कर्महरूको त्याग गर्दछन् र समाधिरूप ज्ञानयज्ञद्वारा ज्ञानमूर्ति हजुरको ध्यान (आराधना) गर्दछन्।

**विवरण–** माथिका श्लोकहरूमा कर्मयोग र ज्ञानयोगका विषय परमात्मा नै हुनुहुन्छ भनी प्रतिपादन गरिएको छ। पाँचौँ श्लोकमा आएको **वितान** शब्दको अर्थ कर्म हो। कीर्ति, स्वर्ग, सुख आदि अनेक फलहरू फैलिने भएकाले कर्मलाई वितान भनिएको हो। **वैतानिकाः** भनेका कर्मयोगीहरू हुन्। वेदविधिले यज्ञ आदि कर्म गर्ने ब्राह्मणहरूले आ-आफ्नो विधि अनुसार परमात्माको नै आराधना गर्दछन् भन्नु श्लोकको आशय हो। कर्महरूद्वारा त इन्द्र, अग्नि, वायु

आदि देवताहरूको आराधना हुन्छ नि भन्ने शङ्कामा भनिन्छ— **अमराख्यया** अर्थात् ती-ती देवताहरूको नामले हजुरकै उपासना हुन्छ। वेदमा भनिएको छ— **तदेवाग्निस्तदादित्यस्तद् वायुस्तदु चन्द्रमाः । तदेव शुक्रन्तद् ब्रह्म ता आपः स प्रजापतिः** (शुक्ल यजुर्वेद, ३२/१) अर्थात् त्यही परमात्मा नै अग्नि, सूर्य, वायु, चन्द्रमा, प्रजापति आदि सबै हो। यो प्रवृत्तिपरक आराधना हो। **संन्यस्य** अर्थात् सम्पूर्ण कर्महरूलाई त्यागी निवृत्तिमार्गमा लागेकाहरूले पनि **ज्ञानविग्रहम्** अर्थात् ज्ञानस्वरूप हजुरकै चिन्तन गर्दछन्। भगवद्गीता (४/३३)मा पनि भगवान्ले द्रव्ययज्ञ, तपोयज्ञ, योगयज्ञ, स्वाध्याययज्ञ आदि अनेक साधनहरू बताउनुभएको छ। बाहिरी यज्ञहरूमा पदार्थहरूको र धेरै श्रमको आवश्यकता पर्दछ। त्यसमा बुद्धि पूरा अन्तर्मुखी बन्न पनि सक्दैन। फेरि कर्महरूमा सिधै परमात्माको नभई अनेक देवतारूपी उपाधिद्वारा मात्र परमात्माको उपासना हुन्छ। त्यसको अपेक्षा सबै कर्मबन्धनहरूलाई छाडी केवल विशुद्ध ज्ञानरूपमा परमात्माको चिन्तन गर्नु श्रेष्ठ हो। जे होस्, वेदप्रतिपाद्य यी दुबै मार्ग परमात्माकै आराधनाका लागि हुन् भन्नु यस प्रसङ्गको आशय हो।

**अन्ये च संस्कृतात्मानो विधिनाभिहितेन ते।**
**यजन्ति त्वन्मयास्त्वां वै बहुमूर्त्येकमूर्तिकम्॥ ७॥**

**पदार्थ**–
**संस्कृतात्मानः** = शुद्ध अन्तःकरण भएका
**त्वन्मयाः** = हजुरमैं तन्मय भएका
**अन्ये च** = अरू मानिसहरूले
**ते** = हजुरद्वारा
**अभिहितेन** = बताइएको
**विधिना** = (पाञ्चरात्र आदि) विधिद्वारा
**बहुमूर्त्येकमूर्तिकम्** = (वासुदेव, सङ्कर्षण, प्रद्युम्न आदि) अनेक रूपमा र एउटै (महानारायण) रूपमा
**त्वां** = हजुरलाई
**वै** = निश्चय नै
**यजन्ति** = आराधना गर्दछन्

**वाक्यार्थ**— शुद्ध अन्तःकरण भएका र हजुरमैं तन्मय भएका अन्य मानिसहरूले हजुरद्वारा नै बताइएको (पाञ्चरात्र आदि) विधिको अनुष्ठान गरेर (वासुदेव, सङ्कर्षण, प्रद्युम्न आदि) अनेक रूपमा र (महानारायणको) एउटै रूपमा पनि हजुरकै आराधना गर्दछन्।

**त्वामेवान्ये शिवोक्तेन मार्गेण शिवरूपिणम्।**
**बह्वाचार्यविभेदेन भगवन् समुपासते॥ ८॥**

**पदार्थ**–
**भगवन्** = हे प्रभु
**अन्ये** = अरू
**शिवोक्तेन** = शिवजीद्वारा बताइएको
**मार्गेण** = मार्गद्वारा
**बह्वाचार्यविभेदेन** = धेरै आचार्यहरूद्वारा बताइएको पाशुपत आदि अवान्तर भेदद्वारा
**शिवरूपिणम्** = शिवरूपी
**त्वाम् एव** = हजुरलाई नै
**समुपासते** = उपासना गर्दछन्

**वाक्यार्थ**— हे प्रभु ! अरू केही उपासकहरू शिवजीद्वारा बताइएको मार्ग र त्यसमा पनि धेरै आचार्यहरूद्वारा प्रतिपादन गरिएका पाशुपत आदि अवान्तर मार्गद्वारा शिवस्वरूप हजुरको उपासना

गर्दछन्।

**विवरण–** यहाँ एउटै परमात्मालाई विष्णु र शिव मानी अनेक रूपमा उपासना गरिने कुरा बताइएको छ। यहाँ पहिलो श्लोकमा नारायणको उपासना र दोस्रो श्लोकमा शिवको उपासना बताइएको छ। विष्णु र शिव दुबै वेदप्रतिपाद्य हुनुहुन्छ, वेदका पुरुषसूक्त, रुद्रसूक्त, शिवसङ्कल्पसूक्त आदि सूक्तहरूमा सर्वेश्वर परमात्माको रूपमा उहाँहरूको वर्णन गरिएको छ। त्यही प्रतिपादनलाई आधार मानी उहाँहरूको विशेष विधिले उपासना गर्नका लागि क्रियाप्रधान अनेक तन्त्रहरूको पनि प्रचार हुँदै गयो। यसरी तन्त्रलाई प्रधान आधार मानी गरिने शिव र विष्णुको उपासनालाई नै यी दुई श्लोकले बताएका छन्। यहाँ वैदिक प्रवृत्ति-निवृत्ति धर्मको व्याख्या गरिसकेपछि फेरि शिव-विष्णुको उपासनालाई पृथक् उल्लेख गर्नु यही तन्त्रप्रधान उपासना प्रणालीलाई लिएर नै गरिएको हो भन्ने बुझिन्छ। तन्त्रका मुख्य तीन भेद छन्– वैष्णवतन्त्र, शैवतन्त्र र शाक्ततन्त्र। यहाँ शैव तन्त्रको सङ्क्षिप्त चर्चा गरिन्छ।

माधवाचार्यका अनुसार शैवसिद्धान्त अन्तर्गता दर्शनको रूपमा प्रतिष्ठित चार मतहरू प्रमुख छन्– नकुलीश पाशुपतदर्शन, शैवदर्शन, प्रत्यभिज्ञादर्शन र रसेश्वरदर्शन।

नकुलीश पाशुपतदर्शन अनुसार पदार्थहरू पाँच छन्– पशु, पति, दुःखान्त, योग र विधि। पशु भनेका मनुष्यहरू, जनावरहरू, जगत् आदि सबै परतन्त्र कार्यवर्ग हुन्। तिनका कारण परमात्मा पति हुनुहुन्छ। तेस्रो पदार्थ हो दुःखान्त अर्थात् सम्पूर्ण दुःखको अन्त्य। यो मोक्षरूप हो। योग भनेको पशु र पतिको योग हो। अनि विधि भनेको पशु र पतिको योगका लागि आवश्यक विधिहरू हुन्। यस सिद्धान्त अनुसार जगत् बनाउन महेश्वरले कर्म आदिको अपेक्षा गर्नुहुन्न। कर्मनिरपेक्ष ईश्वर नै जगत्को कारण हुनुहुन्छ। परमेश्वरको निरन्तर सेवाद्वारा परमेश्वरत्वको प्राप्ति नै मुक्ति हो। मुक्ति भनेको पूर्ण ईश्वरत्वको प्राप्ति हो, यसलाई पूर्ण स्वातन्त्र्य भनिन्छ। यही नै पाशुपत दर्शनको सिद्धान्त हो।

शैवदर्शन अनुसार कर्मनिरपेक्षरूपमा ईश्वरलाई जगत्को कारण मान्दा उहाँमा विषमताको दोष आउन सक्ने हुनाले जीवहरूका कर्महरूको आधारमा नै परमात्माले जगत् रचना गर्नुहुन्छ। पदार्थ तीन ओटा छन्– पशु, पाश र पति। पाश चार प्रकारका छन्– मल, कर्म, माया र रोधशक्ति। यीमध्ये रोधशक्ति परमात्माको शक्ति हो, जसले जीवको ज्ञानक्रियाशक्तिलाई ढाकी उसलाई आत्मरूपले अनुभव हुन दिँदैन। त्यसैले यसलाई पाशरूप मानिएको हो। यसले मलमा आश्रित भई जीवलाई ढाक्दछ। त्यसैले ज्ञानद्वारा कर्म र माया अंश नष्ट भइसकेको जीवमा पनि मल अंश रहिरहन सक्दछ। जीव तीन प्रकारका छन्– सकल, प्रलयाकल र विज्ञानाकल। सकल जीव भनेको मल, कर्म र माया यी सबै कला शरीर-इन्द्रिय आदिले युक्त संसारी जीव हो। प्रलयाकल भनेको प्रलयकालमा माया र त्यसका कार्य शरीर, इन्द्रिय आदिले रहित भए पनि कर्म र मलले ढाकिएको जीव हो। प्रलयका कारणले कला अर्थात् शरीर, इन्द्रियले रहित भएकाले यसलाई प्रलयाकल भनिएको हो। विज्ञानाकल भनेको चाहिँ ज्ञानद्वारा अकल बनेको जीव हो। यसमा अरू आवरण नरहे पनि मनको आवरण रहन सक्छ। यस्तो जीव पनि मृत्युपछि मुक्त हुन्छ,

तर यो अपरमुक्ति हो। यसमा शिवजीले यिनीहरूलाई अनन्त, सूक्ष्म आदि आठ पद दिनुहुन्छ। महेश्वरको प्रबल शरणागतिद्वारा यो मल पनि हटिसकेको छ भने त्यस्ता जीव शिवमैं मिल्दछन्, यही परम मुक्ति हो। तर यी मुक्त जीव पनि पतिसमान बन्न सक्दैनन्, उनकै अधीनमा हुन्छन्। सृष्टि, स्थिति, संहार, निग्रह र अनुग्रह यी पाँच कर्म केवल पति महेश्वरका हुन्, मुक्त जीवका होइनन् भन्ने मान्यता शैवदर्शनको छ।

काश्मीरी शैवदर्शनलाई प्रत्यभिज्ञादर्शन भनिन्छ। यसलाई त्रिकदर्शन या स्पन्ददर्शन पनि भनिन्छ। अद्वय शिव नै परमतत्त्व हुनुहुन्छ। यो शुद्ध चैतन्य हो, चैतन्य चित्शक्ति हो। यसैले परम तत्त्वमा आफ्नो शक्तिको सदा स्फुरण या स्पन्द रहन्छ। अद्वैतवादी भए तापनि यस दर्शनले परमतत्त्वलाई निर्गुण, निष्क्रिय होइन, अपि तु नित्यशक्तिका कारणले सधैँ परिस्पन्दात्मक मान्दछ। शिव र शक्तिलाई अपृथक् मान्नु यसको अर्को विशेषता हो। चन्द्र र चन्द्रिका उही भए झैँ शिव र शक्ति पनि एउटै हुन्। शिव प्रकाश हुन् भने शक्ति विमर्श। विमर्श भनेको आत्मचेतनाको स्फुरण हो। तर यो विमर्शरूप क्रिया मायाको साधारण कर्म भने होइन। कर्म अपूर्णताको द्योतक हो, विमर्श पूर्णता या शुद्ध अहन्ताको द्योतक हो। परमशिवमा आफ्ना चित्, आनन्द, इच्छा र क्रिया यी पाँच शक्तिको नित्य स्फुरण भए तापनि शिव स्वेच्छाले आफूलाई सीमित अहन्तामा बाँधी **पशु** बनी प्रकट हुन्छन्। अनुग्रह, दीक्षा र साधनाद्वारा यो पौरुष अज्ञान हटेपछि **पशु** जीव आफूलाई परमशिवरूपमा नै जान्दछन्। **सोऽयं देवदत्तः** अर्थात् त्यो यही देवदत्त हो भन्ने प्रत्यभिज्ञाले त्यो र यो देवदत्त एउटै हो भन्ने जनाउँछ, त्यसै गरी गुरूपदेशबाट म शिव नै हुँ भिन्न होइन भन्ने ज्ञानले जीव र शिवको एकताबोध गराइदिन्छ। प्रत्यभिज्ञाद्वारा शिवात्मतालाभ नै मुक्ति हो।

अर्को रसेश्वर दर्शनमा भने रसराज पारद र अभ्रकको सेवनद्वारा शरीरलाई अजर बनाउने र योग तथा उपासनाद्वारा मल क्षय गरी सशरीर नै मुक्ति पाउने धारण पाइन्छ। यो दर्शनमा मरेपछिको मुक्तिलाई विश्वास गरिँदैन। शिवरूप पारद र गौरीरूप अभ्रकको सेवनद्वारा नित्यकाया पाई त्यही स्थितिमा मुक्त रहनुपर्छ भन्ने यस दर्शनको सिद्धान्त रहेको छ। जीवन्मुक्तिका लागि रसराज पारदका अठार संस्कार र त्यसको सेवनविधिलाई प्रमुख रूपमा बताउने हुनाले यसलाई रसेश्वर दर्शन भन्दछन्। यस्ता अनेकौँ आचार्यहरूद्वारा प्रतिपादित उपासनापद्धतिहरूलाई यहाँ अन्य उपासनापद्धति भनिएको हो।

**सर्व एव यजन्ति त्वां सर्वदेवमयेश्वरम्।**
**येऽप्यन्यदेवताभक्ता यद्यप्यन्यधियः प्रभो ॥ ९॥**

पदार्थ–
**प्रभो** = हे प्रभु
**ये अपि** = जो जो
**अन्यदेवताभक्ताः च** = अरू देवताहरूको भक्त छन् (ती)
**यद्यपि** = हुन त
**अन्यधियः** = अन्य देवताको उपासनामा बुद्धि लगाएका छन् (तर पनि)
**सर्वे** = ती सबै भक्तहरू
**सर्वदेवमयेश्वरम्** = सर्वदेवस्वरूप सर्वेश्वर
**त्वां एव** = हजुरलाई नै
**यजन्ति** = आराधना गर्दछन्

**वाक्यार्थ–** हे भगवान् ! जो-जो अरू देवताहरूका भक्त छन् र तिनीहरूको बुद्धि यद्यपि अन्य देवताहरूकै उपासनामा तन्मय भएको हुन्छ तर पनि ती सबैले हजुरको नै आराधना गरिरहेका हुन्छन् किनभने हजुर सर्वदेवमय सर्वेश्वर हुनुहुन्छ।

**यथाद्रिप्रभवा नद्यः पर्जन्यापूरिताः प्रभो।**
**विशन्ति सर्वतः सिन्धुं तद्वत् त्वां गतयोऽन्ततः॥ १०॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**यथा** = जसरी
**अद्रिप्रभवाः** = पहाडबाट उत्पन्न भएका
**नद्यः** = नदीहरू
**पर्जन्यापूरिताः** = वर्षाको जलले भरिएर
**सर्वतः** = सबैतिरबाट
**सिन्धुं** = समुद्रमा
**विशन्ति** = प्रवेश गर्दछन्
**तद्वत्** = त्यसै गरी
**गतयः** = विभिन्न मार्गहरू पनि
**अन्ततः** = अन्तिममा गएर
**त्वां** = हजुरमा नै (मिल्छन्)

**वाक्यार्थ–** हे प्रभु ! जसरी पहाडबाट उत्पन्न भएका विभिन्न नदीहरू वर्षाको पानीले भरिएर विभिन्न बाटोबाट बग्दै अन्ततः समुद्रमा प्रवेश गर्दछन् त्यसरी नै सबै मार्गहरू अन्तिममा हजुरमा नै गएर मिल्दछन्।

**विवरण–** यस श्लोकमा सबैथरी देवताको उपासना गर्नेहरू अन्त्यमा एउटै परमात्मामा पुग्छन् भनी दृष्टान्तपूर्वक बताइएको छ। **अद्रिप्रभवाः** अर्थात् अनेक पहाडबाट निस्किएका खोल्सा, नदीनाला आदि सबै एउटै समुद्रमा गई मिसिए झैं अनेक देवताका उपासकहरू पनि एउटै परमात्मामा पुग्छन्। यद्यपि यी उपासकहरू आफ्ना उपास्य देवतालाई अरूभन्दा भिन्न भनी परमात्मामा भेदबुद्धि गर्दछन्, तर परमात्मा एउटै भएको वास्तविक तथ्य नबुझे पनि सबै देवताको रूपमा एउटै तत्त्व भएकाले नजानेर नै भए पनि तिनीहरूले उहाँकै उपासना गर्दछन्। वैदिक सनातन परम्परामा परमात्माको अनेक तरिकाले उपासना गर्ने विधान छ। मोक्ष कुनै एउटा व्यक्ति या समाजको पेवा होइन, जसलाई निश्चित विधिमा या धारणामा सीमित गर्न सकियोस्। पुष्पदन्ताचार्य भन्नुहुन्छ– **रुचीनां वैचित्र्यात्** (शिवमहिम्न स्तोत्र, श्लोक ७) अर्थात् प्राणीहरूको संस्कार अनुसार उनीहरूका रुचिहरू अलग-अलग छन्। सबैथरी संस्कार भएकाहरूले मुक्ति पाउन सकून् भनेर नै परमात्माले अनेक रूप लिनुहुन्छ। परमात्मतत्त्वलाई जानी एक रूपमा उपासना गर्नु परमात्माको उपासनाको सही विधि हो भने अनेक देवताहरूको भेद मान्दै अरूका देवताभन्दा आफ्ना देवतालाई ठुला ठानी भेद र द्वेषबुद्धिपूर्वक उपासना गर्नु उपासनाको मूल सिद्धान्त या विधि होइन। यसैलाई लक्षित गरी भगवान् श्रीकृष्णले श्रद्धापूर्वक अरू देवताहरूको उपासना गर्नेहरूले अविधिपूर्वक भए पनि मेरै उपासना गर्दछन् भन्नुभएको छ– **तेऽपि मामेव कौन्तेय यजन्त्यविधिपूर्वकम्** (भगवद्गीता, ९/२३)। परमात्मा सर्वरूप हुनुहुन्छ। त्यही रूपमा उहाँको उपासना मुख्य उपासना हो भने अनेक रूपहरूको छुट्टाछुट्टै उपासना गौण उपासना हो। सर्वरूपमा उपासना गर्नुको तात्पर्य अनेकौं देवताहरूको पूजा गरिरहनु भन्ने चाहिँ होइन। यसको

अर्थ परमात्माको शिव, विष्णु, देवी आदि कुनै स्वरूपलाई मूल परमात्मरूप अनि अरू सबैलाई उनैका अभिव्यक्ति हुन् भन्ने मानी सर्वत्र एउटै परमात्माको चिन्तन गर्नुपर्दछ भन्ने हो। यो उपासनाको प्रमुख मार्ग हो। यसबाट उपासकहरू परमात्माको कृपाले अन्तःकरण शुद्ध भई परमात्मतत्त्वको साक्षात्कार गरी मुक्त हुन्छन्। वेदप्रतिपाद्य परमात्माको सर्वरूपतालाई बुझी अनेक तन्त्रशास्त्र आदिको आधारमा भेदबुद्धिपूर्वक उपासना गर्ने उपासकहरू चाहिँ नदीहरूको माध्यमले समुद्रमा मिसिने खोल्सा झैँ परम्पराद्वारा परमात्मामा पुग्दछन्। उनीहरू पहिले ती-ती उपास्य देवताको भावमा पुग्दछन्। त्यसपछि जब प्रलयकालमा मायाद्वारा स्वीकार गरिएका शिव, विष्णु, देवी आदि सबै रूप परब्रह्ममा गई मिल्दछन्, तब ती देवात्मभावमा रहेका उपासकहरू पनि सँगसँगै परब्रह्ममा मिल्दछन्। अद्वैतवेदान्त सिद्धान्त अनुसार यो क्रममुक्तिको मार्ग हो। यहाँ **अन्ततः** अर्थात् पछि भनेर यही मुक्तिलाई सङ्केत गर्न खोजिएको हो। प्रवृत्ति-निवृत्तिरूप वेदमार्गको वर्णन पहिल्यै भइसकेकाले **अन्ततः** भन्ने पदले बाँकी रहेका मतहरूलाई नै यहाँ सङ्केत गरिएको हो।

**सत्त्वं रजस्तम इति भवतः प्रकृतेर्गुणाः।**
**तेषु हि प्राकृताः प्रोता आब्रह्मस्थावरादयः॥ ११॥**

**पदार्थ–**
**सत्त्वं** = सत्त्व
**रजः** = रज र
**तमः** = तम
**इति** = यी
**भवतः** = हजुरको
**प्रकृतेः** = प्रकृतिका
**गुणाः** = गुणहरू हुन्
**तेषु** = ती तीन गुणहरूमा
**प्राकृताः** = प्रकृतिको परिणाम देह आदि उपाधि भएका
**आब्रह्मस्थावरादयः** = ब्रह्मादेखि स्थावरसम्मका सम्पूर्ण जीवहरू
**हि** = निश्चय नै
**प्रोताः** = ओतप्रोत छन्

**वाक्यार्थ–** हजुरको प्रकृतिका तीन ओटा गुणहरू छन्, सत्त्व, रज र तम। यिनै गुणहरूमा प्रकृतिको परिणामभूत देह उपाधि भएका ब्रह्मादेखि स्थावरसम्मका सम्पूर्ण जीवहरू ओतप्रोत छन्।

**तुभ्यं नमस्तेऽस्त्वविषक्तदृष्टये सर्वात्मने सर्वधियां च साक्षिणे।**
**गुणप्रवाहोऽयमविद्यया कृतः प्रवर्तते देवनृतिर्यगात्मसु॥ १२॥**

**पदार्थ–**
**अविषक्तदृष्टये** = अनासक्त दृष्टि भएका
**सर्वात्मने** = सर्वस्वरूप
**सर्वधियां** = सम्पूर्ण बुद्धिवृत्तिहरूका
**साक्षिणे च** = साक्षी
**ते तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = छ
**गुणप्रवाहः** = गुणहरू (सत्त्व, रज र तम)द्वारा चलिरहने जन्ममरणात्मक
**अयम्** = यो संसार
**अविद्यया** = अविद्याका कारण
**कृतः** = उत्पन्न भई
**देवनृतिर्यगात्मसु** = देवता, मनुष्य, पशुपक्षी आदि शरीरमा
**प्रवर्तते** = युक्त हुन्छ

**वाक्यार्थ–** अप्रतिहत ज्ञानदृष्टि भएका सर्वस्वरूप र सम्पूर्ण बुद्धिवृत्तिहरूका साक्षी हजुरलाई

नमस्कार छ। प्रकृतिका गुणहरूद्वारा चलिरहने यो जन्ममरणात्मक संसार त अविद्याका कारण चलि नै रहन्छ अनि देव, मनुष्य, पशुपक्षी आदिको शरीरमा व्याप्त भइरहन्छ।

**विवरण–** यस श्लोकमा परमात्मामा अविद्याको कारणले हुने गुणहरूको सम्बन्ध छैन भनी बताइएको छ। **अविषक्तदृष्टिः** पदको अर्थ हुन्छ– जसको दृष्टि वा बुद्धि कहीँ पनि लिप्त छैन। परमात्मा असङ्ग हुनुहुन्छ। सङ्ग हुनका लागि आफूभन्दा भिन्न अरूको आवश्यकता हुन्छ। परमात्मा त **सर्वात्मा** अर्थात् सबै रूप हुनुहुन्छ। परमात्मा सबैका साक्षी भएकाले पनि उहाँको दृष्टि कहीँ लिप्त नभएको हो। जो प्रकाशक या साक्षी हुन्छ ऊ व्यवहारका क्रियाकलाप या पदार्थमा लिप्त हुन सक्दैन। यसलाई उपनिषद्मा सूर्यको दृष्टान्तद्वारा बताइएको छ– **सूर्यो यथा सर्वलोकस्य चक्षुर्न लिप्यते चाक्षुषैर्बाह्यदोषैः, एकस्तथा सर्वभूतान्तरात्मा न लिप्यते लोकदुःखेन बाह्यः** (कठोपनिषद्, २/२/११) अर्थात् जसरी संसारलाई प्रकाशित गर्ने सूर्य सबै प्राणीहरूका चक्षुरूप छन्, प्रकाशक भएकाले आँखाद्वारा देखिएका कुनै पनि कार्यहरूको सम्बन्ध सूर्यमा छैन, त्यसै गरी बाह्य संसारमा रहेका सुख-दुःख, धर्म-अधर्म आदिको पनि यिनका प्रकाशक परमात्मासँग केही सम्बन्ध छैन।

संसारमा अविद्याका तीन गुणहरूको प्रवाह चलेको छ। सत्त्व, रज र तमोगुणद्वारा बाँधिएका जीवहरू यो संसारको प्रवाहमा जन्मिने-मर्ने गरिरहेका छन्, तर यी सबैका साक्षी परमात्मा जन्म-मृत्यु आदिले रहित हुनुहुन्छ। **देवनृतिर्यगात्मसु** अर्थात् देवता, मानिस अनि पशुपन्छीको शरीरलाई नै आत्मा मान्नेहरू जन्म-मृत्युमा परिरहन्छन्, तर परमात्मामा यिनको बन्धन छैन।

**अग्निर्मुखं तेऽवनिरङ्घ्रिरीक्षणं सूर्यो नभो नाभिरथो दिशः श्रुतिः।**
**द्यौः कं सुरेन्द्रास्तव बाहवोऽर्णवाः कुक्षिर्मरुत् प्राणबलं प्रकल्पितम्॥ १३॥**

**पदार्थ–**
**अग्निः** = अग्नि
**ते** = हजुरको
**मुखं** = मुख हो
**अवनिः** = पृथिवी
**अङ्घ्रिः** = पाउ हो
**सूर्यः** = सूर्य
**ईक्षणं** = आँखा हो
**नभः** = आकाश
**नाभिः** = आभि हो
**अथो** = त्यसै गरी
**दिशः** = दिशाहरू
**श्रुतिः** = कानहरू हुन्
**द्यौः** = स्वर्ग
**कं** = शिर हो
**सुरेन्द्राः** = इन्द्र आदि देवताहरू
**तव** = हजुरका
**बाहवः** = हातहरू हुन्
**अर्णवाः** = सागरहरू
**कुक्षिः** = कोख हो
**मरुत्** = वायु चाहिँ
**प्राणबलं** = प्राणशक्तिको रूपमा
**प्रकल्पितम्** = (उपासकहरूद्वारा उपासनाका लागि) कल्पना गरिएको छ

**वाक्यार्थ–** हे प्रभु ! अग्नि हजुरको मुख हो, पृथिवी पाउ हो, सूर्य आँखा हो, आकाश नाभि हो, पूर्व आदि दिशाहरू कान हुन्, स्वर्ग नै हजुरको शिर हो, इन्द्र आदि देवताहरू हजुरका हात हुन्,

समुद्रहरू हजुरको कोख हो अनि वायु नै प्राणशक्ति हो, यस्तो कल्पना (उपासकहरूद्वारा उपासनाका लागि) गरिएको छ।

**रोमाणि वृक्षौषधयः शिरोरुहा मेघाः परस्यास्थिनखानि तेऽद्रयः।**
**निमेषणं रात्र्यहनी प्रजापतिर्मेढ्रस्तु वृष्टिस्तव वीर्यमिष्यते॥ १४॥**

**पदार्थ–**
**वृक्षौषधयः** = वृक्ष र औषधिहरू
**ते** = हजुरका
**रोमाणि** = रौँहरू हुन्
**मेघाः** = बादलहरू
**शिरोरुहाः** = शिरका केश हुन्
**अद्रयः** = पहाडहरू
**परस्य** = परमात्मरूप
**ते** = हजुरका
**अस्थिनखानि** = हाड र नङहरू हुन्
**रात्र्यहनी** = रात र दिन
**निमेषणं** = परेला झिम्कनु हो
**प्रजापतिः** = प्रजापति
**मेढ्रः** = लिङ्ग हुन्
**वृष्टिः तु** = वृष्टि चाहिँ
**तव** = हजुरको
**वीर्यम्** = वीर्य हो भनी
**इष्यते** = बताइन्छ

**वाक्यार्थ–** हे परमेश्वर ! वृक्ष र औषधिहरू हजुरका रौँहरू हुन्, बादलहरू शिरका केशहरू हुन्, पहाडहरू हजुरका हाड र नङहरू हुन्, दिन र रात चाहिँ हजुरको आँखा झिम्कनु हो, प्रजापति लिङ्ग हुन् अनि वर्षा चाहिँ वीर्य हो भनी बताइन्छ।

**त्वय्यव्ययात्मन् पुरुषे प्रकल्पिता लोकाः सपाला बहुजीवसङ्कुलाः।**
**यथा जले सञ्जिहते जलौकसोऽप्युदुम्बरे वा मशका मनोमये॥ १५॥**

**पदार्थ–**
**अव्ययात्मन्** = हे अविनाशी प्रभु
**बहुजीवसङ्कुलाः** = धेरै जीवहरूले व्याप्त भएका
**सपालाः** = लोकपालहरू सहित
**लोकाः** = लोकहरू
**पुरुषे** = परम पुरुष
**मनोमये** = विशुद्ध अन्तःकरणको वृत्तिद्वारा मात्र बोध्य
**त्वयि** = हजुरमा
**प्रकल्पिताः** = कल्पित छन्
**यथा** = जसरी
**जले** = जलमा
**जलौकसः** = जलजन्तुहरू (र)
**उदुम्बरे अपि** = डुम्रीको फलमा
**मशकाः वा** = स-साना किराहरू
**सञ्जिहते** = विचरण गर्दछन् (बस्दछन्)

**वाक्यार्थ–** हे अविनाशी प्रभु ! जसरी जलमा जलचरहरू बस्दछन् अथवा जसरी डुम्रीको फलमा स-साना किराहरू बस्दछन्, त्यसै गरी विशुद्ध अन्तःकरणको वृत्तिद्वारा मात्र जान्न सकिने अविनाशी पुरुष हजुरमा अनन्त जीव र लोकपालहरूले सहित लोकहरू कल्पित छन्।

**यानि यानीह रूपाणि क्रीडनार्थं बिभर्षि हि।**
**तैरामृष्टशुचो लोका मुदा गायन्ति ते यशः॥ १६॥**

**पदार्थ–**
**इह** = यस लोकमा
**क्रीडनार्थं** = क्रीडा गर्नका लागि

**यानि यानि** = (मत्स्य आदि) जुन जुन
**रूपाणि** = रूपहरू
**हि** = निश्चय नै
**बिभर्षि** = धारण गर्नुहुन्छ
**तैः** = ती-ती रूपहरूको चिन्तनद्वारा
**आमृष्टशुचः** = शोक, मोह आदि सबै माफिएका
**लोकाः** = मनुष्यहरू
**मुदा** = खुसीले
**ते** = हजुरको
**यशः** = निर्मल कीर्ति
**गायन्ति** = गाउँछन्

**वाक्यार्थ–** हजुर क्रीडा गर्नका लागि यस लोकमा मत्स्य आदि जुन-जुन रूपहरू धारण गर्नुहुन्छ, ती-ती रूपहरूको चिन्तनले मनुष्यहरूको सम्पूर्ण शोक-मोहहरूलाई माफिदिन्छ र मनुष्यहरू हर्षपूर्वक हजुरको निर्मल कीर्तको गान गर्दछन्।

**नमः कारणमत्स्याय प्रलयाब्धिचराय च।**
**हयशीर्ष्णे नमस्तुभ्यं मधुकैटभमृत्यवे ॥ १७ ॥**

पदार्थ–
**कारणमत्स्याय** = निश्चित कारणवश (वेद, सत्यव्रत आदिको उद्धारका लागि) मत्स्यरूप धारण गर्नुहुने
**प्रलयाब्धिचराय च** = प्रलयकालीन समुद्रमा विचरण गर्नुहुने हजुरलाई
**नमः** = नमस्कार छ
**मधुकैटभमृत्यवे** = मधु र कैटभका मृत्युरूप हुनुभएका
**हयशीर्ष्णे** = हयग्रीव
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** हे भगवान्! वेद, सत्यव्रत आदिको उद्धार गर्नका लागि मत्स्यको अवतार लिएर प्रलयकालीन समुद्रमा स्वच्छन्द रूपमा विहार गर्नुहुने मत्स्यरूप हजुरलाई नमस्कार गर्दछु। मधु र कैटभ नामका दैत्यहरूलाई मार्न हयग्रीव अवतार लिनुहुने हजुरलाई नमस्कार गर्दछु।

**अकूपाराय बृहते नमो मन्दरधारिणे।**
**क्षित्युद्धारविहाराय नमः शूकरमूर्तये ॥ १८ ॥**

पदार्थ–
**मन्दरधारिणे** = मन्दराचललाई धारण गर्ने
**बृहते** = महान्
**अकूपाराय** = कूर्मरूप हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**क्षित्युद्धारविहाराय** = पृथिवीको उद्धाररूप क्रीडा गर्नुहुने
**शूकरमूर्तये** = वराहरूप हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** मन्दराचललाई धारण गर्ने महाकच्छपरूप हजुरलाई म नमस्कार गर्दछु। पृथिवीको उद्धाररूप क्रीडा गर्नुहुने वराहरूप हजुरलाई म नमस्कार गर्दछु।

**नमस्तेऽद्भुतसिंहाय साधुलोकभयापह।**
**वामनाय नमस्तुभ्यं क्रान्तत्रिभुवनाय च ॥ १९ ॥**

**पदार्थ–**
**साधुलोकभयापह** = सज्जन-हरूको भयलाई हटाइदिने हे प्रभु
**अद्भुतसिंहाय** = अद्‌भुत नरसिंहको रूप धारण गर्ने
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**क्रान्तत्रिभुवनाय** = (तीन पाइलाले) तीनै भुवनलाई ढाकिदिनुहुने
**वामनाय** = वामनरूप
**तुभ्यं च** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** सज्जनहरूको भयलाई हटाउन अद्‌भुत नरसिंहको रूप धारण गर्नुहुने हजुरलाई नमस्कार गर्दछु। वामन अवतार लिई (तीन पाइलाले) तीनै भुवनलाई ढाकिदिनुहुने हजुरलाई नमस्कार गर्दछु।

**नमो भृगूणां पतये दृप्तक्षत्रवनच्छिदे।**
**नमस्ते रघुवर्याय रावणान्तकराय च॥ २०॥**

**पदार्थ–**
**दृप्तक्षत्रवनच्छिदे** = घमन्डी क्षत्रियकुलरूपी वनलाई काट्ने
**भृगुणां पतये** = भृगुपति परशुरामरूप हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**रावणान्तकराय** = रावणको नाश गर्नुहुने
**रघुवर्याय च** = रघुवंशीमा उत्तम रामरूप
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** घमन्डी क्षत्रियकुलरूपी वनलाई नष्ट गर्ने भृगुपति परशुरामको अवतार लिनुहुने हजुरलाई नमस्कार गर्दछु। रावणको नाश गर्न रघुवंशमा रामको अवतार लिनुहुने हजुरलाई नमस्कार गर्दछु।

**नमस्ते वासुदेवाय नमः सङ्कर्षणाय च।**
**प्रद्युम्नायानिरुद्धाय सात्वतां पतये नमः॥ २१॥**

**पदार्थ–**
**वासुदेवाय** = वासुदेव
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**सङ्कर्षणाय च** = सङ्कर्षण हजुरलाई पनि
**नमः** = नमस्कार गर्दछु
**प्रद्युम्नाय** = प्रद्युम्न
**अनिरुद्धाय** = अनिरुद्ध
**सात्वतां पतये** = यदुपति हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** वासुदेव हजुरलाई नमस्कार गर्दछु, सङ्कर्षण हजुरलाई पनि नमस्कार गर्दछु। प्रद्युम्न, अनिरुद्ध अनि यदुपति हजुरलाई नमस्कार गर्दछु।

**नमो बुद्धाय शुद्धाय दैत्यदानवमोहिने।**
**म्लेच्छप्रायक्षत्रहन्त्रे नमस्ते कल्किरूपिणे॥ २२॥**

**पदार्थ–**
**दैत्यदानवमोहिने** = दैत्य र दानवलाई मोहित गराउने

**शुद्धाय** = शुद्ध
**बुद्धाय** = बुद्धरूप हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**म्लेच्छप्रायक्षत्रहन्त्रे** = म्लेच्छप्रायः भइसकेका क्षत्रियहरूलाई विनाश गर्ने
**कल्किरूपिणे** = कल्किरूपमा अवतार लिनुहुने
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** दुष्ट दैत्य र दानवलाई मोहित गर्न शुद्ध (अहिंसाको मार्ग फराकिलो बनाउनुहुने) बुद्धरूप हजुरलाई नमस्कार गर्दछु। म्लेच्छप्रायः भइसकेका क्षत्रियहरूको विनाश गर्न कल्किरूपमा अवतार लिनुहुने हजुरलाई नमस्कार गर्दछु।

**भगवन् जीवलोकोऽयं मोहितस्तव मायया।**
**अहं ममेत्यसद्ग्राहो भ्राम्यते कर्मवर्त्मसु॥ २३॥**

पदार्थ–
**भगवन्** = हे प्रभु
**अयं** = यो सबै
**जीवलोकः** = जीवसमुदाय
**तव** = हजुरको
**मायया** = मायाद्वारा
**मोहितः** = मोहित छ (त्यसैले)
**अहं मम इति** = म र मेरो यस्तो दुर्भावका कारण
**असद्ग्राहः** = असत् (शरीर र शरीर सम्बन्धी वस्तुहरू)मा आग्रही भएर
**कर्मवर्त्मसु** = कर्मको मार्गमा
**भ्राम्यते** = घुमिरहेको छ

**वाक्यार्थ–** हे प्रभु ! यो सम्पूर्ण जीवसमूह हजुरको मायाद्वारा मोहित भएको छ। त्यसैले शरीरमा अहंता र शरीर सम्बन्धी वस्तुहरूमा ममता गर्न पुग्दछ। यसकारण ऊ कर्ममार्गमा भौंतारिइरहेको छ।

**अहं चात्मात्मजागारदारार्थस्वजनादिषु।**
**भ्रमामि स्वप्नकल्पेषु मूढः सत्यधिया विभो॥ २४॥**

पदार्थ–
**विभो** = हे व्यापक प्रभु
**मूढः** = मूर्ख
**अहं च** = म चाहिँ
**स्वप्नकल्पेषु** = स्वप्नतुल्य
**आत्मात्मजागारदारार्थ-स्वजनादिषु** = आफ्नो शरीर, पुत्र, गृह, पत्नी, धन, स्वजन आदिमा
**सत्यधिया** = सत्यबुद्धि गरेर
**भ्रमामि** = घुमिरहेको छु

**वाक्यार्थ–** हे व्यापक प्रभु ! मूर्ख म चाहिँ स्वप्नतुल्य भएका शरीर, पुत्र, गृह, पत्नी, धन, स्वजन आदिमा सत्यबुद्धि गरेर घुमिरहेको छु।

**अनित्यानात्मदुःखेषु विपर्ययमतिर्ह्यहम्।**
**द्वन्द्वारामस्तमोविष्टो न जाने त्वात्मनः प्रियम्॥ २५॥**

पदार्थ–
**अनित्यानात्मदुःखेषु** = अनित्य, अनात्मा र दुःखप्रद वस्तुमा

**विपर्ययमतिः** = उल्टो बुद्धि भएको
**अहम्** = म
**हि** = निश्चय नै
**द्वन्द्वारामः** = द्वन्द्व (सुखदुःख आदि)मा रमाएको
**तमोविष्टः** = अज्ञानमा प्रवेश गरेको छु (त्यसैले)
**आत्मनः** = आफ्नो
**प्रियम्** = प्रिय
**त्वा** = हजुरलाई
**न जाने** = जान्दिनँ

**वाक्यार्थ–** अनित्य, अनात्मा र दुःखप्रद वस्तुमा उल्टो बुद्धि भएको (त्यसैलाई नित्य, आत्मा र सुख देख्ने) र द्वन्द्व (सुखदुःख आदि)मा रमाएको म अज्ञानमा प्रवेश गरेको छु त्यसैले म आफ्ना प्रिय हजुरलाई जान्दिनँ।

**यथाबुधो जलं हित्वा प्रतिच्छन्नं तदुद्भवैः।**
**अभ्येति मृगतृष्णां वै तद्वत् त्वाहं पराङ्मुखः॥ २६॥**

**पदार्थ–**
**यथा** = जसरी
**अबुधः** = अज्ञानी व्यक्ति
**तदुद्भवैः** = जलबाट उत्पन्न भएका लेउ, स्यार आदिद्वारा
**प्रतिच्छन्नं** = ढाकिएको
**जलं** = जललाई
**हित्वा** = त्यागेर
**मृगतृष्णां** = (जल झैँ आभासित हुने) मरीचिकालाई
**अभ्येति** = पछ्याउँछ
**तद्वत्** = त्यसै गरी
**अहं** = म
**त्वा** = मायाले ढाकिएका हजुरलाई (त्यागेर)
**वै** = निश्चय नै
**पराङ्मुखः** = (हजुरबाट) पराङ्मुख (देहादितर्फ अभिमुख) भएको छु

**वाक्यार्थ–** जसरी कुनै अज्ञानी व्यक्ति जलबाट उत्पन्न भएका लेउ, स्यार-पात आदिले ढाकिएको जललाई चिन्न सक्दैन र त्यसलाई त्याग्दछ र जल नै नभएको मरीचिकाको पछि लाग्दछ, त्यसै गरी आफ्नै मायाद्वारा ढाकिनुभएका हजुरलाई त्यागेर म विषयसुखका लागि हजुरदेखि पराङ्मुख भई देहादितर्फ अभिमुख भएको छु।

**विवरण–** माथिका श्लोकमा अक्रूरले आफू भ्रान्त र पराङ्मुख भएकाले परमात्मालाई जान्न नसकेको जनाएका छन्। अक्रूर भन्छन्– संसारका सम्पूर्ण पदार्थहरू स्वप्न समान छन्। जसरी जागेपछि जाग्रत्‌को ज्ञानद्वारा सपनाका पदार्थहरूको बाध हुन्छ, त्यसै गरी आत्मज्ञानद्वारा सम्पूर्ण संसारका पदार्थहरूको पनि बाध हुन्छ। यस दृष्टिले सपना र संसार एकै खाले हुन्। स्वप्न र संसार यत्ति अर्थमा मात्र भिन्न छन् कि, सपना जाग्रत् पदार्थको ज्ञानद्वारा हरेक दिन नष्ट हुन्छ भने व्यावहारिक पदार्थको बाध चाहिँ यो व्यावहारिक ज्ञानद्वारा हुँदैन। यसलाई बाधित गर्न पारमार्थिक आत्मज्ञान चाहिन्छ। स्वप्नलाई हटाउन **प्रमाता** अर्थात् कल्पित जीवभावलाई हटाउन पर्दैन, हरेक दिन जागेपछि अनायास नष्ट हुन्छ, तर जाग्रत् संसारलाई हटाउन कल्पित जीवभावलाई नै बाधित गर्नुपर्दछ। यही यी दुईमा रहेको भिन्नता हो। त्यसैले संसारलाई **स्वप्नकल्प** भनिएको हो। स्वप्नसमानका पदार्थहरूमा सत्यबुद्धि गर्नु भ्रम हो। यहाँ **विपर्ययमतिः** यो पदले यही भ्रमबुद्धिलाई बताएको हो। विपर्यय भनेको एउटा वस्तुमा अर्को ज्ञान हुनु हो। यसलाई अद्वैतवेदान्तमा सिपीमा

चाँदीको भ्रम या डोरीमा सर्पको भ्रम भनिन्छ। **तमोविष्टः** अर्थात् अज्ञानद्वारा आविष्ट भएपछि यस्तो भ्रम हुन्छ। सबभन्दा ठुलो भ्रम भनेको अनात्मा शरीरमा आत्मबुद्धि अनि आत्मामा अनात्मसंसारको बुद्धि हुनु हो, यसलाई **अध्यास** पनि भनिन्छ। संसार अनित्य छ, आत्मा नित्य छ, संसारका सबै पदार्थ जड छन् तर आत्मा चेतन छ। संसारका सबै पदार्थ दुःखरूप छन् भने आत्मा आनन्दस्वरूप छ। तर अनादि अज्ञानको कारणले यो सबै उल्टो रूपमा भासित भइरहेको छ। आत्मा सत् हो, किनभने यो सबैथरी प्रतीतिको साक्षी हो। यदि आत्मा सत् नहुने हो भने प्राणीहरूका हरेक क्षणका अनुभव र जन्मदेखि बुढो हुन्जेलसम्मका संस्कारहरूलाई कसले एउटै अनुभवमा जोड्थ्यो ? आत्मा चेतन नभएको भए यो संसार भए-नभएको कसरी थाहा पाइन्थ्यो ? अनि आत्मा आनन्दरूप नभए आफूमा परमप्रेम किन हुन्थ्यो ? यो सबै थाहा पाउँदा पाउँदै पनि प्राणी जड शरीर आदिलाई पनि चेतन आत्मा सम्झिन्छ। यसरी जड संसारका धर्मको आत्मामा भ्रम भइरहेको छ। यसलाई वेदान्तमा **संसर्गाध्यास** भनिन्छ। अध्यस्त वस्तु मिथ्या हुने हुनाले यदि अनात्मा शरीर आदिको जस्तै आत्माको पनि अनात्ममा स्वरूपतः अध्यास हुन्थ्यो भने आत्मा नै मिथ्या हुन्थ्यो, त्यसैले आत्मा र आत्माका धर्महरू सत्, चित्, आनन्द यिनको शरीर आदिमा केवल **संसर्गाध्यास** मात्र मानिन्छ। यसो भन्दा आत्माको **संसर्ग** या सम्बन्ध मात्र मिथ्या हुन्छ, आत्मा होइन। अक्रूर दृष्टान्त दिँदै भन्छन्, कुनै तिर्खाएको मान्छेले कुवामा लेउले ढाकिएको पानीलाई नचिनी बाहिरी बालुवाको मैदानमा टल्किएको मृगतृष्णामा देखिएको पानी पिउन भनेर दौडियो भने के त्यसले पानी पिउन पाउँछ र ? मानिसको भ्रान्त बुद्धिले जहाँ पानी देखेको छ, त्यहाँ त पानीको आभासबाहेक केही छैन। पानी खोज्न त आफूसँगै रहेको कुवामा लेउ हटाई हेर्नुपर्थ्यो। ठिक त्यसै गरी आफूसँगै रहेको सुखलाई अज्ञानले ढाकेकाले थाहा नपाई बाहिरी विषयहरूमा टल्किएको सुखाभास पाउन मान्छेको प्रवृत्ति भइरहेको छ। विषयहरूमा सुख छ भन्ने भ्रम नै **पराङ्मुखः** अर्थात् बहिर्मुख हुनुको मूल कारण हो। यो भ्रम आफू नै सुखरूप भएको नजान्नाले हुन्छ। यसैले परमात्मा परमप्रिय भए तापनि त्यसलाई बिर्सी भ्रमवशात् संसारबाट आनन्द पाउन खोज्ने मैले हजुरको तत्त्वलाई कसरी बुझ्न सकूँला र भनी अक्रूरले प्रार्थना गरेका छन्।

**नोत्सहेऽहं कृपणधीः कामकर्महतं मनः।**
**रोद्धुं प्रमाथिभिश्चाक्षैर्ह्रियमाणमितस्ततः॥ २७॥**

**पदार्थ–**
**कृपणधीः** = वासनायुक्त मन भएको
**अहं** = म
**कामकर्महतं** = कामना र कर्मले क्षुभित भएको (तथा)
**प्रमाथिभिः** = नियन्त्रण गर्न गाह्रो पर्ने
**अक्षैः च** = इन्द्रियहरूद्वारा पनि
**इतस्ततः** = जताततै विषयहरूमा
**ह्रियमाणम्** = खिचिएको
**मनः** = मनलाई
**रोद्धुं** = नियन्त्रित गर्न
**न उत्सहे** = सक्दिनँ

**वाक्यार्थ–** वासनायुक्त मन भएको म कामना र कर्मले क्षुभित भएको छु। त्यसैले नियन्त्रण गर्न गाह्रो पर्ने इन्द्रियहरूद्वारा जताततै विषयहरूमा खिचिएको आफ्नो मनलाई नियन्त्रित गर्न म सक्दिनँ।

**सोऽहं तवाङ्घ्र्युपगतोऽस्म्यसतां दुरापं**
**तच्चाप्यहं भवदनुग्रह ईश मन्ये।**
**पुंसो भवेद् यर्हि संसरणापवर्ग-**
**स्त्वय्यब्जनाभ सदुपासनया मतिः स्यात्॥ २८॥**

**पदार्थ–**
**ईश** = हे ईश्वर
**सः** = त्यो (इन्द्रियको दास भएको)
**अहं** = म
**असतां** = असज्जन (विषयमा आकृष्ट मन भएका व्यक्ति) हरूका लागि
**दुरापं** = दुष्प्राप्य
**तव** = हजुरको
**अङ्घ्र्युपगतः** = चरणकमलमा प्राप्त भएको
**अस्मि** = छु
**तत् च अपि** = त्यो हजुरको चरणको प्राप्तिलाई म
**भवदनुग्रहः** = हजुरकै अनुग्रह हो भन्ने
**मन्ये** = ठान्दछु
**यर्हि** = किनभने (यसैबाट)
**पुंसः** = मानिसको
**संसरणापवर्गः** = संसारबाट मुक्ति
**भवेत्** = हुन्छ
**अब्जनाभ** = हे पद्मनाभ
**सदुपासनया** = सत्य (भगवान्का भक्त, शास्त्र, गुरु आदि)को उपासनाद्वारा
**त्वयि** = हजुरमा
**मतिः** = बुद्धि
**स्यात्** = हुन्छ

**वाक्यार्थ–** हे ईश्वर! इन्द्रियहरूको दास भए पनि म विषयमा मन खिचिएका असज्जन व्यक्तिहरूले पाउन नसक्ने हजुरको चरणकमलमा प्राप्त भएको छु। यसलाई मैले हजुरकै अनुग्रह सम्झिएको छु, किनभने हजुरको चरणकमलको सेवनद्वारा नै संसारी मानिसहरूको मुक्ति हुन्छ। हे पद्मनाभ! सत्य (भगवान्का भक्त, शास्त्र, गुरु आदि)को उपासनाद्वारा हजुरमा मानिसहरूको बुद्धिवृत्ति स्थिर हुन्छ।

**नमो विज्ञानमात्राय सर्वप्रत्ययहेतवे।**
**पुरुषेशप्रधानाय ब्रह्मणेऽनन्तशक्तये॥ २९॥**

**पदार्थ–**
**विज्ञानमात्राय** = चैतन्यस्वरूप
**सर्वप्रत्ययहेतवे** = सम्पूर्ण ज्ञानका कारण
**पुरुषेशप्रधानाय** = पुरुष, ईश (काल) र प्रकृतिस्वरूप हुनुभएका
**अनन्तशक्तये** = अनन्त शक्तिका स्वामी
**ब्रह्मणे** = परब्रह्म हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** चैतन्यस्वरूप, सम्पूर्ण ज्ञानका कारण, पुरुष, ईश (काल) र प्रकृतिस्वरूप हुनुभएका,

अनन्त शक्तिका स्वामी परब्रह्म हजुरलाई म नमस्कार गर्दछु।

**विवरण–** यहाँ अक्रूरले श्रीकृष्णलाई परब्रह्मको रूपमा प्रणाम गरेका छन् र भगवान्‌को चरणमा पर्दै उहाँको प्रार्थना गरेका छन्। उनको अनुभवमा उनको मन कामना र कर्महरूका कारणले आहत भइरहेको छ। उनी आफैँ पनि विषयवासनामा आसक्त छन्। त्यसैले प्रबल इन्द्रियहरूले मनलाई जथाभावी विषयतिर लिएर जाँदा त्यसलाई उनी आफैँ रोक्न सक्दैनन्। यसको निराकरण परमात्माको कृपाले मात्र सम्भव हुने ठानेर उनी परमात्माको चरणमा परी प्रार्थना गरिरहेका छन्। परमात्मा ज्ञानस्वरूप हुनुहुन्छ। ज्ञानस्वरूप परमात्माले प्रकाशित नगरे कुनै विषयको ज्ञान हुन सक्दैन। इन्द्रिय, अन्तःकरण आदि त त्यही आत्माको प्रकाशलाई पछ्याउने साधन मात्र हुन्, त्यसैले परमात्मा **सर्वप्रत्ययहेतु** अर्थात् सबै ज्ञानका कारण हुनुहुन्छ। **पुरुषेशप्रधानाय** यस पदको दुईथरी अर्थ हुन्छ। प्रकृति, पुरुष र ईश अर्थात् काल यी तीनै रूपमा प्रतीत हुने परमात्मा नै हुनुहुन्छ भन्ने एउटा अर्थ हो। अर्को चाहिँ पुरुषेश अर्थात् प्राणीहरूलाई परवश बनाई घुमाइदिने कामना, कर्म, स्वभाव, काल आदि जति वस्तु छन्, ती सबैका प्रधान अर्थात् नियन्त्रक परमात्मा भन्ने हुन्छ।

अक्रूरको यो स्तुतिमा इन्द्रियहरूलाई नियन्त्रण गर्न नसक्ने तर तिनीहरूको जथाभावी बहिर्मुखी प्रवृत्तिबाट आहत भएको भक्तको कुरा राम्ररी अभिव्यक्त भएको छ। संसारका पदार्थमा आनन्द छैन भन्ने थाहा हुँदाहुँदै पनि यो ज्ञानको दृढता नभएको स्थितिमा बहिर्मुखी दृढ संस्कारहरूले जीवात्मालाई बाध्य पारी विषयभोगमा सामेल गराउँछन्। भगवद्गीता (२/६७)मा पनि भगवान्‌ले जसरी पानीमाथि रहेको डुङ्गालाई हावाको प्रबल झोक्काले घोप्ट्याइदिन्छ त्यसै गरी विषयासक्त इन्द्रिय र मन मिलेर जीवको प्रज्ञाविवेक शक्तिलाई नष्ट गरिदिन्छन् भन्नुभएको छ। निमिलाई उपदेश गर्दा सनत्कुमारले पनि विषयासक्त इन्द्रिय र मनले व्यक्तिको चेतनाशक्तिलाई त्यसै गरी सुकाइदिन्छन्, जसरी कुवाको नजिक रहेका कुश र जलकुम्भी आदि झारहरूले विस्तार विस्तार पानीलाई सुकाइदिन्छन् भन्नुभएको छ (भागवत, ४/२२/३०)। यद्यपि जीवले नचाहने हो भने इन्द्रिय, मन आदिले जीवलाई घुमाउन सक्दैनन्, तर बिचरो जीव आफैँ विषयासक्त छ, ऊ यस्तो दोधारे मानसिकतामा छ, ईश्वरबाट आउने परमानन्द पनि चाहन्छ अनि विषयबाट आउने दुःखलाई पनि आनन्द सम्झिरहन्छ। दृढ आत्मनियन्त्रण नभएको व्यक्ति वासनाहरूको वेगमा सजिलै बगिहाल्छ र पछि मात्र उसले चेत पाउँछ। यो साधकहरूको अनुभव हो। आत्माको विषयमा जान्दाजान्दै पनि संसारको आसक्तिका कारण ज्ञानमा दृढता नभएका प्राणीहरू परमात्मालाई पाउन सक्दैनन्। कठोपनिषद्‌मा यस्तै अदृढ ज्ञानलाई लक्षित गरी दुर्वासनाहरूबाट नहटेको अनि विषयासक्त इन्द्रियहरूले सहित भएको व्यक्तिले ज्ञानद्वारा पनि परमात्मालाई पाउन सक्दैनन् भनी बताइएको छ– **नाविरतो दुश्चरितात् नाशान्तो नासमाहितः, नाशान्तमानसो वापि प्रज्ञानेनैनमाप्नुयात्** (कठोपनिषद्, १/२/२४)। इन्द्रियहरूका लुछाचुँडीबाट व्यथित भएको यो जीव परमात्माको शरणमा गई आफ्ना दुर्वासना हटाइदिन प्रार्थना गर्छ, तर परमात्मा पनि वासना दग्ध नभएको मनमा त्यति चाँडै के आइहाल्नुहुन्थ्यो र ? परमात्माको आश्रय

पाउन त तीव्र शरणागति चाहिन्छ **यमेवैष वृणुते तेन लभ्यः** (कठोपनिषद्, १/२/२३)। त्यो तीव्रता पनि यो जीवसँग छैन। त्यसैले दिनदिनै परमात्मासँग कामनाहरू छुटाइदिन प्रार्थना गर्नु र फेरि स्वभाव र संस्कारहरूको कारणले तिनकै वशमा परिरहनु यस्तो अवस्थाको जीवको बाध्यता हो। यस्तो हुँदाहुँदै पनि कुनै दिन पूर्ण आत्मनियन्त्रणको दृढता आयो या भगवान्को चरणमा तीव्र शरणागति भयो भने यस्ता जीवको कल्याण हुन्छ। अक्रूरले तीव्र शरणागतिद्वारा दुर्वासना र संस्कारको वेगलाई जित्नुभयो। त्यही भएर श्रीधर स्वामीले टीकामा प्रार्थना श्लोकको व्याख्यामा **पादयोः पतन्** अर्थात् भगवान्को चरणमा घोप्टिँदै अक्रूरले प्रार्थना गरे भनी लेख्नुभएको छ।

**नमस्ते वासुदेवाय सर्वभूतक्षयाय च।**

**हृषीकेश नमस्तुभ्यं प्रपन्नं पाहि मां प्रभो॥ ३०॥**

**पदार्थ–**
**वासुदेवाय** = वासुदेव
**सर्वभूतक्षयाय च** = सम्पूर्ण प्राणीहरूको निवास (आश्रय) स्वरूप हुनुभएका
**ते** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु
**प्रभो** = हे प्रभु
**प्रपन्नं** = शरणमा आएको
**मां** = मलाई
**पाहि** = रक्षा गर्नुहोस्
**हृषीकेश** = हे इन्द्रियका अधिष्ठाता देवता
**तुभ्यं** = हजुरलाई
**नमः** = नमस्कार गर्दछु

**वाक्यार्थ–** हे इन्द्रियका अधिष्ठाता देवता ! हे वासुदेव ! सम्पूर्ण प्राणीहरूको आश्रय (सङ्कर्षण) हुनुभएका हजुरलाई म नमस्कार गर्दछु। हे प्रभु ! हजुरको शरणमा आएको मेरो रक्षा गर्नुहोस्, हजुरलाई म नमस्कार गर्दछु।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे-ऽक्रूरस्तुतिर्नाम चत्वारिंशोऽध्यायः॥ ४०॥**

# अथ एकचत्वारिंशोऽध्यायः

## भगवान् श्रीकृष्णको मथुरामा प्रवेश

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स्तुवतस्तस्य भगवान् दर्शयित्वा जले वपुः।**
**भूयः समाहरत् कृष्णो नटो नाट्यमिवात्मनः॥ १॥**

पदार्थ–
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्णले
**जले** = जलभित्र
**वपुः** = शरीर (स्वरूप)
**दर्शयित्वा** = देखाएर
**तस्य** = ती अक्रूरले
**स्तुवतः** = स्तुति गरिरहेकै अवस्थामा
**भूयः** = फेरि पनि
**नटः** = नटले
**नाट्यम् इव** = विभिन्न नाटकीय रूप झैँ
**आत्मनः** = आफ्नो रूपलाई
**समाहरत्** = उपसंहार गर्नुभयो

**वाक्यार्थ–** रङ्गमञ्चमा अभिनय गर्ने नटले अभिनयकै क्रममा विभिन्न रूप देखाए झैँ भगवान् श्रीकृष्णले पनि अक्रूरले श्रीकृष्णको स्तुति गरिरहेकै अवस्थामा उनलाई जलभित्र आफ्नो दिव्य रूपको दर्शन दिनुभयो र त्यो रूपलाई फेरि लुकाउनुभयो।

**सोऽपि चान्तर्हितं वीक्ष्य जलादुन्मज्य सत्वरः।**
**कृत्वा चावश्यकं सर्वं विस्मितो रथमागमत्॥ २॥**

पदार्थ–
**सः अपि** = ती अक्रूर पनि
**अन्तर्हितं** = भगवान् अन्तर्धान भएको
**वीक्ष्य** = देखेर
**जलात्** = जलबाट
**उन्मज्य च** = बाहिर निस्किएर
**सत्वरः** = शीघ्र
**आवश्यकं** = आवश्यक
**सर्वं च** = (मध्याह्नमा गर्नु पर्ने) सम्पूर्ण कर्म पनि
**कृत्वा** = गरेर
**विस्मितः** = आश्चर्यचकित हुँदै
**रथम्** = रथमा
**आगमत्** = आए

**वाक्यार्थ–** अक्रूर पनि भगवान् अन्तर्धान हुनुभएको देखेर जलबाहिर निस्किए। अनि मध्याह्नमा गर्नु पर्ने सम्पूर्ण कर्महरू शीघ्र समाप्त गरेर आश्चर्यचकित हुँदै रथमा आए।

**तमपृच्छद्धृषीकेशः किं ते दृष्टमिवाद्भुतम्।**
**भूमौ वियति तोये वा तथा त्वां लक्षयामहे॥ ३॥**

पदार्थ–
**हृषीकेशः** = भगवान् श्रीकृष्णले
**तं** = ती अक्रूरलाई
**अपृच्छत्** = सोध्नुभयो
**भूमौ** = पृथिवीमा
**वियति** = आकाशमा

| | | |
|---|---|---|
| **तोये वा** = अथवा जलमा | **अद्भुतम्** = अद्भुत दृश्य | देख्नुभएको) |
| **ते** = हजुरद्वारा | **दृष्टम् इव** = देखिए झैं भयो | **त्वां** = हजुरलाई |
| **किं** = के | **तथा** = त्यस्तो (अद्भुत दृश्य | **लक्षयामहे** = देखदैछौं |

**वाक्यार्थ–** अक्रूर आएपछि भगवान् श्रीकृष्णले सोध्नुभयो– 'काका ! के हजुरले पृथिवी, आकाश अथवा जलमा कुनै अद्भुत दृश्य देख्नुभयो ? हजुरलाई हेर्दा हामीलाई यस्तै लागिरहेको छ।'

**अक्रूर उवाच** (अक्रूरले भने)

**अद्भुतानीह यावन्ति भूमौ वियति वा जले।**
**त्वयि विश्वात्मके तानि किं मेऽदृष्टं विपश्यतः॥ ४॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **इह** = यहाँ | **यावन्ति** = जति पनि | **त्वयि** = हजुरमा |
| **भूमौ** = पृथिवीमा | **अद्भुतानि** = अद्भुत दृश्यहरू छन् | **विपश्यतः** = देखिरहेको |
| **वियति** = आकाशमा | **तानि** = ती सबै दृश्यहरू | **मे** = मैले |
| **जले वा** = अथवा जलमा | **विश्वात्मके** = विश्वरूप | **किं** = के चाहिँ |
| | | **अदृष्टं** = देखिनँ र (सबै देखें) |

**वाक्यार्थ–** हे भगवान् ! यो पृथिवी, आकाश र जलमा जति पनि अद्भुत दृश्यहरू छन्, ती सबै दृश्यहरू विश्वरूप हजुरमा देखिरहेको मैले कुन चाहिँ अद्भुत वस्तु देख्न बाँकी रह्यो र ? मैले सबै कुराहरू देखें।

**यत्राद्भुतानि सर्वाणि भूमौ वियति वा जले।**
**तं त्वानुपश्यतो ब्रह्मन् किं मे दृष्टमिहाद्भुतम्॥ ५॥**

| **पदार्थ–** | | |
|---|---|---|
| **ब्रह्मन्** = हे प्रभु | **तं** = त्यस्ता | **वियति** = आकाशमा |
| **यत्र** = जुन हजुरमा | **त्वा** = हजुरलाई | **जले वा** = अथवा जलमा |
| **सर्वाणि** = सम्पूर्ण | **अनुपश्यतः** = देखिरहेको | **किं** = के |
| **अद्भुतानि** = अद्भुत पदार्थहरू छन् | **मे** = मैले | **अद्भुतम्** = अद्भुत पदार्थ |
| | **इह** = यो | **दृष्टम्** = देखें (केही पनि देखिनँ) |
| | **भूमौ** = पृथिवीमा | |

**वाक्यार्थ–** हे प्रभु ! जति पनि अद्भुत पदार्थहरू छन् ती सबै अद्भुत पदार्थहरूको आश्रयको रूपमा मैले हजुरलाई नै देखिरहेको छु भने पृथिवी, आकाश वा जलमा मैले के त्यस्तो अद्भुत दृश्य देखें र ? (केही पनि देखिनँ, हजुरलाई मात्र देखें।)

**इत्युक्त्वा चोदयामास स्यन्दनं गान्दिनीसुतः।**

**मथुरामनयद् रामं कृष्णं चैव दिनात्यये॥ ६॥**

**पदार्थ–**
**गान्दिनीसुतः** = गान्दिनीका पुत्र अक्रूरले
**इति** = यसप्रकार
**उक्त्वा** = भनेर
**स्यन्दनं** = रथलाई
**चोदयामास** = हाँक्न लागे
**दिनात्यये** = दिन धेरै बित्न लागेपछि
**रामं** = बलराम र
**कृष्णं च एव** = श्रीकृष्णलाई पनि
**मथुराम्** = मथुरामा
**अनयत्** = पुऱ्याए

**वाक्यार्थ–** गान्दिनीपुत्र अक्रूरले भगवान्‌लाई यसो भने र रथ अगाडि बढाउन लागे। दिन धेरै बित्न लागेपछि उनले श्रीकृष्ण र बलरामलाई मथुरामा पुऱ्याए।

**मार्गे ग्रामजना राजंस्तत्र तत्रोपसङ्गताः।**

**वसुदेवसुतौ वीक्ष्य प्रीता दृष्टिं न चाददुः॥ ७॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**तत्र तत्र** = ती-ती
**मार्गे** = बाटाहरूमा
**उपसङ्गताः** = भेट गर्न आएका
**ग्रामजनाः** = गाउँलेहरू
**वसुदेवसुतौ** = वसुदेवका पुत्र श्रीकृष्ण र बलरामलाई
**वीक्ष्य** = देखेर
**प्रीताः** = अत्यन्त प्रसन्न भई
**दृष्टिं च** = आफ्नो दृष्टिलाई
**न आददुः** = फर्काएनन्

**वाक्यार्थ–** हे राजा परीक्षित् ! बाटामा ठाउँ-ठाउँमा मथुरावासी गाउँलेहरू वसुदेवनन्दन श्रीकृष्ण र बलरामलाई भेट्न आएका थिए। उहाँहरूलाई देखेर अत्यन्त प्रसन्न भएका ती गाउँलेहरूले श्रीकृष्ण र बलरामलाई हेर्न लागेको आफ्नो दृष्टिलाई अन्यत्र फर्काउन सकेनन्। (हेरेको हेऱ्यै गरे)।

**तावद् व्रजौकसस्तत्र नन्दगोपादयोऽग्रतः।**

**पुरोपवनमासाद्य प्रतीक्षन्तोऽवतस्थिरे॥ ८॥**

**पदार्थ–**
**तावत्** = त्यस वेला (अक्रूर, श्रीकृष्ण र बलराम मथुरामा आइपुग्दा)
**अग्रतः** = अगाडि नै
**नन्दगोपादयः** = नन्द लगायतका
**व्रजौकसः** = व्रजवासी गोपहरू
**तत्र** = मथुरामा
**पुरोपवनं** = नगर बाहिरको उद्यानमा
**आसाद्य** = आएर
**प्रतीक्षन्तः** = श्रीकृष्ण आदिको प्रतीक्षा गर्दै
**अवतस्थिरे** = बसे

**वाक्यार्थ–** जब अक्रूरले श्रीकृष्ण र बलरामलाई लिएर मथुरा आइपुगे, त्यो भन्दा पहिले नै नन्द आदि व्रजवासी गोपहरू मथुरा नगरभन्दा बाहिरको उद्यानमा उनीहरूको प्रतीक्षा गरेर बसेका थिए।

**तान् समेत्याह भगवानक्रूरं जगदीश्वरः।**
**गृहीत्वा पाणिना पाणिं प्रश्रितं प्रहसन्निव ॥ ९ ॥**

**पदार्थ–**
**तान्** = ती नन्द आदिको
**समेत्य** = समक्ष पुगेर
**जगदीश्वरः** = जगत्‌का स्वामी
**भगवान्** = भगवान् श्रीकृष्णले
**पाणिना** = आफ्नो हातले
**पाणिं** = (अक्रूरको) हातलाई
**गृहीत्वा** = समाएर
**प्रश्रितं** = विनयपूर्वक बसेका
**अक्रूरं** = अक्रूरलाई
**प्रहसन् इव** = मुस्कुराए झैं गर्दै
**आह** = भन्नुभयो

**वाक्यार्थ–** नन्दहरू भएको स्थानमा पुगेपछि जगदीश्वर भगवान् श्रीकृष्णले आफ्नो दुबै हातले अक्रूरको दुबै हातलाई समाएर विनयभावले अवस्थित अक्रूरलाई मुस्कुराए झैं गर्दै भन्नुभयो।

**भवान् प्रविशतामग्रे सहयानः पुरीं गृहम्।**
**वयं त्विहावमुच्याथ ततो द्रक्ष्यामहे पुरीम् ॥ १० ॥**

**पदार्थ–**
**अग्रे** = (मभन्दा) पहिले
**सहयानः** = रथले सहित भई
**भवान्** = हजुर
**पुरीं** = मथुरामा
**प्रविशताम्** = प्रवेश गर्नुहोस्
**ततः** = त्यसपछि
**गृहम्** = घरमा (प्रवेश गर्नुहोस्)
**वयं तु** = हामी चाहिँ
**इह** = यसै उद्यानमा
**अवमुच्य** = आफ्ना सामग्रीहरू उतारेर (राख्छौं र)
**अथ** = त्यसपछि
**पुरीम्** = मथुरा नगरी
**द्रक्ष्यामहे** = हेर्नेछौं

**वाक्यार्थ–** काका ! मैले नगरमा प्रवेश गर्नुभन्दा पहिले नै हजुर (हामी आएको समाचार कंसलाई दिन) रथ लिएर मथुरा नगरीमा जानुहोस् र त्यहाँबाट सोझै घर जानुहोस्। हामीहरू यही उपवनमा आफ्ना सामग्रीहरू उतार्छौं र मथुरानगरी हेर्छौं।

**अक्रूर उवाच** (अक्रूरले भने)

**नाहं भवद्‌भ्यां रहितः प्रवेक्ष्ये मथुरां प्रभो।**
**त्यक्तुं नार्हसि मां नाथ भक्तं ते भक्तवत्सल ॥ ११ ॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**नाथ** = हे स्वामी
**अहं** = म
**भवद्‌भ्यां** = हजुरहरूद्वारा
**रहितः** = रहित भई
**मथुरां** = मथुरामा
**न प्रवेक्ष्ये** = प्रवेश गर्दिनँ
**भक्तवत्सल** = हे भक्तप्रिय
**ते** = हजुरको
**भक्तं** = भक्त
**मां** = मलाई
**त्यक्तुं** = त्याग्न
**न अर्हसि** = योग्य हुनुहुन्न

**वाक्यार्थ–** हे प्रभु ! हे स्वामी ! हजुरहरू विना म एक्लै मथुरा नगरीमा प्रवेश गर्दिनँ। हे भक्तवत्सल ! हजुरको भक्त मलाई नत्याग्नुहोस्।

**आगच्छ याम गेहान्नः सनाथान् कुर्वधोक्षज।**
**सहाग्रजः सगोपालैः सुहृद्भिश्च सुहृत्तम॥ १२॥**

**पदार्थ–**
**अधोक्षज** = हे इन्द्रियातीत प्रभु
**सहाग्रजः** = दाजु बलरामले सहित
**सगोपालैः** = गोपहरूले सहित
**सुहृद्भिः च** = साथीहरूले पनि सहित
**आगच्छ** = आउनुहोस्
**यामः** = जाऔँ
**सुहृत्तम** = हे परम हितैषी
**नः** = हाम्रो
**गेहान्** = घरलाई
**सनाथान्** = सनाथ
**कुरु** = बनाउनुहोस्

**वाक्यार्थ–** इन्द्रियातीत हे भगवान्! दाजु बलराम र आफ्ना परम हितैषी गोपहरू सबैलाई साथमा नै लिएर सँगै जाऔँ। हे परम हितैषी भगवान्! हामी सबै मेरो घर जाऔँ। हजुरले मेरो घरलाई सनाथ बनाउनुहोस्।

**पुनीहि पादरजसा गृहान् नो गृहमेधिनाम्।**
**यच्छौचेनानुतृप्यन्ति पितरः साग्नयः सुराः॥ १३॥**

**पदार्थ–**
**पादरजसा** = चरणको धुलोले
**गृहमेधिनाम्** = गृहस्थ
**नः** = हाम्रो
**गृहान्** = घरलाई
**पुनीहि** = पवित्र बनाइदिनुहोस्
**यच्छौचेन** = जो हजुरको चरण धोइएको पवित्र जलले
**पितरः** = पितृहरू
**साग्नयः** = अग्निदेवले सहित
**सुराः** = देवताहरू
**अनुतृप्यन्ति** = तृप्त हुन्छन्

**वाक्यार्थ–** हामी गृहस्थहरूको घरलाई हजुरले आफ्नो चरणको धुलोद्वारा पवित्र गराइदिनुहोस्। हजुरको चरण धोइएको पवित्र जलले हाम्रा पितृहरू, अग्निहरू र देवताहरू तृप्त हुन्छन्।

**अवनिज्याङ्घ्रियुगलमासीच्छ्लोक्यो बलिर्महान्।**
**ऐश्वर्यमतुलं लेभे गतिं चैकान्तिनां तु या॥ १४॥**

**पदार्थ–**
**अङ्घ्रियुगलम्** = हजुरका दुई चरणकमललाई
**अवनिज्य** = धोएर
**बलिः** = दानवराज बलि
**श्लोक्यः** = कीर्तनीय (तथा)
**महान्** = (गुणले) ठुला समेत
**आसीत्** = भए
**अतुलं** = अतुलनीय (देवताहरूको भन्दा पनि धेरै)
**ऐश्वर्यम्** = ऐश्वर्य
**लेभे** = प्राप्त गरे
**एकान्तिनां तु** = अनन्यप्रेमी भक्तहरूको
**या** = जुन गति छ (त्यही)
**गतिं च** = गति पनि (प्राप्त गरे)

**वाक्यार्थ–** हजुरका दुई चरणकमललाई धोएर दानवराज बलि कीर्तनीय र महान् भए। उनले देवताहरूको भन्दा पनि धेरै अतुलनीय ऐश्वर्य प्राप्त गरे अनि भगवान्‌का अनन्यप्रेमी भक्तहरूले

प्राप्त गर्ने गति पनि प्राप्त गरे।

**आपस्तेऽङ्घ्र्यवनेजन्यस्त्रींल्लोकाञ्छुचयोऽपुनन्।**
**शिरसाधत्त याः शर्वः स्वर्याताः सगरात्मजाः॥ १५॥**

**पदार्थ–**
**ते** = हजुरको
**अङ्घ्र्यवनेजन्यः** = चरण धोएर
**शुचयः** = पवित्र भएको
**आपः** = जल (गङ्गा)ले
**त्रीन्** = तीन ओटा
**लोकान्** = लोकहरूलाई
**अपुनन्** = पवित्र पारिन्
**याः** = जुन गङ्गालाई
**शर्वः** = भगवान् शिवले
**शिरसा** = शिरद्वारा
**आधत्त** = धारण गर्नुभयो
**सगरात्मजाः** = (त्यही जलको स्पर्श मात्रले) सगरका छोराहरू
**स्वर्याताः** = स्वर्ग गए

**वाक्यार्थ–** हजुरको चरणप्रक्षालन गरेर पवित्र भएकी गङ्गाले तीनै लोकलाई पवित्र बनाइन्। जुन गङ्गालाई भगवान् शिवले शिरमा धारण गर्नुभएको थियो त्यही गङ्गाको पवित्र जलको स्पर्श मात्रले सगरका छोराहरू स्वर्ग गए।

**देवदेव जगन्नाथ पुण्यश्रवणकीर्तन।**
**यदूत्तमोत्तमश्लोक नारायण नमोऽस्तु ते॥ १६॥**

**पदार्थ–**
**देवदेव** = हे देवाधिदेव
**जगन्नाथ** = हे जगदीश्वर
**पुण्यश्रवणकीर्तन** = (जन्म, गुण, लीला आदिको) श्रवण र कीर्तन नै पुण्यदायक भएका हे प्रभु
**यदूत्तम** = हे यदुश्रेष्ठ
**उत्तमश्लोक** = हे श्रेष्ठ यशस्वी
**नारायण** = हे नारायण
**ते** = हजुरलाई
**नमः** = नमस्कार
**अस्तु** = होस् (छ)

**वाक्यार्थ–** हे देवाधिदेव! हे जगदीश्वर! हजुरका जन्म, कर्म, गुण, लीला, चरित्र आदि सबै कुराहरूको श्रवण र कीर्तन अत्यन्त पुण्यदायक छन्। हे यदुश्रेष्ठ! हे श्रेष्ठ यशस्वी! हे नारायण! हजुरलाई नमस्कार छ।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**आयास्ये भवतो गेहमहमार्यसमन्वितः।**
**यदुचक्रद्रुहं हत्वा वितरिष्ये सुहृत्प्रियम्॥ १७॥**

**पदार्थ–**
**आर्यसमन्वितः** = पूज्य (दाजु) बलरामले सहित
**अहम्** = म
**यदुचक्रद्रुहं** = यदुवंशीहरूलाई द्रोह गर्ने कंसलाई
**हत्वा** = मारेर
**भवतः** = हजुरको
**गेहं** = घर
**आयास्ये** = आउनेछु
**सुहृत्प्रियम्** = अरू पनि हितैषीहरूलाई आनन्द

**वितरिष्ये** = बाँड्नेछु

**वाक्यार्थ–** म यदुवंशीहरूसँग द्रोह गर्ने कंसलाई मारेपछि दाजु बलरामका साथमा हजुरको घरमा आउनेछु। अरू पनि हितैषीहरूसँग बसेर म उनीहरूलाई आनन्द दिनेछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवमुक्तो भगवता सोऽक्रूरो विमना इव।**

**पुरीं प्रविष्टः कंसाय कर्मावेद्य गृहं ययौ॥ १८॥**

**पदार्थ–**
**एवम्** = यसरी
**भगवता** = भगवान्‌द्वारा
**उक्तः** = बताइएका
**सः** = ती
**अक्रूरः** = अक्रूर
**विमनाः इव** = दुःखित मन भए झैँ भई
**पुरीं** = मथुरा नगरीमा
**प्रविष्टः** = प्रवेश गरेर
**कंसाय** = कंसलाई
**कर्म** = श्रीकृष्ण र बलरामलाई ल्याएको आफ्नो कर्म
**आवेद्य** = निवेदन गरेर
**गृहं** = आफ्नो घर
**ययौ** = गए

**वाक्यार्थ–** यसरी भगवान्‌ले सम्झाएपछि अक्रूर दुःखी झैँ भएर मथुरामा प्रवेश गरेर आफूले श्रीकृष्ण र बलरामलाई मथुरामा ल्याएको समाचार कंसलाई बताई आफ्नो घर गए।

**अथापराह्णे भगवान् कृष्णः सङ्कर्षणान्वितः।**

**मथुरां प्राविशद् गोपैर्दिदृक्षुः परिवारितः॥ १९॥**

**पदार्थ–**
**अथ** = यसपछि (अक्रूर गएपछि)
**गोपैः** = गोपहरूले
**परिवारितः** = युक्त भएका
**सङ्कर्षणान्वितः** = बलरामले सहित
**दिदृक्षुः** = नगर हेर्ने इच्छा गरेका
**भगवान्** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**अपराह्णे** = अपराह्णमा
**मथुरां** = मथुरामा
**प्राविशत्** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** अक्रूर गएपछि आफ्ना गोप मित्रहरूलाई लिएर दाजु बलरामको साथमा भगवान् श्रीकृष्ण सहर हेर्ने इच्छाले अपराह्णमा मथुरामा प्रवेश गर्नुभयो।

**ददर्श तां स्फाटिकतुङ्गगोपुरद्वारां बृहद्धेमकपाटतोरणाम्।**

**ताम्रारकोष्ठां परिखादुरासदामुद्यानरम्योपवनोपशोभिताम्॥ २०॥**

**पदार्थ–**
**स्फाटिकतुङ्गगोपुरद्वारां** = नगरको मुख्य ढोका र घरका ढोकाहरू पनि अग्ला र स्फटिकले बनेको
**बृहद्धेमकपाटतोरणाम्** = सुनले बनेका ठुला-ठुला खापा र तोरण भएका
**ताम्रारकोष्ठां** = तामा र पित्तलले बनेका कोठाहरू भएको
**परिखादुरासदाम्** = परिखा (शत्रुहरू प्रवेश नगरून् भनी सहरको रिङ्गै खनिएको खाडल

जहाँ पानी भरेर विषालु जलजन्तु पालिएको हुन्थ्यो) बनाएको हुनाले दुर्गम भएको **उद्यानरम्योपवनोपशोभिताम्** = विभिन्न रमणीय फूलबारी र बगैँचाहरूले शोभायमान भएको **तां** = त्यो मथुरा नगरीलाई **ददर्श** = देख्नुभयो

**वाक्यार्थ–** अग्ला र स्फटिकले बनेका नगरका मुख्य ढोका र घरका ढोकाहरू भएको, सुनले बनेका ठुला-ठुला खापा र तोरण भएका, तामा र पित्तलले बनेका कोठाहरू भएको, परिखा बनाएको हुनाले दुर्गम भएको एवं विभिन्न रमणीय फूलबारी र बगैँचाहरूले शोभायमान भएको मथुरा नगरीलाई भगवान् श्रीकृष्णले देख्नुभयो।

**सौवर्णशृङ्गाटकहर्म्यनिष्कुटैः श्रेणीसभाभिर्भवनैरुपस्कृताम्।**
**वैदूर्यवज्रामलनीलविद्रुमैर्मुक्ताहरिद्भिर्वलभीषु वेदिषु ॥ २१ ॥**
**जुष्टेषु जालामुखरन्ध्रकुट्टिमेष्वाविष्टपारावतबर्हिनादिताम्।**
**संसिक्तरथ्यापणमार्गचत्वरां प्रकीर्णमाल्याङ्कुरलाजतण्डुलाम्॥ २२ ॥**

**पदार्थ–**
**सौवर्णशृङ्गाटकहर्म्यनिष्कुटैः** = सुनले बनेका चौबाटाहरू, ठुला-ठुला महल र उद्यानहरूद्वारा
**श्रेणीसभाभिः** = शिल्पकला र सौन्दर्यले युक्त सभागृहहरूद्वारा
**भवनैः** = घरहरूद्वारा
**उपस्कृताम्** = अलङ्कृत भएको
**वैदूर्यवज्रामलनीलविद्रुमैः** = वैदूर्य, हिरा, स्फटिक, नीलम र मुगाद्वारा
**मुक्ताहरिद्भिः** = मोती र पन्नाद्वारा पनि
**जुष्टेषु** = जडेका
**वलभीषु** = बलाहरूमा
**वेदिषु** = वेदीहरूमा
**जालामुखरन्ध्रकुट्टिमेषु** = आँखीझ्यालका प्वाल र मणिनिर्मित भुइँहरूमा
**आविष्टपारावतबर्हिनादिताम्** = बसेका परेवा र मयूरहरूको आवाजले युक्त भएको
**प्रकीर्णमाल्याङ्कुरलाजतण्डुलाम्** = माला, फूल, जमरा, लाजा र चामलहरू छरिएको
**संसिक्तरथ्यापणमार्गचत्वरां** = राजमार्ग, बजार, गल्ली र चौरहरूले युक्त भएको (मथुरा नगरी देख्नुभयो)

**वाक्यार्थ–** सुनले बनेका चौबाटाहरू, ठुला-ठुला महल र उद्यानहरूद्वारा, शिल्पकला र सौन्दर्यले युक्त सभागृहहरू र अन्य भवनहरूले युक्त; वैदूर्य, हिरा, स्फटिक, नीलम, मुँगा, मोती र पन्नाहरू जडेका बलो, वेदीहरू भएको; आँखीझ्याल र मणिनिर्मित भुइँमा परेवा, मयूर आदि पक्षीहरू कराइरहेको, उचित स्थानमा फूलमाला, जमरा, लाजा र चामलहरू छरिएको; राजमार्ग, बजार, गल्ली र चौरहरूले युक्त भएको मथुरा नगरी श्रीकृष्णले देख्नुभयो।

**आपूर्णकुम्भैर्दधिचन्दनोक्षितैः प्रसूनदीपावलिभिः सपल्लवैः।**
**सवृन्दरम्भाक्रमुकैः सकेतुभिः स्वलङ्कृतद्वारगृहां सपट्टिकैः ॥ २३ ॥**

**पदार्थ–**
**दधिचन्दनोक्षितैः** = दही र चन्दनले रङ्गाएका
**प्रसूनदीपावलिभिः** = फूल र दीपका पङ्क्तिहरूद्वारा
**सपल्लवैः** = पालुवाले सहित
**सवृन्दरम्भाक्रमुकैः** = फूलका गुच्छा, केरा र लोध्रपुष्पहरूद्वारा
**सकेतुभिः** = ध्वजाहरूले सहित
**सपट्टिकैः** = लामा वस्त्रहरूले सहित भएका
**आपूर्णकुम्भैः** = जलले भरिएका घैँटाहरूद्वारा
**स्वलङ्कृतद्वारगृहां** = राम्ररी सजाइएका घरहरू भएको (मथुरानगरी देख्नुभयो)

**वाक्यार्थ–** प्रत्येक घरका ढोकाहरूमा दही र चन्दनले रङ्गाइएका जलपूर्ण कलशहरू थिए। ती कलशहरू फूल, दीप, रुखका पालुवा, फूलका गुच्छा, केरा, लोध्रपुष्प, ध्वजा र लामा वस्त्रहरूले राम्ररी सजाइएका थिए। यस्ता घरहरू भएको मथुरा नगरी श्रीकृष्णले देख्नुभयो।

**तां सम्प्रविष्टौ वसुदेवनन्दनौ वृतौ वयस्यैर्नरदेववर्त्मना।**
**द्रष्टुं समीयुस्त्वरिताः पुरस्त्रियो हर्म्याणि चैवारुरुहुर्नृपोत्सुकाः॥ २४॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**वयस्यैः** = साथीहरूद्वारा
**वृतौ** = युक्त भएका
**नरदेववर्त्मना** = राजमार्गबाट
**तां** = त्यस्तो मथुरानगरीमा
**सम्प्रविष्टौ** = प्रवेश गरेका
**वसुदेवनन्दनौ** = वसुदेवपुत्र श्रीकृष्ण र बलरामलाई
**द्रष्टुं** = हेर्न
**उत्सुकाः** = उत्सुक भएका
**त्वरिताः** = हतारिएका
**पुरस्त्रियः** = मथुरा नगरीका नारीहरू
**समीयुः** = घरबाट निस्किएर बाहिर आए
**हर्म्याणि च एव** = महलहरूमा पनि
**आरुरुहुः** = चढे

**वाक्यार्थ–** हे राजा परीक्षित् ! आफ्ना साथीहरूसँगै राजमार्गबाट मथुरा नगरीमा प्रवेश गर्नुभएका वसुदेवपुत्र श्रीकृष्ण र बलरामलाई हेर्न उत्सुक भएका र हतारिएका मथुरावासी नारीहरू कोही घरबाट निस्किएर बाहिर आए भने कोही चाहिँ महलहरूमाथि चढे।

**काश्चिद् विपर्यग्धृतवस्त्रभूषणा विस्मृत्य चैकं युगलेष्वथापराः।**
**कृतैकपत्रश्रवणैकनूपुरा नाङ्क्त्वा द्वितीयं त्वपराश्च लोचनम्॥ २५॥**
**अश्नन्त्य एकास्तदपास्य सोत्सवा अभ्यज्यमाना अकृतोपमज्जनाः।**
**स्वपन्त्य उत्थाय निशम्य निःस्वनं प्रपाययन्त्योऽर्भमपोह्य मातरः॥ २६॥**

**पदार्थ–**
**निःस्वनं** = (बाहिरको) हल्ला
**निशम्य** = सुनेर
**सोत्सवाः** = (भगवान्को दर्शन गर्न) उत्सुक भएका
**काश्चित्** = केही नारीहरू
**विपर्यग्धृतवस्त्रभूषणाः** = उल्टा वस्त्रहरू र एक ठाउँमा लगाउने गहना अर्को ठाउँमा लगाएका
**अथ** = तथा
**अपराः** = अरूले चाहिँ
**युगलेषु** = जोडी गहनाहरूमा

**एकं च** = एउटा लगाउन
**विस्मृत्य** = बिर्सिएर
**कृतैकपत्रश्रवणैकनूपुराः** = एउटा मात्र कानमा एउटा मात्र पत्र (एक किसिमको गहना) लगाएका र एउटा मात्र पाउजू लगाएर
**अपराः तु** = अरू चाहिँ
**द्वितीयं** = दोस्रो
**लोचनम् च** = आँखामा
**नाङ्क्त्वा** = गाजल नलगाईकन
**अश्नन्त्यः** = खाइरहेका
**एकाः** = अर्काथरीले
**तत्** = त्यो भोजनलाई
**अपास्य** = छाडेर
**अभ्यज्यमानाः** = (सङ्गिनीहरूसँग मिलेर) तेल आदि लगाइरहेकाहरू
**अकृतोपमज्जनाः** = स्नान गर्न छाडेर
**स्वपन्त्यः** = सुतेकाहरू
**उत्थाय** = उठेर
**प्रपाययन्त्यः** = (बच्चालाई) दुध पियाइरहेका
**मातरः** = आमाहरू
**अर्भम्** = बच्चालाई
**अपोह्य** = त्यागेर (श्रीकृष्णको दर्शन गर्न आए)

**वाक्यार्थ–** बाहिर हल्ला-खल्ला भएको सुनेर भगवान्‌को दर्शन गर्न उत्सुक भएर हतारिएका नारीहरू मध्ये कसैले उल्टा वस्त्रहरू र कसैले एक ठाउँमा लगाउने गहना अर्को ठाउँमा लगाए; कोही चाहिँ जोडी गहनाहरू मध्ये एउटा मात्र लगाएर अर्को नलगाई निक्लिए; केहीले एउटा मात्र कानमा एउटा मात्र पत्र अनि एउटा मात्र गोडामा पाउजू लगाएर हतारमा निस्किए; केहीले एउटा मात्र आँखामा गाजल लगाएर निस्किए; भोजन गरिरहेकाहरू बीचैमा भोजन छाडेर निस्किए; सङ्गिनीहरूसँग मिलेर तेल आदि लगाइरहेका स्त्रीहरू स्नान नै नगरी बाहिर निस्किए; सुतेका नारीहरू उठेर दौडिए; बच्चाहरूलाई दुध चुसाउँदै गरेका नारीहरू बच्चालाई त्यसै छोडेर भगवान्‌को दर्शन गर्न हतार-हतार निस्किए।

**मनांसि तासामरविन्दलोचनः प्रगल्भलीलाहसितावलोकनैः।**
**जहार मत्तद्विरदेन्द्रविक्रमो दृशां ददच्छ्रीरमणात्मनोत्सवम्॥ २७॥**

पदार्थ–
**मत्तद्विरदेन्द्रविक्रमः** = मदशाली हात्ती झैँ गति भएका
**अरविन्दलोचनः** = कमलनयन भगवान्‌ले
**श्रीरमणात्मना** = लक्ष्मीजीलाई आनन्दित गराउने शरीरद्वारा
**प्रगल्भलीलाहसितावलोकनैः** = उत्कट लीला, हाँसो र हेराइद्वारा
**तासाम्** = ती पुरस्त्रीहरूको
**दृशां** = दृष्टिलाई
**उत्सवम्** = हर्ष
**ददत्** = प्रदान गर्दै
**मनांसि** = उनीहरूको मनलाई
**जहार** = हरण गर्नुभयो

**वाक्यार्थ–** मदशाली हात्तीको झैँ मन्दगतिमा हिँडिरहनुभएका कमलनयन भगवान् श्रीकृष्णले भगवती लक्ष्मीलाई आनन्दित तुल्याउने आफ्नो शरीरद्वारा नगरवासी स्त्रीहरूको आँखालाई हर्ष प्रदान गर्नुभयो र आफ्नो उत्कट लीला, हाँसो र हेराइद्वारा उनीहरूको मनलाई हरण गर्नुभयो।

**दृष्ट्वा मुहुःश्रुतमनुद्रुतचेतसस्तं**
**तत्प्रेक्षणोत्स्मितसुधोक्षणलब्धमानाः।**

**आनन्दमूर्तिमुपगुह्य दृशात्मलब्धं**
**हृष्यत्त्वचो जहुरनन्तमरिन्दमाधिम् ॥ २८ ॥**

**पदार्थ–**
**अरिन्दम** = हे शत्रुदमनकर्ता परीक्षित्
**अनुद्रुतचेतसः** = दर्शनका लागि चित्त चञ्चल भएका पुरस्त्रीहरूले
**मुहुःश्रुतम्** = धेरै सुनिएका
**तं** = उहाँ (भगवान्)लाई
**दृष्ट्वा** = देखेर
**तत्प्रेक्षणोत्स्मितसुधोक्षणलब्धमानाः** = भगवान्को हेराइ र मन्द मुस्कानरूपी अमृतसेचनको प्राप्तिद्वारा सम्मानित भएका
**दृशा** = (उद्घाटित) नेत्रद्वारा
**आत्मलब्धं** = अन्तःकरणमा प्राप्त
**आनन्दमूर्तिम्** = आनन्दका प्रतिमूर्ति भगवान्लाई
**उपगुह्य** = आलिङ्गन गरेर
**हृष्यत्त्वचः** = आनन्दले प्रफुल्ल शरीर भएका
**अनन्तम्** = धेरै समयको
**आधिम्** = मनको पीडालाई
**जहुः** = त्यागे

**वाक्यार्थ–** हे परीक्षित् ! श्रीकृष्णको दर्शनका लागि चित्त चञ्चल भएका पुरस्त्रीहरूले जसको बारेमा धेरै दिनदेखि धेरै कुराहरू सुनेका थिए उहाँको दर्शन पाए। भगवान्ले पनि उनीहरूलाई आफ्नो कटाक्ष र मन्द मुस्कानरूप अमृतले सेचन गरेर सम्मानित गर्नुभयो। ती स्त्रीहरूले आफ्नो आँखाको बाटो हुँदै मनमा पुग्नुभएका आनन्दमूर्ति भगवान्लाई मनैमा आलिङ्गन गरे। आनन्दले रोमाञ्चित भएका उनीहरूको धेरै दिनदेखिको मनको पीडा शान्त भयो।

**विवरण–** माथिका श्लोकमा भगवान्ले पुरवासी स्त्रीहरूको मनलाई चोरिदिनुभएको र उनीहरूले आफूभित्र श्रीकृष्णको अनुभव गर्दै आनन्दित भएको बताइएको छ। पुरवासी स्त्रीहरूले श्रीकृष्णको वर्णन पहिल्यैदेखि सुनिआएका थिए भन्ने कुरा **मुहुःश्रुतं** यो पदले बताएको छ। **अनुद्रुतचेतसः** यो पदले ती स्त्रीहरूको मन श्रीकृष्णको गुणगान सुनेपछि पग्लिई श्रीकृष्णमा लागिसकेको थियो भन्ने कुरा बताइएको छ। अहिले आफ्नै आँखाको माध्यमले जब श्रीकृष्ण आफ्नै मनभित्र आउनुभयो तब आनन्दमूर्ति ती श्रीकृष्णलाई अङ्कमाल गरी ती स्त्रीहरूले आफ्नो सम्पूर्ण मानसिक तापलाई छाडिदिए। **आधि** शब्दको अर्थ हुन्छ, मानसिक ताप या दुःख। यसबाट श्रीकृष्णको विरहमा पुरवासी स्त्रीहरूलाई पनि विरहवेदनाको अनुभव हुन्थ्यो भन्ने थाहा पाइन्छ। श्रीशुकदेवले उनीहरूको **आधि** अर्थात् विरहवेदनालाई **अनन्त** भनी बताउनुभएको छ। परमात्माको विरहमा सम्पूर्ण प्राणीहरू अनन्त वेदनाले थिचिएका हुन्छन् र ती सबै प्राणीहरू आनन्दमूर्ति परमात्मालाई अङ्कमाल गरेपछि या उहाँलाई पाएपछि मात्र दुःखमुक्त हुन्छन्। यहाँ मथुरावासी स्त्रीहरूको यही अवस्था बताइएको छ।

**प्रासादशिखरारूढाः प्रीत्युत्फुल्लमुखाम्बुजाः ।**
**अभ्यवर्षन् सौमनस्यैः प्रमदा बलकेशवौ ॥ २९ ॥**

**पदार्थ–**
**प्रासादशिखरारूढाः** = महलको छतमा चढेका

**प्रीत्युत्फुल्लमुखाम्बुजाः** = प्रेमका कारण मुखकमल प्रफुल्ल भएका
**प्रमदाः** = मथुराका स्त्रीहरूले
**सौमनस्यैः** = फूलहरूद्वारा
**बलकेशवौ** = श्रीकृष्ण र बलरामलाई
**अभ्यवर्षन्** = वर्षा गरे

**वाक्यार्थ–** प्रेमका कारण मुखकमल प्रफुल्ल भएका मथुराका स्त्रीहरूले महलको छतमा चढेर भगवान् श्रीकृष्ण र बलराममाथि फूलको वर्षा गरे।

**दध्यक्षतैः सोदपात्रैः स्रग्गन्धैरभ्युपायनैः।**
**तावानर्चुः प्रमुदितास्तत्र तत्र द्विजातयः॥ ३०॥**

**पदार्थ–**
**तत्र तत्र** = तत्तत् स्थानमा (जम्मा भएका)
**प्रमुदिताः** = प्रसन्न भएका
**द्विजातयः** = ब्राह्मण, क्षत्रिय र वैश्यहरूले
**दध्यक्षतैः** = दही, अक्षता
**सोदपात्रैः** = चरण धुने जलपात्र
**स्रग्गन्धैः** = फूल, चन्दन
**अभ्युपायनैः** = मिष्टान्न र फल आदि उपहारहरूद्वारा
**तौ** = ती दुई श्रीकृष्ण र बलरामलाई
**आनर्चुः** = पूजा गरे

**वाक्यार्थ–** ठाउँ-ठाउँमा प्रसन्न भएर भेला भएका ब्राह्मण, क्षत्रिय र वैश्यहरूले दही, अक्षता, चरण धुनका लागि जलपात्र, फूल, चन्दन, मिष्टान्न र फलादिद्वारा भगवान् श्रीकृष्ण र बलरामको पूजा गरे।

**ऊचुः पौरा अहो गोप्यस्तपः किमचरन् महत्।**
**या ह्येतावनुपश्यन्ति नरलोकमहोत्सवौ॥ ३१॥**

**पदार्थ–**
**पौराः** = नगरवासीहरूले
**ऊचुः** = भने
**अहो** = अहो
**गोप्यः** = गोपिनीहरूले
**किम्** = कस्तो
**महत्** = ठुलो
**तपः** = तपस्या
**अचरन्** = गरे (होला)
**याः** = जसले
**नरलोकमहोत्सवौ** = मनुष्य-लोकलाई महान् आनन्द प्रदान गर्ने
**एतौ** = यी दुई श्रीकृष्ण र बलरामलाई
**हि** = निश्चय नै
**अनुपश्यन्ति** = सधैँ देख्दछन्

**वाक्यार्थ–** नगरवासीहरूले भने– 'अहो ! आश्चर्य छ, गोपिनीहरूले त्यस्तो कुन चाहिँ महान् तपस्या गरे होला, जसका कारण उनीहरू सम्पूर्ण मनुष्यलाई आनन्द प्रदान गर्ने भगवान् श्रीकृष्ण र बलरामलाई सधैँ दर्शन गर्दछन्।

**रजकं कञ्चिदायान्तं रङ्गकारं गदाग्रजः।**
**दृष्ट्वायाचत वासांसि धौतान्यत्युत्तमानि च॥ ३२॥**

**पदार्थ–**
**गदाग्रजः** = गद (वसुदेव र देवरक्षिताका पुत्र (भागवत ९/२४/५२ हेर्नुहोस्))का दाजु भगवान् श्रीकृष्णले
**आयान्तं** = आइरहेको
**कञ्चित्** = कुनै
**रङ्गकारं** = वस्त्रमा रङ्ग लगाउने
**रजकं** = धोबीलाई
**दृष्ट्वा** = देखेर
**धौतानि** = धोइएका
**अत्युत्तमानि च** = अति उत्तम
**वासांसि** = लुगाहरू
**अयाचत** = माग्नुभयो

**वाक्यार्थ–** गदका दाजु भगवान् श्रीकृष्णले आफैँतिर आइरहेको एउटा धोबीलाई देख्नुभयो, कपडामा रङ्ग पनि लगाउने त्यो धोबीलाई देखेर भगवान्ले त्यससँग धोइएका अति उत्तम वस्त्रहरू माग्नुभयो।

**देह्यावयोः समुचितान्यङ्ग वासांसि चार्हतोः।**
**भविष्यति परं श्रेयो दातुस्ते नात्र संशयः॥ ३३॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय
**अर्हतोः** = यी कपडाहरूको योग्य
**आवयोः** = हामी दुई जनालाई
**समुचितानि** = लगाउन उचित
**वासांसि च** = यी लुगाहरू
**देहि** = दिनुहोस्
**दातुः** = दान गर्ने
**ते** = तपाईंको
**परं** = परम
**श्रेयः** = कल्याण
**भविष्यति** = हुनेछ
**अत्र** = यस विषयमा
**न संशयः** = सन्देह छैन

**वाक्यार्थ–** हे प्रिय ! हामी दुईजना यी कपडाहरूका लागि योग्य छौँ, अतः हामीलाई सुहाउने यी कपडाहरू दिनुहोस्। यसबाट तपाईंको परम कल्याण हुनेछ, यस विषयमा कुनै सन्देह छैन।

**स याचितो भगवता परिपूर्णेन सर्वतः।**
**साक्षेपं रुषितः प्राह भृत्यो राज्ञः सुदुर्मदः॥ ३४॥**

**पदार्थ–**
**सर्वतः** = सबैतिर
**परिपूर्णेन** = व्याप्त
**भगवता** = भगवान्द्वारा
**याचितः** = (वस्त्रका लागि) याचना गरिएको
**राज्ञः** = राजा कंसको
**भृत्यः** = नोकर
**सुदुर्मदः** = दुष्ट स्वभावको
**सः** = त्यो धोबीले
**रुषितः** = अत्यन्तै क्रुद्ध भई
**साक्षेपं** = गाली गर्दै
**प्राह** = भन्न लाग्यो

**वाक्यार्थ–** सर्वव्यापक भगवान्ले कपडा माग्दा महाराज कंसको दुष्ट स्वभावको नोकर त्यो धोबी अत्यन्तै रिसायो र उसले भगवान् श्रीकृष्णलाई गाली गर्दै भन्न लाग्यो।

**ईदृशान्येव वासांसि नित्यं गिरिवनेचराः।**
**परिधत्त किमुद्वृत्ता राजद्रव्याण्यभीप्सथ॥ ३५॥**

**पदार्थ–**
**उद्वृत्ताः** = हे मात्तिएकाहरू
**गिरिवनेचराः** = पहाडका वनमा घुम्ने तिमीहरू
**राजद्रव्याणि** = राजाको सामानहरू (लुगा)
**अभीप्सथ** = चाहन थाल्यौ
**किम्** = के (तिमीहरू)
**ईदृशानि एव** = यस्तै उत्तम-उत्तम
**वासांसि** = कपडाहरू
**नित्यं** = सधैं
**परिधत्त** = लगाउने गर्छौ

**वाक्यार्थ–** हे मात्तिएकाहरू ! पहाडका वनमा घुम्ने तिमीहरू राजाका सामानहरू चाहन थाल्यौ, के तिमीहरू सधैँ यस्ता उत्तम वस्त्रहरू लगाउने गर्छौ ?

**यताशु बालिशा मैवं प्रार्थ्यं यदि जिजीवीषा ।**
**बध्नन्ति घ्नन्ति लुम्पन्ति दृप्तं राजकुलानि वै ॥ ३६ ॥**

**पदार्थ–**
**बालिशाः** = हे मूर्खहरू
**आशु** = तुरुन्त
**यात** = भाग
**यदि** = यदि
**जिजीवीषा** = बाँच्ने इच्छा छ भने
**एवं** = यसरी
**मा प्रार्थ्यं** = राजसम्पत्ति माग्नुहुँदैन (किनभने)
**राजकुलानि** = राजपुरुषहरूले
**दृप्तं** = तिमीहरूजस्ता उद्दण्डहरूलाई
**वै** = निश्चय नै
**बध्नन्ति** = बन्दी बनाउँछन्
**घ्नन्ति** = मार्दछन्
**लुम्पन्ति** = लुट्दछन्

**वाक्यार्थ–** हे मूर्खहरू ! तिमीहरू तुरुन्त यो ठाउँबाट भागिहाल। यदि तिमीहरूलाई बाँच्ने इच्छा छ भने राजाका वस्तुहरू कहिल्यै नमाग्नू। यहाँका राजपुरुषहरूले तिमीहरू जस्ता उद्दण्डहरूलाई बन्दी बनाउँछन्, मारिदिन्छन् वा तिमीहरूलाई लुटिदिन्छन्।

**एवं विकत्थमानस्य कुपितो देवकीसुतः ।**
**रजकस्य कराग्रेण शिरः कायादपातयत् ॥ ३७ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**विकत्थमानस्य** = गाली गरिरहेको
**रजकस्य** = धोबीको
**शिरः** = शिरलाई
**कुपितः** = रिसाउनुभएका
**देवकीसुतः** = देवकीपुत्र श्रीकृष्णले
**कराग्रेण** = हातको अग्रभागले (हानेर)
**कायात्** = शरीरबाट
**अपातयत्** = (काटेर) झारिदिनुभयो

**वाक्यार्थ–** यसरी गाली गरिरहेको धोबीको शिरलाई रिसाउनुभएका देवकीपुत्र भगवान् श्रीकृष्णले हातको अग्रभागले हानेर शरीरबाट काटी भुइँमा झारिदिनुभयो।

**तस्यानुजीविनः सर्वे वासःकोशान् विसृज्य वै ।**
**दुद्रुवुः सर्वतो मार्गं वासांसि जगृहेऽच्युतः ॥ ३८ ॥**

**पदार्थ–**
**तस्य** = त्यो धोबीको
**अनुजीविनः** = सँगै काम गर्ने
**सर्वे** = अरू सबै मानिसहरू
**वासःकोशान्** = कपडाहरूको पोकालाई
**विसृज्य** = छोडेर
**सर्वतः** = सबै तिरको
**मार्गं** = बाटोबाट
**वै** = निश्चय नै
**दुद्रुवुः** = भागे
**अच्युतः** = भगवान् श्रीकृष्णले चाहिँ
**वासांसि** = कपडाहरू
**जगृहे** = लिनुभयो

**वाक्यार्थ–** त्यसपछि त्यो धोबीसँगै काम गर्ने उसका अन्य सबै मानिसहरू कपडाको पोकालाई त्यहीँ छोडेर जतातत्तैबाट भागे। भगवान् श्रीकृष्णले चाहिँ कपडाहरू लिनुभयो।

**वसित्वात्मप्रिये वस्त्रे कृष्णः सङ्कर्षणस्तथा।**
**शेषाण्यादत्त गोपेभ्यो विसृज्य भुवि कानिचित्॥ ३९॥**

**पदार्थ–**
**कृष्णः** = भगवान् श्रीकृष्ण
**तथा** = तथा
**सङ्कर्षणः** = बलरामले
**आत्मप्रिये** = आफूलाई मन पर्ने
**वस्त्रे** = कपडाहहरू
**वसित्वा** = लगाएर
**शेषाणि** = बाँकी (केही)
**गोपेभ्यः** = गोपहरूलाई
**आदत्त** = दिनुभयो
**कानिचित्** = केही कपडाहरू चाहिँ
**भुवि** = भुइँमै
**विसृज्य** = छाडेर (जानुभयो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण र बलरामले आफूलाई मन पर्ने कपडाहरू लगाउनुभयो। बाँकी रहेका केही कपडाहरू आफ्ना मित्र गोपहरूलाई बाँडिदिनुभयो र केही कपडाहरू चाहिँ त्यहीँ भुइँमैं छोडेर उहाँहरू त्यहाँबाट जानुभयो।

**ततस्तु वायकः प्रीतस्तयोर्वेषमकल्पयत्।**
**विचित्रवर्णैश्चैलेयैराकल्पैरनुरूपतः॥ ४०॥**

**पदार्थ–**
**ततः तु** = त्यसपछि
**वायकः** = एक जना दर्जीले
**प्रीतः** = अत्यन्त प्रसन्न भएर
**विचित्रवर्णैः** = विभिन्न रङ्गका
**आकल्पैः** = सुसज्जित
**चैलेयैः** = वस्त्रहरूद्वारा
**अनुरूपतः** = रूपसुहाउँदो हुने गरी
**तयोः** = उहाँ (श्रीकृष्ण र बलराम) दुईको
**वेषम्** = सुन्दर रूप
**अकल्पयत्** = बनाइदिए

**वाक्यार्थ–** (कपडाहरू लगाएर हिँड्नुभएका भगवान्सँग एक जना दर्जीको भेट भयो।) त्यसपछि ती दर्जीले खुसी भएर भगवान् श्रीकृष्ण र बलरामलाई विभिन्न रङ्गका सुसज्जित वस्त्रहरू उहाँहरूको रूपलाई सुहाउँदो गरी लगाइदिएर उहाँहरू दुबै जनालाई अरु सुन्दर बनाइदिए।

**नानालक्षणवेषाभ्यां कृष्णरामौ विरेजतुः।**
**स्वलङ्कृतौ बालगजौ पर्वणीव सितेतरौ॥ ४१॥**

पदार्थ–
**नानालक्षणवेषाभ्यां** = विभिन्न किसिमका कपडाहरू लगाएका
**कृष्णरामौ** = श्रीकृष्ण र बलराम
**पर्वणि** = उत्सवमा
**स्वलङ्कृतौ** = राम्ररी सिँगारिएका
**सितेतरौ** = सेतो र कालो वर्णका
**बालगजौ इव** = हात्तीका बच्चा (छावा) झैँ
**विरेजतुः** = शोभायमान हुनुभयो

**वाक्यार्थ–** विभिन्न किसिमका कपडाहरू लगाएका श्रीकृष्ण र बलराम उत्सवमा राम्ररी सिँगारिएका कालो र सेतो वर्णका हात्तीका बच्चा (छावा) झैँ सुशोभित हुनुभयो।

**तस्य प्रसन्नो भगवान् प्रादात् सारूप्यमात्मनः।**
**श्रियं च परमां लोके बलैश्वर्यस्मृतीन्द्रियम्॥ ४२॥**

पदार्थ–
**प्रसन्नः** = प्रसन्न हुनुभएका
**भगवान्** = भगवान् श्रीकृष्णले
**तस्य** = ती दर्जीको (मृत्युपछि)
**आत्मनः** = आफ्नो
**सारूप्यम्** = सारूप्य मुक्ति र
**लोके च** = यो लोकमा पनि
**परमां** = उत्कृष्ट (प्रभूत)
**श्रियं** = सम्पत्ति
**बलैश्वर्यस्मृतीन्द्रियम्** = बल, ऐश्वर्य, स्मरणशक्ति र इन्द्रियपटुता
**प्रादात्** = दिनुभयो (दिने निश्चय गर्नुभयो)

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण ती दर्जीबाट अत्यन्त प्रसन्न हुनुभयो र उहाँले ती दर्जीलाई मृत्युपश्चात् सारूप्य मुक्ति र जीवनकालमा अतुल सम्पत्ति, बल, ऐश्वर्य, स्मरणशक्ति र इन्द्रियपटुता प्रदान गर्नुभयो।

**ततः सुदाम्नो भवनं मालाकारस्य जग्मतुः।**
**तौ दृष्ट्वा स समुत्थाय ननाम शिरसा भुवि॥ ४३॥**

पदार्थ–
**ततः** = त्यसपछि
**तौ** = श्रीकृष्ण र बलराम
**सुदाम्नः** = सुदामा नामक
**मालाकारस्य** = मालीको
**भवनं** = घर
**जग्मतुः** = जानुभयो
**सः** = ती सुदामाले
**दृष्ट्वा** = उहाँहरूलाई देखेर
**समुत्थाय** = उठेर
**शिरसा** = शिरले
**भुवि** = पृथिवीमा
**ननाम** = ढोगे

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्ण र बलराम सुदामा नाम गरेका मालीको घरमा जानुभयो। उहाँहरूलाई देखेर सुदामा उठे अनि उनले पृथिवीमा शिर राखेर ढोगे।

**तयोरासनमानीय पाद्यं चार्घ्यार्हणादिभिः।**
**पूजां सानुगयोश्चक्रे स्रक्ताम्बूलानुलेपनैः॥ ४४॥**

पदार्थ–
**सानुगयोः** = आफ्ना अनुचर गोपहरूले सहित भएका

**तयोः** = उहाँहरू दुई (श्रीकृष्ण र बलराम)को
**आसनम्** = आसन
**पाद्यं च** = पाद्य (पाउ धुने जल) पनि
**आनीय** = ल्याएर
**स्त्रक्ताम्बूलानुलेपनैः** = माला, पान, चन्दन आदि
**अर्घ्यार्हणादिभिः** = अर्घ्य आदि पूजा सामग्रीहरूद्वारा
**पूजां** = पूजा
**चक्रे** = गरे

**वाक्यार्थ–** आफ्ना गोप मित्रहरूसँगै आउनुभएका श्रीकृष्ण र बलरामलाई मालीले आसनमा राखेर पाउ धोए। त्यसपछि माला, ताम्बूल, चन्दन, अर्घ्य आदि पूजासामग्रीहरू चढाएर पूजा गरे।

**प्राह नः सार्थकं जन्म पावितं च कुलं प्रभो।**
**पितृदेवर्षयो मह्यं तुष्टा ह्यागमनेन वाम्॥ ४५॥**

पदार्थ–
**प्राह** = (मालीले) भने
**प्रभो** = हे प्रभु
**हि** = निश्चय नै
**वां** = हजुरहरूको
**आगमनेन** = आगमनद्वारा
**मह्यं** = मप्रति
**पितृदेवर्षयः** = पितृ, देवता र ऋषिहरू
**तुष्टाः** = प्रसन्न हुनुभएको छ
**नः** = हाम्रो
**कुलं** = कुल
**पावितं** = पवित्र बनाइयो
**जन्म च** = (हाम्रो) जन्म पनि
**सार्थकं** = सार्थक भयो

**वाक्यार्थ–** सुदामा मालीले भने– हे प्रभु ! आज हजुरहरूको आगमनद्वारा मेरा समस्त पितृ, देवता र ऋषिहरू सन्तुष्ट हुनुभएको छ। हाम्रो कुल नै पवित्र भएको छ र हाम्रो जन्म पनि सार्थक भएको छ।

**भवन्तौ किल विश्वस्य जगतः कारणं परम्।**
**अवतीर्णाविहांशेन क्षेमाय च भवाय च॥ ४६॥**

पदार्थ–
**किल** = निश्चय नै
**भवन्तौ** = हजुरहरू दुईजना नै
**विश्वस्य** = सम्पूर्ण
**जगतः** = संसारको
**परम्** = परम
**कारणं** = कारण हुनुहुन्छ
**क्षेमाय च** = अभ्युन्नति र
**भवाय च** = संसारको कल्याणका लागि
**अंशेन** = (आफ्नो ज्ञान, ऐश्वर्य आदि) अंशद्वारा
**इह** = यस लोकमा
**अवतीर्णौ** = अवतीर्ण हुनुभएको छ

**वाक्यार्थ–** हजुरहरू दुबै जना सम्पूर्ण संसारको परम कारण हुनुहुन्छ। हजुरहरू संसारको अभ्युन्नति र कल्याणका लागि आफ्नो अंशद्वारा यस लोकमा अवतीर्ण हुनुभएको छ।

**न हि वां विषमा दृष्टिः सुहृदोर्जगदात्मनोः।**
**समयोः सर्वभूतेषु भजन्तं भजतोरपि॥ ४७॥**

पदार्थ–
**सुहृदोः** = सबैका परम मित्र
**समयोः** = सबैमा समान

**जगदात्मनोः** = जगत्का आत्मा
**भजन्तं** = आफ्नो भजन गर्नेलाई
**भजतोः अपि** = भजन गर्ने
**वां** = हजुरहरूको
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूमा
**हि** = निश्चय नै
**विषमा** = पक्षपातपूर्ण
**दृष्टिः** = दृष्टि
**न** = छैन

**वाक्यार्थ–** हजुरहरू सबै प्राणीहरूको परम मित्र हुनुहुन्छ। सबैमा समभाव राख्नुहुने हजुरहरू जगत्को साक्षात् आत्मा नै हुनुहुन्छ। आफूलाई प्रेम वा भजन गर्नेलाई प्रेम गर्नुहुने भए पनि वास्तवमा हजुरहरूको कसैमा पनि पक्षपातपूर्ण दृष्टि छैन।

**तावाज्ञापयतं भृत्यं किमहं करवाणि वाम्।**
**पुंसोऽत्यनुग्रहो ह्येष भवद्भिर्यन्नियुज्यते ॥ ४८ ॥**

**पदार्थ–**
**तौ** = त्यस्ता हजुरहरू दुई जना
**भृत्यं** = म सेवकलाई
**आज्ञापयतं** = आज्ञा गर्नुहोस्
**अहं** = म
**वाम्** = हजुरहरूको
**किम्** = के सेवा
**करवाणि** = गरूँ
**भवद्भिः** = हजुरहरूद्वारा
**यत्** = जुन
**नियुज्यते** = (कार्यमा) लगाइनुहुन्छ
**एषः** = यही नै
**पुंसः** = मानिसको लागि
**हि** = निश्चय नै
**अत्यनुग्रहः** = अत्यन्त कृपा हो

**वाक्यार्थ–** म हजुरहरूको सेवक हुँ, मलाई आज्ञा दिनुहोस्, म हजुरहरूको के सेवा गरूँ ? हजुरहरूले आज्ञा दिएर कुनै मानिसलाई कार्यमा नियुक्त गर्नु नै उसप्रति हजुरहरूको कृपा हो।

**इत्यभिप्रेत्य राजेन्द्र सुदामा प्रीतमानसः।**
**शस्तैः सुगन्धैः कुसुमैर्माला विरचिता ददौ ॥ ४९ ॥**

**पदार्थ–**
**राजेन्द्र** = हे महाराज
**इति** = यस्तो प्रार्थना गरेपछि
**अभिप्रेत्य** = (भगवान्को) अभिप्राय बुझेर
**प्रीतमानसः** = मन प्रसन्न भएका
**सुदामा** = सुदामाले
**शस्तैः** = (सुन्दर) प्रशंसनीय
**सुगन्धैः** = वासनादार
**कुसुमैः** = फूलहरूद्वारा
**विरचिताः** = बनाइएका
**मालाः** = मालाहरू
**ददौ** = दिए

**वाक्यार्थ–** हे परीक्षित् ! यसप्रकार प्रार्थना गरेपछि भगवान्को अभिप्रायलाई बुझेर प्रसन्न भएका सुदामा मालीले सुन्दर-सुन्दर वासनादार फूलहरूले बनाइएका मालाहरू भगवान्लाई दिए।

**ताभिः स्वलङ्कृतौ प्रीतौ कृष्णरामौ सहानुगौ।**
**प्रणताय प्रपन्नाय ददतुर्वरदौ वरान्॥ ५० ॥**

**पदार्थ–**
**सहानुगौ** = गोप मित्रहरूले सहित भएका

**ताभिः** = ती मालाहरूद्वारा
**स्वलङ्कृतौ** = राम्ररी सजिनुभएका
**प्रीतौ** = प्रसन्न हुनुभएका
**वरदौ** = वरदाता
**कृष्णरामौ** = श्रीकृष्ण र बलरामले
**प्रणताय** = नमस्कारपूर्वक
**प्रपन्नाय** = शरणमा आएका (माली)लाई
**वरान्** = वरहरू
**ददतुः** = दिनुभयो

**वाक्यार्थ–** सुदामाले लगाइदिएका मालाहरूले सजिनुभएका र गोपहरूले सहित हुनुभएका वरदाता भगवान् श्रीकृष्ण र बलरामले प्रसन्न हुँदै नमस्कारपूर्वक शरणमा आएका मालीलाई वरहरू दिनुभयो।

**सोऽपि वव्रेऽचलां भक्तिं तस्मिन्नेवाखिलात्मनि।**
**तद्भक्तेषु च सौहार्दं भूतेषु च दयां पराम्॥ ५१॥**

पदार्थ–
**सः अपि** = ती मालीले पनि
**अखिलात्मनि** = सर्वात्मा
**तस्मिन् एव** = उनै भगवान्मा नै
**अचलां** = निश्चल
**भक्तिं** = भक्ति
**तद्भक्तेषु च** = भगवान्का भक्तहरूमा
**सौहार्दं** = मित्रता
**भूतेषु च** = सबै प्राणीहरूमा
**पराम्** = ज्यादै
**दयां** = दया
**वव्रे** = मागे

**वाक्यार्थ–** ती मालीले पनि उनै सर्वात्मा भगवान्मा निश्चल भक्ति मागे। यसका साथै भगवान्का भक्तहरूसँगको मित्रता र सबै प्राणीमा ज्यादै दयाभाव रहोस् भनी वर मागे।

**इति तस्मै वरं दत्त्वा श्रियं चान्वयवर्धिनीम्।**
**बलमायुर्यशः कान्तिं निर्जगाम सहाग्रजः॥ ५२॥**

पदार्थ–
**इति** = यसप्रकार
**तस्मै** = ती मालीलाई
**अन्वयवर्धिनीम्** = वंशगत रूपमा बढ्दै जाने
**श्रियं** = सम्पत्ति
**बलम्** = बल
**आयुः** = आयु
**यशः** = कीर्ति
**कान्तिं च** = तेज पनि (मिल्ने)
**वरं** = वर
**दत्त्वा** = दिएर
**सहाग्रजः** = बलरामले सहित
**निर्जगाम** = निस्किएर जानुभयो

**वाक्यार्थ–** यसप्रकार भगवान् श्रीकृष्णले माली सुदामाले मागे अनुसार वंशगत रूपमा उत्तरोत्तर बढ्दै जाने सम्पत्ति, बल, आयु, यश र कान्ति प्राप्त हुने वर दिएर दाजु बलराम सहित त्यहाँबाट जानुभयो।

**विवरण–** यस अध्यायमा भगवान् श्रीकृष्णले कुशल राजनीतिज्ञले गर्ने चतुरता पनि गर्नुभएको छ। भगवान्ले मथुरामा रहेका पुरवासीहरूमध्ये कसैलाई प्रेम, भेटघाट आदिद्वारा आफ्नो पक्षमा लिनुभएको छ अनि कसैलाई चाहिँ पराक्रम आदिद्वारा भयभीत एवं सशङ्कित बनाउनुभएको छ।

यसरी उहाँले मथुराको जनसमूहको मनलाई विभाजित गरिदिनुभएको छ। कंसको अत्याचारबाट असन्तुष्ट अनि श्रीकृष्णको प्रेम चाहने जति थिए, तिनलाई उहाँले स्विकार्नुभएको छ। सबभन्दा पहिला राजमार्गमा हिँडिरहँदा आफ्नो लोकोत्तर सौन्दर्यद्वारा सम्पूर्ण स्त्रीहरूलाई आकर्षित गर्नुभएको छ। कंस हाम्रो अघि कहिल्यै देखिँदैन तर यी परमसुन्दर युवक हाम्रै अघिबाट हिँड्दै हाम्रो प्रेमको अभिनन्दन गर्दैछन् भन्ने विचार गरी ती स्त्रीहरूले आफ्नो मनमन्दिरमा राजाको रूपमा कृष्णलाई नै ठाउँ बनाएको सूचित हुन्छ। यसपछि भगवान्ले कंसबाट फाइदा लिने उसका सेवक एवं हितैषीहरूलाई चिढ्याउने या भयभीत गर्ने काम गर्नुभएको छ। कंसको लुगा धुने धोबीबाट श्रीकृष्ण राम्रा कपडा माग्नुहुन्छ अनि उसले उपहास गरेपछि त्यसलाई नष्ट गरिदिनुहुन्छ। यसबाट कंसका अन्य सेवकहरूमा हाम्रो पनि यही गति होला भन्ने भय फैलिएको छ। सामान्य नागरिकसँग भने श्रीकृष्णको स्नेहपूर्ण सम्बन्ध भएको देखिन्छ। कपडा सिलाउने दर्जीकहाँ गई श्रीकृष्णले आफ्ना लुगाहरू मिलाउन लगाई उसलाई सुन्दर रूप, धन, सद्बुद्धि आदि दिनुभएको छ। यसबाट सबैले श्रीकृष्णसँग प्रेम र सहानुभूतिको सम्बन्ध गाँस्ने वातावरण बनेको छ। यसपछि उहाँले किसानहरूलाई आफ्नो पक्षमा राख्नुभएको छ। फूलखेती गर्ने मालीकहाँ भगवान् आफैँ पुगी उनीबाट माला स्वीकार गर्नुभएको छ र उनलाई भक्तिको वर दिनुभएको छ। यसरी यस अध्यायमा भगवान् श्रीकृष्णले मथुरामा बस्ने आफ्ना अनुकूल पक्षहरूलाई आस्वस्त गर्नुभएको छ अनि प्रतिकूल कंसका पक्षधरहरूलाई भयभीत गराइदिनुभएको छ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**पुरप्रवेशो नाम एकचत्वारिंशोऽध्यायः ॥ ४१ ॥**

# अथ द्विचत्वारिंशोऽध्यायः

## कुब्जामाथि कृपा, धनुषभङ्ग र कंसको छटपटी

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ व्रजन् राजपथेन माधवः स्त्रियं गृहीताङ्गविलेपभाजनाम् ।**

**विलोक्य कुब्जां युवतीं वराननां पप्रच्छ यान्तीं प्रहसन् रसप्रदः ॥ १ ॥**

पदार्थ–
**अथ** = त्यसपछि
**राजपथेन** = राजमार्गको बाटो गरी
**व्रजन्** = गइरहनुभएका
**रसप्रदः** = आनन्द दिनुहुने
**माधवः** = भगवान् श्रीकृष्णले
**गृहीताङ्गविलेपभाजनाम्** = शरीरमा घस्ने चन्दनको थाली लिएर
**यान्तीं** = हिँडिरहेकी
**वराननां** = सुन्दर अनुहार भएकी
**कुब्जां** = कुप्री
**युवतीं** = तरुणी
**स्त्रियं** = स्त्रीलाई
**विलोक्य** = देखेर
**प्रहसन्** = हाँस्दै
**पप्रच्छ** = सोध्न लाग्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! त्यसपछि राजमार्गको बाटो गरी अगाडि गइरहनुभएका आनन्द दिनुहुने भगवान् श्रीकृष्णले हातमा चन्दनको थाली लिएर हिँडिरहेकी सुन्दर अनुहार भएकी कुप्री युवतीलाई देख्नुभयो र हाँस्दै उनलाई सोध्न लाग्नुभयो।

**का त्वं वरोर्वेतदुहानुलेपनं कस्याङ्गने वा कथयस्व साधु नः ।**

**देह्यावयोरङ्गविलेपमुत्तमं श्रेयस्ततस्ते नचिराद् भविष्यति ॥ २ ॥**

पदार्थ–
**वरोरु** = हे सुन्दरी
**अङ्गने** = हे नारी
**त्वं का** = तिमी को हौ
**एतत् उह** = यो चाहिँ
**अनुलेपनं** = चन्दन
**कस्य वा** = कसका लागि हो
**नः** = हामीहरूलाई
**साधु** = राम्ररी
**कथयस्व** = बताऊ
**उत्तमं** = उत्कृष्ट
**अङ्गविलेपम्** = चन्दन
**आवयोः** = हामी दुईलाई
**देहि** = देऊ
**ततः** = त्यसपछि
**नचिरात्** = छिट्टै
**ते** = तिम्रो
**श्रेयः** = कल्याण
**भविष्यति** = हुनेछ

**वाक्यार्थ–** हे सुन्दरी नारी ! तिमी को हौ ? यो चन्दन कसका लागि हो ? त्यो सबै कुरा हामीलाई बताऊ। त्यो उत्कृष्ट चन्दन हामीलाई देऊ। त्यसो गऱ्यौ भने तिम्रो चाँडै कल्याण हुनेछ।

**सैरन्ध्र्युवाच** (सेविका त्रिवक्राले भनिन्)

**दास्यस्म्यहं सुन्दर कंससम्मता त्रिवक्रनामा ह्यनुलेपकर्मणि ।**
**मद्भावितं भोजपतेरतिप्रियं विना युवां कोऽन्यतमस्तदर्हति ॥ ३ ॥**

**पदार्थ–**
**सुन्दर** = हे सुन्दर
**हि** = निश्चय नै
**अहं** = म
**अनुलेपकर्मणि** = शरीरमा घस्ने चन्दन तयार गर्ने काममा
**कंससम्मता** = कंसद्वारा खटाइएकी
**त्रिवक्रनामा** = त्रिवक्रा (तीन ठाउँमा बाङ्गी) नामकी
**दासी** = दासी
**अस्मि** = हुँ
**मद्भावितं** = मैले तयार गरेको चन्दन
**भोजपतेः** = भोजराज कंसलाई
**अतिप्रियं** = अति मन पर्छ
**युवां** = हजुरहरूलाई
**विना** = छाडेर
**अन्यतमः** = अर्को
**कः** = को
**तत्** = त्यस चन्दनको
**अर्हति** = योग्य छ र

**वाक्यार्थ–** हे सुन्दर ! म शरीरमा घस्ने चन्दन तयार गर्ने त्रिवक्रा नामकी कंसकी दासी हुँ। मैले तयार गरेको चन्दन भोजराज कंसलाई अति मन पर्दछ। हजुरहरूलाई छाडेर यस चन्दनको योग्य अरू को हुन सक्छ र ?

**रूपपेशलमाधुर्यहसितालापवीक्षितैः ।**
**धर्षितात्मा ददौ सान्द्रमुभयोरनुलेपनम् ॥ ४ ॥**

**पदार्थ–**
**रूपपेशलमाधुर्यहसितालाप-वीक्षितैः** = भगवान्‌को रूप, सुकुमारता, मधुरता, मन्दहास्य, प्रेमालाप र हेराइ आदिद्वारा
**धर्षितात्मा** = आत्मविह्वल भएकी त्रिवक्राले
**सान्द्रम्** = पन्यालो (अलिअलि तरल)
**अनुलेपनम्** = चन्दन
**उभयोः** = दुबै जना (श्रीकृष्ण र बलराम)लाई
**ददौ** = अर्पण गरिन्

**वाक्यार्थ–** भगवान्‌को रूप, सौन्दर्य, सुकुमारता, मधुरता, मन्द हँसाइ, प्रेमालाप र चञ्चल हेराइ आदिलाई देखेर चित्त विह्वल भएकी त्रिवक्राले त्यो पन्यालो चन्दन श्रीकृष्ण र बलरामलाई अर्पण गरिन्।

**ततस्तावङ्गरागेण स्ववर्णेतरशोभिना ।**
**सम्प्राप्तपरभागेन शुशुभातेऽनुरञ्जितौ ॥ ५ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**स्ववर्णेतरशोभिना** = आफ्नो वर्णभन्दा भिन्न वर्ण भएको
**सम्प्राप्तपरभागेन** = नाभिभन्दा माथिको भागमा लगाइएको

| | | |
|---|---|---|
| **अङ्गरागेण** = चन्दनले | **तौ** = ती दुई (श्रीकृष्ण र | **शुशुभाते** = अति सुशोभित |
| **अनुरञ्जितौ** = रङ्गिएका | बलराम) | देखिनुभयो |

**वाक्यार्थ–** त्यसपछि नाभिभन्दा माथिको भागमा आफ्नो शरीरको रङ्गभन्दा भिन्न रङ्गको (श्यामवर्ण र श्वेतवर्णको शरीरमा पहेँलो रङ्गको) चन्दन लगाउनुभएका भगवान् श्रीकृष्ण र बलराम अत्यन्त सुशोभित देखिनुभयो।

**प्रसन्नो भगवान् कुब्जां त्रिवक्रां रुचिराननाम्।**
**ऋज्वीं कर्तुं मनश्चक्रे दर्शयन् दर्शने फलम्॥ ६॥**

| | | |
|---|---|---|
| पदार्थ– | **दर्शयन्** = देखाउँदै | **ऋज्वीं** = सोझी (सलक्क परेकी) |
| **प्रसन्नः** = प्रसन्न हुनुभएका | **रुचिराननाम्** = सुन्दर अनुहार | **कर्तुं** = बनाउने |
| **भगवान्** = भगवान् श्रीकृष्णले | भएकी | **मनः चक्रे** = विचार गर्नुभयो |
| **दर्शने** = आफ्नो दर्शन गर्नुको | **त्रिवक्रां** = त्रिवक्रा नामकी | |
| **फलम्** = फल | **कुब्जां** = कुप्रीलाई | |

**वाक्यार्थ–** प्रसन्न हुनुभएका भगवान् श्रीकृष्णले आफ्नो दर्शन गर्नुको फल देखाउनका निम्ति सुन्दर अनुहार भएकी त्रिवक्रा नामकी कुप्रीलाई सलक्क परेकी बनाउने विचार गर्नुभयो।

**पद्भ्यामाक्रम्य प्रपदे द्व्यङ्गुल्युत्तानपाणिना।**
**प्रगृह्य चिबुकेऽध्यात्ममुदनीनमदच्युतः॥ ७॥**

| | | |
|---|---|---|
| पदार्थ– | **आक्रम्य** = दबाएर | **प्रगृह्य** = समाएर |
| **अच्युतः** = भगवान् श्रीकृष्णले | **द्व्यङ्गुल्युत्तानपाणिना** = दुई ओटा | **अध्यात्मम्** = (त्रिवक्राको) |
| **प्रपदे** = त्रिवक्राको पैतालामा | औँला उठाइएको हातले | शरीरलाई |
| **पद्भ्याम्** = आफ्नो दुबै पाउले | **चिबुके** = चिउँडोमा | **उदनीनमत्** = तन्काइदिनुभयो |

**वाक्यार्थ–** भगवान्ले आफ्ना पाउले त्रिवक्राका दुबै पैतालालाई दबाउनुभयो र माथि उचालिराखेका हातका दुई ओटा औँलामा उनको चिउँडो अड्याएर त्रिवक्राको शरीरलाई तन्काइदिनुभयो।

**सा तदर्जुसमानाङ्गी बृहच्छ्रोणिपयोधरा।**
**मुकुन्दस्पर्शनात् सद्यो बभूव प्रमदोत्तमा॥ ८॥**

| | | |
|---|---|---|
| पदार्थ– | श्रीकृष्णको स्पर्श मात्रले | **ऋजुसमानाङ्गी** = सोझा र |
| **सा** = ती त्रिवक्रा | **तदा** = त्यस वेला | मिलेका अङ्ग भएकी |
| **मुकुन्दस्पर्शनात्** = भगवान् | **सद्यः** = तत्काल | **बृहच्छ्रोणिपयोधरा** = ठुला |

नितम्ब र स्तन भएकी | **प्रमदोत्तमा** = परम सुन्दरी युवती | **बभूव** = भइन्

**वाक्यार्थ–** भगवान्को स्पर्श मात्रले तत्काल ती कुब्जा त्रिवक्राका सबै अङ्गहरू सोझा र मिलेका भए, उनी ठुला नितम्ब र स्तन भएकी परम सुन्दरी युवती बनिन्।

**ततो रूपगुणौदार्यसम्पन्ना प्राह केशवम्।**

**उत्तरीयान्तमाकृष्य स्मयन्ती जातहृच्छया॥ ९॥**

पदार्थ–
**ततः** = त्यसपछि
**रूपगुणौदार्यसम्पन्ना** = रूप, गुण र उदारताले सम्पन्न भएकी
**जातहृच्छया** = भगवान्लाई प्राप्त गर्ने इच्छा गरेकी ती त्रिवक्राले
**उत्तरीयान्तम्** = भगवान्को उपर्नाको टुप्पोलाई
**आकृष्य** = तानेर
**स्मयन्ती** = मुस्कुराउँदै
**केशवम्** = श्रीकृष्णलाई
**प्राह** = भन्न लागिन्

**वाक्यार्थ–** त्यसपछि रूप, गुण र उदारताले सम्पन्न भएकी तथा मनमा भगवान्लाई प्राप्त गर्ने तीव्र इच्छा भएकी ती त्रिवक्राले भगवान्ले ओढेको उपर्नाको टुप्पोलाई तानेर मुस्कुराउँदै भन्न लागिन्।

**एहि वीर गृहं यामो न त्वां त्यक्तुमिहोत्सहे।**

**त्वयोन्मथितचित्तायाः प्रसीद पुरुषर्षभ॥ १०॥**

पदार्थ–
**वीर** = हे वीर
**एहि** = आउनुहोस्
**गृहं** = घर
**यामः** = जाऔँ
**त्वां** = हजुरलाई
**इह** = यहाँ
**त्यक्तुम्** = छोड्न
**न उत्सहे** = सक्दिनँ
**पुरुषर्षभ** = हे पुरुषश्रेष्ठ
**त्वया** = हजुरद्वारा
**उन्मथितचित्तायाः** = चित्त मोहित भएकी मसँग
**प्रसीद** = प्रसन्न हुनुहोस्

**वाक्यार्थ–** हे वीर ! आउनुहोस्, घर जाऔँ। म हजुरलाई यहाँ छोड्न सक्दिनँ। हे पुरुषश्रेष्ठ ! हजुरका कारण मेरो चित्त मोहित भएको छ, ममाथि प्रसन्न हुनुहोस्।

**एवं स्त्रिया याच्यमानः कृष्णो रामस्य पश्यतः।**

**मुखं वीक्ष्यानुगानां च प्रहसंस्तामुवाच ह॥ ११॥**

पदार्थ–
**एवं** = यसप्रकार
**रामस्य** = बलरामले
**पश्यतः** = हेरिरहँदा नै
**स्त्रिया** = स्त्रीद्वारा
**याच्यमानः** = प्रार्थना गरिनुभएका
**कृष्णः** = भगवान् श्रीकृष्णले
**अनुगानां** = अनुचर साथीहरूको
**मुखं** = अनुहारलाई
**वीक्ष्य** = हेर्दै र
**प्रहसन् च** = हाँस्दै
**ताम्** = तिनलाई
**उवाच ह** = भन्नुभयो

**वाक्यार्थ–** दाजु बलरामका अगाडि नै ती सुन्दरी स्त्रीले यसप्रकारले प्रार्थना गरेपछि भगवान् श्रीकृष्णले आफ्ना अनुचर साथीहरूको अनुहार हेर्दै हाँसी–हाँसी तिनलाई भन्नुभयो।

**एष्यामि ते गृहं सुभ्रु पुंसामाधिविकर्शनम्।**
**साधितार्थोऽगृहाणां नः पान्थानां त्वं परायणम्॥ १२॥**

**पदार्थ–**
**सुभ्रु** = हे राम्रो आँखीभौँ भएकी सुन्दरी
**पुंसाम्** = पुरुषहरूको
**आधिविकर्शनम्** = मानसिक रोग नाश गर्ने
**ते** = तिम्रो
**गृहं** = घरमा
**साधितार्थः** = काम सकेपछि
**एष्यामि** = आउनेछु
**अगृहाणां** = घरबार नभएका
**नः** = हामी
**पान्थानां** = बटुवाका लागि
**त्वं** = तिमी नै त
**परायणम्** = परम आश्रय हौ

**वाक्यार्थ–** हे सुन्दरी ! आफ्नो काम पूरा गरेपछि पुरुषहरूको मानसिक रोग शान्त गर्ने तिम्रो घरमा अवश्य आउनेछु, हामीजस्ता घरबार नभएका बटुवाका लागि तिमी नै त परम आश्रय हौ।

**विसृज्य माध्व्या वाण्या तां व्रजन् मार्गे वणिक्पथैः।**
**नानोपायनताम्बूलस्रग्गन्धैः साग्रजोऽर्चितः॥ १३॥**

**पदार्थ–**
**माध्व्या** = मिठा
**वाण्या** = वचनद्वारा
**तां** = ती त्रिवक्रालाई
**विसृज्य** = बिदा गरेर
**साग्रजः** = दाजु बलरामका साथमा
**मार्गे** = बाटोमा
**व्रजन्** = हिँडिरहनुभएका भगवान् श्रीकृष्ण
**वणिक्पथैः** = बाटाका व्यापारीहरूद्वारा
**नानोपायनताम्बूलस्रग्गन्धैः** = विभिन्न प्रकारका उपहार, पान, माला, चन्दन आदिद्वारा
**अर्चितः** = पूजा गरिनुभयो

**वाक्यार्थ–** यसप्रकार मिठा कुरा गरेर त्रिवक्रालाई बिदा गरी भगवान् श्रीकृष्ण, बलरामका साथमा अगाडि बढ्नुभयो। बाटाका व्यापारीहरूले विभिन्न प्रकारका उपहार, पान, माला, चन्दन आदिले उहाँको पूजा गरे।

**तद्दर्शनस्मरक्षोभादात्मानं नाविदन् स्त्रियः।**
**विस्रस्तवासःकबरवलयालेख्यमूर्तयः॥ १४॥**

**पदार्थ–**
**तद्दर्शनस्मरक्षोभात्** = भगवान्को दर्शनले हृदयमा प्रेम उत्पन्न भएर विचलित भएका
**स्त्रियः** = स्त्रीहरूले
**आत्मानं** = आफूलाई नै
**नाविदन्** = बिर्सिए
**विस्रस्तवासःकबरवलयालेख्य–मूर्तयः** = कपडा, कपाल, बाला, आदि अस्तव्यस्त भएका ती स्त्रीहरू मूर्ति जस्ता देखिए

**वाक्यार्थ–** भगवान्‌को दर्शनले हृदयमा प्रेम पैदा भएर विचलित भएका स्त्रीहरूले आफूलाई नै बिर्सिए। कपडा, कपाल, बाला आदि अस्तव्यस्त भएका ती स्त्रीहरू मूर्ति जस्ता देखिए।

**ततः पौरान् पृच्छमानो धनुषः स्थानमच्युतः।**
**तस्मिन् प्रविष्टो ददृशे धनुरैन्द्रमिवाद्भुतम्॥ १५॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**अच्युतः** = भगवान् श्रीकृष्ण
**पौरान्** = नगरवासीहरूसँग
**धनुषः** = धनुषयज्ञ चलेको
**स्थानम्** = ठाउँ
**पृच्छमानः** = सोध्दै
**तस्मिन्** = त्यहाँ
**प्रविष्टः** = प्रवेश गर्नुभयो (र त्यहाँ)
**ऐन्द्रम् इव** = इन्द्रधनुसमान
**अद्भुतम्** = अद्‌भुत
**धनुः** = धनु
**ददृशे** = देख्नुभयो

**वाक्यार्थ–** त्यसपछि नगरवासीहरूसँग धनुषयज्ञ भइरहेको ठाउँ सोध्दै भगवान् श्रीकृष्ण त्यस ठाउँमा पुग्नुभयो र त्यहाँ उहाँले इन्द्रधनु समानको एउटा अद्‌भुत धनु देख्नुभयो।

**पुरुषैर्बहुभिर्गुप्तमर्चितं परमर्द्धिमत्।**
**वार्यमाणो नृभिः कृष्णः प्रसह्य धनुराददे॥ १६॥**

**पदार्थ–**
**नृभिः** = मानिस (रक्षक)हरूद्वारा
**वार्यमाणः** = रोकिँदा-रोकिँदै
**कृष्णः** = भगवान् श्रीकृष्णले
**बहुभिः** = धेरै
**पुरुषैः** = मानिसहरूद्वारा
**गुप्तम्** = सुरक्षित
**अर्चितं** = पूजित (तथा)
**परमर्द्धिमत्** = बहुमूल्य रत्नजडित
**धनुः** = त्यस धनुलाई
**प्रसह्य** = जबर्जस्ती
**आददे** = उठाउनुभयो

**वाक्यार्थ–** मानिसहरूले रोक्दा-रोक्दै पनि भगवान् श्रीकृष्णले धेरै मानिसहरूद्वारा सुरक्षित, पूजित र बहुमूल्य रत्नहरू जडित त्यो धनुलाई जबर्जस्ती उठाउनुभयो।

**करेण वामेन सलीलमुद्धृतं सज्यं च कृत्वा निमिषेण पश्यताम्।**
**नृणां विकृष्य प्रबभञ्ज मध्यतो यथेक्षुदण्डं मदकर्युरुक्रमः॥ १७॥**

**पदार्थ–**
**यथा** = जसरी
**उरुक्रमः** = बलवान्
**मदकरी** = मत्त हात्तीले
**इक्षुदण्डं** = उखुको लाँक्रालाई (सुँढले भाँच्दछ त्यसै गरी)
**वामेन** = देब्रे
**करेण** = हातले
**सलीलम्** = ख्यालख्यालमै
**उद्धृतं** = उठाएर
**सज्यं च** = (त्यसमा) ताँदो पनि
**कृत्वा** = चढाएर
**नृणां** = मानिसहरूले
**पश्यताम्** = हेर्दा-हेर्दै
**निमिषेण** = एक निमेषमा नै
**विकृष्य** = खिचेर
**मध्यतः** = बीचबाट
**प्रबभञ्ज** = भाँचिदिनुभयो

**वाक्यार्थ–** जसरी बलवान् मत्त हात्तीले उखुका लाँक्रालाई सुँढले भाँच्दछ त्यसै गरी भगवान्‌ले

पनि सबैको सामुन्नेमा देब्रे हातले त्यस धनुषलाई उचालेर त्यसमा ताँदो चढाई एकै निमेषमा त्यसलाई तानेर बीचैमा भाँचिदिनुभयो।

**धनुषो भज्यमानस्य शब्दः खं रोदसी दिशः।**

**पूरयामास यं श्रुत्वा कंसस्त्रासमुपागमत्॥ १८॥**

**पदार्थ–**
**भज्यमानस्य** = भाँचिइरहेको
**धनुषः** = धनुको
**शब्दः** = आवाजले
**खं** = आकाश
**रोदसी** = पृथिवी (र)
**दिशः** = दिशाहरू सबैलाई
**पूरयामास** = गुञ्जित बनायो
**यं** = जुन आवाजलाई
**श्रुत्वा** = सुनेर
**कंसः** = कंस
**त्रासम्** = भयभीत अवस्थामा
**उपागमत्** = पुग्यो

**वाक्यार्थ–** त्यो धनु भाँचिँदाको आवाजले आकाश, पृथिवी र दिशाहरू सबै गुञ्जायमान भए। त्यो आवाज सुनेर कंस पनि भयभीत भयो।

**तद्रक्षिणः सानुचराः कुपिता आततायिनः।**

**ग्रहीतुकामा आवव्रुर्गृह्यतां बध्यतामिति॥ १९॥**

**पदार्थ–**
**तद्रक्षिणः** = त्यस धनुको रक्षामा खटिएका
**सानुचराः** = अनुचरले सहित
**कुपिताः** = अत्यन्त रिसाएका
**आततायिनः** = आतङ्क मच्च्चाउने दुष्टहरूले
**ग्रहीतुकामाः** = भगवान्लाई समात्ने इच्छाले (यसलाई)
**गृह्यतां** = समात
**बध्यताम्** = बाँध
**इति** = यस्तो
**आवव्रुः** = भन्न लागे

**वाक्यार्थ–** धनुको रक्षाका निम्ति खटिएका अनुचरहरूले सहित आततायी दुष्टहरू अत्यन्त रिसाएर भगवान्लाई समात्ने इच्छाले 'यसलाई समात, बाँध' भन्न लागे।

**अथ तान् दुरभिप्रायान् विलोक्य बलकेशवौ।**

**क्रुद्धौ धन्वन आदाय शकले तांश्च जघ्नतुः॥ २०॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**दुरभिप्रायान्** = कुविचार भएका
**तान्** = ती दुष्टहरूलाई
**विलोक्य** = आफूमाथि आइलाग्न थालेको देखेर
**क्रुद्धौ** = रिसाएका
**बलकेशवौ** = बलराम र श्रीकृष्णले
**धन्वनः** = भाँचिएको धनुका
**शकले** = दुई ओटा टुक्रा
**आदाय** = लिएर
**तान् च** = ती दुष्टहरूलाई
**जघ्नतुः** = मार्नुभयो

**वाक्यार्थ–** त्यसपछि कुविचार भएका दुष्टहरू आफूमाथि आइलाग्न थालेको देखेर भगवान्

बलराम र श्रीकृष्ण दुबै भाइ अत्यन्त रिसाउनुभयो र उहाँहरूले भाँचिएको धनुका एक-एक ओटा टुक्रा लिएर ती दुष्टहरूलाई मार्नुभयो।

**बलं च कंसप्रहितं हत्वा शालामुखात्ततः।**

**निष्क्रम्य चेरतुर्हृष्टौ निरीक्ष्य पुरसम्पदः॥ २१॥**

**पदार्थ-**

**ततः** = त्यसपछि
**कंसप्रहितं** = कंसद्वारा पठाइएको
**बलं च** = सेनालाई पनि
**हत्वा** = मारेर
**शालामुखात्** = धनुषशालाको मूल द्वारबाट
**निष्क्रम्य** = निस्किएर
**पुरसम्पदः** = नगरको शोभा
**निरीक्ष्य** = हेर्दै
**हृष्टौ** = प्रसन्न भएका दुई भाइ
**चेरतुः** = घुम्न लाग्नुभयो

**वाक्यार्थ–** त्यसपछि कंसले पठाएको सेनालाई समेत मारी दुबै भाइ यज्ञशालाको मूलद्वारबाट बाहिर निस्कनुभयो र नगरको शोभा हेर्दै प्रसन्न भएर यताउति घुम्न लाग्नुभयो।

**तयोस्तदद्भुतं वीर्यं निशाम्य पुरवासिनः।**

**तेजः प्रागल्भ्यं रूपं च मेनिरे विबुधोत्तमौ॥ २२॥**

**पदार्थ-**

**पुरवासिनः** = नगरवासीहरूले
**तयोः** = ती दुई भाइको
**तत्** = त्यो
**अद्भुतं** = अद्भुत
**वीर्यं** = पराक्रम
**निशाम्य** = सुनेर
**तेजः** = तेज
**प्रागल्भ्यं** = साहस (र)
**रूपं च** = रूप (देखेर)
(ती दुई भाइलाई)
**विबुधोत्तमौ** = श्रेष्ठ देवता
**मेनिरे** = माने

**वाक्यार्थ–** ती दुई भाइको अद्भुत पराक्रम सुनेर तथा तेज, साहस र रूपलाई देखेर नगरवासीहरूले यी दुई अवश्य पनि श्रेष्ठ देवता हुन् भन्ने निश्चय गरे।

**तयोर्विचरतोः स्वैरमादित्योऽस्तमुपेयिवान्।**

**कृष्णरामौ वृतौ गोपैः पुराच्छकटमीयतुः॥ २३॥**

**पदार्थ-**

**तयोः** = ती दुई भाइले
**स्वैरम्** = स्वेच्छानुसार
**विचरतोः** = घुम्दा-घुम्दै
**आदित्यः** = सूर्य
**अस्तं** = अस्ताचलमा
**उपेयिवान्** = पुगे (त्यसपछि)
**गोपैः** = गोपहरूद्वारा
**वृतौ** = घेरिएका
**कृष्णरामौ** = भगवान् श्रीकृष्ण र बलराम
**पुरात्** = नगरबाट
**शकटम्** = गाडाहरू राखेको ठाउँमा
**ईयतुः** = आउनुभयो

**वाक्यार्थ–** दुई भाइ स्वतन्त्रतापूर्वक घुम्दा-घुम्दै सूर्य अस्ताचलमा पुगे। त्यसपछि गोपहरूद्वारा घेरिनुभएका भगवान् श्रीकृष्ण र बलराम नगरबाट गाडाहरू राखेको ठाउँमा आउनुभयो।

**गोप्यो मुकुन्दविगमे विरहातुरा या**
**आशासताशिष ऋता मधुपुर्यभूवन्।**
**सम्पश्यतां पुरुषभूषणगात्रलक्ष्मीं**
**हित्वेतरान् नु भजतश्चकमेऽयनं श्रीः॥ २४॥**

**पदार्थ–**
**मुकुन्दविगमे** = भगवान् श्रीकृष्ण (व्रजभूमिबाट) हिँड्ने वेलामा
**विरहातुराः** = (भगवान्सँगको) बिछोडको पीडाले आत्तिएका
**गोप्यः** = गोपिनीहरूले
**याः** = जुन
**आशिषः** = आशीर्वादहरू
**आशासत** = दिएका (इच्छाएका) थिए (ती)
**मधुपुरि** = मथुरामा
**पुरुषभूषणगात्रलक्ष्मीं** = उत्तम पुरुष भगवान् श्रीकृष्णको शरीरको कान्तिलाई
**सम्पश्यतां** = हेर्नेहरूका लागि
**ऋताः** = सत्य
**अभूवन्** = भए
(जुन भगवान्को शरीरलाई)
**नु** = निश्चय नै
**श्रीः** = लक्ष्मीजीले
**भजतः** = आफूलाई चाहने
**इतरान्** = अरू (इन्द्र आदि)लाई
**हित्वा** = छोडेर
**अयनं** = आश्रयस्थान
**चकमे** = बनाउनुभएको थियो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण व्रजभूमिबाट हिँड्ने समयमा बिछोडको पीडाले आत्तिएका गोपिनीहरूले (मथुरावासीहरूको सौभाग्यका सम्बन्धमा) जे-जे आशीर्वाद दिएका थिए (भागवत, १०/३९/२३-२५), ती सबै नै भगवान्को शरीरको दर्शन पाउनेहरूका लागि सत्य भए। किन नहोस्, जुन शरीरलाई आफूलाई चाहने अन्य देवताहरूलाई छाडेर लक्ष्मीजीले आश्रयस्थान बनाउनुभएको थियो।

**अवनिक्ताङ्घ्रियुगलौ भुक्त्वा क्षीरोपसेचनम्।**
**ऊषतुस्तां सुखं रात्रिं ज्ञात्वा कंसचिकीर्षितम्॥ २५॥**

**पदार्थ–**
**अवनिक्ताङ्घ्रियुगलौ** = पाउहरू धुनुभएका श्रीकृष्ण र बलराम
**क्षीरोपसेचनम्** = दुधबाट बनेका परिकारहरू
**भुक्त्वा** = भोजन गरेर
**कंसचिकीर्षितम्** = कंसको योजनालाई
**ज्ञात्वा** = बुझेर
**तां** = त्यो
**रात्रिं** = रात
**सुखं** = आनन्दले
**ऊषतुः** = बस्नुभयो

**वाक्यार्थ–** त्यसपछि हातपाउ धोएका श्रीकृष्ण र बलरामले दुधमा पकाएका विभिन्न परिकारको भोजन गर्नुभयो र कंसको योजना बुझी त्यो रात त्यहीँ आनन्दले बस्नुभयो।

**कंसस्तु धनुषो भङ्गं रक्षिणां स्वबलस्य च।**
**वधं निशम्य गोविन्दरामविक्रीडितं परम्॥ २६॥**
**दीर्घप्रजागरो भीतो दुर्निमित्तानि दुर्मतिः।**
**बह्वन्यचष्टोभयथा मृत्योर्दौत्यकराणि च॥ २७॥**

**पदार्थ–**
**धनुषः** = धनुको
**भङ्गं** = भङ्ग
**रक्षिणां** = रक्षकहरूको
**स्वबलस्य** = आफ्ना सेनाको
**वधं च** = विनाश पनि
**परम्** = केवल
**गोविन्दरामविक्रीडितं** = श्रीकृष्ण र बलरामलाई ख्याल-ख्याल भयो भन्ने
**निशम्य** = सुनेर
**भीतः** = डराएको
**दुर्मतिः** = खराब बुद्धि भएको
**दीर्घप्रजागरः** = राति अबेरसम्म निद्रा नलागेर छट्पटिएको
**कंसः तु** = कंसले चाहिँ
**उभयथा** = जाग्रत् र स्वप्न दुबै अवस्थामा
**मृत्योः च** = मृत्युको
**दौत्यकराणि** = सूचना दिने
**बहूनि** = अनेक प्रकारका
**दुर्निमित्तानि** = अपशकुनहरू
**अचष्ट** = देख्यो

**वाक्यार्थ–** श्रीकृष्ण र बलरामले धनु भाँचेको र रक्षक तथा अन्य सेनालाई ख्याल-ख्यालमा विनाश गरेको कुरा सुनेर त्यो दुर्बुद्धि कंसलाई राति अबेरसम्म पनि निद्रा परेन। जाग्रत् र स्वप्न दुबै समयमा उसले मृत्युको सूचना दिने अनेक प्रकारका अपशकुनहरू देख्यो।

**अदर्शनं स्वशिरसः प्रतिरूपे च सत्यपि।**
**असत्यपि द्वितीये च द्वैरूप्यं ज्योतिषां तथा॥ २८॥**

**पदार्थ–**
(ऐना, पोखरी आदिमा)
**प्रतिरूपे** = आफ्नो प्रतिबिम्ब
**सति अपि** = भएर पनि
**स्वशिरसः** = आफ्नो टाउको
**अदर्शनं च** = नदेख्नु
**तथा** = त्यसै गरी
**द्वितीये** = दुई ओटा
**असति अपि** = नभए तापनि
**ज्योतिषां** = चन्द्र, ताराहरूको
**द्वैरूप्यं च** = दुईरूप (देख्नु आदि अपशकुन हुन लाग्यो)

**वाक्यार्थ–** कंसले ऐना, जल आदिमा परेको आफ्नो शरीरको प्रतिबिम्बमा टाउको देख्न छाड्यो भने दुई ओटा नभए तापनि चन्द्रमा, तारा आदिलाई दुई-दुई ओटा देख्न थाल्यो।

**छिद्रप्रतीतिश्छायायां प्राणघोषानुपश्रुतिः।**
**स्वर्णप्रतीतिर्वृक्षेषु स्वपदानामदर्शनम्॥ २९॥**

**पदार्थ–**
**छायायां** = आफ्नो छायामा
**छिद्रप्रतीतिः** = प्वाल परेको देख्नु
**प्राणघोषानुपश्रुतिः** = प्राण (सास)को आवाज नसुन्नु

**वृक्षेषु** = रुखहरूमा
**स्वर्णप्रतीतिः** = सुन जस्तो पहेँलो देख्नु
**स्वपदानाम्** = आफ्ना पदचिह्नहरू
**अदर्शनम्** = नदेख्नु (आदि अपशकुन हुन थाल्यो)

**वाक्यार्थ–** उसले आफ्नो छायामा प्वालहरू देख्न थाल्यो, प्राण (सास)को आवाज सुन्न छाड्यो, रुखहरूको रङ्ग सुन जस्तो पहेँलो देख्न थाल्यो र आफ्ना पदचिह्नहरू देख्न छाड्यो।

**स्वप्ने प्रेतपरिष्वङ्गः खरयानं विषादनम्।**
**यायान्नलदमाल्येकस्तैलाभ्यक्तो दिगम्बरः॥ ३०॥**

**पदार्थ–**
**स्वप्ने** = सपनामा (त्यस कंसले)
**प्रेतपरिष्वङ्गः** = प्रेतलाई अँगालो मारेको
**खरयानं** = गधामा चढेर हिँडेको
**विषादनम्** = विष खाएको
**नलदमाली** = जटामसीको माला लगाएको
**तैलाभ्यक्तः** = शरीरभरि तेल लगाएर
**दिगम्बरः** = नाङ्गै
**एकः** = एक्लै
**यायात्** = हिँडिरहेको देख्यो

**वाक्यार्थ–** स्वप्नावस्थामा कंसले आफूले प्रेतलाई अँगालो मारेको, गधामा चढेको, विष पिएको, जटामसीको माला लगाएको र शरीरभरि तेल दलेर नाङ्गै एक्लै हिँडिरहेको देख्यो।

**अन्यानि चेत्थंभूतानि स्वप्नजागरितानि च।**
**पश्यन् मरणसन्त्रस्तो निद्रां लेभे न चिन्तया॥ ३१॥**

**पदार्थ–**
**स्वप्नजागरितानि** = स्वप्न र जाग्रत् अवस्थामा
**इत्थंभूतानि च** = यसप्रकारका अपशकुन र
**अन्यानि** = अरू नराम्रा अपशकुनहरू
**पश्यन्** = देखेर
**मरणसन्त्रस्तः** = मृत्युदेखि डराएको कंसले
**चिन्तया** = चिन्ताले गर्दा
**निद्रां** = निद्रालाई
**न लेभे** = प्राप्त गर्न सकेन

**वाक्यार्थ–** स्वप्न र जाग्रत् अवस्थामा यसप्रकारका र यस्तै किसिमका अरू पनि अनेक अपशकुनहरू देखेर मृत्युदेखि डराएको कंसले चिन्ताका कारण रातमा निद्रा पनि पाएन।

**व्युष्टायां निशि कौरव्य सूर्ये चाद्भ्यः समुत्थिते।**
**कारयामास वै कंसो मल्लक्रीडामहोत्सवम्॥ ३२॥**

**पदार्थ–**
**कौरव्य** = हे कुरुवंशी परीक्षित्
**निशि** = रात
**व्युष्टायां** = बितेपछि
**अद्भ्यः** = पूर्व समुद्रबाट
**सूर्ये च** = सूर्य
**समुत्थिते** = माथि उठेपछि
**वै** = निश्चय नै
**कंसः** = कंसले
**मल्लक्रीडामहोत्सवम्** = मल्लक्रीडारूप महोत्सव
**कारयामास** = गरायो

**वाक्यार्थ–** हे परीक्षित् ! रात बितेर पूर्वदिशामा सूर्य उदाएपछि कंसले मल्लक्रीडा महोत्सव आरम्भ गरायो।

**आनर्चुः पुरुषा रङ्गं तूर्यभेर्यश्च जघ्निरे।**

**मञ्चाश्चालङ्कृताः स्रग्भिः पताकाचैलतोरणैः॥ ३३॥**

पदार्थ–
**पुरुषाः** = कंसका मानिसहरूले
**रङ्गं** = मल्लक्रीडास्थललाई
**आनर्चुः** = पूजा गरे (सफासुग्घर पारेर सजाए)
**तूर्यभेर्यः च** = तुरही, भेरी आदि
**जघ्निरे** = बजाए
**स्रग्भिः** = पुष्पमालाहरूद्वारा
**पताकाचैलतोरणैः** = झन्डा, ध्वजा र तोरणहरूद्वारा
**मञ्चाः च** = मञ्चहरू पनि
**अलङ्कृताः** = सिँगारिए

**वाक्यार्थ–** कंसका मानिसहरूले मल्लक्रीडास्थललाई सफासुग्घर पारी तुरही, भेरी आदि बाजा बजाउन लागे। मञ्चहरू पुष्पमाला, झन्डा, ध्वजा र तोरणहरूद्वारा सिँगारिए।

**तेषु पौरा जानपदा ब्रह्मक्षत्रपुरोगमाः।**

**यथोपजोषं विविशू राजानश्च कृतासनाः॥ ३४॥**

पदार्थ–
**तेषु** = ती मञ्चहरूमा
**पौराः** = नगरवासी (तथा)
**जानपदाः** = ग्रामवासी
**ब्रह्मक्षत्रपुरोगमाः** = ब्राह्मण, क्षत्रिय आदि नागरिकहरू
**यथोपजोषं** = यथास्थानमा
**विविशूः** = बसे
**राजानः च** = राजाहरूले पनि
**कृतासनाः** = आसन ग्रहण गरे

**वाक्यार्थ–** ती मञ्चहरूमा नगरवासी एवं ग्रामवासी ब्राह्मण, क्षत्रिय आदि नागरिकहरू यथास्थानमा बसे। त्यसै गरी राजाहरूले पनि आ–आफ्नो आसन ग्रहण गरे।

**कंसः परिवृतोऽमात्यै राजमञ्च उपाविशत्।**

**मण्डलेश्वरमध्यस्थो हृदयेन विदूयता॥ ३५॥**

पदार्थ–
**अमात्यैः** = मन्त्रीहरूद्वारा
**परिवृतः** = घेरिएको
**मण्डलेश्वरमध्यस्थः** = साना–साना राजाहरूको बीचमा रहेको
**कंसः** = कंस
**विदूयता** = दुःखी भएको
**हृदयेन** = मनले (मन लिएर)
**राजमञ्चे** = राजसिंहासनमा
**उपाविशत्** = बस्यो

**वाक्यार्थ–** मन्त्रीहरूद्वारा घेरिएको र भित्रभित्रै दुःखी भएको कंस राजाहरूका बीचमा रहेको राजसिंहासनमा बस्यो।

**वाद्यमानेसु तूर्येषु मल्लतालोत्तरेषु च।**

**मल्लाः स्वलङ्कृताः दृप्ताः सोपाध्यायाः समाविशन्॥ ३६॥**

**पदार्थ–**
**मल्लतालोत्तरेषु** = मल्लहरूले आ–आफ्नो ताल ठोकेपछि
**तूर्येषु च** = तुरही
**वाद्यमानेसु** = बज्न लागेपछि
**स्वलङ्कृताः** = सजिसजाउ भएका
**दृप्ताः** = घमन्डले चुर भएका
**सोपाध्यायाः** = आफ्ना प्रशिक्षकहरूले सहित भएका
**मल्लाः** = योद्धाहरू
**समाविशन्** = युद्धभूमिमा प्रवेश गरे

**वाक्यार्थ–** मल्लहरूले ताल ठोकेपछि र तुरही आदि बाजा बज्न लागेपछि घमन्डले चुर भएका पहलमानहरू सजिसजाउ भएर आ–आफ्ना प्रशिक्षकहरूका साथमा युद्धभूमिमा प्रवेश गरे।

**चाणूरो मुष्टिकः कूटः शलस्तोशल एव च।**
**त आसेदुरुपस्थानं वल्गुवाद्यप्रहर्षिताः॥ ३७॥**

**पदार्थ–**
**वल्गुवाद्यप्रहर्षिताः** = बाजाको सुमधुर ध्वनि सुनेर हर्षित भएका
**चाणूरः** = चाणूर
**मुष्टिकः** = मुष्टिक
**कूटः** = कूट
**शलः** = शल (र)
**तोशलः एव च** = तोशल पनि
**ते** = ती पहलमानहरू
**उपस्थानं** = रङ्गस्थलमा
**आसेदुः** = बसे

**वाक्यार्थ–** बाजाको सुमधुर ध्वनि सुनेर हर्षित भएका चाणूर, मुष्टिक, कूट, शल र तोशल आदि पहलमानहरू रङ्गस्थलमा बसे।

**नन्दगोपादयो गोपा भोजराजसमाहुताः।**
**निवेदितोपायनास्त एकस्मिन् मञ्च आविशन्॥ ३८॥**

**पदार्थ–**
(त्यसपछि)
**भोजराजसमाहुताः** = भोजराज कंसद्वारा बोलाइएका
**ते** = ती
**निवेदितोपायनाः** = राजालाई उपहार (भेटी) चढाएका
**नन्दगोपादयः** = नन्द गोप आदि गरिएका
**गोपाः** = गोपहरू
**एकस्मिन्** = एउटा
**मञ्चे** = मञ्चमा
**आविशन्** = प्रवेश गरे

**वाक्यार्थ–** त्यसपछि कंसद्वारा बोलाइएका नन्द आदि गोपहरू आफूले ल्याएको उपहार (भेटी) राजालाई चढाएर एउटा मञ्चमा गएर बसे।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**
**मल्लरङ्गोपवर्णनं नाम द्विचत्वारिंशोऽध्यायः॥ ४२॥**

# अथ त्रिचत्वारिंशोऽध्यायः

## कुवलयापीड हात्तीको वध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ कृष्णश्च रामश्च कृतशौचौ परन्तप।**

**मल्लदुन्दुभिनिर्घोषं श्रुत्वा द्रष्टुमुपेयतुः॥ १॥**

**पदार्थ–**
**परन्तप** = हे शत्रुपीडक परीक्षित्
**अथ** = त्यसपछि
**कृतशौचौ** = स्नानादि नित्यकर्म समाप्त गर्नुभएका
**कृष्णः च** = भगवान् श्रीकृष्ण र
**रामः च** = बलराम पनि
**मल्लदुन्दुभिनिर्घोषं** = पहलमानको र दुन्दुभिको आवाज
**श्रुत्वा** = सुनेर
**द्रष्टुम्** = (मल्लयुद्ध) हेर्नका लागि
**उपेयतुः** = नजिक जानुभयो

**वाक्यार्थ–** हे परीक्षित्! त्यसपछि स्नानादि नित्यकर्म समाप्त गर्नुभएका भगवान् श्रीकृष्ण र बलराम पनि पहलमानको खलबल एवं दुन्दुभिको आवाज सुनेर मल्लयुद्ध हेर्नका लागि रङ्गभूमि नजिकै जानुभयो।

**रङ्गद्वारं समासाद्य तस्मिन्नागमवस्थितम्।**

**अपश्यत् कुवलयापीडं कृष्णोऽम्बष्ठप्रचोदितम्॥ २॥**

**पदार्थ–**
**रङ्गद्वारं** = रङ्गमञ्चको द्वारमा
**समासाद्य** = पुगेर
**कृष्णः** = भगवान् श्रीकृष्णले
**तस्मिन्** = त्यहाँ
**अम्बष्ठप्रचोदितम्** = माउतेको निर्देशन अनुसार
**अवस्थितम्** = खडा भएर रहेको
**कुवलयापीडं** = कुवलयापीड नाम गरेको
**नागम्** = हात्तीलाई
**अपश्यत्** = देख्नुभयो

**वाक्यार्थ–** रङ्गमञ्चको द्वारमा पुगेपछि भगवान् श्रीकृष्णले त्यहाँ माउतेको निर्देशन अनुसार खडा भई रहेको कुवलयापीड नाम गरेको हात्तीलाई देख्नुभयो।

**बद्ध्वा परिकरं शौरिः समुह्य कुटिलालकान्।**

**उवाच हस्तिपं वाचा मेघनादगभीरया॥ ३॥**

**पदार्थ–**
**शौरिः** = (शूरका वंशज) भगवान् श्रीकृष्णले
**परिकरं** = उत्तरीय वस्त्रलाई
**बद्ध्वा** = कम्मरमा बाँधेर
**कुटिलालकान्** = घुम्रिएका कपाललाई
**समुह्य** = समेटेर
**मेघनादगभीरया** = मेघको गर्जन

जस्तो गम्भीर
**वाचा** = वाणीले
**हस्तिपं** = माउतेलाई
**उवाच** = भन्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले उत्तरीय वस्त्रलाई कम्मरमा बाँधेर अनि घुम्रिएको कपाललाई समेटेर मेघ गर्जे जस्तो गम्भीर वाणीले त्यस माउतेलाई भन्नुभयो।

**अम्बष्ठाम्बष्ठ मार्गं नौ देह्यपक्रम मा चिरम्।**
**नो चेत् सकुञ्जरं त्वाद्य नयामि यमसादनम्॥ ४॥**

**पदार्थ–**
**अम्बष्ठ अम्बष्ठ** = ए माउते, ए माउते
**नौ** = हामी दुई जनालाई
**मार्गं** = बाटो
**देहि** = दे
**अपक्रम** = हट्
**मा चिरम्** = ढिलो नगर्
**नो चेत्** = होइन भने
**अद्य** = आज
**सकुञ्जरं** = हात्तीले सहित
**त्वा** = तँलाई
**यमसादनम्** = यमराजको घरमा
**नयामि** = पुर्‍याइदिन्छु

**वाक्यार्थ–** ए माउते ! ए माउते ! त्यहाँबाट छिटो हटेर हामी दुई जनालाई भित्र जाने बाटो दे। यसमा ढिलो नगर्, होइन भने आज म हात्ती सहित तँलाई यमराजकहाँ पुर्‍याइदिन्छु।

**एवं निर्भर्त्सितोऽम्बष्ठः कुपितः कोपितं गजम्।**
**चोदयामास कृष्णाय कालान्तकयमोपमम्॥ ५॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**निर्भर्त्सितः** = धम्क्याइएको
**कुपितः** = अत्यन्त रिसाएको
**अम्बष्ठः** = माउतेले
**कालान्तकयमोपमम्** = काल, मृत्यु तथा यमराजसमान
**कोपितं** = अत्यन्त रिसाएको
**गजम्** = हात्तीलाई
**कृष्णाय** = भगवान् श्रीकृष्णतिर
**चोदयामास** = बढायो

**वाक्यार्थ–** यसप्रकार श्रीकृष्णद्वारा धम्क्याइएकाले अति रिसाएको त्यस माउतेले काल, मृत्यु र यमराजसमान अत्यन्त रिसाएको हात्तीलाई श्रीकृष्णतिर बढायो।

**करीन्द्रस्तमभिद्रुत्य करेण तरसाग्रहीत्।**
**कराद् विगलितः सोऽमुं निहत्याङ्घ्रिष्वलीयत॥ ६॥**

**पदार्थ–**
**करीन्द्रः** = हात्तीहरूमा श्रेष्ठ कुवलयापीड हात्तीले
**तरसा** = वेगले
**अभिद्रुत्य** = (श्रीकृष्णको) नजिक पुगेर
**तम्** = उहाँलाई
**करेण** = सुँडले
**अग्रहीत्** = बेर्‍यो (तर)
**करात्** = सुँडबाट
**विगलितः** = फुत्किनुभएका
**सः** = उहाँले
**अमुं** = त्यस हात्तीलाई
**निहत्य** = (मुक्का) हानेर
**अङ्घ्रिषु** = त्यसैको खुट्टाका

बीचमा | **अवलीयत** = लुक्नुभयो

**वाक्यार्थ–** वेगले अगाडि पुगेको त्यो ठुलो हात्तीले झटपट आफ्नो सुँडले भगवान्‌लाई बेर्‍यो, तर तत्काल सुँडबाट फुत्किनुभएका भगवान् श्रीकृष्णले त्यस हात्तीलाई मुक्का प्रहार गर्नुभयो र त्यसैका खुट्टाका बीचमा गएर लुक्नुभयो।

**सङ्क्रुद्धस्तमचक्षाणो घ्राणदृष्टिः स केशवम्।**
**परामृशत् पुष्करेण स प्रसह्य विनिर्गतः॥ ७॥**

**पदार्थ–**
**तम्** = उहाँ (श्रीकृष्ण)लाई
**अचक्षाणः** = नदेखनाले
**सङ्क्रुद्धः** = अत्यन्त रिसाएको
**घ्राणदृष्टिः** = सुँघेरै वस्तुलाई पत्ता लगाउने
**सः** = त्यो कुवलयापीडले
**पुष्करेण** = सुँडले
**केशवम्** = श्रीकृष्णलाई
**परामृशत्** = समात्यो (तर)
**सः** = उहाँ (भगवान् श्रीकृष्ण)
**प्रसह्य** = बलपूर्वक
**विनिर्गतः** = निक्लनुभयो (फुत्कनुभयो)

**वाक्यार्थ–** श्रीकृष्णलाई आफ्नो अगाडि नदेख्दा कुवलयापीड अत्यन्त रिसायो र सुँघेर वस्तु पत्ता लगाउने त्यो हात्तीले सुँडले भगवान्‌लाई समात्यो, तर पनि भगवान् श्रीकृष्ण बलपूर्वक फुत्कनुभयो।

**पुच्छे प्रगृह्यातिबलं धनुषः पञ्चविंशतिम्।**
**विचकर्ष यथा नागं सुपर्ण इव लीलया॥ ८॥**

**पदार्थ–**
**यथा** = जसरी
**सुपर्णः** = गरुडले
**नागं** = सर्पलाई
**लीलया इव** = ख्याल-ख्यालमैं (घिसार्छ) त्यसै गरी
**अतिबलं** = अति बलवान् त्यस हात्तीको
**पुच्छे** = पुच्छरमा
**प्रगृह्य** = समातेर
**धनुषः** = धनुको
**पञ्चविंशतिम्** = पच्चीस परिमाण (सय हात पर)
**विचकर्ष** = घिसार्नुभयो

**वाक्यार्थ–** जसरी गरुडले ख्याल-ख्यालमैं सर्पलाई घिसार्छ त्यसै गरी भगवान्‌ले पनि त्यस अतिबलशाली हात्तीलाई पुच्छरमा समातेर ख्याल-ख्यालमैं पच्चीस धनु (सय हात) परसम्म घिसार्नुभयो।

**स पर्यावर्तमानेन सव्यदक्षिणतोऽच्युतः।**
**बभ्राम भ्राम्यमाणेन गोवत्सेनेव बालकः॥ ९॥**

**पदार्थ–**
**सः अच्युतः** = उहाँ भगवान् श्रीकृष्ण
**भ्राम्यमाणेन** = घुमिरहेको
**गोवत्सेन** = गाईको बाच्छोसँग
**बालकः इव** = बालक खेले झैं

**सव्यदक्षिणतः** = कहिले दाहिने र कहिले देब्रे
**पर्यावर्तमानेन** = घुम्दै गरेको त्यस हात्तीको (पुच्छर समातेर)
**बभ्राम** = घुम्न (खेल्न) लाग्नुभयो

**वाक्यार्थ–** घुमिरहेको गाईको बाच्छोसँग बालक जसरी घुमीघुमी खेल्छ त्यसै गरी पुच्छर समात्नाले कहिले दाहिने र कहिले देब्रे घुम्दै गरेको त्यस हात्तीसँग भगवान् श्रीकृष्ण घुम्न लाग्नुभयो।

**ततोऽभिमुखमभ्येत्य पाणिनाहत्य वारणम्।**
**प्राद्रवन् पातयामास स्पृश्यमानः पदे पदे ॥ १० ॥**

पदार्थ–
**ततः** = त्यसपछि (भगवान् श्रीकृष्ण)
**अभिमुखम्** = हात्तीको अगाडि
**अभ्येत्य** = आएर
**पाणिना** = हात (मुड्की)ले
**वारणम्** = हात्तीलाई
**आहत्य** = हिर्काएर
**स्पृश्यमानः** = छुन-छुन लागे झैँ गरी
**प्राद्रवन्** = दौडिँदै
**पदे पदे** = पद-पदमा
**पातयामास** = लडाउनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्ण हात्तीको अगाडि आउनुभयो र उहाँले मुड्कीले त्यसलाई हिर्काएर त्यसले छोला-छोला झैँ गरी (त्यसलाई झुक्याउँदै) दौडिएर पद-पदमा त्यसलाई लडाउनुभयो।

**स धावन् क्रीडया भूमौ पतित्वा सहसोत्थितः।**
**तं मत्वा पतितं क्रुद्धो दन्ताभ्यां सोऽहनत् क्षितिम् ॥ ११ ॥**

पदार्थ–
**सः** = उहाँ (श्रीकृष्ण)
**धावन्** = दौडिरहँदा
**क्रीडया** = ख्याल-ख्यालमा
**भूमौ** = जमिनमा
**पतित्वा** = लडे झैँ गरेर
**सहसा** = झटपट
**उत्थितः** = उठ्नुभयो
**क्रुद्धः** = अत्यन्त रिसाएको
**सः** = त्यो हात्तीले
**तं** = उहाँ (भगवान् श्रीकृष्ण) लाई
**पतितं** = भुइँमा लडेको
**मत्वा** = सम्झेर
**दन्ताभ्यां** = आफ्ना दाह्राले
**क्षितिम्** = पृथिवीमा
**अहनत्** = प्रहार गर्‍यो

**वाक्यार्थ–** दौडिरहँदा श्रीकृष्ण भुइँमा लडे झैँ गरी झटपट उठेर भाग्नुभयो, तर त्यस हात्तीले श्रीकृष्ण जमिनमा लडेको सम्झी अत्यन्त रिसाएर आफ्ना दाह्राले पृथिवीमा प्रहार गर्‍यो।

**स्वविक्रमे प्रतिहते कुञ्जरेन्द्रोऽत्यमर्षितः।**
**चोद्यमानो महामात्रैः कृष्णमभ्यद्रवद् रुषा ॥ १२ ॥**

पदार्थ–
**स्वविक्रमे** = आफ्नो पराक्रम
**प्रतिहते** = व्यर्थ भएपछि

**अत्यमर्षितः** = अति रिसाएको
**कुञ्जरेन्द्रः** = गजराज कुवलयापीड
**महामात्रैः** = माउतेद्वारा
**चोद्यमानः** = प्रेरित भएर
**रुषा** = क्रोधले
**कृष्णम्** = श्रीकृष्णलाई (मार्न)
**अभ्यद्रवत्** = दौडियो

**वाक्यार्थ–** त्यसरी आफ्नो पराक्रम खेर गएको देखेर त्यो हात्ती ज्यादै रिसायो। त्यसपछि माउतेले सुऱ्याएका कारण झनै रिसाएर श्रीकृष्णलाई मार्ने उद्देश्यले ऊ दौडियो।

**तमापतन्तमासाद्य भगवान् मधुसूदनः।**
**निगृह्य पाणिना हस्तं पातयामास भूतले ॥ १३ ॥**

**पदार्थ–**
**भगवान्** = ऐश्वर्यशाली
**मधुसूदनः** = मधुसूदन श्रीकृष्णले
**तम्** = त्यो हात्ती
**आपतन्तम्** = आइलागेको
**आसाद्य** = देखेर
**पाणिना** = हातले
**हस्तं** = त्यसको सुँड
**निगृह्य** = च्याप्प समाएर (त्यसलाई)
**भूतले** = भुइँमा
**पातयामास** = पछार्नुभयो

**वाक्यार्थ–** ऐश्वर्यशाली श्रीकृष्णले त्यो हात्ती आइलागेको देखेर त्यसको सुँडलाई च्याप्प समातेर त्यसलाई भुइँमा पछार्नुभयो।

**पतितस्य पदाक्रम्य मृगेन्द्र इव लीलया।**
**दन्तमुत्पाट्य तेनेभं हस्तिपांश्चाहनद्धरिः ॥ १४ ॥**

**पदार्थ–**
**हरिः** = भगवान् श्रीकृष्णले
**लीलया** = ख्याल–ख्यालमै
**पदा** = लात्ताले
**आक्रम्य** = आक्रमण गरेर (हानेर)
**मृगेन्द्रः इव** = सिंहले झैँ
**पतितस्य** = लडेको त्यस हात्तीको
**दन्तम्** = दाह्रा
**उत्पाट्य** = उखेलेर
**तेन** = त्यसैले
**इभं** = हात्तीलाई र
**हस्तिपान् च** = माउतेहरूलाई पनि
**अहनत्** = मार्नुभयो

**वाक्यार्थ–** त्यसपछि श्रीकृष्णले लडेको हात्तीमाथि सिंह झैँ चढेर लात्ताले हानी त्यसका दाह्रा उखेल्नुभयो र त्यसैले हिर्काएर माउतेहरू र हात्तीलाई मार्नुभयो।

**मृतकं द्विपमुत्सृज्य दन्तपाणिः समाविशत्।**
**अंसन्यस्तविषाणोऽसृङ्मदबिन्दुभिरङ्कितः ॥**
**विरूढस्वेदकणिकावदनाम्बुरुहो बभौ ॥ १५ ॥**

**पदार्थ–**
**मृतकं** = मरेको
**द्विपम्** = हात्तीलाई

**उत्सृज्य** = छोडेर
**दन्तपाणिः** = हात्तीको दाह्रा हातमा लिनुभएका भगवान् श्रीकृष्ण
**समाविशत्** = मल्लयुद्धस्थलमा प्रवेश गर्नुभयो (त्यस वेला)
**अंसन्यस्तविषाणः** = काँधमा हात्तीको दाह्रा बोक्नुभएका
**असृङ्‌मदबिन्दुभिः** = चुहिरहेका रगत र मदविन्दुहरूले (शरीर)
**अङ्कितः** = रङ्गिएका
**विरूढस्वेदकणिकावदनाम्बुरुहः** = पसिनाका बिन्दु लतपत भएको मुखकमल भएका श्रीकृष्ण
**बभौ** = अति शोभायमान देखिनुभयो

**वाक्यार्थ–** मरेको हात्तीलाई उहाँले त्यहीँ छाडिदिनुभयो र हातमा हात्तीको दाह्रा लिनुभएका भगवान् श्रीकृष्ण मल्लयुद्धस्थलमा प्रवेश गर्नुभयो। त्यस वेला काँधमा हात्तीको दाह्रा राख्दा चुहिरहेका रगत र मदबिन्दुहरूले शरीर रङ्गिएको र पसिनाका बिन्दु लतपत भएको मुखकमल भएका श्रीकृष्ण अति शोभायमान देखिनुभयो।

**वृतौ गोपैः कतिपयैर्बलदेवजनार्दनौ।**
**रङ्गं विविशतू राजन् गजदन्तवरायुधौ॥ १६॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**गजदन्तवरायुधौ** = कुवलयापीड हात्तीको दाह्रारूप उत्कृष्ट हतियार लिनुभएका
**कतिपयैः** = केही
**गोपैः** = गोपहरूद्वारा
**वृतौ** = घेरिनुभएका
**बलदेवजनार्दनौ** = बलरामजी र भगवान् श्रीकृष्ण
**रङ्गं** = रङ्गभूमिमा
**विविशतुः** = प्रवेश गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! हातमा हात्तीको दाह्रारूपी उत्कृष्ट हतियार लिनुभएका बलराम र भगवान् श्रीकृष्ण केही गोपहरूका साथमा रङ्गभूमिमा प्रवेश गर्नुभयो।

**मल्लानामशनिर्नृणां नरवरः स्त्रीणां स्मरो मूर्तिमान्**
**गोपानां स्वजनोऽसतां क्षितिभुजां शास्ता स्वपित्रोः शिशुः।**
**मृत्युर्भोजपतेर्विराडविदुषां तत्त्वं परं योगिनां**
**वृष्णीनां परदेवतेति विदितो रङ्गं गतः साग्रजः॥ १७॥**

**पदार्थ–**
**साग्रजः** = दाजु बलरामले सहित
**रङ्गं** = रङ्गभूमिमा
**गतः** = उपस्थित हुनुभएका भगवान् श्रीकृष्ण
**मल्लानां** = पहलमानहरूका लागि
**अशनिः** = वज्रसमान
**नृणां** = सामान्य मानिसका लागि
**नरवरः** = श्रेष्ठ मानिस
**स्त्रीणां** = स्त्रीहरूका लागि
**मूर्तिमान्** = शरीरधारी
**स्मरः** = कामदेव
**गोपानां** = गोपहरूका लागि
**स्वजनः** = आफन्त
**असतां** = दुष्ट
**क्षितिभुजां** = राजाहरूका लागि
**शास्ता** = शासक
**स्वपित्रोः** = आफ्ना बाबुआमाका

लागि
**शिशुः** = बालक
**भोजपतेः** = भोजराज कंसका लागि
**मृत्युः** = मृत्यु
**अविदुषां** = अज्ञानीहरूका लागि
**विराट्** = अपरिमेय रूपको
**योगिनां** = योगीहरूका लागि
**परं** = अद्वितीय
**तत्त्वं** = तत्त्वसमान
**वृष्णीनां** = वृष्णीवंशीहरूका लागि
**परदेवता** = इष्टदेवतासमान
**इति** = यसरी विविध स्वरूपमा
**विदितः** = जानिनुभयो (अनुभूत हुनुभयो)

**वाक्यार्थ–** दाजु बलरामसँगै रङ्गभूमिमा प्रवेश गर्नुभएका भगवान् श्रीकृष्णलाई मल्ल युद्ध गर्न तयार पहलमानहरूले कठोर वज्रका रूपमा, सामान्य जनले श्रेष्ठपुरुषका रूपमा, स्त्रीहरूले शरीरधारी कामदेवको रूपमा, गोपहरूले आफन्तका रूपमा, दुष्ट राजाहरूले शासकका रूपमा, बाबुआमा तथा वृद्धहरूले बालकका रूपमा, कंसले मृत्युका रूपमा, अज्ञानीहरूले अपरिमेय वस्तुको रूपमा, योगीहरूले परमतत्त्वका रूपमा र वृष्णीवंशी यादवहरूले इष्टदेवका रूपमा अनुभव गरे।

**विवरण–** यस श्लोकमा भगवान् श्रीकृष्णलाई अनेक व्यक्तिहरूले अनेक रूपमा देखे भनी वर्णन गरिएको छ। एउटै परमात्मा संसारमा अनेक रूपले देखिनुभएको छ। त्यसैले संसारका सबै रूपहरू उहाँका नै हुन्। व्यक्ति जुन भाव या संस्कारले युक्त हुन्छ, उसले आफ्नो बुद्धि अनुसार त्यही रूपमा परमात्मालाई साक्षात्कार गर्दछ। यस श्लोकमा दृष्टिभेदले परमात्माका अनेक स्वरूप देखिने रहस्य बताउन खोजिएको छ। यहाँ क्रमशः रौद्र, अद्‌भुत, शृङ्गार, हास्य, वीर, करुण, भयानक, वीभत्स, शान्त र भक्ति समेत दसै किसिमका रसको रूपमा एउटै भगवान् अनुभूत हुनुभयो भन्ने बताइएको छ। रङ्गभूमिमा प्रवेश गर्दा भगवान्‌लाई सबभन्दा पहिला मल्लयोद्धाहरूले **अशनिः** अर्थात् वज्रमय शरीर भएको देखे। आफ्नो प्रतिद्वन्द्वी भन्ने चिनी क्रोधको आवेग सञ्चार भएकाले श्रीकृष्णलाई देख्दा योद्धाहरूको मनमा क्रोध स्थायी भाव भएको रौद्र रसको सञ्चार भयो। सामान्य मानिसहरूका लागि भने उहाँ **नरवरः** अर्थात् नरश्रेष्ठको रूपमा देखिनुभयो। लोकोत्तर श्रेष्ठता र विलास आदि देख्नाले उनीहरूभित्र विस्मय स्थायी भाव भएको अद्‌भुत रसको सञ्चार भएको थियो भन्ने बुझिन्छ। स्त्रीहरूको लागि उहाँ मूर्तिमान् कामदेव झैं परमसुन्दर लाग्नुभयो। यसबाट श्रीकृष्णलाई देख्दा पुरस्त्रीहरूमा प्रेम या रति स्थायी भाव भएको शृङ्गार रसको उद्‌बोधन भएको बुझिन्छ। गोपहरूका लागि उहाँ **स्वजन** या आफन्तको रूपमा देखिनुभयो। उनीहरूले आफ्ना साथी श्रीकृष्णले हात्तीको दाह्रा लिएर विलक्षण वेष बनाएको देखेर त्यसबाट हास्य स्थायी भाव भएको हास्य रसकै अनुभव गरे। दुष्ट राजाहरूले भगवान्‌लाई **शास्ता** अर्थात् आफूलाई पनि नियन्त्रित गर्ने शासकको रूपमा देखे। यसबाट उनीहरूमा आफ्नो प्रतिद्वन्द्वीलाई देखेर युद्ध गर्ने उत्साह नै स्थायी भाव भएको वीर रसको सञ्चार भएको सूचित भएको छ। आफ्ना आमा-बाबुका लागि भने भगवान् **शिशु** सानो बच्चोको रूपमा देखिनुभयो। यसबाट ती आमा-बाबुमा आफ्नो छोराको सानो सुकुमार शरीर एवं तिनका प्रतिद्वन्द्वी योद्धाहरूको बलिष्ठ शरीरलाई देखी अनिष्टको शङ्का गर्नाले शोक स्थायी भाव भएको करुण रसको सञ्चार

भएको सूचित गरिएको छ। भोजराज कंसले भने उहाँलाई साक्षात् **मृत्युकै** रूपमा देख्यो। यसबाट आफ्नो मृत्युलाई देख्दा उसमा भय स्थायी भाव भएको भयानक रसको सञ्चार भएको थाहा पाउन सकिन्छ। अज्ञानी सामान्य व्यक्तिहरूका लागि उहाँ **विराट्** एवं अपरिमेय रूपको लाग्नुभयो। यसको तात्पर्य उनीहरूले श्रीकृष्णलाई देख्दा अज्ञेय तत्त्वका रूपमा जानी हेयता या घृणा स्थायी भाव भएको वीभत्स रसको अनुभव गरे। योगीहरूले उहाँलाई **परम तत्त्व**को रूपमा देखे। यसबाट श्रीकृष्णलाई देख्दा उनीहरूको मनमा परमात्मालाई देख्दा हुने शान्ति नै स्थायी भाव भएको शान्त रसको उद्‌बोधन भएको देखिन्छ। वृष्णीवंशी तत्त्ववेत्ताहरूले चाहिँ उहाँलाई परदेवताको रूपमा बुझे। यसबाट उनीहरूमा प्रेमसम्बन्धले युक्त भक्तिको उद्रेक भएको स्पष्ट हुन्छ। यसरी संस्कारको भेदले एउटै परमात्मा अनेक रूपमा देखिनुभएको वर्णन यो श्लोकमा गरिएको छ।

**हतं कुवलयापीडं दृष्ट्वा तावपि दुर्जयौ।**
**कंसो मनस्व्यपि तदा भृशमुद्विविजे नृप॥ १८॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**कुवलयापीडं** = कुवलयापीड हात्ती
**हतं** = मारिएको (र)
**तौ** = ती दुई श्रीकृष्ण र बलरामलाई
**अपि** = पनि
**दुर्जयौ** = जित्न नसकिने
**दृष्ट्वा** = देखेर
**मनस्वी** = धैर्यशाली
**अपि** = भएर पनि
**कंसः** = राजा कंस
**तदा** = त्यस समयमा
**भृशं** = धेरै
**उद्विविजे** = डरायो

**वाक्यार्थ–** कुवलयापीड हात्ती मारिएको देखेर तथा श्रीकृष्ण र बलरामलाई जित्न नसक्ने ठानेर त्यस समयमा कंस धैर्यशाली भएर पनि अत्यन्त आत्तियो।

**तौ रेजतू रङ्गगतौ महाभुजौ विचित्रवेषाभरणस्रगम्बरौ।**
**यथा नटावुत्तमवेषधारिणौ मनः क्षिपन्तौ प्रभया निरीक्षताम्॥ १९॥**

**पदार्थ–**
**महाभुजौ** = लामा-लामा हात भएका
**विचित्रवेषाभरणस्रगम्बरौ** = गरगहना, माला र वस्त्रले रङ्गीचङ्गी भेष बनाउनुभएका
**रङ्गगतौ** = रङ्गभूमिमा उपस्थित हुनुभएका
**तौ** = उहाँ दुई जना (श्रीकृष्ण र बलराम)
**प्रभया** = (शरीरको) कान्तिले
**निरीक्षतां** = आफूलाई हेर्नेहरूको
**मनः** = चित्त
**क्षिपन्तौ** = खिच्दै
**उत्तमवेषधारिणौ** = सुन्दर भेष धारण गरेका
**नटौ** = दुई ओटा नट
**यथा** = जस्तै
**रेजतुः** = शोभायमान हुनुभयो

**वाक्यार्थ–** लामा-लामा हात भएका, गरगहना, माला र वस्त्रले रङ्गीचङ्गी भेष बनाएर रङ्गभूमिमा

उपस्थित हुनुभएका श्रीकृष्ण र बलराम आफ्नो शरीरको कान्तिले दर्शकलाई आकर्षित गर्दै सुन्दर भेष भएका दुई ओटा नट झैँ शोभायमान हुनुभयो।

**निरीक्ष्य तावुत्तमपूरुषौ जना मञ्चस्थिता नागरराष्ट्रका नृप।**

**प्रहर्षवेगोत्कलितेक्षणाननाः पपुर्न तृप्ता नयनैस्तदाननम्॥ २०॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**मञ्चस्थिताः** = मञ्चमा बसेका
**नागरराष्ट्रकाः** = सहरवासी एवं ग्रामवासी
**जनाः** = मानिसहरूले
**तौ** = उहाँ दुई
**उत्तमपूरुषौ** = उत्तम पुरुषलाई
**निरीक्ष्य** = हेरेर
**प्रहर्षवेगोत्कलितेक्षणाननाः** = आनन्दको वेगले आँखा र मुख खुलेका छँदा
**नयनैः** = आँखाहरूद्वारा
**तदाननं** = उहाँको मुख (माधुर्य)
**पपुः** = पान गरे (परन्तु)
**न तृप्ताः** = तृप्त (सन्तुष्ट) भएनन्

**वाक्यार्थ–** हे राजा परीक्षित्! मञ्चमा बसेका सहरवासी एवं ग्रामवासी मानिसहरूले उत्तमपुरुष श्रीकृष्ण र बलरामलाई देख्दा आनन्दको वेगले उनीहरूको आँखा र मुख खुलै रहे, उनीहरूले भगवान्को मुखमाधुर्यको धेरै बेर पान गरे तर पनि उनीहरू तृप्त भएनन्।

**पिबन्त इव चक्षुर्भ्यां लिहन्त इव जिह्वया।**

**जिघ्रन्त इव नासाभ्यां श्लिष्यन्त इव बाहुभिः॥ २१॥**

**पदार्थ–**
(त्यहाँ भएका मानिसहरू)
**चक्षुर्भ्यां** = आँखाले
**पिबन्तः इव** = भगवान्को रूपसौन्दर्यलाई पिउन लागे झैँ
**जिह्वया** = जिभ्रोले
**लिहन्तः इव** = चाट्न लागे झैँ
**नासाभ्यां** = नाकले
**जिघ्रन्तः इव** = सुँघ्न लागे झैँ
**बाहुभिः** = हातहरूले
**श्लिष्यन्तः इव** = आलिङ्गन गर्न लागे झैँ देखिए

**वाक्यार्थ–** त्यहाँ भएका मानिसहरू आँखाद्वारा भगवान्को रूपसौन्दर्यलाई पिउन लागे झैँ, जिभ्रोले चाट्न लागे झैँ, नाकले सुँघ्न लागे झैँ र हातहरूले भगवान्लाई आलिङ्गन गर्न लागे झैँ देखिए।

**ऊचुः परस्परं ते वै यथादृष्टं यथाश्रुतम्।**

**तद्रूपगुणमाधुर्यप्रागल्भ्यस्मारिता इव॥ २२॥**

**पदार्थ–**
**तद्रूपगुणमाधुर्यप्रागल्भ्य-स्मारिताः इव** = भगवान्का रूप, गुण, माधुर्य र सामर्थ्य देखेर, सम्झाइएका झैँ
**ते** = ती दर्शकहरूले
**वै** = निश्चय नै
**यथादृष्टं** = (भगवान्का सम्बन्धमा) देखे अनुसार
**यथाश्रुतं** = सुने अनुसार
**परस्परं** = एक-आपसमा
**ऊचुः** = भन्न लागे

**वाक्यार्थ–** भगवान्को रूप, गुण, माधुर्य र सामर्थ्य आदिले उनीहरूलाई सम्झाइदिएको जस्तै ती दर्शकहरूले भगवान्का सम्बन्धमा जे देखे र जस्तो सुने त्यो सबै उनीहरू एक-आपसमा भन्न लागे।

**एतौ भगवतः साक्षाद्धरेर्नारायणस्य हि।**
**अवतीर्णाविहांशेन वसुदेवस्य वेश्मनि॥ २३॥**

**पदार्थ–**
**एतौ** = यी श्रीकृष्ण र बलरामले
**हि** = निश्चय नै
**साक्षात्** = प्रत्यक्ष
**भगवतः** = ऐश्वर्यशाली
**हरेः** = शरणागतको कष्टलाई हरण गरिदिने
**नारायणस्य** = भगवान् नारायणका
**अंशेन** = अंशरूपमा
**इह** = यस लोकमा
**वसुदेवस्य** = वसुदेवको
**वेश्मनि** = घरमा
**अवतीर्णौ** = अवतार लिनुभएको हो

**वाक्यार्थ–** शरणागतको कष्टलाई हरण गरिदिने साक्षात् भगवान् नारायणले अवश्य नै अहिले अंशरूपमा यी श्रीकृष्ण र बलराम भई वसुदेवका घरमा अवतार लिनुभएको हो।

**एष वै किल देवक्यां जातो नीतश्च गोकुलम्।**
**कालमेतं वसन् गूढो ववृधे नन्दवेश्मनि॥ २४॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**एषः** = यी (श्रीकृष्ण)
**देवक्यां** = देवकीको गर्भबाट
**जातः** = जन्मिनुभएको
**गोकुलं च** = गोकुलमा (वसुदेवद्वारा)
**नीतः** = लगिनुभएको हो
**किल** = निश्चय नै
**एतं** = यति
**कालं** = वेलासम्म
**नन्दवेश्मनि** = नन्दको घरमा
**गूढः** = गोप्यरूपमा
**वसन्** = बस्दै
**ववृधे** = बढ्नुभएको हो

**वाक्यार्थ–** यी श्रीकृष्ण देवकीबाट जन्मिनुभएको, गोकुलमा पुऱ्याइनुभएको र अहिलेसम्म नन्दको घरमा गोप्य रूपले बस्दै ठुलो हुनुभएको हो।

**पूतनानेन नीतान्तं चक्रवातश्च दानवः।**
**अर्जुनौ गुह्यकः केशी धेनुकोऽन्ये च तद्विधाः॥ २५॥**

**पदार्थ–**
**अनेन** = यिनै (श्रीकृष्ण)द्वारा
**पूतना** = पूतना नामकी राक्षसी
**अर्जुनौ** = यमलार्जुन (जोडी खरीका वृक्ष)
**गुह्यकः** = (शङ्खचूड नामक) यक्ष
**केशी** = केशी
**धेनुकः** = धेनुकासुर
**चक्रवातः** = तृणावर्त
**दानवः च** = दानव र
**तद्विधाः** = त्यसप्रकारका
**अन्ये च** = अरू पनि
**अन्तं** = मृत्युको मुखमा
**नीताः** = पुऱ्याइएका हुन्

**वाक्यार्थ–** यिनै श्रीकृष्णद्वारा पूतना, यमलार्जुन, शङ्खचूड, केशी, धेनुकासुर तथा तृणावर्त लगायतका दानवहरू तथा यी जस्ता अरू पनि दानवहरू मृत्युको मुखमा पुऱ्याइएका हुन्।

**गावः सपाला एतेन दावाग्नेः परिमोचिताः।**

**कालियो दमितः सर्प इन्द्रश्च विमदः कृतः॥ २६॥**

**पदार्थ–**
**एतेन** = यिनै (भगवान् श्रीकृष्ण) द्वारा
**सपालाः** = गोठालाले सहित
**गावः** = गाईहरू
**दावाग्नेः** = भयङ्कर डढेलोबाट
**परिमोचिताः** = बचाइए
**कालियः** = कालिय नामक
**सर्पः** = सर्प
**दमितः** = दमन गरियो (र)
**इन्द्रः च** = इन्द्र पनि
**विमदः** = घमन्डरहित
**कृतः** = बनाइए

**वाक्यार्थ–** यिनै श्रीकृष्णद्वारा गोठाला सहित गाईहरू भयङ्कर डढेलोबाट बचाइए, कालिय नागको दमन गरियो र इन्द्र घमन्डरहित बनाइए।

**सप्ताहमेकहस्तेन धृतोऽद्रिप्रवरोऽमुना।**

**वर्षवाताशनिभ्यश्च परित्रातं च गोकुलम्॥ २७॥**

**पदार्थ–**
**अमुना** = यिनै (श्रीकृष्ण)द्वारा
**सप्ताहं** = एक हप्तासम्म
**एकहस्तेन** = एउटै हातले
**अद्रिप्रवरः** = श्रेष्ठ गोवर्धन पर्वत
**धृतः** = धारण गरियो
**वर्षवाताशनिभ्यः च** = पानी, हावा, वज्र आदिद्वारा
**गोकुलं च** = गोकुल पनि
**परित्रातम्** = रक्षा गरियो

**वाक्यार्थ–** यिनै श्रीकृष्णद्वारा एउटै हातले एक हप्तासम्म गोवर्धन पर्वत धारण गरियो र हावा, पानी र वज्र आदिबाट गोकुलवासीको रक्षा गरियो।

**गोप्योऽस्य नित्यमुदितहसितप्रेक्षणं मुखम्।**

**पश्यन्त्यो विविधांस्तापांस्तरन्ति स्माश्रमं मुदा॥ २८॥**

**पदार्थ–**
**नित्यं** = सधैँ
**उदितहसितप्रेक्षणं** = खुलेको र हँसिलो हेराइ भएको
**अस्य** = यिनै (श्रीकृष्ण)को
**मुखं** = मुखमण्डललाई
**मुदा** = प्रसन्नताका साथ
**पश्यन्त्यः** = हेर्ने
**गोप्यः** = गोपिनीहरू
**अश्रमं** = विना परिश्रम
**विविधान्** = विभिन्न प्रकारका
**तापान्** = कष्टहरू
**तरन्ति स्म** = पार गर्दथे

**वाक्यार्थ–** यी श्रीकृष्णकै सधैँ उज्यालो र हँसिलो हेराइ भएको मुखमण्डललाई प्रसन्न्ताका साथ हेरेर गोपिनीहरूले विना परिश्रम विभिन्न प्रकारका कष्टहरू पार गर्दथे।

**वदन्त्यनेन वंशोऽयं यदोः सुबहुविश्रुतः।**
**श्रियं यशो महत्त्वं च लप्स्यते परिरक्षितः॥ २९॥**

**पदार्थ–**
**अनेन** = यी (श्रीकृष्ण)द्वारा
**परिरक्षितः** = रक्षा गरिएको
**सुबहुविश्रुतः** = लोकमा अत्यन्त प्रशंसित
**यदोः** = यदुको
**अयं** = यो
**वंशः** = वंशले
**श्रियं** = श्रीसम्पत्ति
**यशः** = कीर्ति
**महत्त्वं च** = महत्त्व पनि
**लप्स्यते** = प्राप्त गर्नेछ भन्ने कुरा
**वदन्ति** = (विद्वान्हरू) बताउँछन्

**वाक्यार्थ–** यी श्रीकृष्णद्वारा रक्षा गरिएको, लोकमा अति प्रसिद्ध यो यदुवंशले प्रशस्त श्रीसम्पत्ति, कीर्ति र महत्त्व प्राप्त गर्नेछ भन्ने कुरा विद्वान्हरू बताउँछन्।

**अयं चास्याग्रजः श्रीमान् रामः कमललोचनः।**
**प्रलम्बो निहतो येन वत्सको ये बकादयः॥ ३०॥**

**पदार्थ–**
**अयं च** = उहाँ चाहिँ
**अस्य** = उहाँ (श्रीकृष्ण)का
**अग्रजः** = दाजु
**कमललोचनः** = कमलनयन
**श्रीमान्** = श्रीमान्
**रामः** = बलराम (हुनुहुन्छ)
**येन** = जसद्वारा
**प्रलम्बः** = प्रलम्बासुर
**निहतः** = मारियो
**वत्सकः** = वत्सासुर (र)
**ये** = जति पनि
**बकादयः** = बकासुर आदि (राक्षसहरू थिए, ती पनि मारिए)

**वाक्यार्थ–** उहाँ कमलजस्तो आँखा हुनुभएका अर्का चाहिँ श्रीकृष्णका दाजु श्रीमान् बलराम हुनुहुन्छ। उहाँद्वारा नै प्रलम्बासुर, वत्सासुर र बकासुर आदि राक्षसहरू मारिएका हुन्।

**जनेष्वेवं ब्रुवाणेषु तूर्येषु निनदत्सु च।**
**कृष्णरामौ समाभाष्य चाणूरो वाक्यमब्रवीत्॥ ३१॥**

**पदार्थ–**
**जनेषु** = मानिसहरूले
**एवं** = यसप्रकार
**ब्रुवाणेषु** = भनिरहँदा र
**तूर्येषु** = तुरही आदि
**निनदत्सु च** = बजिरहँदा
**चाणूरः** = चाणूरले
**कृष्णरामौ** = श्रीकृष्ण र बलरामलाई
**समाभाष्य** = सम्बोधन गरेर
**वाक्यं** = यस्तो कुरा
**अब्रवीत्** = भन्न लाग्यो

**वाक्यार्थ–** मानिसहरूले यसप्रकार भनिरहँदा तुरही आदि बाजा बजिरहेका थिए। यसै वेला श्रीकृष्ण र बलरामलाई सम्बोधन गर्दै चाणूरले यसो भन्न लाग्यो।

**हे नन्दसूनो हे राम भवन्तौ वीरसम्मतौ।**
**नियुद्धकुशलौ श्रुत्वा राज्ञाहूतौ दिदृक्षुणा॥ ३२॥**

पदार्थ–
**हे नन्दसूनो** = हे नन्दपुत्र कृष्ण
**हे राम** = हे बलराम
**भवन्तौ** = तिमी दुई
**वीरसम्मतौ** = वीरका रूपमा प्रसिद्ध भएका छौ
**नियुद्धकुशलौ** = मल्लयुद्धमा कुशल छौ भन्ने
**श्रुत्वा** = सुनेर
**दिदृक्षुणा** = (तिमीहरूको युद्धकला) हेर्ने इच्छा गर्ने
**राज्ञा** = महाराज कंसद्वारा
**आहूतौ** = बोलाइएका हौ

**वाक्यार्थ–** हे नन्दपुत्र कृष्ण ! हे बलराम ! तिमीहरू वीरका रूपमा प्रसिद्ध भएका छौ, तिमीहरू मल्लयुद्धमा पनि कुशल छौ भन्ने सुनेर तिमीहरूको युद्धकला हेर्ने इच्छा गरी महाराज कंसले तिमीहरूलाई बोलाउनुभएको हो।

**प्रियं राज्ञः प्रकुर्वन्त्यः श्रेयो विन्दन्ति वै प्रजाः।**
**मनसा कर्मणा वाचा विपरीतमतोऽन्यथा॥ ३३॥**

पदार्थ–
**मनसा** = मनद्वारा
**कर्मणा** = कर्मद्वारा (र)
**वाचा** = वाणीद्वारा पनि
**राज्ञः** = राजाको
**प्रियं** = प्रिय
**प्रकुर्वन्त्यः** = गर्ने
**प्रजाः** = प्रजाहरूले
**वै** = निश्चय नै
**श्रेयः** = सुख
**विन्दन्ति** = प्राप्त गर्दछन्
**विपरीतं** = यस्तो नगर्नेहरूले
**अतः** = यसदेखि
**अन्यथा** = विपरीत फल
(दुःख, पाउँछन्)

**वाक्यार्थ–** मन, वचन र कर्मले राजालाई मन पर्ने काम गर्ने प्रजाहरूले सुख पाउँछन् तर यसको विपरीत काम गर्नेले उल्टै दुःख पाउँछन्।

**नित्यं प्रमुदिता गोपा वत्सपाला यथा स्फुटम्।**
**वनेषु मल्लयुद्धेन क्रीडन्तश्चारयन्ति गाः॥ ३४॥**

पदार्थ–
**वत्सपालाः** = गाई पाल्ने
**गोपाः** = गोपहरू
**नित्यं** = सधैँ
**प्रमुदिताः** = प्रसन्न चित्त भएर
**वनेषु** = वनमा
**मल्लयुद्धेन** = मल्लयुद्ध
**क्रीडन्तः** = खेल्दै
**गाः** = गाईहरू
**चारयन्ति** = चराउँछन् भन्ने कुरा
**यथा स्फुटम्** = प्रसिद्ध छ

**वाक्यार्थ–** गाई पाल्ने गोपहरू प्रसन्न चित्तले सधैँ वनमा मल्लयुद्ध खेल्दै गाई चराउँछन् भन्ने कुरा प्रसिद्धै छ।

**तस्माद् राज्ञः प्रियं यूयं वयं च करवाम हे।**
**भूतानि नः प्रसीदन्ति सर्वभूतमयो नृपः॥ ३५॥**

पदार्थ–
**हे** = हे कृष्ण र बलराम
**तस्मात्** = त्यसकारण

**वयं** = हामीहरू (र)
**यूयं च** = तिमीहरू
**राज्ञः** = महाराज कंसका लागि
**प्रियं** = प्रिय मल्लयुद्ध
**करवामः** = गरौँ (यसो गर्दा)
**नः** = हामीहरूदेखि
**भूतानि** = सम्पूर्ण प्राणीहरू
**प्रसीदन्ति** = खुसी हुनेछन्
(किनभने)
**नृपः** = राजा
**सर्वभूतमयः** = सम्पूर्ण प्राणीहरूको अंशले युक्त हुन्छन्

**वाक्यार्थ–** हे कृष्ण र बलराम ! तिमी र हामी सबै मिलेर महाराज कंसलाई मन पर्ने मल्लयुद्ध गरौँ। यसो गर्‍यौँ भने हामीसँग सम्पूर्ण प्राणीहरू खुसी हुनेछन्। किनभने राजा सम्पूर्ण प्राणीहरूको अंशले युक्त हुन्छन्।

**तन्निशम्याब्रवीत् कृष्णो देशकालोचितं वचः।**

**नियुद्धमात्मनोऽभीष्टं मन्यमानोऽभिनन्द्य च ॥ ३६ ॥**

**पदार्थ–**
**नियुद्धं** = मल्लयुद्ध
**आत्मनः** = आफ्नो
**अभीष्टं** = इच्छाको विषय
**मन्यमानः** = मानिरहनुभएका
**कृष्णः** = श्रीकृष्णले
**तत्** = त्यो कुरा
**निशम्य** = सुनेर
**अभिनन्द्य च** = स्वीकार गरेर
**देशकालोचितं** = देशकाल सुहाउँदो
**वचः** = वचन
**अब्रवीत्** = बोल्नुभयो

**वाक्यार्थ–** त्यो सबै कुरा सुनेर युद्ध गर्नु नै आफ्नो अभीष्ट हो भन्ने मानिरहनुभएका श्रीकृष्णले उक्त कुरालाई स्वीकार गरेर देशकाल सुहाउँदो कुरा गर्न लाग्नुभयो।

**प्रजा भोजपतेरस्य वयं चापि वनेचराः।**

**करवाम प्रियं नित्यं तन्नः परमनुग्रहः ॥ ३७ ॥**

**पदार्थ–**
**वनेचराः** = वनवासी
**वयं** = हामीहरू
**अपि** = पनि
**अस्य** = यी
**भोजपतेः** = भोजराज कंसका
**प्रजाः** = प्रजा हौँ (अतः)
**नित्यं** = सधैँ
**प्रियं च** = (महाराजलाई) प्रिय लाग्ने मल्लयुद्ध
**करवामः** = गरौँ
**तत्** = त्यही नै
**नः** = हामीहरूका लागि
**परं** = ठुलो
**अनुग्रहः** = कल्याण हुन्छ

**वाक्यार्थ–** हामी वनवासीहरू पनि यिनै भोजराज कंसका प्रजा हौँ। अतः हामीहरू महाराजलाई मन पर्ने मल्लयुद्ध खेलौँ, यसैमा हामीहरूको कल्याण छ।

**बाला वयं तुल्यबलैः क्रीडिष्यामो यथोचितम्।**

**भवेन्नियुद्धं माधर्मः स्पृशेन्मल्लसभासदः ॥ ३८ ॥**

**पदार्थ–**
**वयं** = हामीहरू
**बालाः** = बालक छौँ (अतः)
**तुल्यबलैः** = समान बल (उमेर) भएकासँग
**यथोचितं** = सुहाउँदो

| | | |
|---|---|---|
| **क्रीडिष्यामः** = मल्लयुद्ध खेल्नेछौँ | सभासद्हरूलाई | **नियुद्धं** = मल्लयुद्ध |
| **अधर्मः** = पापले | **मा स्पृशेत्** = नछोओस् (यस | **भवेत्** = सञ्चालन होस् |
| **मल्लसभासदः** = मल्लयुद्धका | किसिमले) | |

**वाक्यार्थ–** हामी बालक छौँ त्यसैले हामी आफू समान उमेर भएकासँग नै सुहाउँदो किसिमले मल्लयुद्ध खेल्छौँ। जसले गर्दा यस मल्लयुद्धका सभासद्हरूलाई पापले छुन नपाओस् त्यस्तो किसिमले मल्लयुद्ध सञ्चालन होस्।

**चाणूर उवाच** (चाणूरले भन्यो)

**न बालो न किशोरस्त्वं बलश्च बलिनां वरः।**

**लीलयेभो हतो येन सहस्रद्विपसत्त्वभृत्॥ ३९॥**

पदार्थ–

| | | |
|---|---|---|
| **बलिनां** = बलशालीहरूमा | **न बालः** = न बालक हौ | **इभः** = (कुवलयापीड) हात्ती |
| **वरः** = श्रेष्ठ | **न किशोरः** = न त किशोर नै हौ | **लीलया** = ख्याल-ख्यालमा |
| **त्वं** = तिमी र | **येन** = जुन तिमीहरूद्वारा | **हतः** = मारियो |
| **बलः च** = बलराम पनि | **सहस्रद्विपसत्त्वभृत्** = हजार हात्तीको समान बल भएको | |

**वाक्यार्थ–** बलशालीहरूमा श्रेष्ठ तिमी र बलराम न बालक छौ, न त किशोर नै, जो तिमीहरूले हजार हात्तीको समान बल भएको कुवलयापीड हात्तीलाई ख्याल-ख्यालमैँ मारिदियौ।

**तस्माद् भवद्भ्यां बलिभिर्योद्धव्यं नानयोऽत्र वै।**

**मयि विक्रम वार्ष्णेय बलेन सह मुष्टिकः॥ ४०॥**

पदार्थ–

| | | |
|---|---|---|
| **तस्मात्** = त्यसकारण | **अत्र** = यस युद्धमा | **मयि** = मसँग |
| **भवद्भ्यां** = तिमी दुईद्वारा | **अनयः** = अधर्म | **विक्रम** = लड |
| **बलिभिः** = बलशालीहरूसँग | **न वै** = हुँदैन (अतः) | **मुष्टिकः** = मुष्टिक |
| **योद्धव्यं** = युद्ध गरिनुपर्दछ | **वार्ष्णेय** = हे वृष्णिवंशी कृष्ण (तिमी) | **बलेन सह** = बलरामसँग (लड्नेछन्) |

**वाक्यार्थ–** त्यसकारण तिमी दुईले बलशालीसँग नै युद्ध गर्नुपर्दछ, यसमा कुनै पाप हुँदैन। अतः हे कृष्ण ! तिमी मसँग लड र मुष्टिक बलरामसँग लड्नेछन्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**कुवलयापीडवधो नाम त्रिचत्वारिंशोऽध्यायः॥ ४३॥**

# अथ चतुश्चत्वारिंशोऽध्यायः

## कंसवध

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं चर्चितसङ्कल्पो भगवान् मधुसूदनः।**

**आससादाथ चाणूरं मुष्टिकं रोहिणीसुतः॥ १॥**

**पदार्थ–**
**एवं** = यसप्रकार
**चर्चितसङ्कल्पः** = मल्लयुद्ध गर्ने निश्चय गर्नुभएका
**भगवान्** = भगवान्
**मधुसूदनः** = श्रीकृष्ण
**अथ** = तत्काल नै
**चाणूरं** = चाणूरसँग
**रोहिणीसुतः** = रोहिणीपुत्र बलराम
**मुष्टिकं** = मुष्टिकसँग (युद्ध गर्न)
**आससाद** = तयार हुनुभयो

**वाक्यार्थ–** यसप्रकार मल्लयुद्ध गर्ने निश्चय गर्नुभएका भगवान् श्रीकृष्ण चाणूरसँग र बलरामजी मुष्टिकसँग युद्ध गर्न तयार हुनुभयो।

**हस्ताभ्यां हस्तयोर्बद्ध्वा पद्भ्यामेव च पादयोः।**

**विचकर्षतुरन्योन्यं प्रसह्य विजिगीषया॥ २॥**

**पदार्थ–**
(त्यसबखत श्रीकृष्ण र चाणूर तथा बलराम र मुष्टिक)
**हस्तयोः** = दुबै हातलाई
**हस्ताभ्यां** = दुबै हातले (र)
**पादयोः** = दुबै गोडालाई
**पद्भ्यां एव च** = गोडाले नै
**बद्ध्वा** = अँठ्याएर
**विजिगीषया** = जित्ने इच्छाले
**अन्योन्यं** = एकअर्कालाई
**प्रसह्य** = जोडले
**विचकर्षतुः** = तानातान गर्न लागे

**वाक्यार्थ–** एकले अर्कालाई जित्ने इच्छा गरेका श्रीकृष्ण र चाणूर तथा मुष्टिक र बलरामले हातले हातलाई र गोडाले गोडालाई अँठ्याएर जित्ने इच्छाले परस्परमा जोडले तानातान गर्न लागे।

**अरत्नी द्वे अरत्निभ्यां जानुभ्यां चैव जानुनी।**

**शिरः शीर्ष्णोरसोरस्तावन्योन्यमभिजघ्नतुः॥ ३॥**

**पदार्थ–**
**तौ** = (त्यसपछि) ती दुई
**अरत्निभ्यां** = मुट्ठीले
**द्वे अरत्नी** = दुबै मुट्ठीमा र
**जानुभ्यां च** = दुई घुँडाले
**जानुनी एव** = दुबै घुँडामा नै
**शीर्ष्णा** = टाउकाले
**शिरः** = टाउकामा
**उरसा** = छातीले
**उरः** = छातीमा गरी
**अन्योन्यं** = परस्परमा
**अभिजघ्नतुः** = प्रहार गर्न लागे

**वाक्यार्थ–** त्यसपछि तिनीहरूले आपसमा मुट्ठीले मुट्ठीमा, घुँडाले घुँडामा, शिरले शिरमा र छातीले छातीमा प्रहार गर्न लागे।

**परिभ्रामणविक्षेपपरिरम्भावपातनैः।**

**उत्सर्पणापसर्पणैश्चान्योन्यं प्रत्यरुन्धताम्॥ ४॥**

**पदार्थ–**
**परिभ्रामणविक्षेपपरिरम्भा-वपातनैः** = घुमाउने, फाल्ने, अँठ्याउने र तल लडाउने अनि **उत्सर्पणापसर्पणैः च** = नजिक आउने र टाढा जाने आदि क्रियाद्वारा **अन्योन्यं** = एकले अर्कालाई **प्रत्यरुन्धताम्** = छेक्न थाले

**वाक्यार्थ–** घुमाउने, फाल्ने, अँठ्याउने, लडाउने, कहिले नजिक आउने र कहिले टाढा जाने आदि क्रियाद्वारा उनीहरूले एक-अर्काको प्रहारलाई छेक्न थाले।

**उत्थापनैरुन्नयनैश्चालनैः स्थापनैरपि।**

**परस्परं जिगीषन्तावपचक्रतुरात्मनः॥ ५॥**

**पदार्थ–**
**जिगीषन्तौ** = जित्न चाहने ती दुबै थरीले **उत्थापनैः** = उठाउने (खुट्टा र घाँटीमा समातेर उचाल्ने) **उन्नयनैः** = उचालेर माथि लैजाने **चालनैः** = हल्लाउने (आफ्नो शरीरमा समातेकोलाई हल्लाएर आफ्नो शरीर छुटाउने) **स्थापनैः अपि** = अँठ्याएर राख्ने (चलमलाउन, फुस्कन खोजेकोलाई चल्नै नदिई राख्ने) क्रियाद्वारा पनि **परस्परं** = एक-आपसमा **आत्मनः** = शरीरलाई **उपचक्रतुः** = पीडित गर्न लागे

**वाक्यार्थ–** आ-आफूले जित्न चाहने ती दुबैथरीले कहिले पक्रेर उठाउने, कहिले माथि उचाल्ने, कहिले हल्लाउने तथा कहिले अँठ्याएर राख्ने गरेर एक-अर्काको शरीरलाई पीडित गर्न लागे।

**तद् बलाबलवद् युद्धं समेताः सर्वयोषितः।**

**ऊचुः परस्परं राजन् सानुकम्पा वरूथशः॥ ६॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित् **तत्** = त्यो **बलाबलवत्** = बलवान् र दुर्बलको **युद्धं** = लडाइँ (हेर्न) **समेताः** = त्यहाँ उपस्थित भएका **सर्वयोषितः** = सम्पूर्ण नारीहरू **सानुकम्पाः** = करुणावश **वरूथशः** = भिन्न-भिन्न समूहमा बाँडिएर **परस्परं** = एक-आपसमा **ऊचुः** = भन्न लागे

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यो मल्लयुद्ध हेर्न उपस्थित भएका सम्पूर्ण नारीहरू बलवान् र निर्बलका बीच लडाइँ चलेको देखेर अत्यन्त दुःखी भए र भिन्न-भिन्न समूहमा बाँडिएर एक-

आपसमा यसो भन्न लागे।

**महानयं बताधर्म एषां राजसभासदाम्।**
**ये बलाबलवद् युद्धं राज्ञोऽन्विच्छन्ति पश्यतः॥ ७॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **बत** = दुःखको कुरा | **अयं** = यो | **पश्यतः** = हेर्दाहेर्दै |
| **एषां** = यी | **महान्** = ठुलो | **बलाबलवत् युद्धं** = बलवान् र निर्बलका बीचको युद्ध |
| **राजसभासदां** = राजा कंसका सभासद्‍हरूको | **अधर्मः** = अधर्म हो | **अन्विच्छन्ति** = अनुमोदन गर्दैछन् |
| | **ये** = जो | |
| | **राज्ञः** = राजाले | |

**वाक्यार्थ–** दुःखको कुरा, राजा कंसका सभासद्‍हरू ठुलो अधर्म गर्दैछन्, यिनीहरू राजाका अगाडि नै बलिया र निर्बलहरूको युद्धलाई अनुमोदन गर्दैछन्।

**क्व वज्रसारसर्वाङ्गौ मल्लौ शैलेन्द्रसन्निभौ।**
**क्व चातिसुकुमाराङ्गौ किशोरौ नाप्तयौवनौ॥ ८॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **वज्रसारसर्वाङ्गौ** = वज्रसमान सबै अङ्ग बलिया भएका | **मल्लौ** = पहलमान्‌हरू | **नाप्तयौवनौ** = यौवन अवस्थामा पनि नपुगेका |
| **शैलेन्द्रसन्निभौ** = पहाडजस्ता | **क्व** = कहाँ | **किशोरौ च** = किशोरहरू |
| | **अतिसुकुमाराङ्गौ** = अत्यन्त कोमल अङ्ग भएका | **क्व** = कहाँ |

**वाक्यार्थ–** वज्रसमान कठोर अङ्ग भएका पहाडजस्ता पहलमानहरू कहाँ र अतिसुकुमार अङ्ग भएका यौवन अवस्थामा पनि नपुगेका किशोरहरू कहाँ ?

**धर्मव्यतिक्रमो ह्यस्य समाजस्य ध्रुवं भवेत्।**
**यत्राधर्मः समुत्तिष्ठेन्न स्थेयं तत्र कर्हिचित्॥ ९॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **अस्य** = यस | **ध्रुवं हि** = निश्चय नै | **तत्र** = त्यहाँ |
| **समाजस्य** = समाज (राजसभा) | **भवेत्** = भएको छ | **कर्हिचित्** = कहिल्यै पनि |
| **धर्मव्यतिक्रमः** = धर्मको उल्लङ्घन | **यत्र** = जहाँ | **न स्थेयम्** = बस्नु हुँदैन |
| | **अधर्मः** = अधर्म | |
| | **समुत्तिष्ठेत्** = रहन्छ | |

**वाक्यार्थ–** निश्चय नै यस सभामा धर्मको उल्लङ्घन भएको छ, जहाँ अधर्म रहन्छ, त्यहाँ कहिल्यै पनि बस्नु हुँदैन।

**न सभां प्रविशेत् प्राज्ञः सभ्यदोषाननुस्मरन् ।**
**अब्रुवन् विब्रुवन्नज्ञो नरः किल्बिषमश्नुते ॥ १० ॥**

पदार्थ–
**सभ्यदोषान्** = सभासद्हरूको अवगुण
**अनुस्मरन्** = जान्दाजान्दै
**प्राज्ञः** = बुद्धिमान् व्यक्ति
**सभां** = कुनै पनि सभामा
**न प्रविशेत्** = प्रवेश नगर्नू
**अब्रुवन्** = दोषलाई नभन्ने
**विब्रुवन्** = उल्टो भन्ने (र)
**अज्ञः** = नजान्ने बन्ने
**नरः** = मान्छे
**किल्बिषं** = पाप
**अश्नुते** = भोग्दछ

**वाक्यार्थ–** सभासद्हरूको अवगुण जान्दा-जान्दै बुद्धिमान् व्यक्तिले कुनै पनि सभामा प्रवेश नगर्नू। किनभने दोषलाई नभन्ने, उल्टो भन्ने र नजान्ने मान्छे पापको भागिदार बन्नुपर्दछ।

**वल्गतः शत्रुमभितः कृष्णस्य वदनाम्बुजम् ।**
**वीक्ष्यतां श्रमवार्युप्तं पद्मकोशमिवाम्बुभिः ॥ ११ ॥**

पदार्थ–
**शत्रुं** = शत्रु (चाणूर)को
**अभितः** = वरिपरिबाट
**वल्गतः** = घुमिरहनुभएका
**कृष्णस्य** = श्रीकृष्णको
**अम्बुभिः** = जलकणले युक्त
**पद्मकोशं इव** = कमलको कोश जस्तो
**श्रमवार्युप्तं** = पसिनाले युक्त
**वदनाम्बुजं** = मुखकमललाई
**वीक्ष्यताम्** = हेर

**वाक्यार्थ–** शत्रुको वरिपरि घुमिरहनुभएका श्रीकृष्णको जलकणले युक्त कमलकोश जस्तै भएको पसिनायुक्त मुखकमललाई हेर त।

**किं न पश्यत रामस्य मुखमाताम्रलोचनम् ।**
**मुष्टिकं प्रति सामर्षं हाससंरम्भशोभितम् ॥ १२ ॥**

पदार्थ–
**मुष्टिकं प्रति** = मुष्टिकप्रतिको
**सामर्षं** = रिसाएको र
**हाससंरम्भशोभितं** = हाँसोको वेगले सुशोभित भएको
**आताम्रलोचनं** = अलिअलि राता आँखा भएको
**रामस्य** = बलरामको
**मुखं** = अनुहार
**किं न पश्यत** = किन हेर्दैनौ

**वाक्यार्थ–** मुष्टिकप्रति रिस र हाँसोको वेगले सुशोभित बनेको र अलिअलि राता आँखा भएको बलरामको अनुहारलाई किन हेर्दैनौ ?

**पुण्या बत व्रजभुवो यदयं नृलिङ्ग-**
**गूढः पुराणपुरुषो वनचित्रमाल्यः ।**

**गाः पालयन् सहबलः क्वणयंश्च वेणुं**

**विक्रीडयाञ्चति गिरित्ररमार्चिताङ्घ्रिः ॥ १३ ॥**

पदार्थ–
**बत** = हर्षको कुरा
**व्रजभुवः** = व्रजभूमिका भागहरू
**पुण्याः** = पवित्र छन् (किनभने)
**यत्** = जुन भूमिमा
**नृलिङ्गगूढः** = मान्छेको गोप्यस्वरूपमा
**पुराणपुरुषः** = भगवान् नारायण नै
**गिरित्ररमार्चिताङ्घ्रिः** = महादेव र लक्ष्मीद्वारा पाउ पुजिएका
**सहबलः** = बलरामले सहित
**अयं** = यी (श्रीकृष्ण)
**वनचित्रमाल्यः** = वनका रङ्गीचङ्गी फुलको माला लगाएर
**गाः** = गाईहरू
**पालयन्** = चराउँदै र
**वेणुं** = बाँसुरी
**क्वणयन् च** = बजाउँदै
**विक्रीडया** = क्रीडा गर्ने इच्छाले
**अञ्चति** = विचरण गर्नुहुन्छ

**वाक्यार्थ–** खुसीको कुरो, व्रजभूमिका प्रत्येक भागहरू अति पवित्र र धन्य छन्। किनभने यसै भूमिमा आफ्नो असली स्वरूपलाई लुकाएर मान्छेको स्वरूप लिनुभएका एवं महादेव र लक्ष्मीद्वारा पाउ पुजिएका भगवान् नारायण नै श्रीकृष्णको रूपमा आएर बलरामले सहित भएर वनका रङ्गीचङ्गी फूलको माला लगाएर बाँसुरी बजाउँदै र गाई चराउँदै खेल्ने इच्छाले यतै घुम्नुहुन्छ।

**गोप्यस्तपः किमचरन् यदमुष्य रूपं**

**लावण्यसारमसमोर्ध्वमनन्यसिद्धम्।**

**दृग्भिः पिबन्त्यनुसवाभिनवं दुराप-**

**मेकान्तधाम यशसः श्रिय ऐश्वरस्य ॥ १४ ॥**

पदार्थ–
**गोप्यः** = व्रजका नारीहरूले
**किं** = के त्यस्तो
**तपः** = तपस्या
**अचरन्** = गरेछन्
**यत्** = जसका कारण
**अमुष्य** = यी श्रीकृष्णको
**असमोर्ध्वम्** = अद्वितीय सर्वश्रेष्ठ
**अनन्यसिद्धं** = स्वयंसिद्ध
**अनुसवाभिनवं** = प्रतिक्षण नयाँ–नयाँ हुने
**दुरापं** = अत्यन्त दुर्लभ
**यशसः** = यश
**श्रियः** = कान्ति (र)
**ऐश्वरस्य** = ऐश्वर्यको
**एकान्तधाम** = परम आश्रय (एवं)
**लावण्यसारं** = सौन्दर्यको सार
**रूपं** = स्वरूपलाई
**दृग्भिः** = आँखाहरूद्वारा
**पिबन्ति** = पान (दर्शन) गरिरहेका छन्

**वाक्यार्थ–** व्रजका नारी यी गोपिनीहरूले के त्यस्तो तपस्या गरेछन्, जसका कारण यिनीहरूले आफ्ना आँखाद्वारा हरेक क्षण नयाँ लाग्ने, अद्वितीय सर्वश्रेष्ठ, सम्पूर्ण यश, कान्ति र ऐश्वर्यको परम आश्रय भएको, सौन्दर्यको सार भएको भगवान्को दुर्लभ रूपमाधुरीको पान गरिरहेका छन्।

या दोहनेऽवहनने मथनोपलेप-
प्रेङ्खेङ्खनार्भरुदितोक्षणमार्जनादौ ।
गायन्ति चैनमनुरक्तधियोऽश्रुकण्ठ्यो
धन्या व्रजस्त्रिय उरुक्रमचित्तयानाः ॥ १५ ॥

**पदार्थ–**
**उरुक्रमचित्तयानाः** = भगवान् श्रीकृष्णमा चित्त लगाएका
**अनुरक्तधियः** = बुद्धिद्वारा पनि भगवान्मैं आसक्त भएका
**अश्रुकण्ठ्यः** = आँसु आउनाले गला रोकिएका
**व्रजस्त्रियः** = व्रजका स्त्रीहरू
**धन्याः** = धन्य छन्
**याः** = जुन स्त्रीहरू
**दोहने** = दुहुने वेला
**अवहनने** = कुट्ने समयमा
**मथनोपलेपप्रेङ्खेङ्खनार्भरुदितोक्षण-मार्जनादौ च** = मथ्ने, लिप्ने, झोलुङ्गो हल्लाउने, रोएका बालबच्चालाई फुल्याउने र बढार्ने आदि काम गर्दा समेत
**एनं** = यी श्रीकृष्णलाई नै
**गायन्ति** = गान (भजन) गरिरहन्छन्

**वाक्यार्थ–** भगवान्मा चित्त लगाएका र भित्रैदेखि भगवान्मैं आसक्त भएका यी व्रजस्त्रीहरू अत्यन्त धन्य छन्। यिनीहरू गाई दुहुने, धान कुट्ने, दही मथ्ने, घर लिप्ने, झोलुङ्गो हल्लाउने, रोएका बालबच्चालाई फुल्याउने र बढार्ने आदि काम गर्दा समेत भगवान्लाई स्मरण गर्ने र आँसु आउनाले केही अवरुद्ध भएका गलाले उहाँकै गुणकीर्तन गरिरहन्छन्।

प्रातर्व्रजाद् व्रजत आविशतश्च सायं
गोभिः समं क्वणयतोऽस्य निशम्य वेणुम् ।
निर्गम्य तूर्णमबलाः पथि भूरिपुण्याः
पश्यन्ति सस्मितमुखं सदयावलोकम् ॥ १६ ॥

**पदार्थ–**
**भूरिपुण्याः** = अति पुण्यशाली
**अबलाः** = व्रजस्त्रीहरूले
**गोभिः समं** = गाईहरूका साथमा
**प्रातः** = बिहान
**व्रजात्** = व्रजभूमिबाट
**व्रजतः** = वनतर्फ गइरहेका (र)
**सायं** = बेलुका
**आविशतः** = व्रज फर्किरहेका
**वेणुं** = बाँसुरी
**क्वणयतः च** = बजाइरहेका
**अस्य** = उहाँ (श्रीकृष्ण)को
**निशम्य** = (बाँसुरीको स्वर) सुनेर
**तूर्णम्** = झटपट
**पथि** = बाटोमा
**निर्गम्य** = निस्किएर
**सदयावलोकं** = कृपापूर्ण हेराइ र
**सस्मितमुखं** = मन्द-मन्द मुस्कुराइरहेको अनुहारलाई
**पश्यन्ति** = हेर्दछन्

**वाक्यार्थ–** अति पुण्यशाली व्रजस्त्रीहरू भगवान् श्रीकृष्ण मधुर वंशी बजाउँदै प्रातःकालमा गाईहरूका साथमा व्रजबाट बाहिर जाँदा र सायङ्कालमा व्रजमा फर्किंदा उहाँले बजाएको

बाँसुरीको ध्वनि सुनेर झटपट बाहिर निस्किई उहाँको कृपापूर्ण हेराइ र मन्द मुस्कानले युक्त अनुहारको दर्शन गर्दछन्।

**एवं प्रभाषमाणासु स्त्रीषु योगेश्वरो हरिः।**
**शत्रुं हन्तुं मनश्चक्रे भगवान् भरतर्षभ ॥ १७ ॥**

**पदार्थ–**
**भरतर्षभ** = हे भरतवंश शिरोमणि
**स्त्रीषु** = आइमाईहरूले
**एवं** = यसप्रकार
**प्रभाषमाणासु** = कुरा गरिरहँदा
**योगेश्वरः** = योगीहरूका ईश्वर
**भगवान्** = भगवान्
**हरिः** = श्रीकृष्णले
**शत्रुं** = शत्रु चाणूरलाई
**हन्तुं** = मार्ने
**मनः** = विचार
**चक्रे** = गर्नुभयो

**वाक्यार्थ–** हे भरतवंश शिरोमणि परीक्षित्! आइमाईहरूले यसप्रकार कुरा गरिरहँदा योगेश्वर भगवान् श्रीकृष्णले शत्रु चाणूरलाई मार्ने विचार गर्नुभयो।

**सभयाः स्त्रीगिरः श्रुत्वा पुत्रस्नेहशुचातुरौ।**
**पितरावन्वतप्येतां पुत्रयोरबुधौ बलम् ॥ १८ ॥**

**पदार्थ–**
**सभयाः** = डरलाग्दा
**स्त्रीगिरः** = आइमाईहरूका
**श्रुत्वा** = सुनेर
**पुत्रस्नेहशुचा** = पुत्रप्रेमका कारण चिन्ताले
**आतुरौ** = विह्वल भएका
**पुत्रयोः** = आफ्ना छोराको
**बलं** = सामर्थ्यलाई
**अबुधौ** = नजानेका
**पितरौ** = पितामाता (वसुदेव र देवकी)
**अन्वतप्येताम्** = ज्यादै चिन्ता गर्न लाग्नुभयो

**वाक्यार्थ–** आइमाईहरूका डरलाग्दा कुरा सुनेर पुत्रप्रेमका कारण अत्यन्त दुःखी र विह्वल भएका एवं आफ्ना छोराहरूको सामर्थ्य थाहा नपाएका वसुदेव-देवकी ज्यादै चिन्ता गर्न लाग्नुभयो।

**टिप्पणी–** वसुदेव-देवकीलाई थुनिएको कारागार र मल्लयुद्ध गरिएको रङ्गमञ्च नजिक-नजिक थियो।

**तैस्तैर्नियुद्धविधिभिर्विविधैरच्युतेतरौ।**
**युयुधाते यथान्योन्यं तथैव बलमुष्टिकौ ॥ १९ ॥**

**पदार्थ–**
**यथा** = जसरी
**अच्युतेतरौ** = श्रीकृष्ण र चाणूर
**विविधैः** = अनेक प्रकारका
**नियुद्धविधिभिः** = मल्लयुद्धका विधिहरूद्वारा
**अन्योन्यं** = एक-आपसमा
**युयुधाते** = युद्ध गरिरहेका थिए
**तथ एव** = त्यसै गरी
**तैः तैः** = ती-ती विधिहरूद्वारा
**बलमुष्टिकौ** = बलराम र मुष्टिक पनि युद्ध गरिरहेका

थिए

**वाक्यार्थ–** जसरी श्रीकृष्ण र चाणूर मल्लयुद्धका अनेक तरिकाले एक-आपसमा युद्ध गरिरहेका थिए, त्यसै गरी तिनै तरिकाले बलराम र मुष्टिक पनि युद्ध गरिरहेका थिए।

**भगवद्गात्रनिष्पातैर्वज्रनिष्पेषनिष्ठुरैः।**

**चाणूरो भज्यमानाङ्गो मुहुर्ग्लानिमवाप ह ॥ २० ॥**

**पदार्थ–**
**ह** = निश्चय नै
**वज्रनिष्पेषनिष्ठुरैः** = वज्रको प्रहारभन्दा पनि कठोर
**भगवद्गात्रनिष्पातैः** = भगवान्‌को अङ्गको प्रहारले
**भज्यमानाङ्गः** = अङ्गभङ्ग भएको
**चाणूरः** = चाणूरले
**मुहुः** = बारम्बार
**ग्लानिं** = कष्ट
**अवाप** = पायो

**वाक्यार्थ–** वज्रको प्रहारभन्दा पनि कठोर भगवान्‌का अङ्गको प्रहारले अङ्गभङ्ग भएको चाणूरले बारम्बार कष्ट पायो।

**स श्येनवेग उत्पत्य मुष्टीकृत्य करावुभौ।**

**भगवन्तं वासुदेवं क्रुद्धो वक्षस्यबाधत ॥ २१ ॥**

**पदार्थ–**
**श्येनवेगः** = बाजको समान वेग भएको
**क्रुद्धः** = अत्यन्त रिसाएको
**सः** = त्यो चाणूरले
**उभौ** = दुबै
**करौ** = हात
**मुष्टीकृत्य** = मुट्ठी पारेर
**उत्पत्य** = उफ्रेर
**भगवन्तं** = भगवान्
**वासुदेवं** = वासुदेवलाई
**वक्षसि** = छातीमा
**अबाधत** = हिर्कायो

**वाक्यार्थ–** बाजको जस्तो वेग भएको र अत्यन्त रिसाएको त्यस चाणूरले आफ्ना दुबै हातलाई मुट्ठी पारेर उफिँदै भगवान् वासुदेवको छातीमा हिर्कायो।

**नाचलत् तत्प्रहारेण मालाहत इव द्विपः।**

**बाह्वोर्निगृह्य चाणूरं बहुशो भ्रामयन् हरिः ॥ २२ ॥**

**भूपृष्ठे पोथयामास तरसा क्षीणजीवितम्।**

**विस्रस्ताकल्पकेशस्रगिन्द्रध्वज इवापतत् ॥ २३ ॥**

**पदार्थ–**
**मालाहतः** = फूलको मालाले हिर्काइएको
**द्विपः इव** = हात्ती झैँ
**तत्प्रहारेण** = त्यस चाणूरको प्रहारले
**न अचलत्** = (भगवान् डेग पनि) चल्नुभएन (उल्टै)
**तरसा** = वेगले

**चाणूरं** = चाणूरलाई
**बाह्वोः** = हातमा
**निगृह्य** = च्याप्प समातेर
**हरिः** = श्रीकृष्णले
**बहुशः** = धेरैबेर
**भ्रामयन्** = घुमाउँदै
**क्षीणजीवितं** = प्राण छुटिसकेको (त्यसलाई)
**भूपृष्ठे** = भुइँमा
**पोथयामास** = पछार्नुभयो
**विस्रस्ताकल्पकेशस्रक्** = भेषभूषा, केश र माला अस्तव्यस्त भएको त्यो
**इन्द्रध्वजः** = इन्द्रको ध्वजा (इन्द्रको पूजाको लागि ठड्याइएको लिङ्गोमा रहेको ध्वजा)
**इव** = झैँ
**अपतत्** = भुइँमा लड्यो

**वाक्यार्थ–** जसरी फूलको मालाले हिर्काइएको हात्ती विचलित हुँदैन, त्यसै गरी भगवान् पनि त्यस चाणूरको प्रहारले कत्ति पनि विचलित हुनुभएन। त्यसपछि भगवान्ले वेगले (आक्रमण गरी) चाणूरका दुबै हात च्याप्प समाती (त्यसलाई उचालेर) धेरै पटक आकाशमा घुमाएर भुइँमा पछार्नुभयो। घुमाउँदाखेरि नै प्राण निस्किसकेको चाणूरको मृतशरीर, भेषभूषा, केश र माला अस्तव्यस्त भएकाले इन्द्रको ध्वजा (इन्द्रको पूजाको लागि ठड्याइएको लिङ्गोमा रहेको ध्वजा) पछारिए झैँ भुइँमा पछारियो।

**तथैव मुष्टिकः पूर्वं स्वमुष्ट्याभिहतेन वै।**
**बलभद्रेण बलिना तलेनाभिहतो भृशम्॥ २४॥**

पदार्थ–
**तथ एव** = त्यसै गरी
**मुष्टिकः** = मुष्टिक पनि
**पूर्वं** = पहिला
**स्वमुष्ट्या** = आफ्नो मुड्कीले
**अभिहतेन** = हिर्काइएका
**बलिना** = बलशाली
**बलभद्रेण** = बलरामद्वारा
**तलेन** = हातका पन्जाले
**भृशं वै** = जोडसँग
**अभिहतः** = हानियो

**वाक्यार्थ–** जसरी मुष्टिकले पहिला बलरामलाई आफ्नो मुड्कीले हानेको थियो, त्यसै गरी बलरामले पनि त्यसलाई हातका पन्जाले बेसरी हान्नुभयो।

**प्रवेपितः स रुधिरमुद्वमन् मुखतोऽर्दितः।**
**व्यसुः पपातोर्व्युपस्थे वाताहत इवाङ्घ्रिपः॥ २५॥**

पदार्थ–
**अर्दितः** = अत्यन्त व्यथित
**प्रवेपितः** = काँपिरहेको
**सः** = त्यो मुष्टिक
**मुखतः** = मुखबाट
**रुधिरं** = रगत
**उद्वमन्** = छाद्दै
**व्यसुः** = प्राण छुटेर
**वाताहतः** = आँधीबेहरीले लडाएको
**अङ्घ्रिपः इव** = रुख झैँ
**उर्व्युपस्थे** = जमिनमाथि
**पपात** = लड्यो

**वाक्यार्थ–** थप्पड पर्नासाथ अत्यन्त व्यथित भएर काँपिरहेको तथा मुखबाट रगत छाद्दै मरेको

त्यो चाणूर आँधीबेहरीले लडाएको रुख झैं जमिनमा लड्यो।

**ततः कूटमनुप्राप्तं रामः प्रहरतां वरः।**
**अवधील्लीलया राजन् सावज्ञं वाममुष्टिना ॥ २६ ॥**

| पदार्थ– | **वरः** = श्रेष्ठ | **वाममुष्टिना** = देब्रे मुड्कीले |
|---|---|---|
| **राजन्** = हे राजा परीक्षित् | **रामः** = बलरामले | **सावज्ञं** = तिरस्कारपूर्वक |
| **ततः** = त्यसपछि | **अनुप्राप्तं** = नजिकमा आएको | **अवधीत्** = मार्नुभयो |
| **प्रहरतां** = प्रहारकर्ता (योद्धा) | **कूटं** = कूटनामक पहलमानलाई | |
| हरूमा | **लीलया** = ख्याल-ख्यालमै | |

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यसपछि योद्धाहरूमा श्रेष्ठ बलरामले सामुन्ने आएको कूट नाम गरेको पहलमानलाई ख्याल-ख्यालमा देब्रे हातको मुड्कीले हानेर तिरस्कारपूर्वक मार्नुभयो।

**तर्ह्येव हि शलः कृष्णप्रपदाहतशीर्षकः।**
**द्विधा विदीर्णस्तोशलक उभावपि निपेततुः ॥ २७ ॥**

| पदार्थ– | श्रीकृष्णको पाउको प्रहारले | **विदीर्णः** = टुक्रिएको |
|---|---|---|
| **तर्हि एव** = त्यसै वेला | टाउको फुटेको | **तोशलकः** = तोशलक |
| **हि** = निश्चय नै | **शलः** = शलनामक पहलमान र | **उभौ अपि** = ती दुबै |
| **कृष्णप्रपदाहतशीर्षकः** = भगवान् | **द्विधा** = दुई टुक्रामा | **निपेततुः** = भुइँमा लडे |

**वाक्यार्थ–** त्यसै वेला भगवान् श्रीकृष्णका पाउको प्रहारले शिर छुट्टिएको शल नामक पहलमान र दुई टुक्रामा चिरिएको तोशल नामक पहलमान दुबै भुइँमा लडे।

**चाणूरे मुष्टिके कूटे शले तोशलके हते।**
**शेषाः प्रदुद्रुवुर्मल्लाः सर्वे प्राणपरीप्सवः ॥ २८ ॥**

| पदार्थ– | **तोशलके** = तोशलक नामक | चाहने |
|---|---|---|
| **चाणूरे** = चाणूर | पहलमानहरू | **सर्वे** = सबै |
| **मुष्टिके** = मुष्टिक | **हते** = मारिएपछि | **मल्लाः** = पहलमानहरू |
| **कूटे** = कूट | **शेषाः** = बाँकी रहेका | **प्रदुद्रुवुः** = भागे |
| **शले** = शल (तथा) | **प्राणपरीप्सवः** = प्राण बचाउन | |

**वाक्यार्थ–** यसरी चाणूर, मुष्टिक, कूट, शल तथा तोशलक नामक पहलमान मरिसकेपछि बाँकी रहेका अरू सबै पहलमानहरू आफ्नो प्राण बचाउन त्यहाँबाट भागे।

**गोपान् वयस्यानाकृष्य तैः संसृज्य विजह्रतुः ।**
**वाद्यमानेषु तूर्येषु वल्गन्तौ रुतनूपुरौ ॥ २९ ॥**

**पदार्थ–**
**तूर्येषु** = भेरी आदि बाजा
**वाद्यमानेषु** = बजिरहँदा
**रुतनूपुरौ** = पाउजू बजाउँदै गरेका श्रीकृष्ण र बलराम
**वयस्यान्** = समान उमेरका
**गोपान्** = गोप साथीहरूलाई
**आकृष्य** = तानेर
**तैः** = तिनीहरूसँग
**संसृज्य** = मिलेर
**वल्गन्तौ** = मल्लक्रीडा खेल्दै
**विजह्रतुः** = विहार गर्न लाग्नुभयो

**वाक्यार्थ–** भेरी आदि बाजा बजिरहँदा पाउको पाउजू छमछम बजाइरहनुभएका भगवान् श्रीकृष्ण र बलरामले आफ्ना साथीहरूलाई मञ्चमा तानेर तिनीहरूसँग मिलेर मल्लक्रीडा गर्दै विहार गर्न लाग्नुभयो ।

**जनाः प्रजहृषुः सर्वे कर्मणा रामकृष्णयोः ।**
**ऋते कंसं विप्रमुख्याः साधवः साधु साध्विति ॥ ३० ॥**

**पदार्थ–**
**कंसं** = कंसलाई
**ऋते** = छाडेर
**विप्रमुख्याः** = श्रेष्ठ ब्राह्मण समेतका
**सर्वे** = सबै
**साधवः** = सज्जन
**जनाः** = प्रजाहरू
**रामकृष्णयोः** = बलराम र श्रीकृष्णले गरेका
**कर्मणा** = आश्चर्यलाग्दा कार्यबाट
**प्रजहृषुः** = प्रसन्न भए र
**साधु साधु इति** = राम्रो भयो, राम्रो भयो भन्न लागे

**वाक्यार्थ–** बलराम र श्रीकृष्णको त्यो आश्चर्यलाग्दो पराक्रम देख्दा कंसबाहेक अरू सबै श्रेष्ठ ब्राह्मण तथा सज्जन प्रजाहरू अत्यन्त प्रसन्न भई 'राम्रो भयो, राम्रो भयो' भन्न लागे ।

**हतेषु मल्लवर्येषु विद्रुतेषु च भोजराट् ।**
**न्यवारयत् स्वतूर्याणि वाक्यं चेदमुवाच ह ॥ ३१ ॥**

**पदार्थ–**
**ह** = निश्चय नै
**मल्लवर्येषु** = मुख्य-मुख्य पहलमानहरू
**हतेषु** = मारिएपछि
**विद्रुतेषु च** = (बाँकी रहेका पनि) भागेपछि
**भोजराट्** = भोजराज कंसले
**स्वतूर्याणि** = आफ्ना भेरी आदि बाजा बजाउन
**न्यवारयत्** = बन्द गरायो र
**इदं** = यस्तो
**वाक्यं** = वाक्य
**उवाच** = बोल्यो

**वाक्यार्थ–** यसप्रकार आफ्ना मुख्य-मुख्य पहलमानमध्ये केही मारिएपछि र केही डरले भागेपछि भोजराज कंसले बजिरहेका भेरी आदि बाजाहरू बन्द गरायो र यस्तो आदेश दियो ।

**निःसारयत दुर्वृत्तौ वसुदेवात्मजौ पुरात् ।**
**धनं हरत गोपानां नन्दं बध्नीत दुर्मतिम् ॥ ३२ ॥**

| पदार्थ– | **पुरात्** = नगर (मथुरा)बाट | **हरत** = अपहरण गर |
|---|---|---|
| **दुर्वृत्तौ** = दुराचारी | **निःसारयत** = निकाल | **दुर्मतिं** = कुबुद्धि भएको |
| **वसुदेवात्मजौ** = वसुदेवका छोरा | **गोपानां** = गोपहरूको | **नन्दं** = नन्दलाई |
| कृष्ण र बलरामलाई | **धनं** = सम्पत्ति | **बध्नीत** = बाँध |

**वाक्यार्थ–** वसुदेवका छोरा यी दुराचारी कृष्ण र बलरामलाई मथुराबाट बाहिर निकाल, गोपहरूको धनसम्पत्ति अपहरण गर र कुबुद्धि भएको नन्दलाई बाँध।

**वसुदेवस्तु दुर्मेधा हन्यतामाश्वसत्तमः ।**
**उग्रसेनः पिता चापि सानुगः परपक्षगः ॥ ३३ ॥**

| पदार्थ– | **आशु** = छिट्टै | लाग्ने |
|---|---|---|
| **दुर्मेधा** = दुर्बुद्धि भएको | **हन्यताम्** = मारियोस् | **पिता** = बाबु |
| **असत्तमः** = अति दुष्ट | **सानुगः** = अनुयायीले सहित | **उग्रसेनः च अपि** = उग्रसेन पनि |
| **वसुदेवः तु** = वसुदेवलाई चाहिँ | **परपक्षगः** = शत्रुको पक्षमा | (मारियून्) |

**वाक्यार्थ–** दुर्बुद्धि भएको दुष्ट वसुदेवलाई छिट्टै मारिहाल र साथमा अनुयायीले सहित शत्रुको पक्षमा लाग्ने मेरा बाबु उग्रसेनलाई पनि मार।

**एवं विकत्थमाने वै कंसे प्रकुपितोऽव्ययः ।**
**लघिम्नोत्पत्य तरसा मञ्चमुत्तुङ्गमारुहत् ॥ ३४ ॥**

| पदार्थ– | **प्रकुपितः** = अत्यन्त | **तरसा** = वेगले |
|---|---|---|
| **वै** = निश्चय नै | रिसाउनुभएका | **उत्तुङ्गं** = अग्लो |
| **एवं** = यसप्रकार | **अव्ययः** = अविनाशी भगवान् | **मञ्चं** = मञ्चमा |
| **कंसे** = कंसले | श्रीकृष्ण | **आरुहत्** = चढ्नुभयो |
| **विकत्थमाने** = (अहङ्कारपूर्वक) | **लघिम्ना** = हलुकासित (सजिलै) | |
| बोलिरहेको वेलामा | **उत्पत्य** = उफ्रेर | |

**वाक्यार्थ–** कंसले यसप्रकारसित आज्ञा दिइरहेको वेलामा अत्यन्त रिसाउनुभएका भगवान् श्रीकृष्ण उफ्रिएर अग्लो मञ्चमा सजिलै चढ्नुभयो।

**तमाविशन्तमालोक्य मृत्युमात्मन आसनात् ।**
**मनस्वी सहसोत्थाय जगृहे सोऽसिचर्मणी ॥ ३५ ॥**

**पदार्थ–**
**मनस्वी** = शूरवीर
**सः** = त्यस कंसले
**आत्मनः** = आफ्नो
**मृत्युः** = मृत्युस्वरूप
**तं** = ती (कृष्ण)लाई
**आविशन्तं** = (मञ्चतिर) आउँदै गरेको
**आलोक्य** = देखेर
**आसनात्** = सिंहासनबाट
**सहसा** = एकाएक
**उत्थाय** = उठेर
**असिचर्मणी** = तरबार र ढाल
**जगृहे** = समात्यो

**वाक्यार्थ–** त्यस शूरवीर कंसले आफ्नो मृत्युरूप कृष्णलाई मञ्चतिर आउँदै गरेको देखेर आसनबाट जुरुक्क उठी तरबार र ढाल समात्यो।

**तं खड्गपाणिं विचरन्तमाशु श्येनं यथा दक्षिणसव्यमम्बरे।**
**समग्रहीद् दुर्विषहोग्रतेजा यथोरगं ताक्ष्र्यसुतः प्रसह्य ॥ ३६ ॥**

**पदार्थ–**
**खड्गपाणिं** = हातरमा तरबार लिएको
**अम्बरे** = आकाशमा
**श्येनं यथा** = बाज झैँ
**आशु** = छिटो–छिटो
**दक्षिणसव्यं** = दायाँ–बायाँ
**विचरन्तं** = घुमिरहेको
**तं** = त्यो कंसलाई
**दुर्विषहोग्रतेजाः** = सहन नसक्ने प्रचण्ड वेगवाला भगवान्‌ले
**यथा** = जसरी
**ताक्ष्र्यसुतः** = गरुडले
**उरगं** = सर्पलाई पक्डिन्छ (त्यसै गरी)
**प्रसह्य** = बलपूर्वक
**समग्रहीत्** = समात्नुभयो

**वाक्यार्थ–** हातमा तरबार लिएको कंस प्रहार गर्ने मौका खोज्दै आकाशमा बाजपंक्षी झैँ कहिले भगवान्‌को दाहिनेतिर र कहिले देब्रेतिर घुम्न लाग्यो तर ज्यादै तीव्र वेग भएका भगवान् श्रीकृष्णले गरुडले सर्पलाई समाते झैँ त्यसलाई च्याप्प समात्नुभयो।

**प्रगृह्य केशेषु चलत्किरीटं निपात्य रङ्गोपरि तुङ्गमञ्चात्।**
**तस्योपरिष्टात् स्वयमब्जनाभः पपात विश्वाश्रय आत्मतन्त्रः ॥ ३७ ॥**

**पदार्थ–**
**विश्वाश्रयः** = संसारका आश्रय
**आत्मतन्त्रः** = परम स्वतन्त्र
**अब्जनाभः** = कमलनाभ भगवान् श्रीकृष्णले
**चलत्किरीटं** = मुकुट खसेको कंसलाई
**केशेषु** = कपालमा
**प्रगृह्य** = समाएर
**तुङ्गमञ्चात्** = अग्लो मञ्चबाट
**रङ्गोपरि** = रङ्गभूमिमा
**निपात्य** = खसालेर
**तस्य** = त्यसको
**उपरिष्टात्** = माथिपट्टि
**स्वयं** = आफू पनि
**पपात** = खस्नुभयो (हाम फाल्नुभयो)

**वाक्यार्थ–** संसारका एक मात्र आश्रय, परम स्वतन्त्र, कमलनाभ भगवान् श्रीकृष्णले मुकुट खसेको त्यस कंसलाई कपालमा समातेर मञ्चबाट तल भुइँमा पछार्नुभयो र त्यसपछि आफू पनि त्यसैमाथि हाम फाल्नुभयो।

**तं सम्परेतं विचकर्ष भूमौ हरिर्यथेभं जगतो विपश्यतः ।**
**हा हेति शब्दः सुमहांस्तदाभूदुदीरितः सर्वजनैर्नरेन्द्र ॥ ३८ ॥**

**पदार्थ–**
**नरेन्द्र** = हे राजा परीक्षित्
**जगतः** = सबैले
**विपश्यतः** = हेर्दा-हेर्दै (भगवान्ले)
**सम्परेतं** = मरेको
**तं** = त्यो कंसलाई
**हरिः** = सिंहले
**इभं** = हात्तीलाई
**यथा** = झैं
**भूमौ** = भुइँमा
**विचकर्ष** = तान्न (घिसार्न) लाग्नुभयो
**तदा** = त्यस समयमा
**सर्वजनैः** = सबै जनाद्वारा
**उदीरितः** = उच्चारण गरिएको
**सुमहान्** = ठुलो
**हा हा इति शब्दः** = हाहाकार ध्वनि
**अभूत्** = भयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! (भुइँमा पछारिनासाथ) मरेको कंसको लाशलाई भगवान् श्रीकृष्णले सबैका सामुन्ने सिंहले हात्तीलाई घिसारे झैं घिसार्न लाग्नुभयो। त्यसवेला त्यहाँ बसेका सबै मान्छे कराएको ठुलो हाहाकार ध्वनि सुनियो।

**स नित्यदोद्विग्नधिया तमीश्वरं पिबन् वदन् वा विचरन् स्वपञ्छ्वसन् ।**
**ददर्श चक्रायुधमग्रतो यतस्तदेव रूपं दुरवापमाप ॥ ३९ ॥**

**पदार्थ–**
**सः** = त्यो कंसले
**नित्यदा** = सधैं
**उद्विग्नधिया** = भयभीत बुद्धिले
**चक्रायुधं** = सुदर्शन चक्र हतियार लिनुभएका
**तं** = उहाँ
**ईश्वरं** = भगवान् श्रीकृष्णलाई
**पिबन्** = पिउँदा
**वदन्** = बोल्दा
**विचरन्** = घुम्दा
**स्वपन्** = सुत्दा तथा
**श्वसन् वा** = सास फेर्दा समेत
**अग्रतः** = आफ्नो अगाडि
**ददर्श** = देखदथ्यो
**यतः** = त्यही कारणले
**दुरवापं** = अत्यन्त दुर्लभ
**तत् एव** = त्यही
**रूपं** = स्वरूपलाई
**आप** = प्राप्त गर्‍यो

**वाक्यार्थ–** डरका कारण सधैं कंसले खाँदा, बोल्दा, घुम्दा, सुत्दा र सास फेर्दा समेत आफ्ना अगाडि हातमा सुदर्शन चक्र लिनुभएका भगवान् श्रीकृष्णलाई देखिरहन्थ्यो। त्यसकारण मरिसकेपछि उसले त्यही दुर्लभ स्वरूपलाई प्राप्त गर्‍यो।

**तस्यानुजा भ्रातरोऽष्टौ कङ्कन्यग्रोधकादयः ।**
**अभ्यधावन्नभिक्रुद्धा भ्रातुर्निर्वेशकारिणः ॥ ४० ॥**

**पदार्थ–**
**तस्य** = त्यो कंसका
**कङ्कन्यग्रोधकादयः** = कङ्क, न्यग्रोधक आदि
**अनुजाः** = पछि जन्मिएका
**अष्टौ** = आठ

**भ्रातरः** = भाइहरू
**अभिक्रुद्धाः** = अत्यन्त रिसाएर
**भ्रातुर्निर्वेशकारिणः** = आफ्ना दाजुलाई मारेको बदला लिनका लागि
**अभ्यधावन्** = (भगवान् भएतिर) दौडिए

**वाक्यार्थ–** कंसका कङ्क, न्यग्रोधक आदि नामका आठ भाइहरू दाजुलाई मारेको देखेर अत्यन्त रिसाउँदै बदला लिनका लागि भगवान् भएतिर दौडिए।

**तथातिरभसांस्तांस्तु संयत्तान् रोहिणीसुतः।**
**अहन् परिघमुद्यम्य पशूनिव मृगाधिपः॥ ४१॥**

**पदार्थ–**
**तथा** = त्यसरी (युद्धका लागि तयार भएर)
**अतिरभसान्** = अति वेगशाली
**संयत्तान्** = लड्नका लागि आएका
**तान् तु** = ती कंसका भाइहरूलाई
**रोहिणीसुतः** = रोहिणीपुत्र बलरामले
**परिघं** = परिघ (फलामे लौरो)
**उद्यम्य** = उठाएर
**मृगाधिपः** = सिंहले
**पशून् इव** = सामान्य जनावरहरूलाई झैँ
**अहन्** = मार्नुभयो

**वाक्यार्थ–** युद्धका लागि तयार भएर वेगले दौडँदै आइरहेका ती कंसका भाइहरूलाई रोहिणीपुत्र बलरामले परिघ उठाएर सिंहले सामान्य जनावरहरूलाई मारे झैँ मार्नुभयो।

**नेदुर्दुन्दुभयो व्योम्नि ब्रह्मेशाद्या विभूतयः।**
**पुष्पैः किरन्तस्तं प्रीताः शशंसुर्ननृतुः स्त्रियः॥ ४२॥**

**पदार्थ–**
**व्योम्नि** = (त्यसै वेला) आकाशमा
**दुन्दुभयः** = दुन्दुभि आदि बाजाहरू
**नेदुः** = बज्न लागे
**ब्रह्मेशाद्याः** = ब्रह्मा, शङ्कर आदि
**विभूतयः** = देवताहरूले
**पुष्पैः** = पुष्पहरूद्वारा
**किरन्तः** = वर्षा गर्दै
**तं** = उहाँ (भगवान्)को
**शशंसुः** = प्रशंसा गर्न लागे
**प्रीताः** = प्रसन्न भएका
**स्त्रियः** = (स्त्रीहरू) अप्सराहरू
**ननृतुः** = नाच्न लागे

**वाक्यार्थ–** त्यसै वेला आकाशमा दुन्दुभिलगायतका बाजाहरू बज्न लागे। ब्रह्मा, शङ्कर आदि देवताहरूले पुष्पवृष्टि गर्दै भगवान्‌को प्रशंसा गर्न लागे र अप्सराहरू नाच्न लागे।

**तेषां स्त्रियो महाराज सुहृन्मरणदुःखिताः।**
**तत्राभीयुर्विनिघ्नन्त्यः शीर्षाण्यश्रुविलोचनाः॥ ४३॥**

**पदार्थ–**
**महाराज** = हे महाराज
**तेषां** = तिनीहरूका (कंस आदिका)
**सुहृन्मरणदुःखिताः** = प्रियजनको मृत्युले दुःखी भएका

**अश्रुविलोचनाः** = आँसुले भरिएका आँखा भएका
**स्त्रियः** = पत्नीहरू
**शीर्षाणि** = टाउको
**विनिघ्नन्त्यः** = ठोक्दै
**तत्र** = त्यो रङ्गभूमिमा
**अभीयुः** = आइपुगे

**वाक्यार्थ–** हे महाराज ! त्यसपछि प्रियजनको मृत्युले अत्यन्त दुःखी भएका, आँसुले आँखा भरिएका कंस आदिका पत्नीहरू टाउको ठोक्दै त्यस रङ्गभूमिमा आइपुगे।

**शयानान् वीरशय्यायां पतीनालिङ्ग्य शोचतीः।**

**विलेपुः सुस्वरं नार्यो विसृजन्त्यो मुहुः शुचः॥ ४४॥**

**पदार्थ–**
**वीरशय्यायां** = रणभूमिमा
**शयानान्** = लडिरहेका
**पतीन्** = (मृत) पतिहरूलाई
**आलिङ्ग्य** = अँगालो हालेर
**शोचतीः** = अत्यन्त शोक गर्दै
**शुचः** = आँसु
**विसृजन्त्यः** = झारिरहेका
**नार्यः** = ती नारीहरू
**सुस्वरं** = ठुलो स्वरमा
**मुहुः** = बारम्बार
**विलेपुः** = विलाप गर्न लागे

**वाक्यार्थ–** शोकले विह्वल भएका ती नारीहरूले रणभूमिमा लडिरहेका आफ्ना मरेका पतिहरूलाई अँगालो हालेर आँसु बगाउँदै ठुलो स्वरमा बारम्बार विलाप गर्न लागे।

**हा नाथ प्रिय धर्मज्ञ करुणानाथवत्सल।**

**त्वया हतेन निहता वयं ते सगृहप्रजाः॥ ४५॥**

**पदार्थ–**
**प्रिय** = हे प्यारा
**धर्मज्ञ** = हे धर्मवेत्ता
**करुणानाथ** = हे करुणाका स्वामी
**वत्सल** = हे अत्यन्त स्नेही
**हा नाथ** = हे स्वामी
**हतेन** = मृत्यु भएका
**त्वया** = हजुरद्वारा
**सगृहप्रजाः** = घरबार र आफन्तले सहित भएका
**ते** = हजुरका
**वयं** = हामी पनि
**निहताः** = मारियौँ

**वाक्यार्थ–** हे स्वामी ! हे प्यारा ! हे धर्मवेत्ता ! हे करुणानिधान ! तपाईं मारिनाले घरबार र सन्तान सहित हामीहरू पनि मारियौँ।

**त्वया विरहिता पत्या पुरीयं पुरुषर्षभ।**

**न शोभते वयमिव निवृत्तोत्सवमङ्गला॥ ४६॥**

**पदार्थ–**
**पुरुषर्षभ** = हे पुरुषश्रेष्ठ
**पत्या** = पतिरूप
**त्वया** = हजुरद्वारा
**विरहिता** = रहित भएकी
**इयं** = यो
**पुरी** = मथुरा पुरी
**निवृत्तोत्सवमङ्गलाः** = उत्सव, मङ्गलहरू सबै हराएका
**वयं इव** = हामी झैँ
**न शोभते** = शोभित भएको छैन

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ ! पतिरूप हजुरले रहित भएकी यी मथुरा पुरीको पनि हाम्रो जस्तै कुनै शोभा छैन, हाम्रा झैं यसका पनि सम्पूर्ण उत्सव र मङ्गलहरू केही हुँदैनन्।

**अनागसां त्वं भूतानां कृतवान् द्रोहमुल्बणम्।**
**तेनेमां भो दशां नीतो भूतध्रुक् को लभेत शम्॥ ४७॥**

| पदार्थ– | **द्रोहं** = द्वेष | **भूतध्रुक्** = निरपराध प्राणीसँग द्रोह गर्ने |
|---|---|---|
| **भो** = हे स्वामी | **कृतवान्** = गर्नुभयो | **कः** = कसले |
| **त्वं** = हजुरले | **तेन** = त्यही कारणले | **शं** = कल्याण |
| **अनागसां** = निरपराधी | **इमां** = यस्तो | **लभेत** = पाउला र |
| **भूतानां** = प्राणीहरूसँग | **दशां** = अवस्थामा | |
| **उल्बणं** = घोर | **नीतः** = प्राप्त हुनुभयो | |

**वाक्यार्थ–** हे स्वामी ! हजुरले निरपराधी प्राणीहरूसँग घोर द्वेष गर्नुभयो। त्यसैले हजुरलाई यस्तो गति प्राप्त भयो, निरपराध प्राणीसँग द्रोह गर्ने कसले चाहिँ कल्याण पाउला र ?

**सर्वेषामिह भूतानामेष हि प्रभवाप्ययः।**
**गोप्ता च तदवध्यायी न क्वचित् सुखमेधते॥ ४८॥**

| पदार्थ– | **भूतानां** = प्राणीहरूका | गर्नेले |
|---|---|---|
| **हि** = निश्चय नै | **प्रभवाप्ययः** = उत्पत्तिकर्ता र विनाशक | **क्वचित्** = कहीँ पनि |
| **इह** = यस संसारमा | **गोप्ता च** = रक्षक पनि हुनुहुन्छ | **सुखं** = सुख |
| **एषः** = यिनै भगवान् | **तदवध्यायी** = उहाँको तिरस्कार | **न एधते** = प्राप्त गर्दैन |
| **सर्वेषां** = सम्पूर्ण | | |

**वाक्यार्थ–** यस संसारमा रहेका सम्पूर्ण प्राणीहरूको उत्पत्ति, पालन र संहार गर्ने यिनै भगवान् हुनुहुन्छ, उहाँको तिरस्कार गर्नेले कहीँ पनि सुख प्राप्त गर्दैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**राजयोषित आश्वास्य भगवांल्लोकभावनः।**
**यामाहुर्लौकिकीं संस्थां हतानां समकारयत्॥ ४९॥**

| पदार्थ– | **राजयोषितः** = राजा (कंस)की पत्नीहरूलाई | **हतानां** = मरेकाहरूका निम्ति |
|---|---|---|
| **लोकभावनः** = संसारका पालक | **आश्वास्य** = सम्झाई-बुझाई गरेर | **यां** = जस्तो |
| **भगवान्** = भगवान् श्रीकृष्णले | | **लौकिकीं** = लौकिक |

| | | |
|---|---|---|
| **संस्थां** = काजक्रिया | **आहुः** = भन्दछन् (त्यसलाई) | **समकारयत्** = गराउनुभयो |

**वाक्यार्थ–** संसारका पालक भगवान् श्रीकृष्णले कंसपत्नीहरूलाई सम्झाई-बुझाई शान्त पार्नुभयो र त्यसपछि मरेकाहरूका लागि लोकमा जे-जस्तो काजक्रिया गर्ने व्यवस्था छ, त्यो गराउनुभयो।

**मातरं पितरं चैव मोचयित्वाथ बन्धनात्।**

**कृष्णरामौ ववन्दाते शिरसा स्पृश्य पादयोः॥ ५०॥**

| | | |
|---|---|---|
| पदार्थ– | **बन्धनात्** = बन्धन (कारागार) बाट | **शिरसा** = शिरले |
| **अथ** = त्यसपछि | **मोचयित्वा एव** = मुक्त गरेर | **पादयोः** = पाउमा |
| **मातरं** = माता (र) | **कृष्णरामौ** = श्रीकृष्ण, बलरामले | **आस्पृश्य** = छोएर |
| **पितरं च** = पितालाई पनि | | **ववन्दाते** = वन्दना गर्नुभयो |

**वाक्यार्थ–** त्यसपछि श्रीकृष्ण र बलरामले मातापितालाई बन्धनबाट मुक्त गर्नुभयो र शिरले पाउमा छोएर वन्दना गर्नुभयो।

**देवकी वसुदेवश्च विज्ञाय जगदीश्वरौ।**

**कृतसंवन्दनौ पुत्रौ सस्वजाते न शङ्कितौ॥ ५१॥**

| | | |
|---|---|---|
| पदार्थ– | **पुत्रौ** = दुबै छोरालाई | **न सस्वजाते** = आलिङ्गन गर्नुभएन |
| **देवकी** = देवकी र | **जगदीश्वरौ** = जगत्का मालिक | |
| **वसुदेवः च** = वसुदेवले पनि | **विज्ञाय** = सम्झेर | |
| **कृतसंवन्दनौ** = वन्दना गरिरहेका | **शङ्कितौ** = शङ्कित हुनुभयो र | |

**वाक्यार्थ–** देवकी र वसुदेवले पनि वन्दना गरिरहेका दुबै छोरालाई जगत्का मालिक भगवान् सम्झेर शङ्कित हुनुभयो र आलिङ्गन गर्नुभएन।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**कंसवधो नाम चतुश्चत्वारिंशोऽध्यायः॥ ४४॥**

# अथ पञ्चचत्वारिंशोऽध्यायः

## श्रीकृष्ण र बलरामको उपनयन संस्कार एवं गुरुकुल प्रवेश

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**पितरावुपलब्धार्थौ विदित्वा पुरुषोत्तमः ।**

**मा भूदिति निजां मायां ततान जनमोहिनीम् ॥ १ ॥**

**पदार्थ–**
**पुरुषोत्तमः** = भगवान् श्रीकृष्णले
**पितरौ** = मातापिताले
**उपलब्धार्थौ** = वास्तविक कुरा बुझेर (आफूप्रति भगवद्भाव गरेको)
**विदित्वा** = थाहा पाई
**मा भूत् इति** = यस्तो नहोस् भन्ने हेतुले
**जनमोहिनीम्** = संसारलाई मोहित गर्ने
**निजां** = आफ्नो
**मायां** = मायाशक्ति
**ततान** = फैलाउनुभयो

**वाक्यार्थ–** माता, पिताले आफूलाई जगदीश्वर ठानी भगवद्भाव गर्न लागेको बुझेर त्यसो नहोस् भनी भगवान् श्रीकृष्णले संसारलाई मोहित पार्ने आफ्नो मायाशक्तिलाई फैलाउनुभयो।

**उवाच पितरावेत्य साग्रजः सात्वतर्षभः ।**

**प्रश्रयावनतः प्रीणन्नम्ब तातेति सादरम् ॥ २ ॥**

**पदार्थ–**
**साग्रजः** = बलरामले सहित
**सात्वतर्षभः** = यादवश्रेष्ठ श्रीकृष्णले
**पितरौ** = मातापिताको नजिक
**एत्य** = गएर
**प्रश्रयावनतः** = नम्रतापूर्वक झुकेर
**सादरं** = आदरपूर्वक
**अम्ब** = हे माता
**तात** = हे पिता
**इति** = इत्यादि वचनद्वारा
**प्रीणन्** = प्रसन्न गराउँदै
**उवाच** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** यदुवंशीहरूमा श्रेष्ठ भगवान् श्रीकृष्ण दाजु बलरामका साथमा मातापिताका नजिकै गएर नम्रतापूर्वक झुकेर आदरपूर्वक 'हे माता ! हे पिता !' इत्यादि वचनद्वारा उहाँहरूलाई प्रसन्न गराउँदै भन्न लाग्नुभयो।

**नास्मत्तो युवयोस्तात नित्योत्कण्ठितयोरपि ।**

**बाल्यपौगण्डकैशोराः पुत्राभ्यामभवन् क्वचित् ॥ ३ ॥**

**पदार्थ–**
**तात** = हे पिताजी
**अस्मत्तः** = हामीप्रति
**नित्योत्कण्ठितयोः** = सधैं उत्कण्ठित भए
**अपि** = पनि

**युवयोः** = हजुर दुईलाई
**पुत्राभ्याम्** = हामी पुत्रद्वारा
**बाल्यपौगण्डकैशोराः** = बाल्य, पौगण्ड र किशोर अवस्थाका
**क्वचित्** = कुनै पनि आनन्द
**न अभवन्** = प्राप्त भएनन्

**वाक्यार्थ–** हे पिताजी ! हजुरहरू सधैँ हामीलाई प्राप्त गर्न उत्कण्ठित भइरहनुभयो तर पनि हाम्रो बाल्य, पौगण्ड र किशोर अवस्थामा हामीले दिने कुनै पनि आनन्द हजुरहरूलाई प्राप्त भएन।

**न लब्धो दैवहतयोर्वासो नौ भवदन्तिके।**
**यां बालाः पितृगेहस्था विन्दन्ते लालिता मुदम्॥ ४॥**

पदार्थ–
**दैवहतयोः** = भाग्यले ठगिएका
**नौ** = हामी दुईले पनि
**भवदन्तिके** = हजुरहरूको नजिक
**वासः** = बस्ने सुअवसर
**न लब्धः** = प्राप्त गरेनौँ
**पितृगेहस्थाः** = आफ्ना पिताको घरमा रहेर
**लालिताः** = लालनपालन गरिएका
**बालाः** = बालकहरूले
**यां** = जुन
**मुदं** = खुसी
**विन्दन्ते** = पाउँछन् (त्यो पनि हामीले पाएनौँ)

**वाक्यार्थ–** भाग्यले ठगिएका कारण छोरा भएर पनि हामी दुईले हजुरहरूको नजिक बस्ने सुअवसर प्राप्त गरेनौँ। पिताको घरमा लालनपालन गरिएका बालकहरूले जुन खुसी प्राप्त गर्दछन्, त्यो पनि हामीले पाएनौँ।

**सर्वार्थसम्भवो देहो जनितः पोषितो यतः।**
**न तयोर्याति निर्वेशं पित्रोर्मर्त्यः शतायुषा॥ ५॥**

पदार्थ–
**सर्वार्थसम्भवः** = सम्पूर्ण पुरुषर्थप्राप्तिको साधन भएको
**देहः** = शरीर
**यतः** = जुन बाबुआमाद्वारा
**जनितः** = जन्माइयो (र)
**पोषितः** = पालन गरियो
**तयोः** = ती दुई
**पित्रोः** = बाबुआमाको
**निर्वेशं** = उपकारको बदला
**मर्त्यः** = मान्छेले
**शतायुषा** = सयौँ वर्षको आयुले पनि
**न याति** = तिर्न सक्दैन

**वाक्यार्थ–** सम्पूर्ण पुरुषार्थप्राप्तिको साधन भएको यो शरीर जुन बाबुआमाबाट उत्पन्न भयो र पालित भयो, त्यसको बदला तिर्न सयौँ वर्षको आयुले पनि सकिँदैन।

**यस्तयोरात्मजः कल्प आत्मना च धनेन च।**
**वृत्तिं न दद्यात् तं प्रेत्य स्वमांसं खादयन्ति हि॥ ६॥**

पदार्थ–
**यः** = जुन
**आत्मजः** = सन्तानले
**कल्पः** = समर्थ भएर पनि
**आत्मना च** = शरीरले र
**धनेन च** = धनले पनि
**तयोः** = ती बाबुआमाको
**वृत्तिं** = सेवा
**न दद्यात्** = गर्दैन

| | | |
|---|---|---|
| **तं** = त्यसलाई | **हि** = निश्चय नै | **खादयन्ति** = खुवाउँछन् |
| **प्रेत्य** = मरेपछि (यमदूतले) | **स्वमांसं** = आफ्नै मासु | |

**वाक्यार्थ–** जुन सन्तानले सामर्थ्य हुँदाहुँदै पनि शरीर, धन आदिद्वारा आफ्ना बाबुआमाको सेवा गर्दैन, त्यसलाई मरेपछि यमराजका दूतहरूले उसैको मासु खुवाउँछन्।

**मातरं पितरं वृद्धं भार्यां साध्वीं सुतं शिशुम्।**

**गुरुं विप्रं प्रपन्नं च कल्पोऽबिभ्रच्छ्वसन् मृतः॥ ७॥**

| पदार्थ– | | |
|---|---|---|
| **कल्पः** = समर्थ भएर पनि | **साध्वीं** = पतिव्रता | **विप्रं** = ब्राह्मणलाई |
| **वृद्धं** = बुढा | **भार्यां** = पत्नीलाई | **प्रपन्नं च** = शरणमा परेकालाई |
| **मातरं** = आमा | **शिशुं** = बालक | **अबिभ्रत्** = पालनपोषण नगर्ने |
| **पितरं** = बाबुलाई | **सुतं** = छोरालाई | **श्वसन्** = जिउँदो |
| | **गुरुं** = गुरुलाई | **मृतः** = मुर्दा हो |

**वाक्यार्थ–** समर्थ भएर पनि बुढा आमाबाबु, पतिव्रता पत्नी, बालक छोरा, गुरु, ब्राह्मण र शरणागतको पालनपोषण नगर्ने मानिस जिउँदो मुर्दा हो।

**तन्नावकल्पयोः कंसान्नित्यमुद्विग्नचेतसोः।**

**मोघमेते व्यतिक्रान्ता दिवसा वामनर्चतोः॥ ८॥**

| पदार्थ– | | |
|---|---|---|
| **तत्** = त्यसकारण | भएका कारण | **नौ** = हामी दुईका |
| **कंसात्** = कंसदेखि | **अकल्पयोः** = असमर्थ बनेका | **एते** = यी |
| **नित्यं** = सधैं | **वां** = हजुरहरूको | **दिवसाः** = दिनहरू |
| **उद्विग्नचेतसोः** = चित्त उद्विग्न | **अनर्चतोः** = पूजा (सेवा) | **मोघं** = व्यर्थै |
| | नगरेका | **व्यतिक्रान्ताः** = बिते |

**वाक्यार्थ–** कंसको डरले चित्त डराएर केही गर्न नसक्ने बनेका हाम्रा यी दिनहरू हजुरहरूको सेवा नगरीकन व्यर्थै बिते।

**तत् क्षन्तुमर्हथस्तात मातर्नौ परतन्त्रयोः।**

**अकुर्वतोर्वां शुश्रूषां क्लिष्टयोर्दुर्हृदा भृशम्॥ ९॥**

| पदार्थ– | | |
|---|---|---|
| **तात** = हे पिता | **भृशं** = अत्यन्त | **वां** = हजुरहरूको |
| **मातः** = हे माता | **क्लिष्टयोः** = दुःख दिइएका | **शुश्रूषां** = सेवा |
| **दुर्हृदा** = दुष्ट कंसद्वारा | **परतन्त्रयोः** = परतन्त्र हुनुभएका | **अकुर्वतोः** = नगरेका |
| | (कारागारमा थुनिनुभएका) | **नौ** = हामी दुईलाई |

**तत्** = त्यस अपराधमा
**क्षन्तुं** = क्षमा दिन
**अर्हथः** = योग्य हुनुहुन्छ

**वाक्यार्थ–** हे पिता ! हे माता ! दुष्ट कंसले हजुरहरूलाई अत्यन्त दुःख-कष्ट दिएर कारागारमा थुनिदिएका कारण हामीहरूले हजुरहरूको कुनै सेवा गर्न सकेनौं। त्यस अपराधका लागि हामीलाई क्षमा गरिदिनुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति मायामनुष्यस्य हरेर्विश्वात्मनो गिरा।**
**मोहितावङ्कमारोप्य परिष्वज्यापतुर्मुदम्॥ १०॥**

**पदार्थ–**
**मायामनुष्यस्य** = लीला गर्नका निम्ति मनुष्यशरीर धारण गर्नुभएका
**विश्वात्मनः** = विश्वका आत्मा
**हरेः** = श्रीकृष्णको
**इति** = यसप्रकारको
**गिरा** = वाणीद्वारा
**मोहितौ** = मोहित भएका वसुदेव र देवकीले (श्रीकृष्ण, बलरामलाई)
**अङ्कं** = काखमा
**आरोप्य** = राखेर
**परिष्वज्य** = अँगालो मारी
**मुदं** = आनन्द
**आपतुः** = प्राप्त गर्नुभयो

**वाक्यार्थ–** लीला गर्नका निम्ति मनुष्यशरीर धारण गर्नुभएका विश्वका आत्मा भगवान् श्रीकृष्णको यसप्रकारको कथनद्वारा मोहित भएका वसुदेव र देवकीले उहाँहरूलाई काखमा लिएर अँगालो मार्दै आनन्दको अनुभव गर्नुभयो।

**सिञ्चन्तावश्रुधाराभिः स्नेहपाशेन चावृतौ।**
**न किञ्चिदूचतू राजन् बाष्पकण्ठौ विमोहितौ॥ ११॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**अश्रुधाराभिः** = आँसुका धाराहरूद्वारा
**सिञ्चन्तौ** = सेचन गरिरहेका
**स्नेहपाशेन च** = स्नेहको डोरीले
**आवृतौ** = बाँधिएका
**विमोहितौ** = मोहित भएका र
**बाष्पकण्ठौ** = आँसु आउनाले गला अवरुद्ध भएका (देवकी र वसुदेवले)
**किञ्चित्** = केही पनि
**न ऊचतुः** = बोल्नुभएन

**वाक्यार्थ–** हे राजा परीक्षित् ! आँखाबाट बगेका आँसुका धाराले काखमा राखेका पुत्रहरूलाई भिजाइरहेका, स्नेहको डोरीले बाँधिएका, मोहित भएका र आँसु आउनाले गला अवरुद्ध भएका वसुदेव र देवकीले केही पनि बोल्नुभएन।

**एवमाश्वास्य पितरौ भगवान् देवकीसुतः।**
**मातामहं तूग्रसेनं यदूनामकरोन्नृपम्॥ १२॥**

**पदार्थ–**
**भगवान्** = ऐश्वर्यशाली
**देवकीसुतः** = देवकीका छोरा भगवान् श्रीकृष्णले
**एवं** = यसप्रकार
**पितरौ** = बाबुआमालाई
**आश्वास्य** = आश्वस्त पारेर
**मातामहं** = मावली हजुरबुबा
**उग्रसेनं तु** = उग्रसेनलाई
**यदूनां** = यदुवंशीहरूका
**नृपं** = राजा
**अकरोत्** = बनाउनुभयो

**वाक्यार्थ–** यसरी मातापितालाई सान्त्वना दिइसकेपछि देवकीनन्दन भगवान् श्रीकृष्णले आफ्ना मावली हजुरबुबा उग्रसेनलाई यदुवंशीहरूका राजा बनाउनुभयो।

**आह चास्मान् महाराज प्रजाश्चाज्ञप्तुमर्हसि।**
**ययातिशापाद् यदुभिर्नासितव्यं नृपासने॥ १३॥**

**पदार्थ–**
**आह च** = (भगवान् श्रीकृष्णले) भन्नुभयो पनि
**महाराज** = हे महाराज
**अस्मान्** = हामी
**प्रजाः च** = प्रजाहरूलाई
**आज्ञप्तुं** = आज्ञा दिन
**अर्हसि** = सक्नुहुन्छ
**ययातिशापात्** = ययातिको श्रापको कारण
**यदुभिः** = यदुवंशीहरूले
**नृपासने** = राजसिंहासनमा
**न आसितव्यं** = बस्नुहुँदैन

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले भन्नुभयो– हे महाराज ! हामी हजुरका प्रजा हौँ। अतः हामीलाई आज्ञा दिन सक्नुहुन्छ। ययातिको श्राप परेकाले यदुवंशीहरूले राजसिंहासनमा बस्नुहुँदैन।

**टिप्पणी–** ययाति र यदुको प्रसङ्ग भागवतको ९/१८/३८-४० मा र ९/१९/२२-२३ मा आउँछ। ययातिले आफ्ना जेठा छोरा यदुलाई तिम्रो यौवन मलाई देऊ म विषयभोग गर्न चाहन्छु भनी माग्दा यदुले आफ्नो यौवन दिन अस्वीकार गरेका थिए। त्यसैले ययातिले यदु आदि चार छोरालाई नदिई कान्छो छोरो पूरुलाई आफ्नो सम्पूर्ण राज्य दिएका थिए। यसरी ययातिले जेठा छोरा यदुलाई राज्याधिकारबाट वञ्चित गराएका थिए।

**मयि भृत्य उपासीने भवतो विबुधादयः।**
**बलिं हरन्त्यवनताः किमुतान्ये नराधिपाः॥ १४॥**

**पदार्थ–**
**मयि** = म
**भृत्ये** = सेवकको रूपमा
**उपासीने** = रहेपछि
**अवनताः** = नतमस्तक भएका
**विबुधादयः** = देवताहरूले
**भवतः** = हजुरको लागि
**बलिं** = उपहार
**हरन्ति** = टक्र्याउँदछन् भने
**अन्ये** = अरू
**नराधिपाः** = राजाहरूको त
**किम् उत** = के कुरा

**वाक्यार्थ–** म हजुरको सेवकका रूपमा रहेपछि हजुरलाई देवताहरूले त नतमस्तक भएर उपहार चढाउँछन् भने अन्य राजाहरूको त के कुरा ?

**सर्वान् स्वाञ्ज्ञातिसम्बन्धान् दिग्भ्यः कंसभयाकुलान् ।**
**यदुवृष्ण्यन्धकमधुदाशार्हकुकुरादिकान् ॥ १५ ॥**
**सभाजितान् समाश्वास्य विदेशावासकर्शितान् ।**
**न्यवासयत् स्वगेहेषु वित्तैः सन्तर्प्य विश्वकृत् ॥ १६ ॥**

पदार्थ–
**विश्वकृत्** = संसारका निर्माता भगवान् श्रीकृष्णले
**कंसभयाकुलान्** = कंसको डरले आकुल-व्याकुल भएका
**विदेशावासकर्शितान्** = परदेशको बसाइको दुःखले पीडित
**सर्वान्** = सम्पूर्ण
**यदुवृष्ण्यन्धकमधुदाशार्हकुकुरादिकान्** = यदु, वृष्णि, अन्धक, मधु, दाशार्ह र कुकुर आदि वंशमा उत्पन्न भएका
**स्वान्** = आफ्ना
**ज्ञातिसम्बन्धान्** = दाजुभाइ र सम्बन्धीहरूलाई
**दिग्भ्यः** = विभिन्न दिशाबाट (बोलाएर)
**समाश्वास्य** = सान्त्वना दिएर
**सभाजितान्** = सम्मानित भएका उनीहरूलाई
**वित्तैः** = धनसम्पत्तिद्वारा
**सन्तर्प्य** = सन्तुष्ट बनाएर
**स्वगेहेषु** = आ-आफ्ना घरतर्फ
**न्यवासयत्** = फर्काउनुभयो

**वाक्यार्थ–** संसारका निर्माता भगवान् श्रीकृष्णले कंसको डरले आकुल-व्याकुल भई जहाँ-तहीँ छरिएर विदेसिएका आफ्ना सम्पूर्ण यदु, वृष्णि, अन्धक, मधु, दाशार्ह र कुकुर आदि वंशमा उत्पन्न भएका दाजुभाइ र सम्बन्धीहरूलाई बोलाएर सान्त्वना दिनुभयो र त्यसपछि सम्मानपूर्वक धनसम्पत्ति दिएर सन्तुष्ट बनाएर आ-आफ्नो घर फर्काउनुभयो ।

**कृष्णसङ्कर्षणभुजैर्गुप्ता लब्धमनोरथाः ।**
**गृहेषु रेमिरे सिद्धाः कृष्णरामगतज्वराः ॥ १७ ॥**
**वीक्षन्तोऽहरहः प्रीता मुकुन्दवदनाम्बुजम् ।**
**नित्यं प्रमुदितं श्रीमत् सदयस्मितवीक्षणम् ॥ १८ ॥**

पदार्थ–
**कृष्णसङ्कर्षणभुजैः** = श्रीकृष्ण र बलरामका बाहुद्वारा
**गुप्ताः** = सुरक्षित भएका
**कृष्णरामगतज्वराः** = श्रीकृष्ण र बलरामद्वारा सम्पूर्ण दुःख-कष्ट हटाइएका
**लब्धमनोरथाः** = इच्छा अनुसार फल प्राप्त गरेका
**प्रीताः** = प्रसन्न
**सिद्धाः** = सज्जनहरूले
**नित्यं** = सधैँ
**प्रमुदितं** = प्रसन्न रहने
**श्रीमत्** = शोभासम्पन्न
**सदयस्मितवीक्षणं** = दयालु मुस्कान र हेराइले सहित भएको
**मुकुन्दवदनाम्बुजं** = मुकुन्द भगवान्को मुखकमललाई
**अहरहः** = दिनदिनै
**वीक्षन्तः** = अवलोकन गर्दै
**गृहेषु** = आ-आफ्ना घरमा
**रेमिरे** = रमाउन लागे

**वाक्यार्थ–** श्रीकृष्ण र बलरामको बाहुबलद्वारा सुरक्षित भएका कारण दुःखकष्ट हटेर प्रसन्न भएका र इच्छा अनुसार फल प्राप्त गरेका सज्जनहरूले सधैँ प्रसन्न रहने शोभासम्पन्न दयालु मुस्कान र हेराइले सहित भएको मुकुन्द भगवान्‌को मुखकमललाई दिनदिनै अवलोकन गर्दै आ-आफ्नो घरमा रमाउन लागे।

**तत्र प्रवयसोऽप्यासन् युवानोऽतिबलौजसः।**
**पिबन्तोऽक्षैर्मुकुन्दस्य मुखाम्बुजसुधां मुहुः॥ १९॥**

**पदार्थ–**
**तत्र** = त्यहाँ (मथुरामा)
**अक्षैः** = आँखाले
**मुकुन्दस्य** = भगवान् श्रीकृष्णको
**मुखाम्बुजसुधां** = मुखरूपी कमलको अमृतलाई
**मुहुः** = बारम्बार
**पिबन्तः** = पान गरिरहेका
**प्रवयसः** = बुढाबुढी
**अपि** = पनि
**युवानः** = युवाजस्ता
**अतिबलौजसः** = अति बलशाली र चम्किला
**आसन्** = थिए

**वाक्यार्थ–** आँखाले निरन्तर भगवान्‌को मुखरूपी कमलको अमृत पान (भगवान्‌को दर्शन) गरेका कारण मथुराका बुढाबुढीहरू पनि युवा जस्तै अति बलिया र चम्किला देखिए।

**अथ नन्दं समासाद्य भगवान् देवकीसुतः।**
**सङ्कर्षणश्च राजेन्द्र परिष्वज्येदमूचतुः॥ २०॥**

**पदार्थ–**
**राजेन्द्र** = हे महाराज परीक्षित्
**अथ** = त्यसपछि
**देवकीसुतः** = देवकीपुत्र
**भगवान्** = भगवान् श्रीकृष्ण र
**सङ्कर्षणः च** = बलराम पनि
**नन्दं** = नन्द भएको ठाउँमा
**समासाद्य** = आएर
**परिष्वज्य** = अङ्कमाल गर्दै
**इदं** = यस्तो कुरा
**ऊचतुः** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यसपछि देवकीपुत्र भगवान् श्रीकृष्ण र बलराम दुबै जना नन्द भएको ठाउँमा आउनुभयो र उहाँलाई अङ्कमाल गर्दै यसो भन्न लाग्नुभयो।

**पितर्युवाभ्यां स्निग्धाभ्यां पोषितौ लालितौ भृशम्।**
**पित्रोरभ्यधिका प्रीतिरात्मजेष्वात्मनोऽपि हि॥ २१॥**

**पदार्थ–**
**पितः** = हे पिताजी
**स्निग्धाभ्यां** = परम स्नेही
**युवाभ्यां** = हजुर दुईले (हाम्रो)
**भृशं** = अत्यन्त
**लालितौ** = लालन
**पोषितौ** = पालन गर्नुभयो
**हि** = निश्चय नै
**पित्रोः** = बाबुआमाको
**आत्मजेषु** = सन्तानका प्रति
**आत्मनः अपि** = आफूलाई भन्दा पनि
**अभ्यधिकाः** = बढ्ता
**प्रीतिः** = प्रेम हुन्छ

**वाक्यार्थ–** हे पिताजी ! हजुर र माता यशोदाले बडो स्नेहसँग हाम्रो लालन-पालन गर्नुभयो। निश्चय नै बाबुआमाले आफूलाई भन्दा पनि बढी प्रेम सन्तानलाई गर्दछन्।

**स पिता सा च जननी यौ पुष्णीतां स्वपुत्रवत्।**
**शिशून् बन्धुभिरुत्सृष्टानकल्पैः पोषरक्षणे॥ २२॥**

**पदार्थ–**
**पोषरक्षणे** = पालन र रक्षा गर्न
**अकल्पैः** = असमर्थ
**बन्धुभिः** = बन्धु (आफन्त) हरूद्वारा
**उत्सृष्टान्** = त्यागिएका
**शिशून्** = बालबालिकालाई
**यौ** = जसले
**स्वपुत्रवत्** = आफ्नै सन्तानलाई झैं
**पुष्णीतां** = पालनपोषण गर्दछन्
**सः** = त्यही नै
**पिता** = बाबु हो र
**सा च** = तिनै
**जननी** = आमा हुन्

**वाक्यार्थ–** पालनपोषण गर्न असमर्थ आफन्तहरूद्वारा त्यागिएका बालबालिकालाई पनि जसले आफ्नै सन्तानलाई झैं लालनपोषण गर्दछन्, वास्तवमा तिनै नै बाबु र आमा हुन्।

**यात यूयं व्रजं तात वयं च स्नेहदुःखितान्।**
**ज्ञातीन् वो द्रष्टुमेष्यामो विधाय सुहृदां सुखम्॥ २३॥**

**पदार्थ–**
**तात** = हे पिताजी
**यूयं** = हजुरहरू
**व्रजं** = व्रजमा
**यात** = जानुहोस्
**वयं च** = हामीहरू पनि
**सुहृदां** = स्नेही बन्धुबान्धवलाई
**सुखं** = सुखी
**विधाय** = बनाएर
**स्नेहदुःखितान्** = प्रेमका कारण दुःखी
**ज्ञातीन्** = प्रिय बान्धव
**वः** = हजुरहरूलाई
**द्रष्टुं** = देख्न
**एष्यामः** = आउनेछौँ

**वाक्यार्थ–** हे पिताजी ! अब हजुरहरू व्रजमा जानुहोस्। हामीहरू स्नेही बन्धुबान्धवलाई प्रसन्न गराएर प्रेमका कारण विछोडमा दुःखी हुनुभएका हजुरहरूलाई भेट्न आउनेछौँ।

**एवं सान्त्वय्य भगवान् नन्दं सव्रजमच्युतः।**
**वासोऽलङ्कारकुप्याद्यैरर्हयामास सादरम्॥ २४॥**

**पदार्थ–**
**भगवान्** = भगवान्
**अच्युतः** = अच्युतले
**एवं** = यसप्रकार
**सव्रजं** = व्रजवासी सहित
**नन्दं** = नन्दलाई
**सान्त्वय्य** = सान्त्वना दिएर
**सादरं** = आदरपूर्वक
**वासोऽलङ्कारकुप्याद्यैः** = वस्त्र, गरगहना, भाँडाकुँडा आदि दिएर
**अर्हयामास** = सत्कार गर्नुभयो

**वाक्यार्थ–** भगवान् अच्युतले व्रजवासीले सहित नन्दलाई सान्त्वना दिएर आदरपूर्वक वस्त्र, गरगहना, भाँडाकुँडा आदि दिएर सत्कार गर्नुभयो।

**इत्युक्तस्तौ परिष्वज्य नन्दः प्रणयविह्वलः।**
**पूरयन्नश्रुभिर्नेत्रे सह गोपैर्व्रजं ययौ॥ २५॥**

**पदार्थ–**
**इति उक्तः** = (भगवान्द्वारा) यति भनिएका
**प्रणयविह्वलः** = प्रेमले विह्वल भएका
**नन्दः** = नन्द
**तौ** = उहाँ दुई (श्रीकृष्ण र बलराम)लाई
**परिष्वज्य** = अङ्कमाल गरेर
**नेत्रे** = दुबै आँखा
**अश्रुभिः** = आँसुले
**पूरयन्** = भर्दै
**गोपैः सह** = गोपहरूका साथमा
**व्रजं** = व्रजमा
**ययौ** = प्रस्थान गर्नुभयो

**वाक्यार्थ–** भगवान्ले यसो भन्नुभएपछि प्रेमले विह्वल भएका नन्दले श्रीकृष्ण र बलराम दुबैलाई अङ्कमाल गर्नुभयो र आँखाभरि आँसु लिएर गोपहरूका साथमा व्रजतर्फ प्रस्थान गर्नुभयो।

**अथ शूरसुतो राजन् पुत्रयोः समकारयत्।**
**पुरोधसा ब्राह्मणैश्च यथावद् द्विजसंस्कृतिम्॥ २६॥**

**पदार्थ–**
**राजन्** = हे राजा
**अथ** = त्यसपछि
**शूरसुतः** = शूरपुत्र वसुदेवले
**पुरोधसा** = पुरोहित र
**ब्राह्मणैः च** = ब्राह्मणहरूद्वारा पनि
**पुत्रयोः** = दुबै छोराको
**यथावत्** = विधिपूर्वक
**द्विजसंस्कृतिं** = द्विजातिको संस्कार (यज्ञोपवीत संस्कार)
**समकारयत्** = गराउनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! त्यसपछि वसुदेवले पुरोहित र ब्राह्मणहरूलाई बोलाएर दुबै छोराको विधिपूर्वक द्विजातिले गर्ने यज्ञोपवीत संस्कार गराउनुभयो।

**तेभ्योऽदाद् दक्षिणा गावो रुक्ममालाः स्वलङ्कृताः।**
**स्वलङ्कृतेभ्यः सम्पूज्य सवत्साः क्षौममालिनीः॥ २७॥**

**पदार्थ–**
**स्वलङ्कृतेभ्यः** = वस्त्र, आभूषण आदिले सुसज्जित भएका
**तेभ्यः** = ती ब्राह्मणहरूलाई
**सम्पूज्य** = पूजा गरेर
**स्वलङ्कृताः** = सिँगारिएका
**रुक्ममालाः** = सुनको माला लगाएका
**सवत्साः** = बाच्छाले सहित भएका
**क्षौममालिनीः** = रेसमी वस्त्र र माला लगाएका
**गावः** = गाईहरू
**दक्षिणाः** = दक्षिणाका रूपमा
**अदात्** = दिनुभयो

**वाक्यार्थ–** वसुदेवले ब्राह्मणहरूलाई अनेक प्रकारका कपडा र आभूषणले सिँगारेर उनीहरूको पूजा गर्नुभयो र घाँटीमा सुनको माला र शरीरमा रेसमी कपडा लगाएर सुसज्जित भएका बाच्छा सहितका गाईहरू दक्षिणाका रूपमा दिनुभयो।

**याः कृष्णरामजन्मर्क्षे मनोदत्ता महामतिः।**
**ताश्चाददादनुस्मृत्य कंसेनाधर्मतो हृताः॥ २८॥**

**पदार्थ–**
**महामतिः** = बुद्धिमान् वसुदेवले
**कृष्णरामजन्मर्क्षे** = श्रीकृष्ण र बलरामको जन्म नक्षत्रमा
**याः** = जति गाई
**मनोदत्ताः** = दान गर्ने सङ्कल्प गर्नुभएको थियो (तर)
**कंसेन** = कंसद्वारा
**अधर्मतः** = बलपूर्वक
**हृताः** = अपहरण गरिएका
**ताः च** = ती गाईलाई पनि
**अनुस्मृत्य** = सम्झी-सम्झी
**अददात्** = दान गर्नुभयो

**वाक्यार्थ–** बुद्धिमान् वसुदेवले श्रीकृष्ण र बलरामको जन्मसमयमा जे-जति गाई दान गर्ने सङ्कल्प गर्नुभएको थियो तर कंसले ती सबै अपहरण गरेर लगेको थियो, ती प्रत्येकलाई सम्झी-सम्झी दान गर्नुभयो।

**ततश्च लब्धसंस्कारौ द्विजत्वं प्राप्य सुव्रतौ।**
**गर्गाद् यदुकुलाचार्याद् गायत्रं व्रतमास्थितौ॥ २९॥**

**पदार्थ–**
**ततः च** = त्यसपछि
**लब्धसंस्कारौ** = उपनयन संस्कार गरिएका
**यदुकुलाचार्यात्** = यदुकुलका पुरोहित
**गर्गात्** = गर्गबाट
**द्विजत्वं** = द्विजत्वभाव
**प्राप्य** = पाएर
**सुव्रतौ** = व्रतनिष्ठ भएका श्रीकृष्ण-बलरामले
**गायत्रं** = गायत्री जपको
**व्रतं** = नियम
**आस्थितौ** = पालन गर्नुभयो

**वाक्यार्थ–** यसरी यदुकुलका पुरोहित गर्गाचार्यबाट उपनयनसंस्कार भएपछि व्रतनिष्ठ श्रीकृष्ण र बलरामले गायत्री जपको नियम पालन गर्नुभयो।

**प्रभवौ सर्वविद्यानां सर्वज्ञौ जगदीश्वरौ।**
**नान्यसिद्धामलज्ञानं गूहमानौ नरेहितैः॥ ३०॥**

**पदार्थ–**
**सर्वविद्यानां** = सम्पूर्ण विद्याका
**प्रभवौ** = उत्पत्तिकर्ता
**सर्वज्ञौ** = सर्वज्ञ
**जगदीश्वरौ** = संसारका मालिक श्रीकृष्ण र बलरामले
**नान्यसिद्धामलज्ञानं** = स्वतः सिद्ध निर्मल ज्ञानलाई
**नरेहितैः** = मान्छेको कल्याणका निम्ति
**गूहमानौ** = गोप्य नै राख्नुभएको थियो

**वाक्यार्थ–** सम्पूर्ण विद्याका उत्पत्तिकर्ता संसारका मालिक सर्वज्ञ भगवान् श्रीकृष्ण र बलरामले मान्छेको हितका निम्ति आफ्नो निर्मल ज्ञान गोप्य नै राख्नुभएको थियो।

**अथो गुरुकुले वासमिच्छन्तावुपजग्मतुः।**
**काश्यं सान्दीपनिं नाम ह्यवन्तिपुरवासिनम्॥ ३१॥**

**पदार्थ–**
**अथो** = त्यसपछि
**हि** = निश्चय नै (दुबै भाइ)
**गुरुकुले** = गुरुकुलमा
**वासं** = बस्न
**इच्छन्तौ** = इच्छा गर्दै
**अवन्तिपुरवासिनं** = उज्जैनमा बसोबास गर्ने
**सान्दीपनिं नाम** = सान्दीपनि नामका
**काश्यं** = कश्यपगोत्रीय गुरुकहाँ
**उपजग्मतुः** = जानुभयो

**वाक्यार्थ–** त्यसपछि गुरुकुलमा बसेर विद्या आर्जन गर्न चाहने ती दुबै भाइ उज्जैनमा बस्ने सान्दीपनि नामक कश्यपगोत्रीय गुरुकहाँ जानुभयो।

**यथोपसाद्य तौ दान्तौ गुरौ वृत्तिमनिन्दिताम्।**
**ग्राहयन्तावुपेतौ स्म भक्त्या देवमिवादृतौ॥ ३२॥**

**पदार्थ–**
**तौ** = ती श्रीकृष्ण र बलराम
**यथा** = विधिपूर्वक
**उपसाद्य** = गुरुको नजिक गई
**दान्तौ** = जितेन्द्रिय बनेर
**गुरौ** = गुरुप्रति
**अनिन्दितां** = (अनिन्दित) प्रशंसनीय
**वृत्तिं** = वृत्ति (सेवाभाव)
**ग्राहयन्तौ** = प्रदर्शन गर्दै
**आदृतौ** = गुरुद्वारा प्रशंसित हुँदै
**भक्त्या** = भक्तिपूर्वक
**देवं इव** = इष्ट देवतालाई झैँ
**उपेतौ स्म** = सेवा गर्न लाग्नुभयो

**वाक्यार्थ–** विधिपूर्वक गुरुका नजिक पुग्नुभएका जितेन्द्रिय श्रीकृष्ण र बलरामले गुरुप्रति गर्नुपर्ने प्रशंसनीय सेवाभाव देखाउँदै र गुरुद्वारा आफूसमेत प्रशंसित हुँदै भक्तिपूर्वक गुरुको सेवा गर्न लाग्नुभयो।

**तयोर्द्विजवरस्तुष्टः शुद्धभावानुवृत्तिभिः।**
**प्रोवाच वेदानखिलान् साङ्गोपनिषदो गुरुः॥ ३३॥**

**पदार्थ–**
**तयोः** = उहाँहरू दुबैले (श्रीकृष्ण बलरामले) गरेको
**शुद्धभावानुवृत्तिभिः** = शुद्ध भावना र सेवाद्वारा
**तुष्टः** = सन्तुष्ट हुनुभएका
**द्विजवरः** = ब्राह्मणश्रेष्ठ
**गुरुः** = गुरु सान्दीपनिले
**साङ्गोपनिषदः** = अङ्गसहित उपनिषद् (र)
**अखिलान्** = सम्पूर्ण
**वेदान्** = वेदहरू
**प्रोवाच** = पढाउनुभयो

**वाक्यार्थ–** श्रीकृष्ण र बलरामले देखाएको शुद्ध भावना र सेवाद्वारा सन्तुष्ट हुनुभएका गुरु सान्दीपनिले उहाँहरूलाई सम्पूर्ण अङ्गसहित उपनिषद्हरू र सबै वेदहरू पढाउनुभयो।

**सरहस्यं धनुर्वेदं धर्मान् न्यायपथांस्तथा।**
**तथा चान्वीक्षिकीं विद्यां राजनीतिं च षड्विधाम्॥ ३४॥**

**पदार्थ–**
**सरहस्यं** = मन्त्ररहस्य (र देवता) सहित
**धनुर्वेदं** = धनुर्वेद
**धर्मान्** = धर्मशास्त्रहरू
**तथा** = त्यस्तै
**न्यायपथान्** = मीमांसाशास्त्र
**तथा च** = त्यसै गरी
**आन्वीक्षिकीं विद्यां** = आन्विक्षिकी विद्या (तर्कशास्त्र)
**षड्विधां** = छ प्रकारको (सन्धि, विग्रह, यान, आसन, द्वैधभाव र आश्रय)
**राजनीतिम् च** = राजनीति समेत (पढाउनुभयो)

**वाक्यार्थ–** यसबाहेक मन्त्ररहस्य र देवता सहित धनुर्वेद, धर्मशास्त्रहरू, मीमांसाशास्त्र, आन्विक्षिकी विद्या (तर्कशास्त्र) तथा छ प्रकार (सन्धि, विग्रह, यान, आसन, द्वैधभाव र आश्रय)को राजनीति समेत पढाउनुभयो।

**सर्वं नरवरश्रेष्ठौ सर्वविद्याप्रवर्तकौ।**
**सकृन्निगदमात्रेण तौ सञ्जगृहतुर्नृप॥ ३५॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**नरवरश्रेष्ठौ** = मनुष्यहरूमा श्रेष्ठ
**सर्वविद्याप्रवर्तकौ** = सम्पूर्ण विद्याका प्रवर्तक
**तौ** = ती दुई भाइले
**सकृत्** = एकपटक
**निगदमात्रेण** = भन्दाखेरि नै
**सर्वं** = सम्पूर्ण विद्या
**सञ्जगृहतुः** = राम्रोसँग ग्रहण गर्न लाग्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! पुरुषहरूमा श्रेष्ठ, सम्पूर्ण विद्याका प्रवर्तक ती दुईभाइले गुरुले एक पटक भन्नासाथ सम्पूर्ण विद्या ग्रहण गर्न लाग्नुभयो।

**अहोरात्रैश्चतुःषष्ट्या संयत्तौ तावतीः कलाः।**
**गुरुदक्षिणयाचार्यं छन्दयामासतुर्नृप॥ ३६॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**संयत्तौ** = जितेन्द्रिय श्रीकृष्ण र बलरामले
**चतुःषष्ट्या** = चौसट्ठी
**अहोरात्रैः** = दिनमा नै
**तावतीः** = त्यत्ति नै
**कलाः** = कला (चौसट्ठी विद्या प्राप्त गर्नुभयो र)
**गुरुदक्षिणया** = गुरुदक्षिणाका लागि
**आचार्यं** = गुरुलाई
**छन्दयामासतुः** = अनुरोध गर्नुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसरी जितेन्द्रिय श्रीकृष्ण र बलरामले चौसट्ठी दिनमा नै चौसठ्ठी विद्या ग्रहण गर्नुभयो र गुरुदक्षिणाका लागि आचार्यलाई अनुरोध गर्नुभयो।

**विवरण–** यहाँ चौसठ्ठी कलालाई चौसठ्ठी विद्याका रूपमा लिइएको छ। ती चौसठ्ठी कला

के–के हुन् भन्ने कुरा श्रीधरस्वामीकृत भावार्थदीपिका, वंशीधरकृत भावार्थदीपिकाप्रकाश, जीवगोस्वामीकृत वैष्णवतोषिणी आदि भागवतका टीकाहरूमा स्पष्ट पारिएको छ। तिनीहरू यस प्रकार छन्– १. गीत (गायन) २. वाद्यवादन ३. नृत्य ४. नाट्य (नाटक) ५. आलेख्य (चित्रकला) ६. विशेषकच्छेद्य (मुख र शरीरमा रङ्गीन लेप र अङ्गराग लगाउनु) ७. तण्डुलकुसुम–वलि–विकार (माङ्गलिक कार्यविशेषमा चामलको पिठो र फूलद्वारा चित्र तयार गर्नु) ८. पुष्पास्तरण (फूलको ओछ्यान बनाउनु) ९.दशन–वसनाङ्गराग (दाँत, कपडा र शरीरका अन्य अङ्गहरू रङ्गाउनु) १०. मणिभूमिका–कर्म (मणि आदि गहनाद्वारा भुइँ सिँगार्नु ११. शय्यारचना (ओछ्यान बनाउनु) १२. उदकवाद्य (पानीको करुवा बजाउनु) १३. उदकघात (पानी छ्याप्नु) १४. चित्रयोग (चित्रमा रङ्ग मिलाउनु) १५. माल्य–ग्रथन–विकल्प (माला गाँस्नु) १६. शेखरापीडयोजन (टाउकामा फेटा बनाउनु वा शिरमा फूलको माला सजाउनु) १७. नेपथ्य–योग (परिधान कक्षमा गई वस्त्र आदि लगाउनु) १८. कर्णपत्र–भङ्ग (कानको लोता सिँगार्नु) १९. सुगन्ध–युक्ति (सुगन्धित वस्तु लगाउनु) २०. भूषणयोजन (गहना लगाउनु) २१. ऐन्द्रजाल (चटक देखाउनु) २२. कौचुमारयोग (छद्म रूप लिनु) २३. हस्तलाघव (हस्तकुशलता) २४. चित्रशाकापूपभक्ष्य–विकार–क्रिया (सलाद, अपुङ्गो आदि विभिन्न प्रकारका स्वादिष्ट भोजन तयार गर्नु) २५. पानकरसरागासवयोजन (विभिन्न किसिमका स्वादिष्ट पेय पदार्थ तयार गर्नु) २६. सूचीवाय–कर्म (सिलाइ र बुनाइ) २७. सूत्र–क्रीडा (डोरी घुमाएर गरिने खेल) २८. वीणाडमरुकवाद्य (वीणा र डमरु बजाउनु) २९. प्रहेलिका (गाउँखाने कथा जस्ता कूट प्रश्नहरू सोध्ने उत्तर दिने गर्नु) ३० दुर्वचक–योग (अरूलाई उत्तर दिन कठिन हुने खालका कथन) ३१. पुस्तक–वाचन ३२. नाटिकाख्यायिका–दर्शन (लघु नाटकको अभिनय र लघुकथा लेखन) ३३. काव्यसमस्यापूरण (काव्य सम्बन्धी कूट प्रश्न समाधान गर्नु वा पादपूरण गर्नु) ३४. पट्टिका–वेत्रबाण–विकल्प (बेत र कपडाबाट बाण बनाउनु) ३५. तर्कु–कर्म (कतुवाद्वारा धागो कात्नु) ३६. तक्षण (काठ ताछ्ने, बनाउने आदि सिकर्मीको काम) ३७. वास्तु विद्या ३८. सुवर्ण–रत्न परीक्षा (सुन, रत्न आदिको परीक्षण) ३९. धातुवाद (धातुशोधन) ४०. मणिरागज्ञान (विभिन्न रङ्गद्वारा मणि आदि रत्नलाई रङ्गाउनु) ४१. आकर ज्ञान (खानी सम्बन्धी ज्ञान) ४२. वृक्षायुर्वेद योग (आयुर्वेदिक औषधिको ज्ञान) ४३. मेषकुक्कुटलावक–युद्ध–विधि (भेडा, कुखुरा र बट्टाई लडाउने तरिका) ४४. शूकसारिकाप्रलापन (सुगाका भाले र पोथीलाई बोल्न सिकाउने विधि ४५. उत्सादन (औषधी लेपनद्वारा घाउ निको पार्नु) ४६. केश–मार्जन–कौशल (कपाल काट्ने वा मिलाउने सिप) ४७. अक्षरमुष्टिका–कथन (किताबमा लेखिएको कुरा नहेरी भन्न सक्नु र अरूको मुठीमा लुकाइएको वस्तु चिन्न सक्नु) ४८. म्लेच्छित–कुतर्क–विकल्प (असभ्य कुरा भन्नु वा कुतर्क गर्नु) ४९. देश–भाषा ज्ञान (स्थानविशेषको भाषाको ज्ञान) ५०. पुष्प–शकटिका–निर्मिति ज्ञान (फूलको खैलौना वा गाडा बनाउने सिप) ५१. यन्त्रमात्रिका (चारै तिरका अङ्कहरू जोड्दा समान योगफल निस्कने विभिन्न कोठा भएको चतुष्कोण बनाउने सिप) ५२. धारणमात्रिका (बुटी धारण) ५३. संवाच्य (वार्तालाप) ५४. मानसी काव्यक्रिया (मनमनै कविता रच्नु) ५५. क्रियाविकल्प (साहित्यिक कार्ययोजना रोग

निदान विधि) ५६. चलितकयोग (वेदी निर्माण) ५७. अभिधानकोशच्छन्दोज्ञान (शब्द र छन्दको ज्ञान) ५८. वस्त्रगोपन (एक किसिमको कपडा लुकाएर अर्कै किसिमको कपडा जस्तो बनाएर देखाउनु) ५९. द्यूतविशेष (विभिन्न किसिमका जुवाहरूको खेल) ६०. आकर्षक्रीडा (टाढा रहेका खेलौनालाई टाढै बसेर चलाई खेलिने खेल) ६१. बालक क्रीडनक (बच्चाका खेलौनाहरू खेल्नु) ६२. वैनायिकी विद्या (हात्ती, घोडा आदिसम्बन्धी शिक्षा) ६३. वैजयिकी विद्या (विजय प्राप्त गर्ने तरिकासम्बन्धी विद्या) ६४. वैतालिकी विद्या (कसैको मालिकलाई सङ्गीतको प्रयोग गरी बिहान बिउँझाउनु)। यी सबै विद्या भगवान् श्रीकृष्ण र बलरामले ६४ दिनमा नै सिक्नुभएको थियो।

**द्विजस्तयोस्तं महिमानमद्भुतं संलक्ष्य राजन्नतिमानुषीं मतिम्।**
**सम्मन्त्र्य पत्न्या स महार्णवे मृतं बालं प्रभासे वरयाम्बभूव ह ॥ ३७ ॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**ह** = निश्चय नै
**सः द्विजः** = ती ब्राह्मण (गुरु सान्दीपनिले पनि)
**तयोः** = ती दुई (श्रीकृष्ण र बलरामको)
**तं** = त्यस प्रकारको
**अद्भुतं** = अद्भुत
**महिमानं** = महिमा र
**अतिमानुषीं** = अलौकिक
**मतिं** = बुद्धिलाई
**संलक्ष्य** = बुझेर
**पत्न्या** = पत्नीसँग
**सम्मन्त्र्य** = सल्लाह गरेर
**प्रभासे** = प्रभास क्षेत्रमा
**महार्णवे** = ठुलो समुद्रमा डुबेर
**मृतं** = मरेको
**बालं** = छोरालाई
**वरयाम्बभूव** = गुरुदक्षिणाका रूपमा मागे

**वाक्यार्थ–** हे महाराज परीक्षित्! श्रीकृष्ण र बलरामको अद्भुत महिमा र अलौकिक बुद्धिलाई देखेर आश्चर्यचकित भएका गुरु सान्दीपनिले पनि आफ्नी पत्नीसँग सल्लाह गरेर प्रभास क्षेत्रमा समुद्रमा डुबेर मरेको आफ्नो छोरालाई गुरुदक्षिणाका रूपमा मागे।

**तथेत्यथारुह्य महारथौ रथं प्रभासमासाद्य दुरन्तविक्रमौ।**
**वेलामुपव्रज्य निषीदतुः क्षणं सिन्धुर्विदित्वार्हणमाहरत् तयोः ॥ ३८ ॥**

**पदार्थ–**
**अथ** = त्यसपछि
**तथा इति** = त्यस्तै हुन्छ भन्दै
**दुरन्तविक्रमौ** = अत्यन्त पराक्रमी
**महारथौ** = महारथी श्रीकृष्ण र बलराम
**रथं** = रथमा
**आरुह्य** = चढेर
**प्रभासं** = प्रभास क्षेत्रमा
**आसाद्य** = पुगेर
**वेलां** = समुद्रको किनारमा
**उपव्रज्य** = पुगेर
**क्षणं** = केही बेर
**निषीदतुः** = बस्नुभयो
**सिन्धुः** = समुद्रले पनि
**विदित्वा** = यो सबै जानेर
**तयोः** = ती दुईको
**अर्हणं** = पूजा
**आहरत्** = गरे

**वाक्यार्थ–** त्यसपछि अत्यन्त पराक्रमी ती दुबै महारथी 'हस् हुन्छ' भन्दै रथमा चढेर प्रभास क्षेत्रमा समुद्रको किनारमा पुग्नुभयो र केहीबेर बस्नुभयो। यो सबै जानेका समुद्रले पनि उहाँहरूको

पूजा गरे।

**तमाह भगवानाशु गुरुपुत्रः प्रदीयताम्।**
**योऽसाविह त्वया ग्रस्तो बालको महतोर्मिणा॥ ३९॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्णले (समुद्रलाई)
**आह** = भन्नुभयो
**इह** = यहाँ
**महता** = ठुला-ठुला
**ऊर्मिणा** = जलतरङ्गले
**यः असौ** = जुन यो
**बालकः** = बालक
**गुरुपुत्रः** = गुरुको छोरो
**त्वया** = तिमीद्वारा
**ग्रस्तः** = डुबाइएको छ
**तं** = तिनलाई
**आशु** = छिट्टै
**प्रदीयतां** = देऊ

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले समुद्रलाई भन्नुभयो– तिमीले हाम्रा गुरुका छोरालाई विशाल जलतरङ्गमा डुबाएका छौ, तिनलाई छिट्टै देऊ।

**समुद्र उवाच** (समुद्रले भने)

**नैवाहार्षमहं देव दैत्यः पञ्चजनो महान्।**
**अन्तर्जलचरः कृष्ण शङ्खरूपधरोऽसुरः॥ ४०॥**

**पदार्थ–**
**देव** = हे देव
**कृष्ण** = हे श्रीकृष्ण
**अहं** = मैले (हजुरको गुरुपुत्रलाई)
**न एव अहार्षम्** = अपहरण गरेको छैन
**अन्तर्जलचरः** = पानीभित्र बस्ने
**शङ्खरूपधरः** = शङ्खरूपधारी
**पञ्चजनः** = पञ्चजन नामको
**महान्** = ठुलो
**दैत्यः** = दैत्य
**असुरः** = राक्षसले (अपहरण गऱ्यो होला)

**वाक्यार्थ–** हे देव ! मैले हजुरको गुरुपुत्रलाई हरण गरेको छैन। मेरो पानीभित्र पञ्चजन नाम गरेको शङ्खरूपधारी दैत्य बसेको छ, त्यसैले हजुरको गुरुपुत्रलाई हरण गऱ्यो होला।

**आस्ते तेनाहृतो नूनं तच्छ्रुत्वा सत्वरं प्रभुः।**
**जलमाविश्य तं हत्वा नापश्यदुदरेऽर्भकम्॥ ४१॥**

**पदार्थ–**
**नूनं** = पक्कै पनि
**तेन** = त्यही शङ्खासुरले
**आहृतः** = अपहरण गरेर
**आस्ते** = बसेको छ
**तत्** = त्यो सबै कुरा
**श्रुत्वा** = सुनेर
**प्रभुः** = श्रीकृष्ण
**सत्वरं** = छिट्टै
**जलं** = पानीमा
**आविश्य** = पसेर
**तं** = त्यस शङ्खासुरलाई
**हत्वा** = मारेर (हेर्दा पनि)
**उदरे** = (उसको) पेटमा
**अर्भकं** = बालक (गुरुपुत्र)लाई
**न अपश्यत्** = देख्नुभएन

**वाक्यार्थ–** 'पक्कै पनि त्यही दैत्यले अपहरण गऱ्यो होला' भन्ने समुद्रको कथन सुनिसकेपछि भगवान् श्रीकृष्ण जलभित्र प्रवेश गर्नुभयो र शङ्खासुरलाई मार्नुभयो, तर त्यसको पेटमा पनि गुरुपुत्रलाई देख्नुभएन।

**तदङ्गप्रभवं शङ्खमादाय रथमागमत्।**
**ततः संयमनीं नाम यमस्य दयितां पुरीम्॥ ४२॥**
**गत्वा जनार्दनः शङ्खं प्रदध्मौ सहलायुधः।**
**शङ्खनिर्ह्रादमाकर्ण्य प्रजासंयमनो यमः॥ ४३॥**
**तयोः सपर्यां महतीं चक्रे भक्त्युपबृंहिताम्।**
**उवाचावनतः कृष्णं सर्वभूताशयालयम्।**
**लीलामनुष्य हे विष्णो युवयोः करवाम किम्॥ ४४॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**तदङ्गप्रभवं** = त्यो पञ्चजन दैत्यको शरीरबाट उत्पन्न भएको
**शङ्खं** = पाञ्चजन्य शङ्ख
**आदाय** = लिएर
**रथं** = रथमा
**आगमत्** = आउनुभयो (त्यहाँबाट)
**संयमनीं** = संयमनी
**नाम** = नामको
**यमस्य** = यमराजको
**दयितां** = प्रिय
**पुरीम्** = पुरीमा
**गत्वा** = गएर
**सहलायुधः** = बलराम सहित
**जनार्दनः** = भगवान् श्रीकृष्णले
**शङ्खं** = पाञ्चजन्य शङ्ख
**प्रदध्मौ** = बजाउनुभयो
**शङ्खनिर्ह्रादं** = शङ्खको आवाज
**आकर्ण्य** = सुनेर
**प्रजासंयमनः** = प्राणीहरूलाई शासन गर्ने
**यमः** = यमराजले
**तयोः** = ती दुई श्रीकृष्ण र बलरामको
**भक्त्युपबृंहितां** = भक्तिभावले युक्त
**महतीं** = ठुलो
**सपर्यां** = पूजा (स्वागत-सत्कार)
**चक्रे** = गरे (र)
**अवनतः** = आदरपूर्वक झुकेर
**सर्वभूताशयालयं** = सम्पूर्ण प्राणीहरूका आधारस्वरूप
**कृष्णं** = श्रीकृष्णलाई
**उवाच** = भने
**लीलामनुष्य** = लीला गर्नका निम्ति मनुष्यशरीर धारण गर्नुभएका
**हे विष्णो** = हे सर्वव्यापक भगवान्
**युवयोः** = हजुर दुईको
**किं** = के सेवा
**करवाम** = गरौँ

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्ण पञ्चजन नामक दैत्यको शरीरबाट उत्पन्न शङ्ख लिएर रथमा फर्किनुभयो र बलरामले सहित भएर यमराजको प्रिय संयमनी नामक पुरीमा पुगेर त्यो पाञ्चजन्य शङ्ख बजाउनुभयो। शङ्खको त्यो आवाज सुनेर उपस्थित भएका प्राणीहरूका शासक यमराजले भक्तिभावले युक्त भई विधिपूर्वक उहाँहरूको ठुलो सत्कार गरे। त्यसपछि आदरपूर्वक

झुकेर सम्पूर्ण प्राणीहरूका एक मात्र आश्रय भगवान् श्रीकृष्णलाई भने– 'लीला गर्नका निम्ति मनुष्यशरीर धारण गर्नुभएका हे परमेश्वर ! हजुरहरूको म के सेवा गरूँ'।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**गुरुपुत्रमिहानीतं निजकर्मनिबन्धनम्।**

**आनयस्व महाराज मच्छासनपुरस्कृतः॥ ४५॥**

**पदार्थ–**
**महाराज** = हे महाराज (यमराज)
**निजकर्मनिबन्धनं** = आफ्नो कर्मफल अनुसार
**इह** = यस यमपुरीमा
**आनीतं** = ल्याइएका
**गुरुपुत्रं** = मेरा गुरुपुत्रलाई
**मच्छासनपुरस्कृतः** = मेरो आज्ञालाई स्वीकार गरेर
**आनयस्व** = ल्याऊ

**वाक्यार्थ–** हे यमराज ! आफ्नो कर्मफल अनुसार यहाँ ल्याइएका मेरा गुरुपुत्रलाई मेरो आज्ञा पालन गर्दै यहाँ ल्याऊ।

**तथेति तेनोपानीतं गुरुपुत्रं यदूत्तमौ।**

**दत्त्वा स्वगुरवे भूयो वृणीष्वेति तमूचतुः॥ ४६॥**

**पदार्थ–**
**तथा इति** = त्यस्तै हुन्छ भन्दै
**तेन** = ती यमराजद्वारा
**उपानीतं** = नजिक ल्याइएका
**गुरुपुत्रं** = गुरुपुत्र
**स्वगुरवे** = आफ्ना गुरुलाई
**दत्त्वा** = दिएर
**यदूत्तमौ** = यदुकुलशिरोमणि श्रीकृष्ण र बलरामले
**तं** = ती गुरु सान्दीपनिलाई
**भूयः** = फेरि (केही)
**वृणीष्व** = माग्नुहोस्
**इति** = यस्तो
**ऊचतुः** = भन्नुभयो

**वाक्यार्थ–** 'जो आज्ञा' भन्दै यमराजद्वारा ल्याइएका गुरुपुत्रलाई यदुकुलशिरोमणि श्रीकृष्ण र बलरामले ल्याएर गुरुलाई अर्पण गर्नुभयो। त्यसपछि उहाँहरूले फेरि अरू केही माग्नुहोस् भन्नुभयो।

**गुरुरुवाच** (गुरुले भन्नुभयो)

**सम्यक् सम्पादितो वत्स भवद्भ्यां गुरुनिष्क्रयः।**

**को नु युष्मद्विधगुरोः कामानामवशिष्यते॥ ४७॥**

**पदार्थ–**
**वत्स** = हे बाबु
**भवद्भ्यां** = तिमीहरूद्वारा
**गुरुनिष्क्रयः** = गुरुदक्षिणा
**सम्यक्** = राम्रोसँग
**सम्पादितः** = सम्पन्न गरियो
**युष्मद्विधगुरोः** = तिमीहरू जस्ताका गुरुको
**कामानाम्** = चाहनाहरूमध्ये

**को नु** = के चाहिँ
**अवशिष्यते** = बाँकी रहन्छ र

**वाक्यार्थ–** हे बाबु हो ! तिमीहरूले अति राम्रोसँग गुरुदक्षिणा अर्पण गऱ्यौ। तिमीहरू जस्ताका गुरुको अरू के चाहना बाँकी रहन्छ र ?

**गच्छतं स्वगृहं वीरौ कीर्तिर्वामस्तु पावनी ।**
**छन्दांस्ययातयामानि भवन्त्विह परत्र च ॥ ४८ ॥**

पदार्थ–
**वीरौ** = हे वीरहरू
**स्वगृहं** = आफ्नो घर
**गच्छतं** = जाओ
**वां** = तिमी दुईको
**कीर्तिः** = कीर्ति
**पावनी** = पवित्र (लोककल्याणकारी)
**अस्तु** = बनोस्
**छन्दांसि** = (तिमीहरूले अध्ययन गरेका) वेद आदि शास्त्र
**इह** = यस जन्ममा (र)
**परत्र च** = अर्को जन्ममा पनि
**अयातयामानि** = सधैँ ताजा
**भवन्तु** = होऊन्

**वाक्यार्थ–** हे वीरहरू ! अब तिमीहरू आफ्नो घर जाओ। तिमीहरूको कीर्ति लोककल्याणकारी बनोस्। तिमीहरूले अध्ययन गरेका सम्पूर्ण वेद आदि शास्त्र यस जन्ममा र अर्को जन्ममा समेत सधैँ ताजा होऊन्।

**गुरुणैवमनुज्ञातौ रथेनानिलरंहसा ।**
**आयातौ स्वपुरं तात पर्जन्यनिनदेन वै ॥ ४९ ॥**

पदार्थ–
**तात** = हे परीक्षित्
**गुरुणा** = गुरुद्वारा
**एवं** = यसप्रकार
**अनुज्ञातौ** = आशीर्वाद दिइएका श्रीकृष्ण र बलराम
**वै** = निश्चय नै
**अनिलरंहसा** = वायुको जस्तो वेग (र)
**पर्जन्यनिनदेन** = मेघको जस्तो आवाज भएको
**रथेन** = रथद्वारा
**स्वपुरं** = आफ्नो मथुरानगरीमा
**आयातौ** = आउनुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! श्रीकृष्ण र बलरामले गुरुबाट यसप्रकार आशीर्वाद प्राप्त गर्नुभयो र वायुको जस्तो गति र मेघको जस्तो आवाज भएको रथमा चढेर उहाँहरू आफ्नो मथुरापुरीमा आउनुभयो।

**समनन्दन् प्रजाः सर्वा दृष्ट्वा रामजनार्दनौ ।**
**अपश्यन्त्यो बह्वहानि नष्टलब्धधना इव ॥ ५० ॥**

पदार्थ–
**बह्वहानि** = धेरै दिन
**रामजनार्दनौ** = बलराम र श्रीकृष्णलाई
**अपश्यन्त्यः** = देख्न नपाएका
**सर्वाः** = सम्पूर्ण
**प्रजाः** = मथुरावासी प्रजाहरू
**दृष्ट्वा** = उहाँहरूलाई देखेर
**नष्टलब्धधनाः इव** = हराएको

धन प्राप्त गरेको मानिस झैँ | **समनन्दन्** = आनन्दित बने

**वाक्यार्थ–** श्रीकृष्ण र बलरामलाई धेरै दिनसम्म देख्न नपाएका मथुरावासीहरू उहाँहरू फर्केर आएको देखेर हराएको धन प्राप्त गरेको व्यक्ति झैँ आनन्दित बने।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**गुरुपुत्रानयनं नाम पञ्चचत्वारिंशोऽध्यायः॥ ४५॥**

# अथ षट्चत्वारिंशोऽध्यायः

## उद्धवको व्रजगमन

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वृष्णीनां प्रवरो मन्त्री कृष्णस्य दयितः सखा।**

**शिष्यो बृहस्पतेः साक्षादुद्धवो बुद्धिसत्तमः॥ १॥**

**पदार्थ–**

**उद्धवः** = उद्धव
**वृष्णीनां** = वृष्णिवंशीहरूमा
**प्रवरः** = श्रेष्ठ
**कृष्णस्य** = श्रीकृष्णका
**दयितः** = अति प्रिय
**सखा** = मित्र
**साक्षात्** = स्वयं
**बृहस्पतेः** = बृहस्पतिका
**शिष्यः** = चेला
**बुद्धिसत्तमः** = बुद्धिमान्
**मन्त्री** = मन्त्री (थिए)

**वाक्यार्थ–** वृष्णिवंशीहरूमा श्रेष्ठ भगवान् श्रीकृष्णका अति प्रिय मित्र, साक्षात् देवगुरु बृहस्पतिका शिष्य उद्धव बुद्धिमान् मन्त्री थिए।

**तमाह भगवान् प्रेष्ठं भक्तमेकान्तिनं क्वचित्।**

**गृहीत्वा पाणिना पाणिं प्रपन्नार्तिहरो हरिः॥ २॥**

**पदार्थ–**

**क्वचित्** = एक दिन
**प्रपन्नार्तिहरः** = शरणमा परेकाहरूको दुःख हरण गरिदिने
**भगवान्** = भगवान्
**हरिः** = श्रीकृष्णले
**प्रेष्ठं** = अति प्रिय
**एकान्तिनं** = एकान्तप्रेमी
**तं भक्तं** = तिनै भक्त उद्धवलाई
**पाणिना** = आफ्ना हातले
**पाणिं** = उनका हातमा
**गृहीत्वा** = समाएर
**आह** = भन्नुभयो

**वाक्यार्थ–** एक दिन शरणागतको दुःख हरण गरिदिने भगवान् श्रीकृष्णले आफ्ना प्रिय भक्त एवं एकान्तप्रेमी उद्धवका हातलाई आफ्ना हातले समाएर भन्न लाग्नुभयो।

**गच्छोद्धव व्रजं सौम्य पित्रोर्नौ प्रीतिमावह।**

**गोपीनां मद्वियोगाधिं मत्सन्देशैर्विमोचय॥ ३॥**

**पदार्थ–**

**सौम्य** = शान्त स्वभाव भएका
**उद्धव** = हे उद्धव तिमी
**व्रजं** = व्रजमा
**गच्छ** = जाऊ र
**नौ** = हाम्रा
**पित्रोः** = पिता नन्द र माता यशोदालाई
**प्रीतिं** = प्रसन्न
**आवह** = गराऊ (तथा)
**मत्सन्देशैः** = मेरा सन्देशहरू सुनाएर

**गोपीनां** = गोपिनीहरूको
**मद्वियोगाधिं** = मेरो वियोगका कारण उत्पन्न भएको विरहव्याधिलाई
**विमोचय** = हटाइदेऊ

**वाक्यार्थ–** हे सौम्यमूर्ति उद्धव ! तिमी व्रजमा जाऊ र मेरा मातापिता यशोदा र नन्दलाई प्रसन्न गराऊ अनि मेरा सन्देशहरू सुनाएर मेरो विरहले पीडित भएका गोपिनीहरूको व्यथालाई हटाइदेऊ।

**ता मन्मनस्का मत्प्राणा मदर्थे त्यक्तदैहिकाः।**
**मामेव दयितं प्रेष्ठमात्मानं मनसा गताः।**
**ये त्यक्तलोकधर्माश्च मदर्थे तान् बिभर्म्यहम्॥ ४॥**

पदार्थ–
**मन्मनस्काः** = ममा चित्त अर्पण गरेका
**मत्प्राणाः** = ममा प्राण अर्पण गरेका
**मदर्थे** = मेरा निम्ति
**त्यक्तदैहिकाः** = घरबार, बन्धुबान्धव सबै त्यागेका
**मां एव** = मलाई नै
**प्रेष्ठं** = अति प्रिय
**दयितं** = प्रियतम (एवं)
**आत्मानं** = आत्मा
**मनसा गताः** = मानेका
**ताः** = ती गोपिनीहरू
**ये** = जो
**मदर्थे** = मेरा लागि
**त्यक्तलोकधर्माः च** = लौकिक धर्मलाई पनि त्यागेका छन्
**तान्** = तिनीहरूलाई
**अहं** = म स्वयं
**बिभर्मि** = पालनपोषण गर्दछु

**वाक्यार्थ–** हे उद्धव ! ममा चित्त अर्पण गरेका, ममा नै प्राण अर्पण गरेका, मेरा निम्ति घरबार, बन्धुबान्धव सबै त्यागेका एवं मलाई नै अति प्रिय आत्मा मान्ने ती गोपिनीहरू जसले मेरा लागि लौकिक धर्मलाई पनि त्यागेका छन् तिनीहरूको पालन-पोषण म स्वयं गर्दछु।

**मयि ताः प्रेयसां प्रेष्ठे दूरस्थे गोकुलस्त्रियः।**
**स्मरन्त्योऽङ्ग विमुह्यन्ति विरहौत्कण्ठ्यविह्वलाः॥ ५॥**

पदार्थ–
**अङ्ग** = हे प्रिय उद्धव
**प्रेयसां** = प्रियहरूमा पनि
**प्रेष्ठे** = अति प्रिय
**मयि** = म
**दूरस्थे** = टाढा भएपछि
**ताः** = ती
**गोकुलस्त्रियः** = गोकुलका स्त्रीहरू
**स्मरन्त्यः** = मलाई सम्झँदै
**विरहौत्कण्ठ्यविह्वलाः** = विरहको व्यथाले व्याकुल भई
**विमुह्यन्ति** = मोहित भएका छन्

**वाक्यार्थ–** हे प्रिय उद्धव ! परम प्रिय म टाढा भएपछि मलाई सम्झँदै ती गोपिनीहरू मोहित भइरहेका छन् र विरहव्यथाले व्याकुल हुँदै बसिरहेका छन्।

**धारयन्त्यतिकृच्छ्रेण प्रायः प्राणान् कथञ्चन।**
**प्रत्यागमनसन्देशैर्बल्लव्यो मे मदात्मिकाः॥ ६॥**

पदार्थ–
**मदात्मिकाः** = ममा नै तन्मय हुने
**मे** = मेरा
**बल्लव्यः** = प्रिय गोपिनीहरू
**प्रत्यागमनसन्देशैः** = फर्किने सन्देशले
**अतिकृच्छ्रेण** = अत्यन्त कष्टले
**कथञ्चन** = कुनै उपायद्वारा
**प्रायः** = प्राय
**प्राणान्** = आफ्नो प्राणलाई
**धारयन्ति** = बचाइराखेका छन्

**वाक्यार्थ–** ममा नै तन्मय हुने मेरा प्रिय गोपिनीहरूले मेरा फर्किने सन्देशहरू सुनेर अत्यन्त कष्टपूर्वक मुस्किलले आफ्नो प्राण बचाइरहेका छन्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्त उद्धवो राजन् सन्देशं भर्तुरादृतः।**
**आदाय रथमारुह्य प्रययौ नन्दगोकुलम्॥ ७॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**इति उक्तः** = यसप्रकार भनिएका (र)
**आदृतः** = आदर गरिएका
**उद्धवः** = उद्धव
**भर्तुः** = स्वामीको
**सन्देशं** = सन्देश
**आदाय** = लिएर
**रथं** = रथमा
**आरुह्य** = चढेर
**नन्दगोकुलं** = नन्दको गोकुलमा
**प्रययौ** = गए

**वाक्यार्थ–** हे राजा परीक्षित् ! भगवान्ले आदरपूर्वक यसप्रकार भनेपछि उद्धव आफ्ना स्वामीको सन्देश लिएर रथ चढेर नन्दको गोकुलतर्फ हिँडे।

**प्राप्तो नन्दव्रजं श्रीमान् निम्लोचति विभावसौ।**
**छन्नयानः प्रविशतां पशूनां खुररेणुभिः॥ ८॥**

पदार्थ–
**विभावसौ** = श्रीसूर्य
**निम्लोचति** = अस्ताउन लागेको वेला
**प्रविशतां** = व्रजतर्फ फर्किन लागेका
**पशूनां** = पशुहरूका
**खुररेणुभिः** = खुरका धुलोले
**छन्नयानः** = रथ छोपिएका
**श्रीमान्** = श्रीमान् उद्धव
**नन्दव्रजं** = नन्दको व्रजभूमिमा
**प्राप्तः** = पुगे

**वाक्यार्थ–** श्रीसूर्यनारायण अस्ताचलमा पुग्न लागेको वेला व्रजतर्फ फर्किंदै गरेका पशुहरूका खुरको धुलोले रथ नै छोपिएका उद्धव नन्दको व्रजभूमिमा पुगे।

**वासितार्थेऽभियुध्यद्भिर्नादितं शुश्मिभिर्वृषैः।**
**धावन्तीभिश्च वास्राभिरूधोभारैः स्ववत्सकान्॥ ९॥**

पदार्थ–
(त्यस समय व्रजभूमि)
**वासितार्थे** = साँढे खोजेका

गाईका निम्ति **अभियुध्यद्भिः** = आपसमा लडिरहेका **शुश्मिभिः** = मत्त **वृषैः** = साँढेहरूद्वारा **नादितं** = कराइएको **वास्राभिः** = भर्खर व्याएका कारण **ऊधोभारैः** = ठुला कल्चौँडाको भार बोकेर **स्ववत्सकान्** = आफ्ना बाच्छा भएतिर **धावन्तीभिः** = दौडिरहेका गाईहरूले (युक्त थियो)

**वाक्यार्थ–** त्यस समय व्रजमा साँढे खोजेका गाईका निम्ति आपसमा लडिरहेका मत्त साँढेहरू ठुलो-ठुलो आवाजमा डुक्रिरहेका थिए भने भर्खर व्याएका कारण ठुला कल्चौँडा भएका गाईहरू आफ्ना बाच्छा भएतिर दौडिरहेका थिए।

**इतस्ततो विलङ्घद्भिर्गोवत्सैर्मण्डितं सितैः।**
**गोदोहशब्दाभिरवं वेणूनां निःस्वनेन च॥ १०॥**

**पदार्थ–**
(व्रजभूमि) **इतस्ततः** = यताउता **विलङ्घद्भिः** = उफ्रिरहेका **सितैः** = सेता-सेता **गोवत्सैः** = गाईका बाच्छाहरूले **गोदोहशब्दाभिरवं** = गाई दुहुँदाको (घ्यार-घुर) आवाजले युक्त (र) **वेणूनां** = बाँसुरीका **निःस्वनेन** = सुमधुर ध्वनिले **मण्डितम् च** = सुशोभित बनेको थियो

**वाक्यार्थ–** यताउता उफ्रिरहेका गाईका सेता-सेता बाच्छाहरूले तथा गाई दुहुँदा निस्केका घ्यार-घुर आवाज र बाँसुरीका सुमधुर ध्वनिले व्रजभूमि सुशोभित बनेको थियो।

**गायन्तीभिश्च कर्माणि शुभानि बलकृष्णयोः।**
**स्वलङ्कृताभिर्गोपीभिर्गोपैश्च सुविराजितम्॥ ११॥**

**पदार्थ–**
**बलकृष्णयोः** = बलराम र श्रीकृष्णका **शुभानि** = मङ्गलमय **कर्माणि** = चरित्रहरू **गायन्तीभिः** = गाइरहेका **स्वलङ्कृताभिः** = राम्ररी सजिएका **गोपीभिः च** = गोपिनीहरू र **गोपैः च** = गोपहरूद्वारा पनि **सुविराजितम्** = (व्रजभूमि) सुशोभित (बनेको थियो)

**वाक्यार्थ–** बलराम र श्रीकृष्णका मङ्गलमय चरित्रहरू गाइरहेका अनि राम्ररी सजिएका गोपिनीहरू र गोपहरूद्वारा पनि व्रजभूमि सुशोभित भएको थियो।

**अग्न्यर्कातिथिगोविप्रपितृदेवार्चनान्वितैः।**
**धूपदीपैश्च माल्यैश्च गोपावासैर्मनोरमम्॥ १२॥**

**पदार्थ–**
**अग्न्यर्कातिथिगोविप्रपितृदेवार्चनान्वितैः** = अग्नि, सूर्य,

अतिथि, गाई, ब्राह्मण, पितृ र देवताहरूको पूजाअर्चनाले युक्त
**धूपदीपैः च** = धूपदीप र
**माल्यैः च** = फूलमालाहरूले सजिएका
**गोपावासैः** = गोपहरूका
घरहरूले समेत (व्रजभूमि)
**मनोरमम्** = रमाइलो बनेको थियो

**वाक्यार्थ–** अग्नि, सूर्य, अतिथि, गाई, ब्राह्मण, पितृ र देवताहरूको निम्ति गरिएको पूजाअर्चना, धूपदीप, फूलमाला आदिले सिँगारिएका गोपहरूका घरहरूद्वारा व्रजभूमि रमाइलो बनेको थियो।

**सर्वतः पुष्पितवनं द्विजालिकुलनादितम्।**
**हंसकारण्डवाकीर्णैः पद्मषण्डैश्च मण्डितम्॥ १३॥**

**पदार्थ–**
**हंसकारण्डवाकीर्णैः** = हाँस, वनकुखुरा आदिले व्याप्त
**पद्मषण्डैः च** = कमलका समूहहरूद्वारा पनि
**सर्वतः** = चारैतिर
**मण्डितम्** = सुशोभित भएको
**द्विजालिकुलनादितं** = पक्षी तथा भमराका समूहको आवाजले गुञ्जायमान व्रज
**पुष्पितवनं** = फुलेको वन (ले सुशोभित भएको थियो)

**वाक्यार्थ–** हाँस, वनकुखुरा आदिले व्याप्त, कमल फूलका समूहहरूद्वारा पनि चारैतिर सुशोभित भएको, पक्षी तथा भमराका समूहको आवाजले गुञ्जायमान भएको अनि फूलहरू फुलेको वनले युक्त व्रजभूमि सुशोभित थियो।

**तमागतं समागम्य कृष्णस्यानुचरं प्रियम्।**
**नन्दः प्रीतः परिष्वज्य वासुदेवधियार्चयत्॥ १४॥**

**पदार्थ–**
**आगतं** = भर्खर आइपुगेका
**कृष्णस्य** = श्रीकृष्णका
**प्रियं** = प्रिय
**तं** = ती
**अनुचरं** = भक्त उद्धवलाई
**समागम्य** = भेटेर
**प्रीतः** = प्रसन्न भएका
**नन्दः** = नन्दले
**परिष्वज्य** = अङ्कमाल गर्दै
**वासुदेवधिया** = भगवान् वासुदेव नै सम्झेर
**अर्चयत्** = पूजा गरे

**वाक्यार्थ–** भगवान्का प्रिय मित्र उद्धव आइपुगेको देखेर प्रसन्न भएका नन्दले अङ्कमाल गर्दै भगवान् वासुदेव नै सम्झेर उनको पूजा गरे।

**भोजितं परमान्नेन संविष्टं कशिपौ सुखम्।**
**गतश्रमं पर्यपृच्छत् पादसंवाहनादिभिः॥ १५॥**

**पदार्थ–**
**परमान्नेन** = मिठो-मिठो भोजन
**भोजितं** = खवाइएका
**कशिपौ** = पलङ्गमा
**सुखं** = आनन्दपूर्वक
**संविष्टं** = पल्टिएका
**पादसंवाहनादिभिः** = पाउ मल्ने आदि क्रियाद्वारा
**गतश्रमं** = थकाइ मेटिसकेका

उद्धवलाई | **पर्यपृच्छत्** = नन्दले सोधे

**वाक्यार्थ–** मिठो-मिठो भोजन ग्रहण गरेर पलङ्गमा आनन्दपूर्वक पल्टिएका अनि पाउ मल्ने आदि क्रियाद्वारा थकाइ मेटिसकेका उद्धवलाई नन्दले सोधे।

**कच्चिदङ्ग महाभाग सखा नः शूरनन्दनः।**

**आस्ते कुशल्यपत्याद्यैर्युक्तो मुक्तः सुहृद्वृतः॥ १६॥**

पदार्थ–
**महाभाग** = हे परम भाग्यशाली
**अङ्ग** = प्रिय उद्धव
**नः** = हाम्रा
**सखा** = मित्र
**शूरनन्दनः** = शूरपुत्र वसुदेवजी
**मुक्तः** = दुःखबाट मुक्त भएर
**सुहृद्वृतः** = मित्रहरूद्वारा घेरिएर
**अपत्याद्यैः युक्तः** = पुत्रहरूका साथमा
**कच्चित्** = के
**कुशली** = आरामपूर्वक
**आस्ते** = बसिरहनुभएको छ

**वाक्यार्थ–** हे परम भाग्यशाली उद्धव ! के हाम्रा मित्र वसुदेवजी दुःखबाट मुक्त भएर आत्मीय बन्धुबान्धव एवं पुत्रहरूका साथमा कुशलतापूर्वक बसिरहनुभएको छ ?

**दिष्ट्या कंसो हतः पापः सानुगः स्वेन पाप्मना।**

**साधूनां धर्मशीलानां यदूनां द्वेष्टि यः सदा॥ १७॥**

पदार्थ–
**दिष्ट्या** = खुसीको कुरा
**यः** = जुन
**कंसः** = कंसले
**धर्मशीलानां** = सदाचारी
**साधूनां** = सज्जन
**यदूनां** = यदुवंशीहरूलाई
**सदा** = सधैँ
**द्वेष्टि** = रिस गर्थ्यो (त्यो)
**सानुगः** = आफ्ना अनुयायीले सहित
**पापः** = पापी कंस
**स्वेन** = आफ्नै
**पाप्मना** = पापले
**हतः** = मारियो

**वाक्यार्थ–** खुसीको कुरा, जुन कंसले धर्मात्मा सज्जन यादवहरूको सधैँ रिस गर्दथ्यो त्यो पापी आफ्ना सम्पूर्ण अनुयायी सहित आफ्नै पापले मारियो।

**अपि स्मरति नः कृष्णो मातरं सुहृदः सखीन्।**

**गोपान् व्रजं चात्मनाथं गावो वृन्दावनं गिरिम्॥ १८॥**

पदार्थ–
**कृष्णः** = श्रीकृष्णले
**नः** = हामीहरूलाई
**मातरं** = माता यशोदालाई
**सुहृदः** = सहृदयीहरूलाई
**सखीन्** = साथीसङ्गीहरूलाई
**गोपान्** = गोपहरूलाई
**आत्मनाथं** = आफूलाई नै सर्वस्व सम्झिने
**व्रजं** = व्रजभूमिलाई
**गावः** = गाईहरूलाई
**वृन्दावनं** = वृन्दावनलाई (र)
**गिरिम् च** = गोवर्धन पर्वतलाई पनि
**स्मरति** = सम्झनुहुन्छ

**वाक्यार्थ–** श्रीकृष्णले हामीहरूलाई, आमा यशोदालाई, सहृदयीहरूलाई, साथीसङ्गीहरूलाई, गोपहरूलाई, उहाँलाई नै सर्वस्व मान्ने व्रजभूमि, गाई, वृन्दावनलाई र गोवर्धन पर्वतलाई सम्झिनुहुन्छ त ?

**अप्यायास्यति गोविन्दः स्वजनान् सकृदीक्षितुम् ।**
**तर्हि द्रक्ष्याम तद्वक्त्रं सुनसं सुस्मितेक्षणम् ॥ १९ ॥**

**पदार्थ–**
**अपि** = के
**स्वजनान्** = हामी आफन्तहरूलाई
**ईक्षितुं** = हेर्न
**गोविन्दः** = श्रीकृष्ण
**सकृत्** = एकपटक
**आयास्यति** = आउनुहुनेछ
**तर्हि** = त्यसो भए
**सुनसं** = राम्रो नाक (र)
**सुस्मितेक्षणं** = मुस्कान सहितको हेराइले युक्त भएको
**तद्वक्त्रं** = उहाँको अनुहार
**द्रक्ष्यामः** = हेर्न पाउनेछौँ

**वाक्यार्थ–** के अब हामी आफन्तलाई भेट्न श्रीकृष्ण एकपटक यहाँ आउनुहोला त ? यदि आउनुभयो भने सुन्दर नाक, मुस्कान र हेराइले युक्त उहाँको अनुहारको दर्शन गर्न पाउने थियौँ ।

**दावाग्नेर्वातवर्षाच्च वृषसर्पाच्च रक्षिताः ।**
**दुरत्ययेभ्यो मृत्युभ्यः कृष्णेन सुमहात्मना ॥ २० ॥**

**पदार्थ–**
**सुमहात्मना** = परम कारुणिक
**कृष्णेन** = श्रीकृष्णद्वारा
**दावाग्नेः** = डढेलोबाट
**वातवर्षात् च** = हावा सहितको घोर वर्षाबाट
**वृषसर्पात् च** = वृषासुर र कालियबाट (तथा)
**दुरत्ययेभ्यः** = टार्नै नसकिने
**मृत्युभ्यः** = मृत्युहरूबाट
**रक्षिताः** = हामी बचाइएका छौँ

**वाक्यार्थ–** परम कारुणिक श्रीकृष्णले नै हामीलाई भीषण डढेलोबाट, हावा सहितको घोर वर्षाबाट, वृषासुर, कालिय आदिबाट र अरू पनि टार्नै नसकिने मृत्युहरूबाट बचाउनुभएको हो ।

**स्मरतां कृष्णवीर्याणि लीलापाङ्गनिरीक्षितम् ।**
**हसितं भाषितं चाङ्ग सर्वा नः शिथिलाः क्रियाः ॥ २१ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय उद्धव
**कृष्णवीर्याणि** = श्रीकृष्णका पराक्रमहरू
**लीलापाङ्गनिरीक्षितम्** = लीलापूर्ण कर्के हेराइ
**हसितं** = मधुर मुस्कान तथा
**भाषितं च** = बोली
**स्मरतां** = सम्झिने
**नः** = हामीहरूका
**सर्वाः** = सम्पूर्ण
**क्रियाः** = कामहरू
**शिथिलाः** = अस्तव्यस्त हुन्छन्

**वाक्यार्थ–** हे प्रिय उद्धव ! श्रीकृष्णका विचित्र चरित्र, लीलापूर्ण कर्के हेराइ, मधुर मुस्कान र

बोलीलाई सम्झँदा हाम्रा (सम्पूर्ण अङ्गहरू मस्त हुने हुँदा) सबै काम अस्तव्यस्त हुन्छन्।

**सरिच्छैलवनोद्देशान् मुकुन्दपदभूषितान्।**

**आक्रीडानीक्षमाणानां मनो याति तदात्मताम्॥ २२॥**

**पदार्थ–**
**मुकुन्दपदभूषितान्** = श्रीकृष्णका चरणचिह्नहरूले सुशोभित
**सरिच्छैलवनोद्देशान्** = नदी, पर्वत र वनप्रदेशहरू (तथा)
**आक्रीडान्** = क्रीडास्थलहरू
**ईक्षमाणानां** = हेरिरहेका हाम्रो
**मनः** = मन
**तदात्मतां** = श्रीकृष्णमैं लीन हुन
**याति** = पुग्दछ

**वाक्यार्थ–** श्रीकृष्णका चरणचिह्नहरूले सुशोभित नदी, पर्वत र वनप्रदेशहरू तथा क्रीडास्थलहरू हेर्दा पनि हाम्रो मन उहाँमैं लीन हुन पुग्दछ।

**मन्ये कृष्णं च रामं च प्राप्ताविह सुरोत्तमौ।**

**सुराणां महदर्थाय गर्गस्य वचनं यथा॥ २३॥**

**पदार्थ–**
**कृष्णं च** = श्रीकृष्णलाई र
**रामं च** = बलरामलाई
**सुराणां** = देवताहरूको
**महदर्थाय** = महत्त्वपूर्ण प्रयोजन सिद्ध गर्न
**इह** = यस धर्तीमा
**प्राप्तौ** = अवतीर्ण भएका
**सुरोत्तमौ** = श्रेष्ठ देवता
**मन्ये** = मैले मानेको छु
**यथा** = जस्तो
**गर्गस्य** = गर्गको
**वचनं** = कथन थियो

**वाक्यार्थ–** श्रीकृष्ण र बलराम दुबैलाई मैले देवताहरूको महत्त्वपूर्ण प्रयोजन सिद्धिका निम्ति यस धर्तीमा जन्म लिएर आएका श्रेष्ठ देवता मानेको छु, जुन कुरा गर्गले भन्नुभएको थियो।

**कंसं नागायुतप्राणं मल्लौ गजपतिं तथा।**

**अवधिष्टां लीलयैव पशूनिव मृगाधिपः॥ २४॥**

**पदार्थ–**
**नागायुतप्राणं** = दश हजार हात्तीको बल भएको
**कंसं** = कंसलाई
**मल्लौ** = चाणूर र मुष्टिकलाई
**तथा** = त्यस्तै
**गजपतिं** = गजराज कुवलयापीडलाई
**मृगाधिपः** = सिंहले
**पशून् इव** = सामान्य पशुलाई झैँ
**लीलया एव** = ख्याल-ख्यालमै
**अवधिष्टाम्** = मारिदिनुभयो

**वाक्यार्थ–** उहाँहरूले दश हजार हात्तीको जति बल भएको कंसलाई, चाणूर र मुष्टिक जस्ता महापराक्रमी पहलमानलाई र गजराज कुवलयापीडलाई समेत सिंहले सामान्य पशुहरूलाई मारे झैँ ख्याल-ख्यालमैँ मारिदिनुभयो।

**विवरण–** यस श्लोकमा गोपिनीको भावपरिवर्तन भई भमरो र कृष्णको विषयमा सम्मानको भावना पैदा भएको देखिन्छ। गोपिनीहरूले उडिरहेको भमरोलाई कृष्णको दूत मानेर उसले भुँ भुँ गरी गीत गाएकोलाई कृष्णको स्तुति गाएको ठानेर त्यसलाई गाली गरिरहेका थिए। यत्तिकैमा त्यो भमरो केही छिन त्यहाँबाट हरायो। भमरो हराउनेबित्तिकै गोपिनीहरूले कल्पना गरे कि हामीले सबैतिरबाट गाली एवं भर्त्सना गरेकाले त्यो दूत यहाँबाट गयो। अब यसले कृष्णकहाँ गई हामीले निन्दा गरेको सुनाउँछ। त्यसबाट कृष्ण पनि दुःखी हुन्छन्। यस्तो सोची व्याकुल भइरहेकै वेलामा फेरि त्यो भमरो त्यहीं देखियो। श्रीधरस्वामी लेख्नुहुन्छ– **प्रियप्रस्थापितं दूतं मत्वा** अर्थात् गोपिनीहरूले त्यो भमरोलाई श्रीकृष्णले आफूहरूकहाँ फेरि मनाउन पठाउनुभएको भन्ने ठाने। हामीले निन्दा गर्दा पनि कृष्ण चाहिँ हामीसँग प्रेम नै गरिरहनुहुँदो रहेछ भनी श्रीकृष्णको प्रेमलाई सम्झँदा उनीहरूको प्रणयरोष तत्काल शान्त भयो। अनि उनीहरूले फेरि केही दुर्घटना भई नहालोस् भन्ने सोची कृष्णको दूतसँग सम्मानपूर्वक बोलेका छन्।

यहाँ भमरोलाई **प्रियसख** अर्थात् हे प्रियतम श्रीकृष्णका साथी भनिएको छ। **माननीयः असि** अर्थात् तिमी हाम्रा लागि माननीय छौ भनी भमरोको सम्मान गरिएको छ। प्रियमिलनमा उत्कण्ठित हुँदै गोपिनी सोध्छिन्– हे भ्रमर ! जोसँगको सम्मिलन छाड्नै नसकिने खालको छ त्यस्ता प्रियतमकहाँ हामीलाई कहिले लिएर जान्छौ ? यहाँ गोपिनीहरूले आफूहरू चाँडोभन्दा चाँडो मथुरामा नै गएर श्रीकृष्णलाई भेट्न चाहेको भाव व्यक्त गरेका छन्। तर गोपिनी र श्रीकृष्णको प्रेमलीला जहाँसुकै अभिव्यक्त हुँदैन, यो त व्रजमा मात्र अभिव्यक्त हुन्छ। व्रजेश्वरी राधा कृष्णमय भएको आफ्नो भावभूमि वृन्दावनलाई छाडी कहाँ बाहिर जान सक्छिन् र ? उनका लागि त वृन्दावनका रुख, लहरा, गाई, पक्षी आदि सबै कृष्णमय छन्। त्यसैले मथुरा जाने भाव अनुचित हुनाले त्यसको विरोधी भाव तत्काल नै उनको मनमा आएको छ। मथुरामा त **श्रीः वधूः** अर्थात् लक्ष्मीजी नै श्रीकृष्णकी प्रिया छिन्। उनी सधैँ **उरसि** अर्थात् श्रीकृष्णको छातीमा नै बसिरहन्छिन्। हामीहरूलाई त्यहाँ ठाउँ नभएकाले त्यहाँ जानु उपयुक्त छैन।

गोपिनीहरूले आफूहरूलाई फकाउन पठाइएको कृष्णको दूतलाई यो श्लोकमा तीन कुरा बताएका छन्। हामीहरूले कृष्णलाई अझै पनि उत्तिकै प्रेम गर्छौं, प्रियतम कृष्णले हामीसँग प्रेम गर्ने पनि बुझेका छौं, तर मथुरामा गई कृष्णसँग मिल्न सम्भव हुँदैन, किनभने त्यहाँ उहाँको व्यक्तित्व निकै ठुलो भइसकेको छ भन्ने तीन थरी भाव यहाँ देखिन्छन्। यसबाट गोपिनीहरूले व्रजमैं बसी कृष्णको प्रतीक्षा गर्ने दृढता व्यक्त गरेको बुझ्न सकिन्छ।

**अपि बत मधुपुर्यामार्यपुत्रोऽधुनास्ते**
**स्मरति स पितृगेहान् सौम्य बन्धूंश्च गोपान्।**
**क्वचिदपि स कथा नः किङ्करीणां गृणीते**
**भुजमगुरुसुगन्धं मूर्ध्न्यधास्यत् कदा नु ॥ २१ ॥**

**पद्वार्थ**–
**सौम्य** = हे प्रिय भ्रमर
**अपि बत** = ए, साँच्चै
**अधुना** = अहिले
**आर्यपुत्रः** = सम्माननीय श्रीकृष्ण
**मधुपुर्याम्** = मथुरा नगरीमा
**आस्ते** = आरामले रहनुहुन्छ
**सः** = उहाँले
**पितृगेहान्** = बाबुको घर
**बन्धून् च** = बन्धुबान्धव र
**गोपान्** = गोपहरूलाई
**स्मरति** = सम्झिनुहुन्छ
**क्वचित् अपि** = कहिल्यै
**सः** = ती श्रीकृष्णले
**किङ्करीणां** = दासी
**नः** = हामी गोपिनीहरूको
**कथा** = चर्चा
**गृणीते** = गर्नुहुन्छ
**कदा नु** = कहिले
**अगुरुसुगन्धं** = अगुरुका सुगन्धले सुगन्धित
**भुजं** = हात
**मूर्ध्नि** = हाम्रो शिरमा
**अधास्यत्** = राख्नुहोला

**वाक्यार्थ–** हे प्रिय भ्रमर ! ए, साँच्चै अहिले श्रीकृष्ण मथुरानगरीमा सुखसँग बसिरहनुभएको छ त ? के कहिलेकाँही उहाँले नन्दको घर, बन्धुबान्धव र गोपहरूलाई सम्झिनुहुन्छ ? कहिल्यै हामी दासी गोपिनीहरूको चर्चा गर्नुहुन्छ ? उहाँले अगुरुको लेपले सुगन्धित आफ्नो हात कहिले हाम्रो शिरमा राख्नुहोला ? (के त्यस्तो सुअवसर हामीलाई आउला त ?)

**विवरण–** यस श्लोकमा गोपिनीले कृष्णको कुशल–मङ्गल सोधेका छन्। **अपि बत** यो पदावलीबाट अहिलेसम्म मुख्य कुरा गर्न नै भुलेको भाव व्यक्त भएको छ। दूतसँग सबभन्दा पहिले स्वामीको विषयमा कुशल–मङ्गल सोध्नुपर्नेमा गोपिनीहरूले दूतलाई केही भन्नै नदिई सोझै गाली गर्न थालिहाले। अन्तिममा आएपछि मात्र उनीहरूले कृष्णको विषयमा सोधे। के कृष्ण मथुरामा नै हुनुहुन्छ ? के उहाँले व्रजवासी आमा–बुबाको घरलाई कहिल्यै सम्झिनुहुन्छ ? अब त उहाँ दरबारवासी भइसक्नुभएको छ। उहाँले अझै पनि आफ्ना गोठाला साथीहरू अनि हामी उहाँकी सेविका गोपिनीहरूलाई सम्झिनुहुन्छ ? **कथाः गृणीते** भन्ने यो पदावलीबाट व्रजमण्डलका पुराना संस्मरणहरू सुनाउँदा कहिलेकाहीँ के हामी गोपिनीहरूको कुरा पनि सम्झिनुहुन्छ त भनी सोधिएको छ। हाम्रा शिरमा उहाँले आफ्ना सुगन्धित हातलाई कहिले राख्नुहोला भन्ने प्रश्नमा प्रियमिलनको आतुरता स्पष्ट देखिन्छ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथोद्धवो निशम्यैवं कृष्णदर्शनलालसाः।**
**सान्त्वयन् प्रियसन्देशैर्गोपीरिदमभाषत॥ २२॥**

**पद्वार्थ**–
**एवं** = यसप्रकार
**गोपीः** = गोपिनीहरूलाई
**कृष्णदर्शनलालसाः** = श्रीकृष्णको दर्शनका निम्ति अत्यन्त आतुर भएका
**निशम्य** = देखेर
**अथ** = उनीहरूको विरहव्यथा सुनिसकेपछि
**उद्धवः** = उद्धवले
**प्रियसन्देशैः** = प्रिय श्रीकृष्णका सन्देशहरूद्वारा
**सान्त्वयन्** = सान्त्वना दिँदै
**इदं** = यो कुरा
**अभाषत** = भन्नुभयो

**वाक्यार्थ–** यसरी गोपिनीहरूलाई श्रीकृष्णदर्शनको निम्ति छट्पटाइरहेका देखेर र उनीहरूको

यस्तो विरहव्यथा सुनेर उद्धवले श्रीकृष्णका प्रिय सन्देशहरू सुनाएर सान्त्वना दिँदै यसप्रकार भन्न लागे।

**विवरण–** गोपिनीहरू **कृष्णदर्शनलालसाः** अर्थात् श्रीकृष्णको दर्शन गर्न अत्यन्त उत्कण्ठित थिए। उनीहरू वृन्दावनका सारा वस्तुहरूमा श्रीकृष्णको दर्शन गर्दथे। त्यसको सबभन्दा राम्रो दृष्टान्त भमरासँगको गोपिनीको संवादको प्रसङ्ग नै हो। फूलको वरिपरि भमरो घुमिरहन्छ। भमरो कालो हुन्छ, त्यसले रस चुसेपछि फूललाई चटक्कै छाडिदिन्छ, यी दुई कुराले भमरा र कृष्णमा साम्य भएको गोपिनीहरूले अनुभव गरे। कृष्णका चरित्र अनेक किसिमका हुने हुनाले संसारका कुनै वस्तुहरूका केही न केही गुणहरू उनीसँग समान हुन्छन् नै। वस्, यही समानता नै गोपिनीहरूलाई कृष्ण सम्झाउन पर्याप्त भयो। उनीहरू कुनै पनि वस्तुलाई माध्यम बनाई तत्काल कृष्णमय भइहाल्थे। जीवन्मुक्त ज्ञानीहरूले संसारमा हरेक पदार्थहरूमा आत्मदर्शन गरे झैं हरेक वस्तुमा कृष्णदर्शन गर्ने गोपिनीहरू भक्तिको सर्वोच्च अवस्थामा पुगिसकेका थिए। यहाँ भमरोलाई देखी त्यसलाई कृष्णको दूतको रूपमा कल्पना गर्दै उन्मादगीत गाउने गोपिनी राधा नै हुन् भनी टीकाकारहरूले उल्लेख गरेका छन्। यस गीतमा उनको महाभावको अवस्था प्रकाशित भएको देखिन्छ।

प्रेमका अवस्थाहरूमध्ये सबभन्दा माथिल्लो अवस्थालाई महाभाव भनिन्छ। महाभावमा पनि मादन र मोहन गरी दुई विभाग गरिएको छ। मादन रस प्रियमिलनमा हुन्छ। मद भनेको हर्षको नाम पनि हो। प्रियमिलनमा आफूलाई जुन सर्वोत्कृष्ट आनन्द प्राप्त हुन्छ, त्यही नै मादन भावको अभिव्यक्ति हो। यो भावमा प्रेमी आफूसँग प्रियतम परमात्मा मिलेको अनुभवमा मस्त हुन्छ। मोहन भावमा चाहिँ आफ्ना परम प्रियतम नमिलेकाले मोहित या मूर्च्छित भएको भावको प्रकाश हुन्छ। यो भावावस्थामा प्रेमीले आफ्ना प्रियतमको विरह भएको पीडामा आफैँलाई पनि बिर्सेको हुन्छ। मादनभन्दा मोहन भावलाई उत्कृष्ट मानिन्छ। किनभने मादन भावमा प्रियतमको स्पर्शले आफू आनन्दित हुने हुँदा स्वत्वको स्फुरण हुन्छ भने मोहन भावमा आफ्नो स्वत्वको पनि स्फुरण हुँदैन, प्रियविरहको भावनाले केवल प्रियलाई मात्र सम्झिँदै मूर्च्छित भएको उसले आफैँलाई पनि भुलेको हुन्छ। यो मोहनको अवस्थालाई उन्मादको अवस्था भनिन्छ। भक्तहरू भन्छन्– **प्रायो वृन्दावनेश्वर्यां मोहनोऽयमुदञ्चति** अर्थात् दिव्य उन्मादको यो मोहन भाव प्रायः वृन्दावनेश्वरी राधामा मात्र प्रकट हुन्छ। उनकै कृपाले पछिका साधकहरूमा पनि यो भावको केही प्रकाश भएको देखिन्छ, तर नित्यरूपमा त केवल राधामा मात्र यो भाव रहन्छ। दिव्य उन्मादको अवस्थामा व्यक्ति प्रियतमको विषयमा विचित्र जल्प अर्थात् प्रलापहरू गर्दछ। यहाँ दिव्य उन्मादको अवस्थामा राधाबाट प्रकट भएका विचित्र जल्पहरूको नै वर्णन गरिएको छ। यहाँका बाह्रौँदेखि एक्काईसौँसम्मका दश श्लोकहरूमा प्रजल्प, परिजल्प, विजल्प, उज्जल्प, संजल्प, अवजल्प, अभिजल्प, आजल्प, प्रतिजल्प र सुजल्प यी दश किसिमका चित्रजल्पहरूको प्रयोग भएको छ भन्ने कुरा वंशीधरले भावार्थदीपिकाप्रकाश टीकामा उल्लेख गर्नुभएको छ।

उडिरहेको भमरोलाई देखी त्यसलाई गोपिनीहरूले कृष्णको दूत भएको आरोप गरेका छन्।

अनि भमरोको माध्यमले कृष्णलाई पनि गाली गरेका छन्। यो प्रेमको गाली थियो, त्यसैले गोपिनीहरू भमरो त्यहाँबाट जाओस् भन्ने पनि चाहँदैनथे। गाली गर्दा गर्दै बीचैमा त्यो भमरो एकछिन हरायो। साथमा प्रिय नभए पनि कम्तीमा उनको दूत त थियो ? भन्ने भावले उनीहरूभित्र रहेको कृष्णप्रेमको भाव प्रकट भयो। बाहिर देखाइएको प्रेमको रिस शान्त भई आदरकै भाव प्रकट भएपछि त्यो भमरो फेरि देखापर्‍यो र त्यसपछि त्यसले गोपिनीहरूबाट रिस र निन्दाको होइन, प्रेम र सम्मानकै अभिव्यक्ति सुन्यो। केही अगाडिसम्म आफ्नो अघि नआइज भनी रुपार्ने गोपिनीहरू अब उसलाई हाम्रो नजिक आई वर माग भन्न थाले। कृष्णको एक इसाराले पनि गोपिनीहरूका सारा मानहरू गलित हुन्छन्, उनीहरू तत्काल पग्लिहाल्छन्। गोपिनीहरूको हृदयभित्र कृष्णको यतिविधि अधिकार छ कि, जन्मौंसम्म उनले उपेक्षा गरेकाले व्यक्त भएको दुःख या मानको भाव पनि कृष्णको एक मुस्कानमा नै नष्ट हुन्छ। एउटा भमरोको माध्यमले पनि कृष्णले गोपिनीहरूलाई महाभावको समुद्रमा डुबाइदिनुहुन्छ। भक्तहरू सोच्छन्, राधाको चरणनजिक आई भुनभुनाउने अनि उनलाई कृष्णको कुटिल स्वभावको सम्झना दिलाई मोहित गरिदिने यो भमरोमा कुनै विशेषता हुनै पर्दछ। साँच्चै राधाले भने झैं यो भमरोलाई गोपिनीहरूको चियो गर्न भनी कतै कृष्णले नै त पठाउनुभएको होइन ? के उहाँले आफ्ना प्रेयसीहरूका लागि प्रेमसन्देश पुर्‍याउन नै यसलाई पठाउनुभएको थियो ? यहाँ श्रीजीव गोस्वामी लेख्नुहुन्छ— **प्रेयस्या चित्रजल्पस्य माधुरीपिपासया कृष्ण एव भ्रमररूपतामधात्** अर्थात् आफ्नी प्रेयसी राधाबाट दिव्योन्मादको अवस्थामा प्रकट हुने विचित्र जल्पवाक्यहरूको मधुर रस पिउने इच्छा भएकाले साक्षात् श्रीकृष्ण नै भमरा बनी राधानजिक भुनभुनाउँदै पुग्नुभएको थियो।

यदि भमराको रूपमा कृष्ण नै पुग्नुभएको थियो भनी मान्ने हो भने यहाँ प्रेमको एउटा विलक्षण स्थितिको वर्णन भएको देख्न सकिन्छ। प्रेममा प्रेमी अनि प्रेयसी दुबैमा नम्रता र मान दुबै प्रकारका भावहरू हुन्छन्। मानमा आफ्ना प्रेमीसँग आफू रिसाएको भाव हुन्छ। यो प्रेमको रिसमा प्रेमी आफ्ना प्रियबाट हट्न खोज्छ र नजिक नआऊ भनी उनलाई हटाउन खोज्छ, तर प्रियतम चाहिँ झन्-झन् नजिक आई उसको मानलाई विनयद्वारा झुकेर हटाउने प्रयास गर्छन्। जब राधा रिसका कारण मान खोज्दै कृष्णलाई टाढा जान भन्दैछिन्, तब कृष्ण झन् उनको चरणनजिक भुनभुनाउँदै उनको मान हटाउन खोज्दैहुनुहुन्छ। जब कृष्ण आफैंले मान खोजेको भाव देखाई लुक्नुहुन्छ अनि गोपिनीहरू चारैतर्फ खोजी उहाँलाई फकाउन र सम्मानित गर्न थाल्दछन्। यहाँ बाह्रौं देखि उन्नाईसौंसम्मका आठ श्लोकहरूमा गोपिनीहरूको मान अनि भमरारूपी कृष्णको विनय प्रकट भएको छ भने बीसौं र एक्काईसौं श्लोकमा कृष्णको मान र गोपिनीहरूको विनयभाव प्रकट भएको छ। एउटाले मान देखाउँदा अर्कोले विनयपूर्वक उसलाई पछ्याउने अनि अर्कोले मान देखाउँदा एउटाले पछ्याउने गर्दा नै प्रेम टिकिरहन्छ। दुई नदीको सङ्गममा जसरी एउटा नदीको पानीको छाल पछि हट्यो भने अर्को नदीको जलले रिक्त स्थानलाई भरिदिन्छ, अनि अर्को नदीको पानीको छाल पछि हट्दा पहिलो नदीको जलले त्यस ठाउँलाई भरिदिन्छ, त्यसै गरी प्रेममा पनि एउटा पछि हट्दा अर्को अघि बढ्ने अनि अर्को पछि हट्दा पहिलो अघि बढ्ने गरी

नित्य उल्लास या सञ्चलन भइरहन्छ। गोपिनी र कृष्णबीचको परस्पर उल्लासमय प्रेमको यही भाव यहाँ प्रकट भएको छ।

**उद्धव उवाच** (उद्धवले भने)

**अहो यूयं स्म पूर्णार्था भवत्यो लोकपूजिताः।**
**वासुदेवे भगवति यासामित्यर्पितं मनः॥ २३॥**

**पदार्थ–**
**अहो** = खुसीको कुरा
**स्म** = निश्चय नै
**यूयं** = तिमीहरू
**पूर्णार्थाः** = सफल छौ
**भवत्यः** = तिमीहरू
**लोकपूजिताः** = संसारका पूजित छौ
**यासां** = जुन तिमीहरूको
**मनः** = चित्त
**भगवति** = भगवान्
**वासुदेवे** = वासुदेवमा
**इति** = यसप्रकार
**अर्पितम्** = लागेको छ

**वाक्यार्थ–** हे गोपिनीहरू ! तिमीहरू सफल छौ। सारा संसारको निम्ति तिमीहरू पूजनीय छौ। किनभने तिमीहरूले आफ्नो चित्तलाई यसप्रकारसँग भगवान् वासुदेवमा समर्पित गरेका छौ।

**दानव्रततपोहोमजपस्वाध्यायसंयमैः।**
**श्रेयोभिर्विविधैश्चान्यैः कृष्णे भक्तिर्हि साध्यते॥ २४॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**दानव्रततपोहोमजपस्वाध्याय-संयमैः** = दान, व्रत, तपस्या, होम, जप, स्वाध्याय, संयम (र)
**अन्यैः** = अरू
**विविधैः** = विभिन्न प्रकारका
**श्रेयोभिः च** = शुभकर्महरूद्वारा पनि
**कृष्णे** = श्रीकृष्णमा
**भक्तिः** = भक्ति
**साध्यते** = गर्न खोजिन्छ

**वाक्यार्थ–** निश्चय नै दान, व्रत, तप, होम, जप, वेदाध्ययन, इन्द्रियसंयम तथा अन्य शुभकर्महरूद्वारा पनि श्रीकृष्णमैं भक्ति गर्ने प्रयत्न गरिन्छ।

**भगवत्युत्तमश्लोके भवतीभिरनुत्तमा।**
**भक्तिः प्रवर्तिता दिष्ट्या मुनीनामपि दुर्लभा॥ २५॥**

**पदार्थ–**
**दिष्ट्या** = भाग्यको कुरा
**भवतीभिः** = तिमी गोपिनीहरूद्वारा
**उत्तमश्लोके** = पवित्रकीर्ति
**भगवति** = भगवान् श्रीकृष्णमा
**मुनीनाम् अपि** = मुनिहरूका लागि पनि
**दुर्लभा** = दुर्लभ
**अनुत्तमा** = सर्वोत्कृष्ट
**भक्तिः** = भक्ति
**प्रवर्तिता** = गरिएको छ

**वाक्यार्थ–** ठुलो भाग्यको कुरा, तिमी गोपिनीहरूद्वारा पवित्रकीर्ति भगवान् श्रीकृष्णमा मुनिहरूका लागि पनि दुर्लभ सर्वोत्कृष्ट भक्ति गरिएको छ।

**दिष्ट्या पुत्रान् पतीन् देहान् स्वजनान् भवनानि च।**
**हित्वावृणीत यूयं यत् कृष्णाख्यं पुरुषं परम्॥ २६॥**

| पदार्थ– | **पतीन्** = लोग्ने | **कृष्णाख्यं** = श्रीकृष्णनामक |
|---|---|---|
| **दिष्ट्या** = सौभाग्यवश | **देहान्** = आफ्नो शरीर | **परं पुरुषं** = परम पुरुषलाई |
| **यत्** = जुन | **स्वजनान्** = आफन्तहरू (र) | **अवृणीत** = वरण गर्‍यौ |
| **यूयं** = तिमीहरूले | **भवनानि च** = घरबार सबै | |
| **पुत्रान्** = छोराछोरी | **हित्वा** = छोडेर | |

**वाक्यार्थ–** तिमीहरूले आफ्ना छोराछोरी, लोग्ने, शरीर, आफन्तहरू र घरबार सबैलाई छाडेर पुरुषोत्तम श्रीकृष्णलाई वरण गरेका छौ, यो सौभाग्यको कुरो हो।

**सर्वात्मभावोऽधिकृतो भवतीनामधोक्षजे।**
**विरहेण महाभागा महान् मेऽनुग्रहः कृतः॥ २७॥**

| पदार्थ– | **अधोक्षजे** = इन्द्रियातीत भगवान् श्रीकृष्णमा | **महान्** = ठुलो |
|---|---|---|
| **महाभागाः** = हे परम भाग्यशाली गोपिनीहरू | **सर्वात्मभावः** = सर्वात्मभाव | **अनुग्रहः** = उपकार |
| **विरहेण** = वियोगले गर्दा | **अधिकृतः** = प्राप्त गरेका छौ | **कृतः** = गरियो |
| **भवतीनां** = तिमीहरूको | **मे** = मलाई (त्यो देखाएर) | |

**वाक्यार्थ–** हे परम भाग्यशाली गोपिनीहरू! श्रीकृष्णसँगको वियोगले गर्दा तिमीहरूले इन्द्रियातीत भगवान् श्रीकृष्णमा सर्वात्मभाव प्राप्त गरेका छौ, त्यो सर्वात्मभाव देखाएर तिमीहरूले ममाथि ठुलो उपकार गर्‍यौ।

**श्रूयतां प्रियसन्देशो भवतीनां सुखावहः।**
**यमादायागतो भद्रा अहं भर्तू रहस्करः॥ २८॥**

| पदार्थ– | **अहं** = म उद्धव | **सुखावहः** = आनन्द दिने |
|---|---|---|
| **भद्राः** = हे कल्याणकारी गोपिनीहरू | **यं** = जुन (खबर) | **प्रियसन्देशः** = प्रिय खबर |
| **भर्तुः** = स्वामी श्रीकृष्णको | **आदाय** = लिएर | **श्रूयताम्** = सुन |
| **रहस्करः** = सन्देशवाहक | **आगतः** = आएको छु (त्यो) | |
| | **भवतीनां** = तिमीहरूका लागि | |

**वाक्यार्थ–** हे कल्याणकारी गोपिनीहरू! म स्वामी श्रीकृष्णको सन्देशवाहक हुँ। मैले तिमीहरूका निम्ति आनन्द दिने उहाँको प्रिय सन्देशहरू लिएर आएको छु, सुन।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**भवतीनां वियोगो मे न हि सर्वात्मना क्वचित्।**
**यथा भूतानि भूतेषु खं वाय्वग्निर्जलं मही।**
**तथाहं च मनःप्राणभूतेन्द्रियगुणाश्रयः॥ २९॥**

पदार्थ–
**सर्वात्मना** = सर्वात्मभावले (सबैमा व्याप्त रहेको)
**मे** = मेरो
**वियोगः** = वियोग
**भवतीनां** = तिमीहरूसँग
**क्वचित्** = कहीँ पनि
**न हि** = भएको छैन
**यथा** = जसरी
**भूतेषु** = सम्पूर्ण भौतिक वस्तुमा
**खं** = आकाश
**वाय्वग्निः** = वायु, अग्नि
**जलं** = जल
**मही** = पृथिवीरूप
**भूतानि** = पञ्चमहाभूत व्याप्त छन्
**तथा** = त्यसै गरी
**अहं च** = म पनि
**मनःप्राणभूतेन्द्रियगुणाश्रयः** = मन, प्राण, पञ्चभूत, इन्द्रिय र तिनका विषयहरूको आश्रय हुँ

**वाक्यार्थ–** (भगवान्ले भन्नुभएको छ) म सबैको आत्मा हुँ, तसर्थ मसँग तिमीहरूको वियोग कहिल्यै पनि हुन सक्दैन। जसरी संसारका सबै भौतिक वस्तुमा आकाश, वायु, अग्नि, जल र पृथिवी यी पञ्चमहाभूत व्याप्त छन्, त्यसै गरी म पनि मन, प्राण, पञ्चभूत, इन्द्रिय र तिनका विषयहरूको आश्रयका रूपमा सर्वत्र व्याप्त रहेको छु।

**आत्मन्येवात्मनात्मानं सृजे हन्म्यनुपालये।**
**आत्ममायानुभावेन भूतेन्द्रियगुणात्मना॥ ३०॥**

पदार्थ–
**आत्ममायानुभावेन** = आफ्नो मायाशक्तिको प्रभावले
**भूतेन्द्रियगुणात्मना** = भूत, इन्द्रिय र तिनका विषयका रूपमा
**आत्मना** = आफैँले
**आत्मनि एव** = आफूमा नै
**आत्मानं** = आफूलाई
**सृजे** = उत्पन्न गर्दछु
**अनुपालये** = पालन गर्छु (र)
**हन्मि** = संहार पनि गर्छु

**वाक्यार्थ–** म नै आफ्नो मायाशक्तिको प्रभावले पञ्चतत्त्व, इन्द्रिय र तिनका विषयका रूपमा आफूद्वारा आफूमा आफूलाई उत्पन्न गर्छु, पालन गर्छु र संहार गर्दछु।

**आत्मा ज्ञानमयः शुद्धो व्यतिरिक्तोऽगुणान्वयः।**
**सुषुप्तिस्वप्नजाग्रद्भिर्मायावृत्तिभिरीयते॥ ३१॥**

पदार्थ–
**आत्मा** = आत्मा
**शुद्धः** = शुद्ध
**ज्ञानमयः** = ज्ञानमय
**व्यतिरिक्तः** = शरीरदेखि भिन्न
**अगुणान्वयः** = सत्त्व आदि

गुणले रहित
**सुषुप्तिस्वप्नजाग्रद्भिः** = सुषुप्ति, जाग्रत् र स्वप्नरूप
**मायावृत्तिभिः** = मायाका वृत्ति (अवस्थाविशेष)द्वारा
**ईयते** = प्रतीत हुन्छ

**वाक्यार्थ–** आत्मा शुद्ध र ज्ञानमय छ अनि शरीरदेखि भिन्न छ। सत्त्व, रज र तम यी मायाका गुणहरूभन्दा यो भिन्न छ। त्यो आत्मा मायाका जाग्रत्, स्वप्न, सुषुप्तिरूप तीन अवस्थाद्वारा (विश्व, तैजस र प्राज्ञका रूपमा) प्रतीत हुन्छ।

**येनेन्द्रियार्थान् ध्यायेत मृषा स्वप्नवदुत्थितः।**
**तन्निरुन्ध्यादिन्द्रियाणि विनिद्रः प्रत्यपद्यत ॥ ३२ ॥**

**पदार्थ–**
**येन** = जुन मनद्वारा
**इन्द्रियार्थान्** = इन्द्रिय र तिनका विषयहरूलाई
**उत्थितः** = निद्राबाट ब्युँझिएको मानिसले
**स्वप्नवत्** = सपनामा देखेको वस्तुलाई झैँ
**मृषा** = मिथ्या
**ध्यायेत** = सम्झिन्छ
**तत्** = त्यो मन (र)
**इन्द्रियाणि** = इन्द्रियहरू
**विनिद्रः** = निद्रारहित (आलस्यहीन) भएर
**निरुन्ध्यात्** = नियन्त्रण गरोस्
**प्रत्यपद्यत** = (त्यस्तो व्यक्तिले ब्रह्म) प्राप्त गर्दछ

**वाक्यार्थ–** इन्द्रिय र तिनका विषयहरूलाई मनद्वारा सपनामा देखिएका वस्तुलाई निद्राबाट ब्युँझिएको मानिसले मिथ्या माने जस्तै मिथ्या सम्झेर मन र इन्द्रियहरूलाई निद्रारहित (आलस्यरहित) भएर नियन्त्रण गर्ने व्यक्तिले नै ब्रह्म प्राप्त गर्दछ।

**एतदन्तः समाम्नायो योगः साङ्ख्यं मनीषिणाम्।**
**त्यागस्तपो दमः सत्यं समुद्रान्ता इवापगाः ॥ ३३ ॥**

**पदार्थ–**
**समुद्रान्ताः** = समुद्रमा पुगेर अन्त्य हुने
**आपगाः इव** = नदीहरू झैँ
**मनीषिणां** = विद्वान्हरूका
**समाम्नायः** = वेदाभ्यास
**योगः** = योगशास्त्र
**साङ्ख्यं** = साङ्ख्यशास्त्र
**त्यागः** = त्याग
**तपः** = तपस्या
**दमः** = इन्द्रियनियन्त्रण
**सत्यं** = सत्य आदि सबै कुरा
**एतदन्तः** = यसमा (ब्रह्म वा भगवान् श्रीकृष्णको साक्षात्कारमा) समाप्त हुन्छन्

**वाक्यार्थ–** जसरी नदीहरू समुद्रमा अन्त हुन्छन्, त्यसै गरी विद्वान्हरूको वेदाभ्यास, योगशास्त्र, साङ्ख्यशास्त्र, त्याग, तपस्या, इन्द्रियनियन्त्रण र सत्य व्यवहार आदि सबै मेरै (ब्रह्मकै) प्राप्तिमा समाप्त हुन्छन्।

**यत्त्वहं भवतीनां वै दूरे वर्ते प्रियो दृशाम्।**
**मनसः सन्निकर्षार्थं मदनुध्यानकाम्यया ॥ ३४ ॥**

| पदार्थ– | दृशां = (तिमीहरूको) आँखादेखि | मदनुध्यानकाम्यया = निरन्तर मेरो चिन्तनले |
|---|---|---|
| भवतीनां = तिमीहरूको | दूरे = टाढा | मनसः = मनको |
| प्रियः = प्रिय | वर्ते = रहेको छु (त्यो) | सन्निकर्षार्थम् = सामीप्यका लागि हो |
| अहं = म (कृष्ण) | वै = निश्चय नै | |
| यत् तु = जुन | | |

**वाक्यार्थ–** तिमीहरूको प्रिय म जुन तिमीहरूका आँखादेखि टाढा भएको छु, त्यो निरन्तर मेरो चिन्तनले मसँग तिमीहरूको मनको सामीप्यका लागि नै हो।

**यथा दूरचरे प्रेष्ठे मन आविश्य वर्तते।**
**स्त्रीणां च न तथा चेतः सन्निकृष्टेऽक्षिगोचरे॥ ३५॥**

| पदार्थ– | प्रेष्ठे = प्रियतममा | सन्निकृष्टे = नजिकमा रहेको |
|---|---|---|
| यथा = जसरी | आविश्य = स्थिर रूपले | अक्षिगोचरे च = आँखाले देखिरहेको प्रियतममा समेत |
| स्त्रीणां = स्त्रीहरूको | वर्तते = रहिरहन्छ | न = हुँदैन |
| मनः = मन | तथा = त्यस्तो | |
| दूरचरे = टाढा रहेका | चेतः = स्थिरचित्त | |

**वाक्यार्थ–** किनभने स्त्रीहरूको चित्त जसरी टाढा रहेका प्रियतममा स्थिरभावले लागिरहन्छ, त्यसरी आफ्नो सामने आँखाले देखिरहेको प्रियतममा समेत लाग्दैन।

**विवरण–** यहाँ भगवान् श्रीकृष्णले गोपिनीहरूलाई दुई रूपमा सम्झाउनुभएको छ। सबभन्दा पहिले भगवान्ले आफू संसारका सबै रूपमा सबैतिर भएकाले कहिल्यै गोपिनीहरूबाट टाढा नभएको कुरा बताउनुभएको छ। आफैँदेखि आफू टाढा हुन मिल्छ र? म तिमीहरूको नै आत्मा भएकाले कहिल्यै टाढा भएको छैन भन्ने कुरा भगवान्ले गर्नुभएको छ। यो ज्ञानको दृष्टिले गरिएको उपदेश हो। यसपछि प्रेमकै भाषाको प्रयोग गरी भगवान्ले गोपिनीहरूलाई सम्झाउनुभएको छ। भगवान् भन्नुहुन्छ– **मदनुध्यानकाम्यया** अर्थात् मेरो निरन्तर चिन्तन गराउने इच्छाले नै म टाढा भएको हुँ, प्रेम नभएकाले होइन। भगवान् प्रेमको विषयमा गोपिनीहरूलाई सम्झाउनुहुन्छ– हे गोपिनीहरू! प्रेम आँखाबाट हुने कुरा हो र? यो त मनबाट गाँसिने सम्बन्ध हो। मन जति नजिक हुन्छ, त्यति नै प्रेम दृढ बन्दै जान्छ। आफ्नो प्रेमीलाई आँखा अगाडि देखिरहन खोज्नु के उनको स्वतन्त्रतामा आघात होइन र? अनि आफ्नो स्वार्थ एवं आनन्दको मात्र खोजी भएन र? प्रेममा आफ्नो सुखको होइन, प्रगाढ प्रेमको मात्र खोजी हुनुपर्दछ। **मनसः सन्निकर्षार्थं** अर्थात् मनलाई झन् नजिक बनाउनका लागि नै म तिमीहरूको आँखाबाट टाढा बसेको हुँ भनी भगवान् भन्नुहुन्छ। आफ्ना प्रियतम टाढा हुँदा उनमा जति मन लाग्छ, त्यति नजिक हुँदा मन लाग्दैन। त्यसैले तिमीहरूको प्रेमलाई दृढ गर्न एवं बढाउन नै म तिमीहरूको आँखाबाट टाढा भएको हुँ, मनबाट त झन्-झन् नजिक छु भनी श्रीकृष्णले गोपिनीहरूलाई सम्झाउनुभएको छ।

**मय्यावेश्य मनः कृत्स्नं विमुक्ताशेषवृत्ति यत् ।**

**अनुस्मरन्त्यो मां नित्यमचिरान्मामुपैष्यथ ॥ ३६ ॥**

पदार्थ–
**विमुक्ताशेषवृत्तिः** = सम्पूर्ण वासनाले रहित भएर
**कृत्स्नं** = पूर्णरूपमा
**मनः** = आफ्नो चित्तलाई
**मयि** = ममा
**आवेश्य** = लगाएर
**यत्** = जब
**नित्यं** = सधैँ
**मां** = मलाई
**अनुस्मरन्त्यः** = सम्झिरहनेछौ (त्यसपछि)
**अचिरात्** = छिट्टै
**मां** = मलाई
**उपैष्यथ** = प्राप्त गर्नेछौ

**वाक्यार्थ–** सम्पूर्ण वासनाले रहित भएर र पूर्णरूपमा आफ्नो चित्तलाई ममा लगाएर जब सधैँ मेरो स्मरण गरिरहनेछौ, तब तिमीहरूले छिट्टै मलाई प्राप्त गर्नेछौ।

**या मया क्रीडता रात्र्यां वनेऽस्मिन् व्रज आस्थिताः ।**

**अलब्धरासाः कल्याण्यो मापुर्मद्वीर्यचिन्तया ॥ ३७ ॥**

पदार्थ–
**कल्याण्यः** = हे कल्याणीहरू
**रात्र्यां** = रात्रिमा
**वने** = वृन्दावनमा
**मया** = मद्वारा
**क्रीडता** = क्रीडा गर्दा
**याः** = जुन गोपिनीहरू
**अस्मिन्** = यस
**व्रजे** = व्रजमण्डलमा
**आस्थिताः** = (पतिपुत्रादिद्वारा रोकिनाले) राखिए
**अलब्धरासाः** = रासलीलामा सामेल हुन नपाएका थिए, तिनीहरूले
**मद्वीर्यचिन्तया** = मेरो लीलाहरूको स्मरण मात्रले
**मा** = मलाई
**आपुः** = प्राप्त गरेका थिए

**वाक्यार्थ–** हे कल्याणीहरू ! जुन वेला मैले वृन्दावनमा रात्रिमा रासक्रीडा रचेको थिएँ, त्यस समय जुन गोपिनीहरू पतिपुत्रादिले रोकिदिनाले व्रजमा नै रहे र रासलीलामा सहभागी हुन पाएनन्, तिनीहरू मेरा लीलाको स्मरण मात्रले ममा नै प्राप्त भएका थिए।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं प्रियतमादिष्टमाकर्ण्य व्रजयोषितः ।**

**ता ऊचुरुद्धवं प्रीतास्तत्सन्देशागतस्मृतीः ॥ ३८ ॥**

पदार्थ–
**एवं** = यसप्रकार
**प्रियतमादिष्टं** = प्रियतम श्रीकृष्णद्वारा भनिएका कुराहरू
**आकर्ण्य** = सुनेर
**तत्सन्देशागतस्मृतीः** = उहाँले पठाएका सन्देशका कारण पूर्वलीलाहरू सम्झेका (त्यसैले)
**प्रीताः** = प्रसन्न भएका
**ताः** = ती
**व्रजयोषितः** = गोपिनीहरूले
**उद्धवं** = उद्धवलाई
**ऊचुः** = भन्न लागे

**वाक्यार्थ–** यसप्रकार प्रियतम श्रीकृष्णले भन्नुभएका कुराहरू सुनेर उहाँले पठाएका सन्देशका कारण पूर्वलीलाहरू सम्झेर प्रसन्न भएका गोपिनीहरूले उद्धवलाई भन्न लागे।

**गोप्य ऊचुः** (गोपिनीहरूले भने)

**दिष्ट्याहितो हतः कंसो यदूनां सानुगोऽघकृत्।**
**दिष्ट्याप्तैर्लब्धसर्वार्थैः कुशल्यास्तेऽच्युतोऽधुना ॥ ३९ ॥**

| पदार्थ– | **कंसः** = कंस | गरेका |
|---|---|---|
| **दिष्ट्या** = खुसीको कुरा | **हतः** = मारियो | **आप्तैः** = प्रियजनका साथमा |
| **यदूनां** = यादवहरूको | **दिष्ट्या** = अर्को खुसीको कुरा | **कुशली** = सुखपूर्वक |
| **अहितः** = शत्रु | **अच्युतः** = श्रीकृष्ण | **आस्ते** = रहनुभएको छ |
| **सानुगः** = अनुयायी सहित | **अधुना** = अहिले (मथुरामा) | |
| **अघकृत्** = पापी | **लब्धसर्वार्थैः** = सर्वस्व प्राप्त | |

**वाक्यार्थ–** खुसीको कुरा, यादवहरूको शत्रु पापी कंस आफ्ना अनुयायी सहित मारियो। अरु खुसीको कुरा, प्रियतम श्रीकृष्ण मनोरथ पूर्ण भएका प्रियजनका साथमा सुखपूर्वक निवास गरिरहनुभएको छ।

**कच्चिद् गदाग्रजः सौम्य करोति पुरयोषिताम्।**
**प्रीतिं नः स्निग्धसव्रीडहासोदारेक्षणार्चितः ॥ ४० ॥**

| पदार्थ– | प्रेमपूर्ण सलज्ज हाँसो र उदार | **कच्चित्** = के त्यहाँका |
|---|---|---|
| **सौम्य** = हे सज्जन उद्धव | हेराइले पूजा गरिएका | **पुरयोषितां** = नगरस्त्रीहरूसँग |
| **नः** = हामीहरूले | **गदाग्रजः** = (गदका दाजु) | **प्रीतिं** = प्रेम |
| **स्निग्धसव्रीडहासोदारेक्षणार्चितः** = | श्रीकृष्ण | **करोति** = गर्नुहुन्छ |

**वाक्यार्थ–** हे सज्जन उद्धव ! हाम्रा प्रेमपूर्ण लजालु हाँसो र उदार हेराइले पूजित भएका श्रीकृष्ण के त्यहाँका स्त्रीहरूसँग प्रेम गर्नुहुन्छ ?

**कथं रतिविशेषज्ञः प्रियश्च वरयोषिताम्।**
**नानुबध्येत तद्वाक्यैर्विभ्रमैश्चानुभाजितः ॥ ४१ ॥**

| पदार्थ– | **प्रियः** = प्यारा श्रीकृष्ण | **विभ्रमैः च** = आकर्षक |
|---|---|---|
| **रतिविशेषज्ञः** = रतिविशेषज्ञ (र) | **तद्वाक्यैः** = तिनीहरूको मिठो | हिँडाइद्वारा |
| **वरयोषितां** = श्रेष्ठ स्त्रीहरूका | बोली र | **अनुभाजितः** = पूजित हुनुभएका |

**कथं** = कसरी
**न अनुबध्येत** = वशमा नपरून्

**वाक्यार्थ–** (अर्की गोपिनीले भनिन्) राम्रा स्त्रीहरूका मिठो बोली र आकर्षक हिँडाइद्वारा पूजित हुनुभएका रतिविशेषज्ञ श्रीकृष्ण के तिनीहरूको वशमा पर्नुभएन होला र ?

**अपि स्मरति नः साधो गोविन्दः प्रस्तुते क्वचित् ।**
**गोष्ठीमध्ये पुरस्त्रीणां ग्राम्याः स्वैरकथान्तरे ॥ ४२ ॥**

पदार्थ–
**साधो** = हे सज्जन
**पुरस्त्रीणां** = नगरका स्त्रीहरूको
**गोष्ठीमध्ये** = सभाका बीचमा
**स्वैरकथान्तरे** = (प्रेमविषयक) स्वच्छन्द कुराकानी
**प्रस्तुते** = हुन लागिरहेको वेला
**क्वचित्** = कहिल्यै
**गोविन्दः** = श्रीकृष्णले
**ग्राम्याः** = गाउँले
**नः** = हामी गोपिनीहरूलाई
**अपि स्मरति** = के सम्झिनुहुन्छ

**वाक्यार्थ–** (अर्की गोपिनीले भनिन्) हे सज्जन उद्धव ! नगरका स्त्रीहरूले सभामा स्वच्छन्द किसिमले कुराकानी गरिरहँदा हाम्रा प्रियतमले कहिल्यै हामी गाउँले गोपिनीहरूलाई पनि सम्झिनुहुन्छ त ?

**ताः किं निशाः स्मरति यासु तदा प्रियाभि–**
**वृन्दावने कुमुदकुन्दशशाङ्करम्ये ।**
**रेमे क्वणच्चरणनूपुररासगोष्ठ्या–**
**मस्माभिरीडितमनोज्ञकथः कदाचित् ॥ ४३ ॥**

पदार्थ–
**ईडितमनोज्ञकथः** = प्रशंसनीय लीला गर्नुभएका श्रीकृष्णले
**कुमुदकुन्दशशाङ्करम्ये** = कमल, कुन्द र चन्द्रमाको शोभाले रमणीय बनेको
**वृन्दावने** = वृन्दावनमा
**क्वणच्चरणनूपुररासगोष्ठ्याम्** = पाउजू बजाउँदै नाच्ने राससभामा
**तदा** = त्यस समयमा
**यासु** = जुन
**प्रियाभिः** = प्रिय
**अस्माभिः** = हामीहरूसँग
**रेमे** = रमण गर्नुभएको थियो
**ताः** = ती
**निशाः** = रात्रिहरू
**कदाचित्** = कहिल्यै
**स्मरति किं** = सम्झिनुहुन्छ के

**वाक्यार्थ–** (अर्की गोपिनीले भनिन्) जुन समयमा कमल, कुन्द र चन्द्रमाको शोभाले रमणीय बनेको वृन्दावनमा रास रचेर श्रीकृष्णले पाउजूको छम–छम आवाज निकाल्ने हामीहरूसँग नृत्यलीला गर्नुभएको थियो, ती रात्रिहरूलाई पनि के कहिलेकाहीँ उहाँ सम्झिनुहुन्छ त ?

**अप्येष्यतीह दाशार्हस्तप्ताः स्वकृतया शुचा ।**
**सञ्जीवयन्नु नो गात्रैर्यथेन्द्रो वनमम्बुदैः ॥ ४४ ॥**

**पदार्थ–**
**स्वकृतया** = आफैँले दिएको
**शुचा** = विरहशोकले
**तप्ताः** = व्याकुल भएका
**नः** = हामीहरूलाई
**इन्द्रः** = इन्द्रले
**यथा** = जसरी
**अम्बुदैः** = जलवर्षाद्वारा
**वनं** = वनलाई (बचाए, त्यसै गरी)
**दाशार्हः** = (दशार्हवंशी) श्रीकृष्ण
**गात्रैः** = आफ्ना सुन्दर अङ्गहरूद्वारा
**सञ्जीवयन्** = जीवित बनाउँदै
**इह अपि** = यहाँ गोकुलमा पनि
**एष्यति नु** = के आउनुहोला

**वाक्यार्थ–** (अर्की गोपिनीले भनिन्) हामी सबै उहाँकै विरहशोकले व्याकुल भइरहेका छौँ। जसरी देवराज इन्द्रले जलवर्षाद्वारा वनलाई बचाउँछन् त्यसै गरी आफ्ना सुन्दर अङ्गहरूले स्पर्श गरेर पुनः हामीलाई जीवित बनाउनका लागि के फेरि श्रीकृष्ण गोकुल आउनुहोला त ?

**कस्मात् कृष्ण इहायाति प्राप्तराज्यो हताहितः ।**
**नरेन्द्रकन्या उद्वाह्य प्रीतः सर्वसुहृद्वृतः ॥ ४५ ॥**

**पदार्थ–**
**प्राप्तराज्यः** = राज्य प्राप्त गर्नुभएका
**हताहितः** = शत्रुहरू सबै मारिएका
**सर्वसुहृद्वृतः** = सम्पूर्ण बन्धुबान्धवहरूले सहित हुनुभएका
**नरेन्द्रकन्याः** = राजामहाराजका कन्याहरूसँग
**उद्वाह्य** = विवाह गरेर
**प्रीतः** = प्रसन्न हुनुभएका
**कृष्णः** = श्रीकृष्ण
**कस्मात्** = के कारणले
**इह** = यहाँ
**आयाति** = आउनुहोला र

**वाक्यार्थ–** (यसै वेला अर्की गोपिनीले भनिन्) सबै शत्रुहरूलाई मारेर राज्य प्राप्त गरी राजकुमारीहरूसँग विवाह गरी बन्धुबान्धवहरूका साथमा आनन्दसँग बसिरहनुभएका उहाँ अब यहाँ किन आउनुहोला र ?

**किमस्माभिर्वनौकोभिरन्याभिर्वा महात्मनः ।**
**श्रीपतेराप्तकामस्य क्रियेतार्थः कृतात्मनः ॥ ४६ ॥**

**पदार्थ–**
**आप्तकामस्य** = सम्पूर्ण मनोरथ पूर्ण भएका
**कृतात्मनः** = चित्तलाई वशमा राख्नुभएका
**महात्मनः** = महात्मा
**श्रीपतेः** = लक्ष्मीपति श्रीकृष्णलाई
**वनौकोभिः** = वनवासी
**अस्माभिः** = हामी गोपिनीहरू (र)
**अन्याभिः** = अरू स्त्रीहरूका साथ
**किं वा** = के
**अर्थः** = प्रयोजन
**क्रियेत** = हुन सक्ला र

**वाक्यार्थ–** (अर्की गोपिनीले भनिन्) सम्पूर्ण मनोरथ पूर्ण भएका, चित्तलाई वशमा राख्ने महात्मा

भगवान् श्रीकृष्ण साक्षात् लक्ष्मीका पति हुनुहुन्छ। अतः हामी वनवासी गोपिनीहरू अथवा अरू स्त्रीहरूको उहाँलाई के काम होला र ?

**परं सौख्यं हि नैराश्यं स्वैरिण्यप्याह पिङ्गला।**

**तज्जानतीनां नः कृष्णे तथाप्याशा दुरत्यया ॥ ४७ ॥**

| पदार्थ– | **नैराश्यं** = आशाको त्याग नै | **नः** = हामीहरूको |
|---|---|---|
| **स्वैरिणी** = वेश्या | **परं सौख्यं** = परम सुख हो | **कृष्णे** = श्रीकृष्णमा |
| **पिङ्गला अपि** = पिङ्गलाले पनि | **तत्** = त्यो कुरा | **आशा** = मोह |
| **आह** = भनेकी थिई | **जानतीनां** = जानेका | **दुरत्यया** = छुट्न सकेको छैन |
| **हि** = निश्चय नै | **तथा अपि** = भए पनि | |

**वाक्यार्थ–** वेश्या पिङ्गलाले पनि 'संसारमा केहीको पनि आशा नगर्नु नै सुख हो' भन्ने कुरा बताएकी थिई, यो कुरा जान्दाजान्दै पनि श्रीकृष्णप्रतिको हाम्रो मोह छुट्न सकेको छैन।

**क उत्सहेत सन्त्यक्तुमुत्तमश्लोकसंविदम्।**

**अनिच्छतोऽपि यस्य श्रीरङ्गान्न च्यवते क्वचित् ॥ ४८ ॥**

| पदार्थ– | **कः** = को | **अङ्गात्** = अङ्ग (छाती)बाट |
|---|---|---|
| **उत्तमश्लोकसंविदं** = श्रीकृष्णको | **उत्सहेत** = समर्थ हुन्छ | **श्रीः** = लक्ष्मी |
| प्रेममय वचनलाई | **अनिच्छतः अपि** = नचाहेर पनि | **क्वचित्** = कहिल्यै |
| **सन्त्यक्तुम्** = भुल्न | **यस्य** = जुन भगवान्को | **न च्यवते** = अलग हुन्नन् |

**वाक्यार्थ–** प्रिय श्रीकृष्णले गरेका प्रेममय वचनलाई कसले भुल्न सक्दछ र ? जुन भगवान्को छातीबाट उहाँले नचाहँदा पनि लक्ष्मी समेत कहिल्यै अलग हुन्नन्।

**सरिच्छैलवनोद्देशा गावो वेणुरवा इमे।**

**सङ्कर्षणसहायेन कृष्णेनाचरिताः प्रभो ॥ ४९ ॥**

| पदार्थ– | वनप्रदेश | साथमा |
|---|---|---|
| **प्रभो** = हे समर्थ उद्धव | **गावः** = गाईहरू (र) | **कृष्णेन** = श्रीकृष्णद्वारा |
| **इमे** = यी | **वेणुरवाः** = बाँसुरीका धुनहरू | **आचरिताः** = उपभोग गरिएका |
| **सरिच्छैलवनोद्देशाः** = नदी, पर्वत, | **सङ्कर्षणसहायेन** = बलरामका | थिए |

**वाक्यार्थ–** हे प्रभु उद्धव ! यी सबै नदी, पर्वत, वनप्रदेश, गाई र बाँसुरीका धुनहरूलाई बलरामका साथमा भगवान् श्रीकृष्णले उपभोग गर्नुभएको थियो।

**पुनः पुनः स्मारयन्ति नन्दगोपसुतं बत।**
**श्रीनिकेतैस्तत्पदकैर्विस्मर्तुं नैव शक्नुमः॥ ५०॥**

**पदार्थ–**
**बत** = आश्चर्यको कुरो (के गर्नु र !)
**श्रीनिकेतैः** = सौन्दर्यका खानी
**तत्पदकैः** = उहाँका चरणचिह्नहरूले
**नन्दगोपसुतं** = नन्दकुमार श्रीकृष्णलाई
**पुनः पुनः** = बारम्बार
**स्मारयन्ति** = सम्झाइरहन्छन्
**विस्मर्तुं** = उहाँलाई भुल्न
**न एव शक्नुमः** = हामी सक्दै सक्दैनौं

**वाक्यार्थ–** के गर्नु र ! सौन्दर्यका खानी उहाँका (यी वन–पर्वतहरूमा रहेका) चरणका चिह्नहरूले बारम्बार नन्दकुमार श्रीकृष्णको सम्झना गराइरहन्छन्, हामी उहाँलाई भुल्न सक्दै सक्दैनौं।

**विवरण–** यहाँ गोपिनीहरूले चाहेर पनि कृष्णलाई भुल्न नसकेको कुरा व्यक्त गरेका छन्। यमुना नदी, गोवर्धन पर्वत र वृन्दावनका यी भागहरूलाई देखुन्जेल हामी कृष्णलाई कसरी बिर्सन सक्छौं र ? यी कृष्णले चराएका गाई हुन्, यी प्रदेशहरूमा बलरामका साथ कृष्ण घुम्नुभएको थियो। यी सम्पूर्ण वस्तुहरूले हामीलाई कृष्णको सम्झना दिलाउँछन्। वृन्दावनमा रहेका श्रीकृष्णका पदचिह्नहरू देख्नेबित्तिकै हामीलाई उहाँको स्मरण हुन्छ। हे उद्धव ! हामी हरेक वस्तुहरूमा कृष्णलाई नै सम्झिन्छौं भनी गोपिनीहरूले बताएका छन्। **विस्मर्तुं नैव शक्नुमः** अर्थात् उहाँलाई हामी बिर्सन सक्दैनौं भन्ने भनाइमा प्रेमको सामर्थ्य प्रकट भएको छ। अरू–अरू भावमा व्यक्तिले एउटै वस्तुलाई सधैं सम्झिरहन कठिन पर्छ, प्रेमले सधैं प्रियवस्तुको सम्झना दिलाइदिन्छ। जसको हृदयमा प्रेम प्रकट हुन्छ, त्यो व्यक्तिका सबै थरी सामर्थ्यहरू प्रेममैं गई बिलाउँछन्। प्रेम उदय नहुन्जेल व्यक्ति आफ्नै नियन्त्रणमा हुन्छ र आफैं सबल हुन्छ, तर प्रेम प्रकट भइसकेपछि व्यक्ति होइन, प्रेम मात्र सबल हुन्छ। आफ्नो कुनै बल बाँकी नरहेकाले प्रेमकै वशमा परी आफूहरूले कृष्णलाई सधैं सम्झिरहेको गोपिनीहरूको भाव रहेको छ। जहाँ योगीहरू अनेक अभ्यासपछि केही छिन मात्र पनि भगवान्मा मन टिकाउन सक्दैनन् भने त्यहीं गोपिनीहरू प्रयास गर्दा पनि भगवान्बाट मन हटाउन सक्दैनन् भनी तुलना गर्दा परमात्मालाई पाउने साधनहरूमध्ये विशुद्ध प्रेम नै सबैभन्दा बलियो र भरपर्दो भएको स्पष्ट हुन्छ।

**गत्या ललितयोदारहासलीलावलोकनैः।**
**माध्व्या गिरा हृतधियः कथं तं विस्मरामहे॥ ५१॥**

**पदार्थ–**
**ललितया** = (उहाँको) सुन्दर
**गत्या** = हिंडाइले
**उदारहासलीलावलोकनैः** = उन्मुक्त हाँसो, कर्के हेराइ र
**माध्व्या** = मधुर
**गिरा** = बोलीले
**हृतधियः** = बुद्धि (मन) चोरिएका हामीले
**तं** = उहाँलाई
**कथं** = कसरी
**विस्मरामहे** = भुल्न सक्थ्यौं

**वाक्यार्थ–** श्रीकृष्णको सुन्दर हिँडाइ, उन्मुक्त हाँसो, कर्के हेराइ र सुमधुर बोलीले मन नै चोरिएका हामी गोपिनीहरूले उहाँलाई कसरी भुल्न सक्थ्यौँ र ?

**हे नाथ हे रमानाथ व्रजनाथार्तिनाशन ।**

**मग्नमुद्धर गोविन्द गोकुलं वृजिनार्णवात् ॥ ५२ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | **आर्तिनाशन** = हे दुःखहर्ता | **वृजिनार्णवात्** = दुःखको |
| **हे नाथ** = हे संसारका मालिक | **गोविन्द** = हे गोविन्द | सागरबाट |
| **हे रमानाथ** = हे लक्ष्मीपति | **मग्नं** = डुबेको | **उद्धर** = उद्धार गर्नुहोस् |
| **व्रजनाथ** = हे व्रजका संरक्षक | **गोकुलं** = गोकुललाई | |

**वाक्यार्थ–** हे संसारका मालिक ! हे लक्ष्मीका पति ! हे व्रजका संरक्षक ! हे दुःखहर्ता गोविन्द ! दुःखको सागरमा डुबेको यो गोकुलको उद्धार गर्नुहोस् ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**ततस्ताः कृष्णसन्देशैर्व्यपेतविरहज्वराः ।**

**उद्धवं पूजयाञ्चक्रुर्ज्ञात्वात्मानमधोक्षजम् ॥ ५३ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | **व्यपेतविरहज्वराः** = विरहरूपी | **आत्मानं** = सर्वान्तर्यामी |
| **ततः** = त्यसपछि | ज्वरो हटेका | **ज्ञात्वा** = बुझेर |
| **कृष्णसन्देशैः** = श्रीकृष्णको | **ताः** = ती गोपिनीहरूले | **उद्धवं** = उद्धवलाई |
| सन्देश सुनेर | **अधोक्षजं** = श्रीकृष्णलाई | **पूजयाञ्चक्रुः** = पूजा गरे |

**वाक्यार्थ–** श्रीकृष्णको सन्देश सुन्नाले विरहको ज्वरो हटेका गोपिनीहरूले श्रीकृष्णलाई सर्वान्तर्यामी सम्झे र त्यसपछि उद्धवलाई पूजा गरे।

**उवास कतिचिन्मासान् गोपीनां विनुदञ्छुचः ।**

**कृष्णलीलाकथां गायन् रमयामास गोकुलम् ॥ ५४ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | **कतिचित्** = केही | लीलामय चरित्र |
| **गोपीनां** = गोपिनीहरूको | **मासान्** = महिना | **गायन्** = गाउँदै |
| **शुचः** = विरहव्यथालाई | **उवास** = (गोकुलमा) बसे | **गोकुलं** = गोकुललाई नै |
| **विनुदन्** = हटाउँदै | **कृष्णलीलाकथां** = श्रीकृष्णका | **रमयामास** = रमाइलो बनाइदिए |

**वाक्यार्थ–** गोपिनीहरूको विरहव्यथालाई शान्त पार्दै केही महिनासम्म गोकुलमा बसेका उद्धवले भगवान्का लीलाहरूको वर्णन गर्दै सारा गोकुललाई नै रमाइलो पारिदिए।

**यावन्त्यहानि नन्दस्य व्रजेऽवात्सीत् स उद्धवः।**
**व्रजौकसां क्षणप्रायाण्यासन् कृष्णस्य वार्तया ॥ ५५ ॥**

**पदार्थ–**
**सः** = ती
**उद्धवः** = उद्धव
**यावन्ति** = जति
**अहानि** = दिनसम्म
**नन्दस्य** = नन्दको
**व्रजे** = व्रजमण्डलमा
**अवात्सीत्** = बसे (ती दिनहरू)
**कृष्णस्य** = श्रीकृष्णका
**वार्तया** = लीलाहरूको चर्चाका कारण
**व्रजौकसां** = व्रजवासीहरूलाई
**क्षणप्रायाणि** = एक क्षण बराबर
**आसन्** = भए

**वाक्यार्थ–** उद्धव जति दिन नन्दको व्रजमण्डलमा बसे, ती दिन भगवान् श्रीकृष्णका रसमय लीलाहरूको चर्चा गरी बितेकाले त्यो समय व्रजवासीहरूका लागि एक क्षण जति मात्र भयो।

**सरिद्वनगिरिद्रोणीर्वीक्षन् कुसुमितान् द्रुमान्।**
**कृष्णं संस्मारयन् रेमे हरिदासो व्रजौकसाम् ॥ ५६ ॥**

**पदार्थ–**
**हरिदासः** = श्रीकृष्णका भक्त उद्धव
**कुसुमितान्** = फुलेका
**द्रुमान्** = वृक्षलताहरूलाई
**सरिद्वनगिरिद्रोणीः** = नदी, वन पर्वत र गुफाहरूलाई
**वीक्षन्** = हेर्दै
**व्रजौकसां** = व्रजवासीहरूलाई
**कृष्णं** = श्रीकृष्ण
**संस्मारयन्** = सम्झाउँदै
**रेमे** = रमाए

**वाक्यार्थ–** श्रीकृष्णका भक्त उद्धव नदी, पर्वत, वन, गुफा र फुलेका वृक्षलताहरूको शोभा हेर्दै र व्रजवासीहरूलाई श्रीकृष्णको सम्झना गराउँदै रमाए।

**दृष्ट्वैवमादि गोपीनां कृष्णावेशात्मविक्लवम्।**
**उद्धवः परमप्रीतस्ता नमस्यन्निदं जगौ ॥ ५७ ॥**

**पदार्थ–**
**गोपीनां** = गोपिनीहरूको
**एवम् आदि** = यसप्रकारको
**कृष्णावेशात्मविक्लवं** = श्रीकृष्णप्रतिको प्रेमजन्य विकलतालाई
**दृष्ट्वा** = देखेर
**परमप्रीतः** = अत्यन्त प्रसन्न भएका
**उद्धवः** = उद्धवले
**ताः** = ती गोपिनीहरूलाई
**नमस्यन्** = नमस्कार गर्दै
**इदं** = यसो
**जगौ** = भने

**वाक्यार्थ–** गोपिनीहरूको यसप्रकारको श्रीकृष्णप्रतिको प्रेमजन्य विकलता देखेर अत्यन्त प्रसन्न भएका उद्धवले ती गोपिनीहरूलाई नमस्कार गर्दै यसो भने।

**एताः परं तनुभृतो भुवि गोपवध्वो**
**गोविन्द एव निखिलात्मनि रूढभावाः।**

**वाञ्छन्ति यद् भवभियो मुनयो वयं च**
**किं ब्रह्मजन्मभिरनन्तकथारसस्य ॥ ५८ ॥**

**पदार्थ–**
**निखिलात्मनि** = सर्वात्मा
**गोविन्दे** = श्रीकृष्णमा
**रूढभावाः** = समर्पित भएका
**एताः** = यी
**गोपवध्वः** = गोपिनीहरू
**एव** = मात्र
**भुवि** = संसारमा
**परं** = सफल
**तनुभृतः** = शरीरधारी हुन्
**यत्** = जसमा (यिनीहरू रत भएका छन्, त्यस तत्त्वलाई)
**भवभियः** = संसारदेखि डराएका
**मुनयः** = ठुला–ठुला ऋषिमुनिहरू
**वाञ्छन्ति** = प्राप्त गर्न चाहन्छन्
**वयं च** = हामीहरू पनि चाहन्छौँ
**अनन्तकथारसस्य** = श्रीकृष्णको लीलारसमा लीन भएकाहरूका निम्ति
**ब्रह्मजन्मभिः** = ब्राह्मणका जन्महरूद्वारा पनि
**किम्** = के (नै हुन्छ र)

**वाक्यार्थ–** सर्वात्मा भगवान् श्रीकृष्णमा समर्पित भएका यी गोपिनीहरूले मात्र संसारमा सफल जीवन धारण गरेका छन्। जसमा यिनीहरू रत भएका छन् उहाँ भगवान्‌लाई प्राप्त गर्न ठुला–ठुला ऋषिमुनिहरू तथा हामी पनि सधैँ लालायित हुन्छौँ। श्रीकृष्णको लीलारसमा लीन भएका यिनीहरूका निम्ति ब्राह्मणका कैयौँ जन्म नै पनि केही होइनन्।

**क्वेमाः स्त्रियो वनचरीर्व्यभिचारदुष्टाः**
**कृष्णे क्व चैष परमात्मनि रूढभावः।**
**नन्वीश्वरोऽनुभजतोऽविदुषोऽपि साक्षा-**
**च्छ्रेयस्तनोत्यगदराज इवोपयुक्तः ॥ ५९ ॥**

**पदार्थ–**
**व्यभिचारदुष्टाः** = सदाचार र ज्ञानले हीन
**इमाः** = यी
**वनचरीः** = जङ्गली
**स्त्रियः** = स्त्रीहरू
**क्व** = कहाँ
**परमात्मनि** = परमात्मा
**कृष्णे** = श्रीकृष्णमा
**एषः** = यसप्रकारको
**रूढभावः च** = प्रेमभाव
**क्व** = कहाँ
**ननु** = निश्चय नै
**ईश्वरः** = ईश्वरले
**अनुभजतः** = नित्य भजन (प्रेम) गर्ने भक्तहरूलाई
**अविदुषः अपि** = अज्ञानी भए पनि
**उपयुक्तः** = प्रयोग गरिएको
**अगदराजः** = उत्तम औषधि (अमृत)ले
**इव** = झैँ
**साक्षात्** = प्रत्यक्ष
**श्रेयः** = कल्याण
**तनोति** = गर्नुहुन्छ

**वाक्यार्थ–** कहाँ यी सदाचार र ज्ञानले हीन जङ्गली गोपिनीहरू र कहाँ परमात्मा श्रीकृष्णमा यो अनन्य प्रेम ? (यसबाट के सिद्ध हुन्छ भने) निश्चय नै आफूलाई नित्य प्रेम गर्ने व्यक्ति अज्ञानी नै

भएपनि त्यसको भगवान्‌ले कल्याण गरिदिनुहुन्छ, जसरी नजानीकन खाएको अमृतले पनि खाने व्यक्तिलाई कल्याण गर्दछ।

**नायं श्रियोऽङ्ग उ नितान्तरतेः प्रसादः**
**स्वर्योषितां नलिनगन्धरुचां कुतोऽन्याः।**
**रासोत्सवेऽस्य भुजदण्डगृहीतकण्ठ-**
**लब्धाशिषां य उदगाद् व्रजवल्लवीनाम्॥ ६०॥**

**पदार्थ–**
**उ** = आश्चर्यको कुरो
**रासोत्सवे** = रासक्रीडाको समयमा
**अस्य** = उहाँ (श्रीकृष्ण)का
**भुजदण्डगृहीतकण्ठलब्धाशिषां** = बाहुले घाँटीमा अँगालो मारिदिँदा सम्पूर्ण चाहना पूरा गरेका
**व्रजवल्लवीनां** = व्रजका स्त्रीहरूलाई
**यः** = जुन
**प्रसादः** = अनुग्रह
**उदगात्** = प्राप्त भयो
**अयं** = त्यो अनुग्रह
**नलिनगन्धरुचां** = कमलको जस्तो सुगन्ध र स्वरूप भएका
**स्वर्योषितां** = स्वर्गका अप्सराहरूलाई
**अङ्गे** = छातीमा
**नितान्तरतेः** = नित्य रमण गर्ने
**श्रियः** = स्वयं लक्ष्मीलाई समेत
**न** = प्राप्त छैन भने
**अन्याः** = अरू स्त्रीहरूले त
**कुतः** = कहाँबाट प्राप्त गर्नु

**वाक्यार्थ–** रासक्रीडाको समयमा भगवान्‌ले आफ्नो बाहुले घाँटीमा अँगालो मारिदिँदा सम्पूर्ण कामना प्राप्त गरेका यी गोपिनीहरूलाई जुन अनुग्रह प्राप्त भयो, त्यस्तो प्रेम त निरन्तर उहाँकै छातीमा रमण गर्ने स्वयं लक्ष्मीले तथा कमलको जस्तो सुगन्ध र कान्ति भएका स्वर्गका अप्सराहरूले समेत प्राप्त गर्न सकेका छैनन् भने अरू सामान्य स्त्रीहरूको त के कुरा भयो र ?

**आसामहो चरणरेणुजुषामहं स्यां**
**वृन्दावने किमपि गुल्मलतौषधीनाम्।**
**या दुस्त्यजं स्वजनमार्यपथं च हित्वा**
**भेजुर्मुकुन्दपदवीं श्रुतिभिर्विमृग्याम्॥ ६१॥**

**पदार्थ–**
**अहो** = अहो !
**अहं** = म उद्धव
**आसां** = यी गोपिनीहरूको
**चरणरेणुजुषां** = चरणका धुलोलाई सेवन गर्ने
**गुल्मलतौषधीनां** = लता, गुल्म र औषधीहरूमध्ये
**किम् अपि** = कुनै स्वरूपमा
**वृन्दावने** = वृन्दावनमा
**स्यां** = रहन पाऊँ
**याः** = जुन गोपिनीहरूले
**दुस्त्यजं** = त्याग्न कठिन
**स्वजनं** = आफन्तहरू (र)
**आर्यपथं च** = आर्य (लोक) परम्परा पनि
**हित्वा** = छाडेर
**श्रुतिभिः** = वेदहरूद्वारा

**विमृग्यां** = खोजिने
**मुकुन्दपदवीं** = श्रीकृष्णका चरणचिह्नलाई
**भेजुः** = सेवा (प्राप्त) गरेका छन्

**वाक्यार्थ–** अहो ! म यी गोपिनीहरूका चरणको धुलोलाई सेवन गर्ने लता, गुल्म र औषधीहरूमध्ये कुनै बनेर पवित्र वृन्दावनमा रहन पाऊँ। किनभने यी गोपिनीहरूले त्याग्न नसकिने आफन्तहरू र लोकपरम्परालाई समेत त्यागेर वेदहरूद्वारा समेत खोजी गरिएका भगवान् श्रीकृष्णका चरणचिह्नलाई प्राप्त गरेका छन्।

**विवरण–** यस प्रसङ्गमा उद्धवले गोपिनीहरूको चरणको धुलो पाउने गरी व्रजमण्डलमा जन्मिन चाहेको भाव व्यक्त गरेका छन्। गोपिनीहरूमा रहेको प्रेमको दिव्य अवस्थालाई अनुभव गरी पग्लिएका उद्धवले भगवान्सँग यस्तो प्रार्थना गरेका हुन्। यहाँ उनको गोपिनीहरूप्रति श्रद्धा, आदर, परमात्मप्रेममा श्रद्धा अनि वृन्दावनको भूमिको महत्त्वबोध आदि सबै देख्न सकिन्छ।

उद्धव बृहस्पतिका शिष्य थिए। उनी ज्ञानीहरूमा अग्रगण्य थिए। उनलाई भित्र-भित्रै आफ्नो ज्ञानमा अभिमान थियो। बाहिरी रूपमा हेर्दा भगवान् श्रीकृष्णले आफ्नो विरहव्यथामा डुबिरहेका गोपिनीहरूलाई सम्झाउनका लागि उद्धवलाई व्रजमण्डलमा पठाउनुभएको थियो। उनी पनि उपदेश गर्नका लागि नै व्रजमा आएका थिए। यहाँ उद्धवले गोपिनीहरूको चरणको धुलोको महिमा गाएको सुन्दा के थाहा पाउन सकिन्छ भने उनी गोपिनीहरूलाई गाउँले आइमाईहरू भनी अवमूल्यन गरेको आफ्नो दुराग्रहको प्रायश्चित्त गर्न खोज्दैछन्। गोपिनीहरूप्रतिको दुर्भाव भनेको यी अज्ञानी गोपिनीहरूलाई म कृष्णतत्त्वको उपदेश दिई ज्ञानद्वारा शान्त बनाइदिन्छु भन्ने उद्धवमा रहेको अभिमानको भाव नै हो। व्रजमा आउँदा उद्धवले आफ्नो ज्ञानको अभिमान र गोपिनीहरू अज्ञानी छन् भन्ने दुराग्रहलाई पनि साथै ल्याएका थिए। भगवान्ले गोपिनीहरूको विरहव्यथालाई आफ्ना सन्देशद्वारा शान्त पार्न अनि सँगसँगै गोपिनीहरूको कृष्णप्रेमको उच्चतम स्थिति देखाई उद्धवमा रहेको शास्त्रज्ञानको अभिमानलाई पनि नष्ट गर्न उनलाई व्रजमा पठाउनुभएको थियो। उद्धवमा रहेको अभिमान त्यतिखेर ध्वस्त भयो, जब गोपिनीहरूले कृष्णप्रेमको व्याकुलतामा भमरोलाई कृष्णको दूतको रूपमा चित्रण गर्दै त्यही माध्यमले उद्धवमाथि नै प्रहार गरे। उद्धव कृष्णको पारमार्थिक स्वरूप बताई उहाँको स्तुतिगान सुनाउनकै लागि गोपिनीहरूकहाँ आएका थिए ! तर जब उनले गोपिनीहरूमा कृष्णप्रेमको उच्चतम अवस्था देखे तब उनको शास्त्रज्ञानको अभिमान पनि चकनाचुर भयो। त्यसैले यस श्लोकमा उद्धवले कृष्णप्रेमका आदर्श गोपिनीहरूको चरणको धुलो पाउने अभिलाषा व्यक्त गरेका हुन्।

**या वै श्रियार्चितमजादिभिराप्तकामै-**
**र्योगेश्वरैरपि यदात्मनि रासगोष्ठ्याम्।**
**कृष्णस्य तद् भगवतश्चरणारविन्दं**
**न्यस्तं स्तनेषु विजहुः परिरभ्य तापम्॥ ६२॥**

**पदार्थ**–
**वै** = निश्चय नै
**श्रिया** = लक्ष्मीद्वारा
**आप्तकामैः** = मनोरथ पूर्ण भएका
**अजादिभिः** = ब्रह्मा आदि देवताहरू र
**योगेश्वरैः अपि** = योगेश्वरहरू-द्वारा समेत
**आत्मनि** = हृदयमा राखेर
**अर्चितं** = पूजा गरिएका
**भगवतः** = भगवान्
**कृष्णस्य** = श्रीकृष्णका
**यत्** = जुन
**चरणारविन्दं** = चरणकमल छन्
**तत्** = तिनलाई
**रासगोष्ठ्यां** = रासक्रीडामा
**स्तनेषु** = स्तनमा
**न्यस्तं** = राखियो
**याः** = जुन गोपिनीहरूले (ती चरणकमललाई)
**परिरभ्य** = आलिङ्गन गरेर
**तापं** = सांसारिक तापलाई
**विजहुः** = त्यागे

**वाक्यार्थ**– लक्ष्मीले, ब्रह्मा आदि देवताहरूले र योगेश्वरहरूले समेत आफ्नो हृदयमा राखेर जुन भगवान् श्रीकृष्णका चरणकमलको पूजा गरिरहन्छन्, तिनै चरणकमललाई रासक्रीडाको समयमा गोपिनीहरूले आफ्नो स्तनमा राखेर तिनलाई आलिङ्गन गरेर सांसारिक तापलाई त्यागे।

**वन्दे नन्दव्रजस्त्रीणां पादरेणुमभीक्ष्णशः।**
**यासां हरिकथोद्गीतं पुनाति भुवनत्रयम्॥ ६३॥**

**पदार्थ**–
**यासां** = जुन गोपिनीहरूको
**हरिकथोद्गीतं** = हरिकथाको गानले
**भुवनत्रयं** = तीनै भुवनलाई
**पुनाति** = पवित्र पार्दछ (त्यस्ता)
**नन्दव्रजस्त्रीणां** = नन्दव्रजका स्त्रीहरूको
**पादरेणुं** = चरणधुलीलाई
**अभीक्ष्णशः** = बारम्बार
**वन्दे** = नमस्कार गर्दछु

**वाक्यार्थ**– जुन गोपिनीहरूले गाएको हरिकथाको गानले तीनै भुवनलाई पवित्र पार्दछ, त्यस्ता व्रजमण्डलका स्त्रीहरूको पाउको धुलोलाई म बारम्बार नमस्कार गर्दछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ गोपीरनुज्ञाप्य यशोदां नन्दमेव च।**
**गोपानामन्त्र्य दाशार्हो यास्यन्नारुरुहे रथम्॥ ६४॥**

**पदार्थ**–
**अथ** = त्यसपछि
**यास्यन्** = जान लागेका
**दाशार्हः** = (दशार्हवंशी) उद्धव
**गोपीः** = गोपिनी
**यशोदां च** = यशोदा र
**नन्दं एव** = नन्दसँग
**अनुज्ञाप्य** = आज्ञा लिएर
**गोपान्** = गोपहरूलाई
**आमन्त्र्य** = सोधेर
**रथं** = रथमा
**आरुरुहे** = चढ्नुभयो

**वाक्यार्थ**– त्यसपछि गोकुलबाट मथुरा जानका निम्ति तयार भएका उद्धव गोपिनीहरू, नन्द र यशोदाको आज्ञा लिएर तथा अन्य गोपहरूसँग बिदाबादी भएर रथमा चढे।

**तं निर्गतं समासाद्य नानोपायनपाणयः।**
**नन्दादयोऽनुरागेण प्रावोचन्नश्रुलोचनाः॥ ६५॥**

**पदार्थ–**
**नानोपायनपाणयः** = हातमा अनेक किसिमका उपहार लिएका
**अनुरागेण** = प्रेमका कारण
**अश्रुलोचनाः** = आँखाभरि आँसु लिएका
**नन्दादयः** = नन्द आदि व्रजवासीहरू
**निर्गतं** = व्रजबाट निस्किन लागेका
**तं** = ती उद्धवको
**समासाद्य** = नजिक गएर
**प्रावोचन्** = भन्न लागे

**वाक्यार्थ–** हातमा अनेक प्रकारका उपहार लिएका, प्रेमका कारण आँखाभरि आँसु भरिएका नन्द आदि व्रजवासीहरू व्रजबाट निस्किन लागेका ती उद्धवको नजिकमा गएर भन्न लागे।

**मनसो वृत्तयो नः स्युः कृष्णपादाम्बुजाश्रयाः।**
**वाचोऽभिधायिनीर्नाम्नां कायस्तत्प्रह्वणादिषु॥ ६६॥**

**पदार्थ–**
**नः** = हामीहरूका
**मनसः** = मनका
**वृत्तयः** = वृत्तिहरू
**कृष्णपादाम्बुजाश्रयाः** = श्रीकृष्णका चरणकमलको आश्रयमा
**स्युः** = रहिरहून्
**वाचः** = वाणीहरू
**नाम्नां** = (भगवान्का) नामहरूको
**अभिधायिनीः** = संकीर्तनमा लागिरहून्
**कायः** = शरीर
**तत्प्रह्वणादिषु** = भगवान्को अभिवादन, सेवा आदिमा लागिरहोस्

**वाक्यार्थ–** हाम्रा मनका प्रत्येक वृत्तिहरू श्रीकृष्णका चरणकमलको आश्रयमा रहिरहून्। हाम्रा वाणीहरू भगवान्का पवित्र गुणकीर्तनमा लागिरहून् र हाम्रो शरीर उहाँकै अभिवादन, सेवा आदिमा लागिरहोस्।

**कर्मभिर्भ्राम्यमाणानां यत्र क्वापीश्वरेच्छया।**
**मङ्गलाचरितैर्दानै रतिर्नः कृष्ण ईश्वरे॥ ६७॥**

**पदार्थ–**
**ईश्वरेच्छया** = भगवान्को इच्छा अनुसार
**कर्मभिः** = आफ्ना कर्मको फल अनुसार
**यत्र** = जहाँ
**क्व अपि** = कहीँ पनि
**भ्राम्यमाणानां** = घुमिरहने
**नः** = हामीहरूको
**मङ्गलाचरितैः** = मङ्गल आचरण (र)
**दानैः** = दान आदिद्वारा
**ईश्वरे** = भगवान्
**कृष्णे** = श्रीकृष्णमा
**रतिः** = प्रेम रहिरहोस्

**वाक्यार्थ–** भगवान्को इच्छाले आफ्नो कर्म अनुसार जुनसुकै योनिमा जन्म लिए तापनि शुभकर्म

र दानपुण्यको प्रभावले भगवान् श्रीकृष्णमा प्रेम भइरहोस्।

**एवं सभाजितो गोपैः कृष्णभक्त्या नराधिप।**

**उद्धवः पुनरागच्छन्मथुरां कृष्णपालिताम्॥ ६८॥**

**पदार्थ–**

**नराधिप** = हे राजा परीक्षित्
**एवं** = यसप्रकार
**गोपैः** = नन्द आदि गोपहरूद्वारा
**कृष्णभक्त्या** = श्रीकृष्णलाई जस्तै भक्ति गरेर
**सभाजितः** = सम्मान गरिएका
**उद्धवः** = उद्धव
**पुनः** = फेरि
**कृष्णपालितां** = श्रीकृष्णद्वारा रक्षा गरिएको
**मथुरां** = मथुरापुरीमा
**आगच्छत्** = आए

**वाक्यार्थ–** हे राजा परीक्षित्! यसप्रकार नन्द आदि गोपहरूले श्रीकृष्णलाई जस्तै मान गरेर भक्तिपूर्वक सम्मान गरिएका उद्धव फेरि भगवान् श्रीकृष्णद्वारा संरक्षण गरिएको मथुरापुरीमा आए।

**कृष्णाय प्रणिपत्याह भक्त्युद्रेकं व्रजौकसाम्।**

**वसुदेवाय रामाय राज्ञे चोपायनान्यदात्॥ ६९॥**

**पदार्थ–**

**कृष्णाय** = श्रीकृष्णलाई
**प्रणिपत्य** = प्रणाम गरेर
**व्रजौकसां** = व्रजवासीहरूको
**भक्त्युद्रेकं** = भक्तिको आवेग
**आह** = सुनाए (र)
**वसुदेवाय** = वसुदेवलाई
**रामाय** = बलरामलाई
**राज्ञे च** = राजा उग्रसेनलाई पनि
**उपायनानि** = (व्रजवासीहरूले पठाएका) उपहारहरू
**अदात्** = दिए

**वाक्यार्थ–** मथुरा पुगेपछि उद्धवले भगवान् श्रीकृष्णलाई प्रणाम गरेर व्रजवासीहरूको श्रीकृष्णप्रतिको प्रेममय भक्तिभाव सबै सुनाए। त्यसपछि वसुदेव, बलराम तथा उग्रसेनलाई (व्रजवासीहरूले पठाएका) उपहारहरू दिए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**उद्धवप्रतियाने सप्तचत्वारिंशोऽध्यायः॥ ४७॥**

# अथ अष्टचत्वारिंशोऽध्यायः

## भगवान् श्रीकृष्ण त्रिवक्रा र अक्रूरको घर जानु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अथ विज्ञाय भगवान् सर्वात्मा सर्वदर्शनः।**

**सैरन्ध्र्याः कामतप्तायाः प्रियमिच्छन् गृहं ययौ ॥ १ ॥**

**पदार्थ–**
**अथ** = यसपछि (उद्धव व्रजबाट फर्केर आइसकेपछि)
**सर्वात्मा** = सर्वान्तर्यामी
**सर्वदर्शनः** = सम्पूर्ण कुरा देख्ने
**भगवान्** = भगवान् श्रीकृष्ण
**विज्ञाय** = (आफूलाई भेट्न उत्सुक भएको) जानेर
**प्रियं इच्छन्** = कल्याण गरिदिने इच्छाले
**कामतप्तायाः** = कामवासनाले पीडित भएकी
**सैरन्ध्र्याः** = सेविका त्रिवक्राको
**गृहं** = घरमा
**ययौ** = जानुभयो

**वाक्यार्थ–** उद्धव व्रजबाट फर्केर आइसकेपछि सबैको मनको कुरा थाहा पाउने सर्वज्ञ अन्तर्यामी भगवान् श्रीकृष्ण कामवासनाको पीडाले व्याकुल भइरहेकी सेविका त्रिवक्रालाई आनन्दित गर्ने इच्छाले एक दिन उनको घरमा जानुभयो।

**महार्होपस्करैराढ्यं कामोपायोपबृंहितम्।**

**मुक्तादामपताकाभिर्वितानशयनासनैः।**

**धूपैः सुरभिभिर्दीपैः स्रग्गन्धैरपि मण्डितम् ॥ २ ॥**

**पदार्थ–**
(त्रिवक्राको घर)
**महार्होपस्करैः** = बहुमूल्य सामग्रीद्वारा
**आढ्यं** = सम्पन्न
**कामोपायोपबृंहितं** = कामोत्तेजक वस्तुहरूद्वारा भरिपूर्ण
**मुक्तादामपताकाभिः** = मोतीका झल्लर र पताकाहरूद्वारा
**वितानशयनासनैः** = चँदुवा, शय्या र आसनहरूद्वारा
**सुरभिभिः** = सुगन्धित
**धूपैः** = धूपहरूद्वारा
**दीपैः** = बत्तीहरूद्वारा
**स्रग्गन्धैः अपि** = माला र चन्दनहरूद्वारा समेत
**मण्डितम्** = सुशोभित थियो

**वाक्यार्थ–** त्रिवक्राको घर बहुमूल्य सामग्री भएको, कामोत्तेजक वस्तुहरूले भरिपूर्ण, मोतीका झल्लर, पताका, चँदुवा, शय्या तथा आसनहरूले युक्त थियो; साथै सुगन्धित धूप, बत्ती, फूलका माला र चन्दनहरूद्वारा सुशोभित थियो।

**गृहं तमायान्तमवेक्ष्य सासनात् सद्यः समुत्थाय हि जातसम्भ्रमा।**
**यथोपसङ्गम्य सखीभिरच्युतं सभाजयामास सदासनादिभिः॥ ३॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**गृहं** = आफ्नो घरतर्फ
**आयान्तं** = आइरहनुभएका
**तम् अच्युतं** = उहाँ भगवान् श्रीकृष्णलाई
**अवेक्ष्य** = देखेर
**जातसम्भ्रमा** = हड्बडाएकी
**सा** = ती त्रिवक्राले
**सद्यः** = छिट्टै
**आसनात्** = आफ्नो आसनबाट
**समुत्थाय** = उठेर
**सखीभिः** = साथीहरूका साथमा
**यथोपसङ्गम्य** = विधिपूर्वक नजिकमा पुगेर
**सदासनादिभिः** = उत्तम आसन आदिद्वारा
**सभाजयामास** = स्वागतसत्कार गरिन्

**वाक्यार्थ–** भगवान् अच्युत आफ्नो घरमा आइरहनुभएको देखेर केही हड्बडाएकी त्रिवक्रा हत्तपत्त आफ्नो आसनबाट उठेर साथीहरूका साथमा उहाँको नजिक पुगिन् र विधिपूर्वक उत्तम आसन, पूजन आदिद्वारा भगवान्को स्वागतसत्कार गरिन्।

**तथोद्धवः साधु तयाभिपूजितो न्यषीददुर्व्यामभिमृश्य चासनम्।**
**कृष्णोऽपि तूर्णं शयनं महाधनं विवेश लोकाचरितान्यनुव्रतः॥ ४॥**

**पदार्थ–**
**तथा** = त्यसै गरी
**तया** = ती त्रिवक्राद्वारा
**साधु** = भक्तिपूर्वक
**अभिपूजितः** = स्वागतसत्कार गरिएका
**उद्धवः च** = उद्धव पनि
**आसनं** = (त्रिवक्राले अर्पण गरेको) आसनलाई
**अभिमृश्य** = (केवल हातले) स्पर्श गरेर
**ऊर्व्याम्** = भुइँमा नै
**न्यषीदत्** = बसे
**कृष्णः अपि** = श्रीकृष्ण भगवान् चाहिँ
**लोकाचरितान्यनुव्रतः** = लोकमर्यादालाई पालन गर्दै
**तूर्णं** = छिट्टै
**महाधनं** = बहुमूल्य
**शयनं** = शय्यामा
**विवेश** = बस्नुभयो

**वाक्यार्थ–** ती त्रिवक्राले भगवान्का परमभक्त उद्धवको पनि विधिपूर्वक स्वागतसत्कार गरिन्, तर उनी त्रिवक्राले दिएको आसनमा नबसेर त्यसलाई केवल हातले छोई भुइँमा नै बसे। भगवान् चाहिँ लोकमर्यादाको पालना गर्दै तुरुन्तै बहुमूल्य शय्यामा बस्नुभयो।

**सा मज्जनालेपदुकूलभूषणस्रग्गन्धताम्बूलसुधासवादिभिः।**
**प्रसाधितात्मोपससार माधवं सव्रीडलीलोत्स्मितविभ्रमेक्षितैः॥ ५॥**

**पदार्थ–**
**मज्जनालेपदुकूलभूषणस्रग्गन्धताम्बूलसुधासवादिभिः** = स्नान, चन्दनलेपन, वस्त्र, आभूषण, माला, गन्ध, ताम्बूल, अमृतसमान मधुहरूद्वारा

**प्रसाधितात्मा** = आफूलाई सजाएकी
**सा** = ती त्रिवक्रा
**सव्रीडलीलोत्स्मितविभ्रमेक्षितैः** = लज्जायुक्त मधुरमुस्कान र चञ्चल हेराइका साथ
**माधवं** = श्रीकृष्णका नजिकमा
**उपससार** = आइन्

**वाक्यार्थ–** त्यसपछि स्नान, चन्दनलेपन, वस्त्र, आभूषण, माला, सुगन्ध, ताम्बूल र अमृतसमानका मधुहरूद्वारा आफूलाई सजाएकी त्रिवक्रा लाजले मुसुमुसु हाँस्दै र चञ्चल आँखाले हेर्दै भगवान्‌का नजिकमा आइन्।

**आहूय कान्तां नवसङ्गमह्रिया विशङ्कितां कङ्कणभूषिते करे।**
**प्रगृह्य शय्यामधिवेश्य रामया रेमेऽनुलेपार्पणपुण्यलेशया ॥ ६ ॥**

**पदार्थ–**
**नवसङ्गमह्रिया** = नयाँ मिलनको लाजले
**विशङ्कितां** = सङ्कोच मानेकी
**कान्तां** = सुन्दरी त्रिवक्रालाई
**आहूय** = बोलाएर
**कङ्कणभूषिते** = गहनाले सिँगारिएको
**करे** = हातमा
**प्रगृह्य** = समातेर
**शय्याम्** = ओछ्यानमा
**अधिवेश्य** = बसाएर
**अनुलेपार्पणपुण्यलेशया** = चन्दन चढाउनाले पुण्यको अंश प्राप्त गरेकी
**रामया** = रमणीसँग
**रेमे** = (भगवान्‌ले) रमण गर्नुभयो

**वाक्यार्थ–** नयाँ मिलनको लाजले केही सङ्कोच मानिरहेकी त्रिवक्रालाई भगवान्‌ले आफूनजिक बोलाउनुभयो र गरगहनाले सुसज्जित उनका हातमा समाएर ओछ्यानमा बसाई चन्दन चढाउनाले पुण्यको अंश प्राप्त गरेकी ती रमणीसँग क्रीडा गर्न लाग्नुभयो।

**सानङ्गतप्तकुचयोरुरसस्तथाक्ष्णोर्जिघ्रन्त्यनन्तचरणेन रुजो मृजन्ती।**
**दोर्भ्यां स्तनान्तरगतं परिरभ्य कान्तमानन्दमूर्तिमजहादतिदीर्घतापम् ॥ ७ ॥**

**पदार्थ–**
**अनन्तचरणेन** = श्रीकृष्णका चरणकमललाई
**जिघ्रन्ती** = सुँघिरहेकी
**अनङ्गतप्तकुचयोः** = कामवासनाले उत्तेजित भएका स्तन
**उरसः** = छाती
**तथा** = त्यस्तै
**अक्ष्णोः** = आँखाका
**रुजः** = वेदनाहरूलाई
**मृजन्ती** = शान्त गरिहेकी
**सा** = ती त्रिवक्राले
**स्तनान्तरगतं** = (स्तनका बीचमा रहनुभएका) छातीमा टाँसिनुभएका
**आनन्दमूर्तिम्** = परमानन्दस्वरूप
**कान्तं** = प्रियतम श्रीकृष्णलाई
**दोर्भ्यां** = दुबै हातले
**परिरभ्य** = अँगालो हालेर
**अतिदीर्घतापं** = धेरै समयदेखिको ताप (कामवासना)लाई
**अजहात्** = (त्यागिन्) शान्त गरिन्

**वाक्यार्थ–** भगवान्‌का चरणकमललाई सुँघ्दै तथा कामवासनाले उत्तेजित भएका छाती, स्तन र आँखामा लगाउँदै आफ्नो पीडा कम गरिरहेकी त्रिवक्राले छातीमा टाँसिनुभएका आनन्दमूर्ति

भगवान् श्रीकृष्णलाई दुबै हातले अँगालो मारेर धेरै समयदेखिको ताप त्यागिन् (कामज्वर शान्त पारिन्) ।

**सैवं कैवल्यनाथं तं प्राप्य दुष्प्राप्यमीश्वरम् ।**
**अङ्गरागार्पणेनाहो दुर्भगेदमयाचत ॥ ८ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **अहो** = दुःखको कुरा | **दुष्प्राप्यं** = दुर्लभ | **दुर्भगा** = भाग्यहीन त्रिवक्राले |
| **अङ्गरागार्पणेन** = केवल चन्दन अर्पण गर्नाले नै | **कैवल्यनाथं** = मुक्तिदाता | **इदं** = यस्तो कुरा |
| **एवं** = यसप्रकार | **तं** = त्यस्ता | **अयाचत** = मागिन् |
| | **ईश्वरं** = भगवान् श्रीकृष्णलाई | |
| | **प्राप्य** = पाएर पनि | |

**वाक्यार्थ–** दुःखको कुरा, केवल चन्दन अर्पण गर्नाले यसप्रकार दुर्लभ मुक्तिदाता भगवान् श्रीकृष्णलाई पाएर पनि भाग्य नभएकी त्रिवक्राले यस्तो कुरा मागिन्।

**सहोष्यतामिह प्रेष्ठ दिनानि कतिचिन्मया ।**
**रमस्व नोत्सहे त्यक्तुं सङ्गं तेऽम्बुरुहेक्षण ॥ ९ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **प्रेष्ठ** = हे प्रियतम | **उष्यतां** = बस्नुहोस् (र) | **सङ्गं** = साथलाई |
| **कतिचित्** = केही | **मया सह** = मसँग | **त्यक्तुं** = छोड्न |
| **दिनानि** = दिन | **रमस्व** = रमण गर्नुहोस् | **नोत्सहे** = सक्दिनँ |
| **इह** = यहाँ | **अम्बुरुहेक्षण** = हे कमलनयन | |
| | **ते** = हजुरको | |

**वाक्यार्थ–** हे प्रियतम ! केही दिन मेरो घरमा बसेर मसँग रमण गर्नुहोस्, हे कमललोचन ! म हजुरको साथ छोड्नै सक्दिनँ।

**तस्यै कामवरं दत्त्वा मानयित्वा च मानदः ।**
**सहोद्धवेन सर्वेशः स्वधामागमदर्चितम् ॥ १० ॥**

| पदार्थ– | | |
|---|---|---|
| **मानदः** = मनोरथ पूरा गरिदिने | **कामवरं** = इच्छा अनुसार को वर | **उद्धवेन सह** = उद्धवले सहित |
| **सर्वेशः** = भगवान् श्रीकृष्ण | **दत्त्वा** = दिएर (र) | **अर्चितम्** = प्रशंसित |
| **तस्यै** = ती त्रिवक्रालाई | **मानयित्वा च** = प्रसन्न गराएर | **स्वधाम** = आफ्नो दरबार |
| | | **आगमत्** = आउनुभयो |

**वाक्यार्थ–** आफ्ना भक्तहरूको मनोरथ पूरा गरिदिने सर्वेश्वर भगवान् श्रीकृष्णले त्रिवक्रालाई इच्छानुसारको वर दिनुभयो र उनलाई प्रसन्न गराएर उद्धवका साथमा सबैद्वारा प्रशंसित आफ्नो

दरबारमा फर्किनुभयो।

**दुराराध्यं समाराध्य विष्णुं सर्वेश्वरेश्वरम्।**

**यो वृणीते मनोग्राह्यमसत्त्वात् कुमनीष्यसौ ॥ ११ ॥**

**पदार्थ–**
**दुराराध्यं** = दुःखपूर्वक मात्र प्राप्त गर्न सकिने
**सर्वेश्वरेश्वरं** = सबै ईश्वरका पनि ईश्वर
**विष्णुं** = भगवान् विष्णुलाई
**समाराध्य** = प्रसन्न गराएर पनि
**यः** = जो व्यक्तिले
**असत्त्वात्** = दुष्टताका कारण
**मनोग्राह्यं** = मनोरञ्जनका विषय मात्र
**वृणीते** = माग्दछ
**असौ** = त्यो
**कुमनीषी** = खराब बुद्धि भएको व्यक्ति हो

**वाक्यार्थ–** दुःखपूर्वक मात्र प्राप्त गर्न सकिने सर्वेश्वर भगवान् विष्णुलाई प्रसन्न गराएर पनि जो दुष्टताका कारण केवल मनोरञ्जनका विषय मात्र माग्दछ भने त्यो व्यक्ति खराब बुद्धि भएको व्यक्ति हो।

**अक्रूरभवनं कृष्णः सहरामोद्धवः प्रभुः।**

**किञ्चिच्चिकीर्षयन् प्रागादक्रूरप्रियकाम्यया ॥ १२ ॥**

**पदार्थ–**
**किञ्चित्** = केही
**चिकीर्षयन्** = गर्ने इच्छाले र
**अक्रूरप्रियकाम्यया** = अक्रूरको अभिलाषा पूर्ण गर्ने उद्देश्यले
**सहरामोद्धवः** = बलराम र उद्धवले सहित
**प्रभुः** = भगवान्
**कृष्णः** = श्रीकृष्ण
**अक्रूरभवनं** = अक्रूरको घरमा
**प्रागात्** = जानुभयो

**वाक्यार्थ–** केही काम गर्ने इच्छाले र अक्रूरको अभिलाषा पूरा गरिदिने उद्देश्यले भगवान् श्रीकृष्ण एकदिन बलराम र उद्धवलाई साथमा लिएर अक्रूरको घरमा जानुभयो।

**स तान् नरवरश्रेष्ठानाराद् वीक्ष्य स्वबान्धवान्।**

**प्रत्युत्थाय प्रमुदितः परिष्वज्याभ्यनन्दत ॥ १३ ॥**

**पदार्थ–**
**सः** = ती अक्रूरले पनि
**तान्** = ती
**नरवरश्रेष्ठान्** = उत्तम मानिसहरूमा श्रेष्ठ
**स्वबान्धवान्** = आफन्त (श्रीकृष्ण, बलराम र उद्धव)लाई
**आरात्** = टाढाबाट (आइरहेको)
**वीक्ष्य** = देखेर
**प्रत्युत्थाय** = उठेर (अगाडि बढी)
**प्रमुदितः** = प्रसन्न भएर
**परिष्वज्य** = अङ्कमाल गर्दै
**अभ्यनन्दत** = स्वागतसत्कार गरे

**वाक्यार्थ–** उत्तम मानिसहरूमा श्रेष्ठ आफ्ना बान्धव श्रीकृष्ण, बलराम र उद्धवलाई टाढैबाट आइरहेका देखेर झटपट उठी अघि बढेका अक्रूरले प्रसन्न हुँदै अङ्कमाल गरी स्वागतसत्कार गरे।

**ननाम कृष्णं रामं च स तैरप्यभिवादितः।**

**पूजयामास विधिवत् कृतासनपरिग्रहान्॥ १४॥**

**पदार्थ–**

**सः** = ती अक्रूरले
**कृष्णं रामं च** = बलराम र श्रीकृष्णलाई
**ननाम** = नमस्कार गरे
(त्यसपछि)
**तैः अपि** = तिनीहरू (श्रीकृष्ण, बलराम र उद्धव)द्वारा पनि
**अभिवादितः** = नमस्कार गरिएका
**कृतासनपरिग्रहान्** = आरामसँग आसनमा बस्नुभएका उहाँहरूलाई
**विधिवत्** = विधिपूर्वक
**पूजयामास** = पूजा गरे

**वाक्यार्थ–** अक्रूरले श्रीकृष्ण र बलरामलाई नमस्कार गरे, उहाँहरूले पनि अक्रूरलाई नमस्कार गर्नुभयो, उहाँहरू आसनमा बस्नुभएपछि अक्रूरले विधिपूर्वक उहाँहरूको पूजा गर्न लागे।

**पादावनेजनीरापो धारयन् शिरसा नृप।**

**अर्हणेनाम्बरैर्दिव्यैर्गन्धस्रग्भूषणोत्तमैः॥ १५॥**

**अर्चित्वा शिरसानम्य पादावङ्कगतौ मृजन्।**

**प्रश्रयावनतोऽक्रूरः कृष्णरामावभाषत॥ १६॥**

**पदार्थ–**

**नृप** = हे राजा परीक्षित्
**पादावनेजनीः** = भगवान्का पाउ पखालेको
**आपः** = जल
**शिरसा** = शिरमा
**धारयन्** = लगाउँदै
**अर्हणेन** = उत्कृष्ट पूजा सामग्रीद्वारा
**दिव्यैः अम्बरैः** = दिव्य वस्त्रहरूद्वारा
**गन्धस्रग्भूषणोत्तमैः** = चन्दन, माला र राम्रा-राम्रा गहनाहरूद्वारा
**अर्चित्वा** = पूजा गरेर
**शिरसा** = शिरले
**आनम्य** = ढोगेर
**अङ्कगतौ** = काखमा राखिएका
**पादौ** = पाउलाई
**मृजन्** = मल्दै
**प्रश्रयावनतः** = विनयले नम्र बनेका
**अक्रूरः** = अक्रूरले
**कृष्णरामौ** = श्रीकृष्ण र बलरामलाई
**अभाषत** = भन्न लागे

**वाक्यार्थ–** हे राजा परीक्षित्! अक्रूरले भगवान्का पाउलाई पखालेर चरणोदक शिरमा लगाए। त्यसपछि उत्कृष्ट पूजासामग्री, दिव्य वस्त्र, गन्ध, माला र राम्रा-राम्रा गहनाहरूद्वारा पूजा गरी ढोगे। त्यसपछि भगवान्का पाउलाई काखमा राखेर मल्दै अत्यन्त नम्रताका साथ उहाँहरूलाई भन्न लागे।

**दिष्ट्या पापो हतः कंसः सानुगो वामिदं कुलम्।**

**भवद्भ्यामुद्धृतं कृच्छ्राद् दुरन्ताच्च समेधितम्॥ १७॥**

**पदार्थ–**
**दिष्ट्या** = भाग्यवश
**सानुगः** = अनुयायीले सहित
**पापः** = पापी
**कंसः** = कंस
**हतः** = मारियो
**वां** = हजुरहरूको
**इदं** = यो
**कुलं** = यदुकुललाई
**भवद्भ्याम्** = हजुरहरूद्वारा नै
**दुरन्तात्** = (दुःखले मात्र समाप्त गर्न सकिने) ठुलो
**कृच्छ्रात्** = सङ्कटबाट
**उद्धृतं** = उद्धार गरियो (र)
**समेधितम् च** = समृद्ध पारियो

**वाक्यार्थ–** भाग्यको कुरा हजुरहरूले उसका अनुयायी सहित पापी कंसलाई मार्नुभयो, हजुरहरूले आफ्नो यदुकुललाई ठुलो सङ्कटबाट उद्धार गरी समृद्ध पार्नुभयो।

**युवां प्रधानपुरुषौ जगद्धेतू जगन्मयौ।**
**भवद्भ्यां न विना किञ्चित् परमस्ति न चापरम्॥ १८॥**

**पदार्थ–**
**युवां** = हजुर दुई
**जगद्धेतू** = जगत्का कारण
**जगन्मयौ** = जगत् रूप
**प्रधानपुरुषौ** = प्रकृति र पुरुष हुनुहुन्छ
**भवद्भ्यां विना** = हजुर दुईलाई छोडेर
**किञ्चित्** = केही
**परम्** = अरू कुनै कारण छ
**न अस्ति** = छैन
**अपरम् च न** = कार्य पनि छैन

**वाक्यार्थ–** हजुरहरू जगत्का कारण, जगत्रूप एवं प्रकृति र पुरुषरूप हुनुहुन्छ। हजुरहरूलाई छोडेर यहाँ अरू कुनै कार्य र कारण छैन।

**आत्मसृष्टमिदं विश्वमन्वाविश्य स्वशक्तिभिः।**
**ईयते बहुधा ब्रह्मन् श्रुतप्रत्यक्षगोचरम्॥ १९॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे परमात्मा (हजुर नै)
**आत्मसृष्टं** = आफैंद्वारा सिर्जना गरिएको
**इदं** = यो
**विश्वं** = जगत्मा
**स्वशक्तिभिः** = (काल, माया आदि) आफ्ना शक्तिहरूद्वारा
**अन्वाविश्य** = पछि प्रवेश गरेर
**श्रुतप्रत्यक्षगोचरं** = सुनिएका र देखिएका वस्तुका रूपमा
**बहुधा** = अनेक रूपले
**ईयते** = प्रकट हुनुहुन्छ

**वाक्यार्थ–** हे परमात्मा ! हजुर नै आफैंले रचेको यस जगत्मा आफ्नो माया शक्तिद्वारा पछि प्रवेश गरेर सुनिने र देखिने वस्तुका रूपमा अनेक प्रकारले प्रकट भइरहनुभएको छ।

**यथा हि भूतेषु चराचरेषु मह्यादयो योनिषु भान्ति नाना।**
**एवं भवान् केवल आत्मयोनिष्वात्मात्मतन्त्रो बहुधा विभाति॥ २०॥**

**पदार्थ–**
**यथा हि** = जसरी
**मह्यादयः** = पृथिवी आदि कारण तत्त्वहरू
**चराचरेषु** = आफ्नो कार्यरूप स्थावर जङ्गम सारा
**भूतेषु** = प्राणीहरूमा
**योनिषु** = योनिहरूमा
**नाना** = अनेक रूपले

**भान्ति** = प्रतीत हुन्छन्
**एवं** = यसै गरी
**केवल** = अद्वितीय
**आत्मा** = आत्मस्वरूप
**भवान्** = हजुर
**आत्मयोनिषु** = कार्यरूप जगत्मा
**आत्मतन्त्रः** = स्वतन्त्ररूपले
**बहुधा** = अनेक रूपले
**विभाति** = प्रकट हुनुहुन्छ

**वाक्यार्थ–** जसरी पृथिवी आदि कारणतत्त्व आफ्नो कार्यरूप स्थावरजङ्गम सारा प्राणीहरू तथा विविध योनिहरूमा अनेक रूपले प्रतीत हुन्छन्, त्यसै गरी अद्वितीय आत्मस्वरूप हजुर पनि आफ्नो कार्यरूप जगत्मा स्वेच्छापूर्वक अनेकरूपले प्रकट हुनुहुन्छ।

**सृजस्यथो लुम्पसि पासि विश्वं रजस्तमःसत्त्वगुणैः स्वशक्तिभिः।**
**न बध्यसे तद्गुणकर्मभिर्वा ज्ञानात्मनस्ते क्व च बन्धहेतुः॥ २१॥**

**पदार्थ–**
**अथो** = यसै गरी (हजुरले)
**रजस्तमःसत्त्वगुणैः** = रज, तम र सत्त्वगुणवाला
**स्वशक्तिभिः** = आफ्नो मायाशक्तिद्वारा
**विश्वं** = विश्वको
**सृजसि** = सृष्टि गर्नुहुन्छ
**लुम्पसि** = संहार गर्नुहुन्छ
**पासि** = पालन गर्नुहुन्छ (र)
**तद्गुणकर्मभिः वा** = तर पनि ती गुण र तिनका कार्यहरूले समेत
**न बध्यसे** = बाँधिनुहुन्न
**ज्ञानात्मनः** = ज्ञानस्वरूप
**ते** = हजुरका निम्ति
**क्व च** = के
**बन्धहेतुः** = बन्धनको कारण हुन सक्छ र

**वाक्यार्थ–** रज, तम र सत्त्वगुणरूप आफ्ना शक्तिहरूद्वारा हजुरले विश्वको सृष्टि, संहार र पालन गर्नुहुन्छ तर पनि हजुर ती गुण र तिनका कुनै कर्मद्वारा बाँधिनुहुन्न, ज्ञानस्वरूप हजुरका निम्ति बन्धनको कारण के नै हुन सक्छ र?

**देहाद्युपाधेरनिरूपितत्वाद् भवो न साक्षान्न भिदात्मनः स्यात्।**
**अतो न बन्धस्तव नैव मोक्षः स्याताम्निकामस्त्वयि नोऽविवेकः॥ २२॥**

**पदार्थ–**
**देहाद्युपाधेः** = शरीर आदि उपाधि (पारमार्थिक दृष्टिले)
**अनिरूपितत्वात्** = नभएका कारण
**आत्मनः** = आत्माको
**न भवः** = न जन्म
**स्यात्** = हुन्छ
**न** = न त
**साक्षात्** = स्वरूपतः
**भिदा** = भेद नै देखिन्छ
**अतः** = यसरी
**तव** = हजुरको
**न बन्धः** = न कुनै बन्धन
**न एव** = न त
**मोक्षः** = मोक्ष नै
**स्यातां** = हुन्छ
**त्वयि** = हजुरमा
**नः** = हामीहरूको
**निकामः** = मनगढन्ते
**अविवेकः** = मूर्खता मात्र हो

**वाक्यार्थ–** शरीर आदि उपाधि नभएका कारण आत्माको न त कुनै जन्म छ, न कुनै प्रकारको भेदभाव छ। यसै कारण हजुरमा न त मोक्ष छ, न त बन्धन नै छ। गुणातीत हजुरमा बन्ध, मोक्षको कल्पना गर्नु हाम्रो मनले कल्पेको मूर्खता मात्र हो।

**त्वयोदितोऽयं जगतो हिताय यदा यदा वेदपथः पुराणः।**
**बाध्येत पाखण्डपथैरसद्भिस्तदा भवान् सत्त्वगुणं बिभर्ति॥ २३॥**

**पदार्थ–**
**जगतः** = संसारको
**हिताय** = कल्याणका निम्ति
**त्वया** = हजुरद्वारा
**उदितः** = बताइएको
**अयं** = यो
**पुराणः** = सनातन
**वेदपथः** = वैदिक मार्ग
**यदा यदा** = जब-जब
**असद्भिः** = दुष्ट
**पाखण्डपथैः** = पाखण्ड मतहरूद्वारा
**बाध्येत** = बाधित हुन्छ
**तदा** = तहिले
**भवान्** = हजुरले
**सत्त्वगुणं** = सत्त्वगुणमय शरीर
**बिभर्ति** = धारण गर्नुहुन्छ

**वाक्यार्थ–** संसारको कल्याणका निम्ति हजुरले यो वैदिक सनातन धर्ममार्ग बताउनुभएको हो। जब-जब दुष्ट पाखण्डमतहरूद्वारा यो मार्ग बाधित हुन्छ तब-तब हजुरले सत्त्वगुणप्रधान शरीर धारण गर्नुहुन्छ।

**स त्वं प्रभोऽद्य वसुदेवगृहेऽवतीर्णः**
**स्वांशेन भारमपनेतुमिहासि भूमेः।**
**अक्षौहिणीशतवधेन सुरेतरांश-**
**राज्ञाममुष्य च कुलस्य यशो वितन्वन्॥ २४॥**

**पदार्थ–**
**प्रभो** = हे प्रभु
**सः त्वं** = त्यही हजुर
**अद्य** = अहिले
**भूमेः** = पृथिवीको
**भारं** = भार
**अपनेतुं** = हटाउनका निम्ति
**स्वांशेन** = आफ्नै अंशावतार बलरामका साथमा
**इह** = यस यदुकुलमा
**वसुदेवगृहे** = वसुदेवको घरमा
**अवतीर्णः** = अवतार लिनुभएको छ
**सुरेतरांशराज्ञाम्** = देवताभन्दा इतर अंश भएका दुष्ट राजाहरूका
**अक्षौहिणीशतवधेन** = सयौँ अक्षौहिणी सेनालाई मारेर
**अमुष्य** = यस
**कुलस्य** = यदुकुलको
**यशः च** = कीर्ति पनि
**वितन्वन्** = फैलाइरहनुभएको
**असि** = छ

**वाक्यार्थ–** हे प्रभु ! उही हजुर अहिले आफ्नै अंशावतार बलरामका साथमा पृथिवीको भार हटाउनका निम्ति वसुदेवको घरमा अवतीर्ण हुनुभएको छ। दुष्ट राजाहरूका सयौँ अक्षौहिणी सेनालाई मारेर हजुरले यदुकुलको समेत कीर्ति फैलाइरहनुभएको छ।

**अद्येश नो वसतयः खलु भूरिभागा**
**यः सर्वदेवपितृभूतनृदेवमूर्तिः।**

**यत्पादशौचसलिलं त्रिजगत् पुनाति**

**स त्वं जगद्गुरुरधोक्षज याः प्रविष्टः ॥ २५ ॥**

**पदार्थ–**
**अधोक्षज** = इन्द्रियदेखि टाढा रहनुभएका
**ईश** = हे ईश्वर
**यः** = जो
**सर्वदेवपितृभूतनृदेवमूर्तिः** = सम्पूर्ण देवता, पितृ, भूतगण र राजाहरूको समष्टिरूप हुनुहुन्छ
**यत्** = जसको
**पादशौचसलिलं** = पाउ पखालेको जल (गङ्गा)ले
**त्रिजगत्** = तीनै लोकलाई
**पुनाति** = पवित्र गर्दछ
**सः त्वं** = त्यस्ता हजुर
**जगद्गुरुः** = संसारका गुरु
**अद्य** = आज
**याः** = जुन बस्तीमा
**प्रविष्टः** = प्रवेश गर्नुभएको छ
**नः** = हाम्रा ती
**वसतयः** = बस्तीहरू
**खलु** = निश्चय नै
**भूरिभागाः** = ज्यादै भाग्यमानी भएका छन्

**वाक्यार्थ–** इन्द्रियदेखि टाढा रहनुभएका हे ईश्वर ! सम्पूर्ण देवता, पितृ, भूतगण र मनुष्य तथा तिनका मालिक राजाहरू हजुरकै मूर्ति हुन्। जसको चरण पखालेको जलले गङ्गा बनेर स्वर्ग, मर्त्य, पाताल तीनै लोकलाई पवित्र पार्दछ त्यस्ता जगद्गुरु हजुर आज हाम्रो बस्तीमा प्रवेश गर्नुभएको छ त्यसैले आज हाम्रा बस्तीहरू ज्यादै भाग्यमानी भएका छन्।

**कः पण्डितस्त्वदपरं शरणं समीयाद्**

**भक्तप्रियादृतगिरः सुहृदः कृतज्ञात्।**

**सर्वान् ददाति सुहृदो भजतोऽभिकामा-**

**नात्मानमप्युपचयापचयौ न यस्य ॥ २६ ॥**

**पदार्थ–**
**कः** = को
**पण्डितः** = बुद्धिमान् व्यक्ति
**भक्तप्रियात्** = भक्तहरूलाई अनन्य प्रेम गर्ने
**ऋतगिरः** = सत्यवादी
**सुहृदः** = हितकर्ता
**कृतज्ञात्** = कृतज्ञ
**त्वत्** = हजुरबाहेक
**अपरं** = अर्काको
**शरणं** = शरणमा
**समीयात्** = जाला र ? (हजुर)
**सुहृदः** = प्रेमी
**भजतः** = भक्तको
**सर्वान्** = सबै
**अभिकामान्** = अभिलाषाहरू र
**यस्य** = जसको
**उपचयापचयौ** = वृद्धि र क्षति (बढी–घटी)
**न** = हुँदैन (त्यस्तो)
**आत्मानं अपि** = आत्मा नै पनि
**ददाति** = दिनुहुन्छ

**वाक्यार्थ–** हजुर भक्तहरूलाई अनन्य प्रेम गर्ने, सत्यवादी, सबैको भलो गर्ने र कृतज्ञ हुनुहुन्छ। त्यस्ता हजुरहरूलाई छाडेर कुन चाहिँ बुद्धिमान् मानिसले अरू कसैको शरण लिन जाला ? आफ्नो भजन गर्ने प्रेमी भक्तहरूको सम्पूर्ण अभिलाषा हजुर पूर्ण गरिदिनुहुन्छ। यहाँसम्म कि हजुरले

आफ्ना भक्तलाई कहिले पनि घटी–बढी अथवा क्षतिवृद्धि नहुने आत्मा समेत दिनुहुन्छ।

**दिष्ट्या जनार्दन भवानिह नः प्रतीतो**
**योगेश्वरैरपि दुरापगतिः सुरेशैः।**
**छिन्ध्याशु नः सुतकलत्रधनाप्तगेह-**
**देहादिमोहरशनां भवदीयमायाम्॥ २७॥**

**पदार्थ**–
**जनार्दन** = हे जनार्दन
**दिष्ट्या** = भाग्यवश
**सुरेशैः** = देवताहरूद्वारा र
**योगेश्वरैः** = योगेश्वरहरूद्वारा
**अपि** = पनि
**दुरापगतिः** = दुःखद्वारा मात्र प्राप्त गर्न सकिने
**भवान्** = हजुर
**इह** = यहाँ
**नः** = हामीहरूका सामु
**प्रतीतः** = प्रत्यक्ष हुनुभएको छ
**नः** = हामीहरूको
**सुतकलत्रधनाप्तगेहदेहादि-मोहरशनां** = पुत्र, स्त्री, धन, स्वजन, घरबार र शरीर आदि बन्धनरूप
**भवदीयमायां** = हजुरको मायालाई
**आशु** = छिट्टै
**छिन्धि** = छिनालिदिनुहोस्

**वाक्यार्थ–** हे जनार्दन! देवताहरू र योगेश्वरहरूद्वारा समेत सजिलै प्राप्त गर्न नसकिने हजुर भाग्यवश आज हाम्रा अगाडि प्रकट हुनुभएको छ। हामीलाई पुत्र, पत्नी, धनसम्पत्ति, स्वजन, घरबार र शरीरादिरूप हजुरको मायाले बाँधेको छ। अतः हाम्रो त्यो बन्धन छिट्टै छिनालिदिनुहोस्।

**इत्यर्चितः संस्तुतश्च भक्तेन भगवान् हरिः।**
**अक्रूरं सस्मितं प्राह गीर्भिः सम्मोहयन्निव॥ २८॥**

**पदार्थ**–
**इति** = यसप्रकार
**भक्तेन** = भक्त अक्रूरद्वारा
**अर्चितः** = पूजित (र)
**संस्तुतः च** = स्तुति गरिनुभएका
**भगवान् हरिः** = भगवान् श्रीकृष्णले
**सस्मितं** = मन्द मुस्कान सहितको
**गीर्भिः** = वाणीहरूद्वारा
**अक्रूरं** = अक्रूरलाई
**सम्मोहयन् इव** = सम्मोहित गरेझैँ गरी
**प्राह** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** यसप्रकार भक्त अक्रूरले पूजा र स्तुति गरिसकेपछि भगवान् श्रीकृष्णले मन्दमुस्कान सहित आफ्नो मिठो बोलीले उनलाई सम्मोहित गर्दै भन्न लाग्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**त्वं नो गुरुः पितृव्यश्च श्लाघ्यो बन्धुश्च नित्यदा।**
**वयं तु रक्ष्याः पोष्याश्च अनुकम्प्याः प्रजा हि वः॥ २९॥**

**पदार्थ–**
**त्वं** = हजुर
**नः** = हाम्रा
**गुरुः** = गुरु (हितोपदेशक)
**पितृव्यः च** = काका र
**श्लाघ्यः** = प्रशंसनीय
**बन्धुः च** = बान्धव पनि हुनुहुन्छ
**हि** = निश्चय नै
**वयं तु** = हामीहरू त
**नित्यदा** = सधैँ
**रक्ष्याः** = रक्षणीय
**अनुकम्प्याः** = कृपापात्र (र)
**पोष्याः च** = पालनपोषण गर्न योग्य
**वः** = हजुरहरूका
**प्रजाः** = प्रजाहरू हौँ

**वाक्यार्थ–** हजुर हाम्रा गुरु, काका र प्रशंसनीय बान्धव पनि हुनुहुन्छ। हामीहरू त हजुरहरूद्वारा पालन, पोषण र संरक्षण गर्न योग्य हजुरहरूका कृपापात्र प्रजा हौँ।

**भवद्विधा महाभागा निषेव्या अर्हसत्तमाः।**
**श्रेयस्कामैर्नृभिर्नित्यं देवाः स्वार्था न साधवः॥ ३०॥**

**पदार्थ–**
**श्रेयस्कामैः** = आफ्नो कल्याण चाहने
**नृभिः** = मनुष्यहरूद्वारा
**नित्यं** = सधैँ
**भवद्विधाः** = हजुर जस्ता
**महाभागाः** = महाभाग्यशाली
**अर्हसत्तमाः** = पूज्य सन्तहरू
**निषेव्याः** = सेवा गरिन योग्य हुनुहुन्छ
(किनभने)
**देवाः** = देवताहरू
**स्वार्थाः** = स्वार्थी हुन सक्दछन् (तर)
**साधवः** = सज्जनहरू
**न** = स्वार्थी हुँदैनन्

**वाक्यार्थ–** आफ्नो परम कल्याण चाहने मानिसले हजुर जस्ता परमपूज्य र महाभाग्यशाली सन्त पुरुषको सेवा गर्नुपर्दछ। किनभने देवताहरू स्वार्थी हुन सक्छन् तर सन्तहरू स्वार्थी हुँदैनन्।

**न ह्यम्मयानि तीर्थानि न देवा मृच्छिलामयाः।**
**ते पुनन्त्युरुकालेन दर्शनादेव साधवः॥ ३१॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**अम्मयानि** = जलाशयहरू
**तीर्थानि** = तीर्थस्थल
**मृच्छिलामयाः** = ढुङ्गा र माटाका मूर्तिहरू
**देवाः** = देवता
**न** = होइनन् (भन्ने कुरा)
**न** = होइन (तर)
**ते** = ती सबैले
**उरुकालेन** = लामो समय सेवा गरेपछि मात्र
**पुनन्ति** = पवित्र गर्दछन् (तर)
**साधवः** = सज्जनहरूले त
**दर्शनात् एव** = दर्शन मात्रले पवित्र पार्दछन्

**वाक्यार्थ–** यद्यपि जलाशयहरू तीर्थस्थल र ढुङ्गा र माटाले बनेका मूर्तिहरू देवता होइनन् भन्ने होइन, तर तिनीहरूले धेरै समय सेवा गरेपछि मात्र पवित्र गर्दछन् भने सज्जनहरूले त दर्शन मात्रले पवित्र गर्दछन्।

**स भवान् सुहृदां वै नः श्रेयाञ्छ्रेयश्चिकीर्षया ।**
**जिज्ञासार्थं पाण्डवानां गच्छस्व त्वं गजाह्वयम् ॥ ३२ ॥**

**पदार्थ–**
**सः भवान्** = त्यस्ता हजुर
**वै** = निश्चय नै
**नः** = हाम्रा
**सुहृदां** = हितैषीहरूमध्ये
**श्रेयान्** = मुख्य हुनुहुन्छ
(अतः)
**त्वं** = हजुर
**पाण्डवानां** = पाण्डवहरूको
**श्रेयः चिकीर्षया** = कल्याण
गर्नका निम्ति (तथा)
**जिज्ञासार्थं** = खबर जान्नका लागि
**गजाह्वयं** = हस्तिनापुर
**गच्छस्व** = जानुहोस्

**वाक्यार्थ–** त्यस्ता सज्जन हजुर हाम्रा हितैषी मित्रहरूमध्ये सबैभन्दा श्रेष्ठ हुनुहुन्छ। अतः पाण्डवहरूको कल्याण गर्न र उनीहरूको सुखदुःखको खबर बुझ्न हजुर हस्तिनापुर जानुहोस्।

**पितर्युपरते बालाः सह मात्रा सुदुःखिताः ।**
**आनीताः स्वपुरं राज्ञा वसन्त इति शुश्रुम ॥ ३३ ॥**

**पदार्थ–**
**पितरि** = पिता पाण्डुको
**उपरते** = निधन भएपछि
**सुदुःखिताः** = अत्यन्त दुःखी भएका
**बालाः** = बालक पाण्डवहरू
**राज्ञा** = राजा धृतराष्ट्रद्वारा
**स्वपुरं** = आफ्नो दरबारमा
**आनीताः** = ल्याइएका छन् (र अहिले)
**मात्रा सह** = माता कुन्तीका साथमा
**वसन्ते इति** = त्यहीँ बसेका छन् भन्ने
**शुश्रुमः** = सुनेका छौँ

**वाक्यार्थ–** पिता पाण्डुको निधन भएपछि अत्यन्त दुःखमा परेका बालक पाण्डवहरूलाई आमा कुन्तीका साथमा राजा धृतराष्ट्रले आफ्नो दरबार हस्तिनापुरमा ल्याएका छन् र अहिले उनीहरू सबै त्यहीँ बसेका छन् भन्ने हामीले सुनेका छौँ।

**तेषु राजाम्बिकापुत्रो भ्रातृपुत्रेषु दीनधीः ।**
**समो न वर्तते नूनं दुष्पुत्रवशगोऽन्धदृक् ॥ ३४ ॥**

**पदार्थ–**
**नूनं** = निश्चय नै
**दुष्पुत्रवशगः** = दुष्ट पुत्रको वशमा परेका
**अन्धदृक्** = आँखा अन्धा भएका
**दीनधीः** = बुद्धिहीन
**अम्बिकापुत्रः** = अम्बिकाका पुत्र
**राजा** = राजा धृतराष्ट्र
**तेषु** = ती
**भ्रातृपुत्रेषु** = भाइका छोराहरूमा
**समः** = समान
**न वर्तते** = छैनन्

**वाक्यार्थ–** निश्चय नै अम्बिकाका पुत्र राजा धृतराष्ट्र अन्धा र बुद्धिहीन छन् अनि दुष्ट छोरो दुर्योधनको वशमा परेका छन्। अतः उनले भाइका छोराहरूमाथि समान व्यवहार गरेका छैनन्।

**गच्छ जानीहि तद्वृत्तमधुना साध्वसाधु वा।**
**विज्ञाय तद्विधास्यामो यथा शं सुहृदां भवेत्॥ ३५॥**

**पदार्थ–**
**अधुना** = अहिले
**गच्छ** = (हजुर हस्तिनापुर) जानुहोस् (र)
**तद्वृत्तं** = तिनीहरूको खबर
**साधु असाधु वा** = राम्रो वा नराम्रो (के छ, त्यो)
**जानीहि** = थाहा पाउनुहोस्
**तत्** = त्यो कुरा
**विज्ञाय** = बुझेर
**सुहृदां** = मित्र पाण्डवहरूको
**यथा** = जसरी
**शं** = कल्याण
**भवेत्** = हुन्छ (त्यसै)
**विधास्यामः** = गरौँला

**वाक्यार्थ–** त्यसकारण हजुर अहिले हस्तिनापुर जानुहोस् र उनीहरूको अवस्था राम्रो-नराम्रो के छ थाहा पाउनुहोस्। उनीहरूको खबर थाहा पाएपछि जे गर्दा हाम्रा मित्र पाण्डवहरूको कल्याण हुन्छ, त्यही गरौँला।

**इत्यक्रूरं समादिश्य भगवान् हरिरीश्वरः।**
**सङ्कर्षणोद्धवाभ्यां वै ततः स्वभवनं ययौ॥ ३६॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**इति** = यसप्रकार
**अक्रूरं** = अक्रूरलाई
**समादिश्य** = आज्ञा दिएर
**भगवान्** = ऐश्वर्यशाली
**ईश्वरः हरिः** = ईश्वर श्रीकृष्ण
**सङ्कर्षणोद्धवाभ्यां** = बलराम र उद्धवका साथमा
**ततः** = त्यहाँबाट (अक्रूरको निवासबाट)
**स्वभवनं** = आफ्नो घरमा
**ययौ** = जानुभयो

**वाक्यार्थ–** अक्रूरलाई यसप्रकारको आज्ञा दिइसकेपछि सर्वशक्तिमान् भगवान् श्रीकृष्ण बलराम र उद्धवका साथमा त्यहाँबाट आफ्नो घरमा फर्किनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे**
**पूर्वार्धेऽष्टचत्वारिंशोऽध्यायः॥ ४८॥**

# अथैकोनपञ्चाशत्तमोऽध्यायः

## अक्रूरको हस्तिनापुरयात्रा

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स गत्वा हास्तिनपुरं पौरवेन्द्रयशोऽङ्कितम्।**

**ददर्श तत्राम्बिकेयं सभीष्मं विदुरं पृथाम्॥ १॥**

**सहपुत्रं च बाह्लीकं भारद्वाजं सगौतमम्।**

**कर्णं सुयोधनं द्रौणिं पाण्डवान् सुहृदोऽपरान्॥ २॥**

**पदार्थ–**
**सः** = ती अक्रूरले
**पौरवेन्द्रयशोऽङ्कितं** = पुरुवंशी राजाहरूको कीर्तिले चिह्नित
**हास्तिनपुरं** = हस्तिनापुर
**गत्वा** = गएर
**तत्र** = त्यहाँ रहेका
**सभीष्मं** = भीष्मपितामह सहित
**आम्बिकेयं** = अम्बिकापुत्र धृतराष्ट्र
**विदुरं** = विदुर
**पृथां** = कुन्ती
**सहपुत्रं** = पुत्र सोमदत्तले सहित
**बाह्लीकं** = बाह्लीक
**सगौतमं** = कृपाचार्य सहित
**भारद्वाजं** = द्रोणाचार्य
**कर्णं** = कर्ण
**सुयोधनं** = दुर्योधन
**द्रौणिं** = अश्वत्थामा र
**पाण्डवान्** = पाण्डवहरू (युधिष्ठिर आदि)लाई तथा
**अपरान्** = अरू
**सुहृदः च** = सहृदयी साथीहरूलाई पनि
**ददर्श** = देख-भेट गरे

**वाक्यार्थ–** पुरुवंशी राजाहरूको कीर्तिले सिँगारिएको हस्तिनापुरमा गएर अक्रूरले भीष्मपितामह, धृतराष्ट्र, विदुर, कुन्ती, सोमदत्त, बाह्लीक, कृपाचार्य, द्रोणाचार्य, कर्ण, दुर्योधन, अश्वत्थामा र पाण्डवहरू सहित अरू मित्रहरूसँग पनि भेटघाट गरे।

**यथावदुपसङ्गम्य बन्धुभिर्गान्दिनीसुतः।**

**सम्पृष्टस्तैः सुहृद्वार्तां स्वयं चापृच्छदव्ययम्॥ ३॥**

**पदार्थ–**
**गान्दिनीसुतः** = गान्दिनीका पुत्र अक्रूर
**यथावत्** = यथायोग्य नाता-गोता अनुसार
**बन्धुभिः** = बन्धुबान्धवहरूसँग
**उपसङ्गम्य** = भेटघाट गरेर
**तैः** = उनीहरूद्वारा
**सुहृद्वार्तां** = मथुरावासी मित्रहरूको सन्चो-बिसन्चो
**सम्पृष्टः** = सोधिएपछि
**स्वयं च** = आफूले पनि
**अव्ययं** = (हस्तिनापुरको) कुशलताको विषयमा
**अपृच्छत्** = सोधे

**वाक्यार्थ–** गान्दिनीपुत्र अक्रूरले हस्तिनापुरवासी बन्धुबान्धवहरूसँग यथायोग्य (नाता अनुसार) ढोगभेट गरे। त्यसपछि उनीहरूले मथुरावासी मित्रहरूको सन्चो-बिसन्चोको विषयमा सोधेपछि अक्रूरले पनि हस्तिनापुरको कुशलताको विषयमा सोधे।

**उवास कतिचिन्मासान् राज्ञो वृत्तविवित्सया।**

**दुष्प्रजस्याल्पसारस्य खलच्छन्दानुवर्तिनः॥ ४॥**

पदार्थ–
**दुष्प्रजस्य** = दुष्ट (दुर्योधन, दुःशासन जस्ता) छोरा भएका
**अल्पसारस्य** = मन्दबुद्धि भएका
**खलच्छन्दानुवर्तिनः** = (शकुनिजस्ता) दुष्टहरूको सल्लाहको आधारमा चल्ने
**राज्ञः** = राजा धृतराष्ट्रको
**वृत्तविवित्सया** = व्यवहार बुझ्नका लागि (अक्रूर)
**कतिचित् मासान्** = केही महिना
**उवास** = (हस्तिनापुर) बसे

**वाक्यार्थ–** दुष्ट छोरा भएका, मन्दबुद्धि भएका र दुष्टहरूको सल्लाहको आधारमा चल्ने धृतराष्ट्रको व्यवहार बुझ्नका लागि अक्रूर केही महिना हस्तिनापुरमा बसे।

**तेज ओजो बलं वीर्यं प्रश्रयादींश्च सद्गुणान्।**

**प्रजानुरागं पार्थेषु न सहद्भिश्चिकीर्षितम्॥ ५॥**

**कृतं च धार्तराष्ट्रैर्यद् गरदानाद्यपेशलम्।**

**आचख्यौ सर्वमेवास्मै पृथा विदुर एव च॥ ६॥**

पदार्थ–
**पार्थेषु** = पृथा (कुन्ती)का पुत्र पाण्डवहरूमा (भएको)
**तेजः** = शत्रुलाई पराजित गर्ने सामर्थ्य
**ओजः** = शस्त्रबल
**बलं** = शारीरिक बल
**वीर्यं** = पराक्रम
**प्रश्रयादीन् च** = विनय आदि
**सद्गुणान्** = सद्गुणहरू र
**प्रजानुरागं च** = प्रजाहरूप्रतिको प्रेमलाई पनि
**न सहद्भिः** = सहन गर्न नसक्ने
**धार्तराष्ट्रैः** = धृष्टराष्ट्रपुत्र दुर्योधन आदिद्वारा
**गरदानादि** = (पाण्डवहरूलाई) विष खुवाउने आदि
**अपेशलं** = दुष्कर्म
**यत् कृतं** = जे गरियो र
**चिकीर्षितं च** = अरू गर्ने विचार पनि गरिएको थियो
**सर्वम्** = ती सबै कुराहरू
**अस्मै** = यी अक्रूरलाई
**पृथा** = कुन्ती र
**विदुरः एव च** = विदुरले पनि
**आचख्यौ** = भने

**वाक्यार्थ–** पाण्डवहरूमा रहेको शत्रुलाई पराजित गर्ने सामर्थ्य, शस्त्रनिपुणता, शारीरिक बल, पराक्रम र विनय आदि सद्गुणहरू र प्रजाहरूसँग गरेको प्रेमलाई देखेर त्यो सहन गर्न नसकी धृतराष्ट्रका पुत्रहरूले विष खुवाउने जस्ता दुष्कर्म गरेका र अझै पनि दुष्कर्म गर्ने विषयमा योजना बनाइरहेको कुरा कुन्ती र विदुरले अक्रूरलाई भने।

**पृथा तु भ्रातरं प्राप्तमक्रूरमुपसृत्य तम्।**
**उवाच जन्मनिलयं स्मरन्त्यश्रुकलेक्षणा ॥ ७ ॥**

| पदार्थ– | **उपसृत्य** = नजिकै गई | **अश्रुकलेक्षणा** = आँखाभरि आँसु पारेर |
|---|---|---|
| **पृथा तु** = कुन्ती चाहिँ | **जन्मनिलयं** = जन्मघर (माइतीलाई) | **तं** = ती भाई अक्रूरलाई |
| **प्राप्तं** = आफ्नो घरमा आएका | **स्मरन्ती** = सम्झँदै | **उवाच** = भन्न थालिन् |
| **भ्रातरं अक्रूरं** = भाइ अक्रूरको | | |

**वाक्यार्थ–** कुन्ती आफ्नो घरमा आएका भाइ अक्रूरको नजिकै गइन्। त्यसपछि उनले आफ्ना माइती सम्झँदै आँखाभरि आँसु पारेर अक्रूरसँग भन्न थालिन्।

**अपि स्मरन्ति नः सौम्य पितरौ भ्रातरश्च मे।**
**भगिन्यो भ्रातृपुत्राश्च जामयः सख्य एव च ॥ ८ ॥**

| पदार्थ– | **भ्रातरः च** = दाजु-भाइहरू | **सख्यः एव च** = साथी-सङ्गीहरूले पनि |
|---|---|---|
| **सौम्य** = हे प्यारा भाइ अक्रूर | **भगिन्यः** = दिदीबहिनीहरू | **नः** = हामीहरूलाई |
| **मे** = मेरा | **भ्रातृपुत्राः** = भदाहरू | **अपि स्मरन्ति** = के सम्झन्छन् |
| **पितरौ** = आमा-बुबा | **जामयः च** = कुलका स्त्रीहरू र | |

**वाक्यार्थ–** हे प्यारा भाइ! मेरा आमा-बुबा, दाजुभाइ, दिदीबहिनीहरू, भदाहरू, उनीहरूका स्त्रीहरू र साथी-सङ्गीहरूले हामीलाई सम्झन्छन्?

**भ्रात्रेयो भगवान् कृष्णः शरण्यो भक्तवत्सलः।**
**पैतृष्वस्रेयान् स्मरति रामश्चाम्बुरुहेक्षणः ॥ ९ ॥**

| पदार्थ– | **भ्रात्रेयः** = मेरा भदा | **पैतृष्वस्रेयान्** = मेरा छोरा यी युधिष्ठिर आदि दाजुभाइहरूलाई |
|---|---|---|
| **शरण्यः** = शरणमा आएकालाई रक्षा गर्ने | **भगवान् कृष्णः** = भगवान् श्रीकृष्ण र | **स्मरति** = के सम्झनुहुन्छ |
| **भक्तवत्सलः** = भक्तहरूलाई प्रेम गर्ने | **अम्बुरुहेक्षणः** = कमलनयन | |
| | **रामः च** = बलरामले पनि | |

**वाक्यार्थ–** शरणमा आएलाई रक्षा गर्ने, भक्तहरूलाई प्रेम गर्ने मेरा भदा भगवान् श्रीकृष्णले र कमलनयन बलरामले के मेरा छोरा युधिष्ठिर आदि दाजुभाइहरूलाई सम्झनुहुन्छ?

**सापत्नमध्ये शोचन्तीं वृकाणां हरिणीमिव।**
**सान्त्वयिष्यति मां वाक्यैः पितृहीनांश्च बालकान् ॥ १० ॥**

| पदार्थ– | **शोचन्तीं** = शोकमग्न भएकी | पनि |
|---|---|---|
| **वृकाणां** = ब्वाँसाहरूको बीचमा | **मां** = मलाई र | **वाक्यैः** = मिठा वचनले |
| **हरिणीम् इव** = हरिणी जस्ती | **पितृहीनान् च** = पिता नभएका | **सान्त्वयिष्यति** = (के |
| **सापत्नमध्ये** = शत्रुहरूको | टुहुरा | श्रीकृष्णले) सान्त्वना दिनुहोला |
| बीचमा | **बालकान्** = यी बालकहरूलाई | |

**वाक्यार्थ–** ब्वाँसोहरूको बीचमा परेकी हरिणी झैँ शत्रुहरूको बीचमा रही शोकमग्न भएकी मलाई र पितृहीन यी बालकहरू (युधिष्ठिर आदि)लाई के श्रीकृष्णले सान्त्वना दिनुहोला ?

**कृष्ण कृष्ण महायोगिन् विश्वात्मन् विश्वभावन।**
**प्रपन्नां पाहि गोविन्द शिशुभिश्चावसीदतीम्॥ ११॥**

| पदार्थ– | **विश्वात्मन्** = हे विश्वात्मा | **शिशुभिः च** = छोराहरू सहित |
|---|---|---|
| **कृष्ण** = हे कृष्ण | **विश्वभावन** = हे विश्वका रक्षक | **अवसीदतीम्** = दुःखी भएकी |
| **कृष्ण** = हे कृष्ण | **गोविन्द** = हे गोविन्द | मलाई |
| **महायोगिन्** = हे महायोगी | **प्रपन्नां** = शरणमा परेकी | **पाहि** = रक्षा गर्नुहोस् |

**वाक्यार्थ–** हे कृष्ण ! हे कृष्ण ! हे महायोगी ! हे विश्वका रक्षक ! हे विश्वात्मा ! हे गोविन्द ! म हजुरको शरण परेकी छु, छोराहरूसहित अति दुःखी मलाई रक्षा गर्नुहोस्।

**नान्यत् तव पदाम्भोजात् पश्यामि शरणं नृणाम्।**
**बिभ्यतां मृत्युसंसारादीश्वरस्यापवर्गिकात्॥ १२॥**

| पदार्थ– | **नृणां** = मानिसहरूका लागि | **पदाम्भोजात्** = चरणकमलभन्दा |
|---|---|---|
| **मृत्युसंसारात्** = मृत्युमय | **ईश्वरस्य** = सर्वसमर्थ | **अन्यत्** = अरू |
| संसारबाट | **तव** = हजुरको | **शरणं** = शरण |
| **बिभ्यतां** = डराएका | **आपवर्गिकात्** = मुक्ति प्रदान गर्ने | **न पश्यामि** = म देख्दिनँ |

**वाक्यार्थ–** मृत्युमय संसारबाट डराएका मानिसहरूका लागि सर्वसमर्थ हजुरको मुक्ति प्रदान गर्ने चरणकमलभन्दा अर्को कुनै शरण मैले देखेको छैन।

**नमः कृष्णाय शुद्धाय ब्रह्मणे परमात्मने।**
**योगेश्वराय योगाय त्वामहं शरणं गता॥ १३॥**

| पदार्थ– | **ब्रह्मणे** = परब्रह्म | **योगेश्वराय** = योगेश्वर |
|---|---|---|
| **शुद्धाय** = शुद्धस्वरूप | **परमात्मने** = परमात्मरूप | **योगाय** = तत्त्वज्ञानस्वरूप |

| | | |
|---|---|---|
| **कृष्णाय** = श्रीकृष्णलाई | **अहं** = म | **शरणं** = शरणमा |
| **नमः** = नमस्कार छ | **त्वां** = हजुरको | **गता** = परेकी छु |

**वाक्यार्थ–** शुद्ध परब्रह्म परमात्मरूप योगेश्वर तत्त्वज्ञानस्वरूप श्रीकृष्णलाई नमस्कार छ। हे भगवान् ! म हजुरको शरणमा परेकी छु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यनुस्मृत्य स्वजनं कृष्णं च जगदीश्वरम्।**

**प्रारुदद् दुःखिता राजन् भवतां प्रपितामही ॥ १४ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | (कुन्ती) | **कृष्णं च** = श्रीकृष्णलाई पनि |
| **राजन्** = हे राजा परीक्षित् | **इति** = यसरी | **अनुस्मृत्य** = सम्झिएर |
| **भवतां** = तपाईंकी | **स्वजनं** = आफन्तलाई र | **दुःखिता** = दुःखी हुँदै |
| **प्रपितामही** = बुढी हजुरआमा | **जगदीश्वरं** = जगत्का मालिक | **प्रारुदत्** = रोइन् |

**वाक्यार्थ–** हे परीक्षित् ! तपाईंकी प्रपितामही कुन्ती आफन्तलाई र जगत्का मालिक भगवान् श्रीकृष्णलाई सम्झिएर दुःखी हुँदै रोइन्।

**समदुःखसुखोऽक्रूरो विदुरश्च महायशाः।**

**सान्त्वयामासतुः कुन्तीं तत्पुत्रोत्पत्तिहेतुभिः ॥ १५ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | **अक्रूरः** = अक्रूर र | (अधर्मको नाश) सम्झाउँदै |
| **समदुःखसुखः** = सुख र | **विदुरः च** = विदुरले पनि | **कुन्तीं** = कुन्तीलाई |
| दुःखलाई बराबर ठान्ने | **तत्पुत्रोत्पत्तिहेतुभिः** = उनका | **सान्त्वयामासतुः** = सान्त्वना |
| **महायशाः** = ज्यादै यशस्वी | छोराहरूको जन्मको कारण | दिए |

**वाक्यार्थ–** सुख र दुःखलाई बराबर ठान्ने महायशस्वी अक्रूर र विदुरले कुन्तीका पुत्रहरूको जन्मको कारण (अधर्मको नाश) सम्झाउँदै कुन्तीलाई सान्त्वना दिए।

**यास्यन् राजानमभ्येत्य विषमं पुत्रलालसम्।**

**अवदत् सुहृदां मध्ये बन्धुभिः सौहृदोदितम् ॥ १६ ॥**

| | | |
|---|---|---|
| पदार्थ– | (आफ्ना छोरा र भतिजामा | **राजानं** = राजा धृतराष्ट्रलाई |
| **यास्यन्** = मथुरातिर फर्कने | पक्षपात) गर्ने | **अभ्येत्य** = भेटेर |
| वेलामा | **पुत्रलालसं** = आफ्ना पुत्रहरूमा | **सुहृदां मध्ये** = सहृदयीहरूका |
| **विषमं** = विषम व्यवहार | आसक्त | बीचमा |

**बन्धुभिः** = भाइबन्धुहरूद्वारा (श्रीकृष्ण, बलराम आदिद्वारा)
**सौहृदोदितं** = प्रेमपूर्वक बताइएको कुरा
**अवदत्** = भन्न थाले

**वाक्यार्थ–** अक्रूरले मथुरातिर फर्कने वेलामा आफ्ना छोरा र भतिजामा पक्षपात गर्ने, पुत्रहरूमा आसक्त राजा धृतराष्ट्रलाई उनका सहृदयीहरूकै बीचमा भाइबन्धुहरूद्वारा (श्रीकृष्ण, बलराम आदिद्वारा) प्रेमपूर्वक बताइएको कुरा भन्न थाले।

**अक्रूर उवाच** (अक्रूरले भने)

**भो भो वैचित्रवीर्य त्वं कुरूणां कीर्तिवर्धन।**

**भ्रातर्युपरते पाण्डावधुनासनमास्थितः॥ १७॥**

पदार्थ–
**कुरूणां** = कुरुवंशीको
**कीर्तिवर्धन** = कीर्ति फिँजाउने
**भो भो वैचित्रवीर्य** = विचित्र-वीर्यका पुत्र हे धृतराष्ट्र
**त्वं** = तपाईं
**भ्रातरि** = भाइ
**पाण्डौ** = पाण्डु
**उपरते** = बितेपछि
**अधुना** = अहिले
**आसनं** = सिंहासनमा
**आस्थितः** = बस्नुभएको छ

**वाक्यार्थ–** हे विचित्रवीर्यका पुत्र धृतराष्ट्र ! तपाईंले कुरुवंशको कीर्तिलाई फिँजाउनुभएको छ। भाइ पाण्डु बितेपछि अहिले तपाईं राजसिंहासनमा बस्नुभएको छ।

**धर्मेण पालयन्नुर्वीं प्रजाः शीलेन रञ्जयन्।**

**वर्तमानः समः स्वेषु श्रेयः कीर्तिमवाप्स्यसि॥ १८॥**

पदार्थ–
**धर्मेण** = धर्मपूर्वक
**उर्वीं** = पृथिवीलाई
**पालयन्** = रक्षा गर्दै र
**शीलेन** = राम्रो स्वभावले
**प्रजाः** = प्रजाहरूलाई
**रञ्जयन्** = खुसी पार्दै तथा
**स्वेषु** = आफन्त (आफ्ना पुत्र र पाण्डुपुत्रहरू)मा
**समः** = समानरूपले
**वर्तमानः** = रहेर
**श्रेयः** = कल्याण र
**कीर्तिम्** = कीर्ति पनि
**अवाप्स्यसि** = पाउनुहुनेछ

**वाक्यार्थ–** धर्मपूर्वक पृथिवीको पालन गर्दै, राम्रो स्वभावले प्रजाहरूलाई खुसी पार्दै अनि आफ्ना र पाण्डुका छोराहरूमा समान व्यवहार गर्दै तपाईंले कल्याण र कीर्ति प्राप्त गर्नुहुनेछ।

**अन्यथा त्वाचरंल्लोके गर्हितो यास्यसे तमः।**

**तस्मात् समत्वे वर्तस्व पाण्डवेष्वात्मजेषु च॥ १९॥**

पदार्थ–
**अन्यथा** = यस विपरीत
**आचरन् तु** = व्यवहार गरेमा चाहिँ
**लोके** = यो लोकमा
**गर्हितः** = निन्दित हुँदै (पछि)
**तमः** = अन्धकारमय नरकमा
**यास्यसे** = जानुहुनेछ
**तस्मात्** = त्यसैले

**पाण्डवेषु** = पाण्डवहरूमा र
**आत्मजेषु च** = आफ्ना
छोराहरूमा पनि
**समत्वे** = समान व्यवहार गरेर
**वर्तस्व** = रहनुहोस्

**वाक्यार्थ–** यदि यस विपरीत व्यवहार गर्नुभयो भने तपाईंलाई अहिले सबैले निन्दा गर्नेछन् र पछि अन्धकारमय नरकमा पुग्नुहुनेछ। त्यसैले आफ्ना र पाण्डुका छोराहरूमा समान व्यवहार गर्नुहोस्।

**नेह चात्यन्तसंवासः कर्हिचित् केनचित् सह।**
**राजन् स्वेनापि देहेन किमु जायात्मजादिभिः॥ २०॥**

**पदार्थ–**
**राजन्** = हे राजा धृतराष्ट्र
**इह च** = यो लोकमा
**कर्हिचित्** = कहिल्यै पनि
**केनचित् सह** = कोहीसँग पनि
**अत्यन्तसंवासः** = नित्य सँगै बस्ने काम
**न** = हुन सक्दैन
**स्वेन अपि** = आफ्नै
**देहेन** = शरीरसँग (त नित्य सम्बन्ध हुँदैन भने)
**जायात्मजादिभिः** = पत्नी र छोरा आदिसँग त
**किमु** = के भन्नु र

**वाक्यार्थ–** हे राजा धृतराष्ट्र ! यो लोकमा कहिल्यै पनि कसैको पनि कोहीसँग नित्य सँगै बसाइ हुन सक्दैन। आफ्नै शरीरसँग त नित्य सम्बन्ध हुन सक्दैन भने अरू पत्नी र छोरा आदिसँग त के कुरा गर्नु र ?

**एकः प्रसूयते जन्तुरेक एव प्रलीयते।**
**एकोऽनुभुङ्क्ते सुकृतमेक एव च दुष्कृतम्॥ २१॥**

**पदार्थ–**
**जन्तुः** = जीव
**एकः** = एक्लै
**प्रसूयते** = जन्मन्छ
**एकः एव** = एक्लै
**प्रलीयते** = मर्छ
**एकः** = एक्लै नै
**सुकृतं** = धर्मको फल सुख र
**एकः एव** = एक्लै नै
**दुष्कृतं च** = अधर्मको फल दुःख
**अनुभुङ्क्ते** = भोग गर्दछ

**वाक्यार्थ–** जीवात्मा एक्लै जन्मन्छ र एक्लै मर्छ अनि उसले धर्मको फल सुख र अधर्मको फल दुःख पनि एक्लै भोग गर्दछ।

**अधर्मोपचितं वित्तं हरन्त्यन्येऽल्पमेधसः।**
**सम्भोजनीयापदेशैर्जलानीव जलौकसः॥ २२॥**

**पदार्थ–**
**जलौकसः** = जलजन्तुहरूले
**जलानि इव** = जललाई झैं
**सम्भोजनीयापदेशैः** = (यी मेरा आफ्ना हुन्, यिनलाई मैले) पोषण गर्नुपर्छ भनिएकाहरूद्वारा
**अन्ये** = अरू शत्रुहरूले
**अल्पमेधसः** = मूर्खको
**अधर्मोपचितं** = अधर्मपूर्वक आर्जन गरिएको
**वित्तं** = सम्पत्ति
**हरन्ति** = हरण गर्दछन्

**वाक्यार्थ–** जलजन्तुहरूले जल सिध्याए झैं यी मेरा आफ्ना हुन्, यिनलाई मैले पोषण गर्नुपर्छ भनिएकाहरूद्वारा नै अरू शत्रुहरूले मूर्ख व्यक्तिको अधर्मपूर्वक आर्जन गरिएको सम्पत्ति हरण गर्दछन्।

**पुष्णाति यानधर्मेण स्वबुद्ध्या तमपण्डितम्।**

**तेऽकृतार्थं प्रहिण्वन्ति प्राणा रायः सुतादयः॥ २३॥**

**पदार्थ–**
**स्वबुद्ध्या** = (यो जीवले) आफ्नो सम्झिएर
**अधर्मेण** = अधर्मपूर्वक
**यान्** = जस-जसलाई
**पुष्णाति** = पोषण गर्दछ
**ते** = ती
**प्राणाः** = प्राण (शरीर)
**रायः** = सम्पत्तिहरू र
**सुतादयः** = छोराहरूले पनि
**अकृतार्थं** = भोग पूरा गरिनसकेको
**अपण्डितं** = मूर्ख
**तं** = त्यो जीवलाई
**प्रहिण्वन्ति** = त्याग्दछन्

**वाक्यार्थ–** जीवले आफ्नो सम्झिएर जस-जसलाई पोषण गर्दछ, तिनै शरीर, सम्पत्ति र छोराहरूले भोग पूरा गरिनसकेको मूर्ख त्यो जीवलाई त्यागिदिन्छन्।

**स्वयं किल्बिषमादाय तैस्त्यक्तो नार्थकोविदः।**

**असिद्धार्थो विशत्यन्धं स्वधर्मविमुखस्तमः॥ २४॥**

**पदार्थ–**
**नार्थकोविदः** = अनर्थकारी कुराहरूमा मात्र (भौतिक विषयवस्तु थुपार्न र भोग गर्नमा मात्र) चतुर भएको
**स्वधर्मविमुखः** = आफ्नो धर्मबाट विमुख भएको र
**स्वयं** = आफैं
**असिद्धार्थः** = मनोरथ पूर्ण नभएको व्यक्ति
**तैः** = ती पत्नी, छोरा आदिद्वारा
**त्यक्तः** = त्यागिन्छ र
**किल्बिषं** = (उनीहरूलाई भरण, पोषण गर्दा भएको) पाप
**आदाय** = लिएर
**अन्धं तमः** = अन्धकारमय नरकमा
**विशति** = प्रवेश गर्दछ (पुग्दछ)

**वाक्यार्थ–** अनर्थकारी कुराहरूमा (भौतिक विषयवस्तु थुपार्न र भोग गर्नमा मात्र) चतुर भएको, आफ्नो धर्मदेखि विमुख भएको र आफ्ना इच्छाहरू पनि पूर्ण नभएको त्यो व्यक्ति पत्नी, छोरा आदिद्वारा त्यागिन्छ र उनीहरूलाई पोषण गर्दा भएको पाप लिई अन्धकारमय नरकमा पुग्दछ।

**तस्माल्लोकमिमं राजन् स्वप्नमायामनोरथम्।**

**वीक्ष्यायम्यात्मनात्मानं समः शान्तो भव प्रभो॥ २५॥**

**पदार्थ–**
**राजन्** = हे राजा धृतराष्ट्र
**प्रभो** = हे (कुरुका) मालिक
**तस्मात्** = त्यसैले
**इमं** = यो
**लोकं** = लोकलाई
**स्वप्नमायामनोरथं** = स्वप्न, जादु र मनको कल्पनाको रूपमा
**वीक्ष्य** = देखेर (बुझेर)
**आत्मना** = आफ्नो बुद्धिले
**आत्मानं** = मनलाई (आफ्नो)
**आयम्य** = वशमा राखेर

**समः** = सबैमा समदृष्टि गर्ने र | **शान्तः** = शान्त | **भव** = बन्नुहोस्

**वाक्यार्थ–** हे राजा धृतराष्ट ! हे कुरुका मालिक ! त्यसैले यो लोकलाई स्वप्न, जादु र कल्पना मात्र हो भन्ने बुझेर र बुद्धिले चित्तलाई वशमा राखेर समभाव राख्नुहोस् र शान्त बन्नुहोस्।

**धृतराष्ट्र उवाच** (धृतराष्ट्रले भने)

**यथा वदति कल्याणीं वाचं दानपते भवान्।**

**तथानया न तृप्यामि मर्त्यः प्राप्य यथामृतम्॥ २६॥**

**पदार्थ–**
**दानपते** = हे दानीहरूमा श्रेष्ठ अक्रूर
**भवान्** = हजुरले
**यथा** = जस्तो
**कल्याणीं** = मेरो कल्याण गर्ने खालको
**वाचं** = कुरा
**वदति** = भन्दै हुनुहुन्छ
**अनया** = यो वचनबाट
**यथा** = जसरी
**मर्त्यः** = मरणशील मानिस
**अमृतं** = अमृत
**प्राप्य** = पाएर तृप्त हुँदैन
**तथा** = त्यसरी
**न तृप्यामि** = (म) तृप्त भएको छैन

**वाक्यार्थ–** हे दानीहरूमा श्रेष्ठ अक्रूर ! जसरी मरणशील मानिस अमृतबाट कहिल्यै तृप्त हुँदैन, त्यसै गरी हजुरले मेरो कल्याणका लागि भनेका यी वचनहरूबाट म तृप्त भएको छैन।

**तथापि सूनृता सौम्य हृदि न स्थीयते चले।**

**पुत्रानुरागविषमे विद्युत् सौदामनी यथा॥ २७॥**

**पदार्थ–**
**सौम्य** = हे प्रिय अक्रूर
**तथा अपि** = तर पनि
**पुत्रानुरागविषमे** = छोराप्रतिको अनुरागले विषम (विचलित) भएको
**चले** = चञ्चल
**हृदि** = चित्तमा
**सूनृता** = कल्याणकारक वाणी
**यथा** = जसरी
**सौदामनी** = मेघमा (चम्किएको)
**विद्युत्** = बिजुली (स्थिर हुँदैन, त्यस्तै)
**न स्थीयते** = (एकछिन पनि) टिक्दैन

**वाक्यार्थ–** हे प्रिय अक्रूर ! मेरो लागि यो शिक्षा उचित हुँदा-हुँदै पनि मेरो छोराप्रतिको अनुरागले विचलित भएको चञ्चल चित्तमा तपाईंले भनेको कल्याणकारक वाणी मेघमा चम्किएको बिजुली जस्तै एक छिन पनि स्थिर हुँदैन।

**ईश्वरस्य विधिं को नु विधुनोत्यन्यथा पुमान्।**

**भूमेर्भारावताराय योऽवतीर्णो यदोः कुले॥ २८॥**

**पदार्थ–**
**कः नु पुमान्** = कुन मान्छेले
**ईश्वरस्य** = ईश्वरको
**विधिं** = विधानलाई
**अन्यथा** = परिवर्तन (यता-उता) गरेर

**विधुनोति** = हल्लाउन सक्छ र
**यः** = जो ईश्वर
**भूमेः** = पृथिवीको
**भारावताराय** = भारहरणका लागि
**यदोः कुले** = यदुको कुलमा
**अवतीर्णः** = अवतीर्ण हुनुभएको छ

**वाक्यार्थ–** कुन चाहिँ मानिसले ईश्वरको विधानलाई यता–उता गरेर हल्लाउन सक्छ र ? उहाँ ईश्वर पृथिवीको भार हरण गर्नका लागि यदुकुलमा अवतीर्ण भइसक्नु भएको छ। (ईश्वरको जे इच्छा छ, त्यही हुन्छ।)

**यो दुर्विमर्शपथया निजमाययेदं सृष्ट्वा गुणान् विभजते तदनुप्रविष्टः।**
**तस्मै नमो दुरवबोधविहारतन्त्रसंसारचक्रगतये परमेश्वराय॥ २९॥**

**पदार्थ–**
**यः** = जो
**दुर्विमर्शपथया** = अचिन्त्य मार्गबाट चल्ने
**निजमायया** = आफ्नो मायाशक्तिद्वारा
**इदं** = यो सारा विश्वप्रपञ्चलाई
**सृष्ट्वा** = सृष्टि गरेर
**तदनुप्रविष्टः** = फेरि अन्तर्यामीरूपले त्यसमा प्रवेश गरी
**गुणान्** = गुणहरू (सत्त्व, रज र तम) लाई
**विभजते** = विभाग गर्नुहुन्छ
**दुरवबोधविहारतन्त्रसंसारचक्र-गतये** = बुझ्री नसकिने अचिन्त्य रूपले चलेको संसारचक्रको परम गतिस्वरूप
**तस्मै** = ती
**परमेश्वराय** = परमात्मालाई
**नमः** = नमस्कार छ

**वाक्यार्थ–** जो भगवान् अचिन्त्य मार्गबाट चल्ने मायाशक्तिद्वारा सारा ब्रह्माण्डको सृष्टि गरी त्यसमा अन्तर्यामी रूपले प्रवेश गर्नुहुन्छ र गुणहरू (सत्त्व, रज र तम)लाई विभाजन गर्नुहुन्छ, बुझ्री नसकिने अचिन्त्य रूपले चलेको संसारचक्रको परम गतिस्वरूप त्यस्ता परमात्मालाई म नमस्कार गर्दछु।

**विवरण–** यस प्रसङ्गमा धृतराष्ट्रले आफ्नो बुद्धि मोहित हुनुमा ईश्वरलाई दोष दिएका छन्। धृतराष्ट्र शब्दको व्युत्पत्ति हुन्छ– **धृतं राष्ट्रं येन सः धृतराष्ट्रः** अर्थात् राज्यलाई जसले धारण गरेको छ। जसले राज्य मेरै हो भनेर राज्यलाई आफैँले धारण गरेको ठान्दछ ऊ धृतराष्ट्र हो। धृतराष्ट्र ज्यादै महत्त्वाकाङ्क्षी व्यक्ति हुन्, उनी आफू र आफ्ना सन्तानमा मात्र राज्याधिकार हुनुपर्छ भन्ने ठान्दछन्। धृतराष्ट्र जसरी शारीरिक रूपमा अन्धा थिए त्यसै गरी उनी विवेकदृष्टिले पनि रहित अन्धा थिए। महत्त्वाकाङ्क्षाले आफ्नो इच्छा पूरा गर्न दुर्वृत्तिहरूको पनि साथ लिन्छ। दुर्योधन, शकुनि आदि दुर्गुणीहरूलाई आफन्त मानी पक्षपाती बनेका उनी पाण्डवहरूलाई राज्याधिकारबाट पन्छाउन खोजिरहन्थे। न्यायदृष्टिबाट ओझेल परेको राजा नै सबैथरी समस्याहरूको प्रमुख कारण हो। दुर्योधनरूपी पापमय वृक्षका मूल अविवेकी राजा धृतराष्ट्र नै हुन्।

यहाँ तिनै धृतराष्ट्रमा बढिरहेको अविवेकलाई नष्ट गर्न अक्रूरले उपदेश गरेका छन्, तर धृतराष्ट्रले आफ्नो मनको भावलाई नराम्रा चिन्तनमा मोडिदिने भगवान् नै हुनुहुन्छ भनी उल्टो भगवान्लाई नै दोषी बनाइदिएका छन्। परमात्मालाई मान्नुको अर्थ आफ्नो स्वार्थका लागि दुष्कर्म

गर्नु अनि परमात्मा नै हृदयका प्रेरक हुन् भनी उहाँलाई दोष दिनु होइन, यो त दुष्ट एवं स्वार्थी व्यक्तिहरूले आफ्नो स्वार्थका लागि शास्त्रज्ञानलाई बङ्ग्याएको कुरा हो। दुष्ट व्यक्तिमा शास्त्रज्ञान पऱ्यो भने त्यसले आफ्नो स्वार्थ अनुकूल हुने गरी अर्थलाई बङ्ग्याई नष्ट गरिदिन्छ भन्ने कुराको उदाहरण पनि यस प्रसङ्गबाट मिल्दछ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्यभिप्रेत्य नृपतेरभिप्रायं स यादवः।**

**सुहृद्भिः समनुज्ञातः पुनर्यदुपुरीमगात्॥ ३०॥**

**पदार्थ–**
**सः यादवः** = ती अक्रूर
**इति** = यसरी
**नृपतेः** = राजा धृतराष्ट्रको
**अभिप्रायं** = मनसायलाई
**अभिप्रेत्य** = बुझेर
**सुहृद्भिः** = बन्धुबान्धवसँग
**समनुज्ञातः** = जाने अनुमति
लिएर
**पुनः** = फेरि
**यदुपुरीम्** = मथुरामा
**अगात्** = गए

**वाक्यार्थ–** यसरी महाराज धृतराष्ट्रको मनसायलाई बुझेका अक्रूर बन्धुबान्धवसँग बिदा मागेर फेरि मथुरातिर गए।

**शशंस रामकृष्णाभ्यां धृतराष्ट्रविचेष्टितम्।**

**पाण्डवान् प्रति कौरव्य यदर्थं प्रेषितः स्वयम्॥ ३१॥**

**पदार्थ–**
**कौरव्य** = हे कुरुवंशी परीक्षित्
**यदर्थं** = जुन कुरा बुझ्नको
लागि
**स्वयं** = भगवान् आफैंद्वारा
**प्रेषितः** = (हस्तिनापुरमा)
पठाइएका अक्रूरले
**रामकृष्णाभ्यां** = बलराम र
श्रीकृष्णको सामु
**पाण्डवान् प्रति** = पाण्डवहरूको
साथ
**धृतराष्ट्रविचेष्टितं** = धृतराष्ट्रले
गरेका व्यवहार
**शशंस** = बताए

**वाक्यार्थ–** हे परीक्षित्! जसलाई भगवान् श्रीकृष्णले जुन कुरा बुझ्न भनेर आफैं पठाउनुभएको थियो ती अक्रूरले बलराम र श्रीकृष्णको सामु धृतराष्ट्रले पाण्डवप्रति गरेको सारा व्यवहार सुनाए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे पूर्वार्धे**

**एकोनपञ्चाशत्तमोऽध्यायः॥ ४९॥**

**समाप्तमिदं दशमस्कन्धस्य पूर्वार्धम्**

# दशमः स्कन्धः

(उत्तरार्धः)

# अथ पञ्चाशत्तमोऽध्यायः

## जरासन्धसँग युद्ध र द्वारकापुरीको निर्माण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**अस्तिः प्राप्तिश्च कंसस्य महिष्यौ भरतर्षभ ।**
**मृते भर्तरि दुःखार्तें ईयतुः स्म पितुर्गृहान् ॥ १ ॥**

**पदार्थ–**
**भरतर्षभ** = भरतवंशीमा श्रेष्ठ हे परीक्षित्
**अस्तिः** = अस्ति नामकी र
**प्राप्तिः च** = प्राप्ति नामकी पनि
**कंसस्य** = कंसका
**महिष्यौ** = रानीहरू
**भर्तरि** = पति कंस
**मृते** = मरेपछि
**दुःखार्तें** = अत्यन्त दुःखित हुँदै
**पितुः** = बाबु जरासन्धको
**गृहान्** = घरमा
**ईयतुः स्म** = गएका थिए

**वाक्यार्थ–** भरतवंशीमा श्रेष्ठ हे परीक्षित् ! अस्ति र प्राप्ति नामका कंसका रानीहरू कंस मरेपछि आफ्ना बाबु जरासन्धको घरमा गएका थिए।

**पित्रे मगधराजाय जरासन्धाय दुःखिते ।**
**वेदयाञ्चक्रतुः सर्वमात्मवैधव्यकारणम् ॥ २ ॥**

**पदार्थ–**
**दुःखिते** = दुःखी भएका (ती दुई ओटीले)
**पित्रे** = बाबु
**मगधराजाय** = मगधराज
**जरासन्धाय** = जरासन्धलाई
**सर्वम्** = सबै
**आत्मवैधव्यकारणं** = आफू विधवा हुनु पर्नाको कारण
**वेदयाञ्चक्रतुः** = (बुझाए) सुनाए

**वाक्यार्थ–** अति दुःखित भएका कंसका पत्नी अस्ति र प्राप्तिले बाबु मगधराज जरासन्धलाई आफू विधवा हुनुका कारणहरू सुनाए।

**विवरण–** यस प्रसङ्गमा कंसका अस्ति र प्राप्ति दुई पत्नीहरू आफ्ना पति मरेपछि विलाप गर्दै आफ्ना बुबा जरासन्धकहाँ सहायता माग्न पुगे भनी बताइएको छ। यहाँ जरासन्ध, कंस र यी दुई स्त्रीहरूको प्रसङ्गद्वारा आध्यात्मिक रहस्यतर्फ पनि सङ्केत गरिएको छ। जरासन्ध कंसको ससुरो हो। यसको जन्मप्रसङ्ग पनि विचित्रको छ। आधी-आधी टुक्राको रूपमा जन्मेको त्यसलाई जरा नामकी राक्षसीले जोडिदिएकाले त्यसको नाम जरासन्ध भयो (भागवत, ९/२२/७-८)।

आध्यात्मिक अर्थमा भने जरासन्धलाई अध्यासको प्रतीकको रूपमा मान्न सकिन्छ। वेदान्तशास्त्र अनुसार अहङ्कारमा परेको चैतन्यको प्रतिबिम्ब नै जीवात्मा हो। यो अहङ्कार या जीवभावमा दुई अंश रहेका हुन्छन्— एउटा चित् अंश र अर्को अचित् अंश। 'अहं अहं' भन्दा त्यसभित्र जड शरीर आदि र चेतन आत्माको पनि सँगै बोध हुन्छ। यसरी अहङ्कारमा जड शरीर आदिको अंश र चेतन आत्माको अंश दुबै रहेको हुन्छ। यसरी जड र चेतनको यो छ्यासमिसलाई अध्यास भनिन्छ। म शरीर हुँ भन्दा यो अहङ्कारमा जड अंश प्रकाशित भएको छ भने त्यसलाई प्रकाशित गरेकाले सँगसँगै चेतन अंशको पनि प्रतिभास भइरहेको हुन्छ। जरासन्धमा आधा-आधा टुक्रा जोडिनु यही असत्य र सत्य जोडिनु हो। जरासन्धको दुई टुक्रालाई जरा नामकी राक्षसीले जोडेकी थिई, जरा भनेर बुढी भन्ने अर्थ पनि निस्कन्छ। संसारमा सबभन्दा बूढी अनादि अविद्या या माया नै हो। त्यही अविद्याको कारणले यो सत्य र असत्यको छ्यासमिस या परस्पर अध्यास भएको हुन्छ। वेदान्तमा अध्यासलाई अविद्याद्वारा भएको मानिन्छ। यसरी मायाको कारणले जड र चेतन जोडिएपछि अध्यासरूप जरासन्ध उत्पन्न हुन्छ।

शरीर आदि जड पदार्थमा चेतन आत्माको अध्यास भएपछि यसबाट अस्ति (छ) र प्राप्ति (पाउनुपर्छ) रूपी दुई छोरीहरू हुन्छन्, जसको अहङ्काररूपी कंससँग सम्बन्ध गाँसिएको हुन्छ। अहं हुने बित्तिकै पदार्थहरूमा ममताको भाव जागिहाल्दछ। पदार्थ दुई प्रकारका हुन्छन्— एउटा आफूसँग भएका र अर्का आफूसँग नभएका। आफूसँग भएका पदार्थहरूमा **अस्ति** अर्थात् छ भन्ने बुद्धि हुन्छ भने नभएका पदार्थहरूमा **प्राप्ति** अर्थात् मैले पाउनुपर्छ भन्ने भाव हुन्छ। यसरी ममताका यी दुई वृत्तिहरू नै जरासन्धरूपी अहङ्कारका छोरी या कार्य हुन्। ममताका यी दुई वृत्तिलाई अँगाल्ने अहङ्कार नै कंस हो। शाब्दिक व्युत्पत्ति गर्दा पनि गति र शासन अर्थ भएको कसि धातुबाट कंश शब्द बन्दछ। कंस दुष्ट शासक थियो। यसको दुष्टताको कारण अहङ्कार नै हो। अहङ्काररूप कंसलाई परमात्मरूप श्रीकृष्णले नष्ट गरिदिनुहुन्छ।

**स तदप्रियमाकर्ण्य शोकामर्षयुतो नृप।**
**अयादवीं महीं कर्तुं चक्रे परममुद्यमम्॥ ३॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**तदप्रियं** = त्यो (ज्वाइँ कंसको मृत्युरूप) अप्रिय घटनालाई
**आकर्ण्य** = सुनेर
**शोकामर्षयुतः** = कंसप्रतिको शोक र श्रीकृष्णप्रतिको क्रोधले युक्त भएको
**सः** = त्यो जरासन्धले
**महीं** = पृथिवीलाई
**अयादवीं** = यादवहरू रहित
**कर्तुं** = बनाउन
**परम् उद्यमं** = ठुलो प्रयास (युद्धको तयारी)
**चक्रे** = गर्न थाल्यो

**वाक्यार्थ–** हे राजा परीक्षित्! ज्वाइँ कंसको मृत्युको अप्रिय घटना सुनेर जरासन्ध शोकले व्याकुल भयो र श्रीकृष्णप्रति क्रोधित भयो अनि पृथिवीलाई यदुवंशी रहित पार्न युद्धको तयारी गर्न थाल्यो।

**अक्षौहिणीभिर्विंशत्या तिसृभिश्चापि संवृतः।**
**यदुराजधानीं मथुरां न्यरुधणत् सर्वतो दिशम्॥ ४॥**

पदार्थ–
**विंशत्या तिसृभिः च** = बीस र तीन (तेईस)
**अक्षौहिणीभिः** = अक्षौहिणी सेनाले
**संवृतः** = युक्त भएको जरासन्धले
**यदुराजधानीं** = यदुवंशीको राजधानी
**मथुरां** = मथुरालाई
**सर्वतो दिशं** = सबै दिशाबाट
**न्यरुणत्** = रोक्यो (घेरा हाल्यो)

**वाक्यार्थ–** जरासन्धले तेईस अक्षौहिणी सेना लिएर यदुवंशीको राजधानी मथुरालाई सबै तर्फबाट घेरा हाल्यो।

**टिप्पणी–** एक अक्षौहिणीमा २१,८७० रथमा चढेका, २१,८७० हात्तीमा सवार, ६५,६१० घोडामा सवार र १,०९,३५० पैदल सेना हुन्छन्।

**निरीक्ष्य तद्बलं कृष्ण उद्वेलमिव सागरम्।**
**स्वपुरं तेन संरुद्धं स्वजनं च भयाकुलम्॥ ५॥**
**चिन्तयामास भगवान् हरिः कारणमानुषः।**
**तद्देशकालानुगुणं स्वावतारप्रयोजनम्॥ ६॥**

पदार्थ–
**कारणमानुषः** = कारणवश (भूभार हरणका लागि) मनुष्यको रूपमा आउनुभएका
**भगवान् हरिः** = भगवान् हरि
**कृष्णः** = श्रीकृष्णले
**उद्वेलं** = किनारालाई नाघेको
**सागरम् इव** = समुद्रलाई झैँ
**तद्बलं** = त्यो जरासन्धको सेना
**तेन संरुद्धं** = त्यस सेनाद्वारा घेरिएको
**स्वपुरं** = आफ्नो मथुरानगर र
**भयाकुलं** = डराएका
**स्वजनं च** = आफन्तहरूलाई पनि
**निरीक्ष्य** = हेरेर
**तद्देशकालानुगुणं** = त्यो ठाउँ र समय अनुरूप
**स्वावतारप्रयोजनं** = आफ्नो अवतार ग्रहण गर्नुको प्रयोजनबारे
**चिन्तयामास** = विचार गर्न थाल्नुभयो

**वाक्यार्थ–** कारणवश मनुष्यको रूपमा आउनुभएका भगवान् श्रीकृष्णले किनार नाघेर आएको सागर जस्तो जरासन्धको सेनालाई, सेनाद्वारा घेरिएको मथुरा सहरलाई र त्यसबाट डराएका आफन्तहरूलाई देखेर देश–काल अनुरूप आफ्नो अवतारको प्रयोजनको विषयमा सोच्न लाग्नुभयो।

**हनिष्यामि बलं ह्येतद् भुवि भारं समाहितम्।**
**मागधेन समानीतं वश्यानां सर्वभूभुजाम्॥ ७॥**

**अक्षौहिणीभिः सङ्ख्यातं भटाश्वरथकुञ्जरैः ।**

**मागधस्तु न हन्तव्यो भूयः कर्ता बलोद्यमम् ॥ ८ ॥**

**पदार्थ–**
**वश्यानां** = जरासन्धका वशमा रहेका
**सर्वभूभुजां** = सारा राजाहरूको
**भुवि** = पृथिवीमा
**समाहितं** = रहेको
**भारं** = भाररूप
**मागधेन** = मगधको राजा जरासन्धद्वारा
**समानीतं** = ल्याइएको
**भटाश्वरथकुञ्जरैः** = पैदल, घोडचढी, रथी र हात्ती चढ्ने
**अक्षौहिणीभिः सङ्ख्यातं** = तेईस अक्षौहिणी सेनामा गणना गरिएको
**एतत् बलं** = यो सारा सेनालाई
**हि** = निश्चय नै
**हनिष्यामि** = मार्नेछु तर
**मागधः तु** = जरासन्ध चाहिँ
**न हन्तव्यः** = मारिनु हुँदैन
**भूयः** = फेरि (दुष्ट राजाहरूलाई जम्मा पारेर)
**बलोद्यमं** = युद्धको प्रयास
**कर्ता** = गर्नेछ

**वाक्यार्थ–** जरासन्धका वशमा रहेका यी राजाहरू सबै पृथिवीका भार हुन्। यहाँ पैदल, घोडचढी, रथी र हात्ती चढेका समेत गरी तेईस अक्षौहिणी सेना छन्। यी जरासन्धले ल्याएका सारा सेनालाई म मार्नेछु, तर यो जरासन्धलाई मार्नु हुँदैन, किनभने फेरि पनि (अरू दुष्ट राजाहरूलाई जम्मा पारेर) यसले युद्धको प्रयास गर्नेछ (जसले गर्दा दुष्टहरूको नाश गर्न सजिलो हुनेछ) ।

**एतदर्थोऽवतारोऽयं भूभारहरणाय मे ।**

**संरक्षणाय साधूनां कृतोऽन्येषां वधाय च ॥ ९ ॥**

**पदार्थ–**
**भूभारहरणाय** = भूभार हरण गर्नका लागि
**साधूनां** = सज्जनहरूको
**संरक्षणाय** = संरक्षणका लागि र
**अन्येषां** = अन्य दुष्टहरूको
**वधाय च** = विनाशका लागि पनि
**एतदर्थः** = यिनै प्रयोजनका लागि
**अयं अवतारः** = यो अवतार
**मे** = मद्वारा
**कृतः** = लिइएको हो

**वाक्यार्थ–** भूभारहरण, सज्जनहरूको संरक्षण र दुष्टहरूको विनाशका यिनै प्रयोजनका लागि नै मैले यो अवतार लिएको हुँ।

**अन्योऽपि धर्मरक्षायै देहः संभ्रियते मया ।**

**विरामायाप्यधर्मस्य काले प्रभवतः क्वचित् ॥ १० ॥**

**पदार्थ–**
**धर्मरक्षायै** = धर्मरक्षाको लागि र
**क्वचित् काले** = कुनै समयमा
**प्रभवतः** = बढिरहेको
**अधर्मस्य** = अधर्मलाई
**विरामाय** = अन्त्य गर्नका लागि
**अन्यः अपि** = अरू पनि
**देहः** = शरीर
**मया** = मद्वारा
**संभ्रियते** = धारण गरिन्छ

**वाक्यार्थ–** धर्मरक्षाका लागि र कहिलेकाहीँ बढिरहेको अधर्मलाई अन्त्य गर्नका लागि पनि म अरू अवतार पनि ग्रहण गर्ने गर्दछु।

**एवं ध्यायति गोविन्द आकाशात् सूर्यवर्चसौ।**
**रथावुपस्थितौ सद्यः ससूतौ सपरिच्छदौ॥ ११॥**

**पदार्थ–**
**एवं** = यसरी
**गोविन्दे** = श्रीकृष्ण भगवान्ले
**ध्यायति** = विचार गरिरहँदा
**आकाशात्** = आकाशबाट
**सद्यः** = तुरुन्तै
**सूर्यवर्चसौ** = सूर्य जस्ता चम्किला
**ससूतौ** = सारथि सहित र
**सपरिच्छदौ** = कवच, ध्वजा आदिले युक्त
**रथौ** = दुई ओटा रथ
**उपस्थितौ** = उपस्थित भए

**वाक्यार्थ–** भगवान्ले यति विचार गर्दागर्दै आकाशबाट सूर्य जस्ता चम्किला, सारथि सहित र कवच, ध्वजा आदिले सुसज्जित दुई ओटा रथ तुरुन्तै उपस्थित भए।

**आयुधानि च दिव्यानि पुराणानि यदृच्छया।**
**दृष्ट्वा तानि हृषीकेशः सङ्कर्षणमथाब्रवीत्॥ १२॥**

**पदार्थ–**
**यदृच्छया** = आफैँ
**दिव्यानि** = अलौकिक
**पुराणानि** = प्राचीन
**आयुधानि च** = हतियारहरू पनि आए
**तानि** = ती रथ र हतियारहरूलाई
**दृष्ट्वा** = देखेर
**अथ** = त्यसपछि
**हृषीकेशः** = भगवान् हृषीकेशले
**सङ्कर्षणं** = बलरामलाई
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** त्यसपछि अलौकिक, प्राचीन हतियारहरू पनि आए, यो सबै देखेर भगवान् श्रीकृष्णले बलरामलाई भन्न लाग्नुभयो।

**पश्यार्य व्यसनं प्राप्तं यदूनां त्वावतां प्रभो।**
**एष ते रथ आयातो दयितान्यायुधानि च॥ १३॥**

**पदार्थ–**
**आर्य** = हे पूज्य
**प्रभो** = हे समर्थ
**यदूनां** = यदुवंशीहरूलाई
**प्राप्तं** = आएको
**व्यसनं** = सङ्कट
**पश्य** = हेर्नुहोस् र
**अवतां** = रक्षा गर्नुहोस्
**एषः** = यो
**ते** = हजुरको
**रथः** = रथ
**आयातः** = आयो र
**दयितानि** = प्रिय (हल, मुसल आदि)
**आयुधानि च** = हतियारहरू पनि (आए)

**वाक्यार्थ–** हे पूज्य, हे शक्तिशाली दाजु ! हेर्नुहोस् त, यदुवंशीहरूलाई सङ्कट आएको छ, यिनीहरूको रक्षा गर्नुहोस्। हजुरको रथ र प्रिय (हल, मुसल आदि) हतियारहरू पनि आएका छन्।

**यानमास्थाय जह्येतद् व्यसनात् स्वान् समुद्धर ।**
**एतदर्थं हि नौ जन्म साधूनामीश शर्मकृत् ॥ १४ ॥**

**पदार्थ–**
**यानं** = रथमा
**आस्थाय** = बसेर
**एतत्** = यो सारा सेनालाई
**जहि** = मार्नुहोस्
**स्वान्** = आफन्तहरूलाई
**व्यसनात्** = कष्टबाट
**समुद्धर** = रक्षा गर्नुहोस्
**ईश** = हे समर्थ प्रभु (हजुर)
**साधूनां** = सज्जनहरूको
**शर्मकृत्** = कल्याणकारक हुनुहुन्छ
**हि** = निश्चय नै
**एतदर्थं** = त्यसैको लागि नै
**नौ** = हामी दुईको
**जन्म** = जन्म भएको हो

**वाक्यार्थ–** रथमा चढेर यी सेनालाई मारेर आफन्तहरूलाई कष्टबाट रक्षा गर्नुहोस्। हे समर्थ प्रभु ! हजुर नै सज्जनहरूको कल्याणकारक हुनुहुन्छ। वास्तवमा हामी दुईको जन्म यसैका लागि भएको हो।

**त्रयोविंशत्यनीकाख्यं भूमेर्भारमपाकुरु ।**
**एवं सम्मन्त्र्य दाशार्हौ दंशितौ रथिनौ पुरात् ॥ १५ ॥**
**निर्जग्मतुः स्वायुधाढ्यौ बलेनाल्पीयसावृतौ ।**
**शङ्खं दध्मौ विनिर्गत्य हरिर्दारुकसारथिः ॥ १६ ॥**

**पदार्थ–**
**त्रयोविंशत्यनीकाख्यं** = तेईस अक्षौहिणी सेनाले चिनिने यो
**भूमेः** = पृथिवीको
**भारं** = भारलाई
**अपाकुरु** = हटाउनुहोस्
**एवं** = यसरी (दाजुभाइले)
**सम्मन्त्र्य** = सल्लाह गरेर
**दंशितौ** = कवच लगाएका
**रथिनौ** = रथमा बसेका
**स्वायुधाढ्यौ** = आ-आफ्ना हतियारले युक्त भएका
**अल्पीयसा** = थोरै
**बलेन** = सेनाले
**आवृतौ** = युक्त
**दाशार्हौ** = श्रीकृष्ण र बलराम
**पुरात्** = मथुराबाट
**निर्जग्मतुः** = बाहिर निस्कनुभयो
**विनिर्गत्य** = बाहिर आएर
**दारुकसारथिः** = दारुकलाई सारथि बनाउनुभएका
**हरिः** = भगवान् श्रीकृष्णले
**शङ्खं** = शङ्ख
**दध्मौ** = बजाउनुभयो

**वाक्यार्थ–** हे दाजु ! तेईस अक्षौहिणी सेनालाई खत्तम पारेर पृथिवीको भार हरण गर्नुहोस्, यसरी दाजुभाइले सल्लाह गरेर कवच लगाई रथमा बसेर आ-आफ्ना हतियार लिई थोरै सेनासँगै दुबै दाजुभाइ नगरबाट बाहिर आउनुभयो र दारुकलाई सारथि बनाउनुभएका भगवान् श्रीकृष्णले शङ्ख बजाउनुभयो।

**ततोऽभूत् परसैन्यानां हृदि वित्रासवेपथुः ।**
**तावाह मागधो वीक्ष्य हे कृष्ण पुरुषाधम ॥ १७ ॥**
**न त्वया योद्धुमिच्छामि बालेनैकेन लज्जया ।**
**गुप्तेन हि त्वया मन्द न योत्स्ये याहि बन्धुहन् ॥ १८ ॥**

**पदार्थ–**
**ततः** = त्यसपछि (शङ्ख बजेपछि)
**परसैन्यानां** = शत्रुका सेनाहरूको
**हृदि** = हृदयमा
**वित्रासवेपथुः** = डरको कम्पन
**अभूत्** = भयो
**मागधः** = मगधराज जरासन्धले
**तौ** = श्रीकृष्ण र बलरामलाई
**वीक्ष्य** = देखेर
**आह** = भन्न थाल्यो
**हे पुरुषाधम कृष्ण** = हे पुरुषाधम कृष्ण
**एकेन** = एउटा
**बालेन** = बालक
**त्वया** = तँसँग
**लज्जया** = लाजले गर्दा
**योद्धुम्** = युद्ध गर्न
**न इच्छामि** = म चाहन्नँ र
**मन्द** = हे मूर्ख
**बन्धुहन्** = हे आफन्तको हत्यारा
**हि** = निश्चय नै
**गुप्तेन** = लुकेर बस्ने
**त्वया** = तँ दुष्टसँग
**न योत्स्ये** = लडाइँ गर्दिनँ
**याहि** = (मेरो सामुन्नेबाट) जा

**वाक्यार्थ–** जब भगवान्ले शङ्ख बजाउनुभयो, त्यसको आवाजले शत्रुसेनाको हृदय डरले काँप्यो। जरासन्धले श्रीकृष्ण र बलरामलाई देखेपछि श्रीकृष्णलाई भन्यो– हे पुरुषाधम कृष्ण ! एउटा बालकसँग लडाइँ गर्नु मेरो लागि लाजको कुरा हो, त्यसैले म लड्दिनँ र हे मूर्ख ! तँ आफन्तको हत्यारा होस्, त्यसैले सधैँ लुकेर बस्ने तँ दुष्टसँग म युद्ध गर्दिनँ, तँ जा।

**तव राम यदि श्रद्धा युध्यस्व धैर्यमुद्वह ।**
**हित्वा वा मच्छरैश्छिन्नं देहं स्वर्याहि मां जहि ॥ १९ ॥**

**पदार्थ–**
**राम** = हे बलराम
**तव** = तँलाई
**यदि श्रद्धा** = यदि (युद्धमा) इच्छा छ भने
**धैर्यम्** = धैर्य
**उद्वह** = धारण गर् (र)
**युध्यस्व** = लडाइँ गर्
**मच्छरैः** = मेरा बाणहरूले
**छिन्नं** = छिन्न-भिन्न भएको
**देहं** = शरीरलाई
**हित्वा** = त्यागेर
**स्वः** = स्वर्ग
**याहि** = जा
**मां वा** = अथवा मलाई
**जहि** = मार्

**वाक्यार्थ–** हे बलराम ! तँलाई युद्ध गर्ने इच्छा छ भने धैर्य धारण गर् र लडाइँ गर्। मेरो बाणले छिन्नभिन्न भएको शरीरलाई त्यागेर स्वर्ग जालास् अथवा सक्छस् भने मलाई नै मार्।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**न वै शूरा विकत्थन्ते दर्शयन्त्येव पौरुषम् ।**

**न गृह्णीमो वचो राजन्नातुरस्य मुमूर्षतः ॥ २० ॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**शूराः** = वीरहरू
**न विकत्थन्ते** = आफ्नो प्रशंसा गर्दैनन्
**पौरुषं** = पुरुषार्थ
**दर्शयन्ति एव** = देखाउँदछन् मात्र (त्यसैले)
**राजन्** = हे राजा जरासन्ध
**आतुरस्य** = (ज्वाइँ कंसको मृत्युले) दुःखी भएको र
**मुमूर्षतः** = मर्नै लागेको तिम्रो
**वचः** = कुरालाई
**न गृह्णीमः** = हामी लिँदैनौँ (सुन्दैनौँ)

**वाक्यार्थ–** हे राजा जरासन्ध ! वीरहरूले यसरी आफ्नो प्रशंसा गर्दैनन्, पुरुषार्थ देखाउँछन् मात्र। त्यसैले दुःखी भएको र मर्नै लागेको तिम्रो कुरा हामी सुन्दैनौँ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**जरासुतस्तावभिसृत्य माधवौ महाबलौघेन बलीयसावृणोत् ।**

**ससैन्ययानध्वजवाजिसारथी सूर्यानलौ वायुरिवाभ्ररेणुभिः ॥ २० ॥**

**पदार्थ–**
**जरासुतः** = (यति सुनेपछि) जरापुत्र जरासन्धले
**अभिसृत्य** = (श्रीकृष्ण र बलरामको) नजिक आएर
**बलीयसा** = अत्यन्त बलशाली
**महाबलौघेन** = ठुलो सैन्य समूहले
**ससैन्ययानध्वजवाजिसारथी** = सेना, रथ, ध्वजा, घोडा र सारथिले सहित
**तौ** = ती दुई
**माधवौ** = श्रीकृष्ण र बलरामलाई
**वायुः** = हावाले
**अभ्ररेणुभिः** = बादल र धुवाँद्वारा
**सूर्यानलौ इव** = सूर्य र आगोलाई ढाके झैँ
**आवृणोत्** = ढाक्यो

**वाक्यार्थ–** जरासन्धले श्रीकृष्ण र बलरामको नजिकै आएर हावाले बादलद्वारा सूर्यलाई र धुवाँद्वारा आगोलाई ढाके झैँ विशाल बलशाली सैन्य समूहद्वारा सेना, रथ, ध्वजा, घोडा र सारथि सहित श्रीकृष्ण र बलरामलाई नदेखिने गरी ढाक्यो।

**सुपर्णतालध्वजचिह्नितौ रथावलक्षयन्त्यो हरिरामयोर्मृधे ।**

**स्त्रियः पुराट्टालकहर्म्यगोपुरं समाश्रिताः सम्मुमुहुः शुचार्दिताः ॥ २२ ॥**

**पदार्थ–**
**मृधे** = युद्धमा
**सुपर्णतालध्वजचिह्नितौ** = गरुडचिह्न र तालचिह्नले अङ्कित ध्वजा भएको
**हरिरामयोः** = श्रीकृष्ण र बलरामको
**रथौ** = रथलाई
**अलक्षयन्त्यः** = नदेखेर

**पुराट्टालकहर्म्यगोपुरं** = नगरका ठुला दुर्ग, दरबार र द्वारमा
**समाश्रिताः** = (युद्ध हेर्न) बसेका
**स्त्रियः** = स्त्रीहरू
**शुचार्दिताः** = शोकले व्याकुल हुँदै
**सम्मुमुहुः** = बेहोस भए

**वाक्यार्थ–** युद्धभूमिमा श्रीकृष्ण र बलरामको गरुडचिह्न र तालचिह्नले अङ्कित ध्वजा भएको रथ नदेखेपछि नगरका ठुलठुला दुर्ग, दरबार र नगरका द्वारमा चढेर युद्ध हेरिरहेका स्त्रीहरू शोकले व्याकुल हुँदै बेहोस भए।

**हरिः परानीकपयोमुचां मुहुः शिलीमुखात्युल्बणवर्षपीडितम्।**
**स्वसैन्यमालोक्य सुरासुरार्चितं व्यस्फूर्जयच्छार्ङ्गशरासनोत्तमम्॥ २३॥**

पदार्थ–
**हरिः** = भगवान् श्रीकृष्णले
**मुहुः** = बारम्बार
**परानीकपयोमुचां** = शत्रुका वीर सेनारूपी बादलहरूको
**शिलीमुखात्युल्बणवर्षपीडितम्** = बाणका असह्य वर्षारूपी वृष्टिद्वारा पीडित भएका
**स्वसैन्यं** = आफ्ना सेनालाई
**आलोक्य** = देखेर
**सुरासुरार्चितं** = देवता र दानवहरूद्वारा पूजा गरिएको
**शार्ङ्गशरासनोत्तमं** = शार्ङ्ग नाम गरेको उत्तम धनुषलाई
**व्यस्फूर्जयत्** = टङ्कार गर्नुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले शत्रुसेनाका वीरहरूले आफ्नो सेनामाथि बादलले पानी वर्षाए झैँ बाणको वर्षा गरेर बारम्बार पीडा पुऱ्याएको देखी देवता र दानवद्वारा पूजा गरिएको शार्ङ्ग नाम गरेको धनुषको टङ्कार गर्नुभयो।

**गृह्णन् निषङ्गादथ सन्दधच्छरान् विकृष्य मुञ्चञ्छितबाणपूगान्।**
**निघ्नन् रथान् कुञ्जरवाजिपत्तीन् निरन्तरं यद्वदलातचक्रम्॥ २४॥**

पदार्थ–
**अथ** = त्यसपछि
**निषङ्गात्** = ठोक्राबाट
**शरान्** = बाणहरू
**गृह्णन्** = झिक्दै
**सन्दधत्** = धनुमा चढाउँदै
**शितबाणपूगान्** = तिखा बाणका समूहहरूलाई
**विकृष्य** = तानेर
**मुञ्चन्** = छाड्दै
**रथान्** = रथहरूलाई र
**कुञ्जरवाजिपत्तीन्** = हात्ती, घोडा र पैदल सेनाहरूलाई
**निरन्तरं** = बारम्बार
**निघ्नन्** = ध्वस्त पारिरहेको (त्यो धनु)
**यद्वत्** = जसरी
**अलातचक्रं** = अगुल्टोको चक्र (अगुल्टो घुम्दाको चक्र जस्तै देखियो)

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले ठोक्राबाट बाण झिक्दै धनुमा चढाउँदै र तिखा-तिखा बाणका समूहहरूलाई तानेर छाड्दै रथ, घोडा, हात्ती र पैदल सेनाहरूलाई पनि ध्वस्त पार्नुभयो। त्यस बखतमा उहाँको धनु अगुल्टो घुमेको चक्र जस्तै देखियो।

**निर्भिन्नकुम्भाः करिणो निपेतुरनेकशोऽश्वाः शरवृक्णकन्धराः।**
**रथा हताश्वध्वजसूतनायकाः पदातयश्छिन्नभुजोरुकन्धराः॥ २५॥**

**पदार्थ–**
**निर्भिन्नकुम्भाः** = गण्डस्थल फुटेका
**करिणः** = हात्तीहरू
**शरवृक्णकन्धराः** = बाणले घाँटी काटिएका
**अनेकशः** = अनेकौं
**अश्वाः** = घोडाहरू
**हताश्वध्वजसूतनायकाः** = घोडा, ध्वजा, सारथि र रथी नष्ट भइसकेका
**रथाः** = रथहरू र
**छिन्नभुजोरुकन्धराः** = हात, जाँघ र घाँटी काटिएका
**पदातयः** = पैदल सेनाहरू पनि युद्धभूमिमा
**निपेतुः** = ढले

**वाक्यार्थ–** भगवान्‌को बाणको वर्षाले गण्डस्थल फुटेका हात्तीहरू, बाणले घाँटी काटिएका अनेकौं घोडाहरू, ध्वजा, सारथि र रथी नष्ट भइसकेका रथहरू अनि हात, जाँघ र घाँटी छिनेका पैदल सेनाहरू पनि युद्धभूमिमा यत–तत्र ढले।

**सञ्छिद्यमानद्विपदेभवाजिनामङ्गप्रसूताः शतशोऽसृगापगाः।**
**भुजाहयः पूरुषशीर्षकच्छपा हतद्विपद्वीपहयग्रहाकुलाः॥ २६॥**
**करोरुमीना नरकेशशैवला धनुस्तरङ्गायुधगुल्मसङ्कुलाः।**
**अच्छूरिकावर्तभयानका महामणिप्रवेकाभरणाश्मशर्कराः॥ २७॥**
**प्रवर्तिता भीरुभयावहा मृधे मनस्विनां हर्षकरीः परस्परम्।**
**विनिघ्नतारीन् मुसलेन दुर्मदान् सङ्कर्षणेनापरिमेयतेजसा॥ २८॥**

**पदार्थ–**
**अपरिमेयतेजसा** = अपरिमित शक्ति भएका
**सङ्कर्षणेन** = बलरामद्वारा
**मुसलेन** = मुसल प्रहारले
**दुर्मदान्** = मदमत्त भएका
**अरीन्** = शत्रुहरूलाई
**विनिघ्नता** = ध्वस्त पार्दा
**सञ्छिद्यमानद्विपदेभवाजिनाम्** = काटिएका पैदल सेना, हात्ती र घोडाहरूका
**अङ्गप्रसूताः** = अङ्गबाट निस्किएका
**शतशः** = सयौं
**भुजाहयः** = मानिसका काटिएका हातहरू नै सर्प जस्ता देखिने
**पूरुषशीर्षकच्छपाः** = मानिसका काटिएका शिरहरू कछुवा जस्ता देखिने
**हतद्विपद्वीपहयग्रहाकुलाः** = मरेका हात्तीहरू टापु जस्ता र घोडाहरू गोही जस्ता बनेर भयावह देखिने
**करोरुमीनाः** = हात र काटिएका जाँघ माछा जस्ता देखिने
**नरकेशशैवलाः** = लडाकुका काटिएका कपालहरू लेउ जस्ता देखिने
**धनुस्तरङ्गायुधगुल्मसङ्कुलाः** = धनुहरू तरङ्ग जस्ता तथा अन्य शस्त्र–अस्त्र बगाएका लहरा जस्ता देखिने

**अच्छूरिकावर्तभयानकाः** = चक्र, ढाल आदि भुमरी जस्ता देखिने
**महामणिप्रवेकाभरणाश्मशर्कराः** = लडाकुहरूले लगाएका महामणिका आभूषणहरू ठुल-ठुला र स-साना ढुङ्गा जस्ता देखिने
**मृधे** = त्यो युद्धमा
**भीरुभयावहाः** = कायरको लागि डर लाग्दो
**मनस्विनां** = वीरहरूका लागि
**परस्परं** = आपसमा
**हर्षकरीः** = उत्साह बढाउने
**असृगापगाः** = रगतका नदीहरू
**प्रवर्तिताः** = बगाइए

**वाक्यार्थ–** युद्धमा अपरिमित शक्तिशाली बलरामले आफ्नो मुसलद्वारा उन्मत्त शत्रुहरूलाई ध्वस्त पार्दा काटिएका पैदल सेना, हात्ती र घोडाहरूका अङ्गबाट रगतका प्रवाह निस्किए र ती प्रवाहहरू सयौँ रक्तनदीको रूपमा परिणत भए। ती रक्तनदीहरूमा काटिएका हातहरू सर्पजस्ता देखिए, काटिएका मानिसका टाउका नदीमा कछुवा जस्ता देखिए, मरेका ठुला ठुला हात्तीहरू नदीका टापु जस्ता र घोडाहरू गोही जस्ता देखिए, काटिएका हात र जाँघहरू नदीमा माछा जस्ता देखिए र काटिएका कपालहरू नदीका लेउ जस्ता देखिए। त्यहाँ बगेका धनुहरू नदीका तरङ्ग जस्ता देखिए, अन्य शस्त्रास्त्रहरू नदीमा बगेका लहरा जस्ता देखिए। चक्र र ढालहरू नदीका भुमरी तथा महामणिका आभूषणहरू त्यहाँ ठुल-ठुला र स-साना ढुङ्गा जस्ता देखिए। जुन रक्तनदीलाई देखेर कायरहरू भयले काँप्थे र वीरहरू आपसमा अरु उत्साहित हुन्थे त्यस्ता रक्तनदीहरू बलरामको मुसलप्रहारद्वारा बगे।

**बलं तदङ्गार्णवदुर्गभैरवं दुरन्तपारं मगधेन्द्रपालितम्।**
**क्षयं प्रणीतं वसुदेवपुत्रयोर्विक्रीडितं तज्जगदीशयोः परम्॥ २९॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**मगधेन्द्रपालितं** = जरासन्धद्वारा पालना गरिएको
**अर्णवदुर्गभैरवं** = सागर समान दुर्गम र भयावह अनि
**दुरन्तपारं** = जितेर पार लगाउन नसकिने
**तत् बलं** = त्यो सेना
**क्षयं प्रणीतं** = (भगवान्‌द्वारा) विनाश गरियो
**परं** = तर
**जगदीशयोः** = जगत्‌का मालिक
**वसुदेवपुत्रयोः** = वसुदेवका पुत्र श्रीकृष्ण र बलरामका लागि
**तत्** = त्यो युद्ध
**विक्रीडितम्** = खेल मात्र थियो

**वाक्यार्थ–** हे प्रिय परीक्षित्! जरासन्धले पालेको त्यो विशाल सेना सागर समान दुर्गम, भयावह र जितेर पार लगाउन नसकिने थियो। तैपनि त्यो अपार सेनालाई भगवान्‌ले विनाश गर्नुभयो। जगन्नियन्ता वसुदेवका पुत्र श्रीकृष्ण र बलरामका लागि त्यो युद्ध एउटा खेल मात्र थियो।

**स्थित्युद्भवान्तं भुवनत्रयस्य यः समीहतेऽनन्तगुणः स्वलीलया।**
**न तस्य चित्रं परपक्षनिग्रहस्तथापि मर्त्यानुविधस्य वर्ण्यते॥ ३०॥**

**पदार्थ–**
**अनन्तगुणः** = अनन्त गुणवाला
**यः** = जुन भगवान्‌ले
**स्वलीलया** = आफ्नो क्रीडाद्वारा
**भुवनत्रयस्य** = तीनै भुवनको
**स्थित्युद्भवान्तं** = पालन,

उत्पत्ति र विनाश
**समीहते** = गर्न सक्नुहुन्छ भने
**तस्य** = त्यस्ता (परमशक्ति सम्पन्न प्रभुको विषयमा)
**परपक्षनिग्रहः** = शत्रुसेनालाई ध्वस्त पार्नुभयो भन्ने कुरा
**चित्रं न** = कुनै आश्चर्यको विषय होइन
**तथा अपि** = तैपनि
**मर्त्यानुविधस्य** = मनुष्य झैं व्यवहार गर्ने भगवान्‌को (क्रियाकलाप)
**वर्ण्यते** = वर्णन गरिन्छ

**वाक्यार्थ–** अनन्त गुणशाली भगवान्‌ले खेल खेलमा नै त्रिभुवनको उत्पत्ति, स्थिति र विनाश गर्न सक्नुहुन्छ भने त्यस्ता परमशक्तिसम्पन्न प्रभुको विषयमा उहाँले शत्रुसेनालाई ध्वस्त पार्नुभयो भनेर आश्चर्य मान्नुपर्ने कुरा केही छैन। तैपनि भगवान्‌ले मानवरूपमा रहेर मानवकै अनुकरण गर्दै आउनुभएकाले उहाँको त्यो क्रियाकलापको वर्णन गरिन्छ।

**जग्राह विरथं रामो जरासन्धं महाबलम्।**
**हतानीकावशिष्टासुं सिंहः सिंहमिवौजसा॥ ३१॥**

**पदार्थ–**
**रामः** = बलरामले
**हतानीकावशिष्टासुं** = सारा सेना मरेर आफ्नो प्राण मात्र बाँकी रहेको
**विरथं** = रथ पनि नभएको
**महाबलं** = महाबली
**जरासन्धं** = जरासन्धलाई
**ओजसा** = बलपूर्वक
**सिंहः** = एउटा सिंहले
**सिंहम् इव** = अर्को सिंहलाई झैं
**जग्राह** = समात्नुभयो

**वाक्यार्थ–** सारा सेना मरेर आफ्नो प्राण मात्र बाँकी रहेको अनि रथ पनि नभएको महाबली जरासन्धलाई बलरामले एउटा सिंहले बलपूर्वक अर्को सिंहलाई समाते झैं ड्याप्प समात्नुभयो।

**बध्यमानं हतारातिं पाशैर्वारुणमानुषैः।**
**वारयामास गोविन्दस्तेन कार्यचिकीर्षया॥ ३२॥**

**पदार्थ–**
**वारुणमानुषैः** = वरुणपाश र मनुष्य पाश आदि
**पाशैः** = पाशहरूद्वारा
**बध्यमानं** = बाँधिन लागेको
**हतारातिं** = शत्रुहरूलाई मार्ने जरासन्धलाई
**गोविन्दः** = भगवान् श्रीकृष्णले
**तेन** = त्यो जरासन्धबाट
**कार्यचिकीर्षया** = काम लिने इच्छाले
**वारयामास** = (बाँध्नबाट) रोक्नुभयो

**वाक्यार्थ–** जरासन्धलाई बलरामले वरुणपाश र मनुष्यलाई बाँध्ने पाशहरूद्वारा बाध्न लाग्नुभयो, शत्रुसंहारक त्यो जरासन्धबाट अझै काम लिने इच्छाले (यसले फेरि अरू बाँकी रहेका दुष्ट राजाहरूलाई पनि लिएर युद्ध गर्न लिएर आउँछ, जसले गर्दा हामीलाई पृथिवीको भार हरण गर्न सजिलो पर्छ भनेर) बाँध्नबाट रोक्नुभयो।

स मुक्तो लोकनाथाभ्यां व्रीडितो वीरसम्मतः।
तपसे कृतसङ्कल्पो वारितः पथि राजभिः॥ ३३॥
वाक्यैः पवित्रार्थपदैर्नयनैः प्राकृतैरपि।
स्वकर्मबन्धप्राप्तोऽयं यदुभिस्ते पराभवः॥ ३४॥

पदार्थ–
**वीरसम्मतः** = शूरवीरहरूद्वारा सम्मानित
**लोकनाथाभ्यां** = संसारका रक्षक श्रीकृष्ण र बलरामबाट (हारेर)
**मुक्तः** = छुटेको (यो कुराले)
**व्रीडितः** = लज्जित बनेको (त्यसैले)
**तपसे** = तपस्याका लागि
**कृतसङ्कल्पः** = सङ्कल्प गरेको
**सः** = त्यो जरासन्ध
**राजभिः** = (अन्य शिशुपाल आदि) राजाहरूद्वारा
**पवित्रार्थपदैः** = राम्रा-राम्रा भनाइहरूद्वारा
**नयनैः** = नीतिका कुराहरू र
**प्राकृतैः अपि** = लौकिक कुराहरू पनि गरेर
**यदुभिः** = यदुवंशीहरूसँग
**ते** = तपाईंको
**अयं पराभवः** = यो पराजय
**स्वकर्मबन्धप्राप्तः** = आफ्नो प्रारब्धको कारणले गर्दा भएको हो, नत्र सम्भव थिएन, इत्यादि
**वाक्यैः** = कुराहरूद्वारा
**पथि** = बाटैमा
**वारितः** = रोकियो

**वाक्यार्थ–** शूरवीरहरूद्वारा सम्मानित जरासन्धलाई श्रीकृष्ण र बलरामको हातबाट बँचेर मुक्त हुनुपर्दा लाज भयो र अब तपस्या गर्नुपर्‍यो भनेर ऊ सङ्कल्प गरेर हिँड्यो। तर अन्य (शिशुपाल आदि) राजाहरूले "तपाईंको यदुवंशीबाट पराजय प्रारब्धवश भएको हो नत्र सम्भव थिएन" भन्दै नीतिका कुरा, लौकिक कुरा तथा अन्य राम्रा-राम्रा भनाइहरूद्वारा जरासन्धलाई सम्झाए र उनीहरूले जरासन्धलाई बाटैमा रोके।

हतेषु सर्वानीकेषु नृपो बार्हद्रथस्तदा।
उपेक्षितो भगवता मगधान् दुर्मना ययौ॥ ३५॥

पदार्थ–
**नृपः** = हे राजा परीक्षित्
**सर्वानीकेषु** = सारा सेनाहरू
**हतेषु** = मरिसकेपछि
**भगवता** = भगवान्‌बाट
**उपेक्षितः** = उपेक्षित भएको
**बार्हद्रथः** = बृहद्रथको छोरो जरासन्ध
**तदा** = त्यस बखतमा
**दुर्मनाः** = खिन्न मन हुँदै
**मगधान्** = मगध देशतिर
**ययौ** = गयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! सारा सेनाहरू मरिसकेपछि भगवान्‌द्वारा उपेक्षित मगधराज जरासन्ध अति खिन्न हुँदै मगध देशतिर गयो।

मुकुन्दोऽप्यक्षतबलो निस्तीर्णारिबलार्णवः।
विकीर्यमाणः कुसुमैस्त्रिदशैरनुमोदितः॥ ३६॥

पदार्थ–
**अक्षतबलः** = सारा सेनाहरू कुशल भएका
**निस्तीर्णारिबलार्णवः** = शत्रुसेनारूप सागरलाई सजिलै तरेका
**मुकुन्दः अपि** = भगवान् श्रीकृष्ण पनि
**त्रिदशैः** = देवताहरूद्वारा
**कुसुमैः** = फूलहरू
**विकीर्यमाणः** = बर्साएर सम्मान गरिँदै र
**अनुमोदितः** = प्रशंसित हुँदै (हिँड्नुभयो)

**वाक्यार्थ–** कुशल सैन्य शक्तिलाई साथै लिई शत्रुसेनारूप सागरलाई सजिलै तरी भगवान् श्रीकृष्ण देवताहरूको पुष्पवृष्टिबाट सम्मानित र प्रशंसित हुँदै आफ्नो नगरतिर हिँड्नुभयो।

**माथुरैरुपसङ्गम्य विज्वरैर्मुदितात्मभिः।**
**उपगीयमानविजयः सूतमागधवन्दिभिः॥ ३७॥**

पदार्थ–
**विज्वरैः** = चिन्तारहित
**मुदितात्मभिः** = अति प्रसन्न भएका
**माथुरैः** = मथुरावासीहरूसँग
**उपसङ्गम्य** = भेटघाट गरेर
**सूतमागधवन्दिभिः** = सूत, मागध र वन्दना गर्ने व्यक्तिहरूद्वारा
**उपगीयमानविजयः** = विजयोत्सव गाइएका भगवान् (आफ्नो पुरतिर लाग्नुभयो)

**वाक्यार्थ–** भगवान्को विजयपछि अति हर्षित र चिन्तारहित भएका मथुरावासीहरूसँग भेटघाट गरेर भगवान् आफ्नै पुरतिर लाग्नुभयो, त्यस वेला सूत, मागध र वन्दीजनहरू भगवान्को विजयोत्सवको कीर्ति गाइरहेका थिए।

**शङ्खदुन्दुभयो नेदुर्भेरीतूर्याण्यनेकशः।**
**वीणावेणुमृदङ्गानि पुरं प्रविशति प्रभौ॥ ३८॥**

पदार्थ–
**प्रभौ** = भगवान् श्रीकृष्ण
**पुरं** = मथुरा नगरमा
**प्रविशति** = प्रवेश गर्ने वेलामा
**वीणावेणुमृदङ्गानि** = वीणा, बाँसुरी, मादल आदि र
**अनेकशः** = धेरै
**भेरीतूर्याणि** = नगाडा, तुरही आदि बाजाहरू तथा
**शङ्खदुन्दुभयः** = शङ्ख, ढोल लगायतका बाजाहरू
**नेदुः** = बजे

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण नगरमा प्रवेश गर्न लाग्दा वीणा, बाँसुरी, मादल, नगाडा, तुरही, शङ्ख, ढोल आदि बाजाहरू बज्न थाले।

**सिक्तमार्गां हृष्टजनां पताकाभिरलङ्कृताम्।**
**निर्घुष्टां ब्रह्मघोषेण कौतुकाबद्धतोरणाम्॥ ३९॥**
**निचीयमानो नारीभिर्माल्यदध्यक्षताङ्कुरैः।**

**निरीक्ष्यमाणः सस्नेहं प्रीत्युत्कलितलोचनैः ॥ ४० ॥**

**पदार्थ–**
**सिक्तमार्गां** = (बास्नादार पदार्थले) बाटो सेचन गरिएको
**हृष्टजनां** = खुसी भएका मानिसहरूले युक्त
**पताकाभिः** = ध्वजा–पताकाहरूद्वारा
**अलङ्कृतां** = सिँगारिएको
**ब्रह्मघोषेण** = वेदको ध्वनिले
**निर्घुष्टां** = गुन्जिएको
**कौतुकाबद्धतोरणां** = उत्सवले गर्दा चारैतिर तोरणहरू टाँगिएको (मथुरापुरीमा)
**नारीभिः** = नारीहरूद्वारा
**माल्यदध्यक्षताङ्कुरैः** = माला, दही, अक्षता, जमरा आदिद्वारा
**निचीयमानः** = वर्षा गरेर स्वागत गरिएका र
**प्रीत्युत्कलितलोचनैः** = प्रेमले भरिएका आँखाले
**सस्नेहं** = स्नेहपूर्वक
**निरीक्ष्यमाणः** = हेरिएका भगवान् श्रीकृष्ण (मथुरामा प्रवेश गर्नुभयो)

**वाक्यार्थ–** त्यस बखत मथुराका बाटाहरू सुगन्धित वस्तुले सेचन गरिएका थिए, पुरवासीहरू ज्यादै खुसी भएका थिए, ध्वजापताकाहरूले सिँगारिएको र वेदध्वनि गुन्जिरहेको मथुरा नगरमा नारीहरूले माला, दही, अक्षता, जमरा आदि बर्साएर भगवान्को स्वागत गरिरहेका थिए। यसप्रकार प्रेमले भरिएका आँखाले हेरिनुभएका भगवान् श्रीकृष्ण मथुरामा प्रवेश गर्नुभयो।

**आयोधनगतं वित्तमनन्तं वीरभूषणम्।**
**यदुराजाय तत् सर्वमाहृतं प्रादिशत् प्रभुः ॥ ४१ ॥**

**पदार्थ–**
**आयोधनगतं** = युद्धक्षेत्रमा खसेको
**अनन्तं** = अनन्त
**वित्तं** = धनसम्पत्ति र
**वीरभूषणं** = वीरहरूका गहनाहरू पनि
**आहृतं** = (जो) ल्याइएको थियो
**तत् सर्वम्** = त्यो सबै
**प्रभुः** = प्रभु श्रीकृष्णले
**यदुराजाय** = यदुवंशीका राजा उग्रसेनलाई
**प्रादिशत्** = दिनुभयो

**वाक्यार्थ–** युद्धक्षेत्रमा खसेका धेरै सम्पत्ति र वीरहरूका गहनाहरू जुन साथमा नै ल्याइएका थिए ती सबै भगवान् श्रीकृष्णले यदुवंशी राजा उग्रसेनलाई दिनुभयो।

**एवं सप्तदशकृत्वस्तावत्यक्षौहिणीबलः।**
**युयुधे मागधो राजा यदुभिः कृष्णपालितैः ॥ ४२ ॥**

**पदार्थ–**
**एवं** = यसै गरी
**सप्तदशकृत्वः** = सत्र पटकसम्म
**तावत्यक्षौहिणीबलः** = त्यति (तेईस–तेईस) नै अक्षौहिणी सेना लिई
**मागधः** = मगधवंशी
**राजा** = राजा जरासन्धले
**कृष्णपालितैः** = श्रीकृष्णद्वारा सुरक्षित
**यदुभिः** = यादवहरूसँग
**युयुधे** = युद्ध गऱ्यो

**वाक्यार्थ–** यसै गरी सत्रपटकसम्म तेईस–तेईस अक्षौहिणी सेना लिई राजा जरासन्धले

श्रीकृष्णद्वारा सुरक्षित यादवहरूसँग युद्ध गऱ्यो।

**अक्षिण्वंस्तद्बलं सर्वं वृष्णयः कृष्णतेजसा।**
**हतेषु स्वेष्वनीकेषु त्यक्तोऽयादरिभिर्नृपः॥ ४३॥**

**पदार्थ–**
**कृष्णतेजसा** = भगवान् श्रीकृष्णको शक्तिले **वृष्णयः** = यादवहरूले **सर्वं** = सबै **तद्बलं** = त्यो जरासन्धका सेनालाई **अक्षिण्वन्** = नाश गरे **स्वेषु** = ती आफ्ना **अनीकेषु** = सारा सेनाहरू **हतेषु** = मरेपछि **अरिभिः** = शत्रु श्रीकृष्ण र बलराम आदिद्वारा **त्यक्तः** = छाडिएको **नृपः** = राजा जरासन्ध **अयात्** = (आफ्नै राजधानीमा) गयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको शक्तिले यादवहरूले जरासन्धका सेनालाई नष्ट पारे। यसरी सारा सेना मरिसकेपछि श्रीकृष्ण, बलराम आदिद्वारा उपेक्षापूर्वक छाडिएको त्यो जरासन्ध आफ्नै राजधानीतिर फर्कियो।

**अष्टादशम सङ्ग्राम आगामिनि तदन्तरा।**
**नारदप्रेषितो वीरो यवनः प्रत्यदृश्यत॥ ४४॥**

**पदार्थ–**
**आगामिनि** = आउन लागेको **अष्टादशमसङ्ग्रामे** = अठारौँ पटकको युद्धमा **तदन्तरा** = त्योभन्दा पहिले नै **नारदप्रेषितः** = नारदद्वारा पठाइएको **वीरः** = महावीर **यवनः** = कालयवन **प्रत्यदृश्यत** = (मथुरामा) देखियो

**वाक्यार्थ–** जरासन्धसँग अठारौँ चोटिको युद्ध नजिकिँदै गर्दा त्यसभन्दा पहिले नै नारदद्वारा पठाइएको महावीर कालयवन सेना सहित मथुरामा देखियो।

**रुरोध मथुरामेत्य तिसृभिर्म्लेच्छकोटिभिः।**
**नृलोके चाप्रतिद्वन्द्वो वृष्णीञ्छ्रुत्वात्मसम्मितान्॥ ४५॥**

**पदार्थ–**
**नृलोके** = पृथिवीभरिमा **अप्रतिद्वन्द्वः** = आफूसमानको प्रतिद्वन्द्वी नभएको कालयवनले (नारदको मुखबाट) **वृष्णीन् च** = यादवहरू **आत्मसम्मितान्** = आफू बराबरको छन् भन्ने कुरा **श्रुत्वा** = सुनेर **तिसृभिः म्लेच्छकोटिभिः** = तीन करोड म्लेच्छ सेनाहरूको साथमा **एत्य** = आएर **मथुरां** = मथुरालाई **रुरोध** = घेऱ्यो

**वाक्यार्थ–** पृथिवीभरिमा आफ्नो प्रतिद्वन्द्वी नभएको महाबलशाली कालयवनले नारदको मुखबाट

यादवहरू आफू समानका बलशाली छन् भन्ने कुरा सुनेर तीन करोड म्लेच्छ सेना लिई मथुरामा आयो र मथुरालाई घेर्‍यो।

**तं दृष्ट्वाचिन्तयत् कृष्णः सङ्कर्षणसहायवान्।**
**अहो यदूनां वृजिनं प्राप्तं ह्युभयतो महत्॥ ४६॥**

**पदार्थ–**
**तं** = त्यो कालयवनलाई
**दृष्ट्वा** = देखेर
**सङ्कर्षणसहायवान्** = बलरामका साथमा रहनुभएका
**कृष्णः** = भगवान् श्रीकृष्णले
**अचिन्तयत्** = विचार गर्नुभयो
**अहो** = अहो !
**हि** = निश्चय नै
**उभयतः** = जरासन्ध र कालयवन दुबै तर्फबाट
**यदूनां** = यदुवंशीहरूलाई
**महत्** = ठुलो
**वृजिनं** = सङ्कट
**प्राप्तम्** = आयो

**वाक्यार्थ–** त्यो कालयवनलाई देखेर भगवान् श्रीकृष्णले विचार गर्न लाग्नुभयो, अहो ! दुःखको कुरो, एकातर्फ जरासन्ध र अर्कोतर्फ कालयवन दुबै तिरबाट यदुवंशीहरूलाई ठुलो सङ्कट आयो।

**यवनोऽयं निरुन्धेऽस्मानद्य तावन्महाबलः।**
**मागधोऽप्यद्य वा श्वो वा परश्वो वागमिष्यति॥ ४७॥**

**पदार्थ–**
**अयं** = यो
**महाबलः** = महाबलशाली
**यवनः** = कालयवनले
**अद्य तावत्** = आजसम्म
**अस्मान्** = हामीहरूलाई
**निरुन्धे** = घेरिरहेको छ र
**मागधः अपि** = मगधराज जरासन्ध पनि
**अद्य वा** = आज
**श्वः वा** = भोलि वा
**परश्वः वा** = अथवा पर्सि (छिटै नै)
**आगमिष्यति** = (युद्धको लागि) आउनेछ

**वाक्यार्थ–** यो महाबलशाली कालयवनले आज हामीहरूलाई घेरिरहेको छ र आज, भोलि वा पर्सि नै त्यो जरासन्ध पनि युद्धका लागि आउनेछ।

**आवयोः युध्यतोरस्य यद्यागन्ता जरासुतः।**
**बन्धून् हनिष्यत्यथवा नेष्यते स्वपुरं बली॥ ४८॥**

**पदार्थ–**
**आवयोः** = हामी दुई
**अस्य** = यो कालयवनसँग
**युध्यतोः** = युद्ध गरिरहँदा
**यदि** = यदि
**बली** = बलशाली
**जरासुतः** = जरासन्ध
**आगन्ता** = आयो भने
**बन्धून्** = हाम्रा बन्धुबान्धवरूलाई
**हनिष्यति** = मार्नेछ
**अथवा** = वा (बन्दी बनाएर)
**स्वपुरं** = आफ्नो राजधानीतर्फ
**नेष्यते** = लैजानेछ

**वाक्यार्थ–** हामी दुई कालयवनसँग लडाइँ गर्न लागेको वेलामा यदि बलशाली जरासन्ध आयो

भने हाम्रा बन्धुबान्धवहरूलाई त्यसले मार्नेछ अथवा बन्दी बनाएर राजधानीतिर लैजानेछ।

**तस्मादद्य विधास्यामो दुर्गं द्विपददुर्गमम्।**
**तत्र ज्ञातीन् समाधाय यवनं घातयामहे॥ ४९॥**

**पदार्थ–**
**तस्मात्** = त्यसैले
**अद्य** = आज नै
**द्विपददुर्गमं** = दुई खुट्टे (मनुष्य) हरूको लागि जान दुर्गम
**दुर्गं** = किल्ला
**विधास्यामः** = निर्माण गरौँ र
**तत्र** = त्यहाँ
**ज्ञातीन्** = बन्धुबान्धवहरूलाई
**समाधाय** = राखेर
**यवनं** = यी यवनहरूलाई
**घातयामहे** = मारौँ

**वाक्यार्थ–** त्यसैले हे दाजु ! आज नै मनुष्यहरूलाई जान कठिन हुने किल्ला बनाऔँ र त्यहाँ बन्धुबान्धवहरूलाई राखी यी यवन सेनाहरूलाई मारौँ।

**इति सम्मन्त्र्य भगवान् दुर्गं द्वादशयोजनम्।**
**अन्तःसमुद्रे नगरं कृत्स्नाद्भुतमचीकरत्॥ ५०॥**

**पदार्थ–**
**इति** = यसरी
**सम्मन्त्र्य** = सल्लाह गरेर
**भगवान्** = भगवान् श्रीकृष्णले
**अन्तःसमुद्रे** = समुद्रभित्र
**द्वादशयोजनं** = बाह्र योजन फैलिएको
**कृत्स्नाद्भुतं** = सारा कुरा विचित्र भएका
**नगरं** = नगरको रूपमा
**दुर्गं** = किल्ला
**अचीकरत्** = बनाउनुभयो

**वाक्यार्थ–** यसरी सल्लाह गरेर भगवान् श्रीकृष्णले समुद्रभित्र नै बाह्र योजन फैलिएको सारा कुरा अनौठा भएको नगरको रूपमा किल्लाको निर्माण गर्नुभयो।

**दृश्यते यत्र हि त्वाष्ट्रं विज्ञानं शिल्पनैपुणम्।**
**रथ्याचत्वरवीथीभिर्यथावास्तु विनिर्मितम्॥ ५१॥**

**पदार्थ–**
**यत्र** = जुन नगरमा
**हि** = निश्चय नै
**त्वाष्ट्रं** = विश्वकर्माको
**विज्ञानं** = वास्तुविज्ञान र
**शिल्पनैपुणं** = शिल्पकलाको निपुणता देखिन्थ्यो अनि
**रथ्याचत्वरवीथीभिः** = फराकिला राजमार्ग, चौरस्ता (चोक) र गल्लीहरूद्वारा
**यथावास्तु** = वास्तुशास्त्र अनुसार
**विनिर्मितं** = बनाइएको
**दृश्यते** = देखिन्थ्यो

**वाक्यार्थ–** जुन नगरमा विश्वकर्माको वास्तुविज्ञान र शिल्पकारिताको निपुणता देख्न सकिन्थ्यो। जहाँको फराकिला राजमार्ग, चौरस्ता तथा गल्लीहरू वास्तुशास्त्र अनुसार बनाइएका थिए।

**सुरद्रुमलतोद्यानविचित्रोपवनान्वितम् ।**
**हेमशृङ्गैर्दिविस्पृग्भिः स्फटिकाट्टालगोपुरैः ॥ ५२ ॥**

**पदार्थ–**
**सुरद्रुमलतोद्यानविचित्रोपवनान्वितं** = (जुन नगर) विचित्र खालका दिव्य लता र वृक्षहरू भएको उद्यान र उपवनयुक्त
**दिविस्पृग्भिः** = आकाश छुने खालका अग्ला
**हेमशृङ्गैः** = स्वर्णपर्वतहरू रहेका
**स्फटिकाट्टालगोपुरैः** = स्फटिक मणिका छत तथा अग्ला-अग्ला ढोकाहरूले युक्त थियो

**वाक्यार्थ–** जुन नगर विचित्र खालका दिव्य लता र वृक्षयुक्त उद्यान तथा उपवनहरू, आकाश छुने खालका अग्ला स्वर्णपर्वत, स्फटिक मणिका छत र अग्ला-अग्ला ढोकाहरू भएको थियो।

**राजतारकुटैः कोष्ठैर्हेमकुम्भैरलङ्कृतैः ।**
**रत्नकूटैर्गृहैर्हैमैर्महामारकतस्थलैः ॥ ५३ ॥**

**पदार्थ–**
**राजतारकुटैः** = चाँदी, पित्तल आदि धातु र
**हेमकुम्भैः** = सुनका कलशले
**अलङ्कृतैः** = सजाइएका
**कोष्ठैः** = कोठाहरूले
**रत्नकूतैः** = मणिका पर्वतहरू
**हैमैः** = स्वर्णमय
**गृहैः** = घरहरू र
**महामारकतस्थलैः** = मरकत मणिले बनेका भूमिहरूले युक्त थियो

**वाक्यार्थ–** जुन नगरमा चाँदी, पित्तल आदि धातुबाट बनेका र सुनका कलश सजाइएका ठुलाठुला कोठाहरू थिए। त्यस नगरमा मणिका पर्वतहरू, सुनका घरहरू र मरकतमणिका भूमिहरू थिए।

**वास्तोष्पतीनां च गृहैर्वलभीभिश्च निर्मितम् ।**
**चातुर्वर्ण्यजनाकीर्णं यदुदेवगृहोल्लसत् ॥ ५४ ॥**

**पदार्थ–**
**वास्तोष्पतीनां** = वास्तुदेवताहरूका
**गृहैः** = मन्दिरहरू र
**वलभीभिः च** = बलाहरूद्वारा
**निर्मितं** = बनाइएका
**चातुर्वर्ण्यजनाकीर्णं** = चारै वर्णका व्यक्तिहरूद्वारा व्याप्त जुन नगर
**यदुदेवगृहोल्लसत्** = यदुश्रेष्ठ उग्रसेन, वसुदेव, बलराम, श्रीकृष्ण आदिका भव्य महलहरूले पनि सुन्दर बनेको थियो

**वाक्यार्थ–** जुन नगरमा वास्तुदेवताका सुन्दर मन्दिरहरू थिए, जहाँ चारै वर्णका व्यक्तिहरू बस्दथे, अनि जुन नगरमा यदुवंशका श्रेष्ठ पुरुषहरू उग्रसेन, वसुदेव, बलराम र श्रीकृष्ण आदिका सुन्दर बला राखेर बनाइएका महलहरू चम्किरहेका थिए।

**सुधर्मां पारिजातं च महेन्द्रः प्राहिणोद्धरेः ।**
**यत्र चावस्थितो मर्त्यो मर्त्यधर्मैर्न युज्यते ॥ ५५ ॥**

**पदार्थ–**
**महेन्द्रः** = देवराज इन्द्रले
**हरेः** = श्रीकृष्णका लागि
**सुधर्मां** = सुधर्मा सभा र
**पारिजातं च** = पारिजात पनि
**प्राहिणोत्** = दिए
**यत्र** = जहाँ
**अवस्थितः** = रहेको
**मर्त्यः** = मनुष्य
**मर्त्यधर्मैः च** = भोक, प्यास आदि मर्त्यधर्महरूद्वारा
**न युज्यते** = छोइँदैन

**वाक्यार्थ–** देवराज इन्द्रले भगवान् श्रीकृष्णलाई सुधर्मा सभा र पारिजात वृक्ष उपहार दिए। जुन सभामा बसेका मानिसलाई भोक, प्यास आदि मर्त्यधर्मले छुँदैनथे।

**श्यामैककर्णान् वरुणो हयाञ्छुक्लान् मनोजवान् ।**
**अष्टौ निधिपतिः कोशान् लोकपालो निजोदयान् ॥ ५६ ॥**

**पदार्थ–**
**वरुणः** = वरुणले
**श्यामैककर्णान्** = एउटा कान चाहिँ कालो भएका (अरू सबै अङ्ग सेतो भएका)
**मनोजवान्** = मनको जस्तो छिटो गति भएका
**शुक्लान्** = सेता
**हयान्** = घोडाहरू र
**निधिपतिः** = कुबेरले
**अष्टौ** = आठ
**कोशान्** = निधिहरू (दिए त्यस्तै)
**लोकपालः** = अन्य लोकपालहरूले
**निजोदयान्** = आ-आफ्ना ऐश्वर्यहरू (दिए)

**वाक्यार्थ–** भगवान् श्रीकृष्णलाई वरुणले एउटा कान चाहिँ कालो र अरू सबै अङ्ग सेता भएका र मनको जस्तो गति भएका घोडाहरू दिए। त्यसै गरी कुबेरले आफ्ना आठ निधिहरू दिए र अन्य लोकपालहरूले पनि भगवान्लाई आ-आफ्ना ऐश्वर्यहरू दिए।

**टिप्पणी–** पद्म, महापद्म, मत्स्य, कूर्म, औदक, नील, मुकुन्द र शङ्ख यी कुबेरका आठ निधिहरू हुन् भन्ने कुरा श्रीधरस्वामीविरचित भावार्थदीपिका टीकामा उल्लेख गरिएको छ।

**यद्यद् भगवता दत्तमाधिपत्यं स्वसिद्धये ।**
**सर्वं प्रत्यर्पयामासुर्हरौ भूमिगते नृप ॥ ५७ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**भगवता** = भगवान्द्वारा
**यत् यत्** = जो जो
**आधिपत्यं** = ऐश्वर्य आदि
**दत्तं** = (लोकपालहरूलाई) दिइएको थियो
**सर्वं** = त्यो सबै
**हरौ** = श्रीहरि
**भूमिगते** = पृथिवीमा अवतार लिएर आउनुभएपछि
**स्वसिद्धये** = आफ्नो अधिकारको सिद्धिका लागि
**प्रत्यर्पयामासुः** = समर्पण गरे

**वाक्यार्थ–** हे परीक्षित् ! पहिले भगवान्ले लोकपालहरूलाई जे-जे ऐश्वर्य दिनुभएको थियो, ती सबै भगवान् पृथिवीमा अवतार लिएर आउनुभएपछि पछि फेरि उक्त वस्तुमा आफ्नो अधिकार रहोस् भन्ने हेतुले उनीहरूले भगवान्लाई अर्पण गरिदिए।

**तत्र योगप्रभावेण नीत्वा सर्वजनं हरिः।**

**प्रजापालेन रामेण कृष्णः समनुमन्त्रितः॥**

**निर्जगाम पुरद्वारात् पद्ममाली निरायुधः॥ ५८॥**

**पदार्थ–**
**हरिः** = भगवान् श्रीकृष्णले
**तत्र** = त्यो द्वारका नगरमा
**योगप्रभावेण** = योगशक्तिको प्रभावले
**सर्वजनं** = सबै मानिस (मथुरावासी)हरूलाई
**नीत्वा** = लगेर
**प्रजापालेन** = केही जनताको रक्षाका लागि मथुरामा बसेका
**रामेण** = बलरामसँग
**समनुमन्त्रितः** = सल्लाह गरी
**पद्ममाली** = कमलको फूलको माला लगाई
**निरायुधः** = कुनै हतियार नलिई
**कृष्णः** = भगवान् श्रीकृष्ण
**पुरद्वारात्** = मथुरा नगरको मूल ढोकाबाट
**निर्जगाम** = बाहिर निस्कनुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले आफ्नो योगमायाको शक्तिद्वारा सबै मथुरावासीहरूलाई नवनिर्मित द्वारका नगरमा लैजानुभयो र केही जनताको सुरक्षाको लागि मथुरामा बस्नुभएका बलरामसँग सल्लाह गरी कमलको फूलको माला लगाएर कुनै हतियार नलिई भगवान् मथुरा नगरको मूल ढोकाबाट बाहिर निस्कनुभयो।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**दुर्गनिवेशनं नाम पञ्चाशत्तमोऽध्यायः॥ ५०॥**

# अथ एकपञ्चाशत्तमोऽध्यायः

## मुचुकुन्दद्वारा कालयवन भस्म हुनु

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तं विलोक्य विनिष्क्रान्तमुज्जिहानमिवोडुपम् ।**
**दर्शनीयतमं श्यामं पीतकौशेयवाससम् ॥ १ ॥**
**श्रीवत्सवक्षसं भ्राजत्कौस्तुभामुक्तकन्धरम् ।**
**पृथुदीर्घचतुर्बाहुं नवकञ्जारुणेक्षणम् ॥ २ ॥**
**नित्यप्रमुदितं श्रीमत्सुकपोलं शुचिस्मितम् ।**
**मुखारविन्दं बिभ्राणं स्फुरन्मकरकुण्डलम् ॥ ३ ॥**
**वासुदेवो ह्ययमिति पुमान् श्रीवत्सलाञ्छनः ।**
**चतुर्भुजोऽरविन्दाक्षो वनमाल्यतिसुन्दरः ॥ ४ ॥**
**लक्षणैर्नारदप्रोक्तैर्नान्यो भवितुमर्हति ।**
**निरायुधश्चलन् पद्भ्यां योत्स्येऽनेन निरायुधः ॥ ५ ॥**
**इति निश्चित्य यवनः प्राद्रवन्तं पराङ्मुखम् ।**
**अन्वधावज्जिघृक्षुस्तं दुरापमपि योगिनाम् ॥ ६ ॥**

**पदार्थ–**
**तं** = ती
**विनिष्क्रान्तं** = नगरको ढोकाबाट निस्किएका
**उज्जिहानं** = उदाउन लागेको
**उडुपम् इव** = चन्द्रमा जस्ता
**दर्शनीयतमं** = अत्यन्त सुन्दर
**श्यामं** = श्याम वर्णका
**पीतकौशेयवाससं** = पहेँलो रेसमी वस्त्र धारण गरेका
**श्रीवत्सवक्षसं** = छातीमा श्रीवत्सको चिह्न भएका
**भ्राजत्कौस्तुभामुक्तकन्धरं** = चम्किरहेको कौस्तुभ मणिले सुशोभित घाँटी भएका
**पृथुदीर्घचतुर्बाहुं** = मोटा र लामा चार हातले सुशोभित
**नवकञ्जारुणेक्षणं** = नयाँ कमलको फूल जस्तो कान्तिले युक्त आँखा भएका
**नित्यप्रमुदितं** = सधैँ प्रसन्न देखिने
**श्रीमत्सुकपोलं** = अत्यन्त सुन्दर गाला भएका
**शुचिस्मितं** = मुसुमुसु हाँसिरहेको
**स्फुरन्मकरकुण्डलं** = कानमा मकराकार कुण्डल झल्किरहेको

**मुखारविन्दं** = मुखकमललाई
**बिभ्राणं** = धारण गरेका भगवान्लाई
**विलोक्य** = देखेर
**अयं** = यो
**श्रीवत्सलाञ्छनः** = श्रीवत्स चिह्नले अङ्कित
**चतुर्भुजः** = चार हात भएको
**अरविन्दाक्षः** = कमलजस्तो आँखा भएको
**वनमाली** = वनमाला लगाएको
**अतिसुन्दरः** = अत्यन्त सुन्दर
**पुमान्** = पुरुष
**नारदप्रोक्तैः** = नारदले बताएको
**लक्षणैः** = लक्षणको आधारमा
**हि** = पक्का पनि
**वासुदेवः इति** = वासुदेव हो
**अन्यः** = त्यसदेखि अर्को
**भवितुं नार्हति** = हुन सक्दैन
**निरायुधः** = हातमा कुनै हतियार नलिईकन
**पद्भ्यां** = पैदल
**चलन्** = आइरहेको
**अनेन** = योसँग
**निरायुधः** = हतियाररहित भएर
**योत्स्ये** = युद्ध गर्नेछु
**इति** = यसरी
**निश्चित्य** = निश्चय गरेर
**यवनः** = कालयवनले
**प्राद्रवन्तं** = फरक्क फर्किएर कुदेका
**पराङ्मुखं** = युद्धबाट पराङ्मुख भएका
**योगिनाम् अपि** = योगीहरूको लागि पनि
**दुरापं** = प्राप्त गर्न नसकिने
**तं** = उहाँ (भगवान्)लाई
**जिघृक्षुः** = समात्ने इच्छाले
**अन्वधावत्** = पछि लाग्यो

**वाक्यार्थ–** त्यसरी नगरबाट निस्किएका, उदाउन लागेको चन्द्रमा जस्ता सुन्दर, श्यामवर्णका, पहेँलो रेसमी कपडा धारण गरेका, छातीमा श्रीवत्स चिह्न भएका, घाँटीमा चम्किएको कौस्तुभमणिले सुशोभित, मोटा-मोटा र लामा चार हात भएका, भर्खर फुलेको कमल जस्ता आँखा, सधैँ प्रसन्न देखिने मुहार र अत्यन्त सुन्दर गाला भएका, कानमा मकराकार कुण्डल झुलिरहेको र मुसुमुसु हाँसिरहेको मुखारविन्दले युक्त भएका भगवान् श्रीकृष्णलाई देख्नेबित्तिकै कालयवनले नारदले बताएका लक्षणहरू सम्झियो र श्रीवत्स अङ्कित चार हात भएको, वनमाला लगाएको, यो सुन्दर पुरुष पक्का पनि वासुदेव नै हो, यस्तो अरू कोही हुन सक्दैन भन्दै यो हतियार नलिई पैदल आइरहेको छ, त्यसैले म पनि विना हतियार योसँग युद्ध गर्छु भन्ने निश्चय गरी जब कालयवन भगवान्पट्टि लाग्यो तब भगवान् फरक्क पछाडि फर्किएर युद्धभूमिबाट भाग्नुभयो। योगीहरूद्वारा पनि प्राप्त गर्न नसकिने प्रभुलाई समात्ने इच्छाले त्यो कालयवन पछि-पछि लाग्यो।

**हस्तप्राप्तमिवात्मानं हरिणा स पदे पदे।**
**नीतो दर्शयता दूरं यवनेशोऽद्रिकन्दरम्॥ ७॥**

**पदार्थ–**
**पदे पदे** = पाइला पाइलामा
**आत्मानं** = आफूलाई
**हस्तप्राप्तम् इव** = हातैले भेटिए-भेटिए जस्तो
**दर्शयता** = देखाइरहेका
**हरिणा** = भगवान् श्रीहरिद्वारा
**सः** = त्यो
**यवनेशः** = कालयवन
**दूरं** = धेरै टाढा
**अद्रिकन्दरं** = पहाडको गुफामा
**नीतः** = पुऱ्याइयो

**वाक्यार्थ–** (भगवान् अघि-अघि दौडनुहुँदा र कालयवनले पछिपछि लखेट्दा) उसले हातले नै

समाउला–समाउला जस्तो गरी दौडँदै भगवान्‌ले त्यो कालयवनलाई धेरै टाढा पहाडको गुफामा पुऱ्याउनुभयो।

**पलायनं यदुकुले जातस्य तव नोचितम्।**
**इति क्षिपन्ननुगतो नैनं प्रापाहताशुभः॥ ८॥**

**पदार्थ–**
**यदुकुले** = यदुवंशमा
**जातस्य** = जन्मिएको
**तव** = तेरो
**पलायनं** = युद्धबाट भाग्ने काम
**न उचितं** = उचित छैन
**इति** = यसरी
**क्षिपन्** = गाली (तिरस्कार) गर्दै
**अनुगतः** = पछि लागेको कालयवनले
**अहताशुभः** = सारा दुष्कर्म नाश नभइसकेकाले
**एनं** = उहाँ (भगवान्)लाई स्पर्श गर्न
**न प्राप** = पाएन

**वाक्यार्थ–** तँ यदुकुलमा जन्मिएकाले यसरी युद्धबाट भाग्नु राम्रो कुरा होइन भन्दै कालयवनले गाली गर्दै भगवान्‌को पछि लागे तापनि उसको दुष्कर्म नाश नभइसकेकाले उसले भगवान्‌लाई स्पर्श गर्न पाएन।

**एवं क्षिप्तोऽपि भगवान् प्राविशद् गिरिकन्दरम्।**
**सोऽपि प्रविष्टस्तत्रान्यं शयानं ददृशे नरम्॥ ९॥**

**पदार्थ–**
**एवं** = यसरी
**क्षिप्तः अपि** = (कालयवनद्वारा) गाली गरिए पनि
**भगवान्** = भगवान् श्रीकृष्ण
**गिरिकन्दरं** = पहाडको गुफामा
**प्राविशत्** = प्रवेश गर्नुभयो
**प्रविष्टः** = (त्यही गुफामा) पसेको
**सः अपि** = त्यो कालयवनले पनि
**तत्र** = त्यहाँ
**अन्यं** = अर्को
**शयानं** = सुतिरहेको
**नरं** = मान्छेलाई
**ददृशे** = देख्यो

**वाक्यार्थ–** यसरी कालयवनले गाली गरे पनि भगवान् त्यहींको एउटा गुफामा पस्नुभयो, पछि–पछि लागेको कालयवनले पनि त्यहाँ प्रवेश गऱ्यो र त्यहाँ सुतिरहेको मान्छेलाई देख्यो।

**नन्वसौ दूरमानीय शेते मामिह साधुवत्।**
**इति मत्वाच्युतं मूढस्तं पदा समताडयत्॥ १०॥**

**पदार्थ–**
**ननु** = निश्चय नै
**असौ** = यो वासुदेवले
**माम्** = मलाई
**इह** = यहाँ
**दूरं** = टाढा
**आनीय** = ल्याएर
**साधुवत्** = साधु झैं गरी
**शेते इति** = सुत्दो रहेछ भन्दै
**मूढः** = त्यो मूर्ख कालयवनले
**तं** = त्यो मानिसलाई
**अच्युतं** = वासुदेव

| | | |
|---|---|---|
| **मत्वा** = सम्झिएर | **पदा** = लात्तीले | **समताडयत्** = हान्यो |

**वाक्यार्थ–** यो वासुदेव त मलाई यहाँ यति टाढा ल्याएर आफू चाहिँ साधु जस्तो भएर सुत्दो पो रहेछ भन्दै त्यो मूर्ख कालयवनले सुतेको व्यक्तिलाई वासुदेव नै सम्झी लात्तीले हान्यो।

**स उत्थाय चिरं सुप्तः शनैरुन्मील्य लोचने।**

**दिशो विलोकयन् पार्श्वे तमद्राक्षीदवस्थितम्॥ ११॥**

| | | |
|---|---|---|
| पदार्थ– | **शनैः** = बिस्तारै | **पार्श्वे** = नजिकै |
| **चिरं** = धेरै समयदेखि | **लोचने** = आँखा | **अवस्थितं** = रहेको |
| **सुप्तः** = सुतेका | **उन्मील्य** = खोलेर | **तं** = त्यो कालयवनलाई |
| **सः** = ती व्यक्तिले | **दिशः** = विभिन्न दिशाहरूतिर | **अद्राक्षीत्** = देखे |
| **उत्थाय** = उठेर | **विलोकयन्** = हेर्दा | |

**वाक्यार्थ–** लामो समयदेखि सुतेका ती व्यक्तिले उठेर बिस्तारै आँखा खोली यताउति हेर्दा नजिकै रहेको त्यो कालयवनलाई देखे।

**स तावत् तस्य रुष्टस्य दृष्टिपातेन भारत।**

**देहजेनाग्निना दग्धो भस्मसादभवत् क्षणात्॥ १२॥**

| | | |
|---|---|---|
| पदार्थ– | **रुष्टस्य** = रिसाएका | **अग्निना** = आगोबाट |
| **भारत** = हे परीक्षित् | **तस्य** = ती व्यक्तिको | **दग्धः** = डढ्यो र |
| **सः** = त्यो कालयवन | **दृष्टिपातेन** = हेराइ मात्रले | **क्षणात्** = एकै क्षणमा |
| **तावत्** = (लात्तीप्रहार गरेर जगाउनाले) त्यस वेला | **देहजेन** = आफ्नै शरीरबाट उत्पन्न भएको | **भस्मसात्** = खरानीको थुप्रो |
| | | **अभवत्** = भयो |

**वाक्यार्थ–** हे परीक्षित्! निद्राबाट ब्युँझिनाले रिसाएका ती व्यक्तिको हेराइ मात्रले त्यो कालयवन आफ्नै शरीरबाट अग्नि उत्पन्न भएर डढ्यो र तुरुन्तै खरानी भयो।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**को नाम स पुमान् ब्रह्मन् कस्य किंवीर्य एव च।**

**कस्माद् गुहां गतः शिश्ये किन्तेजो यवनार्दनः॥ १३॥**

| | | |
|---|---|---|
| पदार्थ– | **सः पुमान्** = ती व्यक्ति | भएका) |
| **ब्रह्मन्** = हे ब्रह्मज्ञानी शुकदेव | **कः** = को थिए | **किंवीर्यः एव** = कसका छोरा र |
| **यवनार्दनः** = कालयवनलाई भस्म पार्ने | **नाम च** = नाम के थियो | **किंतेजः** = कत्तिको पराक्रमी |
| | **कस्य** = कसको (कुलमा उत्पन्न | **कस्मात्** = के कारणले |

| | |
|---|---|
| **गुहां गतः** = गुफामा गएर | **शिश्ये** = सुते |

**वाक्यार्थ–** हे ब्रह्मज्ञानी शुकदेव ! त्यो कालयवनलाई भस्म पार्ने व्यक्ति को थिए ? तिनको नाम के हो ? ती कसको कुलमा कसबाट उत्पन्न भएका थिए र कत्तिको पराक्रमी थिए अनि किन गुफामा गएर सुते ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**स इक्ष्वाकुकुले जातो मान्धातृतनयो महान्।**
**मुचुकुन्द इति ख्यातो ब्रह्मण्यः सत्यसङ्गरः॥ १४ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **सः** = ती व्यक्ति | **मान्धातृतनयः** = मान्धाताका छोरा | **ख्यातः** = प्रसिद्ध |
| **इक्ष्वाकुकुले** = इक्ष्वाकुवंशमा | **मुचुकुन्दः इति** = मुचुकुन्द भन्ने नामले | **महान्** = महापुरुष थिए जो |
| **जातः** = जन्मिएका | | **ब्रह्मण्यः** = ब्राह्मणभक्त र |
| | | **सत्यसङ्गरः** = सत्यप्रतिज्ञ थिए |

**वाक्यार्थ–** हे परीक्षित् ! ती व्यक्ति इक्ष्वाकुवंशमा जन्मिएका मान्धाताका छोरा राजा मुचुकुन्द थिए, जो ब्राह्मणभक्त र सत्यप्रतिज्ञ महापुरुष थिए।

**स याचितः सुरगणैरिन्द्राद्यैरात्मरक्षणे।**
**असुरेभ्यः परित्रस्तैस्तद्रक्षां सोऽकरोच्चिरम्॥ १५ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **सः** = ती मुचुकुन्द राजा | **इन्द्राद्यैः** = इन्द्र आदि | **सः** = ती मुचुकुन्दले |
| **असुरेभ्यः** = असुरहरूबाट | **सुरगणैः** = देवसमूहद्वारा | **चिरं** = धेरै समयसम्म |
| **परित्रस्तैः** = डराएका | **आत्मरक्षणे** = आफ्नो रक्षा गर्न | **तद्रक्षां** = ती देवताहरूको रक्षा |
| | **याचितः** = प्रार्थना गरिए | **अकरोत्** = गरे |

**वाक्यार्थ–** ती मुचुकुन्द राजालाई आत्मरक्षाको लागि इन्द्र आदि देवताहरूले प्रार्थना गरेपछि धेरै समयसम्म उनले देवताहरूको रक्षा गरे।

**लब्ध्वा गुहं ते स्वःपालं मुचुकुन्दमथाब्रुवन्।**
**राजन् विरमतां कृच्छ्राद् भवान् नः परिपालनात्॥ १६ ॥**

| पदार्थ– | | |
|---|---|---|
| **अथ** = केही समयपछि | **गुहं** = कार्त्तिकेयलाई | **राजन्** = हे राजा मुचुकुन्द |
| **ते** = ती देवताहरूले | **लब्ध्वा** = पाएपछि | **नः** = हामीहरूको |
| **स्वःपालं** = स्वर्गको रक्षा गर्ने | **मुचुकुन्दं** = मुचुकुन्दलाई | **परिपालनात्** = रक्षा गर्ने |
| | **अब्रुवन्** = भने | **कृच्छ्रात्** = कष्टबाट |

**भवान्** = हजुरले
**विरमताम्** = विश्राम लिनुहोस्

**वाक्यार्थ–** केही समयपछि देवताहरूले स्वर्गको रक्षा गर्ने कार्त्तिकेयलाई पाएपछि मुचुकुन्दलाई भने– हे महाराज ! अब हामीहरूलाई रक्षा गर्ने कष्टबाट विश्राम लिनुहोस्।

**नरलोकं परित्यज्य राज्यं निहतकण्टकम्।**

**अस्मान् पालयतो वीर कामास्ते सर्व उज्झिताः॥ १७॥**

पदार्थ–
**वीर** = हे वीर
**नरलोकं** = पृथिवीलोकमा
**निहतकण्टकं** = शत्रुरहित
**राज्यं** = राज्यलाई
**परित्यज्य** = त्यागेर
**अस्मान्** = हामीहरूलाई
**पालयतः** = रक्षा गर्दागर्दै
**ते** = तपाईंका
**सर्वे कामाः** = सारा इच्छाहरू पनि
**उज्झिताः** = त्यसै गए

**वाक्यार्थ–** हे वीर ! पृथिवीलोकको शत्रुरहित राज्य छाडेर हाम्रो रक्षा गर्दागर्दै तपाईंका सारा इच्छाहरू पनि त्यसै गए।

**सुता महिष्यो भवतो ज्ञातयोऽमात्यमन्त्रिणः।**

**प्रजाश्च तुल्यकालीया नाधुना सन्ति कालिताः॥ १८॥**

पदार्थ–
**भवतः** = तपाईंका
**सुताः** = छोराहरू
**महिष्यः** = रानीहरू
**ज्ञातयः** = बन्धुबान्धवहरू
**अमात्यमन्त्रिणः** = अमात्यवर्ग तथा मन्त्रीहरू र
**तुल्यकालीयाः** = आफ्नो समयका
**प्रजाः च** = प्रजाहरू पनि
**कालिताः** = कालद्वारा नष्ट बनाइए
**अधुना** = अहिले
**न सन्ति** = छैनन्

**वाक्यार्थ–** हे राजा ! तपाईंका छोराहरू, रानीहरू, बन्धुबान्धवहरू, अमात्यवर्ग र मन्त्रीवर्ग सहित आफ्ना समयका प्रजाहरू पनि समयको प्रभावले नष्ट भइसके, ती कोही पनि अहिले छैनन्।

**कालो बलीयान् बलिनां भगवानीश्वरोऽव्ययः।**

**प्रजाः कालयते क्रीडन् पशुपालो यथा पशून्॥ १९॥**

पदार्थ–
**बलिनां** = बलशालीहरूमा
**कालः** = समय
**बलीयान्** = परम बलशाली छ
**ईश्वरः** = सबैको नियन्त्रक
**अव्ययः** = कहिल्यै नष्ट नहुने
**भगवान्** = भगवत्स्वरूप पनि काल नै हो त्यसैले)
**यथा** = जसरी
**पशुपालः** = गोठालाले
**पशून्** = पशुहरूलाई (आफ्नो वशमा राख्छ, त्यस्तै यो कालले पनि)
**क्रीडन्** = खेल खेलमा नै
**प्रजाः** = सारा लोकलाई
**कालयते** = वशमा राख्दछ

**वाक्यार्थ–** काल बलशालीहरूमा परम बलशाली, सर्वनियन्त्रक ईश्वर र अविनाशी भगवान् हो। जसरी एउटा गोठालाले सारा पशुहरूलाई आफ्नो अधीनमा राखेको हुन्छ, त्यस्तै कालले पनि सारा लोकलाई आफ्नो अधीनमा राखेको छ।

**वरं वृणीष्व भद्रं ते ऋते कैवल्यमद्य नः।**
**एक एवेश्वरस्तस्य भगवान् विष्णुरव्ययः॥ २०॥**

**पदार्थ–**
**ते** = तपाईंको
**भद्रं** = कल्याण होस्
**अद्य** = आज
**नः** = हामीहरूबाट
**कैवल्यं ऋते** = मोक्षलाई छाडेर
**वरं** = वर
**वृणीष्व** = माग्नुहोस् (किनभने)
**तस्य** = त्यसको (दाता त)
**अव्ययः** = अविनाशी
**भगवान् विष्णुः** = भगवान् विष्णु
**एकः ईश्वरः एव** = केवल एक ईश्वर मात्र हुनुहुन्छ

**वाक्यार्थ–** हे राजा ! तपाईंको कल्याण होस्। आज हामीहरूबाट मोक्षलाई छाडेर अरू जुनसुकै वर माग्नुहोस्, हामी मोक्ष दिन सक्दैनौं। मोक्ष त केवल अविनाशी परमेश्वर भगवान् नारायणले मात्र दिन सक्नुहुन्छ।

**एवमुक्तः स वै देवानभिवन्द्य महायशाः।**
**अशयिष्ट गुहाविष्टो निद्रया देवदत्तया॥ २१॥**

**पदार्थ–**
**एवं** = यसरी
**उक्तः** = देवताहरूद्वारा भनिएपछि
**महायशाः** = परमयशस्वी राजा
**सः** = ती मुचुकुन्द
**वै** = निश्चय नै
**देवान्** = देवताहरूलाई
**अभिवन्द्य** = वन्दना गरेर
**देवदत्तया** = देवताहरूबाट (वरदानका रूपमा) प्रदत्त
**निद्रया** = निद्राका कारण
**गुहाविष्टः** = गुफामा पसी
**अशयिष्ट** = सुते

**वाक्यार्थ–** यसरी देवताहरूले बताएपछि (उनले देवताहरूबाट विश्रामका लागि निद्रा वरदान मागे र देवताहरूले त्यो वरदान दिए, त्यसपछि) ती यशस्वी राजा मुचुकुन्द देवताहरूलाई प्रणाम गरी देवताहरूद्वारा प्रदत्त निद्राका कारण गुफामा पसेर सुते।

**स्वापं यातं यस्तु मध्ये बोधयेत् त्वामचेतनः।**
**स त्वया दृष्टमात्रस्तु भस्मीभवतु तत्क्षणात्॥ २२॥**

**पदार्थ–**
**स्वापं यातं** = निदाएका
**त्वां** = तिमीलाई
**यः अचेतनः तु** = जो मूर्खले
**मध्ये** = बीचमा नै
**बोधयेत्** = जगाउला
**सः** = त्यो व्यक्ति
**त्वया** = तिमीद्वारा
**दृष्टमात्रः तु** = देखिँदा मात्र

**तत्क्षणात्** = तुरुन्तै | **भस्मीभवतु** = डढेर खरानी होस् | (भनेर देवताले वरदान दिए)

**वाक्यार्थ–** हे राजा ! निदाएका तिमीलाई जसले बीचैमा जगाउला, त्यो व्यक्ति तिम्रो हेराइ मात्रले एकक्षणमैं डढेर खरानी होस् (भनी देवताहरूले अर्को वरदान पनि दिए)।

**यवने भस्मसान्नीते भगवान् सात्वतर्षभः।**
**आत्मानं दर्शयामास मुचुकुन्दाय धीमते॥ २३॥**

पदार्थ–
**यवने** = यवन
**भस्मसात् नीते** = (डढेर) खरानी भएपछि
**सात्वतर्षभः** = भक्तवत्सल
**भगवान्** = भगवान् श्रीकृष्णले
**धीमते** = विवेकी
**मुचुकुन्दाय** = राजा मुचुकुन्दलाई
**आत्मानं** = आफ्नो स्वरूप
**दर्शयामास** = देखाउनुभयो

**वाक्यार्थ–** जब कालयवन डढेर खरानी भयो, त्यसपछि भगवान् श्रीकृष्णले आफ्नो स्वरूप विवेकी मुचुकुन्दलाई देखाउनुभयो।

**तमालोक्य घनश्यामं पीतकौशेयवाससम्।**
**श्रीवत्सवक्षसं भ्राजत् कौस्तुभेन विराजितम्॥ २४॥**
**चतुर्भुजं रोचमानं वैजयन्त्या च मालया।**
**चारुप्रसन्नवदनं स्फुरन्मकरकुण्डलम्॥ २५॥**
**प्रेक्षणीयं नृलोकस्य सानुरागस्मितेक्षणम्।**
**अपीच्यवयसं मत्तमृगेन्द्रोदारविक्रमम्॥ २६॥**
**पर्यपृच्छन्महाबुद्धिस्तेजसा तस्य धर्षितः।**
**शङ्कितः शनकै राजा दुर्धर्षमिव तेजसा॥ २७॥**

पदार्थ–
**घनश्यामं** = मेघजस्तो श्याम वर्ण भएका
**पीतकौशेयवाससं** = पहेँलो रेसमी वस्त्र लगाएका
**श्रीवत्सवक्षसं** = छातीमा श्रीवत्स चिह्नले अङ्कित
**भ्राजत्कौस्तुभेन** = कान्तियुक्त कौस्तुभ मणिद्वारा
**विराजितं** = सुशोभित
**चतुर्भुजं** = चार हात भएका
**वैजयन्त्या मालया च** = वैजयन्ती मालाले
**रोचमानं** = चम्किएका
**चारुप्रसन्नवदनं** = सुन्दर र मन्द मुस्कानयुक्त मुखारविन्द भएका
**स्फुरन्मकरकुण्डलं** = कानमा मकराकार कुण्डल चम्किएका
**नृलोकस्य** = मनुष्यलोकमा
**प्रेक्षणीयं** = हेरिरहूँ लाग्ने
**सानुरागस्मितेक्षणं** = प्रेम र

अनुरागयुक्त दृष्टि दिएका
**अपीच्यवयसं** = रहरलाग्दो तरुण अवस्था भएका
**मत्तमृगेन्द्रोदारविक्रमं** = मत्त सिंह जस्ता परम पुरुषार्थी
**तं** = उहाँ (भगवान् श्रीकृष्ण)लाई
**आलोक्य** = देखेर
**महाबुद्धिः** = परम बुद्धिमान्
**राजा** = मुचुकुन्द राजाले
**तस्य तेजसा** = उहाँको तेजले
**धर्षितः** = हच्कँदै
**शङ्कितः** = सशङ्कित हुँदै
**तेजसा** = आफ्नो तेजले
**दुर्धर्षम् इव** = मानौँ तिरस्कृत बनाउन नसकिने खालका श्रीकृष्णलाई
**शनकैः** = बिस्तारै
**पर्यपृच्छत्** = सोधे

**वाक्यार्थ–** मेघजस्तो श्याम वर्ण भएका, पहेँलो रेसमी वस्त्र लगाएका, छातीमा श्रीवत्स चिह्नले अङ्कित, चम्किँदो कौस्तुभ मणिद्वारा सुशोभित, चार हात भएका, वनमाला लगाएका, कानमा मकराकार कुण्डल चम्किएका, प्रसन्न र सुन्दर मुखारविन्द भएका, प्रेम र अनुरागयुक्त हेराइले सबैलाई मोहित पार्ने, अति दर्शनीय तरुणावस्था भएका, मत्त सिंहको जस्तो पराक्रमले युक्त, आफ्नो तेजले तिरस्कृत बनाउन नसकिने खालका परम तेजस्वी भगवान् श्रीकृष्णलाई देखेर परम बुद्धिमान् मुचुकुन्दले भगवान्को तेजले केही हच्कँदै र सशङ्कित हुँदै बिस्तारै सोधे।

**मुचुकुन्द उवाच** (राजा मुचुकुन्दले भने)

**को भवानिह सम्प्राप्तो विपिने गिरिगह्वरे।**

**पद्भ्यां पद्मपलाशाभ्यां विचरस्युरुकण्टके॥ २८॥**

**पदार्थ–**
**इह** = यहाँ
**सम्प्राप्तः** = आइपुग्नुभएका
**भवान्** = हजुर
**कः** = को हुनुहुन्छ
**उरुकण्टके** = धेरै काँडा भएको
**विपिने** = वनमा र
**गिरिगह्वरे** = पहाडको गुफामा
**पद्मपलाशाभ्यां** = कमलको पातजस्तो नरम
**पद्भ्यां** = चरणले
**विचरसि** = हिँड्नुहुन्छ

**वाक्यार्थ–** यहाँ आइपुग्नुभएका हजुर को हुनुहुन्छ? यस्तो काँडै काँडाले भरिएको वन र पहाडको यो दुर्गम गुफामा कमलको पात जस्तो कोमल चरणले हजुर हिँडिरहनुभएको छ।

**किं स्वित् तेजस्विनां तेजो भगवान् वा विभावसुः।**

**सूर्यः सोमो महेन्द्रो वा लोकपालो परोऽपि वा॥ २९॥**

**पदार्थ–**
**किं स्वित्** = के हजुर
**तेजस्विनां** = सारा तेजस्वीहरूको
**तेजः** = मूर्तिमान् तेज
**भगवान्** = भगवान्
**विभावसुः** = अग्निदेव
**सूर्यः** = भगवान् सूर्य
**सोमः** = चन्द्रमा
**महेन्द्रः वा** = इन्द्र अथवा
**अपरः अपि वा** = अर्को कुनै
**लोकपालः** = लोकपाल हुनुहुन्छ

**वाक्यार्थ–** के हजुर तेजस्वीहरूको तेज अथवा भगवान् अग्निदेव अथवा सूर्य, चन्द्र के हुनुहुन्छ?

कि इन्द्र हुनुहुन्छ ? वा अरू कुनै लोकपाल हुनुहुन्छ ?

**मन्ये त्वां देवदेवानां त्रयाणां पुरुषर्षभम्।**
**यद् बाधसे गुहाध्वान्तं प्रदीपः प्रभया यथा॥ ३०॥**

**पदार्थ–**
**त्वां** = हजुरलाई
**देवदेवानां** = देवताहरूका पनि पूज्य देवता
**त्रयाणां** = तीन देव ब्रह्मा, विष्णु र महेश्वरमध्ये
**पुरुषर्षभं** = पुरुषोत्तम नारायण भनेर
**मन्ये** = सम्झिएको छु
**यत्** = किनभने
**प्रदीपः** = बत्तीले
**प्रभया** = आफ्नो प्रकाशद्वारा
**यथा** = जसरी (अन्धकार नाश गर्छ, त्यसै गरी)
**गुहाध्वान्तं** = गुफाको अन्धकारलाई (हजुरले)
**बाधसे** = हटाइरहनुभएको छ

**वाक्यार्थ–** मैले हजुरलाई देवताहरूमा श्रेष्ठ तीन देवमध्ये पुरुषोत्तम नारायण भनेर सम्झिएको छु किनभने हजुरले बत्तीले अन्धकार हटाए झैं आफ्नो कान्तिले यो गुफाको अन्धकारलाई हटाइरहनुभएको छ।

**शुश्रूषतामव्यलीकमस्माकं नरपुङ्गव।**
**स्वजन्म कर्म गोत्रं वा कथ्यतां यदि रोचते॥ ३१॥**

**पदार्थ–**
**नरपुङ्गव** = हे पुरुषश्रेष्ठ
**शुश्रूषतां** = सुन्न चाहने
**अस्माकं** = हाम्रो (मेरो) लागि
**यदि** = यदि हजुरलाई
**रोचते** = मन पर्छ भने
**अव्यलीकं** = साँचो
**स्वजन्म** = आफ्नो जन्मको विषयमा
**कर्म** = कर्मको विषयमा
**गोत्रं वा** = वा गोत्रको विषयमा पनि
**कथ्यताम्** = भन्नुहोस्

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ ! मलाई हजुरको विषयमा जान्ने इच्छा लागिरहेको छ। यदि हजुरलाई मन पर्छ भने साँच्चै आफ्नो जन्म, कर्म वा गोत्रको विषयमा भन्नुहोस्।

**वयं तु पुरुषव्याघ्र ऐक्ष्वाकाः क्षत्रबन्धवः।**
**मुचुकुन्द इति प्रोक्तो यौवनाश्वात्मजः प्रभो॥ ३२॥**

**पदार्थ–**
**पुरुषव्याघ्र** = हे पुरुषश्रेष्ठ
**वयं तु** = म त
**क्षत्रबन्धवः** = क्षत्रीयवंशी
**ऐक्ष्वाकाः** = इक्ष्वाकुवंशमा उत्पन्न एक क्षत्रीय हुँ
**प्रभो** = हे प्रभु (त्यसमा पनि)
**यौवनाश्वात्मजः** = युवनाश्वपुत्र मान्धाताको छोरो
**मुचुकुन्दः** = मुचुकुन्द
**इति प्रोक्तः** = भनेर प्रसिद्ध व्यक्ति हुँ

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ ! म त क्षत्रीयवंशी इक्ष्वाकुकुलमा उत्पन्न भएका युवनाश्वपुत्र

मान्धाताको छोरो मुचुकुन्द हुँ।

**चिरप्रजागरश्रान्तो निद्रयोपहतेन्द्रियः।**
**शयेऽस्मिन् विजने कामं केनाप्युत्थापितोऽधुना॥ ३३॥**

पदार्थ–
**चिरप्रजागरश्रान्तः** = धेरै समयसम्म जाग्नाले थकित
**निद्रया** = निद्राद्वारा
**उपहतेन्द्रियः** = इन्द्रियका शक्ति क्षीण भएको म
**अस्मिन्** = यो
**विजने** = निर्जन ठाउँमा
**कामं** = यथेच्छ
**शये** = सुतेको थिएँ
**अधुना** = अहिले
**केन अपि** = कुनै व्यक्तिद्वारा
**उत्थापितः** = जगाइएँ

**वाक्यार्थ–** धेरै समयसम्म जागा रहनाले निद्राले गर्दा मेरो इन्द्रियशक्ति क्षीण भएको थियो। त्यसैले यो निर्जन वनमा म यथेच्छ सुतेको थिएँ। अहिले कुनै व्यक्तिले मलाई ब्युँझाइदियो।

**सोऽपि भस्मीकृतो नूनमात्मीयेनैव पाप्मना।**
**अनन्तरं भवाञ्छ्रीमांल्लक्षितोऽमित्रशासनः॥ ३४॥**

पदार्थ–
**सः अपि** = त्यो पनि (मलाई ब्युँझाउने व्यक्ति पनि)
**आत्मीयेन एव** = आफ्नै
**पाप्मना** = पापले
**नूनं** = निश्चय नै
**भस्मीकृतः** = भस्म भयो
**अनन्तरं** = त्यसपछि
**अमित्रशासनः** = शत्रुलाई दण्ड दिने
**श्रीमान्** = ऐश्वर्यसम्पन्न
**भवान्** = हजुर
**लक्षितः** = देखिनुभयो

**वाक्यार्थ–** मलाई ब्युँझाउने व्यक्ति पनि आफ्नै पापको कारणले भस्म भयो। त्यसपछि शत्रुलाई दण्ड दिने सर्वैश्वर्यसम्पन्न हजुर देखिनुभयो।

**तेजसा तेऽविषह्येण भूरि द्रष्टुं न शक्नुमः।**
**हतौजसो महाभाग माननीयोऽसि देहिनाम्॥ ३५॥**

पदार्थ–
**महाभाग** = हे भाग्यशाली प्रभु
**ते** = हजुरको
**अविषह्येण** = सहन गर्न नसकिने
**तेजसा** = तेजले
**हतौजसः** = हेर्ने सामर्थ्य नै गुमेका हामीहरू
**भूरि** = धेरै बेरसम्म
**द्रष्टुं** = हेर्न
**न शक्नुमः** = सकिरहेका छैनौँ
(हजुर)
**देहिनां** = प्राणीहरूका
**माननीयः** = पूज्य
**असि** = हुनुहुन्छ

**वाक्यार्थ–** हे परम भाग्यशाली प्रभु ! हजुरको असह्य तेजले मेरो हेर्ने सामर्थ्य गुमेको छ। मैले धेरै बेरसम्म हजुरको दर्शन गर्न सकिरहेको छैन। हजुर सारा प्राणीहरूका पूज्य हुनुहुन्छ।

**एवं सम्भाषितो राज्ञा भगवान् भूतभावनः ।**

**प्रत्याह प्रहसन् वाण्या मेघनादगभीरया ॥ ३६ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**राज्ञा** = राजाद्वारा
**सम्भाषितः** = भनिएका
**भूतभावनः** = प्राणीका जीवनदाता
**भगवान्** = भगवान् श्रीकृष्ण
**प्रहसन्** = हाँस्दै
**मेघनादगभीरया** = मेघको आवाज जस्तो गम्भीर
**वाण्या** = वाणीद्वारा
**प्रत्याह** = भन्न लाग्नुभयो

**वाक्यार्थ–** यसरी राजाले भनेपछि सारा प्राणीका जीवनदाता भगवान् श्रीकृष्णले मुस्कुराउँदै मेघको आवाज जस्तो गम्भीर वाणीद्वारा भन्न लाग्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**जन्मकर्माभिधानानि सन्ति मेऽङ्ग सहस्रशः ।**

**न शक्यन्तेऽनुसङ्ख्यातुमनन्तत्वान्मयापि हि ॥ ३७ ॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय मुचुकुन्द
**मे** = मेरा
**जन्मकर्माभिधानानि** = जन्म, कर्म र नामहरू
**सहस्रशः** = हजारौँ
**सन्ति** = छन्
**हि** = निश्चय नै
**अनन्तत्वात्** = अनन्त भएको हुनाले
**मया अपि** = मद्वारा पनि
**अनुसङ्ख्यातुं** = गणना गर्न
**न शक्यन्ते** = सकिँदैनन्

**वाक्यार्थ–** हे राजा मुचुकुन्द ! मेरा जन्म, कर्म र नामहरू हजारौँ छन्। अनन्त भएको हुनाले मैले पनि ती सबैलाई गणना गर्न सक्दिनँ।

**क्वचिद् रजांसि विममे पार्थिवान्युरुजन्मभिः ।**

**गुणकर्माभिधानानि न मे जन्मानि कर्हिचित् ॥ ३८ ॥**

**पदार्थ–**
**क्वचित्** = कहिल्यै
**पार्थिवानि** = पृथिवीका
**रजांसि** = धुलाका कणहरू
**उरुजन्मभिः** = धेरै जन्म लगाएर
**विममे** = गन्न सक्ला (तर)
**मे** = मेरा
**गुणकर्माभिधानानि** = गुण, कर्म र नाम तथा
**जन्मानि** = जन्मलाई
**कर्हिचित् न** = कहिल्यै पनि सक्दैन

**वाक्यार्थ–** बरु धेरै जन्म लगाएर कहिलेकाहीँ कसैले पृथिवीका धुलाका कणहरू गन्न सक्ला, तर मेरा गुण, कर्म, नाम र जन्मलाई कसैले कहिल्यै पनि गन्न सक्दैन।

**कालत्रयोपपन्नानि जन्मकर्माणि मे नृप।**
**अनुक्रमन्तो नैवान्तं गच्छन्ति परमर्षयः॥ ३९॥**

**पदार्थ–**
**नृप** = हे राजा मुचुकुन्द
**मे** = मेरा
**कालत्रयोपपन्नानि** = तीन कालमा भएका
**जन्मकर्माणि** = जन्म र कर्महरूलाई
**अनुक्रमन्तः** = वर्णन गरिरहेका
**परमर्षयः** = ठुला ऋषिहरूले (अहिलेसम्म)
**अन्तं** = पार
**न एव गच्छन्ति** = पाएका छैनन्

**वाक्यार्थ–** हे राजा मुचुकुन्द ! महर्षिहरूले भूत, भविष्यत्, वर्तमान आदि तीन कालमा भएका मेरा जन्म र कर्महरूको वर्णन गर्दागर्दै अहिलेसम्म त्यसबाट पार पाएका छैनन्।

**तथाप्यद्यतनान्यङ्ग शृणुष्व गदतो मम।**
**विज्ञापितो विरिञ्चेन पुराहं धर्मगुप्तये॥**
**भूमेर्भारायमाणानामसुराणां क्षयाय च॥ ४०॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय मुचुकुन्द
**तथा अपि** = तैपनि (मेरा जन्म, कर्म अनन्त भए पनि)
**अद्यतनानि** = अहिलेको (जन्म र कर्मको विषयमा)
**गदतः** = भनिरहेको
**मम** = मबाट
**शृणुष्व** = सुन
**पुरा** = पहिले
**विरिञ्चेन** = ब्रह्माजीद्वारा
**धर्मगुप्तये** = धर्मको रक्षाका लागि र
**भूमेः** = पृथिवीका
**भारायमाणानां** = भाररूप बनेका
**असुराणां** = असुरहरूको
**क्षयाय च** = विनाशका लागि पनि
**अहं** = म
**विज्ञापितः** = प्रार्थना गरिएँ

**वाक्यार्थ–** हे प्रिय मुचुकुन्द ! यद्यपि मेरा जन्म र कर्म अनन्त छन्, तापनि अहिलेको जन्म र कर्मको विषयमा तिमीलाई भन्छु, सुन। पहिले ब्रह्माजीले धर्मको रक्षाका लागि र पृथिवीका भारस्वरूप असुरहरूको विनाशका लागि मसँग प्रार्थना गर्नुभयो।

**अवतीर्णो यदुकुले गृह आनकदुन्दुभेः।**
**वदन्ति वासुदेवेति वसुदेवसुतं हि माम्॥ ४१॥**

**पदार्थ–**
**यदुकुले** = यदुकुलमा
**आनकदुन्दुभेः** = वसुदेवको
**गृहे** = घरमा
**अवतीर्णः** = अवतार लिएँ, (त्यसैले)
**वसुदेवसुतं** = वसुदेवको छोरो
**माम्** = मलाई
**हि** = निश्चय नै
**वासुदेव इति** = वासुदेव भनेर
**वदन्ति** = भन्दछन्

**वाक्यार्थ–** म यदुवंशमा वसुदेवको घरमा अवतीर्ण भएँ। त्यसैले वसुदेवको पुत्रको रूपमा

जन्मिएको मलाई सबैले वासुदेव भन्दछन्।

**कालनेमिर्हतः कंसः प्रलम्बाद्याश्च सद्द्विषः।**
**अयं च यवनो दग्धो राजंस्ते तिग्मचक्षुषा॥ ४२॥**

पदार्थ–
**राजन्** = हे राजा मुचुकुन्द
**कंसः** = कंसको रूपमा आएको
**कालनेमिः** = कालनेमि दानव (मद्वारा)
**हतः** = मारियो
**सद्द्विषः** = सज्जनहरूको द्वेष गर्ने
**प्रलम्बाद्याः च** = प्रलम्बासुर आदि दानवहरू (मद्वारा मारिए)
**अयं च** = यो
**यवनः** = कालयवन पनि
**ते** = तिम्रो
**तिग्मचक्षुषा** = तीक्ष्ण दृष्टिले
**दग्धः** = डढ्यो

**वाक्यार्थ–** मैले कंसको रूपमा आएको कालनेमि र साधुहरूलाई सताउने प्रलम्बासुर आदि दानवहरूलाई मारिसकेँ। अहिले यो दुष्ट कालयवन पनि तिम्रो तीक्ष्ण दृष्टिले डढ्यो।

**सोऽहं तवानुग्रहार्थं गुहामेतामुपागतः।**
**प्रार्थितः प्रचुरं पूर्वं त्वयाहं भक्तवत्सलः॥ ४३॥**

पदार्थ–
**सः अहं** = त्यही म
**तव** = तिम्रो
**अनुग्रहार्थं** = अनुग्रहका लागि
**एतां गुहां** = यो गुफामा
**उपागतः** = आएको छु
**पूर्वं** = पहिले
**त्वया** = तिमीद्वारा
**भक्तवत्सलः** = भक्तहरूलाई प्यारो गर्ने
**अहं** = म
**प्रचुरं** = धेरै
**प्रार्थितः** = प्रार्थना गरिएँ

**वाक्यार्थ–** त्यही म आज तिम्रो अनुग्रहको लागि यो गुफामा आएको छु। पहिले भक्तहरूको प्यारो गर्ने मलाई तिमीले खुब आराधना गरेका थियौ।

**वरान् वृणीष्व राजर्षे सर्वान् कामान् ददामि ते।**
**मां प्रपन्नो जनः कश्चिन्न भूयोऽर्हति शोचितुम्॥ ४४॥**

पदार्थ–
**राजर्षे** = हे राजर्षि मुचुकुन्द
**वरान्** = वरहरू
**वृणीष्व** = माग
**ते** = तिमीलाई
**सर्वान्** = सम्पूर्ण
**कामान्** = इच्छा लागेका कुराहरू
**ददामि** = दिन्छु
**मां प्रपन्नः** = मेरो शरणमा आएको
**कश्चित्** = जो कोही
**जनः** = व्यक्तिले
**भूयः** = फेरि
**शोचितुं** = शोक गर्न
**न अर्हति** = पर्दैन

**वाक्यार्थ–** हे राजर्षि मुचुकुन्द ! वर माग, म तिमीलाई इच्छा लागेका सारा कुराहरू दिनेछु। किनभने मेरो शरणमा आएको व्यक्तिले फेरि कहिल्यै शोक गर्नु पर्दैन।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्युक्तस्तं प्रणम्याह मुचुकुन्दो मुदान्वितः।**

**ज्ञात्वा नारायणं देवं गर्गवाक्यमनुस्मरन्॥ ४५॥**

पदार्थ–
**इति उक्तः** = यति भनिएका
**मुदान्वितः** = अति हर्षित
**मुचुकुन्दः** = राजा मुचुकुन्दले
**गर्गवाक्यम्** = गर्गको भनाइलाई
**अनुस्मरन्** = स्मरण गर्दै
**तं** = ती व्यक्तिलाई
**देवं** = देवता
**नारायणं** = साक्षात् नारायण नै
**ज्ञात्वा** = बुझेर
**प्रणम्य** = प्रणाम गरी
**आह** = भन्न लागे

**वाक्यार्थ–** भगवान्ले यति भनिसकेपछि राजा मुचुकुन्दले पहिला गर्गले बताए अनुसार आफ्नो अगाडिको व्यक्ति साक्षात् नारायण नै हुनुहुनुन्छ भन्ने बुझी प्रणाम गरे र भन्न थाले।

**मुचुकुन्द उवाच** (मुचुकुन्दले भने)

**विमोहितोऽयं जन ईश मायया त्वदीयया त्वां न भजत्यनर्थदृक्।**

**सुखाय दुःखप्रभवेषु सज्जते गृहेषु योषित्पुरुषश्च वञ्चितः॥ ४६॥**

पदार्थ–
**ईश** = हे परमेश्वर
**योषित्** = स्त्री र
**पुरुषः च** = पुरुषको रूपमा पनि रहेको
**अयं** = यो
**जनः** = सारा लोक (जीवात्मा)
**त्वदीयया** = हजुरको
**मायया** = मायाद्वारा
**विमोहितः** = मोहित भएको छ
**अनर्थदृक्** = असत्य संसारपट्टि दृष्टि दिएर
**वञ्चितः** = ठगिएको यो जीव
**त्वां** = हजुरलाई
**न भजति** = भजन गर्दैन
**सुखाय** = सुखप्राप्तिको लागि
**दुःखप्रभवेषु** = दुःखै दुःखको स्रोत भएको
**गृहेषु च** = घरमा वा गृहस्थाश्रममा
**सज्जते** = आसक्त हुन्छ

**वाक्यार्थ–** हे परमेश्वर ! स्त्री-पुरुष रूपमा रहेका यी सारा व्यक्तिहरू हजुरको मायाको कारणले मोहित भएका छन्। उनीहरूको दृष्टि संसारपट्टि मात्र छ। त्यसैले ठगिएका उनीहरू हजुरको भजन गर्दैनन्। उनीहरू सुख चाहन्छन्, तर दुःखै दुःखको स्रोत गृहस्थाश्रममा आसक्त भएर लाग्दछन्।

**लब्ध्वा जनो दुर्लभमत्र मानुषं कथञ्चिदव्यङ्गमयत्नतोऽनघ।**

**पादारविन्दं न भजत्यसन्मतिर्गृहान्धकूपे पतितो यथा पशुः॥ ४७॥**

**पदार्थ–**
**अनघ** = हे निष्पाप प्रभु
**अयत्नतः** = प्रयास नगरीकन
**कथञ्चित्** = कुनै दैवी अनुग्रहले
**अत्र** = यस संसारमा
**दुर्लभं** = दुर्लभ
**अव्यङ्गं** = अविकलाङ्ग (मन, बुद्धि इन्द्रियादि युक्त)
**मानुषं** = मनुष्य शरीरलाई
**लब्ध्वा** = पाएर (पनि)
**असन्मतिः** = असत्य संसारमा मन लगाएको
**जनः** = मानिस
**पादारविन्दं** = भगवान्‌को चरणारविन्दको
**न भजति** = भजन गर्दैन
**यथा** = जसरी
**पशुः** = पशुहरू (घाँसको लोभले लम्किँदै जाँदा अन्धकारमय इनारमा पर्दछन्, त्यसै गरी यी जीव पनि)
**गृहान्धकूपे** = घररूपी अन्धकारमय इनारमा
**पतितः** = पर्दछ

**वाक्यार्थ–** हे निष्पाप प्रभु ! प्रयास नगरीकन भगवान्‌को अनुग्रहले यस संसारमा दुर्लभ र सर्वाङ्गपूर्ण मनुष्य शरीर पाएर पनि असत्य सांसारिक कुरामा ध्यान दिन्छन् र हजुरको चरणारविन्दको सेवा गर्दैनन्। जसरी पशुहरू घाँसको लोभले लम्किँदै जाँदा अन्धकारमय इनारमा खस्दछन्, त्यसै गरी मनुष्यहरू पनि सुखको खोजीमा घररूपी अन्धकार इनारमा पर्दछन्।

**ममैष कालोऽजित निष्फलो गतो राज्यश्रियोन्नद्धमदस्य भूपतेः।**
**मर्त्यात्मबुद्धेः सुतदारकोशभूष्वासज्जमानस्य दुरन्तचिन्तया ॥ ४८ ॥**

**पदार्थ–**
**अजित** = हे अजेय प्रभु
**राज्यश्रियोन्नद्धमदस्य** = राजलक्ष्मीको ऐश्वर्यले मत्त भएको
**भूपतेः** = आफूलाई पृथिवीको राजा मान्ने
**मर्त्यात्मबुद्धेः** = मर्ने स्वभावको शरीरमा आत्मबुद्धि गर्ने
**सुतदारकोशभूषु** = छोरा, पत्नी, धनसम्पत्ति र जमिनमा
**आसज्जमानस्य** = आसक्त भएको
**मम** = म मुचुकुन्दको
**दुरन्तचिन्तया** = पार नपाइने सांसारिक वस्तुको चिन्ताले
**एषः कालः** = यो समय
**निष्फलः** = बेकारमा
**गतः** = गयो

**वाक्यार्थ–** हे अजेय प्रभु ! मैले आफूलाई राजा मानेर राजलक्ष्मीको ऐश्वर्यले मत्त भएर यो मर्त्य शरीरमा आत्मबुद्धि गरेँ र छोरा, पत्नी, धनसम्पत्ति तथा जमिन आदिमा आसक्त भएर लागेँ। उनीहरूकै चिन्ता गरेँ, त्यही चिन्तै चिन्ताले अहिलेसम्मको मेरो समय बेकारमा गयो।

**कलेवरेऽस्मिन् घटकुड्यसन्निभे निरूढमानो नरदेव इत्यहम्।**
**वृतो रथेभाश्वपदात्यनीकपैर्गां पर्यटंस्त्वागणयन् सुदुर्मदः ॥ ४९ ॥**

**पदार्थ–**
**घटकुड्यसन्निभे** = (विचार गर्दा) घैँटो, भित्तोजस्तो
**अस्मिन्** = यो
**कलेवरे** = शरीरमा
**अहं** = म
**नरदेवः इति** = राजा हुँ भन्ने
**निरूढमानः** = अभिमानले भरिएको

**सुदुर्मदः** = ऐश्वर्यको मदले मत्त भएको मैले
**त्वा** = हजुरलाई
**अगणयन्** = मतलब नै नगरीकन
**रथेभाश्वपदात्यनीकपैः** = रथ, हात्ती, घोडा र पैदल सेनाहरूले
**वृतः** = घेरिएर
**गां** = पृथिवीमा
**पर्यटन्** = घुम्दै (सारा समय निष्फल बिताएँ)

**वाक्यार्थ–** विचार गर्दा घैँटो र भित्तोजस्तो यो शरीरमा राजा भन्ने अभिमान गर्दै ऐश्वर्यको मदले मत्त भएको मैले हजुरको कुनै पनि गणना गरिनँ र रथ, हात्ती, घोडा र पैदल सेनाले सधैँ घेरिएर पृथिवीमा घुमी-घुमी समयलाई बेकारमा बिताएँ।

**विवरण–** यस श्लोकमा मुचुकुन्दले आफूलाई राजा ठानी व्यर्थमा नै अभिमान गरेछु भनी भगवान्सँग प्रार्थना गरेका छन् र आफूले दुर्लभ मनुष्यजन्मलाई व्यर्थमा नै बिताएकोमा पश्चात्ताप पनि गरेका छन्। उनी पृथिवीका राजा हुँदा देवताहरूको प्रार्थना अनुसार उनीहरूको सहयोग गर्न देवलोक गएका थिए। उहीँ रहँदारहँदै पृथिवीको कालमान अनुसार धेरै लामो समय बितिसकेको थियो। पृथिवीमा उनको राज्य एवं आफन्तहरू सबै नष्ट भइसकेका थिए। पृथिवीमा उनले आफ्नो साम्राज्य समाप्त भइसकेको र नयाँ साम्राज्यको उदय भइसकेको देखे। कुनै वेलाका चक्रवर्ती सम्राट् मुचुकुन्द पृथिवीतलमा फर्किंदा एउटा परिचयहीन व्यक्ति हुने थाहा पाए।

मुचुकुन्दको प्रस्तुत भनाइबाट आफूले सोचेका भावहरू कति असत्य एवं क्षणिक हुँदा रहेछन् भनी स्पष्ट भएको छ। यस प्रसङ्गबाट पृथिवीको स्वामी को हो भन्ने विषयमा पनि धेरै प्रकाश भएको छ। प्रायशः सबै शासकहरू पृथिवीलाई आफ्नो अधीनमा रहेको र आफ्नो भोग्य सम्झन्छन्। अरू स-साना मानिसहरू पनि पृथिवीको स-साना टुक्रामा तेरो र मेरो भनी झगडा गरिरहेका देखिन्छन्। तर जति अभिमान अनि लडाइँ-झगडा गरे पनि के पृथिवीलाई सधैँका लागि कसैले पनि आफ्नो बनाउन सकेको छ ? मुचुकुन्द भन्दछन्– **गां पर्यटन्** अर्थात् म पृथिवीमा चक्कर लगाउँदै हिँड्दथेँ। हात्ती, घोडा र पैदलसेनाको आवाजले पृथिवीलाई नै थर्काउने गरी हिँड्दा मैले सम्पूर्ण पृथिवीलाई केवल आफ्नो मात्र ठानेको थिएँ। त्यो वेलामा अरू कसैले म यो पृथिवीको स्वामी हुँ भन्दा मैले त्यसलाई समाप्त गरिदिन्थेँ। तर ती मेरा सम्पूर्ण घमन्डहरू केवल क्षणिक मात्र रहेछन्। म देख्दै छु– अहिले यहाँ म जस्तै अरू शासक भइसकेका छन्, जो मैले झैँ आफूलाई यो सम्पूर्ण पृथिवीको एकछत्र सम्राट् ठान्छन्। अहिले मैले तिनका अगाडि यो पृथिवी मेरो हो भन्ने हो भने मेरो कुन हालत होला ? त्यसैले पृथिवीको स्वामी त वास्तवमा कोही पनि हुँदो रहेनछ। यहाँ सबै राजाहरू केही दिनका स्वामीहरू हुन आउँदा रहेछन् अनि केही दिन राज्य गरी फेरि पृथिवीमैँ मिल्दा रहेछन् भन्ने मुचुकुन्दको अनुभव यहाँ प्रकट भएको छ। पृथिवीको क्षणिक स्वामित्वसम्बन्धी यो दुर्लभ ज्ञान प्राप्त गर्ने राजा मुचुकुन्द सौभाग्यशाली हुन्। जुन परमात्मा सबै जगत्का एक मात्र स्वामी हुनुहुन्छ, उहाँलाई नगनी घैँटो जस्तो शरीरमा आत्मबुद्धि गरेर अहङ्कार गर्नु व्यर्थ हो। आफ्नो जीवन पनि अहिलेसम्म यस्तै भएकाले त्यो पनि व्यर्थ भएको धारणा मुचुकुन्दको रहेको छ। आफूले कल्पना गरेको सीमित संसार जब ध्वस्त हुन्छ, तब मानिसले विचार गर्न थाल्छ। मुचुकुन्दले पनि यही अवस्थामा यस्तो तत्त्वज्ञान प्राप्त गरेका छन्।

यसप्रकार मुचुकुन्दले आफ्नो साम्राज्यलाई आफैँले नष्ट भएको देखी त्यसबाट संसारको क्षणिकता बुझी तत्त्वज्ञान पाएका छन्।

**प्रमत्तमुच्चैरितिकृत्यचिन्तया प्रवृद्धलोभं विषयेषु लालसम्।**
**त्वमप्रमत्तः सहसाभिपद्यसे क्षुल्लेलिहानोऽहिरिवाखुमन्तकः॥ ५०॥**

**पदार्थ–**
**इतिकृत्यचिन्तया** = यसो गर्नुपर्छ भन्ने चिन्ताले
**उच्चैः** = ज्यादै
**प्रमत्तं** = प्रमत्त भएको
**विषयेषु** = सांसारिक विषयमा
**लालसं** = आसक्त भएको र
**प्रवृद्धलोभं** = अत्यन्त लोभ बढेको (हामी जस्तो मानिसलाई)
**अप्रमत्तः** = अति सावधान
**अन्तकः** = कालरूप
**त्वं** = हजुरले
**क्षुल्लेलिहानः** = भोकले जिभ्रो लपलपाएको
**अहिः** = सर्पले
**आखुं इव** = मुसालाई समाते झैँ
**सहसा** = जबर्जस्ती
**अभिपद्यसे** = ग्रस्त पार्नुहुन्छ

**वाक्यार्थ–** यसो गर्नुपर्छ भन्ने चिन्ताले ज्यादै प्रमत्त भएका, सांसारिक विषयमा आसक्त भएका र विषयमा भोगबुद्धिको लालसाले लोभ बढेका हामी जस्ता सांसारिक व्यक्तिलाई कालस्वरूप हजुरले भोकाएको सर्पले मुसा समाते झैँ च्याप्प समात्नुहुन्छ।

**पुरा रथैर्हेमपरिष्कृतैश्चरन् मतङ्गजैर्वा नरदेवसंज्ञितः।**
**स एव कालेन दुरत्ययेन ते कलेवरो विट्कृमिभस्मसंज्ञितः॥ ५१॥**

**पदार्थ–**
**पुरा** = पहिले (जीवित अवस्थामा)
**हेमपरिष्कृतैः** = सुनले सजाएको
**रथैः** = रथहरूद्वारा
**मतङ्गजैः वा** = अथवा हात्तीहरूद्वारा
**चरन्** = घुम्दा (जुन शरीर)
**नरदेवसंज्ञितः** = राजा भनिएर (सम्मानित हुन्छ)
**सः एव** = त्यही नै
**कलेवरः** = शरीर
**दुरत्ययेन** = अलङ्घनीय
**कालेन** = कालरूप
**ते** = हजुरले समातेपछि (मरेपछि)
**विट्कृमिभस्मसंज्ञितः** = (कुनै जन्तुले खाए) विष्ठा, (सडे) किरा र (जलाए) खरानी बन्दछ

**वाक्यार्थ–** पहिले जीवित अवस्थामा जुन शरीर सुवर्णादिले सजाइएको रथमा अथवा हात्तीमा चढेर हिँड्दा सबैले राजा भनेर सम्मान गर्छन्। त्यही शरीर नै जब बदल्न नसकिने कालरूप हजुरले ग्रहण गर्नुहुन्छ र प्राणरहित बन्दछ अनि त्यो शरीर विष्ठा, किरा वा खरानी भनेर चिनिन्छ।

**निर्जित्य दिक्चक्रमभूतविग्रहो वरासनस्थः समराजवन्दितः।**
**गृहेषु मैथुन्यसुखेषु योषितां क्रीडामृगः पूरुष ईश नीयते॥ ५२॥**

**पदार्थ–**
**ईश** = हे सर्वसमर्थ प्रभु
**दिक्चक्रम्** = सारा दिग्दिगन्तरलाई
**निर्जित्य** = जितेर
**अभूतविग्रहः** = शत्रुरहित भएर
**समराजवन्दितः** = आफूसमानका राजाहरूबाट पनि सम्मान पाएर
**वरासनस्थः** = उच्च सिंहासनमा बसेको
**पूरुषः** = व्यक्ति पनि
**मैथुन्यसुखेषु** = मैथुनसुख प्राप्त हुने
**गृहेषु** = गृहस्थाश्रममा
**योषितां** = स्त्रीहरूको
**क्रीडामृगः** = खेलौनाको लागि पालिएको पशुजस्तो
**नीयते** = बन्दछ

**वाक्यार्थ–** हे प्रभु ! सारा दिग्दिगन्तरलाई जितेर शत्रुरहित भई अन्य आफूसमानका राजाहरूबाट पनि सम्मान पाएर उच्च सिंहासनमा बसेको व्यक्ति पनि मैथुनसुख प्राप्त हुने गृहस्थाश्रममा रहँदा केवल स्त्रीहरूको खेलौना बनेर पाल्तु पशुजस्तो भइरहेको हुन्छ।

**करोति कर्माणि तपस्सुनिष्ठितो निवृत्तभोगस्तदपेक्षयाददत् ।**
**पुनश्च भूयेयमहं स्वराडिति प्रवृद्धतर्षो न सुखाय कल्पते ॥ ५३ ॥**

**पदार्थ–**
**तपस्सुनिष्ठितः** = तपस्याहरूमा निष्ठापूर्वक रहेको
**निवृत्तभोगः** = विषयभोगलाई पनि छाडेको व्यक्तिले
**तदपेक्षया** = त्यो (अभीष्ट) वस्तुको चाहनाले
**ददत्** = दान गर्दै
**कर्माणि** = शुभकर्महरू
**करोति** = गर्दछ र
**पुनः च** = फेरि पनि
**अहं** = म
**स्वराट्** = चक्रवर्ती सम्राट्
**भूयेयम् इति** = होऊँ (भन्ने चाहन्छ, यसरी)
**प्रवृद्धतर्षः** = तृष्णालाई बढाएको व्यक्ति
**सुखाय** = सुख प्राप्त गर्न
**न कल्पते** = समर्थ हुँदैन

**वाक्यार्थ–** आफ्नो अभीष्ट वस्तुको चाहनाले तपस्याहरूमा निष्ठापूर्वक रहेको र विषयभोगलाई पनि छाडेको व्यक्तिले दान गर्दै अनेक शुभकर्महरू गर्दछ र फेरि पनि म चक्रवर्ती सम्राट् होऊँ भन्ने चाहन्छ तर यसरी तृष्णालाई बढाएको व्यक्ति कहिल्यै सुख प्राप्त गर्न समर्थ हुँदैन।

**भवापवर्गो भ्रमतो यदा भवेज्जनस्य तर्ह्यच्युत सत्समागमः ।**
**सत्सङ्गमो यर्हि तदैव सद्गतौ परावरेशे त्वयि जायते मतिः ॥ ५४ ॥**

**पदार्थ–**
**अच्युत** = हे भगवान्
**भ्रमतः** = (जन्ममृत्यु युक्त संसारचक्रमा) घुमिरहेको
**जनस्य** = व्यक्तिको
**यदा** = जहिले
**सत्समागमः** = सज्जनहरूसँग मिलन हुन्छ
**तर्हि** = त्यस बखतमा नै
**भवापवर्गः** = संसारको निवृत्ति
**भवेत्** = हुन्छ
**यर्हि** = किनभने
**सत्सङ्गमः** = जहिले सज्जनको सङ्गतमा गइन्छ
**तदा एव** = त्यतिखेर नै
**परावरेशे** = कार्य र कारणरूप सबैका स्वामी
**सद्गतौ** = साधुहरूको परम गतिस्वरूप
**त्वयि** = हजुरमा
**मतिः** = बुद्धि

**जायते** = लाग्दछ

**वाक्यार्थ–** हे भगवान् ! जन्ममृत्युयुक्त संसारचक्रमा घुमिरहेका व्यक्तिहरूले जब सज्जनहरूको सङ्गत प्राप्त गर्दछन्, तब दुःखयुक्त संसारबाट छुट्टी पाउँछन्। किनभने सत्सङ्गत प्राप्त भएपछि सन्तहरूको गतिस्वरूप हुनुभएका अनि कार्य र कारणभन्दा माथि रहेका हजुरमा चित्त लाग्दछ।

**मन्ये ममानुग्रह ईश ते कृतो राज्यानुबन्धापगमो यदृच्छया।**
**यः प्रार्थ्यते साधुभिरेकचर्यया वनं विविक्षद्भिरखण्डभूमिपैः ॥ ५५ ॥**

**पदार्थ–**
**ईश** = हे प्रभु
**यदृच्छया** = अनायास (नै मेरो)
**राज्यानुबन्धापगमः** = राज्यरूपी बन्धन छुटाउने काम
**ते** = हजुरद्वारा
**कृतः** = गरिएको छ (यो)
**मम** = मेरा लागि
**अनुग्रहः** = अनुग्रह नै हो भनेर
**मन्ये** = मैले मानेको छु
**यः** = जो (राज्यबाट छुट्कारा पाऊँ भन्ने कुरा)
**साधुभिः** = साधुस्वभाव भएका
**एकचर्यया** = एक्लै घुमेर
**वनं** = वनमा
**विविक्षद्भिः** = प्रवेश गर्न चाहने
**अखण्डभूमिपैः** = ठुला-ठुला चक्रवर्ती राजाहरूद्वारा
**प्रार्थ्यते** = इच्छा गरिन्छ

**वाक्यार्थ–** हे भगवान् ! हजुरले अनायासमैं मेरो राज्यरूपी बन्धन छुटाइदिनुभएको छ। यो त मैले हजुरको अनुग्रह नै सम्झिएको छु। किनभने जुन बन्धन छुटाउनको लागि वनमा एक्लै तपस्याका लागि जान चाहने साधुस्वभावका चक्रवर्ती राजाहरू इच्छा गर्दछन्।

**न कामयेऽन्यं तव पादसेवनादकिञ्चनप्रार्थ्यतमाद् वरं विभो।**
**आराध्य कस्त्वां ह्यपवर्गदं हरे वृणीत आर्यो वरमात्मबन्धनम् ॥ ५६ ॥**

**पदार्थ–**
**विभो** = हे सर्वव्यापक प्रभु
**अकिञ्चनप्रार्थ्यतमात्** = सारा भोग त्यागेका व्यक्तिहरूद्वारा पनि चाहना गरिने
**तव** = हजुरको
**पादसेवनात्** = चरण सेवादेखि
**अन्यं** = अरू
**वरं** = वर
**न कामये** = म चाहन्नँ
**हरे** = हे दुःखनाशक प्रभु
**हि** = निश्चय नै
**अपवर्गदं** = मोक्ष प्रदान गर्ने
**त्वां** = हजुरलाई
**आराध्य** = आराधना गरेर
**कः** = कुन
**आर्यः** = (उत्कृष्ट व्यक्तिले) विवेकीले
**आत्मबन्धनं** = आफ्नो बन्धनरूप
**वरं** = वर
**वृणीत** = वरण गर्ला (माग्ला)

**वाक्यार्थ–** हे सर्वव्यापक प्रभु ! सारा प्रपञ्चका भोगविलासलाई त्यागेका व्यक्तिहरूद्वारा पनि चाहना गरिने हजुरको चरणको सेवादेखि बाहेक कुनै वर पनि म चाहन्नँ, हे भगवान् ! मोक्ष दिने हजुरलाई प्रसन्न बनाएर कुन चाहिँ विवेकीले आफूलाई बन्धनमा पार्ने विषय रोज्ला र ?

**तस्माद् विसृज्याशिष ईश सर्वतो रजस्तमःसत्त्वगुणानुबन्धनाः ।**
**निरञ्जनं निर्गुणमद्वयं परं त्वां ज्ञप्तिमात्रं पुरुषं व्रजाम्यहम् ॥ ५७ ॥**

**पदार्थ**–
**ईश** = हे सर्वसमर्थ प्रभु
**तस्मात्** = त्यसकारण (हजुरको चरणसेवा नै सर्वोपरि भएकाले)
**रजस्तमःसत्त्वगुणानुबन्धनाः** = रजोगुण, तमोगुण र सत्त्वगुणसँग सम्बन्ध राख्ने
**आशिषः** = आशीर्वादरूप कामनाहरूलाई
**सर्वतः** = सबै प्रकारले
**विसृज्य** = त्यागेर
**अहं** = म
**निरञ्जनं** = मायासँग थोरै पनि सम्बन्ध नभएको (मलरहित)
**निर्गुणं** = गुणातीत
**ज्ञप्तिमात्रं** = केवल ज्ञानस्वरूप
**अद्वयं** = अद्वितीय
**परं पुरुषं** = परम पुरुष
**त्वां** = हजुरको शरणमा
**व्रजामि** = पर्दछु

**वाक्यार्थ**– हे भगवान् ! हजुरको चरणसेवा नै सर्वोपरि भएकाले सत्त्व, रज र तम यी गुणहरूसँग सम्बन्ध राख्ने सारा कामनाहरूलाई सबै प्रकारले त्यागेर म माया र मायाको कार्यसँग कुनै सम्बन्ध नभएको गुणातीत केवल ज्ञानस्वरूप अद्वितीय परमपुरुष हजुरको शरणमा पर्दछु।

**चिरमिह वृजिनार्तस्तप्यमानोऽनुतापै-**
**रवितृषषडमित्रोऽलब्धशान्तिः कथञ्चित् ।**
**शरणद समुपेतस्त्वत्पदाब्जं परात्मन्**
**अभयमृतमशोकं पाहि मापन्नमीश ॥ ५८ ॥**

**पदार्थ**–
**शरणद** = हे शरणदाता
**परात्मन्** = हे परमेश्वर
**इह** = यो संसारमा
**चिरं** = अनादि कालदेखि
**वृजिनार्तः** = दुःखले पीडित भएको र
**अनुतापैः** = कर्मवासनाको तापले
**तप्यमानः** = सन्तप्त भएको तथा
**अवितृषषडमित्रः** = विषयको तृष्णा शान्त नभएका (पाँच ज्ञानेन्द्रिय र मन) इन्द्रियरूप छ ओटा शत्रुद्वारा सताइएको मैले
**अलब्धशान्तिः** = कहिल्यै शान्ति पाइनँ
**ईश** = हे प्रभु
**कथञ्चित्** = कुनै किसिमले (अनि हजुरको कुनै अनुग्रहले)
**अभयं** = भयरहित
**ऋतं** = मृत्युरहित र
**अशोकं** = शोकरहित
**त्वत्पदाब्जं** = हजुरको चरणकमलको शरणमा
**समुपेतः** = आएको छु
**आपन्नं** = शरणमा आएको
**मा** = मलाई
**पाहि** = रक्षा गर्नुहोस्

**वाक्यार्थ**– हे शरणदाता परमेश्वर ! म यस संसारमा अनादि कालदेखि दुःखले पीडित भएको छु र कर्मवासनाको तापले डढेको छु। विषयको तृष्णाबाट शान्त नभएका मेरा यी शत्रुरूप छ ओटा (पाँच ज्ञानेन्द्रिय र मन) इन्द्रियहरूले मलाई सधैँ सताइरहेका छन्। त्यसैले मैले कहिल्यै पनि शान्ति

पाइनँ। हे प्रभु ! अहिले हजुरको अनुग्रहले भयरहित, मृत्युरहित र शोकरहित हजुरको चरणको सन्निधिमा म प्राप्त भएको छु। हजुरको शरणमा परेको मलाई रक्षा गर्नुहोस्।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**सार्वभौम महाराज मतिस्ते विमलोर्जिता।**

**वरैः प्रलोभितस्यापि न कामैर्विहता यतः॥ ५९॥**

**पदार्थ–**
**सार्वभौम** = हे एकछत्र राज्य गर्ने
**महाराज** = हे चक्रवर्ती सम्राट्
**ते** = तिम्रो
**मतिः** = बुद्धि
**विमला** = अत्यन्त शुद्ध छ र
**ऊर्जिता** = (परमार्थदर्शनमा) समर्थ पनि छ
**यतः** = किनभने
**वरैः** = वरहरूद्वारा
**प्रलोभितस्य अपि** = प्रलोभन देखाउँदा पनि
**कामैः** = (भौतिक सम्पत्तिदेखि मोक्षसम्मका) कामनाहरूद्वारा पनि
**न विहता** = विचलित भएन

**वाक्यार्थ–** हे सार्वभौम चक्रवर्ती सम्राट् मुचुकुन्द ! तिम्रो बुद्धि अत्यन्त शुद्ध छ र परमार्थदर्शनमा समर्थ पनि छ किनभने मैले वरहरू दिने प्रलोभन देखाउँदा पनि तिम्रो बुद्धि ती कामनाहरूद्वारा विचलित भएन।

**प्रलोभितो वरैर्यत्त्वमप्रमादाय विद्धि तत्।**

**न धीर्मय्येकभक्तानामाशीर्भिर्भिद्यते क्वचित्॥ ६०॥**

**पदार्थ–**
**वरैः** = विविध वरहरू देखाएर
**यत्** = जो
**त्वं** = तिमी
**प्रलोभितः** = लोभ्याइयौ
**तत्** = त्यो
**अप्रमादाय** = सावधान गराउन हो भनेर
**विद्धि** = बुझ (किनभने)
**मयि** = ममा
**एकान्तभक्तानां** = अनन्य भक्ति गर्ने भक्तहरूको
**धीः** = बुद्धि
**आशीर्भिः** = विषयका लोभहरूद्वारा
**क्वचित्** = कहिल्यै पनि
**न भिद्यते** = विचलित हुँदैन

**वाक्यार्थ–** मैले जो तिमीलाई वर माग भनेर प्रलोभन देखाएँ यो सबै तिमीलाई सावधान गराउनको लागि हो, किनभने जो ममा अत्यन्त भक्ति लगाएर अनन्य भक्त भएको छ उसको बुद्धि विषयका लोभहरूद्वारा कहिल्यै पनि विचलित हुँदैन।

**युञ्जानानामभक्तानां प्राणायामादिभिर्मनः।**

**अक्षीणवासनं राजन् दृश्यते पुनरुत्थितम्॥ ६१॥**

**पदार्थ–**
**राजन्** = हे राजा मुचुकुन्द
**अभक्तानां** = अभक्तको (यदि कोही मेरो अभक्त छ भने तिनको)
**प्राणायामादिभिः** = प्राणायाम आदिको सहायताले
**युञ्जानानां** = निरोधका लागि प्रयास गर्ने व्यक्तिहरूको
**मनः** = मन चाहिँ
**अक्षीणवासनं** = वासना पूरा नभइसकेको हुनाले
**पुनः** = फेरि
**उत्थितं** = (कुनै अवसरमा विषयतिर) अभिमुख भएको
**दृश्यते** = देखिन्छ

**वाक्यार्थ–** हे राजा मुचुकुन्द ! यदि कोही मेरो अभक्त छ र उसले केवल प्राणायाम आदि हठयोगको बलले मनलाई निरोध गर्ने प्रयास गरेको छ भने त्यो मन वासनाशून्य नभएकोले कुनै अवसरमा फेरि विषयतिर अभिमुख भएको देखिन्छ।

**विवरण–** यस श्लोकमा भक्तिविना केवल हठयोग आदिद्वारा मन पूरै वासनारहित नहुने बताइएको छ। प्राणायाम आदि बाहिरी उपायहरूद्वारा मनका वासनाहरू नष्ट हुँदैनन्, केवल रोकिन्छन् मात्र। त्यसैले मनमा रहेका वासनाहरूलाई नष्ट गर्न त भक्ति नै हुनुपर्दछ। भक्तिद्वारा पग्लिएको चित्त वासनाको आग्रहबाट मुक्त हुन्छ, त्यसपछि त्यसमा संसारवासनाको छाप लाग्दैन। त्यसैले यहाँ अभक्त व्यक्तिहरूको वासना पूर्ण रूपले कहिल्यै क्षीण नहुने अनि भक्तहरूका सबै वासना तत्काल नै शान्त हुने कुरा बताइएको छ।

**विचरस्व महीं कामं मय्यावेशितमानसः।**
**अस्त्वेव नित्यदा तुभ्यं भक्तिर्मय्यनपायिनी ॥ ६२ ॥**

**पदार्थ–**
**मयि** = ममा
**आवेशितमानसः** = चित्त लगाएका (तिमी)
**महीं** = पृथिवीमा
**कामं** = इच्छा अनुसार
**विचरस्व** = घुम
**तुभ्यं** = तिमीलाई
**नित्यदा** = सधैँ
**मयि** = ममा
**अयनपायिनी** = वासनाशून्य निर्मल
**भक्तिः** = भक्ति
**अस्तु एव** = रही नै रहोस्

**वाक्यार्थ–** हे राजा ! तिमी ममा चित्त लगाएर इच्छा अनुसार पृथिवीमा घुम। तिम्रो वासनाशून्य निर्मल भक्ति ममा सधैँ लागिरहोस्।

**क्षात्रधर्मस्थितो जन्तून् न्यवधीर्मृगयादिभिः।**
**समाहितस्तत् तपसा जह्यघं मदुपाश्रितः ॥ ६३ ॥**

**पदार्थ–**
**क्षात्रधर्मस्थितः** = क्षत्रिय धर्ममा रहेका तिमीले
**मृगयादिभिः** = शिकार आदिद्वारा
**जन्तून्** = धेरै पशुहरूलाई
**न्यवधीः** = मार्‍यौ (यसैले)
**मदुपाश्रितः** = मेरो उपासना गरेर
**समाहितः** = संयमी भई
**तत्** = त्यो
**अघं** = पापलाई
**तपसा** = तपस्याद्वारा
**जहि** = नाश गर

**वाक्यार्थ–** हे राजा ! तिमीले क्षत्रियधर्मको पालना गर्दा धेरै पशुहरूलाई मारेका छौ। त्यसैले मेरो उपासना गरेर अत्यन्त संयमी भई तपस्याद्वारा त्यो पापलाई नाश गर।

**जन्मन्यनन्तरे राजन् सर्वभूतसुहृत्तमः।**
**भूत्वा द्विजवरस्त्वं वै मामुपैष्यसि केवलम्॥ ६४॥**

**पदार्थ–**
**राजन्** = हे राजा मुचुकुन्द
**अनन्तरे** = अर्को
**जन्मनि** = जन्ममा
**त्वं** = तिमी
**सर्वभूतसुहृत्तमः** = सम्पूर्ण प्राणीहरूको हितैषी
**द्विजवरः** = श्रेष्ठ ब्राह्मण
**भूत्वा** = भएर
**वै** = निश्चय नै
**केवलं** = केवल (विशुद्ध विज्ञान स्वरूप)
**मां** = मलाई
**उपैष्यसि** = प्राप्त गर्नेछौ

**वाक्यार्थ–** हे राजा मुचुकुन्द ! अब अर्को जन्ममा तिमी सम्पूर्ण प्राणीहरूको हितैषी ब्राह्मण भएर जन्मनेछौ र विशुद्ध विज्ञानस्वरूप मलाई प्राप्त गर्नेछौ।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे मुचुकुन्दस्तुतिर्नामैकपञ्चाशत्तमोऽध्यायः॥ ५१॥**

# अथ द्विपञ्चाशत्तमोऽध्यायः

## भगवान् बलरामको विवाह र श्रीकृष्णलाई रुक्मिणीको सन्देश

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इत्थं सोऽनुग्रहीतोऽङ्ग कृष्णेनेक्ष्वाकुनन्दनः।**

**तं परिक्रम्य सन्नम्य निश्चक्राम गुहामुखात्॥ १॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय परीक्षित्
**कृष्णेन** = भगवान् श्रीकृष्णद्वारा
**इत्थं** = यसरी
**अनुग्रहीतः** = अनुग्रह गरिएका
**सः** = ती
**इक्ष्वाकुनन्दनः** = इक्ष्वाकु कुलमा उत्पन्न मुचुकुन्द
**तं** = उहाँ भगवान् श्रीकृष्णलाई
**परिक्रम्य** = परिक्रमा गरेर र
**सन्नम्य** = प्रणाम गरेर
**गुहामुखात्** = गुफाको मुखबाट
**निश्चक्राम** = निस्किए

**वाक्यार्थ–** हे प्रिय परीक्षित्! भगवान् श्रीकृष्णद्वारा यसरी अनुग्रह गरिएका ती इक्ष्वाकु कुलमा उत्पन्न राजा मुचुकुन्द भगवान् श्रीकृष्णलाई परिक्रमा गरी प्रणाम गरेर गुफाबाट निस्किए।

**स वीक्ष्य क्षुल्लकान् मर्त्यान् पशून् वीरुद्वनस्पतीन्।**

**मत्वा कलियुगं प्राप्तं जगाम दिशमुत्तराम्॥ २॥**

**पदार्थ–**
**सः** = ती राजा मुचुकुन्दले
**क्षुल्लकान्** = (गुण र प्रमाण दुबैमा) क्षुद्र
**मर्त्यान्** = मानिसहरूलाई
**पशून्** = पशुहरूलाई र
**वीरुद्वनस्पतीन्** = लता, वनस्पतिहरूलाई पनि
**वीक्ष्य** = देखेर
**कलियुगं** = कलियुग
**प्राप्तं** = प्राप्त भएको
**मत्वा** = बुझेर
**उत्तरां दिशं** = उत्तर दिशातिर
**जगाम** = लागे

**वाक्यार्थ–** त्यसपछि ती राजा मुचुकुन्दले गुण र प्रमाण दुबै दृष्टिले क्षुद्र मानिस, पशुपक्षी, वृक्ष र वनस्पतिहरूलाई देखेर अब कलियुग लागेछ भन्ने विचार गरी तपस्याका लागि उत्तर दिशातिर लागे।

**तपःश्रद्धायुतो धीरो निःसङ्गो मुक्तसंशयः।**

**समाधाय मनः कृष्णे प्राविशद् गन्धमादनम्॥ ३॥**

**पदार्थ–**
**तपःश्रद्धायुतः** = तपस्यामा श्रद्धा भएका
**धीरः** = धैर्यशाली
**निःसङ्गः** = आसक्तिरहित
**मुक्तसंशयः** = (तत्त्वको

विषयमा) सन्देह नभएका राजा मुचुकुन्दले
**मनः** = आफ्नो मनलाई
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**समाधाय** = लगाएर
**गन्धमादनं** = गन्धमादन पर्वततिर
**प्राविशत्** = प्रवेश गरे

**वाक्यार्थ–** तपस्यामा अत्यन्त श्रद्धा भएका, धैर्यशाली, आसक्तिरहित तथा संशयबाट मुक्त भएका राजा मुचुकुन्द आफ्नो मन भगवान् श्रीकृष्णमा लगाएर गन्धमादन पर्वततिर प्रवेश गरे।

**बदर्याश्रममासाद्य नरनारायणालयम्।**

**सर्वद्वन्द्वसहः शान्तस्तपसाराधयद्धरिम्॥ ४॥**

**पदार्थ–**
**नरनारायणालयं** = भगवान् नरनारायणको निवासस्थान
**बदर्याश्रमं** = बदरिकाश्रममा
**आसाद्य** = पुगेर
**सर्वद्वन्द्वसहः** = सुख–दुःख आदि सारा द्वन्द्वलाई सहन गरेर
**शान्तः** = शान्त भई
**तपसा** = तपस्याद्वारा
**हरिम्** = भगवान् श्रीहरिलाई
**आराधयत्** = आराधना गर्न लागे

**वाक्यार्थ–** नरनारायणको नित्य निवासस्थान भएको बदरिकाश्रममा पुगेर राजा मुचुकुन्दले सारा द्वन्द्वलाई सहन गर्दै शान्त भई तपस्याद्वारा भगवान् श्रीहरिको आराधना गर्न लागे।

**भगवान् पुनराव्रज्य पुरीं यवनवेष्टिताम्।**

**हत्वा म्लेच्छबलं निन्ये तदीयं द्वारकां धनम्॥ ५॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्णले
**पुनः** = फेरि
**यवनवेष्टितां** = यवनको सेनाद्वारा घेरिएको
**पुरीं** = मथुरा नगरीमा
**आव्रज्य** = आएर
**म्लेच्छबलं** = सारा म्लेच्छ सेनाहरूलाई
**हत्वा** = मारेर
**तदीयं** = तिनीहरूका
**धनं** = धन
**द्वारकां** = द्वारकातिर
**निन्ये** = लैजानुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण पनि फेरि यवनसेनाद्वारा घेरिएको मथुरानगरीमा जानुभयो र ती सारा म्लेच्छ सेनाहरूलाई मारी तिनीहरूका धनसम्पत्ति लिएर द्वारकातर्फ जानुभयो।

**नीयमाने धने गोभिर्नृभिश्चाच्युतचोदितैः।**

**आजगाम जरासन्धस्त्रयोविंशत्यनीकपः॥ ६॥**

**पदार्थ–**
**अच्युतचोदितैः** = भगवान् श्रीकृष्णद्वारा लगाइएका
**नृभिः** = मानिसहरूद्वारा
**गोभिः** = गोरुहरूलाई बोकाएर
**धने** = सम्पत्ति
**नीयमाने** = लैजाँदै गरिँदा
**त्रयोविंशत्यनीकपः** = तेईस अक्षौहिणी सेना साथमा लिई
**जरासन्धः च** = जरासन्ध पनि (अठारौँ पटक)
**आजगाम** = (युद्धका लागि)

आइपुग्यो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णको प्रेरणाले उहाँका मानिसहरूले गोरुलाई बोकाई द्वारकातिर सम्पत्ति लैंजादै गर्दा मगधराज जरासन्ध तेईस अक्षौहिणी सेना लिएर युद्ध गर्न आइपुग्यो।

**विलोक्य वेगरभसं रिपुसैन्यस्य माधवौ।**
**मनुष्यचेष्टामापन्नौ राजन् दुद्रुवतुर्द्रुतम्॥ ७॥**

पदार्थ–
**राजन्** = हे राजा परीक्षित्
**रिपुसैन्यस्य** = शत्रुसेनाको
**वेगरभसं** = प्रभावशाली वेगलाई
**विलोक्य** = देखेर
**मनुष्यचेष्टाम् आपन्नौ** = सामान्य मनुष्यले झैं लीला गर्दै
**माधवौ** = श्रीकृष्ण र बलराम
**द्रुतं** = छिटो–छिटो (युद्धभूमिबाट)
**दुद्रुवतुः** = भाग्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! शत्रुपक्षको सेनाको प्रबल वेगलाई देखेर मनुष्यको जस्तो काम गर्नुहुने भगवान् श्रीकृष्ण र बलराम युद्धभूमिबाट छिटो–छिटो भाग्नुभयो।

**विहाय वित्तं प्रचुरमभीतौ भीरुभीतवत्।**
**पद्भ्यां पद्मपलाशाभ्यां चेरतुर्बहुयोजनम्॥ ८॥**

पदार्थ–
**अभीतौ** = वास्तवमा नडराए पनि भगवान् श्रीकृष्ण र बलराम
**भीरुभीतवत्** = कायर जस्तो अत्यन्त डराए झैं गरी
**प्रचुरं** = धेरै
**वित्तं** = धनसम्पत्तिलाई
**विहाय** = छाडेर
**पद्मपलाशाभ्यां** = कमलका पात जस्ता कोमल
**पद्भ्यां** = पाउद्वारा
**बहुयोजनं** = धेरै योजन टाढा
**चेरतुः** = पुग्नुभयो

**वाक्यार्थ–** वास्तवमा नडराए पनि भगवान् श्रीकृष्ण र बलराम कायर झैं अति डराए झैं गरी सारा लैजान लागेका धनसम्पत्तिलाई छोडेर कमलका पात जस्ता कोमल खुट्टाले हिँडेर युद्धभूमिबाट धेरै योजन टाढा पुग्नुभयो।

**पलायमानौ तौ दृष्ट्वा मागधः प्रहसन् बली।**
**अन्वधावद् रथानीकैरीशयोरप्रमाणवित्॥ ९॥**

पदार्थ–
**ईशयोः** = भगवान् श्रीकृष्ण र बलरामको
**अप्रमाणवित्** = प्रभावलाई नबुझेको
**बली** = बलशाली
**मागधः** = मगधनरेश जरासन्ध
**पलायमानौ** = भागिरहेका
**तौ** = ती दुई भाइलाई
**दृष्ट्वा** = देखेर
**प्रहसन्** = हाँस्दै
**रथानीकैः** = रथ र सेनाहरू सहित
**अन्वधावत्** = पछि–पछि दौडियो

**वाक्यार्थ–** भगवान् श्रीकृष्ण र बलरामको प्रभावलाई नबुझेको महाबली जरासन्धले भागिरहेका श्रीकृष्ण र बलरामलाई देखेर हाँस्दै सेना र रथ सहित पछि लाग्यो।

**प्रद्रुत्य दूरं संश्रान्तौ तुङ्गमारुहतां गिरिम्।**
**प्रवर्षणाख्यं भगवान् नित्यदा यत्र वर्षति ॥ १० ॥**

पदार्थ–
**दूरं** = धेरै टाढा
**प्रद्रुत्य** = भागेर
**संश्रान्तौ** = थाकेका श्रीकृष्ण र बलराम
**प्रवर्षणाख्यं** = प्रवर्षण नाम गरेको
**तुङ्गं** = अति अग्लो
**गिरिम्** = पहाडमा
**आरुहतां** = चढ्नुभयो
**यत्र** = जुन पहाडमा
**नित्यदा** = सधैँ
**भगवान्** = भगवान् पर्जन्यले
**वर्षति** = वर्षा गर्दछन्

**वाक्यार्थ–** धेरै टाढा भागेर गइसकेपछि भगवान् श्रीकृष्ण र बलराम थाक्नुभयो र एउटा अग्लो प्रवर्षण नाम गरेको पहाडमा चढ्नुभयो। जहाँ भगवान् पर्जन्यले सधैँ वर्षा गर्दछन्। (त्यसकारण नै पहाडको नाम प्रवर्षण रहेको थियो।)

**गिरौ निलीनावाज्ञाय नाधिगम्य पदं नृप।**
**ददाह गिरिमेधोभिः समन्तादग्निमुत्सृजन् ॥ ११ ॥**

पदार्थ–
**नृप** = हे राजा परीक्षित्
**गिरौ** = प्रवर्षण पहाडमा
**निलीनौ** = दुबै जना लुकेको
**आज्ञाय** = थाहा पाएर (र)
**पदं** = (कतै गएको) पदचिह्न
**न अधिगम्य** = नदेखेर
**समन्तात्** = चारै तर्फबाट
**अग्निं** = आगो
**उत्सृजन्** = लगाउँदै
**एधोभिः** = दाउराको थुप्रोद्वारा
**गिरिम्** = पहाडलाई
**ददाह** = जलाइदियो

**वाक्यार्थ–** हे परीक्षित्! त्यसपछि जरासन्धले ती दुबै श्रीकृष्ण र बलराम कतै गएको पदचिह्न नदेखेपछि त्यही पहाडमा लुकेको निश्चय गऱ्यो र धेरै दाउरा जम्मा पारेर चारै तर्फबाट प्रवर्षण पहाडमा आगो लगाइदियो।

**तत उत्पत्य तरसा दह्यमानतटादुभौ।**
**दशैकयोजनोत्तुङ्गान्निपेततुरधो भुवि ॥ १२ ॥**

पदार्थ–
**दह्यमानतटात्** = किनार डढ्न लागेको प्रवर्षण पहाडबाट
**उभौ** = ती दुई भाइ
**तरसा** = वेगले
**उत्पत्य** = उफ्रिएर
**ततः** = त्यो
**दशैकयोजनोत्तुङ्गात्** = एघार योजन अग्लो ठाउँबाट (जरासन्धको सेनालाई नाघ्दै)
**अधः भुवि** = तल भुइँमा
**निपेततुः** = हाम फाल्नुभयो

**वाक्यार्थ–** प्रवर्षण पहाडको किनार डढ्न थालेपछि ती श्रीकृष्ण र बलराम दुबै एघार योजन अग्लो त्यो पहाडबाट जरासन्धका सेनालाई नाघ्दै तल भुइँमा हाम फाल्नुभयो।

**अलक्ष्यमाणौ रिपुणा सानुगेन यदूत्तमौ।**
**स्वपुरं पुनरायातौ समुद्रपरिखां नृप ॥ १३ ॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**सानुगेन** = सेना सहित भएको
**रिपुणा** = शत्रु जरासन्धद्वारा
**अलक्ष्यमाणौ** = पत्ता लगाउन नसकिएका
**यदूत्तमौ** = यदुश्रेष्ठ श्रीकृष्ण र बलराम
**पुनः** = फेरि
**समुद्रपरिखां** = समुद्रले घेरिएको
**स्वपुरं** = आफ्नो नगर द्वारकामा
**आयातौ** = आउनुभयो

**वाक्यार्थ–** हे राजा परीक्षित् ! सारा सेनाले सहित घेरेर बसिरहेको शत्रु जरासन्धले पत्तै नपाईकन श्रीकृष्ण र बलराम समुद्रले घेरिएको आफ्नै नगर द्वारकामा आउनुभयो।

**सोऽपि दग्धाविति मृषा मन्वानो बलकेशवौ।**
**बलमाकृष्य सुमहन्मगधान् मागधो ययौ ॥ १४ ॥**

**पदार्थ–**
**सः** = त्यो
**मागधः अपि** = मगधनरेश जरासन्ध पनि
**बलकेशवौ** = बलराम र श्रीकृष्ण
**दग्धौ इति** = डढे भन्ने
**मृषा** = गलत
**मन्वानः** = विचार गर्दै
**सुमहत् बलं** = विशाल सेनालाई
**आकृष्य** = फर्काएर
**मगधान्** = मगधदेशतिर नै
**ययौ** = गयो

**वाक्यार्थ–** मगधको राजा जरासन्ध पनि अब यी दुई श्रीकृष्ण बलराम डढेर मरे भन्ने गलत विचार गरेर आफ्ना सारा सैन्यबललाई फर्काई आफ्नै मगधदेशतिर फर्कियो।

**आनर्ताधिपतिः श्रीमान् रैवतो रेवतीं सुताम्।**
**ब्रह्मणा चोदितः प्रादाद् बलायेति पुरोदितम् ॥ १५ ॥**

**पदार्थ–**
**ब्रह्मणा** = ब्रह्माजीबाट
**चोदितः** = प्रेरणा पाएका
**आनर्ताधिपतिः** = आनर्त देशका राजा
**श्रीमान्** = ऐश्वर्यसम्पन्न
**रैवतः** = रैवतले
**सुतां** = छोरी
**रेवतीं** = रेवतीलाई
**बलाय** = बलरामलाई
**प्रादात् इति** = दिए भन्ने कुरा
**पुरा उदितम्** = (मद्वारा) पहिले नै भनियो

**वाक्यार्थ–** हे परीक्षित् ! आनर्त देशका राजा ऐश्वर्यशाली रैवतले ब्रह्माजीको आज्ञा अनुसार आफ्नी छोरी रेवतीलाई बलरामसँग विवाह गरिदिए भन्ने कुरा मैले पहिले (नवमस्कन्ध,

तृतीयाध्याय, ३६ मा) नै भनिसकेँ।

**भगवानपि गोविन्द उपयेमे कुरूद्वह ।**
**वैदर्भीं भीष्मकसुतां श्रियो मात्रां स्वयंवरे ॥ १६ ॥**
**प्रमथ्य तरसा राज्ञः शाल्वादींश्चैद्यपक्षगान् ।**
**पश्यतां सर्वलोकानां तार्क्ष्यपुत्रः सुधामिव ॥ १७ ॥**

**पदार्थ–**
**कुरूद्वह** = हे कुरुश्रेष्ठ परीक्षित्
**भगवान्** = भगवान्
**गोविन्दः अपि** = श्रीकृष्णले पनि
**सर्वलोकानां** = सबै मानिसहरूले
**पश्यतां** = हेर्दा–हेर्दै
**श्रियः** = लक्ष्मीजीको
**मात्रां** = अवतारस्वरूप
**वैदर्भीं** = विदर्भदेशमा जन्मिएकी
**भीष्मकसुतां** = भीष्मकको छोरी रुक्मिणीलाई
**स्वयंवरे** = स्वयंवरको अवसरमा
**तरसा** = जबर्जस्ती
**चैद्यपक्षगान्** = शिशुपालका पक्ष लिने
**शाल्वादीन्** = शाल्व आदि
**राज्ञः** = राजाहरूलाई
**प्रमथ्य** = हराएर
**तार्क्ष्यपुत्रः** = गरुडले
**सुधाम् इव** = अमृत लगे झैँ
**उपयेमे** = (हरण गरेर) विवाह गर्नुभयो

**वाक्यार्थ–** हे परीक्षित् ! भगवान् श्रीकृष्णले पनि सबैले हेर्दा–हेर्दै साक्षात् लक्ष्मीको अवतार विदर्भ देशकी राजकुमारी भीष्मकपुत्री रुक्मिणीलाई स्वयंवरको अवसरमा शिशुपालपक्षीय शाल्व आदि राजाहरूलाई युद्धमा हराएर गरुडले अमृत हरण गरे झैँ हरण गरेर विवाह गर्नुभयो।
**टिप्पणी–** गरुडले स्वर्गका सम्पूर्ण देवताहरूलाई हराएर अमृत हरण गरेको प्रसङ्ग महाभारत आदिपर्वको उनान्तीसौँ अध्यायमा वर्णन गरिएको छ।

**राजोवाच** (राजा परीक्षित्ले भन्नुभयो)

**भगवान् भीष्मकसुतां रुक्मिणीं रुचिराननाम् ।**
**राक्षसेन विधानेन उपयेम इति श्रुतम् ॥ १८ ॥**

**पदार्थ–**
**भगवान्** = भगवान् श्रीकृष्णले
**भीष्मकसुतां** = भीष्मकको छोरी
**रुचिराननां** = सुन्दर अनुहार भएकी
**रुक्मिणीं** = रुक्मिणीलाई
**राक्षसेन विधानेन** = (हरण गरेर) राक्षस विधिले
**उपयेमे इति** = विवाह गर्नुभयो भन्ने कुरा
**श्रुतम्** = सुनेका छौँ

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले राजा भीष्मकको छोरी सुन्दरी रुक्मिणीलाई हरण गरेर राक्षस विधिले विवाह गर्नुभयो भन्ने कुरा हामीले सुनेका छौँ।

**भगवञ्छ्रोतुमिच्छामि कृष्णस्यामिततेजसः।**
**यथा मागधशाल्वादीन् जित्वा कन्यामुपाहरत्॥ १९॥**

**पदार्थ–**
**भगवन्** = हे भगवान्
**यथा** = जसरी (भगवान् श्रीकृष्णले)
**मागधशाल्वादीन्** = जरासन्ध, शाल्व आदि राजाहरूलाई
**जित्वा** = जितेर
**कन्यां** = कन्या रुक्मिणीलाई
**उपाहरत्** = हरण गर्नुभयो, ती सबै
**अमिततेजसः** = परम तेजस्वी
**कृष्णस्य** = भगवान् श्रीकृष्णको चरित्रलाई
**श्रोतुं** = सुन्न
**इच्छामि** = चाहन्छु

**वाक्यार्थ–** हे प्रभु ! भगवान् श्रीकृष्णले जसरी ती जरासन्ध, शाल्व आदि राजाहरूलाई पराजित गरी रुक्मिणीलाई हरण गर्नुभयो, परम तेजस्वी श्रीकृष्णका ती सबै चरित्र म सुन्न चाहन्छु।

**ब्रह्मन् कृष्णकथाः पुण्या माध्वीर्लोकमलापहाः।**
**को नु तृप्येत शृण्वानः श्रुतज्ञो नित्यनूतनाः॥ २०॥**

**पदार्थ–**
**ब्रह्मन्** = हे ब्रह्मर्षि
**पुण्याः** = अति पवित्र
**माध्वीः** = अति मिठो
**लोकमलापहाः** = सबैको मल (पाप)लाई पखालिदिने र
**नित्यनूतनाः** = सधैँ नयाँ-नयाँ लाग्ने
**कृष्णकथाः** = श्रीकृष्णका चरित्रका कथाहरूलाई
**शृण्वानः** = सुन्दा-सुन्दै
**कः श्रुतज्ञः** = कुन चाहिँ रसिक
**नु** = निश्चय नै
**तृप्येत** = तृप्त होला

**वाक्यार्थ–** हे ब्रह्मर्षि शुकदेव ! अति पवित्र, सुन्नमा मिठो र सारा लोकको पाप पखालिदिने, जति सुने पनि सधैँ नयाँ लाग्ने श्रीकृष्णका चरित्रलाई सुनेर कुन चाहिँ रसिक व्यक्ति तृप्त होला र ?

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**राजासीद् भीष्मको नाम विदर्भाधिपतिर्महान्।**
**तस्य पञ्चाभवन् पुत्राः कन्यैका च वरानना॥ २१॥**

**पदार्थ–**
**विदर्भाधिपतिः** = विदर्भ देशका मालिक
**भीष्मकः नाम** = भीष्मक नामका
**महान्** = परम प्रतापी
**राजा** = राजा
**आसीत्** = थिए
**तस्य** = उनकी
**एका** = एउटी
**वरानना** = अति सुन्दरी
**कन्या** = छोरी र
**पञ्च** = पाँच
**पुत्राः च** = छोराहरू पनि
**अभवन्** = भए

**वाक्यार्थ–** हे परीक्षित् ! विदर्भ देशका अधिपति भीष्मक नामका प्रतापी राजा थिए। उनकी

एउटी सुन्दरी छोरी र पाँच भाइ छोराहरू थिए।

**रुक्म्यग्रजो रुक्मरथो रुक्मबाहुरनन्तरः।**

**रुक्मकेशो रुक्ममाली रुक्मिण्येषां स्वसा सती ॥ २२ ॥**

**पदार्थ–**
**अग्रजः** = सबैभन्दा जेठो
**रुक्मी** = रुक्मी थियो
**अनन्तरः** = त्यसपछि
**रुक्मरथः** = रुक्मरथ
**रुक्मबाहुः** = रुक्मबाहु
**रुक्मकेशः** = रुक्मकेश र
**रुक्ममाली** = रुक्ममाली नामका (छोराहरू थिए, अनि)
**एषां** = यिनीहरूकी
**स्वसा** = बहिनी चाहिँ
**सती** = असल स्वभावकी
**रुक्मिणी** = रुक्मिणी थिइन्

**वाक्यार्थ–** ती छोराहरूमध्ये जेठो रुक्मी थियो र क्रमशः रुक्मरथ, रुक्मबाहु, रुक्मकेश तथा रुक्ममाली छोराहरू थिए, अनि यिनीहरूकी बहिनी रुक्मिणी असल स्वभावकी थिइन्।

**सोपश्रुत्य मुकुन्दस्य रूपवीर्यगुणश्रियः।**

**गृहागतैर्गीयमानास्तं मेने सदृशं पतिम् ॥ २३ ॥**

**पदार्थ–**
**सा** = ती रुक्मिणीले
**गृहागतैः** = घरमा आएका व्यक्तिहरूद्वारा
**गीयमानाः** = वर्णन गरिएका
**मुकुन्दस्य** = भगवान् श्रीकृष्णको
**रूपवीर्यगुणश्रियः** = रूप, पराक्रम, गुण र ऐश्वर्यलाई
**उपश्रुत्य** = सुनेर
**तं** = उहाँ (श्रीकृष्ण)लाई
**सदृशं** = आफूलाई सुहाउने
**पतिं** = पतिको रूपमा
**मेने** = स्वीकार गरिन्

**वाक्यार्थ–** ती रुक्मिणीले आफ्ना घरमा आएका व्यक्तिहरूद्वारा भगवान् श्रीकृष्णको रूप, पराक्रम, गुण र ऐश्वर्यलाई वर्णन गरिएको सुनेर मन-मनले भगवान्‌लाई नै आफूलाई सुहाउने पतिको रूपमा स्वीकार गरिन्।

**तां बुद्धिलक्षणौदार्यरूपशीलगुणाश्रयाम्।**

**कृष्णश्च सदृशीं भार्यां समुद्वोढुं मनो दधे ॥ २४ ॥**

**पदार्थ–**
**कृष्णः च** = भगवान् श्रीकृष्णले पनि
**तां** = ती
**बुद्धिलक्षणौदार्यरूपशील-गुणाश्रयां** = विवेक, उदारता, सुन्दरता, शील, गुण आदिले युक्त भएकी रुक्मिणीलाई
**सदृशीं** = आफ्नो अनुरूप
**भार्यां** = पत्नीको रूपमा
**समुद्वोढुं** = विवाह गर्न
**मनः** = मन
**दधे** = लगाउनुभयो

**वाक्यार्थ–** भगवान् श्रीकृष्णले पनि रुक्मिणीको विवेक, उदारता, सुन्दरता, शील आदि गुण

भएको सुनेर आफूलाई सुहाउने ठानेर उनलाई पत्नीको रूपमा विवाह गर्ने विचार गर्नुभयो।

**बन्धूनामिच्छतां दातुं कृष्णाय भगिनीं नृप।**
**ततो निवार्य कृष्णद्विड् रुक्मी चैद्यममन्यत॥ २५॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित्
**कृष्णाय** = भगवान् श्रीकृष्णलाई
**भगिनीं** = बहिनी रुक्मिणी
**दातुं** = दिनको लागि
**बन्धूनां** = अरू बन्धुहरूले
**इच्छतां** = इच्छा गर्दागर्दै पनि
**कृष्णद्विट्** = श्रीकृष्णलाई द्वेष गर्ने
**रुक्मी** = रुक्मीले
**ततः** = त्यो कुराबाट
**निवार्य** = रोकेर
**चैद्यं** = शिशुपाललाई (वर बनाउने)
**अमन्यत** = विचार गर्‍यो

**वाक्यार्थ–** हे परीक्षित् ! अरू बन्धुबान्धवहरूले रुक्मिणी श्रीकृष्णलाई नै दिने इच्छा गर्दागर्दै पनि श्रीकृष्णसँग द्वेष गर्ने रुक्मीले त्यो कुरा मानेन र रुक्मिणीलाई शिशुपालसँग विवाह गरिदिने विचार गर्‍यो।

**तदवेत्यासितापाङ्गी वैदर्भी दुर्मना भृशम्।**
**विचिन्त्याप्तं द्विजं कञ्चित् कृष्णाय प्राहिणोद् द्रुतम्॥ २६॥**

**पदार्थ–**
**तत्** = त्यो (आफ्नो विवाह शिशुपालसँग हुने भन्ने कुरा)
**अवेत्य** = बुझेर
**दुर्मनाः** = दुःखी भएकी
**असितापाङ्गी** = आँखाका छेउ काला भएकी (काला आँखा भएकी)
**वैदर्भी** = विदर्भदेशकी राजकुमारी रुक्मिणी
**भृशं** = ज्यादै
**विचिन्त्य** = चिन्तित भएर
**कञ्चित्** = कुनै
**आप्तं** = विश्वासपात्र
**द्विजं** = ब्राह्मणलाई
**कृष्णाय** = श्रीकृष्णलाई (सन्देश पुऱ्याउनका लागि)
**द्रुतम्** = चाँडो-चाँडो
**प्राहिणोत्** = पठाइन्

**वाक्यार्थ–** त्यो (आफ्नो विवाह शिशुपालसँग गरिदिन लागेको) कुरा थाहा पाएकी काला आँखा भएकी राजकुमारी रुक्मिणी अत्यन्त दुःखी भइन् र ज्यादै चिन्तित भएर कुनै विश्वासपात्र ब्राह्मणलाई श्रीकृष्णका लागि सन्देश पुऱ्याउन चाँडै नै द्वारका पठाइन्।

**द्वारकां स समभ्येत्य प्रतीहारैः प्रवेशितः।**
**अपश्यदाद्यं पुरुषमासीनं काञ्चनासने॥ २७॥**

**पदार्थ–**
**द्वारकां** = द्वारकामा
**समभ्येत्य** = पुगेपछि
**प्रतीहारैः** = द्वारपालहरूद्वारा
**प्रवेशितः** = भित्र प्रवेश गराइएका
**सः** = ती ब्राह्मणले
**काञ्चनासने** = सुनको सिंहासनमा

**आसीनं** = बसिरहनुभएका
**आद्यं पुरुषं** = आदिपुरुष
भगवान् श्रीकृष्णलाई
**अपश्यत्** = देखे

**वाक्यार्थ–** ती ब्राह्मण द्वारकामा पुगेपछि त्यहाँका द्वारपालहरूले उनलाई भित्र लगे। त्यहाँ ती ब्राह्मणले सुनको सिंहासनमा बसिरहनुभएका आद्यपुरुष भगवान् श्रीकृष्णलाई देखे।

**दृष्ट्वा ब्रह्मण्यदेवस्तमवरुह्य निजासनात्।**
**उपवेश्यार्हयाञ्चक्रे यथात्मानं दिवौकसः॥ २८॥**

पदार्थ–
**ब्रह्मण्यदेवः** = ब्राह्मणहरूका परमभक्त भगवान् श्रीकृष्णले
**तं** = ती ब्राह्मणलाई
**दृष्ट्वा** = देखेर
**निजासनात्** = आफ्नो आसनबाट
**अवरुह्य** = ओर्लिएर
**उपवेश्य** = आसनमा राखी
**दिवौकसः** = देवताहरूले
**यथा** = जसरी
**आत्मानं** = आफूलाई (पूजा गर्दछन् त्यसै गरी)
**अर्हयाञ्चक्रे** = पूजा गर्नुभयो

**वाक्यार्थ–** ब्राह्मणहरूका परमभक्त भगवान् श्रीकृष्णले ती ब्राह्मणलाई देखेर आफू आसनबाट ओर्ली उनलाई आसनमा राखेर देवताहरूले आफ्नो पूजा गरे झैं पूजा गर्नुभयो।

**तं भुक्तवन्तं विश्रान्तमुपगम्य सतां गतिः।**
**पाणिनाभिमृशन् पादावव्यग्रस्तमपृच्छत॥ २९॥**

पदार्थ–
**विश्रान्तं** = केही विश्राम गरेर
**भुक्तवन्तं** = भोजन गरिसकेका
**तं** = ती ब्राह्मणको अगाडि
**सतां गतिः** = सज्जनहरूका परम गतिस्वरूप भगवान् श्रीकृष्ण
**उपगम्य** = नजिक गएर
**पाणिना** = आफ्नो हातले
**पादौ** = (ब्राह्मणका) पाउलाई
**अभिमृशन्** = मुसार्दै
**अव्यग्रः** = धैर्यका साथ
**तं** = ती ब्राह्मणलाई
**अपृच्छत** = सोध्नुभयो

**वाक्यार्थ–** ती ब्राह्मणले विश्राम गरेर भोजन गरिसकेपछि सज्जनहरूका परम गतिस्वरूप भगवान् श्रीकृष्णले ब्राह्मणको नजिक गएर आफ्नो हातले उनको पाउलाई मुसार्दै धैर्यका साथ सोध्नुभयो।

**कच्चिद् द्विजवरश्रेष्ठ धर्मस्ते वृद्धसम्मतः।**
**वर्तते नातिकृच्छ्रेण सन्तुष्टमनसः सदा॥ ३०॥**

पदार्थ–
**द्विजवरश्रेष्ठ** = हे श्रेष्ठ ब्राह्मण
**नातिकृच्छ्रेण** = कष्टविना नै कर्म सम्पादन गर्नाले
**सदा** = सधैं
**सन्तुष्टमनसः** = सन्तुष्ट चित्त भएका
**ते** = हजुरको
**वृद्धसम्मतः** = परम्पराबाट पूर्वजहरूले गर्दै आएको
**धर्मः** = धर्मपालनमा
**कच्चित्** = कुनै (कठिनाइ)

**वर्तते** = छ कि

**वाक्यार्थ–** हे श्रेष्ठ ब्राह्मण ! कष्टविना नै कर्म सम्पादन गर्नाले सधैँ सन्तुष्ट चित्त भएका हजुरलाई आफूले अनुष्ठान गर्दै आएको धर्मपालन गर्नमा कुनै कठिनाइ छ कि ?

**सन्तुष्टो यर्हि वर्तेत ब्राह्मणो येन केनचित् ।**

**अहीयमानः स्वाद् धर्मात् स ह्यस्याखिलकामधुक् ॥ ३१ ॥**

पदार्थ–
**यर्हि** = किनभने
**ब्राह्मणः** = ब्राह्मण
**येन केनचित्** = जो कुनै प्राप्त भएको वस्तुबाट
**सन्तुष्टः** = सन्तुष्ट भएर र
**स्वात् धर्मात्** = आफ्नो धर्मबाट
**अहीयमानः** = विचलित नभई
**वर्तेत** = रहोस्
**हि** = निश्चय नै
**सः** = त्यही अनुष्ठान गरिएको धर्म नै
**अस्य** = यस ब्राह्मणको
**अखिलकामधुक्** = सारा इच्छालाई पूर्ण गरिदिनेवाला हुन्छ

**वाक्यार्थ–** ब्राह्मणहरूले यत्नविना स्वाभाविक रूपले प्राप्त भएको कुराबाट सन्तुष्ट हुनुपर्दछ र आफ्नो धर्मबाट विचलित हुनुहुँदैन। त्यही अनुष्ठान गरिएको धर्म नै ब्राह्मणहरूको लागि सारा इच्छा पूर्ण गरिदिनेवाला बन्दछ।

**असन्तुष्टोऽसकृल्लोकानाप्नोत्यपि सुरेश्वरः ।**

**अकिञ्चनोऽपि सन्तुष्टः शेते सर्वाङ्गविज्वरः ॥ ३२ ॥**

पदार्थ–
**सुरेश्वरः अपि** = इन्द्र नै पनि
**असन्तुष्टः** = असन्तुष्ट छन् भने
**असकृल्लोकान्** = (स्वर्ग आदि लोकबाट सन्तुष्ट नभई) लोकान्तरको तृष्णालाई
**आप्नोति** = प्राप्त गर्दछन्
**अकिञ्चनः अपि** = केही नभएको व्यक्ति पनि
**सन्तुष्टः** = यदि सन्तुष्ट छ भने
**सर्वाङ्गविज्वरः** = कुनै ताप र चिन्ता नभईकन (आनन्दले)
**शेते** = सुत्दछ

**वाक्यार्थ–** इन्द्र नै भए पनि यदि सन्तोष छैन भने लोक–लोकान्तरको चाहनाले सताउँछ, कहिल्यै शान्ति मिल्दैन, तर केही नभएको व्यक्ति भए पनि सन्तोष छ भने उसलाई कुनै ताप र चिन्ता हुँदैन, ऊ आनन्दसँग बस्दछ।

**विप्रान् स्वलाभसन्तुष्टान् साधून् भूतसुहृत्तमान् ।**

**निरहङ्कारिणः शान्तान् नमस्ये शिरसासकृत् ॥ ३३ ॥**

पदार्थ–
**स्वलाभसन्तुष्टान्** = स्वाभाविक रूपले प्राप्त भएको वस्तुबाट सन्तुष्ट हुने
**साधून्** = साधुस्वभावका
**भूतसुहृत्तमान्** = सम्पूर्ण

| | | |
|---|---|---|
| प्राणीहरूका हितैषी | **विप्रान्** = ब्राह्मणहरूलाई | **नमस्ये** = नमस्कार गर्दछु |
| **निरहङ्कारिणः** = अहङ्काररहित | **शिरसा** = शिरद्वारा | |
| **शान्तान्** = शान्त स्वभावका | **असकृत्** = बारम्बार | |

**वाक्यार्थ–** स्वाभाविक रूपले प्राप्त वस्तुमा सन्तुष्ट हुने, सम्पूर्ण प्राणीहरूको हितैषी, अहङ्कारशून्य, सज्जन र शान्त स्वभावका ब्राह्मणहरूलाई म शिर झुकाएर बारम्बार नमस्कार गर्दछु।

**कच्चिद् वः कुशलं ब्रह्मन् राजतो यस्य हि प्रजाः।**
**सुखं वसन्ति विषये पाल्यमानाः स मे प्रियः॥ ३४॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **हि** = निश्चय नै | **सुखं** = आनन्दसँग |
| **ब्रह्मन्** = हे ब्राह्मण | **यस्य** = जुन राजाको | **वसन्ति** = बस्दछन् |
| **वः** = हजुरहरूलाई | **विषये** = देशमा | **सः** = त्यो राजा |
| **राजतः** = राजाबाट | **पाल्यमानाः** = पालन गरिएका | **मे** = मेरा लागि |
| **कच्चित् कुशलं** = के राम्रो छ | **प्रजाः** = जनताहरू | **प्रियः** = अत्यन्त प्रिय हुन्छ |

**वाक्यार्थ–** हे ब्राह्मण ! के हजुरहरूलाई राजाबाट त राम्रो संरक्षण प्राप्त भएको छ ? जुन देशमा जनताहरूको राम्रोसँग पालन भएको छ त्यस देशको राजा मेरा लागि अत्यन्त प्रिय हुन्छ।

**यतस्त्वमागतो दुर्गं निस्तीर्येह यदिच्छया।**
**सर्वं नो ब्रूह्यगुह्यं चेत् किं कार्यं करवाम ते॥ ३५॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **त्वं** = हजुर | **ब्रूहि** = भन्नुहोस् |
| **यतः** = जुन ठाउँबाट | **आगतः** = आउनुभयो | **ते** = हजुरको लागि |
| **दुर्गं** = दुर्गरूप समुद्रलाई | **अगुह्यं चेत्** = गोप्य छैन भने | **किं कार्यं** = के काम |
| **निस्तीर्य** = नाघेर | (त्यो) | **करवाम** = गरौँ |
| **यदिच्छया** = जेको इच्छाले | **सर्वं** = सबै | |
| **इह** = यहाँ | **नः** = हामीहरूलाई | |

**वाक्यार्थ–** हे ब्राह्मणदेव ! हजुर जुन ठाउँबाट यत्रो समुद्रको दुर्गलाई नाघेर जेको इच्छाले यहाँ आउनुभयो, त्यो सबै कुरा यदि गोप्य छैन भने हामीलाई भन्नुहोस्। हामी हजुरको के काम गरौँ ?

**एवं सम्पृष्टसम्प्रश्नो ब्राह्मणः परमेष्ठिना।**
**लीलागृहीतदेहेन तस्मै सर्वमवर्णयत्॥ ३६॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **लीलागृहीतदेहेन** = लीलाका | **परमेष्ठिना** = परमेश्वर |
| **एवं** = यसरी | लागि मनुष्यहरूप धारण गर्नुहुने | श्रीकृष्णद्वारा |

**सम्पृष्टसम्प्रश्नः** = राम्रोसँग प्रश्न सोधिएका
**ब्राह्मणः** = ब्राह्मणले
**तस्मै** = उहाँ (भगवान् श्रीकृष्ण)लाई
**सर्वम्** = सबै कुरा
**अवर्णयत्** = वर्णन गरे

**वाक्यार्थ–** यसरी लीलाका लागि मनुष्यरूप धारण गर्नुभएका परमेश्वर श्रीकृष्णले ब्राह्मणलाई प्रश्न सोधेपछि ती ब्राह्मणले सबै कुरा बताए (र रुक्मिणीको सन्देश भन्न लागे)।

**रुक्मिण्युवाच** (रुक्मिणीले भनिन्)

**श्रुत्वा गुणान् भुवनसुन्दर शृण्वतां ते**
**निर्विश्य कर्णविवरैर्हरतोऽङ्गतापम्।**
**रूपं दृशां दृशिमतामखिलार्थलाभं**
**त्वय्यच्युताविशति चित्तमपत्रपं मे॥ ३७॥**

पदार्थ–
**भुवनसुन्दर** = हे भुवनका सुन्दर
**शृण्वतां** = (हजुरको गुणलाई) सुन्ने व्यक्तिहरूको
**कर्णविवरैः** = कानको मार्गबाट
**निर्विश्य** = पसेर
**अङ्गतापं** = अङ्गहरूको तापलाई
**हरतः** = हरण गरिदिने
**ते** = हजुरका
**गुणान्** = गुणहरूलाई र
**दृशिमतां** = दृष्टि भएका व्यक्तिहरूको
**दृशां** = आँखाको
**अखिलार्थलाभं** = सारा पुरुषार्थ दिएर कृतार्थ गर्ने
**रूपं** = हजुरको रूपलाई
**श्रुत्वा** = सुनेर
**अच्युत** = हे अच्युत प्रभु
**अपत्रपं** = निर्लज्ज भएको
**मे** = मेरो
**चित्तं** = चित्त
**त्वयि** = हजुरमा
**आविशति** = लागिसकेको छ

**वाक्यार्थ–** हे भुवनभरका सुन्दर अच्युत प्रभु ! हजुरका गुणहरूले श्रवण गर्ने व्यक्तिको कानबाट प्रवेश गरेर सारा तापलाई नाश गरिदिन्छन् र हजुरको रूपले हजुरको दर्शन गर्ने व्यक्तिहरूलाई सारा पुरुषार्थ दिएर कृतार्थ बनाइदिन्छ भन्ने कुरा सुनेर मेरो चित्त निर्लज्ज भई हजुरमा लागिसकेको छ।

**विवरण–** यस श्लोकमा रुक्मिणीले श्रीकृष्णलाई **भुवनसुन्दर** अर्थात् भुवनभरका सर्वश्रेष्ठ सुन्दर भनी सम्बोधन गरेकी छिन्। भगवान्का दिव्य सद्गुण र भगवान्का दिव्य रूप सबै परमानन्दमय छन्। भगवान्को गुणकीर्ति **कर्णविवरैः** अर्थात् कानको प्वालबाट छिरी **अङ्गतापम्** अर्थात् शरीरभित्रको तापलाई नष्ट गर्दछ। त्यसै गरी भगवान्को स्वरूप पनि अत्यन्तै आह्लादकारक एवं मनोरम छ। यसरी कान एवं आँखाको द्वारबाट हृदयभित्र छिरी त्यहाँ सधैँका लागि निवास गर्ने भगवान्सम्बन्धी यी दुई रूप र गुणहरू महत्त्वपूर्ण छन्। **दृशिमतां** अर्थात् आँखा भएका प्राणीहरूका लागि आँखाको सबभन्दा ठुलो सार्थकता भनेको श्रीकृष्णको लोकोत्तर रूपको दर्शन गर्नु नै हो। इन्द्रियहरू सबैभन्दा सुन्दर र एवं मधुर वस्तुको खोजीमा रहन्छन्। संसारभरिमा जति

राम्रा भनिने वस्तुहरू पनि त्यति मनोरम हुँदैनन् कि इन्द्रिय सधैँका लागि त्यहीँ टाँसिइरहोस्। संसारका सम्पूर्ण वस्तुहरूमा त्यसको प्राप्ति नहुन्जेल मात्र आनन्द रहेको हुन्छ। जब वस्तु प्राप्त हुन्छ तब सँगसँगै त्यसमा रहेको आनन्द पनि घट्न थाल्दछ। यसरी आनन्द नपाएपछि इन्द्रियहरू पनि त्यसबाट निवृत्त हुन्छन्। यसरी संसारका जतिसुकै राम्रा वस्तुहरूमा पनि मानिसको इन्द्रियलाई पूर्ण रूपले तृप्त पारिदिने सौन्दर्य या माधुर्य छैन। तर परमात्मा अनन्त सौन्दर्य एवं माधुर्यका खानी हुनुहुन्छ। व्यक्तिले जति सोचेको हुन्छ, त्योभन्दा अनन्त गुणा बढी आनन्द परमात्मामा रहेको हुन्छ। फेरि उहाँ नित्यनवीन पनि हुनुहुन्छ। यसरी उहाँको दर्शन गरिसकेपछि इन्द्रियहरूले अरू पदार्थहरूलाई हेर्न चाहँदैनन्। त्यसैले भक्तका सबै इन्द्रियहरू परमात्मामा नै गई विलीन भएका हुन्छन्। भक्ति शब्दको अर्थ **भजनं भक्तिः** भन्ने व्युत्पत्ति गर्दा पनि भजन शब्दको अर्थ रस भनी गरिएको छ। इन्द्रियहरूद्वारा तिनका मालिक परमात्माको सेवा गर्नु र उहाँबाट निरन्तर आनन्द रसको आस्वादन गर्नुलाई नै भक्ति भनिएको छ— **हृषीकेण हृषीकेशसेवनं भक्तिरुत्तमा** अर्थात् विषयी इन्द्रियहरूबाट हृषीकेश परमात्माको सेवन गर्नु नै भक्ति हो। यहाँ पनि भगवान्का लोकोत्तर गुण अनि दिव्य रूपको कुरा सुनेर आफ्नो चित्त भगवान्मा नै लागेको कुरा रुक्मिणीले बताएकी छिन्। कन्याले आफैँ प्रेमको प्रस्ताव गर्नुलाई नराम्रो मानिने आशङ्कामा उनी भन्छिन् **अपत्रपं** अर्थात् म होइन, मेरो चित्त चाहिँ निर्लज्ज भएको छ। परमात्मको प्रेम गर्न लाज लाग्नु राम्रो पनि होइन, किनभने जीवभावका आठ पाशहरूमध्ये लज्जालाई पनि एउटा बन्धनको रूपमा लिइएको छ। नाशवान् एवं दुःखदायी पदार्थहरूलाई छाडी नित्य एवं परमानन्दमय परमात्माको वरण गर्नु निर्लज्ज हुनु कहाँ हो र? बरु परमात्मालाई छाडी क्षणिक सांसारिक आनन्दको वरण गर्नेले पो लजाउनुपर्ने हो। त्यसैले यहाँ रुक्मिणीले श्रीकृष्णलाई आफ्नो प्रेमप्रस्ताव पठाएकी छिन्।

**का त्वा मुकुन्द महती कुलशीलरूप-**
**विद्यावयोद्रविणधामभिरात्मतुल्यम्।**
**धीरा पतिं कुलवती न वृणीत कन्या**
**काले नृसिंह नरलोकमनोऽभिरामम्॥ ३८॥**

**पदार्थ**–
**मुकुन्द** = हे मुकुन्द
**नृसिंह** = हे पुरुष श्रेष्ठ
**धीरा** = धैर्यशाली
**कुलवती** = उच्च कुलमा उत्पन्न भएकी
**महती** = उदार स्वभावकी
**का कन्या** = कुन चाहिँ कन्याले
**कुलशीलरूपविद्यावयोद्रविण-धामभिः** = कुल, शील, गुण, रूप, विद्या, अवस्था, धनसम्पत्ति र प्रताप आदिले
**आत्मतुल्यं** = आफूसमानको र
**नरलोकमनोऽभिरामं** = नरलोकमा सबैको मनलाई आकर्षित गर्ने
**त्वा पतिं** = हजुर जस्तो पतिलाई
**काले** = विवाहको समयमा
**न वृणीत** = वरण नगर्ली

**वाक्यार्थ–** हे मुकुन्द ! हे पुरुषश्रेष्ठ ! कुन चाहिँ धैर्यशाली, कुलवती र उदार स्वभावकी कन्याले कुल, शील, रूप, विद्या, अवस्था, धनसम्पत्ति र प्रभावको आधारमा आफूसमानको तथा संसार भरका सबैको चित्तलाई आकर्षण गर्ने हजुरलाई विवाहको समयमा पतिको रूपमा वरण नगर्ली।

**तन्मे भवान् खलु वृतः पतिरङ्ग जाया-**
**मात्मार्पितश्च भवतोऽत्र विभो विधेहि।**
**मा वीरभागमभिमर्शतु चैद्य आराद्**
**गोमायुवन्मृगपतेर्बलिमम्बुजाक्ष॥ ३९॥**

**पदार्थ–**
**अङ्ग** = हे प्रिय
**विभो** = हे व्यापक प्रभु
**अम्बुजाक्ष** = हे कमलनयन
**खलु** = निश्चय नै
**भवान्** = हजुर
**मे** = मद्वारा
**पतिः** = पतिको रूपमा
**वृतः** = वरण गरिनुभएको छ (र)
**भवतः** = हजुरका लागि नै
**आत्मा** = मन
**अर्पितः च** = अर्पण गरिएको छ
**तत्** = त्यसैले
**अत्र** = यहाँ (आएर विवाह गरी मलाई)
**जायां** = पत्नी
**विधेहि** = बनाउनुहोस्
**वीरभागं** = वीरपुरुष हजुरको भागस्वरूप मलाई
**मृगपतेः** = सिंहको
**बलिं** = बलि (सिकार)लाई
**गोमायुवत्** = श्यालले जैँ
**चैद्यः** = शिशुपालले
**आरात्** = नजिकमा आएर
**मा अभिमर्शतु** = स्पर्श नगरोस्

**वाक्यार्थ–** हे प्रियतम ! हे कमलनयन ! हे व्यापक प्रभु ! मैले पतिको रूपमा हजुरलाई स्वीकार गरिसकेकी छु र आफ्नो मन हजुरमा अर्पण गरिसकेकी छु। अतः हजुरले यहाँ आएर मलाई विवाह गरी आफ्नी पत्नी बनाउनुहोस्। सिंहको सिकारलाई श्यालले ग्रहण गरे जैँ वीरपुरुष हजुरको भाग भएकी मलाई शिशुपालले छुन नपाओस्।

**पूर्तेष्टदत्तनियमव्रतदेवविप्र-**
**गुर्वर्चनादिभिरलं भगवान् परेशः।**
**आराधितो यदि गदाग्रज एत्य पाणिं**
**गृह्णातु मे न दमघोषसुतादयोऽन्ये॥ ४०॥**

**पदार्थ–**
**यदि** = यदि मद्वारा (कुनै जन्ममा)
**पूर्तेष्टदत्तनियमव्रतदेवविप्र-**
**गुर्वर्चनादिभिः** = पूर्तकर्म, इष्टकर्म, दत्तकर्म (दान दिने कर्म), विविध व्रत नियम, देव, ब्राह्मण, गुरु आदिको पूजा जस्तो कर्महरूद्वारा
**भगवान् परेशः** = भगवान् परमेश्वर
**आराधितः** = आराधना

| | | |
|---|---|---|
| गरिनुभएको छ (र त्यसबाट) | **एत्य** = यहाँ आएर | **अन्ये** = अरू |
| **अलं** = प्रसन्न हुनुभएको छ भने | **मे** = मेरो | **दमघोषसुतादयः** = दमघोष पुत्र |
| **गदाग्रजः** = (गदका दाजु) | **पाणिं** = हातलाई | शिशुपाल आदिले |
| श्रीकृष्ण | **गृह्णातु** = ग्रहण गर्नुहोस् (परन्तु) | **न** = नगरून् |

**वाक्यार्थ–** हे भगवान् ! यदि मैले जन्म-जन्मान्तरमा पनि इष्ट, पूर्त, दत्त (दान दिने कर्म) आदि कर्म तथा विविध व्रत नियम, देव, ब्राह्मण, गुरु आदिको पूजा जस्ता शुभ कर्महरू गरेको छु र त्यसबाट भगवान् प्रसन्न हुनुहुन्छ भने भगवान् श्रीकृष्ण आएर मेरो पाणिग्रहण गरी विवाह गर्नुहोस्, अरू शिशुपाल आदि नआऊन्।

**टिप्पणी–** अग्निहोत्र आदि, दर्शयाग, पूर्णमास याग, चातुर्मास्य याग, पशुयाग, सोमयाग, वैश्वदेव याग र बलिहरण आदि कर्महरू इष्ट कर्म हुन् भने मन्दिर, धर्मशाला, बगैंचा आदि बनाउने र इनार, कुवा आदि खनाउने काम पूर्त कर्म हुन् (भागवत ७/१५/४८-४९)।

**श्वो भाविनि त्वमजितोद्वहने विदर्भान्**
**गुप्तः समेत्य पृतनापतिभिः परीतः।**
**निर्मथ्य चैद्यमगधेन्द्रबलं प्रसह्य**
**मां राक्षसेन विधिनोद्वह वीर्यशुल्काम्॥ ४१॥**

| | | |
|---|---|---|
| **पदार्थ–** | **समेत्य** = आएर | वीरताको मूल्य दिएर |
| **अजित** = हे अजेय प्रभु | **परीतः** = चारै तर्फबाट | **मां** = मलाई |
| **श्वोभाविनि** = भोलि हुने | **पृतनापतिभिः** = सेनापतिहरूद्वारा | **राक्षसेन विधिना** = राक्षस |
| **उद्वहने** = विवाहमा (आज | (घेरिएर) | विधिद्वारा |
| जस्तो) | **चैद्यमगधेन्द्रबलं** = शिशुपाल, | **प्रसह्य** = हरेर लगी |
| **त्वं** = हजुर | जरासन्ध आदिको सेनालाई | **उद्वह** = विवाह गर्नुहोस् |
| **गुप्तः** = लुकेर | **निर्मथ्य** = जितेर | |
| **विदर्भान्** = विदर्भ देशमा | **वीर्यशुल्कां** = पराक्रम र | |

**वाक्यार्थ–** हे अजेय प्रभु ! मेरो विवाह हुनुभन्दा अघिल्लो दिन नै हजुर लुकेर विदर्भ देशमा आउनुहोस् र सेनापतिहरूद्वारा घेरिएर रहेको शिशुपाल, जरासन्ध आदिका सेनाहरूलाई जितेर वीरता र पराक्रमको शुल्क दिई मलाई राक्षसविधिले हरण गरी लैजानुहोस् र विवाह गर्नुहोस्।

**अन्तःपुरान्तरचरीमनिहत्य बन्धून्**
**त्वामुद्वहे कथमिति प्रवदाम्युपायम्।**

**पूर्वेद्युरस्ति महती कुलदेवयात्रा**
**यस्यां बहिर्नववधूर्गिरिजामुपेयात्॥ ४२॥**

**पदार्थ–**
**अन्तःपुरान्तरचरीं** = अन्तःपुरभित्र साथी सङ्गीहरूसँग रहने
**त्वां** = तिमीलाई
**बन्धून्** = तिम्रा भाइबन्धुहरूलाई
**अनिहत्य** = नमारीकन
**कथं** = कसरी
**उद्वहे** = म लैजान सक्छु र
**इति** = यस्तो आशंका छ भने
**उपायं** = उपाय
**प्रवदामि** = म भन्छु
**पूर्वेद्युः** = विवाहको अघिल्लो दिन
**महती** = धेरै ठुलो
**कुलदेवयात्रा** = कुलदेवको दर्शनका लागि हुने यात्रा
**अस्ति** = छ
**यस्यां** = जुन यात्रामा
**नववधूः** = नयाँ दुलही
**बहिः** = नगरबाट बाहिर
**गिरिजां** = पार्वतीको दर्शनका लागि
**उपेयात्** = जाने गर्छिन्

**वाक्यार्थ–** अन्तःपुरभित्र साथी सङ्गीहरूसँग रहने तिमीलाई तिम्रा भाइबन्धुहरूलाई नमारीकन कसरी म लैजान सक्छु र नभन्नुहोला। म त्यसको उपाय बताइदिन्छु। हाम्रो कुलपरम्परामा विवाहको अघिल्लो दिन कुलदेवको दर्शन गर्न जाने ठुलो यात्रा हुन्छ, जुन यात्रामा हाम्रो कुलपरम्परा अनुसार नयाँ दुलही पनि आउँछिन् र भगवती पार्वतीको दर्शनका लागि जान्छिन्। (त्यही बखतमा मलाई हरण गर्नुहोस्)।

**यस्याङ्घ्रिपङ्कजरजःस्नपनं महान्तो**
**वाञ्छन्त्युमापतिरिवात्मतमोऽपहत्यै।**
**यर्ह्यम्बुजाक्ष न लभेय भवत्प्रसादं**
**जह्यामसून् व्रतकृशाञ्छतजन्मभिः स्यात्॥ ४३॥**

**पदार्थ–**
**अम्बुजाक्ष** = हे कमलनयन
**यस्य** = जुन हजुरको
**अङ्घ्रिपङ्कजरजःस्नपनं** = चरणको धुलोले स्नान गर्न
**उमापतिः इव** = भगवान् शङ्करले झैँ
**महान्तः** = अरू महापुरुषहरूले पनि
**आत्मतमोऽपहत्यै** = अज्ञान निवृत्तिका लागि
**वाञ्छन्ति** = चाहन्छन्
**यर्हि** = यदि कथञ्चित्
**भवत्प्रसादं** = हजुरको अनुग्रहलाई
**न लभेय** = (मैले) पाइनँ भने
**व्रतकृशान्** = व्रत नियम आदिले सुकेको शरीर र
**असून्** = प्राणलाई पनि
**जह्यां** = त्याग्नेछु र
**शतजन्मभिः** = सयौँ जन्मद्वारा
**स्यात्** = होस् (त्यो चरणलाई प्राप्त गर्नेछु)

**वाक्यार्थ–** हे कमलनयन! भगवान् शङ्करले झैँ अरू महापुरुषहरूले पनि आफ्नो अज्ञानको निवृत्तिका लागि हजुरको चरणको धुलोबाट स्नान गर्न चाहन्छन् भने हामीहरूको त के कुरा भयो

र ? यदि अहिले हजुरको चरणलाई प्राप्त गर्न सकिनँ भने व्रत, नियम आदिले सुकेको यो शरीर र प्राण समेत म त्याग्नेछु र सयौं जन्म लिएर भए पनि हजुरको चरणलाई प्राप्त गर्नेछु।

**ब्राह्मण उवाच** (ब्राह्मणले भने)

**इत्येते गुह्यसन्देशा यदुदेव मयाहृताः।**

**विमृश्य कर्तुं यच्चात्र क्रियतां तदनन्तरम्॥ ४४॥**

**पदार्थ–**

| | | |
|---|---|---|
| **यदुदेव** = हे यदुश्रेष्ठ | **आहृताः** = ल्याइएका | **यत् कर्तुं** = जो गर्नुपर्दछ |
| **इति एते** = यिनै कुराहरू नै | **गुह्यसन्देशाः** = गोप्य सन्देश हुन् | **तत्** = त्यसलाई (विचार गरेर) |
| **मया** = मद्वारा | **अत्र** = यस विषयमा | **अनन्तरं** = त्यसपछि |
| | **विमृश्य च** = आफैं विचार गरेर | **क्रियताम्** = गरियोस् |

**वाक्यार्थ–** हे यदुश्रेष्ठ ! मद्वारा ल्याइएका गोप्य सन्देश यिनै हुन्। अब यस विषयमा जे गर्नुपर्छ, विचार गरेर गर्नुहोस्।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**रुक्मिण्युद्वाहप्रस्तावे द्विपञ्चाशत्तमोऽध्यायः॥ ५२॥**

# अथ त्रिपञ्चाशत्तमोऽध्यायः

## रुक्मिणीहरण

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**वैदर्भ्याः स तु सन्देशं निशम्य यदुनन्दनः।**

**प्रगृह्य पाणिना पाणिं प्रहसन्निदमब्रवीत्॥ १॥**

**पदार्थ–**
**सः तु** = उहाँ
**यदुनन्दनः** = यदुनन्दन भगवान् श्रीकृष्णले
**वैदर्भ्याः** = रुक्मिणीको
**सन्देशं** = सन्देशलाई
**निशम्य** = सुनेर
**पाणिना** = आफ्नो हातले
**पाणिं** = ब्राह्मणको हातलाई
**प्रगृह्य** = समातेर
**प्रहसन्** = मुस्कुराउँदै
**इदं** = यस्तो कुरा
**अब्रवीत्** = भन्नुभयो

**वाक्यार्थ–** यदुनन्दन भगवान् श्रीकृष्णले ब्राह्मणको मुखबाट रुक्मिणीको सन्देश सुनेर आफ्नो हातले ब्राह्मणको हात समाती मुस्कुराउँदै यसो भन्नुभयो।

**श्रीभगवानुवाच** (भगवान् श्रीकृष्णले भन्नुभयो)

**तथाहमपि तच्चित्तो निद्रां च न लभे निशि।**

**वेदाहं रुक्मिणा द्वेषान्ममोद्वाहो निवारितः॥ २॥**

**पदार्थ–**
**तथा** = (जसरी रुक्मिणी व्याकुल चित्त भएकी छिन्) त्यसै गरी
**अहम् अपि** = म पनि
**तच्चित्तः** = उनै रुक्मिणीमा अनुरक्त छु
**निशि** = रातमा
**निद्रां च** = निद्रा पनि
**न लभे** = पाएको छैन
**द्वेषात्** = (मसँगको) द्वेषले गर्दा
**रुक्मिणा** = रुक्मीद्वारा
**मम** = मेरो
**उद्वाहः** = विवाह
**निवारितः** = रोकिएको छ (भन्ने कुरा)
**अहं** = मैले
**वेद** = बुझेको छु

**वाक्यार्थ–** जसरी रुक्मिणी मलाई सम्झिएर व्याकुल चित्त भएकी छिन्, त्यसै गरी म पनि उनलाई सम्झिएर व्याकुल छु, म रातमा निदाएको पनि छैन। रुक्मिणीको मसँग हुने विवाहलाई मसँगको द्वेषको कारणले रुक्मीले रोकेको हो भन्ने कुरा पनि मलाई थाहा छ।

**तामानयिष्य उन्मथ्य राजन्यापसदान्मृधे।**

**मत्परामनवद्याङ्गीमेधसोऽग्निशिखामिव॥ ३॥**

**पदार्थ–**
**मृधे** = युद्धमा
**राजन्यापसदान्** = क्षत्रियकुलका कलङ्क शिशुपाल आदिलाई
**उन्मथ्य** = जितेर
**एधसः** = काठबाट
**अग्निशिखाम् इव** = आगोको ज्वाला निकाले झैं
**मत्परां** = ममा समर्पित भइसकेकी
**अनवद्याङ्गीम्** = सुन्दर अङ्ग भएकी
**तां** = ती रुक्मिणीलाई
**आनयिष्ये** = ल्याउनेछु

**वाक्यार्थ–** म युद्धमा ती सारा क्षत्रियकुल कलङ्क शिशुपाल आदि राजाहरूलाई जितेर अग्निमन्थन गर्दा काठबाट आगोको ज्वाला निकाले झैं ममा समर्पित परमसुन्दरी रुक्मिणीलाई (उनीहरूको बीचबाटै) ल्याउनेछु।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**उद्वाहर्क्षं च विज्ञाय रुक्मिण्या मधुसूदनः।**
**रथः संयुज्यतामाशु दारुकेत्याह सारथिम्॥ ४॥**

**पदार्थ–**
**मधुसूदनः** = मधु दैत्यका विनाशक श्रीकृष्णले
**रुक्मिण्याः** = रुक्मिणीको
**उद्वाहर्क्षं च** = विवाहको लग्न
**विज्ञाय** = बुझेर
**सारथिं** = आफ्नो सारथिलाई
**दारुक** = हे दारुक
**आशु** = चाँडै नै
**रथः** = रथ
**संयुज्यताम् इति** = तयार गर भनी
**आह** = भन्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान् श्रीकृष्णले रुक्मिणीको विवाह हुने दिनलाई बुझेर आफ्नो सारथि दारुकलाई चाँडै नै रथ तयार गर्न आज्ञा दिनुभयो।

**स चाश्वैः शैब्यसुग्रीवमेघपुष्पबलाहकैः।**
**युक्तं रथमुपानीय तस्थौ प्राञ्जलिरग्रतः॥ ५॥**

**पदार्थ–**
**सः च** = ती दारुकले पनि
**शैब्यसुग्रीवमेघपुष्पबलाहकैः** = शैब्य, सुग्रीव, मेघपुष्प र बलाहक नामका
**अश्वैः** = घोडाहरूद्वारा
**युक्तं** = युक्त भएको
**रथं** = रथलाई
**उपानीय** = नजिकै ल्याएर
**अग्रतः** = भगवान्को अगाडि
**प्राञ्जलिः** = हात जोडेर
**तस्थौ** = उभिए

**वाक्यार्थ–** दारुक पनि शैब्य, सुग्रीव, मेघपुष्प र बलाहक नामका चार घोडा लगाएको रथ तयार गरी अगाडि ल्याएर हात जोडेर उभिए।

**आरुह्य स्यन्दनं शौरिर्द्विजमारोप्य तूर्णगैः।**
**आनर्तादेकरात्रेण विदर्भानगमद्धयैः॥ ६॥**

**पदार्थ–**
**शौरिः** = भगवान् श्रीकृष्णले
**द्विजं** = ती ब्राह्मणलाई
**आरोप्य** = रथमा चढाएर (आफू पनि)
**स्यन्दनं** = रथमा
**आरुह्य** = चढी
**तूर्णगैः** = अति चाँडो हिँड्ने
**हयैः** = घोडाहरूले तानेको रथद्वारा
**एकरात्रेण** = एकै रातमा
**आनर्तात्** = आनर्त देशबाट
**विदर्भान्** = विदर्भ देशमा
**अगमत्** = पुग्नुभयो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले ती ब्राह्मणलाई पनि रथमा चढाउनुभयो र आफू पनि चढी अति चाँडो हिँड्ने ती घोडाहरूले तानेको रथद्वारा एकै रातमा आनर्त देशबाट विदर्भ देशमा पुग्नुभयो।

**राजा स कुण्डिनपतिः पुत्रस्नेहवशानुगः।**
**शिशुपालाय स्वां कन्यां दास्यन् कर्माण्यकारयत्॥ ७॥**

**पदार्थ–**
**पुत्रस्नेहवशानुगः** = आफ्नो जेठो छोरो रुक्मीको स्नेहले गर्दा
**कुण्डिनपतिः** = कुण्डिननरेश
**सः राजा** = ती राजा भीष्मकले
**स्वां कन्यां** = आफ्नी कन्या रुक्मिणी
**शिशुपालाय** = शिशुपाललाई
**दास्यन्** = दिनको लागि
**कर्माणि** = (विवाहोत्सव सम्बन्धी) कर्महरू
**अकारयत्** = गराए

**वाक्यार्थ–** कुण्डिननरेश राजा भीष्मकले आफ्नो छोरो रुक्मीको स्नेहको वशमा परी आफ्नी कन्या रुक्मिणी शिशुपाललाई दिनको लागि विवाहोत्सव सम्बन्धी कर्महरू गराए।

**पुरं सम्मृष्टसंसिक्तमार्गरथ्याचतुष्पथम्।**
**चित्रध्वजपताकाभिस्तोरणैः समलङ्कृतम्॥ ८॥**

**पदार्थ–**
**सम्मृष्टसंसिक्तमार्गरथ्याचतुष्पथं** = राजमार्ग, सडकहरू र गल्लीहरूलाई पनि बढार-कुडार गरेर सुगन्धित द्रव्यले सेचन गरिएको
**पुरं** = नगरलाई
**चित्रध्वजपताकाभिः** = रङ्गी-विरङ्गी ध्वजा-पताकाहरूले र
**तोरणैः** = तोरणहरूले पनि
**समलङ्कृतम्** = सजाइएको थियो

**वाक्यार्थ–** त्यस सहरका राजमार्ग, ठुला-ठुला सहरहरू तथा गल्लीहरूलाई पनि बढारेर, सुगन्धित द्रव्यहरू सेचन गरिएको थियो। जतातत‍ै रङ्गी-विरङ्गी ध्वजापताकाहरू र तोरणहरू टाँगेर नगरलाई निकै सजाइएको थियो।

**स्रग्गन्धमाल्याभरणैर्विरजोऽम्बरभूषितैः।**
**जुष्टं स्त्रीपुरुषैः श्रीमद्गृहैरगुरुधूपितैः॥ ९॥**

**पदार्थ–**
**स्रग्गन्धमाल्याभरणैः** = माला, चन्दन, हार, गहनाहरूले र

**विरजोऽम्बरभूषितैः** = सुकिला-सुकिला कपडाहरूले सुसज्जित
**स्त्रीपुरुषैः** = स्त्री र पुरुषहरूले तथा
**अगुरुधूपितैः** = अगुरु धूपको गन्धले सुगन्धित भएका
**श्रीमद्गृहैः** = सम्पत्तिले भरिएका घरहरूद्वारा (त्यो सहर)
**जुष्टम्** = सुशोभित थियो

**वाक्यार्थ–** नगरवासी स्त्री र पुरुषहरू माला, चन्दन, हार र गहनाले सजिएर बसेका थिए र सम्पत्तिले भरिएका सारा घरहरू अगुरु धूपको गन्धले सुगन्धित भएका थिए।

**पितॄन् देवान् समभ्यर्च्य विप्रांश्च विधिवन्नृप।**
**भोजयित्वा यथान्यायं वाचयामास मङ्गलम्॥ १०॥**

**पदार्थ–**
**नृप** = हे राजा परीक्षित् (राजा भीष्मकले)
**पितॄन्** = पितृहरूलाई र
**देवान्** = देवताहरूलाई पनि
**विधिवत्** = विधि अनुसार
**समभ्यर्च्य** = पूजा गरेर
**विप्रान् च** = ब्राह्मणहरूलाई पनि
**भोजयित्वा** = भोजन गराएर
**यथान्यायं** = नियम अनुसार
**मङ्गलं** = स्वस्तिवाचन
**वाचयामास** = गराए

**वाक्यार्थ–** हे परीक्षित्! राजा भीष्मकले पितृहरूलाई विधि अनुसार तर्पण र देवताहरूलाई पूजा गरेर ब्राह्मणहरूलाई भोजन गराए अनि नियम अनुसार ब्राह्मणहरूद्वारा स्वस्तिवाचन गराए।

**सुस्नातां सुदतीं कन्यां कृतकौतुकमङ्गलाम्।**
**अहतांशुकयुग्मेन भूषितां भूषणोत्तमैः॥ ११॥**

**पदार्थ–**
**सुस्नातां** = राम्ररी स्नान गराइएकी
**कृतकौतुकमङ्गलां** = विवाहसूत्र आदि माङ्गलिक शृङ्गार गरेर सजिएकी
**सुदतीं** = सुन्दर दाँत भएकी
**कन्यां** = कन्या रुक्मिणीलाई
**अहतांशुकयुग्मेन** = नयाँ जोडी कपडाहरू र
**भूषणोत्तमैः** = उत्तम-उत्तम गहनाहरूले पनि
**भूषिताम्** = विभूषित (बनाए)

**वाक्यार्थ–** राम्ररी स्नान गरेकी, विवाहसूत्र आदि माङ्गलिक शृङ्गार गरेर सजिएकी, सुन्दर दाँत भएकी रुक्मिणीलाई नयाँ-नयाँ दुई ओटा कपडा लगाइदिए र उत्तम-उत्तम आभूषणहरूले सजाए।

**चक्रुः सामर्ग्यजुर्मन्त्रैर्वध्वा रक्षां द्विजोत्तमाः।**
**पुरोहितोऽथर्वविद् वै जुहाव ग्रहशान्तये॥ १२॥**

**पदार्थ–**
**द्विजोत्तमाः** = उत्तम ब्राह्मणहरूले
**सामर्ग्यजुर्मन्त्रैः** = सामवेद, ऋग्वेद र यजुर्वेदका मन्त्रहरूद्वारा
**वध्वाः** = दुलही रुक्मिणीको
**रक्षां** = रक्षा
**चक्रुः** = गरे
**वै** = निश्चय नै
**अथर्ववित्** = अथर्ववेद जान्ने

**पुरोहितः** = पुरोहितले
**ग्रहशान्तये** = प्रतिकूल ग्रहको शान्ति गर्न
**जुहाव** = हवन गरे

**वाक्यार्थ–** उत्तम ब्राह्मणहरूले सामवेद, ऋग्वेद र यजुर्वेदका मन्त्रहरूद्वारा दुलही रुक्मिणीको रक्षा गरे। त्यसै गरी अथर्ववेद जान्ने पुरोहितले प्रतिकूल ग्रहलाई शान्त पार्न हवन गरे।

**हिरण्यरूप्यवासांसि तिलांश्च गुडमिश्रितान्।**
**प्रादाद् धेनूश्च विप्रेभ्यो राजा विधिविदां वरः ॥ १३ ॥**

**पदार्थ–**
**विधिविदां वरः** = विधि जान्नेहरूमा श्रेष्ठ
**राजा** = राजा भीष्मकले
**विप्रेभ्यः** = ब्राह्मणहरूलाई
**हिरण्यरूप्यवासांसि** = सुन, चाँदी, कपडाहरू
**गुडमिश्रितान्** = सख्खर मिसिएका
**तिलान् च** = तिलहरू र
**धेनूः च** = धेरै गाईहरू पनि
**प्रादात्** = दिए

**वाक्यार्थ–** विवाहको अवसरमा सारा विधि बुझेका भीष्मकले ब्राह्मणहरूलाई सुन, चाँदी, राम्रा-राम्रा कपडा, सख्खर सहित तिल र धेरै गाईहरू पनि दिए।

**एवं चेदिपती राजा दमघोषः सुताय वै।**
**कारयामास मन्त्रज्ञैः सर्वमभ्युदयोचितम्॥ १४ ॥**

**पदार्थ–**
**एवं** = यसै गरी
**चेदिपतिः** = चेदिदेशका
**राजा** = राजा
**दमघोषः** = दमघोषले पनि
**वै** = निश्चय नै
**सुताय** = (आफ्नो छोरो) शिशुपालको लागि
**अभ्युदयोचितं** = अभ्युदय कर्मका लागि उचित (विवाहोचित)
**सर्वम्** = सारा माङ्गलिक क्रियाहरू
**मन्त्रज्ञैः** = मन्त्र जान्ने ब्राह्मणहरूद्वारा
**कारयामास** = गराए

**वाक्यार्थ–** यसै गरी चेदिदेशका राजा दमघोषले पनि पुत्र शिशुपालको विवाहको लागि आवश्यक सम्पूर्ण माङ्गलिक कार्यहरू मन्त्रज्ञ ब्राह्मणहरूद्वारा गराए।

**मदच्युद्भिर्गजानीकैः स्यन्दनैर्हेममालिभिः।**
**पत्त्यश्वसङ्कुलैः सैन्यैः परीतः कुण्डिनं ययौ ॥ १५ ॥**

**पदार्थ–**
**मदच्युद्भिः** = मद चुहाइरहेका
**हेममालिभिः** = सुनका साङ्लाले सजाइएका
**गजानीकैः** = असङ्ख्य हात्तीहरूद्वारा (त्यसै गरी)
**स्यन्दनैः** = रथहरूद्वारा
**पत्त्यश्वसङ्कुलैः** = पैदल, घोडचढी जस्ता लडाकुहरू (र)
**सैन्यैः** = सेनाहरूद्वारा
**परीतः** = घेरिएको शिशुपाल
**कुण्डिनं** = (विदर्भ देशको

| राजधानी) कुण्डिन पुरमा | **ययौ** = पुग्यो |
|---|---|

**वाक्यार्थ–** यसरी शिशुपाल पनि माङ्गलिक कार्यहरू गरी मद चुहाइरहेका र सुनका साङ्लाले सजिएका हात्तीहरू, रथहरू एवं पैदल र घोडचढी समेतका धेरै सेनाहरूद्वारा घेरिएर विवाहका लागि विदर्भको राजाधानी कुण्डिन पुरमा पुग्यो।

**तं वै विदर्भाधिपतिः समभ्येत्याभिपूज्य च।**
**निवेशयामास मुदा कल्पितान्यनिवेशने ॥ १६ ॥**

| पदार्थ– | शिशुपाललाई | **मुदा** = अति हर्षित हुँदै |
|---|---|---|
| **विदर्भाधिपतिः** = विदर्भनरेश | **वै** = निश्चय नै | **कल्पितान्यनिवेशने** = अरूको |
| भीष्मकले | **समभ्येत्य** = भेटेर र | भन्दा विशिष्ट निवासस्थानमा |
| **तं** = (वरको रूपमा आएको) | **अभिपूज्य च** = पूजा समेत गरेर | **निवेशयामास** = राखे |

**वाक्यार्थ–** विदर्भदेशका राजा भीष्मकले वरको रूपमा आएको शिशुपाललाई भेटी पूजा गरेर अति प्रसन्न हुँदै अरूको भन्दा विशिष्ट निवासस्थानमा राखे।

**तत्र शाल्वो जरासन्धो दन्तवक्त्रो विदूरथः।**
**आजग्मुश्चैद्यपक्षीयाः पौण्ड्रकाद्याः सहस्रशः ॥ १७ ॥**

| पदार्थ– | **जरासन्धः** = जरासन्ध | **चैद्यपक्षीयाः** = शिशुपालको |
|---|---|---|
| **तत्र** = त्यहाँ (शिशुपालको | **दन्तवक्त्रः** = दन्तवक्त्र | पक्षका |
| जन्तीमा) | **विदूरथः** = विदूरथ र | **सहस्रशः** = हजारौँ राजाहरू |
| **शाल्वः** = शाल्व | **पौण्ड्रकाद्याः** = पौण्ड्रक आदि | **आजग्मुः** = आएका थिए |

**वाक्यार्थ–** शिशुपालको जन्ती भएर शाल्व, जरासन्ध, दन्तवक्त्र, विदूरथ, पौण्ड्रक आदि शिशुपाल पक्षका हजारौँ राजाहरू आएका थिए।

**कृष्णरामद्विषो यत्ताः कन्यां चैद्याय साधितुम्।**
**यद्यागत्य हरेत् कृष्णो रामाद्यैर्यदुभिर्वृतः ॥ १८ ॥**
**योत्स्यामः संहतास्तेन इति निश्चितमानसाः।**
**आजग्मुर्भूभुजः सर्वे समग्रबलवाहनाः ॥ १९ ॥**

| पदार्थ– | **कन्यां** = कन्या रुक्मिणी | **यत्ताः** = प्रयासरत थिए र |
|---|---|---|
| **कृष्णरामद्विषः** = श्रीकृष्ण र | **चैद्याय** = शिशुपाललाई | **रामाद्यैः** = बलराम आदि |
| बलरामलाई द्वेष गर्ने राजाहरू | **साधितुं** = दिलाउनका लागि | **यदुभिः** = यदुहरूद्वारा |

**वृतः** = घेरिएर
**कृष्णः** = श्रीकृष्णले
**यदि आगत्य** = यदि यहाँ आएर
**हरेत्** = (कन्याको) हरण गऱ्यो भने
**संहताः** = सबै मिलेर
**तेन** = ती श्रीकृष्णसँग
**योत्स्यामः इति** = युद्ध गर्नेछौँ भनेर
**निश्चितमानसाः** = ढुक्क भएका
**सर्वे** = ती सबै
**भूभुजः** = राजाहरू
**समग्रबलवाहनाः** = सारा बल (सेना, रथ र घोडा आदि) लिएर
**आजग्मुः** = आएका थिए

**वाक्यार्थ–** श्रीकृष्ण र बलरामलाई द्वेष गर्ने ती राजाहरू कन्या रुक्मिणी शिशुपाललाई नै दिलाउन प्रयासरत थिए र यदि बलराम र यदु सहित श्रीकृष्ण आएर कन्याको हरण गरे भने उनको विरुद्धमा सबै मिलेर लड्नेछौँ भनी निश्चय गरेर उनीहरू आफ्ना सारा सैन्यबललाई पनि साथमा लिएर आएका थिए।

**श्रुत्वैतद् भगवान् रामो विपक्षीयनृपोद्यमम्।**
**कृष्णं चैकं गतं हर्तुं कन्यां कलहशङ्कितः॥ २०॥**

पदार्थ–
**भगवान् रामः** = भगवान् बलराम
**विपक्षीयनृपोद्यमं** = विपक्षी राजाहरूको प्रयत्न र
**कन्यां** = कन्या रुक्मिणीलाई
**हर्तुं** = हरण गर्नको लागि
**एकं** = एक्लै
**कृष्णं** = श्रीकृष्ण
**गतं** = गएको कुरा
**एतत्** = यो सबै
**श्रुत्वा** = सुनेर
**कलहशङ्कितः** = युद्ध हुने आशङ्काले युक्त हुनुभयो

**वाक्यार्थ–** एकातिर विपक्षी राजाहरूको शिशुपालसँग रुक्मिणीको विवाह गराउने प्रयत्न र अर्कोतिर रुक्मिणीलाई हरण गर्न श्रीकृष्ण एक्लै गएको कुरा सुनेर भगवान् बलरामले अब युद्ध हुने भयो भन्ने आशङ्का गर्नुभयो।

**बलेन महता सार्धं भ्रातृस्नेहपरिप्लुतः।**
**त्वरितः कुण्डिनं प्रागाद् गजाश्वरथपत्तिभिः॥ २१॥**

पदार्थ–
**भ्रातृस्नेहपरिप्लुतः** = भाइको स्नेहले युक्त बलराम
**महता** = ठुलो
**बलेन** = सैन्य समूहले
**सार्धं** = सहित भई
**गजाश्वरथपत्तिभिः** = हात्ती, घोडा, रथ र पैदल सेना लिई
**त्वरितः** = चाँडो-चाँडो
**कुण्डिनं** = विदर्भ देशको राजधानी कुण्डिन पुरतिर
**प्रागात्** = लाग्नुभयो

**वाक्यार्थ–** भाइ श्रीकृष्णको स्नेहले व्याप्त हृदय भएका बलराम हात्ती, घोडा, रथ आदि ठुलो सैन्यसमूह साथमा लिई विदर्भ देशको राजधानी कुण्डिन पुरतिर लाग्नुभयो।

**भीष्मकन्या वरारोहा काङ्क्षन्त्यागमनं हरेः।**
**प्रत्यापत्तिमपश्यन्ती द्विजस्याचिन्तयत् तदा॥ २२॥**

**पदार्थ–**
**हरेः** = भगवान् श्रीकृष्णको
**आगमनं** = आगमनलाई
**काङ्क्षन्ती** = चाहँदै गरेकी र
**द्विजस्य** = आफूले पठाएको ब्राह्मणको
**प्रत्यापत्तिं** = प्रत्यागमनलाई पनि
**अपश्यन्ती** = नदेखेकी
**वरारोहा** = परम सुन्दरी
**भीष्मकन्या** = भीष्मककी छोरी रुक्मिणीले
**तदा** = त्यस बखतमा
**अचिन्तयत्** = ज्यादै चिन्ता गर्न थालिन्

**वाक्यार्थ–** परम सुन्दरी भीष्मककन्या रुक्मिणी श्रीकृष्णको आगमनको प्रतीक्षा गर्दै र आफूले सन्देश पठाएका ब्राह्मण पनि फर्केर आएको नदेखेर ज्यादै चिन्ता गर्न थालिन्।

**अहो त्रियामान्तरित उद्वाहो मेऽल्पराधसः।**
**नागच्छत्यरविन्दाक्षो नाहं वेद्म्यत्र कारणम्॥**
**सोऽपि नावर्ततेऽद्यापि मत्सन्देशहरो द्विजः॥ २३॥**

**पदार्थ–**
**अहो** = आश्चर्य छ
**अल्पराधसः** = मन्दभाग्य भएकी
**मे** = मेरो
**उद्वाहः** = विवाह (हुन)
**त्रियामान्तरितः** = केवल (तीन याम, ९ घण्टा) एक रात बाँकी छ
**अरविन्दाक्षः** = कमलनयन श्रीकृष्ण पनि
**न आगच्छति** = आउनुभएको छैन
**अत्र** = यस विषयमा
**अहं** = म
**कारणं** = अहिलेसम्म नआउनुको कारण
**न वेद्मि** = जान्दिनँ र अर्कोतिर
**मत्सन्देशहरः** = मेरो सन्देश लैजाने
**सः** = ती
**द्विजः अपि** = ब्राह्मण पनि
**अद्य अपि** = अहिलेसम्म पनि
**न आवर्तते** = फर्किएका छैनन्

**वाक्यार्थ–** अहो ! आश्चर्य भयो, मेरो विवाहको लागि अब केवल एक रात बाँकी छ, अहिलेसम्म कमलनयन भगवान् श्रीकृष्ण आउनुभएको छैन, किन आउनुभएन यो कुरो मैले बुझेको पनि छैन। मैले सन्देश पठाएका ब्राह्मण पनि अहिलेसम्म फर्किएका छैनन्।

**अपि मय्यनवद्यात्मा दृष्ट्वा किञ्चिज्जुगुप्सितम्।**
**मत्पाणिग्रहणे नूनं नायाति हि कृतोद्यमः॥ २४॥**

**पदार्थ–**
**नूनं** = पक्कै पनि
**अनवद्यात्मा** = शुद्धस्वरूप भएका भगवान् श्रीकृष्णले
**मयि** = ममा
**किञ्चित्** = केही
**जुगुप्सितं** = दोष
**दृष्ट्वा** = देखेर
**हि** = निश्चय नै

**मत्पाणिग्रहणे** = मसँग विवाह गर्नको लागि
**कृतोद्यमः** = उद्यत भई
**अपि न आयाति** = नआउनु-भएको त होइन

**वाक्यार्थ–** अत्यन्त शुद्धस्वरूप भएका भगवान् श्रीकृष्णले ममा कुनै दोष देखेर विवाहका लागि प्रयास गरेर नआउनुभएको त होइन ?

**दुर्भगाया न मे धाता नानुकूलो महेश्वरः ।**
**देवी वा विमुखा गौरी रुद्राणी गिरिजा सती ॥ २५ ॥**

पदार्थ–
**दुर्भगायाः** = भाग्यहीन
**मे** = मेरा लागि
**धाता** = ब्रह्माजी
**न** = अनुकूल हुनुहुन्न
**महेश्वरः** = भगवान् शिवजी पनि
**न अनुकूलः** = अनुकूल हुनुहुन्न
**रुद्राणी** = रुद्रपत्नी
**गिरिजा** = पर्वतराजपुत्री
**सती देवी** = सती देवी
**गौरी वा** = पार्वती पनि
**विमुखा** = विमुख हुनुहुन्छ (अप्रसन्न हुनुहुन्छ)

**वाक्यार्थ–** भाग्यहीन मेरा लागि आज न ब्रह्माजी अनुकूल हुनुहुन्छ त न शङ्करजी र सतीदेवी पार्वती नै अनुकूल हुनुहुन्छ।

**एवं चिन्तयती बाला गोविन्दहृतमानसा ।**
**न्यमीलयत कालज्ञा नेत्रे चाश्रुकलाकुले ॥ २६ ॥**

पदार्थ–
**एवं** = यसरी
**चिन्तयती** = चिन्ता गरिहेकी
**गोविन्दहृतमानसा** = भगवान् गोविन्दद्वारा चित्त हरिएकी
**बाला** = कन्या रुक्मिणीले
**कालज्ञा** = श्रीकृष्ण आउने समय भएको छैन भन्ने बुझी
**अश्रुकलाकुले** = आँसुले भरिएको
**नेत्रे च** = आँखालाई पनि
**न्यमीलयत** = चिम्लिइन्

**वाक्यार्थ–** यसरी चिन्ता गरिरहेकी र भगवान् गोविन्दद्वारा चित्त हरिएकी कन्या रुक्मिणीले भगवान् आउने समय भएको छैन भन्ने बुझी आँसुले भरिएका आफ्ना आँखा बन्द गरिन्।

**एवं वध्वाः प्रतीक्षन्त्या गोविन्दागमनं नृप ।**
**वाम ऊरुर्भुजो नेत्रमस्फुरन् प्रियभाषिणः ॥ २७ ॥**

पदार्थ–
**नृप** = हे राजा परीक्षित्
**एवं** = यस प्रकार
**गोविन्दागमनं** = श्रीकृष्णको आगमनलाई
**प्रतीक्षन्त्याः** = प्रतीक्षा गरिरहेकी
**वध्वाः** = वधू रुक्मिणीको
**प्रियभाषिणः** = प्रियतम श्रीकृष्णको आगमनलाई सङ्केत गर्ने
**वाम** = वायाँ
**ऊरुः** = जाँघ
**भुजः** = हात र
**नेत्रं** = आँखा
**अस्फुरन्** = फर्फरायो

**वाक्यार्थ–** हे परीक्षित् ! यसै गरी श्रीकृष्णको प्रतीक्षा गरिरहेकी नववधू रुक्मिणीको बायाँ जाँघ, हात र आँखा पनि फर्फरायो; जसले प्रियतम श्रीकृष्णको आगमनको सङ्केत गरिरहेको थियो ।

**अथ कृष्णविनिर्दिष्टः स एव द्विजसत्तमः ।**
**अन्तःपुरचरीं देवीं राजपुत्रीं ददर्श ह ॥ २८ ॥**

**पदार्थ–**
**अथ** = यसपछि
**कृष्णविनिर्दिष्टः** = श्रीकृष्णद्वारा निर्देशन दिइएका
**सः एव** = उनै पहिलेका
**द्विजसत्तमः** = श्रेष्ठ ब्राह्मणले
**ह** = निश्चय नै
**अन्तःपुरचरीं** = अन्तःपुरमा बसेकी
**देवीं** = (देवी) सौन्दर्यले दीप्त भएकी
**राजपुत्रीं** = राजपुत्री रुक्मिणीलाई
**ददर्श** = देखे

**वाक्यार्थ–** केही समयपछि भगवान् श्रीकृष्णले पठाउनुभएका सन्देशवाहक ब्राह्मण आए र अन्तःपुरमा बसेकी श्रीकृष्णलाई सम्झिएर ध्यानमग्न भएकी राजपुत्री देवी रुक्मिणीलाई देखे ।

**सा तं प्रहृष्टवदनमव्यग्रात्मगतिं सती ।**
**आलक्ष्य लक्षणाभिज्ञा समपृच्छच्छुचिस्मिता ॥ २९ ॥**

**पदार्थ–**
**लक्षणाभिज्ञा** = (शुभ र अशुभ) लक्षणलाई बुझ्ने
**शुचिस्मिता** = प्रसन्न मुस्कान भएकी
**सती सा** = सती ती रुक्मिणीले
**प्रहृष्टवदनं** = प्रसन्न अनुहार भएका
**अव्यग्रात्मगतिं** = नहड्बडाई आएका
**तं** = ती ब्राह्मणलाई
**आलक्ष्य** = देखेर
**समपृच्छत्** = सोधिन्

**वाक्यार्थ–** रुक्मिणीले पनि प्रसन्न अनुहार भएका, नहड्बडाई आएका आफ्नो सन्देशवाहक बाह्मणलाई देखिन् र शुभ र अशुभ लक्षणको सङ्केत बुझेर प्रसन्न हुँदै ती ब्राह्मणलाई सोधिन् ।

**तस्या आवेदयत् प्राप्तं शशंस यदुनन्दनम् ।**
**उक्तं च सत्यवचनमात्मोपनयनं प्रति ॥ ३० ॥**

**पदार्थ–**
**तस्यै** = (ब्राह्मणले) ती रुक्मिणीलाई
**यदुनन्दनं** = यदुनन्दन भगवान् श्रीकृष्ण
**प्राप्तं** = आइसक्नुभएको कुरा
**आवेदयत्** = बताए र
**आत्मोपनयनं प्रति** = रुक्मिणीलाई आफूसँग लैजाने विषयमा पनि
**सत्यवचनं** = भगवान्ले साँचो-साँचो कुरा
**उक्तं च** = बताउनुभएको पनि
**शशंस** = सूचना दिए

**वाक्यार्थ–** ती ब्राह्मणले अहिले भगवान् श्रीकृष्ण आइसक्नुभएको कुरो र रुक्मिणीलाई लैजान

प्रतिज्ञा गरिसक्नुभएको कुरा पनि रुक्मिणीलाई जानकारी दिए।

**तमागतं समाज्ञाय वैदर्भी हृष्टमानसा।**

**न पश्यन्ती ब्राह्मणाय प्रियमन्यन्ननाम सा॥ ३१॥**

**पदार्थ–**
**तं** = उहाँ (भगवान् श्रीकृष्ण)
**आगतं** = आइसक्नुभएको कुरा
**समाज्ञाय** = थाहा पाएर
**हृष्टमानसा** = प्रसन्न भएकी
**वैदर्भी** = रुक्मिणीले
**ब्राह्मणाय** = ब्राह्मणलाई (सहयोगको बदलामा दिनको लागि)
**अन्यत्** = अरू
**प्रियं** = प्यारो कुरा
**न पश्यन्ती** = नदेखेर
**सा** = ती रुक्मिणीले
**ननाम** = नमस्कार गरिन्

**वाक्यार्थ–** यसरी ब्राह्मणको सहयोगमा भगवान् श्रीकृष्ण आइसक्नुभएको कुरा थाहा पाएर अति प्रसन्न भएकी रुक्मिणीले ती ब्राह्मणलाई उनले गरेको सहयोगको बदलामा दिने अरू प्रिय कुरो केही देखिनन् र केवल नमस्कार गरिन्।

**विवरण–** यस श्लोकमा रुक्मिणीले आफूलाई भगवान्सँग भेटाइदिने ब्राह्मणलाई अरू केही प्रिय वस्तु दिन नसक्ने देखी प्रणाम गरेको वर्णन गरिएको छ। रुक्मिणी लक्ष्मीजीकी अवतार हुन्। लक्ष्मी सम्पूर्ण ऐश्वर्यकी अधिष्ठात्री देवी हुनुहुन्छ। सम्पूर्ण मानिसहरू अनि देवता समेत लक्ष्मीको एक नजर पर्नाले मात्र पनि आफू समृद्ध हुने आशामा रहेका हुन्छन्। लक्ष्मीको कटाक्ष अर्थात् थोरै तेर्सो नजरले हेरिदिँदा पनि अनन्त समृद्धि प्राप्त हुन्छ भने उनले दिन नसक्ने वस्तु संसारमा कुन चाहिँ हुन्छ र? त्यसैले **प्रियं अपश्यन्ती** पदको अर्थ गर्दै श्रीधर स्वामी लेख्नुहुन्छ– **ततः अधिकं प्रियं अपश्यन्ती** अर्थात् त्योभन्दा बढी प्रिय अरू केही नदेख्नाले। भगवान्सँग संयोग गराइदिने ब्राह्मणले गरेको उपकार यति महान् छ कि त्यसका लागि आफ्नो सम्पूर्ण समृद्धिलाई प्रदान गर्दा पनि त्यस ऋणबाट मुक्त हुन सकिँदैन। उपकारको ऋण तिर्न प्रत्युपकार गर्दा त्यो समानको या त्योभन्दा पनि बढी महत्त्वपूर्ण वस्तु दिनुपर्दछ। भगवान्सँग मिलाउने उपकारको सट्टामा पनि अरू कुनै वस्तु दिन सकिन्छ र? त्यसैले यो प्रत्युपकारद्वारा तिर्न नसकिने ऋण हो। त्यसैले रुक्मिणीले प्रणाम गर्नुभएको हो। जोसँग लक्ष्मीजी यसरी भित्रैदेखि प्रसन्न बन्नुहुन्छ, उसलाई बाहिरी सम्पत्ति र आन्तरिक दैवी सम्पत्ति पनि स्वतः नै प्राप्त हुन्छन्। ती ब्राह्मणले लक्ष्मीको समर्पण नै पाएकाले ती पक्कै भित्री–बाहिरी दुबै सम्पत्तिबाट समृद्ध भएको निश्चय गर्न सकिन्छ। त्यसैले यहाँ रुक्मिणीले उनलाई प्रकट रूपमा केही नदिए पनि सर्वस्व दिएको बुझ्न सकिन्छ।

**प्राप्तौ श्रुत्वा स्वदुहितुरुद्वाहप्रेक्षणोत्सुकौ।**

**अभ्ययात् तूर्यघोषेण रामकृष्णौ समर्हणैः॥ ३२॥**

**पदार्थ–**
**स्वदुहितुः** = आफ्नी छोरीको
**उद्वाहप्रेक्षणोत्सुकौ** = विवाह हेर्न उत्सुक भएर
**रामकृष्णौ** = बलराम र श्रीकृष्ण
**प्राप्तौ** = आउनुभएको छ भन्ने

**श्रुत्वा** = सुनेर (राजा भीष्मकले)
**समर्हणैः** = पूजासामग्रीद्वारा
**तूर्यघोषेण** = बाजा-गाजा गरेर
**अभ्ययात्** = स्वागत गरे

**वाक्यार्थ–** राजा भीष्मकले श्रीकृष्ण र बलराम पनि आफ्नी छोरीको विवाह हेर्न उत्सुक भएर आउनुभएको छ भन्ने सुनेर पूजासामग्री र बाजा-गाजा सहित उहाँहरूको भव्य स्वागत गरे।

**मधुपर्कमुपानीय वासांसि विरजांसि सः।**
**उपायनान्यभीष्टानि विधिवत् समपूजयत्॥ ३३॥**

**पदार्थ–**
**सः** = ती भीष्मकले (श्रीकृष्ण र बलरामलाई)
**मधुपर्कम्** = मधुपर्क
**विरजांसि** = सफा
**वासांसि** = कपडाहरू र
**अभीष्टानि** = मनोहर
**उपायनानि** = उपहारहरू
**उपानीय** = चढाएर
**विधिवत्** = विधिपूर्वक
**समपूजयत्** = पूजा गरे

**वाक्यार्थ–** राजा भीष्मकले श्रीकृष्ण र बलरामलाई मधुपर्क, सफा कपडाहरू र मनोहर उपहारहरू चढाएर विधिवत् पूजा गरे।

**तयोर्निवेशनं श्रीमदुपकल्प्य महामतिः।**
**ससैन्ययोः सानुगयोरातिथ्यं विदधे यथा॥ ३४॥**

**पदार्थ–**
**महामतिः** = परम बुद्धिमान् भीष्मकले
**ससैन्ययोः** = सेना सहित र
**सानुगयोः** = अनुचर सहित आउनुभएका
**तयोः** = उहाँहरू दुई (बलराम र श्रीकृष्ण)को लागि
**श्रीमत्** = सारा ऐश्वर्य र सामग्रीले भरिपूर्ण
**निवेशनं** = निवासस्थान
**उपकल्प्य** = दिएर
**यथा** = विधिवत्रूपले
**आतिथ्यं** = अतिथिसत्कार
**विदधे** = गरे

**वाक्यार्थ–** परम बुद्धिमान् भीष्मकले सेना र अन्य अनुचर सहित आउनुभएका बलराम तथा श्रीकृष्णलाई सारा सामग्रीले पूर्ण निवासस्थानमा विश्राम गराएर विधिपूर्वक अतिथिसत्कार गरे।

**एवं राज्ञां समेतानां यथावीर्यं यथावयः।**
**यथाबलं यथावित्तं सर्वैः कामैः समर्हयत्॥ ३५॥**

**पदार्थ–**
**एवं** = यसै गरी (राजा भीष्मकले)
**समेतानां** = आएका
**राज्ञां** = अरू राजाहरूको पनि
**यथावीर्यं** = पराक्रम अनुसार
**यथावयः** = उमेर अनुसार
**यथाबलं** = शक्ति अनुसार र
**यथावित्तं** = धनसम्पत्ति अनुसार
**सर्वैः** = सबै
**कामैः** = इच्छाहरू पूरा गरेर
**समर्हयत्** = पूजा सत्कार गरे

**वाक्यार्थ–** यसै क्रमले राजा भीष्मकले स्वयंवरमा आएका अरू राजाहरूलाई पनि पराक्रम, उमेर, शक्ति र सम्पत्तिको अनुसार सारा इच्छाहरू पूरा गरिदिएर राम्रो सत्कार गरे।

**कृष्णमागतमाकर्ण्य विदर्भपुरवासिनः।**
**आगत्य नेत्राञ्जलिभिः पपुस्तन्मुखपङ्कजम्॥ ३६॥**

**पदार्थ–**
**विदर्भपुरवासिनः** = विदर्भ (सहरका) देशका नागरिकहरूले
**कृष्णं** = भगवान् श्रीकृष्ण
**आगतं** = आएको
**आकर्ण्य** = सुनेर
**आगत्य** = (श्रीकृष्णको निवासमा) आई
**नेत्राञ्जलिभिः** = आँखारूपी अँजुलीहरूद्वारा
**तन्मुखपङ्कजं** = उहाँ (भगवान्)को मुखारविन्दलाई
**पपुः** = (हेराइको माध्यमले) पान गरे

**वाक्यार्थ–** विदर्भ देशका नागरिकहरूले भगवान् श्रीकृष्ण आउनुभएको थाहा पाएर भगवान्को निवासमा आई आफ्ना आँखारूपी अँजुलीहरूद्वारा उहाँको मुखारविन्दको पान गरे। (उहाँको मुखकमलको शोभाको दर्शन गरे।)

**अस्यैव भार्या भवितुं रुक्मिण्यर्हति नापरा।**
**असावप्यनवद्यात्मा भैष्म्याः समुचितः पतिः॥ ३७॥**

**पदार्थ–**
**रुक्मिणी** = रुक्मिणी
**अस्य एव** = उहाँकै
**भार्या** = पत्नी
**भवितुं** = हुन
**अर्हति** = योग्य छिन्
**न अपरा** = अरू कोही पनि योग्य छैनन् र
**अनवद्यात्मा** = अति पवित्र
**असौ अपि** = उहाँ (श्रीकृष्ण) पनि
**भैष्म्याः** = रुक्मिणीको
**समुचितः** = योग्य
**पतिः** = पति (हुनुहुन्छ)

**वाक्यार्थ–** यी रुक्मिणी नै श्रीकृष्णको पत्नी हुन योग्य छिन्, यिनीबाहेक अरू योग्य छैनन् र उहाँ श्रीकृष्ण नै रुक्मिणीको पति हुन योग्य हुनुहुन्छ (अरू कोही योग्य छैनन्)।

**किञ्चित् सुचरितं यन्नस्तेन तुष्टस्त्रिलोककृत्।**
**अनुगृह्णातु गृह्णातु वैदर्भ्याः पाणिमच्युतः॥ ३८॥**

**पदार्थ–**
**नः** = हामीहरूको
**यत् किञ्चित्** = जो केही
**सुचरितं** = शुभ कर्म छ र
**तेन** = त्यो शुभ कर्मबाट
**त्रिलोककृत्** = तीनै लोकका मालिक भगवान्
**तुष्टः** = यदि प्रसन्न हुनुभएको छ भने
**अनुगृह्णातु** = हामीहरूलाई अनुग्रह गर्नुहोस् (र फलस्वरूप)
**अच्युतः** = भगवान् श्रीकृष्णले
**वैदर्भ्याः** = रुक्मिणीको
**पाणिं** = हात
**गृह्णातु** = ग्रहण गर्नुहोस्

**वाक्यार्थ–** यदि हामीबाट केही शुभकर्म भएको छ र त्यसबाट तीनै लोकका मालिक भगवान् प्रसन्न हुनुहुन्छ भने हामीलाई कृपा गर्नुहोस् र भगवान् श्रीकृष्णले रुक्मिणीको पाणिग्रहण गर्नुहोस्।

**एवं प्रेमकलाबद्धा वदन्ति स्म पुरौकसः।**
**कन्या चान्तःपुरात् प्रागाद् भटैर्गुप्ताम्बिकालयम्॥ ३९॥**

**पदार्थ–**
**एवं** = यसरी
**प्रेमकलाबद्धाः** = प्रेमले बाँधिएका
**पुरौकसः** = पुरवासीहरू
**वदन्ति स्म** = (आपसमा) कुरा गर्दथे र यता
**भटैः** = सिपाहीहरूद्वारा
**गुप्ता** = रक्षा गरिएकी
**कन्या च** = कन्या रुक्मिणी चाहिँ
**अन्तःपुरात्** = अन्तःपुरबाट
**अम्बिकालयं** = अम्बिका देवीको मन्दिरतिर
**प्रागात्** = गइन्

**वाक्यार्थ–** यसरी प्रेमले बाँधिएका पुरवासीहरूले आपसमा कुरा गरिरहँदा सिपाहीहरूद्वारा कडा सुरक्षा दिइएकी कन्या रुक्मिणी अम्बिका देवीको दर्शनको लागि अन्तःपुरबाट अम्बिकाको मन्दिरतिर गइन्।

**पद्‌भ्यां विनिर्ययौ द्रष्टुं भवान्याः पादपल्लवम्।**
**सा चानुध्यायती सम्यङ्मुकुन्दचरणाम्बुजम्॥ ४०॥**

**पदार्थ–**
**सम्यक्** = राम्ररी
**मुकुन्दचरणाम्बुजं** = भगवान् श्रीकृष्णको चरणारविन्दलाई
**अनुध्यायती** = चिन्तन गरिरहेकी
**सा च** = ती रुक्मिणी
**भवान्याः** = भगवती पार्वतीको
**पादपल्लवं** = पालुवा जस्ता चरणको
**द्रष्टुं** = दर्शन गर्न
**पद्‌भ्यां** = पैदल नै
**विनिर्ययौ** = गइन्

**वाक्यार्थ–** श्रीकृष्णको चरणलाई सम्झँदै ती रुक्मिणी भगवती पार्वतीको चरणको दर्शनका लागि अन्तःपुरबाट मन्दिरतिर पैदल नै गइन्।

**यतवाङ्मातृभिः सार्धं सखीभिः परिवारिता।**
**गुप्ता राजभटैः शूरैः सन्नद्धैरुद्यतायुधैः।**
**मृदङ्गशङ्खपणवास्तूर्यभेर्यश्च जघ्निरे॥ ४१॥**

**पदार्थ–**
**यतवाङ्मातृभिः** = मौन रहेका आमाहरूका
**सार्धं** = साथमा
**सखीभिः** = आफ्ना साथीसङ्गीहरूद्वारा
**परिवारिता** = घेरिएकी
**सन्नद्धैः** = (कवच आदिले) सजिएका
**उद्यतायुधैः** = हातहतियारले युक्त
**शूरैः** = अति शूरा
**राजभटैः** = राजाका सेनाहरूद्वारा

**गुप्ता** = सुरक्षा गरिएकी रुक्मिणी (मन्दिर गइन्, जुन बखतमा)
**मृदङ्गशङ्खपणवाः** = मादल, शङ्ख, ढोलक आदि
**तूर्यभेर्यः च** = तुरही र भेरी आदि बाजाहरू
**जघ्निरे** = बज्न थाले

**वाक्यार्थ–** मौन रहेका आमाहरूको साथमा साथीसङ्गीले घेरिएकी रुक्मिणी कवच आदिले सजिएका र हातमा हतियार बोकेका शूरवीर सेनाहरूद्वारा सुरक्षित हुँदै मन्दिरतिर गइन्। त्यस बखतमा मादल, शङ्ख, ढोलक, तुरही र भेरी आदि बाजाहरू बजाइएका थिए।

**नानोपहारबलिभिर्वारमुख्याः सहस्रशः।**
**स्रग्गन्धवस्त्राभरणैर्द्विजपत्न्यः स्वलङ्कृताः॥ ४२॥**
**गायन्तश्च स्तुवन्तश्च गायका वाद्यवादकाः।**
**परिवार्य वधूं जग्मुः सूतमागधवन्दिनः॥ ४३॥**

**पदार्थ–**
**नानोपहारबलिभिः** = विभिन्न उपहारसामग्रीहरू लिएर
**सहस्रशः** = हजारौँ
**वारमुख्याः** = गणिकाहरू
**स्रग्गन्धवस्त्राभरणैः** = माला, चन्दन, धूप, वस्त्र, गहना आदि सामग्रीहरू सहित
**स्वलङ्कृताः च** = सजिएका
**द्विजपत्न्यः** = ब्राह्मणीहरू र
**गायकाः** = गायकहरू
**गायन्तः** = गाउँदै
**सूतमागधवन्दिनः** = सूत, मागध आदि वन्दीहरू
**स्तुवन्तः च** = स्तुति गर्दै
**वाद्यवादकाः** = बाजा बजाउनेहरू पनि (बाजा बजाउँदै सँगै)
**वधूं** = वधूलाई
**परिवार्य** = घेरेर
**जग्मुः** = गए

**वाक्यार्थ–** यो रमाइलो यात्रामा हजारौँ गणिकाहरू विभिन्न उपहारसामग्री लिएर, ब्राह्मणीहरू माला, चन्दन, धूप आदि पूजाका सामान लिएर र गायकहरू गाउँदै, सूत, मागध, वन्दीहरू स्तुति र जयकार गर्दै तथा वाद्यवादकहरू बाजा बजाउँदै दुलहीसँगै उनलाई घेरेर गएका थिए।

**आसाद्य देवीसदनं धौतपादकराम्बुजा।**
**उपस्पृश्य शुचिः शान्ता प्रविवेशाम्बिकान्तिकम्॥ ४४॥**

**पदार्थ–**
**देवीसदनं** = देवीको मन्दिरमा
**आसाद्य** = पुगेर
**धौतपादकराम्बुजा** = हातगोडा धोएर
**उपस्पृश्य** = आचमन गरी
**शुचिः** = पवित्र बनेर र
**शान्ता** = शान्त भई रुक्मिणी
**अम्बिकान्तिकं** = भगवती अम्बिकाको नजिक (मन्दिरमा)
**प्रविवेश** = प्रवेश गरिन्

**वाक्यार्थ–** रुक्मिणीले देवीको मन्दिरमा पुगी हातगोडा धोइन् र आचमन गरिन् अनि पवित्र भई शान्तसँग, भगवतीको अम्बिकाको मन्दिरमा प्रवेश गरिन्।

**तां वै प्रवयसो बालां विधिज्ञा विप्रयोषितः ।**

**भवानीं वन्दयाञ्चक्रुर्भवपत्नीं भवान्विताम् ॥ ४५ ॥**

**पदार्थ–**
**प्रवयसः** = बुढी-बुढी
**विधिज्ञाः** = पूजाविधि जान्ने
**विप्रयोषितः** = पुरोहितका पत्नीहरूले
**वै** = निश्चय नै
**तां** = ती
**बालां** = कन्या रुक्मिणीलाई
**भवान्वितां** = शङ्करजी सहित
**भवपत्नीं** = शङ्करजीकी अर्धाङ्गिनी
**भवानीं** = भवानी पार्वतीको
**वन्दयाञ्चक्रुः** = वन्दना गराए

**वाक्यार्थ–** पूजाविधि बुझेका बुढी-बुढी पुरोहितका पत्नीहरूले ती कन्या रुक्मिणीलाई भगवान् शङ्कर सहित पार्वतीको वन्दना गराए।

**नमस्ये त्वाम्बिकेऽभीक्ष्णं स्वसन्तानयुतां शिवाम् ।**

**भूयात् पतिर्मे भगवान् कृष्णस्तदनुमोदताम् ॥ ४६ ॥**

**पदार्थ–**
**अम्बिके** = हे अम्बिका
**स्वसन्तानयुतां** = आफ्ना सन्तान गणेश आदिसहित
**शिवां** = परम मङ्गलकारी
**त्वा** = हजुरलाई
**अभीक्ष्णं** = बारम्बार
**नमस्ये** = नमस्कार गर्दछु
**भगवान् कृष्णः** = भगवान् श्रीकृष्ण
**मे** = मेरा
**पतिः** = पति
**भूयात्** = हुनुहोस्
**तत्** = त्यो मेरो कुरालाई
**अनुमोदताम्** = स्वीकार गर्नुहोस्

**वाक्यार्थ–** हे अम्बिका ! आफ्ना सन्तान गणेशले सहित भएकी परम मङ्गलकारी हजुरलाई म नमस्कार गर्दछु। भगवान् श्रीकृष्ण मेरा पति बन्नुहोस्, यो मेरो कुरालाई हजुरले अनुमोदन गर्नुहोस्।

**अद्भिर्गन्धाक्षतैर्धूपैर्वासःस्रङ्माल्यभूषणैः ।**

**नानोपहारबलिभिः प्रदीपावलिभिः पृथक् ॥ ४७ ॥**

**विप्रस्त्रियः पतिमतीस्तथा तैः समपूजयत् ।**

**लवणापूपताम्बूलकण्ठसूत्रफलेक्षुभिः ॥ ४८ ॥**

**पदार्थ–**
**अद्भिः** = जल
**गन्धाक्षतैः** = चन्दन, अक्षता
**धूपैः** = धूपहरू र
**वासःस्रङ्माल्यभूषणैः** = कपडा, माला तथा आभूषण आदिले
**नानोपहारबलिभिः** = विभिन्न पूजासामग्री र
**प्रदीपावलिभिः** = आरतीद्वारा
**पृथक्** = अलग-अलग रूपमा
(रुक्मिणीले भगवतीको पूजा गरिन्)

**तथा** = त्यसै गरी
**तैः** = तिनै सामग्रीहरूद्वारा र
**लवणापूपताम्बूलकण्ठसूत्र-फलेक्षुभिः** = नुनिलो पुवा, पान, कण्ठसूत्र, फलफूल, उखु आदि सामग्रीहरूले पनि रुक्मिणीले
**पतिमतीः** = पतियुक्त
**विप्रस्त्रियः** = ब्राह्मणपत्नीहरूलाई
**समपूजयत्** = पूजा गरिन्

**वाक्यार्थ–** रुक्मिणीले जल, चन्दन, अक्षता, धूप, दीप, कपडा, माला तथा आभूषण सहित आरतीद्वारा भगवती अम्बिकाको पूजा गरिन्। त्यसपछि रुक्मिणीले तिनै सामग्रीहरूद्वारा नुनिलो पुवा, पान, कण्ठसूत्र, फलफूल, तथा उखु आदि अरू सामग्रीहरूले पनि सधवा ब्राह्मणीहरूको पूजा गरिन्।

**तस्यै स्त्रियस्ताः प्रददुः शेषां युयुजुराशिषः।**
**ताभ्यो देव्यै नमश्चक्रे शेषां च जगृहे वधूः॥ ४९॥**

पदार्थ–
**ताः** = ती
**स्त्रियः** = ब्राह्मणीहरूले
**तस्यै** = ती रुक्मिणीलाई
**शेषां** = बाँकी रहेको (निर्माल्य आदि सामग्रीहरू र आभूषण आदि प्रसाद पनि)
**प्रददुः** = दिए र
**आशिषः** = आशीर्वाद पनि
**युयुजुः** = दिए
**वधूः** = वधू रुक्मिणीले पनि
**देव्यै** = देवी अम्बिकालाई र
**ताभ्यः** = ती ब्राह्मणीहरूलाई
**नमश्चक्रे** = नमस्कार गरिन् र
**शेषां** = शेष (प्रसादको रूपमा प्राप्त भएका) सामग्रीहरूलाई
**जगृहे च** = स्वीकार पनि गरिन्

**वाक्यार्थ–** ती ब्राह्मणीहरूले रुक्मिणीलाई पूजा गरेर बाँकी रहेको निर्माल्य आदि सामग्रीहरू प्रसादको रूपमा दिई आशीर्वाद दिए र रुक्मिणीले पनि देवी अम्बिकालाई र ब्राह्मणीहरूलाई नमस्कार गरिन् र प्राप्त सामग्री स्वीकार पनि गरिन्।

**मुनिव्रतमथ त्यक्त्वा निश्चक्रामाम्बिकागृहात्।**
**प्रगृह्य पाणिना भृत्यां रत्नमुद्रोपशोभिना॥ ५०॥**

पदार्थ–
**अथ** = त्यसपछि (रुक्मिणीले)
**मुनिव्रतं** = मौनव्रतलाई
**त्यक्त्वा** = त्यागेर
**रत्नमुद्रोपशोभिना** = रत्नजडित औँठीले सुशोभित भएको
**पाणिना** = हातले
**भृत्यां** = सेविकालाई
**प्रगृह्य** = समातेर
**अम्बिकागृहात्** = भगवती अम्बिकाको मन्दिरबाट
**निश्चक्राम** = बाहिर निस्किन्

**वाक्यार्थ–** त्यसपछि रुक्मिणीले मौनव्रत त्यागिन् र रत्नजडित औँठीले सुशोभित आफ्नो हातले सेविकालाई समाउँदै भगवती पार्वतीको मन्दिरबाट बाहिर निस्किन्।

**तां देवमायामिव वीरमोहिनीं सुमध्यमां कुण्डलमण्डिताननाम्।**
**श्यामां नितम्बार्पितरत्नमेखलां व्यञ्जत्स्तनीं कुन्तलशङ्कितेक्षणाम्॥ ५१॥**

**शुचिस्मितां बिम्बफलाधरद्युतिशोणायमानद्विजकुन्दकुड्मलाम् ।**
**पदा चलन्तीं कलहंसगामिनीं सिञ्जत्कलानूपुरधामशोभिना ।**
**विलोक्य वीरा मुमुहुः समागता यशस्विनस्तत्कृतहृच्छयार्दिताः ॥ ५२ ॥**

**पदार्थ–**
**देवमायाम् इव** = भगवान्‌कै मायाशक्ति जस्ती
**वीरमोहिनीं** = वीर पुरुषहरूलाई मोहित पार्ने
**सुमध्यमां** = पातलो कम्मर भएकी
**कुण्डलमण्डिताननां** = कुण्डल लगाउनाले अनुहार झल्किएकी
**श्यामां** = तरुण अवस्थाकी
**नितम्बार्पितरत्नमेखलां** = नितम्बमा रत्नादिजडित मेखला धारण गरेकी
**व्यञ्जत्स्तनीं** = केही उठेका स्तन भएकी
**कुन्तलशङ्कितेक्षणां** = अगाडि लर्केको केशले गर्दा केही चञ्चल दृष्टि भएकी
**शुचिस्मितां** = बिस्तारै मुस्कुराइरहेकी
**बिम्बफलाधरद्युतिशोणायमान-द्विजकुन्दकुड्मलां** = ओठको कान्तिले गर्दा कुन्दपुष्पको कोपिलाजस्ता सुन्दर दाँत भएकी
**कलहंसगामिनीं** = राजहंसको जस्तो गति भएकी र
**सिञ्जत्कलानूपुरधामशोभिना** = बजिरहेका पाउजू आदि अलङ्कारको कान्तिले सुशोभित
**पदा** = पाउद्वारा
**चलन्तीं** = हिँडिरहेकी
**तां** = ती रुक्मिणीलाई
**विलोक्य** = देखेर
**समागताः** = स्वयंवरमा आएका
**तत्कृतहृच्छयार्दिताः** = रुक्मिणीको क्रियाकलाप देखेर कामदेवद्वारा पीडित भएका
**यशस्विनः** = यशस्वी
**वीराः** = वीरहरू
**मुमुहुः** = मोहित भए

**वाक्यार्थ–** भगवान्‌को मायाशक्ति जस्ती, वीर पुरुषहरूलाई पनि मोहित पार्ने, पातलो कम्मर भएकी, कुण्डल लगाउनाले अनुहार झल्किएकी, तरुण अवस्थाकी, नितम्बमा रत्नादिजडित मेखला धारण गरेकी, केही उठेका स्तन भएकी, अगाडि लर्केको केशले गर्दा केही चञ्चल दृष्टि भएकी, बिस्तारै मुस्कुराइरहेकी, ओठको कान्तिले गर्दा कुन्दपुष्पको कोपिलाजस्ता सुन्दर दाँत भएकी, राजहंसको जस्तो गति भएकी र बजिरहेका पाउजू आदि अलङ्कारको कान्तिले सुशोभित पाउद्वारा हिँडिरहेकी ती रुक्मिणीको क्रियाकलाप देखेर कामदेवद्वारा पीडित भएका स्वयंवरमा आएका यशस्वी वीरहरू मोहित भए।

**यां वीक्ष्य ते नृपतयस्तदुदारहास-**
**व्रीडावलोकहृतचेतस उज्झितास्त्राः ।**
**पेतुः क्षितौ गजरथाश्वगता विमूढा**
**यात्राच्छलेन हरयेऽर्पयतीं स्वशोभाम् ॥ ५३ ॥**

**पदार्थ–**
**यात्राच्छलेन** = यात्राको वहानाले
**स्वशोभां** = आफ्नो शोभा

(सौन्दर्य)
**हरये** = भगवान् श्रीकृष्णलाई
**अर्पयतीं** = अर्पण गरिरहेकी (देखाइरहेकी)
**यां** = जो रुक्मिणीलाई
**वीक्ष्य** = देखेर
**तदुदारहासव्रीडावलोकहृत-चेतसः** = उनको सुखद हाँसो र लज्जापूर्वकको हेराइलाई देखेर विक्षिप्त चित्त भएका
**विमूढाः** = लठ्ठ परेका
**उज्झितास्त्राः** = अस्त्रहरू बिर्सिएका
**गजरथाश्वगताः** = हात्ती, रथ, घोडा आदिमा बसेका
**ते नृपतयः** = ती राजाहरू
**क्षितौ** = पृथिवीमा
**पेतुः** = लडे (बेहोस भएर ढले)

**वाक्यार्थ–** यात्राको वहानाले आफ्नो सौन्दर्य भगवान् श्रीकृष्णलाई देखाइरहेकी रुक्मिणीलाई अनि उनको सुखद हाँसो र लज्जापूर्वकको हेराइलाई देखेर त्यहाँ उपस्थित राजाहरू विक्षिप्त भए, लठ्ठ परे र उनीहरूले आफ्ना अस्त्रहरू पनि बिर्सिए। हात्ती, रथ, घोडा आदिमा बसेका तिनीहरू बेहोस भई आफू बसेको ठाउँबाट भुइँमा लडे।

**सैवं शनैश्चलयती चलपद्मकोशौ**
**प्राप्तिं तदा भगवतः प्रसमीक्षमाणा ।**
**उत्सार्य वामकरजैरलकानपाङ्गैः**
**प्राप्तान् ह्रियैक्षत नृपान् ददृशेऽच्युतं सा ॥ ५४ ॥**

**पदार्थ–**
**एवं** = यसरी
**तदा** = त्यस बखतमा
**भगवतः** = भगवान् श्रीकृष्णको
**प्राप्तिं** = आगमनलाई
**प्रसमीक्षमाणा** = प्रतीक्षा गर्दै र
**चलपद्मकोशौ** = चलायमान कमलको फूलजस्तो चरणलाई
**शनैः** = बिस्तारै
**चलयती** = सारिरहेकी
**सा** = ती रुक्मिणीले
**वामकरजैः** = बायाँ हातको औँलाले
**अलकान्** = आफ्नो निधारमा लत्रेको केशलाई
**उत्सार्य** = हटाएर
**ह्रिया** = लाज मानी
**प्राप्तान्** = त्यहाँ आएका
**नृपान्** = राजाहरूलाई
**अपाङ्गैः** = आफ्ना चञ्चल नेत्रले
**ऐक्षत** = हेरिन् र
**सा** = उनले (त्यहाँ)
**अच्युतं** = भगवान् श्रीकृष्णलाई
**ददृशे** = देखिन्

**वाक्यार्थ–** त्यस बखतमा भगवान्को आगमनको प्रतीक्षा गरिहेकी र आफ्ना कमलजस्ता कोमल चरणलाई बिस्तारै सारिहेकी रुक्मिणीले लाज मानी–मानी बायाँ हातका औँलाले आफ्नो निधारमा लत्रेको केशलाई पन्छाएर आफ्ना चञ्चल दृष्टिले त्यहाँ आएका राजाहरूलाई हेरिन्। यसै क्रममा उनले भगवान् श्रीकृष्णलाई पनि देखिन्।

**तां राजकन्यां रथमारुरुक्षतीं जहार कृष्णो द्विषतां समीक्षताम् ।**
**रथं समारोप्य सुपर्णलक्षणं राजन्यचक्रं परिभूय माधवः ॥ ५५ ॥**
**ततो ययौ रामपुरोगमः शनैः शृगालमध्यादिव भागहृद्धरिः ॥ ५६ ॥**

**पदार्थ–**
**माधवः** = लक्ष्मीपति
**कृष्णः** = भगवान् श्रीकृष्णले
**रथं** = रथमा
**आरुरुक्षतीं** = चढ्न लागेकी
**राजकन्यां** = राजकुमारी
**तां** = ती रुक्मिणीलाई
**द्विषतां** = शत्रुहरूले
**समीक्षतां** = हेर्दा–हेर्दै
**सुपर्णलक्षणं** = गरुडचिह्नले अङ्कित
**रथं** = रथमा
**समारोप्य** = चढाएर
**राजन्यचक्रं** = सारा क्षत्रियको समूहलाई
**परिभूय** = तिरस्कार गरी
**जहार** = हरण गर्नुभयो
**ततः** = त्यसपछि
**शृगालमध्यात्** = श्यालहरूको बीचबाट
**भागहृत्** = आफ्नो भागलाई ग्रहण गर्ने
**हरिः इव** = सिंह झैँ
(निर्भय भएर भगवान् श्रीकृष्ण)
**रामपुरोगमैः** = बलराम आदि सहित भएर
**शनैः** = बिस्तारै
**ययौ** = हिँड्नुभयो

**वाक्यार्थ–** लक्ष्मीपति भगवान्ले आफ्नो रथमा चढ्न लागेकी राजकुमारी रुक्मिणीलाई शत्रुहरूले हेर्दा–हेर्दै गरुडध्वजले अङ्कित रथमा चढाउनुभयो र सारा क्षत्रिय राजसमूहलाई तिरस्कार गरी हरण गर्नुभयो। त्यसपछि भगवान् श्रीकृष्णले जसरी श्यालहरूको बीचबाट सिंहले निर्भय भएर आफ्नो भाग ग्रहण गर्दछ, त्यसै गरी रुक्मिणीलाई लिई बलराम आदिसँगै बिस्तारै त्यहाँबाट हिँड्नुभयो।

**तं मानिनः स्वाभिभवं यशःक्षयं परे जरासन्धवशा न सेहिरे।**
**अहो धिगस्मान् यश आत्तधन्वनां गोपैर्हृतं केशरिणां मृगैरिव ॥ ५७ ॥**

**पदार्थ–**
**मानिनः** = अत्यन्त अहङ्कारी
**जरासन्धवशाः** = जरासन्धका वशवर्ती
**परे** = अरू राजाहरूले
**तं** = त्यस्ता
**स्वाभिभवं** = आफूहरूको तिरस्कार र
**यशःक्षयं** = कीर्तिको नाशलाई
**न सेहिरे** = सहन गर्न सकेनन् (र भन्न थाले)
**अहो** = अहो
**अस्मान्** = हामीहरूलाई
**धिक्** = धिक्कार छ
**मृगैः** = अन्य पशुहरूद्वारा
**केशरिणां इव** = सिंहको (भाग हरण गरिए) झैँ
**गोपैः** = यी गोठालाहरूद्वारा
**आत्तधन्वनां** = धनुर्धारी हामीहरूको
**यशः** = कीर्ति
**हृतम्** = हरण गरियो

**वाक्यार्थ–** अति अहङ्कारी जरासन्धका वशवर्ती राजाहरूले त्यस्तो आफ्नो अपमान र कीर्तिको नाश भएको सहन गर्न सकेनन् र आफैँलाई धिक्कार्दै भन्न थाले– 'अहो ! अन्य पशुहरूले सिंहको भाग खोसे झैँ यी गोठालाहरूले पनि धनुर्धारी हामी पराक्रमी वीरहरूको कीर्तिलाई खोसेर लगे।'

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**
**रुक्मिणीहरणं नाम त्रिपञ्चाशत्तमोऽध्यायः ॥ ५३ ॥**

# अथ चतुःपञ्चाशत्तमोऽध्यायः

## भगवान् श्रीकृष्ण र रुक्मिणीको विवाह

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**इति सर्वे सुसंरब्धा वाहानारुह्य दंशिताः।**
**स्वैः स्वैर्बलैः परिक्रान्ता अन्वीयुर्धृतकार्मुकाः॥ १॥**

**पदार्थ—**
**इति** = यसरी (आफूलाई धिक्कारिरहेका)
**सुसंरब्धाः** = अत्यन्त रिसाएका
**दंशिताः** = कवच लगाएका
**वाहान्** = आ-आफ्ना वाहनमा
**आरुह्य** = चढेर
**धृतकार्मुकाः** = हातमा धनुष आदि हतियार लिएका
**स्वैः स्वैः** = आ-आफ्ना
**बलैः** = सेनाद्वारा
**परिक्रान्ताः** = घेरिएका
**सर्वे** = सबै (जरासन्ध आदि) राजाहरू
**अन्वीयुः** = भगवान् श्रीकृष्णको पछि लागे

**वाक्यार्थ—** यसरी आफैंलाई धिक्कारिरहेका ती सबै राजाहरू रिसले चुर भए र आफ्ना कवच आदि लगाई आ-आफ्ना वाहनमा चढे, अनि धनुष आदि हतियार लिई उनीहरूले आ-आफ्नो सेनासहित भगवान् श्रीकृष्णको पिछा गरे।

**तानापतत आलोक्य यादवानीकयूथपाः।**
**तस्थुस्तत्सम्मुखा राजन् विस्फूर्ज्य स्वधनूंषि ते॥ २॥**

**पदार्थ—**
**राजन्** = हे राजा परीक्षित्
**आपततः** = (आफूतिर) आइलागेका
**तान्** = ती शत्रुहरूलाई
**आलोक्य** = देखेर
**ते** = ती
**यादवानीकयूथपाः** = यादवसेनाका सेनापतिहरू
**स्वधनूंषि** = आफ्ना धनुहरूलाई
**विस्फूर्ज्य** = टङ्कार गर्दै
**तत्सम्मुखाः** = (युद्धका लागि) उनीहरूको सम्मुख
**तस्थुः** = उभिए

**वाक्यार्थ—** हे राजा परीक्षित् ! यसरी आइलागिरहेका शत्रुहरूलाई देखेपछि ती यादवसेनापतिहरू पनि रोकिए र धनुषटङ्कार गर्दै युद्धका लागि उनीहरूका अगाडि उभिए।

**अश्वपृष्ठे गजस्कन्धे रथोपस्थे च कोविदाः।**
**मुमुचुः शरवर्षाणि मेघा अद्रिष्वपो यथा॥ ३॥**

**पदार्थ—**
**कोविदाः** = (धनुर्विद्याका) ज्ञाता
(जरासन्ध आदि राजाहरूले)

**अश्वपृष्ठे** = घोडाको पीठमाथि
**गजस्कन्धे** = हात्तीको काँधमाथि र
**रथोपस्थे च** = रथमा पनि बसेर
**यथा** = जसरी
**मेघाः** = बादलहरूले
**अद्रिषु** = पहाडहरूमा
**अपः** = पानी बर्साउँछन् (त्यसै गरी) यादवसेनामाथि
**शरवर्षाणि** = बाणका वर्षाहरू
**मुमुचुः** = छोड्न थाले

**वाक्यार्थ–** धनुर्विद्याका ज्ञाता जरासन्ध आदि राजाहरू जो कोही घोडामा, कोही हात्तीमा र कोही रथमा सवार थिए, उनीहरूले यादवसेनामाथि मेघले पहाडमा पानी वर्षाए झैँ बाणको वृष्टि गर्न थाले।

**पत्युर्बलं शरासारैश्छन्नं वीक्ष्य सुमध्यमा।**
**सव्रीडमैक्षत् तद्वक्त्रं भयविह्वललोचना॥ ४॥**

**पदार्थ–**
**सुमध्यमा** = परमसुन्दरी (पातलो कम्मर भएकी) रुक्मिणीले
**शरासारैः** = बाणै बाणको वर्षाद्वारा
**छन्नं** = ढाकिएको
**पत्युः** = आफ्ना पतिको
**बलं** = सेनालाई
**वीक्ष्य** = देखेर
**भयविह्वललोचना** = डरले व्याकुल आँखाले
**सव्रीडं** = केही लाज मान्दै
**तद्वक्त्रं** = उहाँ (पति)को अनुहारलाई
**ऐक्षत्** = हेरिन्

**वाक्यार्थ–** परमसुन्दरी रुक्मिणी बाणको वर्षाद्वारा आफ्ना पतिको सेना ढाकिएको देखेर डराइन् र लाज मान्दै अति व्याकुल नेत्रले उनले पतिको मुखतिर हेरिन्।

**प्रहस्य भगवानाह मा स्म भैर्वामलोचने।**
**विनङ्क्ष्यत्यधुनैवैतत् तावकैः शात्रवं बलम्॥ ५॥**

**पदार्थ–**
**तदा** = त्यस बखतमा
**प्रहस्य** = मुस्कुराउँदै
**भगवान्** = भगवान् श्रीकृष्णले
**आह** = भन्नुभयो
**वामलोचने** = हे सुन्दरी रुक्मिणी
**मा स्म भैः** = नडराऊ
**अधुना एव** = अहिले नै
**तावकैः** = तिम्रा यी यादवसेनाहरूद्वारा
**शात्रवं** = शत्रुको
**एतत्** = यो
**बलं** = सेना
**विनङ्क्ष्यति** = नष्ट हुनेछ

**वाक्यार्थ–** त्यस बखतमा भगवान् श्रीकृष्णले मुस्कुराउँदै रुक्मिणीलाई भन्नुभयो– 'हे सुन्दरी ! नडराऊ, अहिले नै तिम्रा यी यादवसेनाले ती शत्रुका सेनाहरूलाई नाश गर्नेछन्।'

**तेषां तद्विक्रमं वीरा गदसङ्कर्षणादयः।**
**अमृष्यमाणा नाराचैर्जघ्नुर्हयगजान् रथान्॥ ६॥**

**पदार्थ–**
**गदसङ्कर्षणादयः** = गद, सङ्कर्षण आदि

**वीराः** = वीरहरूले
**तद्विक्रमं** = त्यो शत्रुपक्षको पराक्रमलाई
**अमृष्यमाणाः** = सहन गर्न नसकी
**नाराचैः** = बाणहरूद्वारा (शत्रुपक्षका)
**हयगजान्** = घोडा, हात्तीहरू र
**रथान्** = रथहरूसहित सेनाहरूलाई पनि
**जघ्नुः** = मार्न थाले

**वाक्यार्थ–** (यादवपक्षका) गद, सङ्कर्षण आदि वीरहरूले शत्रुपक्षको त्यो पराक्रमलाई सहन गर्न नसकी आफ्ना बाणहरूले उनीहरूका घोडा, हात्ती, रथ सहित सेनाहरूलाई पनि मार्न थाले।

**पेतुः शिरांसि रथिनामश्विनां गजिनां भुवि।**
**सकुण्डलकिरीटानि सोष्णीषाणि च कोटिशः॥ ७॥**

**पदार्थ–**
**रथिनां** = रथमा चढेका
**अश्विनां** = घोडामा चढेका र
**गजिनां** = हात्तीमा चढेका वीरहरूको
**सकुण्डलकिरीटानि** = कुण्डल र किरीटसहित
**सोष्णीषाणि च** = पगरीसहित
**कोटिशः** = हजारौँ
**शिरांसि** = टाउकाहरू
**भुवि** = भुइँमा
**पेतुः** = खसे

**वाक्यार्थ–** (जरासन्धका पक्षका) रथ, घोडा र हात्तीमा चढेका लडाकुहरूको किरीट, कुण्डल र पगरी सहित हजारौँ टाउकाहरू (बाणले काटिएर) भुइँमा खसे।

**हस्ताः सासिगदेष्वासाः करभा ऊरवोऽङ्घ्रयः।**
**अश्वाश्वतरनागोष्ट्रखरमर्त्यशिरांसि च॥ ८॥**

**पदार्थ–**
**सासिगदेष्वासाः** = तरबार, गदा, धनुष आदि लिएका
**हस्ताः** = हातहरू
**करभाः** = पाखुराहरू
**ऊरवः** = जाँघहरू
**अङ्घ्रयः** = खुट्टाहरू
**अश्वाश्वतरनागोष्ट्रखरमर्त्य-शिरांसि च** = घोडा, खच्चड, हात्ती, ऊँट, गधा र मानिसका टाउकाहरू पनि (काटिएर भुइँमा खसे)

**वाक्यार्थ–** त्यसै गरी तरबार, गदा, धनुष आदि हतियार लिएका हातहरू, पाखुराहरू, जाँघहरू, खुट्टाहरू अनि घोडा, खच्चड, हात्ती, ऊँट, गधा र मानिसका टाउकाहरू पनि काटिएर भुइँमा खसे।

**हन्यमानबलानीका वृष्णिभिर्जयकाङ्क्षिभिः।**
**राजानो विमुखा जग्मुर्जरासन्धपुरःसराः॥ ९॥**

**पदार्थ–**
**जयकाङ्क्षिभिः** = आफ्नो विजय चाहने
**वृष्णिभिः** = यादवहरूद्वारा
**हन्यमानबलानीकाः** = सैन्यसमुदाय नष्ट बनाइएपछि
**जरासन्धपुरःसराः** = जरासन्ध आदि
**राजानः** = राजाहरू

**विमुखाः** = युद्धबाट विमुख भएर **जग्मुः** = फर्किए

**वाक्यार्थ–** आफ्नो विजय चाहने यादव वीरहरूले शत्रुपक्षका सैन्यसमुदायलाई नष्ट पारेपछि जरासन्ध आदि राजाहरू युद्धबाट विमुख भएर फर्किए।

**शिशुपालं समभ्येत्य हृतदारमिवातुरम्।**
**नष्टत्विषं गतोत्साहं शुष्यद्वदनमब्रुवन्॥ १०॥**

**पदार्थ–**
**हृतदारं इव** = आफ्नी पत्नी नै हरण भएको व्यक्ति झैँ
**आतुरम्** = व्याकुल भएको
**नष्टत्विषं** = कान्ति नष्ट भएको
**गतोत्साहं** = उत्साहरहित
**शुष्यद्वदनं** = ओठ-मुख सुकेको
**शिशुपालं** = शिशुपाललाई
**समभ्येत्य** = भेटेर, जरासन्ध आदिले
**अब्रुवन्** = भने

**वाक्यार्थ–** आफ्नी पत्नीको नै हरण भए झैँ व्याकुल भएको, मुखमा कुनै कान्ति नभएको र उत्साहरहित भएको अनि ओठ-मुख सुकेको शिशुपाललाई देखेर जरासन्ध आदि राजाहरूले भने।

**भो भो पुरुषशार्दूल दौर्मनस्यमिदं त्यज।**
**न प्रियाप्रिययो राजन् निष्ठा देहिषु दृश्यते॥ ११॥**

**पदार्थ–**
**भो भो पुरुषशार्दूल** = हे पुरुषश्रेष्ठ (पुरुषव्याघ्र) शिशुपाल
**इदं** = यो (विवाह सम्बन्धी कुराबाट आएको)
**दौर्मनस्यं** = खिन्नतालाई
**त्यज** = त्यागिदिनुहोस्
**राजन्** = हे राजा
**देहिषु** = प्राणीहरूमा
**प्रियाप्रिययोः** = सुख र दुःखको
**निष्ठा** = स्थिरता
**न दृश्यते** = देखिँदैन

**वाक्यार्थ–** हे पुरुषश्रेष्ठ शिशुपाल ! यो विवाहको प्रसङ्गबाट भएको खिन्नतालाई त्यागिदिनुहोस्। यो संसारमा कुनै पनि प्राणीमा सुख र दुःख सधैँ रहिरहेको पाइँदैन।

**यथा दारुमयी योषिन्नृत्यते कुहकेच्छया।**
**एवमीश्वरतन्त्रोऽयमीहते सुखदुःखयोः॥ १२॥**

**पदार्थ–**
**यथा** = जसरी
**कुहकेच्छया** = चटकीको इच्छा अनुसार
**दारुमयी** = काठबाट बनाइएको
**योषित्** = पुतली (स्त्रीको गतिमा)
**नृत्यते** = नाच्दछ
**एवं** = त्यसै गरी
**ईश्वरतन्त्रः** = ईश्वरको अधीनमा रहेको
**अयं** = यो जीवात्मा पनि
**सुखदुःखयोः** = सुख र दुःखका लागि
**ईहते** = प्रयत्न गर्दछ

**वाक्यार्थ–** जसरी कुनै चटकीको इच्छा अनुसार कठपुतली नाच्दछ त्यसै गरी ईश्वरको अधीनमा रहेको जीव पनि सुख र दुःखका लागि प्रयत्न गर्दछ।

**शौरेः सप्तदशाहं वै संयुगानि पराजितः।**
**त्रयोविंशतिभिः सैन्यैर्जिग्ये एकमहं परम्॥ १३॥**

**पदार्थ–**
**वै** = निश्चय नै
**अहं** = म (जरासन्ध)
**सप्तदश संयुगानि** = सत्र पटकसम्म गरेको युद्धमा
**त्रयोविंशतिभिः सैन्यैः** = तेईस अक्षौहिणी सेना सहित
**शौरेः** = कृष्णबाट
**पराजितः** = हारेँ
**परं** = तर
**अहं** = मैले
**एकं** = एउटा (अठारौँ) युद्ध चाहिँ
**जिग्ये** = जितेँ

**वाक्यार्थ–** तेईस-तेईस अक्षौहिणी सेना लिएर युद्ध गर्दा सत्रपटकसम्म कृष्णबाट मैले हारेँ तर अठारौँ पटकमा चाहिँ मैले उसलाई जितेँ।

**तथाप्यहं न शोचामि न प्रहृष्यामि कर्हिचित्।**
**कालेन दैवयुक्तेन जानन् विद्रावितं जगत्॥ १४॥**

**पदार्थ–**
**तथा अपि** = तैपनि
**अहं** = म
**दैवयुक्तेन** = अदृष्टद्वारा प्रेरित
**कालेन** = कालद्वारा
**जगत्** = सारा चराचर जगत्लाई
**विद्रावितं** = चलाइएको छ भन्ने कुरा
**जानन्** = बुझेर
**कर्हिचित्** = कहिल्यै पनि
**न शोचामि** = (हारेकोमा) न शोक गर्छु
**न प्रहृष्यामि** = (जितेकोमा) न हर्षित नै हुन्छु

**वाक्यार्थ–** यी सबै कुरा हुँदाहुँदै पनि अदृष्टद्वारा प्रेरित कालले यो सारा संसारलाई चलाएको छ भन्ने बुझेर म कहिल्यै पनि आफ्नो हारमा चिन्तित पनि हुन्नँ र जितमा हर्षित पनि बन्दिनँ।

**अधुनापि वयं सर्वे वीरयूथपयूथपाः।**
**पराजिताः फल्गुतन्त्रैर्यदुभिः कृष्णपालितैः॥ १५॥**

**पदार्थ–**
**अधुना अपि** = अहिले पनि
**वीरयूथपयूथपाः** = वीर सेनापतिहरूका पनि नायक
**वयं** = हामीहरू
**सर्वे** = सबै
**कृष्णपालितैः** = कृष्णद्वारा पालित
**फल्गुतन्त्रैः** = थोरै
**यदुभिः** = यदुवंशी सेनाहरूद्वारा
**पराजिताः** = हराइयौँ

**वाक्यार्थ–** अहिले पनि वीर वीर सेनापतिहरूका पनि नायक हामीहरू सबै कृष्णद्वारा पालित थोरै यदुवंशी सेनाहरूद्वारा हराइयौँ।

**रिपवो जिग्युरधुना काल आत्मानुसारिणि।**
**तदा वयं विजेष्यामो यदा कालः प्रदक्षिणः॥ १६॥**

**पदार्थ–**
**आत्मानुसारिणि** = आफ्नो अनुकूल भएको
**काले** = समयमा
**अधुना** = अहिले
**रिपवः** = यी हाम्रा शत्रु यादवहरूले
**जिग्युः** = जिते
**यदा** = जहिले
**कालः** = समय
**प्रदक्षिणः** = हाम्रो अनुकूल हुन्छ
**तदा** = त्यस बखतमा
**वयं** = हामीहरूले
**विजेष्यामः** = जित्नेछौँ

**वाक्यार्थ–** यादवहरूले अहिले आफ्नो अनुकूल समय पाएर हामीहरूलाई जिते। हामीहरूले पनि आफ्नो अनुकूल समय आएपछि उनीहरूलाई अवश्य जित्नेछौँ।

**एवं प्रबोधितो मित्रैश्चैद्योऽगात् सानुगः पुरम्।**
**हतशेषाः पुनस्तेऽपि ययुः स्वं स्वं पुरं नृपाः॥ १७॥**

**पदार्थ–**
**एवं** = यसरी
**मित्रैः** = साथीहरूद्वारा
**प्रबोधितः** = सम्झाइएको
**सानुगः** = अन्य अनुचरसहित
**चैद्यः** = शिशुपाल
**पुरं** = आफ्नो नगरतिर
**अगात्** = गयो र
**पुनः** = फेरि
**हतशेषाः** = नमरेर बाँकी रहेका
**ते** = ती (जरासन्ध आदि)
**नृपाः अपि** = राजाहरू पनि
**स्वं स्वं** = आ-आफ्नो
**पुरं** = नगरतिर
**ययुः** = गए

**वाक्यार्थ–** यसरी साथीहरूले सम्झाएपछि शिशुपाल आफ्ना बाँकी सेनासहित आफ्नै राज्यतिर गयो र अन्य जीवित राजाहरू पनि आ-आफ्नै नगरतिर गए।

**रुक्मी तु राक्षसोद्वाहं कृष्णद्विडसहन् स्वसुः।**
**पृष्ठतोऽन्वगमत् कृष्णमक्षौहिण्या वृतो बली॥ १८॥**

**पदार्थ–**
**बली** = बलशाली
**कृष्णद्विद्** = श्रीकृष्णलाई द्वेष गर्ने
**रुक्मी तु** = (रुक्मिणीको दाजु) रुक्मी चाहिँ
**स्वसुः** = आफ्नी बहिनीको
**राक्षसोद्वाहं** = राक्षसविधिले विवाह गरेको (हरण गरेको) कुरालाई
**असहन्** = सहन गर्न नसकी
**अक्षौहिण्या वृतः** = अक्षौहिणी सेनाद्वारा घेरिएर
**कृष्णं** = श्रीकृष्णको
**पृष्ठतः** = पछि पछि
**अन्वगमत्** = जान लाग्यो

**वाक्यार्थ–** बलशाली अनि श्रीकृष्णलाई द्वेष गर्ने रुक्मी बहिनीलाई राक्षसविधिले विवाह गरेको (हरण गरेको) कुरा सहन नसकी एक अक्षौहिणी सेना लिई श्रीकृष्णको पछि लाग्यो।

**रुक्म्यमर्षी सुसंरब्धः शृण्वतां सर्वभूभुजाम्।**
**प्रतिजज्ञे महाबाहुर्दंशितः सशरासनः॥ १९॥**

पदार्थ—
**महाबाहुः** = महावीर
**रुक्मी** = रुक्मीले
**अमर्षी** = बहिनीको हरण सहन गर्न नसकी
**सुसंरब्धः** = अति रिसाएर
**दंशितः** = कवच बाँधेर
**सशरासनः** = हातमा धनु लिई
**सर्वभूभुजां** = सारा राजाहरूले
**शृण्वतां** = सुन्ने गरी
**प्रतिजज्ञे** = प्रतिज्ञा गर्‍यो

**वाक्यार्थ—** महावीर रुक्मीले बहिनीको हरण सहन नसकी अति रिसाएर कवच बाँधी हातमा धनु लिएर सारा राजाहरूले सुन्ने गरी प्रतिज्ञा गर्‍यो।

**अहत्वा समरे कृष्णमप्रत्यूह्य च रुक्मिणीम्।**
**कुण्डिनं न प्रवेक्ष्यामि सत्यमेतद् ब्रवीमि वः॥ २०॥**

पदार्थ—
**समरे** = युद्धमा
**कृष्णं** = कृष्णलाई
**अहत्वा** = नमारीकन र
**रुक्मिणीम् च** = बहिनी रुक्मिणीलाई
**अप्रत्यूह्य** = नफर्काईकन
**कुण्डिनं** = यो कुण्डिन नगरमा
**न प्रवेक्ष्यामि** = म प्रवेश गर्नेछैन
**वः** = तपाईंहरू सबैलाई
**एतत्** = यो कुरा
**सत्यं** = साँचो
**ब्रवीमि** = भन्दैछु

**वाक्यार्थ—** त्यसपछि रुक्मीले प्रतिज्ञा गर्‍यो— म तपाईंहरू सबैको बीचमा साँचो कुरा भन्दैछु कि कृष्णलाई नमारीकन र रुक्मिणीलाई नफर्काईकन म कुण्डिन नगरमा प्रवेश गर्नेछैन।

**इत्युक्त्वा रथमारुह्य सारथिं प्राह सत्वरः।**
**चोदयाश्वान् यतः कृष्णः तस्य मे संयुगं भवेत्॥ २१॥**

पदार्थ—
**इति उक्त्वा** = यति भनेर
**रथं** = रथमा
**आरुह्य** = चढेर
**सत्वरः** = अत्यन्त छिटो गरी
**सारथिं** = सारथिलाई
**प्राह** = (रुक्मीले) भन्यो
**यतः** = जहाँ
**कृष्णः** = कृष्ण (छ त्यतैतिर)
**अश्वान्** = घोडाहरूलाई
**चोदय** = लैजाऊ (जसले गर्दा)
**तस्य** = ऊसँग
**मे** = मेरो
**संयुगं** = युद्ध
**भवेत्** = होस्

**वाक्यार्थ—** यति भनेर अत्यन्त छिटो गरी रथमा चढी रुक्मीले सारथिलाई भन्यो— कृष्ण भएको ठाउँमा घोडाहरू लैजाऊ, जसले गर्दा उससँग मेरो युद्ध होस्।

**अद्याहं निशितैर्बाणैर्गोपालस्य सुदुर्मतेः।**
**नेष्ये वीर्यमदं येन स्वसा मे प्रसभं हृता॥ २२॥**

पदार्थ—
**अद्य** = आज
**अहं** = म
**सुदुर्मतेः** = दुर्बुद्धि
**गोपालस्य** = गोठाले कृष्णको
**निशितैः** = तीखा

| | | |
|---|---|---|
| **बाणैः** = बाणहरूद्वारा | **नेष्ये** = हटाइदिनेछु | **स्वसा** = बहिनी |
| **वीर्यमदं** = पराक्रमबाट भएको घमन्डलाई | **येन** = जो कृष्णद्वारा | **प्रसभं** = जबर्जस्ती |
| | **मे** = मेरी | **हृता** = हरण गरिइन् |

**वाक्यार्थ—** जसले मेरी बहिनीको जबर्जस्ती हरण गऱ्यो त्यस्तो दुष्ट गोठालो कृष्णको पराक्रमको घमन्डलाई म आज आफ्ना तीखा बाणहरूले नाश गरिदिनेछु।

**विकत्थमानः कुमतिरीश्वरस्याप्रमाणवित्।**
**रथेनैकेन गोविन्दं तिष्ठ तिष्ठेत्यथाह्वयत्॥ २३॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **विकत्थमानः** = (यसरी) आत्मप्रशंसा गर्दै | **अप्रमाणवित्** = महत्त्वलाई नबुझ्ेको रुक्मी | भन्दै |
| **कुमतिः** = मतिभ्रष्ट भएको | **एकेन रथेन** = एउटै रथ लिई | **आह्वयत्** = (युद्धका लागि) बोलाउन थाल्यो |
| **ईश्वरस्य** = ईश्वर श्रीकृष्णको | **गोविन्दं** = भगवान् श्रीकृष्णलाई | |
| | **तिष्ठ तिष्ठ इति** = पख् पख् | |

**वाक्यार्थ—** यसरी आत्मप्रशंसा गर्दै मतिभ्रष्ट भएको र भगवान्को महत्त्वलाई नबुझ्ेको रुक्मीले एउटै रथ लिएर पख् पख् भन्दै भगवान्लाई युद्धको लागि बोलाउन थाल्यो।

**धनुर्विकृष्य सुदृढं जघ्ने कृष्णं त्रिभिः शरैः।**
**आह चात्र क्षणं तिष्ठ यदूनां कुलपांसन॥ २४॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **धनुः** = धनुलाई | **कृष्णं** = श्रीकृष्णलाई | **अत्र** = यहाँ |
| **सुदृढं** = खूब | **जघ्ने** = हान्यो र | **क्षणं** = केही बेर |
| **विकृष्य** = खिँचेर | **आह च** = भन्यो पनि | **तिष्ठ** = पर्खि |
| **त्रिभिः शरैः** = तीन ओटा बाणले | **यदूनां** = यदुकुलको | |
| | **कुलपांसन** = कुलदूषण हे कृष्ण | |

**वाक्यार्थ—** त्यसपछि रुक्मीले धनुलाई खूब खिँचेर तीन ओटा बाणले श्रीकृष्णलाई हान्यो र भन्यो— हे यदुकूलदूषण कृष्ण ! यहाँ केही बेर पर्खि।

**कुत्र यासि स्वसारं मे मुषित्वा ध्वाङ्क्षवद्धविः।**
**हरिष्येऽद्य मदं मन्द मायिनः कूटयोधिनः॥ २५॥**

**पदार्थ—**

| | | |
|---|---|---|
| **मन्द** = हे मूर्ख | **ध्वाङ्क्षवत्** = कागले (चोरे) झैं | **मुषित्वा** = चोरेर |
| **हविः** = यज्ञको हविलाई | **मे** = मेरी | **कुत्र यासि** = कता भाग्दैछस् |
| | **स्वसारं** = बहिनीलाई | **मायिनः** = मायावी |

**कूटयोधिनः** = कपटपूर्ण तरिकाले युद्ध गर्ने तेरो
**मदं** = अभिमानलाई
**अद्य** = आज
**हरिष्ये** = हरण गरिदिनेछु

**वाक्यार्थ–** हे मूर्ख कृष्ण ! यज्ञको हविलाई कागले चोरे झैं मेरी बहिनीलाई चोरेर कता भाग्दैछस् ? कपटयुद्धमा सिपालु र मायावी तेरो सारा अहङ्कारलाई आज म नष्ट पारिदिनेछु।

**यावन्न मे हतो बाणैः शयीथा मुञ्च दारिकाम्।**

**स्मयन् कृष्णो धनुश्छित्त्वा षड्भिर्विव्याध रुक्मिणम्॥ २६॥**

**पदार्थ–**
**यावत्** = जहिलेसम्म
**मे** = मेरा
**बाणैः** = बाणहरूद्वारा
**हतः** = मारिएर
**न शयीथाः** = सुत्दैनस्
(त्यसभन्दा अघि नै)
**दारिकां** = यी कन्या रुक्मिणीलाई
**मुञ्च** = छाडिदे (यति सुनेपछि)
**कृष्णः** = भगवान् श्रीकृष्णले
**स्मयन्** = केही हाँस्दै
**धनुः** = उसको धनुलाई
**छित्त्वा** = काटेर
**रुक्मिणं** = त्यो रुक्मीलाई
**षड्भिः** = छ ओटा बाणले
**विव्याध** = हान्नुभयो

**वाक्यार्थ–** रुक्मीले ‘जहिलेसम्म तँ मेरो बाणद्वारा मारिएर पृथिवीमा सुत्दैनस् त्योभन्दा पहिले नै रुक्मिणीलाई छाडिदे’ यति भनेको सुन्नेबित्तिकै भगवान् श्रीकृष्णले केही हाँस्दै उसको धनुषलाई काटिदिनुभयो र छ ओटा बाणले उसलाई प्रहार गर्नुभयो।

**अष्टभिश्चतुरो वाहान् द्वाभ्यां सूतं ध्वजं त्रिभिः।**

**स चान्यद्धनुरादाय कृष्णं विव्याध पञ्चभिः॥ २७॥**

**पदार्थ–**
**अष्टभिः** = आठ बाणले
**चतुरः** = चार ओटा
**वाहान्** = घोडाहरूलाई
**द्वाभ्यां** = दुई बाणले
**सूतं** = सारथिलाई र
**त्रिभिः** = तीन ओटा बाणले
**ध्वजं** = ध्वजालाई (भगवान्ले)
**विव्याध** = प्रहार गर्नुभयो
**सः च** = त्यो रुक्मीले पनि
**अन्यत् धनुः** = अर्को धनु
**आदाय** = लिएर
**पञ्चभिः** = पाँच बाणले
**कृष्णं** = भगवान् श्रीकृष्णलाई प्रहार गऱ्यो

**वाक्यार्थ–** त्यसपछि भगवान्ले फेरि आठ बाणले चार घोडालाई, दुई बाणले सारथिलाई र तीन बाणले ध्वजालाई प्रहार गर्नुभयो। रुक्मीले पनि अर्को धनु लिई पाँच बाणले भगवान्लाई प्रहार गऱ्यो।

**तैस्ताडितः शरौघैस्तु चिच्छेद धनुरच्युतः।**

**पुनरन्यदुपादत्त तदप्यच्छिनदव्ययः॥ २८॥**

**पदार्थ–**
**तैः** = ती रुक्मीले हानेका
**शरौघैः** = बाणका समूहहरूले
**ताडितः** = प्रताडित हुनुभएको
**अच्युतः तु** = भगवान् अच्युतले चाहिँ

**धनुः** = (रुक्मीको) धनुलाई
**चिच्छेद** = काटिदिनुभयो
(त्यसपछि रुक्मीले)
**पुनः** = फेरि
**अन्यत्** = अर्को धनु
**उपादत्त** = लियो
**तत् अपि** = त्यसलाई पनि
**अव्ययः** = अविनाशी भगवान् श्रीकृष्णले
**अच्छिनत्** = काटिदिनुभयो

**वाक्यार्थ–** रुक्मीले हानेका ती बाणका समूहहरूले पीडित भएपछि भगवान्ले उसको धनुलाई काटिदिनुभयो। त्यसपछि रुक्मीले अर्को धनु हातमा लियो, त्यसलाई पनि भगवान्ले काटिदिनुभयो।

**परिघं पट्टिशं शूलं चर्मासी शक्तितोमरौ।**
**यद् यदायुधमादत्त तत् सर्वं सोऽच्छिनद्धरिः॥ २९॥**

**पदार्थ–**
**सः** = त्यो रुक्मीले
**परिघं** = परिघ
**पट्टिशं** = पट्टिश
**शूलं** = त्रिशूल
**चर्मासी** = ढाल, तरबार
**शक्तितोमरौ** = शक्ति, तोमर आदि
**यत् यत्** = जे जे
**आयुधं** = हतियारहरू
**आदत्त** = लियो
**तत् सर्वं** = ती सबै अस्त्रलाई
**हरिः** = भगवान् श्रीकृष्णले
**अच्छिनत्** = काटिदिनुभयो

**वाक्यार्थ–** त्यसपछि रुक्मीले परिघ, पट्टिश, त्रिशूल, ढाल, तरबार, शक्ति, तोमर आदि जुन जुन हतियारहरू लिन्थ्यो, ती सबैलाई भगवान्ले काटिदिनुभयो।

**ततो रथादवप्लुत्य खड्गपाणिर्जिघांसया।**
**कृष्णमभ्यद्रवत् क्रुद्धः पतङ्ग इव पावकम्॥ ३०॥**

**पदार्थ–**
**ततः** = त्यसपछि
**खड्गपाणिः** = हातमा खुँडा लिएको
**क्रुद्धः** = अति रिसाएरको रुक्मी
**रथात्** = रथबाट
**अवप्लुत्य** = हाम फालेर
**जिघांसया** = मार्ने इच्छाले
**पतङ्गः** = पुतली
**पावकम् इव** = अग्निको ज्वालामा (होमिए) झैँ
**कृष्णं** = श्रीकृष्ण भएतिर
**अभ्यद्रवत्** = कुद्यो

**वाक्यार्थ–** त्यसपछि रुक्मी अत्यन्त रिसायो र हातमा खुँडा लिएर रथबाट हाम्फाल्यो अनि कृष्णलाई मार्ने इच्छाले आगाको ज्वालामा पुतली होमिए झैँ श्रीकृष्ण भएतिर कुद्यो।

**तस्य चापततः खड्गं तिलशश्चर्म चेषुभिः।**
**छित्त्वासिमाददे तिग्मं रुक्मिणं हन्तुमुद्यतः॥ ३१॥**

**पदार्थ–**
**आपततः** = आफूतर्फ आइलागेको

**तस्य च** = त्यो रुक्मीको
**चर्म** = ढाल र
**खड्गं च** = खुँडालाई पनि
**इषुभिः** = बाणहरूद्वारा
**तिलशः** = तिलका दाना जत्रा
टुक्रा बनाएर
**छित्त्वा** = काटेर
**रुक्मिणं** = रुक्मीलाई
**हन्तुं** = मार्न
**उद्यतः** = तत्पर भगवान्ले
**तिग्मं** = अति तीखो
**असिं** = तरबार
**आददे** = लिनुभयो

**वाक्यार्थ–** आफूतिर आइरहेको रुक्मीको ढाल र तरबारलाई भगवान्ले बाणद्वारा तिलजत्रा टुक्रा बनाएर नष्ट गरिदिनुभयो र रुक्मीलाई मार्न अति तीखो तरबार लिनुभयो।

**दृष्ट्वा भ्रातृवधोद्योगं रुक्मिणी भयविह्वला।**
**पतित्वा पादयोर्भर्तुरुवाच करुणं सती॥ ३२॥**

**पदार्थ–**
**भ्रातृवधोद्योगं** = (भगवान् श्रीकृष्ण) दाजुलाई मार्न तयार हुनुभएको
**दृष्ट्वा** = देखेर
**भयविह्वला** = डरले आत्तिएकी
**सती** = पतिव्रता
**रुक्मिणी** = रुक्मिणीले
**भर्तुः** = पतिको
**पादयोः** = पाउमा
**पतित्वा** = परेर
**करुणं** = करुण स्वरले
**उवाच** = भनिन्

**वाक्यार्थ–** यसरी आफ्ना दाजु रुक्मीलाई मार्न भगवान् श्रीकृष्ण तयार हुनुभएको देखेर डरले आत्तिई पतिव्रता रुक्मिणीले पतिको पाउमा परेर करुण स्वरमा भन्न लागिन्।

**योगेश्वराप्रमेयात्मन् देवदेव जगत्पते।**
**हन्तुं नार्हसि कल्याण भ्रातरं मे महाभुज॥ ३३॥**

**पदार्थ–**
**योगेश्वर** = हे योगेश्वर
**अप्रमेयात्मन्** = हे अज्ञेय प्रभु
**देवदेव** = हे देवाधिदेव
**जगत्पते** = हे जगत्का मालिक
**कल्याण** = हे कल्याणस्वरूप
**महाभुज** = हे महाबाहु प्रभु
**मे** = मेरा
**भ्रातरं** = दाजु रुक्मीलाई
**हन्तुं** = मार्न
**न अर्हसि** = योग्य हुनुहुन्न

**वाक्यार्थ–** हे योगेश्वर ! हे अजेय प्रभु ! हे देवाधिदेव ! हजुर जगत्को मालिक हुनुहुन्छ र परम कल्याणस्वरूप हुनुहुन्छ। हे महाबाहु प्रभु ! हजुरले मेरा दाजु रुक्मीलाई नमार्नुहोस्।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**तया परित्रासविकम्पिताङ्गया शुचावशुष्यन्मुखरुद्धकण्ठया।**
**कातर्यविस्रंसितहेममालया गृहीतपादः करुणो न्यवर्तत॥ ३४॥**

**पदार्थ–**
**परित्रासविकम्पिताङ्गया** = डरले गर्दा शरीरका सबै अङ्ग काँपेकी

**शुचा** = शोकले
**अवशुष्यन्मुखरुद्धकण्ठया** = मुख सुकेकी र गला अवरुद्ध भएकी
**कातर्यविस्रंसितहेममालया** = भयले घाटीबाट सुनको माला खस्न लागेकी
**तया** = ती रुक्मिणीद्वारा
**गृहीतपादः** = पाउ समातिएका
**करुणः** = दयालु भगवान्
**न्यवर्तत** = (रुक्मीलाई मार्ने विचारबाट) फर्कनुभयो

**वाक्यार्थ–** डरले शरीरका सारा अङ्ग काँपेकी, शोकले गर्दा मुख सुकेकी र गला अवरुद्ध भएकी अनि भयले गर्दा घाँटीबाट सुनको हार खसाल्न लागेकी ती रुक्मिणीले पाउ समातेपछि दयालु भगवान्ले रुक्मीलाई मार्ने विचार बदल्नुभयो।

**चैलेन बद्ध्वा तमसाधुकारिणं सश्मश्रुकेशं प्रवपन् व्यरूपयत्।**
**तावन्ममर्दुः परसैन्यमद्भुतं यदुप्रवीरा नलिनीं यथा गजाः॥ ३५॥**

**पदार्थ–**
**असाधुकारीणं** = अनुचित काम गर्ने
**तं** = त्यो रुक्मीलाई
**चैलेन** = कपडाले
**बद्ध्वा** = बाँधेर
**सश्मश्रुकेशं** = दाह्री, जुँगा र कपाललाई
**प्रवपन्** = ठाउँ ठाउँमा खुइल्याएर
**व्यरूपयत्** = विरूप पारिदिनुभयो
**तावत्** = त्यति वेलासम्ममा
**यदुप्रवीराः** = यदुवंशी वीरहरूले
**अद्भुतं** = अचम्मको
**परसैन्यं** = शत्रुको सेनालाई
**गजाः** = हात्तीहरूले
**नलिनीं यथा** = कमलको वनलाई नष्ट गरे झैं
**ममर्दुः** = तहसनहस पारे

**वाक्यार्थ–** भगवान्ले अनुचित काम गर्ने त्यो रुक्मीलाई कपडाले बाँधेर दाह्री, जुँगा र कपाललाई ठाउँ ठाउँमा खुइल्याएर विरूप बनाइदिनुभयो। त्यति वेलासम्ममा यदुवंशी वीरहरूले शत्रुहरूको अद्भुत सेनालाई हात्तीहरूले कमलवनलाई तहसनहस पारे झैं गरी सखाप पारे।

**कृष्णान्तिकमुपव्रज्य ददृशुस्तत्र रुक्मिणम्।**
**तथाभूतं हतप्रायं दृष्ट्वा सङ्कर्षणो विभुः॥**
**विमुच्य बद्धं करुणो भगवान् कृष्णमब्रवीत्॥ ३६॥**

**पदार्थ–**
**कृष्णान्तिकं** = श्रीकृष्णको नजिकमा
**उपव्रज्य** = गएर (यदुवंशी वीरहरूले)
**तत्र** = त्यहाँ
**रुक्मिणं** = रुक्मीलाई
**ददृशुः** = देखे
**विभुः** = सर्वशक्तिसम्पन्न
**करुणः** = दयालु
**भगवान्** = भगवान्
**सङ्कर्षणः** = बलरामले
**तथाभूतं** = त्यस्तो विरूप भएको
**हतप्रायं** = मरेतुल्य भएको रुक्मीलाई
**दृष्ट्वा** = देखेर
**बद्धं** = बन्धनलाई
**विमुच्य** = खोलेर
**कृष्णं** = श्रीकृष्णलाई
**अब्रवीत्** = भन्न थाल्नुभयो

**वाक्यार्थ–** श्रीकृष्णको नजिकमा आएका यदुवंशी वीरहरूले त्यहाँ विरूप भएर रहेको रुक्मीलाई देखे। सर्वशक्तिसम्पन्न, दयालु भगवान् बलरामले विरूप भएको र मरेतुल्य भई बसेको रुक्मीलाई देखेर उसको कपडाको बन्धनलाई खोलिदिनुभयो र श्रीकृष्णलाई भन्न लाग्नुभयो।

**असाध्विदं त्वया कृष्ण कृतमस्मज्जुगुप्सितम्।**
**वपनं श्मश्रुकेशानां वैरूप्यं सुहृदो वधः॥ ३७॥**

**पदार्थ–**
**कृष्ण** = हे कृष्ण
**त्वया** = तिमीद्वारा
**इदं** = यो
**अस्मज्जुगुप्सितं** = हामीहरूको लागि निन्दित र
**असाधु** = नराम्रो काम
**कृतं** = गरियो
**सुहृदः** = सम्बन्धी व्यक्तिहरूलाई
**श्मश्रुकेशानां** = दाह्री र कपाललाई
**वपनं** = खुइल्याएर
**वैरूप्यं** = विरूप पार्नु
**वधः** = मार्नु बराबर हो

**वाक्यार्थ–** हे कृष्ण! तिमीले हामीहरूको लागि निन्दित र अनुचित काम गऱ्यौ। आफ्ना सम्बन्धीहरूलाई दाह्री र कपाल खुइल्याएर विरूप पार्नु त मार्नु बराबर हो।

**मैवास्मान् साध्व्यसूयेथा भ्रातुर्वैरूप्यचिन्तया।**
**सुखदुःखदो न चान्योऽस्ति यतः स्वकृतभुक् पुमान्॥ ३८॥**

**पदार्थ–**
**साध्वी** = हे साधु स्वभावकी रुक्मिणी
**भ्रातुः** = दाजुलाइ
**वैरूप्यचिन्तया** = विरूप बनाएको चिन्ताले गर्दा
**अस्मान्** = हामीहरूलाई (दोषारोप गरेर)
**मा एव असूयेथाः** = नराम्रो नमान
**यतः** = किनकि
**सुखदुःखदः** = सुख र दुःख दिने
**अन्यः च** = अर्को कोही
**न अस्ति** = छैन (किनभने)
**पुमान्** = जीवात्मा (सधैँ)
**स्वकृतभुक्** = आफ्नो कर्मको फल भोग्नेवाला हो

**वाक्यार्थ–** (त्यसपछि बलरामले रुक्मिणीलाई भन्नुभयो–) हे साधु स्वभावकी रुक्मिणी! दाजुलाई विरूप बनाएको कुरालाई लिएर हामीहरूलाई नराम्रो नमान। किनभने यो संसारमा सुख र दुःख दिने अर्को कोही छैन, सबै जीवहरूले आफ्नै कर्मको फल भोग्दछन्।

**बन्धुर्वधार्हदोषोऽपि न बन्धोर्वधमर्हति।**
**त्याज्यः स्वेनैव दोषेण हतः किं हन्यते पुनः॥ ३९॥**

**पदार्थ–**
**वधार्हदोषः अपि** = मार्नै पर्ने दोष भएको भए पनि
**बन्धुः** = (आफ्ना) बन्धुहरू
**बन्धोः** = (ज्वाइँ आदि) बन्धुबाट
**वधं** = वध गर्न (मार्न)
**न अर्हति** = योग्य हुँदैन
**त्याज्यः** = छाडिदिनुपर्दछ (किनकि ऊ)
**स्वेन एव** = आफ्नै
**दोषेण** = दोषले
**हतः** = मरिसकेको हुन्छ भने

**पुनः** = फेरि
**किं हन्यते** = केलाई मार्ने

**वाक्यार्थ–** यदि आफ्ना बन्धुमा मार्नै पर्ने दोष रहेछ भने पनि बन्धुले मार्नुहुँदैन। उसलाई छाडिदिनुपर्दछ। ऊ आफ्नै दोषले एक पटक मरिसकेको हुन्छ भने उसलाई अर्को पटक किन मार्नु ?

**क्षत्रियाणामयं धर्मः प्रजापतिविनिर्मितः।**
**भ्रातापि भ्रातरं हन्याद् येन घोरतरस्ततः॥ ४०॥**

**पदार्थ–**
**अयं** = यो
**क्षत्रियाणां** = क्षत्रियहरूको
**प्रजापतिविनिर्मितः** = ब्रह्माजीले बनाउनुभएको
**धर्मः** = धर्म हो
**येन** = जुन धर्मलाई मानेर
**भ्राता अपि** = आफ्नै भाइले
**भ्रातरं** = आफ्नै दाजुभाइलाई
**हन्यात्** = मार्दछ
**ततः** = त्यसैले (यो क्षत्रिय धर्म)
**घोरतरः** = अति डरलाग्दो छ

**वाक्यार्थ–** ब्रह्माजीले क्षत्रियहरूको लागि धर्म नै यस्तो बनाउनुभयो कि, आफ्नै दाजुले आफ्नै भाइलाई र भाइले आफ्नै दाजुलाई पनि मार्नुपर्ने, यो अति डरलाग्दो क्षत्रिय धर्म हो।

**राज्यस्य भूमेर्वित्तस्य स्त्रियो मानस्य तेजसः।**
**मानिनोऽन्यस्य वा हेतोः श्रीमदान्धाः क्षिपन्ति हि॥ ४१॥**

**पदार्थ–**
**हि** = निश्चय नै
**मानिनः** = अहङ्कारीहरू र
**श्रीमदान्धाः** = ऐश्वर्यले मत्त भएका व्यक्तिहरू नै
**राज्यस्य** = राज्यका लागि
**भूमेः** = भूमिका लागि
**वित्तस्य** = धनका लागि
**स्त्रियः** = स्त्रीका लागि
**मानस्य** = सम्मानका लागि
**तेजसः** = प्रतापका लागि र
**अन्यस्य वा हेतोः** = अरू कुनै कुराका लागि पनि
**क्षिपन्ति** = (बन्धुबान्धवलाई) तिरस्कार गर्दछन्

**वाक्यार्थ–** अहङ्कारीहरू र ऐश्वर्यले मत्त भएका व्यक्तिहरूले नै राज्य, भूमि, धन, स्त्री, मान, प्रताप वा अरू कुनै कुराका लागि आफन्तसँग झगडा गर्दछन् र उनीहरूको तिरस्कार गर्दछन्।

**तवेयं विषमा बुद्धिः सर्वभूतेषु दुर्हृदाम्।**
**यन्मन्यसे सदाभद्रं सुहृदां भद्रमज्ञवत्॥ ४२॥**

**पदार्थ–**
**सर्वभूतेषु** = सम्पूर्ण प्राणीहरूमा
**दुर्हृदां** = नराम्रो भावना राख्ने
**सुहृदां** = भाइबन्धुहरूका लागि
**भद्रं** = (यो दण्ड दिएर) मङ्गल नै (भएको छ तैपनि)
**अज्ञवत्** = अज्ञानी व्यक्तिजस्तो भएर
**सदा** = सधैँ
**अभद्रं** = (यो क्रियाकलापलाई) अमङ्गल भनेर
**यत्** = जो तिमीले
**मन्यसे** = मानिरहेकी छौ
**तव** = तिम्रो
**इयं** = यो

**विषमा** = विषम (नराम्रो) | **बुद्धिः** = विचार हो

**वाक्यार्थ–** (हे रुक्मिणी !) तिम्रा दाजुहरू अरु प्राणीहरूमा दुर्भाव राख्ने खालका छन्, त्यसैले उनीहरूलाई यस्तो दण्ड दिनु पनि मङ्गलरूप नै हो। फेरि पनि तिमी अज्ञानी मानिस झैं त्यसलाई नराम्रो मानिरहेकी छौ, यो तिम्रो नराम्रो विचार हो।

**आत्ममोहो नृणामेव कल्प्यते देवमायया।**
**सुहृद् दुर्हृदुदासीन इति देहात्ममानिनाम्॥ ४३॥**

पदार्थ–
**देवमायया** = भगवान्को मायाद्वारा मोहित भएकाले
**देहात्ममानिनां** = शरीरलाई नै आत्मा मानेर बसेका
**नृणां** = मानिसहरूको लागि
**एव** = नै
**सुहृत्** = यो मित्र हो
**दुहृत्** = यो शत्रु हो र
**उदासीनः इति** = यो उदासीन हो
भन्ने यस्तो
**आत्ममोहः** = बुद्धिमा मोह (हुन्छ भन्ने)
**कल्प्यते** = मानिन्छ

**वाक्यार्थ–** जो मानिसहरूलाई भगवान्को मायाको कारणले गर्दा शरीर आदिमा आत्मबुद्धि भएको छ उनीहरूलाई नै यो मित्र हो, यो शत्रु हो र यो उदासीन व्यक्ति हो भन्ने मोह हुन्छ भन्ने मानिन्छ।

**एक एव परो ह्यात्मा सर्वेषामपि देहिनाम्।**
**नानेव गृह्यते मूढैर्यथा ज्योतिर्यथा नभः॥ ४४॥**

पदार्थ–
**हि** = निश्चय नै
**परः** = शरीर आदिदेखि भिन्न
**आत्मा** = शुद्ध आत्मा
**सर्वेषाम् अपि** = सबै
**देहिनां** = प्राणीहरूको
**एकः एव** = एउटै छ
**मूढैः** = मूर्ख व्यक्तिहरूद्वारा
**यथा** = जसरी
**ज्योतिः** = सूर्य आदि ज्योतिलाई (जल राखेको भाँडैपिच्छे)
**यथा** = जसरी
**नभः** = आकाशलाई (घटाकाश र मठाकाश भनेर अलग अलग रूपमा लिइन्छ, त्यसै गरी)
**नाना इव** = (शरीर आदिको भेदले) विभिन्न रूपमा झैं
**गृह्यते** = ग्रहण गरिन्छ

**वाक्यार्थ–** वास्तवमा सम्पूर्ण प्राणीहरूको आत्मा एकै छ, तैपनि मूर्ख व्यक्तिहरूले आकाशको सूर्य आदिलाई पानी राखेको भाँडैपिच्छे अलग-अलग र आकाशलाई घटाकाश र मठाकाश आदि विविध रूपमा लिए झैं शरीरैपिच्छे आत्मालाई अलग-अलग रूपमा स्विकार्दछन्।

**देह आद्यन्तवानेष द्रव्यप्राणगुणात्मकः।**
**आत्मन्यविद्यया क्लृप्तः संसारयति देहिनम्॥ ४५॥**

पदार्थ–
**द्रव्यप्राणगुणात्मकः** =
पञ्चमहाभूत, पञ्चप्राण र तीन

गुण आदिले बनेको
**एषः** = यो
**देहः** = शरीर
**आद्यन्तवान्** = जन्म र मृत्युले युक्त छ र त्यो
**आत्मनि** = आत्मामा
**अविद्यया** = अज्ञानको कारणले
**क्लृप्तः** = कल्पित छ (त्यही शरीरले नै)
**देहिनं** = जीवलाई
**संसारयति** = (जन्ममृत्युको चक्रमा) घुमाइरहन्छ

**वाक्यार्थ–** पञ्चमहाभूत, पञ्चप्राण र तीन गुणले बनेको जन्म-मृत्युवाला यो शरीर अज्ञानको कारणले आत्मामा कल्पित छ र पनि यसले जीवलाई बारम्बार जन्ममृत्युको चक्रमा घुमाइरहन्छ।

**नात्मनोऽन्येन संयोगो वियोगश्चासतः सति।**
**तद्धेतुत्वात् तत्प्रसिद्धेर्दृग्रूपाभ्यां यथा रवेः॥ ४६॥**

**पदार्थ–**
**सति** = हे साध्वी
**यथा** = जसरी
**दृग्रूपाभ्यां** = आँखा र रूपबाट अलग भएको
**रवेः** = सूर्यबाट
**तत्प्रसिद्धेः** = आँखा र रूपको (प्रकाश्य र प्रकाशक रूपमा प्रसिद्ध हुन्छ र ती दुई प्रकाश्य र प्रकाशक रूपमा रहेका रूप र आँखासँग सूर्यको संयोग वियोग छैन, त्यसै गरी)
**तद्धेतुत्वात्** = (प्रकाश्य र प्रकाशक रूपमा रहेका) ती शरीर, इन्द्रिय आदिको कारण भएको हुनाले
**आत्मनः** = आत्माको
**असता** = आफ्नो स्वतन्त्र सत्तारहित
**अन्येन** = अरू शरीर इन्द्रिय आदिसँग
**संयोगः** = संयोग अथवा
**वियोगः च न** = वियोग पनि छैन

**वाक्यार्थ–** हे साध्वी रुक्मिणी ! यद्यपि आँखा र रूपमा प्रकाश्य-प्रकाशक भाव छ तापनि यी दुबै सूर्यद्वारा प्रकाशित हुन्छन् र यिनीहरूको मूल कारण सूर्य भएकाले सूर्यसँग यिनीहरूको संयोग र वियोग केही भन्न मिल्दैन, त्यसै गरी प्रकाश्य-प्रकाशक भावमा रहेका शरीर र इन्द्रिय आदिको प्रकाशक वा कारण आत्मा नै भएको हुनाले आफ्नो स्वतन्त्र सत्तारहित शरीर आदिसँग आत्माको संयोग अथवा वियोग छ भनेर भन्न मिल्दैन।

**जन्मादयस्तु देहस्य विक्रिया नात्मनः क्वचित्।**
**कलानामिव नैवेन्दोर्मृतिर्ह्यस्य कुहूरिव॥ ४७॥**

**पदार्थ–**
**जन्मादयः तु** = जन्म आदि (जायते- जन्मनु, अस्ति - रहनु, विपरिणमते - परिवर्तित हुनु, वर्धते - बढ्नु, अपक्षीयते - घट्नु, विनश्यति - नष्ट हुनु)
**विक्रियाः** = विकारहरू
**देहस्य** = शरीरका हुन्छन्
**क्वचित्** = कहिल्यै पनि
**आत्मनः न** = आत्माको हुँदैन
**कलानाम् इव** = (बढ्ने, घट्ने काम) कलाको भए झैं
**इन्दोः** = चन्द्रमाको (बढ्ने घट्ने काम)
**न एव** = हुँदैन
**हि** = निश्चय नै
**कुहूः** = औंसी
**अस्य** = यी चन्द्रमाको
**मृतिः इव** = क्षय हुने समय भने झैं (शरीरको मृत्युलाई आत्माकै मृत्यु भन्ने व्यवहार गर्दछन्)

**वाक्यार्थ–** जन्मनु, रहनु, बढ्नु, परिवर्तन हुनु, घट्नु र मर्नु यी छ ओटा भावविकार शरीरका हुन्, यी आत्मामा कहिल्यै पनि हुँदैनन्, जसरी बढ्ने र घट्ने काम चन्द्रमाको कलामा हुन्छ, चन्द्रमामा हुँदैन, तैपनि औँसीका दिन चन्द्रमाका सारा कला क्षय हुँदा चन्द्रमाकै क्षय भएको व्यवहार गरिन्छ, त्यसै गरी शरीर मर्दा आत्मा नै मरेको सम्झिइन्छ (वास्तवमा आत्मा मर्दैन)।

**यथा शयान आत्मानं विषयान् फलमेव च।**

**अनुभुङ्क्तेऽप्यसत्यर्थे तथाप्नोत्यबुधो भवम्॥ ४८॥**

**पदार्थ–**
**यथा** = जसरी
**शयानः** = सुतेको व्यक्तिले
**अर्थे** = पदार्थ
**असति अपि** = नहुँदा पनि
**आत्मानं** = भोक्ता आफूलाई
**विषयान्** = भोग्य विषयलाई र
**फलम् एव च** = विषयको भोगरूप फललाई पनि
**अनुभुङ्क्ते** = अनुभव गर्दछ
**तथा** = त्यसै गरी
**अबुधः** = अज्ञानी व्यक्तिले
**भवं** = (यथार्थमा नभए पनि) संसारलाई
**आप्नोति** = प्राप्त गर्दछ

**वाक्यार्थ–** जसरी सुतेको व्यक्तिले स्वप्नमा कुनै पनि पदार्थ नहुँदा नहुँदै पनि भोक्ता, भोग्य र भोगको अनुभव गर्दछ, त्यसै गरी वास्तविक रूपले संसार नभए तापनि अज्ञानी व्यक्तिले जन्ममृत्युस्वरूप संसारको अनुभव गर्दछ।

**तस्मादज्ञानजं शोकमात्मशोषविमोहनम्।**

**तत्त्वज्ञानेन निर्हृत्य स्वस्था भव शुचिस्मिते॥ ४९॥**

**पदार्थ–**
**शुचिस्मिते** = पवित्र मुस्कान भएकी हे रुक्मिणी
**तस्मात्** = त्यसैले
**अज्ञानजं** = अज्ञानबाट उत्पन्न
**आत्मशोषविमोहनं** = शरीरलाई सुकाउने र मोहित पार्ने
**शोकं** = शोकलाई
**तत्त्वज्ञानेन** = तत्त्वज्ञानद्वारा
**निर्हृत्य** = हटाएर
**स्वस्था** = शान्तचित्त
**भव** = होऊ

**वाक्यार्थ–** पवित्र मुस्कान भएकी हे रुक्मिणी! शरीर आदिलाई सुकाउने र मोहित पार्ने अज्ञानजन्य शोकलाई तत्त्वज्ञानद्वारा हटाऊ र शान्तचित्त होऊ।

**श्रीशुक उवाच** (श्रीशुकदेवले भन्नुभयो)

**एवं भगवता तन्वी रामेण प्रतिबोधिता।**

**वैमनस्यं परित्यज्य मनो बुद्ध्या समादधे॥ ५०॥**

**पदार्थ–**
**एवं** = यसरी
**भगवता** = भगवान्
**रामेण** = बलरामद्वारा
**प्रतिबोधिता** = सम्झाइएकी
**तन्वी** = सुन्दरी रुक्मिणीले
**वैमनस्यं** = मनको मलिनतालाई
**परित्यज्य** = छाडेर
**बुद्ध्या** = विवेकयुक्त बुद्धिले

**मनः** = मनलाई
**समादधे** = सम्हालिन्

**वाक्यार्थ—** यसरी भगवान् बलरामले सम्झाएपछि सुन्दरी रुक्मिणीले मनको मलिनतालाई त्यागिन् र विवेकयुक्त बुद्धिले मनलाई शान्त पारिन्।

**प्राणावशेष उत्सृष्टो द्विड्भिर्हतबलप्रभः।**
**स्मरन् विरूपकरणं वितथात्ममनोरथः॥ ५१॥**

पदार्थ—
**प्राणावशेषः** = प्राण मात्र बाँकी रहेको
**द्विड्भिः** = शत्रुहरूद्वारा
**हतबलप्रभः** = सेनाहरू र आफ्नो तेजलाई पनि नाश गरेर
**उत्सृष्टः** = त्यागिएको र
**वितथात्ममनोरथः** = आफ्नो इच्छा पूरा हुन नपाएको रुक्मी
**विरूपकरणं** = आफ्नो विरूप भएको रूपलाई
**स्मरन्** = सम्झँदै (चिन्तित भयो)

**वाक्यार्थ—** प्राण मात्र बाँकी रहेको, शत्रुहरूद्वारा आफ्ना सेना र तेज पनि नष्ट पारेर त्यागिएको अनि आफूले चाहेको कुरा पूरा नभएको रुक्मी आफ्नो विरूप भएको रूपलाई सम्झँदै चिन्तित हुन थाल्यो।

**चक्रे भोजकटं नाम निवासाय महत् पुरम्।**
**अहत्वा दुर्मतिं कृष्णमप्रत्यूह्य यवीयसीम्।**
**कुण्डिनं न प्रवेक्ष्यामीत्युक्त्वा तत्रावसद् रुषा॥ ५२॥**

पदार्थ—
**निवासाय** = निवासका लागि (रुक्मीले)
**भोजकटं नाम** = भोजकट नाम भएको
**महत् पुरं** = विशाल नगरको
**चक्रे** = स्थापना गऱ्यो
**दुर्मतिं** = दुष्ट
**कृष्णं** = कृष्णलाई
**अहत्वा** = नमारीकन र
**यवीयसीम्** = सानी बहिनीलाई
**अप्रत्यूह्य** = नफर्काईकन
**कुण्डिनं** = कुण्डिन पुरमा
**न प्रवेक्ष्यामि** = प्रवेश गर्नेछैन
**इति रुषा उक्त्वा** = रिसले यसो भनेर
**तत्र** = त्यहीँ नै
**अवसत्** = बस्यो

**वाक्यार्थ—** रुक्मीले आफ्नो निवासका लागि भोजकट नाम गरेको विशाल नगरको स्थापना गऱ्यो र कृष्णलाई नमारीकन र बहिनीलाई नफर्काईकन म कुण्डिन पुरमा प्रवेश गर्दिनँ भनेर ज्यादै रिसाएर प्रतिज्ञा गरेर ऊ त्यहीँ बस्न थाल्यो।

**भगवान् भीष्मकसुतामेवं निर्जित्य भूमिपान्।**
**पुरमानीय विधिवदुपयेमे कुरूद्वह॥ ५३॥**

पदार्थ—
**कुरूद्वह** = हे कुरुवंशी परीक्षित्
**भगवान्** = भगवान् श्रीकृष्णले
**एवं** = यसरी
**भूमिपान्** = राजाहरूलाई
**निर्जित्य** = जितेर

**भीष्मकसुतां** = भीष्मककी पुत्री रुक्मिणीलाई
**पुरं** = आफ्नो नगर द्वारकामा
**आनीय** = ल्याएर
**विधिवत्** = विधिपूर्वक
**उपयेमे** = विवाह गर्नुभयो

**वाक्यार्थ—** हे परीक्षित् ! यसरी भगवान् श्रीकृष्णले राजाहरूलाई जितेर राजा भीष्मककी पुत्री रुक्मिणीलाई आफ्नो नगर द्वारकामा ल्याई विधिपूर्वक विवाह गर्नुभयो।

**तदा महोत्सवो नृणां यदुपुर्यां गृहे गृहे।**
**अभूदनन्यभावानां कृष्णे यदुपतौ नृप ॥ ५४ ॥**

**पदार्थ—**
**नृप** = हे राजा परीक्षित्
**तदा** = विवाहको त्यस अवसरमा
**यदुपतौ** = यदुपति
**कृष्णे** = भगवान् श्रीकृष्णमा
**अनन्यभावानां** = अनन्य भक्ति भएका
**नृणां** = मानिसहरूको लागि
**यदुपुर्यां** = द्वारकामा
**गृहे गृहे** = घरघरमा
**महोत्सवः** = महान् उत्सव
**अभूत्** = भयो

**वाक्यार्थ—** हे राजा परीक्षित् ! भगवान्को विवाहको त्यस अवसरमा यदुपति भगवान् श्रीकृष्णमा अनन्य भक्ति भएका मानिसहरूका लागि द्वारकामा घरघरमा महान् उत्सव भयो।

**नरा नार्यश्च मुदिताः प्रमृष्टमणिकुण्डलाः।**
**पारिबर्हमुपाजह्रुर्वरयोश्चित्रवाससोः ॥ ५५ ॥**

**पदार्थ—**
**प्रमृष्टमणिकुण्डलाः** = चम्किला मणिका कुण्डलले सजिएका र
**मुदिताः** = अत्यन्त प्रसन्न भएका
**नराः** = पुरुषहरू र
**नार्यः च** = नारीहरूले पनि
**चित्रवाससोः** = चित्र-विचित्रका सुन्दर-सुन्दर कपडा लगाएका
**वरयोः** = वर र वधूका लागि
**पारिबर्हम्** = उपहारहरू
**उपाजह्रुः** = ल्याए

**वाक्यार्थ—** चम्किला मणिबाट बनेका कुण्डल आदि गहनाले सजिएका र अत्यन्त प्रसन्न भएका पुरुष र महिलाहरूले चित्र-विचित्रका सुन्दर-सुन्दर कपडा लगाएका वर र वधूलाई दिन उपहारहरू ल्याए।

**सा वृष्णिपुर्युत्तभितेन्द्रकेतुभिर्विचित्रमाल्याम्बररत्नतोरणैः।**
**बभौ प्रतिद्वार्युपक्लृप्तमङ्गलैरापूर्णकुम्भागुरुधूपदीपकैः ॥ ५६ ॥**

**पदार्थ—**
**उत्तभितेन्द्रकेतुभिः** = अग्ला-अग्ला ध्वजाहरूद्वारा
**विचित्रमाल्याम्बररत्नतोरणैः** = चित्र-विचित्रका माला र आकाशमा टाँगिएका तोरणहरूद्वारा
**प्रतिद्वारि** = हरेक घरका ढोका-ढोकामा
**उपक्लृप्तमङ्गलैः** = मङ्गलसूचक वस्तु (लाजा, दुबो आदि)द्वारा
**आपूर्णकुम्भागुरुधूपदीपकैः** = पूर्ण

घडाहरू तथा अगुरु धूप, दीप आदिद्वारा (सजाइएको)
**सा** = त्यो
**वृष्णिपुरी** = द्वारका नगर
**बभौ** = अत्यन्त सुशोभित भयो

**वाक्यार्थ–** द्वारकामा विवाहको अवसरमा जताततै अग्ला-अग्ला ध्वजाहरू सजाइएको थियो, चित्रविचित्रका तोरणहरू टाँगिएका थिए, हरेक घरका ढोकामा लाजा, दुबो आदि माङ्गलिक कुराहरू राखिएको र चोक-चोकमा पूर्णकलश, अगुरु धूप र दीपावली आदिद्वारा सजाइएको त्यो द्वारका नगर अत्यन्त सुशोभित भयो।

**सिक्तमार्गा मदच्युद्भिराहूतप्रेष्ठभूभुजाम्।**
**गजैर्द्वास्सु परामृष्टरम्भापूगोपशोभिता॥ ५७॥**

**पदार्थ–**
**आहूतप्रेष्ठभूभुजां** = विवाहको अवसरमा बोलाइएका प्रसिद्ध राजाहरूका
**मदच्युद्भिः** = मद चुहाइरहेका
**गजैः** = हात्तीहरूद्वारा
**सिक्तमार्गा** = (मदधाराले) बाटो सेचन गरिएको र
**द्वास्सु** = ढोकाहरूमा
**परामृष्टरम्भापूगोपशोभिता** = सजाइएका केराका स्तम्भ र सुपारीका वृक्षहरूले सिँगारिएको (द्वारकापुरी सुशोभित भयो)

**वाक्यार्थ–** विवाहको अवसरमा बोलाइएका राजाहरूका हात्तीहरूको मदधाराद्वारा सिञ्चित बाटाहरू भएको र केराका स्तम्भ र सुपारीका वृक्षहरूद्वारा सजाइएका द्वारहरू युक्त द्वारका पुरी अति सुशोभित देखियो।

**कुरुसृञ्जयकैकेयविदर्भयदुकुन्तयः।**
**मिथो मुमुदिरे तस्मिन् सम्भ्रमात् परिधावताम्॥ ५८॥**

**पदार्थ–**
**तस्मिन्** = त्यो विवाहको उत्सवमा
**सम्भ्रमात्** = उत्सुकताले
**परिधावतां** = यता र उता दौडिरहेका बन्धुहरूका बीचमा
**कुरुसृञ्जयकैकेयविदर्भयदु-कुन्तयः** = कुरु, सृञ्जय, कैकेय, विदर्भ र कुन्तिभोज वंशका मानिसहरू
**मिथः** = आपसमा भेटघाट गरेर
**मुमुदिरे** = अत्यन्त आनन्दित भए

**वाक्यार्थ–** विवाहको त्यस उत्सवमा उत्सुकताले मानिसहरू यता र उता दौडिरहेका थिए। त्यहाँ कुरु, सृञ्जय, कैकेय, विदर्भ र कुन्तिभोज वंशका मानिसहरू भेला भएका थिए र आपसमा अत्यन्त रमाएका थिए।

**रुक्मिण्या हरणं श्रुत्वा गीयमानं ततस्ततः।**
**राजानो राजकन्याश्च बभूवुर्भृशविस्मिताः॥ ५९॥**

**पदार्थ–**
**ततस्ततः** = ती-ती ठाउँमा
**गीयमानं** = गाइएको

**रुक्मिण्याः हरणं** = रुक्मिणी-हरणको कुरो
**श्रुत्वा** = सुनेर
**राजानः** = राजाहरू र
**राजकन्याः च** = राजकुमारीहरू पनि
**भृशविस्मिताः** = अत्यन्त चकित
**बभूवुः** = भए

**वाक्यार्थ–** ठाउँ-ठाउँमा रुक्मिणीहरणको कुरा सुन्ने-सुनाउने गरिएको थियो जसलाई सुनेर राजाहरू र राजकुमारीहरू अत्यन्त चकित भए।

**द्वारकायामभूद् राजन् महामोदः पुरौकसाम्।**

**रुक्मिण्या रमयोपेतं दृष्ट्वा कृष्णं श्रियः पतिम्॥ ६०॥**

**पदार्थ–**
**राजन्** = हे राजा परीक्षित्
**रमया** = लक्ष्मीरूपिणी
**रुक्मिण्या** = रुक्मिणीसँग
**उपेतं** = सँगै रहनुभएका
**श्रियः पतिं** = लक्ष्मीपति
**कृष्णं** = भगवान् श्रीकृष्णलाई
**दृष्ट्वा** = देखेर
**द्वारकायां** = द्वारकामा
**पुरौकसां** = पुरवासीहरूका लागि
**महामोदः** = परम आनन्द
**अभत्** = भयो

**वाक्यार्थ–** हे राजा परीक्षित्! लक्ष्मीरूपिणी रुक्मिणीसँगै रहनुभएका भगवान् श्रीकृष्णलाई देखेर द्वारकावासीहरू परम आनन्दित भए।

**इति श्रीमद्भागवते महापुराणे पारमहंस्यां संहितायां दशमस्कन्धे उत्तरार्धे**

**रुक्मिण्युद्वाहे चतुःपञ्चाशत्तमोऽध्यायः॥ ५४॥**